# →मुलुकी ऐन, १९१०

## अनुक्रमणिका



→ साभारः मुलुकी ऐन, १९१० प्रकाशकः कानून किताब व्यवस्था समिति, सिंहदरवार, काठमाण्डौं २९ जेष्ठ २०२२ ।

# स्वस्तिश्री गिरिराज चक्रचूडामणि नरनारायणेत्यादि. विविध विरुदावली.विराजमान मानोन्नत श्री मन्महाराजाधिराज श्री श्री श्री. महाराज सुरेन्द्र विक्रम साह बहादूर. सम्सेर जंग देवाना सदा समर विजयीनाम् --- --- --- ---

स्वस्तिश्री गिरिराज चक्रचूडामणि नरनारायणेत्यादि विविध विरुदावली विराजमान मानोन्नत श्री मन्महाराजाधिराज श्री श्री श्री महाराज राजेन्द्र विक्रम साह बहादूर. सम्सेर जङ्ग देवानां सदा समरविजयिनाम् - - - -

स्वस्तिश्री गिरिराज चक्रचूडामणि नरनारायणेत्यादि विविध विरुदावली विराजमान मानोन्नत श्रीमन्महाराजाधिराज. श्री श्री श्री महाराज त्रैलोक्य वीर विक्रम सम्सेर जङ्गबहादूर साह बहादूर देवानां सदा समरविजयिनाम् -

आगे हाम्रा भरमुलुक. सदर मोफसलमा रहन्या भारादार. मामदार. गौडा गौडा.अदालत ठाना कौसि. कुमारिचोक. धर्माधिकार. मुलुकीषाना. सदर दफदर. कंपूपल्टन. कंपनिका दफदर गैह्र. कचहरि कचहरिमा रहन्या हाकिम कामदार अमालि द्वाऱ्या इजारादार ठेकदार सर्वाक माफी जगाका गुठियार विर्तवार. मठधारी संतमहंत मुषिया जिम्मावाल चौधरि महतौ. मीझाऱ्या रैयत् गैह्र प्रात अजसम्म मरमामिला गर्दा एकै विहोरामा. कसैलाई कमि. कसैलाइ बढता सजाय हुन जान्या हुदा. तसर्थ. अब उप्रान्त छोटा वडा प्रजा प्राणि सबैलाइ षत जात माफिक. एकै सजाय हवस्. घटी बढी नपरोस् भन्ना निमित्त. तपसिल बमाजिमका. भारादारसमेत राषि कौसल गरि. कौसल मा ठहऱ्या बमोजिम्का अैन तयार गर्नु भनि. श्री ३ महाराज जङ्ग बहादुर राणाजि. सिवि. प्राइम्मिनिष्टर याण्ड कम्याण्डर. इनचिफलाइ हुकुम् बक्सी बन्याका अैन. हामि तिन् पुस्ताबाट पनि मंजुर गरि सम्वत् १९१० साल् मिति पौष सुदि ७ रोज ५ का दिन् लेषियाका कितावमा हाम्रा रोहवरमा. कौसलका तजवीजमा सच्याउना. षारेज गर्न्या ठहऱ्याका. सच्याइ षारेज गरी नत्रा भयाका. अैन थपि सवैले यसै अैनमा लेषिया बमोजिम् काजकाम निसाफ गर्नु यस किताबमा लेषिया बमोजिम्को निसाफ नगरि. घटि बढि पारि. काज काम निसाफ गर्न्यालाइ. उसै कुराका अैन्मा लेषिया बमोजिम्. दंड सजाय गर्नु. किताबमा लेषियाकामा अैन सच्याउनू थपनु पर्दा हाम्रा प्राइम्मिनिष्टर. कौशल वसि. अैनषानाका डिट्ठाले थपनुमेट्नु सच्याउनु हुंछ इ वाहेक अरु. सदर मोफसल कचहरिमा. दियाका कितावमा. कसैले थपन्या

मेटन्या गरि कलम् घटि बढी पाऱ्याको ठहऱ्या. जागीऱ्या रहेछ भन्या जागिर षोसि ८ वर्ष ढाक्र्या रहेछ भन्या तेसै ८ वर्ष कैद गर्नु म्यादका रुपैया नलिनु. औ. हाम्रो विहत्तर हुन्या प्रजा प्राणिलाइ सुविस्ता रक्षा हुन्या. काम कुराका अैन अरु पनि मिनिष्टर कौसलिया भारादारले. तजबिज गरि. बढाउनु. थपनु गरि किताब लेषदै गर्नु नत्रा थपियाका अैन बर्ष बर्ष दिनका ज्यमा गरि. एकै फेरा श्री प्राइम्मिनिष्टरको छाप लगाइ. जगा जगामा पठाउनु. भनि हामि तिन पुस्ता बसि. हामि देषि रैयत तलकले यस अैन बमोजिममा रहनु. भन्या हुकुम बक्सौ. श्री प्राइम्मिनिष्टर लगायत यसै काज काम गर्न्या कारिंदाका यसै अैन बमोजिम् काज काम गर्नु.

<u>तपसील</u>

राजी – श्री मद्राजकुमार कुमारात्मज श्री प्राइम्मिनिष्टर यान कम्याण्डर इनचीफ जनरल जङ्ग बहादुर कुवर राणाजी---

राजी – श्री मद्राजकुमार कुमारात्मज श्री कम्याण्डर इनचीफ जनरल बम्बहादुर कुवर राणाजी---

राजी – श्री मद्राजकुमार कुमारात्मज श्री जनरल कृष्ण बहादूर कुवर राणाजी---

राजी – श्री मद्राजकुमार कुमारात्मज श्री जनरल रणउद्दीप सिंह कुवर राणाजी---

राजी – श्री मद्राज कुमार कुमारात्मज श्री जनरल जगत्सम्सेर जङ्ग कुवर राणाजी---

राजी – श्री मद्राजकुमार कुमारात्मज श्रीजनरल धीरसम्सेर जङ्ग कुवर राणाजी---

राजी – श्री मद्राजकुमार कुमारात्मज श्री जनरल भक्त वीर कुवर राणाजी---

राजी – श्री मद्राजकुमार कुमारात्मज श्री कम्याण्डर कर्णेल वषत् जङ्ग कुवर राणाजी---

राजी – श्री मद्राजकुमार कुमारात्मज श्री वडा कर्णेल जगत् जङ्ग कुवर राणाजी---

राजी – श्री मद्राजकुमार कुमारात्मज श्री कर्णेल भीम जङ्ग कुवर राणाजी---

राजी – श्री मद्राजकुमार कुमारात्मज श्री कर्णेल जीत जङ्ग कुवर राणाजी---

राजी – श्री मद्राजकुमार कुमारात्मज श्री कर्णेल खड्ग बहादुर कुवर राणाजी---

राजी – श्री मद्राजकुमार कुमारात्मज श्री कर्णेल कृष्ण ध्वज कुवर राणाजी---

राजी – श्री मद्राजकुमार कुमारात्मज श्री कर्णेल केदार नरसिंह कुवर राणाजी---

राजी – श्री मद्राजकुमार कुमारात्मज श्री छोटा कर्णेल पृथ्वी धोज कुवर राणाजी---

राजी – श्री गुरु राजपण्डित श्री धमाधिकार विजयराज पण्डितज्यू---

राजी – श्री गुरु राज पण्डित श्री नगेन्द्र राज पण्डितज्यू---

राजी – पुरोहित तीर्थ राज पण्डित

राजी – श्री चौतारिया सम्सेर जङ्ग साह---

राजी – श्री चौतारिया कुलचन्द्र साह---

राजी – काजी हेमदल थापा

राजी – काजी कुल्मान सिं बस्न्यात

राजी – काजी डिल्लि सिं बस्न्यात---

राजी – काजी उमाकान्त उपाध्या

राजी – कप्तान फत्तजङ्ग बहादुर कुवर राणाजी

राजी – श्री मद्राजकुमार कुमारात्मज श्री वडा कप्तान मकरध्वज कुवर राणाजी

राजी – श्री मद्राजकुमार कुमारात्मज श्री वडा कप्तान तोरणध्वज कुवर राणाजी

राजी – वडा कप्तान सनक सिंह षतृ

राजी – षजांचि शिवप्रसाद अर्ज्याल

राजी – वडा सर्दार किर्तवीर कार्की

राजी – सर्दार कनक सिं महत्

राजी – कप्तान जुद्ध वीर अधिकारी

राजी – कप्तान वलभद्र माभ्की

राजी – कप्तान सतराम षतृ

राजी – कप्तान जवर षडका

राजी – कप्तान जवर कार्की

राजी – कप्तान हरिभक्त कुवर राणाजी

राजी – कप्तान फत्ते वहादुर कुवर राणाजी

राजी – कप्तान कालिदास थापा

राजी – कप्तान दीप वहादुर कुवर राणाजी

राजी – कप्तान ववर जङ्ग कुवर राणाजी

राजी – कप्तान प्रति मन कुवर राणाजी

राजी – कप्तान रामु आले

राजी – कप्तान तेक वहादुर कुवर राणाजी

राजी – कप्तान सम्सेर

राजी – कप्तान श्री कृष्ण साही

राजी – कप्तान रनसिं षतृ

राजी – कप्तान वुद्धिमान सिं वस्न्यात

राजी – कप्तान पहल्मान सिं वस्न्यात

राजी – कप्तान भदनमान सिं वस्न्यात

राजी – कप्तान प्रसाद सिं भंडारि

राजी – कप्तान हरिमान सिं वस्न्यात

राजी – कप्तान दल जीत विष्ट

राजी – कप्तान सुरत जङ्ग कुवर राणाजी

राजी – कप्तान जग्य वहादुर घर्ति

राजी – कप्तान श्री भक्त षडका

राजी – कप्तान भक्त केसर पाँडे

राजी – कप्तान लालसिं षतृ

राजी – कप्तान सुजान सिं वस्न्यात

राजी – कप्तान दल मर्दन थापा

राजी – कप्तान सम्सेर जङ षतृ

राजी – कप्तान जस्धीर सिं वस्न्यात

राजी – कप्तान महारुद्र षतृ

राजी – कप्तान वर्फानसिं वस्न्यात

राजी – कप्तान भीमल आले

राजी – वकील सुव्वा विष्नु प्रसाद पंडीत्

राजी – अमीन सुव्वा सिद्धिमान सिं राजभडारि

राजी – मीर सुव्वा रत्नमान सिं राजभडारि

राजी – सुव्वा विश्वेश्वर उपाध्या

राजी – सुव्वा काशीनाथ उपाध्या

राजी – सुव्वा विश्वनाथ उपाध्या

राजी – सुव्वा इश्वरी प्रसाद अर्ज्याल

राजी – सुव्वा हृदय रत्न

राजी – सुव्वा मेहेरमान सिं राजभडारि

राजी – सुव्वा विष्णु दास वैरागी

राजी – सुव्वा धनसुन्दर

राजी – सुव्वा चेतनाथ उपाध्या

राजी – सुव्वा वज्रमोहन उपाध्या

राजी – सुव्वा लक्ष्मीपति जैसि

राजी – सुव्वा तारानिधी पुडासैनी

राजी – सुव्वा पद्मनाथ जोसि

राजी – सुव्वा सिवनरसिङ

राजी – सुव्वा वषत सिं कुवर राणाजी

राजी – लेफटेन रनसुर षडका

राजी – लेफटेन विरुधोज भडारि

राजी – लेफटेन प्रभु अधिकारि

राजी – लेफटेन इन्द्र वीर षतृ

राजी – लेफटेन सन्मानसिं षतृ

राजी – लेफटेन भैरव सिं षडका

राजी – लेफटेन भैरव लाल झा

राजी – लेफटेन शिव संकर पाध्या

राजी – लेफटेन लक्ष्मन गुरुङ

राजी – लेफटेन इन्द्र सिं अधिकारि

राजी – लेफटेन सन्तवीर वस्न्यात

राजी – लेफटेन वल वहादुर पाडे

राजी – लेफटेन गणेश ध्वज कुवर राणाजी

राजी – लेफटेन सम्सेर ध्वज कुवर राणाजी

राजी – लेफटेन सेवक राम थापा

राजी – लेफटेन दलवीर विष्ट

राजी – लेफटेन गुमान्सिं कार्की

राजी – लेफटेन गजराज थापा

राजी – लेफटेन अमृत सिं अधिकारि

राजी – लेफटेन देवीदास पाध्या

राजी – लेफटेन भद्रवीर षतृ

राजी – लेफटेन करवीर षतृ

राजी – लेफटेन रणध्वज कार्की

राजी – लेफटेन चंपसिं घर्ति

राजी – मेजर अजिटन गर्ज सिं षतृ

राजी – वैद्य गंगानाथ

राजी – वैद्य चक्रपाणि

राजी – डिट्ठा नन्दि केसर पाध्या

राजी – डिट्ठा रुद्र वीर

राजी – डिट्ठा कालिदास

राजी – डिट्ठा इन्द्र सिङ

राजी – डिट्ठा वेणीमाधौ पाध्या

राजी – डिट्ठा किर्तिमानसिं राजभडारि

राजी – डिट्ठा देवी भक्त ढुँग्याल

राजी – डिट्ठा अवीर षडका

राजी – डिट्ठा धर्म सिङ

राजी – डिट्ठा हिम्मत वहादुर सेन

राजी – डिट्ठा रेवती रमण सत्याल

राजी – डिट्ठा कीर्ति राम विष्ट

राजी – डिट्ठा हिष्मत् सिं अधिकारि

राजी – इन्सायेन फत्यसिं कार्की

राजी – इन्सायेन वालु षतृ

राजी – इन्सायेन चन्द्र वीर थापा

राजी – इन्सायेन धनमान कार्की

राजी – इन्सायेन रनसुर विष्ट

राजी – इन्सायेन सुरत गिरि

राजी – इन्सायेन दीर्घमान षतृ

राजी – इन्सायेन गरुड धोज कार्की

राजी – इन्सायेन जंग वीर भडारि

राजी – इन्सायेन नरवीर कार्की

राजी – सुवेदार श्री विलास पाध्या

राजी – सुवेदार गोपाल षतृ

राजी – सुवेदार देविसिं ठाकुर

राजी – सुवेदार फत्ये सिं थापा

राजी – सुवेदार हर्ष वहादुर कुवर राणाजी

राजी – सुवेदार मेघ धोज अधिकारि

राजी – सुवेदार कासीराम कुवर राणाजी

राजी – सुवेदार चन्द्र वीर वस्न्यात

राजी – सुवेदार सुमन्त थापा

राजी – सुवेदार कुलराज कुवर राणाजी

राजी – सुवेदार वल वीर भडारि

राजी – सुवेदार अमर विक्रम भडारि

राजी – सुवेदार अैवर्ण वस्न्यात

राजी – सुवेदार सम्सेर जङ थापा

राजी – सुवेदार वानासुर थापा

राजी – सुवेदार श्रीमान वस्न्यात

राजी – सुवेदार जगतसिं गुरुङ

राजी – सुवेदार वृद्धिमान थापा

राजी – सुवेदार नैनसिं वस्न्यात

राजी – सुवेदार अनुपसिं षतृ

राजी – सुवेदार भारत षतृ

राजी – सुवेदार जगवीर राणाजी

राजी – सुवेदार प्रसाद सिं षडका

राजी – सुवेदार घोकल थापा

राजी – सुवेदार जगद वहादुर षतृ

राजी – सुवेदार सन्तवीर कार्कि

राजी – ज्योतिषी रुद्र लोहनी

राजी – ज्योतिषी इछा राम जोसि

राजी – ज्योतिषी कीर्तिमाधौ

राजी – षरिदार मनोहर पाध्या

राजी – षरिदार धीर्जनरसिं

राजी – षरिदार जीतमान

राजी – षरिदार वुद्धिमान

राजी – षरिदार नारान दत्त पाध्या

राजी – षरिदार जोगनसिं राजभडारि

राजी – षरिदार काशी दत्त पाध्या

राजी – षरिदार वषत्मान सिं राज भडारि

राजी – षरिदार दौलतसिं

राजी – षरिदार भाजुवीर

राजी – षरिदार सर्वजीत

राजी – षरिदार नन्दि केसर

राजी – षरिदार देव नारान पाध्या

राजी – षरिदार भवनाथ उपाध्या

राजी – षरिदार लक्ष्मी भक्त उपाध्या

राजी – षरिदार पृथ्वीधर उपाध्या

राजी – षरिदार षडनन्द उपाध्या

राजी – षरिदार ज्ञान मान

राजी – षरिदार पूर्णानन्द

राजी – षरिदार भीम नरसीं

राजी – षरिदार कृष्न मीत्र

राजी – मुषीया राजवीर

राजी – मुषीया जोगगान

राजी – मुषीया वषत वार

राजी – मुषीया सिवानन्द

राजी – मुषीया भीमरूद्र ध्वज जोसि

राजी – मुषीया गजाधर

राजी – मुषीया रघुवीर

राजी – मुषीया संकरदास

राजी – मुषीया राम नारान्

राजी – मुषीया विघ्नराज

राजी – षर्दार रमाकान्त पाध्या

राजी – द्वार्‍यामगनसिं

राजी – दारोगासहानी राजवीर

राजी – चोपदार रविलाल जैसी

राजी – मुषिया राम सुन्दर

राजी – सुवेदार मेहरमान थापा

राजी – मुषिया जत्न सिं

राजी – सुवेदार अमृत महत

राजी – सुवेदार कमानसिं

राजी – सुवेदार करवीर थापा

राजी – सुवेदार पद्‌म नाथ पाध्या

राजी – सुवेदार इन्द्र वीर वस्न्यात

राजी – सुवेदार जुद्धवीर थापा

राजी – सुवेदार वृषधोज षतृ

राजी – सुवेदार दल मर्दन थापा

राजी – सुवेदार भवानी भक्त विष्ट

राजी – सुवेदार गंभीर गुरुङ

# दत्त गुठी

१. अकार्कराज्यामा शिवालय धर्मशाला बनाई सदावर्तराषता आफैमुषत्यार भयाका आफु गुरू भयाका ३०।४० वर्ष कासि वस्याका गुरू रंगनाथ पंडीत जस्ता आफै कासि गै जमिन कीनी लाष डेढ लगाई सिवालय धर्मशालामा तालचा लाग्न्या एस्तो कच्चागरि अर्काको जगा बेचन्यालाई. अंग्रेजका दरबारबाट सजाय नहुन्या श्री ५ बडामहाराज रणबहादुर. साहबाट आफुनु मुलुक छदै श्री केदारमा नित्य नैमितिक पुजालाई. र. जात्रु लाई षान दिनलाई राज्याको गुठी सदावर्तको जगा अंग्रेजले जफत गरि लिया. धर्मलाइ राष्याको जगा कीन जफत गरि लियौ भनी श्री ५ सर्कारवाट अंग्रेज रजीडंटसाहेबलाई. याददास्त जाँदा तिम्रा मुलुककोजमीन. तंम्रो षुसहुन्छ. हाम्रा मुलुकको जमीन् हाम्रो षुस हुन्छ भनी रजिडंट साहेबले जवावदिया. श्री गुरू विजयराज पंण्डीत. ज्यूले धर्मका. निमित्त १० हजार रूपैयाकासिमा अंग्रेजलाई दि सयकरा ५ रूपैयासुद कबुल गराई दियामा पछि सयकरा ४ रूपैया सुददिया केहिदिनमा. त्यो सुद सयकरा ३ रूपैया हुन्याछ. पछि आफ्नुसाउं पनि पाजिन्याछैन कदाचित् पछि आफ्नाछोराहरू मरि संतान् कोही भयानन्भन्या हाम्राऐनमा छोरी भया छोरीले धनषानु भनी लेषीयाको छ विराना मुलुकमा भया पछि. वारिसवाला छैनन्भनी त्यो धन छोरि.ले पनी खान पाउदैनन् तेही धन अपुतालि प-यो भन्या आफना श्री ५ महाराजवाट पनी. लिन पाउदैनन् तसर्थ वेपारलाई. चाहीदो सुद लोट लिनु दिनु गन्या काम गर्नु जगेराराषि व्याज षान्या काम नगर्नु हिदुंःराज गोहत्या नहुन्या स्त्रिहत्या नहुन्या व्रह्महत्या नहुन्या एस्तो ऐन भयाको दर्वार हिमवत् षंड वासुकी क्षेत्र आज्र्यातिर्थ योतिर्मय श्रीपशुपति लिंग श्रीगुहेश्वरी पिठ. यस्तो पुण्यभुमी. आफनु मुलुक छदा छदै

कलिमा हिंदुको राज येही मुलुकमात्रैछ अब उप्रान्त जस्का सिवालय धर्मशाला बनाउनाको इरादाछ गुठिसदावर्त राषन इरादाछ आफना राज्यमा तिर्थपाई शिवालय धर्मशाला बनाउनु गुठीसदावर्तराषनु विराना मुलुक्मा राजा देषि रैयत्समं कसैले शिवालय धर्मशाला नबनाउनु धर्मशाला वनायाको आज उ जमींन कच्चा ठहरिन्या शिवालय २३ गुठी सदावर्त नराषनु किन भन्या आफना राज्यामा वनाया थोरै भत्क्यापनी आफना संतानले टाल् टोल गरि वनाउनपाउन्या. आफ्नु देश राम्रो गुलजार हुन्या जौन मुलुकमा धर्मज्यादा भयो तेस मुलुकमा रोग व्याधि देसान्नआउन्या अनिकाल नपँर्न्या हुंछ आफ्नु देसमा किर्ति वंदा सोभा हुन्या आफना देशका कारिगढ सिपालु हुन्या ज्याला मजुरि पाउनाले गरिब कंगालको पालना हुंछ. आफना मुलुकको धन विराना मुलुकमा जादैन आफना मुलुकमा सदावर्त राष्या आफ्नै मुलुकका काना षोरंडा लुला लंगडा बुढा बुढी आफ्ना पलापियाका संतान् आफ्ना नाताकुटुम्बका पलापियाका संतान विराना देसका अतीत अभ्यागतदुःषि कंगालि येसदेसमा जिवनवृतिको इछ्या राषि आउन्यालाई पालना हुन्या जस्ले सदावर्तराष्यो उस्का तलका सात पुस्ता संमका कुलको उद्धार हुन्या जस्ले कृष्नार्पण गरि जो माथिका सात पुस्ता तिल कुश ली संकल्पगा-याको जमिनछ त्यो जमिन षोलाले षायो भन्या त्यो पुण्य तेही षोलावाट पाइंछ केही दिन पछिषोलाले छाड्यो भन्या आफनु जमिन छदैछ. कदाचित् अनविवेकी राजा कुमंत्रीले त्यो जमिन ह-या भन्या तिनैबाट त्यो पुण्य पाइछ पछि ति राजा मंत्रीलाई आफुले र आफना संतानले रिझाउनु सक्या जमिन पनि पाईछ शास्त्रले नीतिले लोकका अनुभवले वनायाको अैन हो अवउप्रांत शिवालय धर्मशाला पाटि पौवा पुल साघु घाट कुवा धारो पोषरी वाटा चौतारा वगैचा गैह आफनै राज्यमा बनाउनु स्थापना गर्नु, गुठिसदावर्त राषनु. आफ्ना मुलुकमा स्थापना नगरि अर्काको मुलुक्मा

स्थापना गर्न्या जोहो त्यो लोकको दुनियाको राज्यको षराव गर्न्या हो भनी राजा र मंत्रीले विराना मुलुक्मा स्थापना गर्न नदिनु आफना मुलुक्मा स्थापना गर्न्यालाई संघि सर्पन नपर्न रैकर पट्ट वाझो हेरि मुनासिव माफिक दिनु. अर्काको गुठी सदावर्त हर्न्या अनविवेकि राजा कुमंत्री जो हुन्  स्वर्गजान्या वाटाको तालचा लाउन्या. नर्क जान्या वाटो षोलन्या लोकको हास्य गराई मागन्या धर्म गर्न्याको पुण्य हरण गर्न नसक्या आफु पापन्या डुवन्या हुन्

२. गरिब गुर्वा फकिर फकेडालाई सदावर्त र देवदेवताका नित्य नैमित्तिक वर्ष बंधन पुजालाई. जसले गुठी संकल्प गरि राष्याकोछ राषन्या हवस् राषन्याका संतानले हवस् राजषत गरि अर्काको ज्यानमान्याको षतलागोस् तापनी ज्यान लिन्याविहोरमा ज्यान लिनु, धनको सजाय हुन्या विहोरा भया धनलिनु करणिको षत गन्यामा अैन बमोजिम सजाय गर्नु. एस्ता गुठि कसैले नहर्नु. जो अघि देषि चलि आयाकोछ सो बमोजिम. धर्मचलाउनु. गुठीहरन नगर्नु. जस्का मोहोर दस्षत्ले हर्ला त्यो पाप उसैलाई लाग्ला त्यो सारा अैन षलल गरि अैन नाघन्या हो.

३. कसैले पाटि पौवा साघुधारा देवालय गैह्र वनाई आफ्नु विर्ता गुठी राष्यो पछि भत्क्यो विग्र्यो र उस्का संतान्ले वनाउन सकेन भन्या तेस जगामा जिर्णोद्धार गरि वा.नत्राँ वनाउछु भंन आउन्यालाई वनाउन दिनु. आफुले विर्ता किनिराष्याका गुठी पछि वनाउन्याले पाउदैन. जस्का पुर्षाले गुठी राष्याको हो उस्का संतानले जिर्णोद्धार गर्न सक्यापनी नसक्या पनि आफ्ना पुर्षाको धर्म थामी गुठिका जगाको सेष रह्याको  षान पाउछन. वेचन पाउदैनन्. वेचन्यालाई तेसै जगाका १ सालका उव्जनि बमोजिम दण्ड गर्नु रूपैयाँ नतिऱ्या मैन्हाका ५ रूपैयाँका दर्ले कैद गर्नु.

४. कसैले पाटि पौवा साघुधारा देवालय गैह्र बनाई. सर्कार बक्साई गुठी राष्यो पछी त्यो वनायाको विग्र्यो भत्क्यो र उस्का संतान्ले वनायो भन्या गुठिको धर्म चलाई. षान पाउछ उस्का संतान्ले वनाउन सकेन र. तेसै जगामा अरू कसैले जिर्णोद्धार गरि वनायो भन्या. त्यो

गुठी तेसै धर्मशाला देवालय वनाउन्याले चलन गर्नु. अघि वनाउन्या गुठीयारका संतान्ले सर्कार वक्साई. राष्याका गुठीका जगा षान चलन गर्न पाउदैनन्.

५. गोर्षा श्री ५ महाराज द्रव्यशाहका पाला देखि गद्दी नसिद महाराज महारानीहरूका वाहुलीवाट संकल्प गरि राष्याका राजगुठीका जगाका झगराको आम्दानी अदालत ठाना अमाल कचहरिबाट झगरा छिन्याको. रहेछ भन्या पनि आम्दानी छैटि दसौद विसौद केहीनलिनु.लियाको भयापनी.जौन देवताको गुठी हो सोही गुठीमा ईनसाफ गरि ति जौन देवताका गुठीको आम्दानी हो सोही देवतालाई.सर्कारका नाउँमा गहना वनाई चह्राई दिनु.एस्ता विहोराका आम्दानीले गहना वनाई चह्रायाको हो भंन्या वहिमा लेषी राषनु. हामीले आमदानी. गर्‍याको हो भनी अदालत ठाना अमाल कचहरिवाट नलिनु.

६. राज गुठी राज मठ राज सदावर्तको जगा मेरो हो भनी.कोही कराउन आयो र निसाफ गर्दा उस्को ठहरेन भन्या तेस्तालाई तेसै जगाका १ सालका उवजनी बमोजिम. दंड गर्नु रूपैया नतिर्‍या मैन्हाका ५ रूपैयाका दर्ले कैद गर्नु.

७. आफुले र आफ्ना वावु वराज्यूले जगा कीनि राष्याका गुठी सदावर्त मठका जगा मेरो हो भनी कोही कराउन आयो र.निसाफ गर्दा उस्को ठहरेन भन्या तेसलाई तेसै जगाका १ सालका उवजनी बमोजिम. दंड गर्नु रूपैया नतिर्‍या मैन्हाका ५ रूपैयाका दर्ले कैद गर्नु.

८. खारेज (कसैका पुर्षाले देवाल पाटि पौवा साघु धारा गैन्ह वनाई आफ्ना विर्ता गुठी राष्याकामा अरू कसैले हामी गुठियार हुं भनी भयो वा जवरजस्ती गरी भयो जगाको वाली अर्कै षादो रहेछ जस्का पुर्षाले वनायाको हो. उस्का संतानले. षान पायाको रहेनछ भन्या त्यो गुठी गुठी राषन्याका संतानले षान पाउछन्. जवरजस्ती गरि. मिचि षान्याले धर्म चलाई षायाको भया १ सालका वालीका विगो वमोजिम दंड गर्नु. धर्म नचलाई षायाको रहेछ भन्या. जति वर्ष मिचि षाखायो छ उति सालका मिचि षायाका. वालीको विगो भराई. विगै बमोजिम दण्ड गर्नु. रूपैया नतिर्‍या मैन्हाका ५ रूपैयाका दर्ले कैद गर्नु जगा गुठि राषन्याका संतान्लाई. विहोराई दिनु. अर्काले पाउदैन.)

९. आफुले वनायाका पाटि पौवा गुठि राष्याका जगामा वाल लाग्याको रहेछ भन्या तेसवालाले तेहि धर्मशाला देवालय गुठीको घर भत्क्यो विग्र्‍याको वनाउनु रह्‌याको जौन गुठीका जगाको वालहो वनाउन्याका संतानले उठाई. उसै गुठीका काममा. लाउनु विचमा कसैले. षायाको रहेछ र वनाउन्याका संतान फिराद गर्न आया भन्या षान्यालाई जति वर्षको वालि मिचि

षाखायो ठहर्छ उति वर्षको वालिको विगो भराई विगै बमोजिम दंड गरि. जितन्या वाट दंडको चौथाई. जिताउरि लि जस्का. पुर्षाले. राष्याको गुठि हो उसैका संतानलाई. विहोराई दिनु ।

१०. जस्का वावु वराज्यूले. इश्वर प्रिति गरि. दुनियाँ प्रीति गरि सिवालय धर्मशाला पाटि पौवा पुल घाट धारा गैह्र जगेरा निमित्त र नीत्य नैमीतिक. पुजा सदावर्त. श्राद्ध गुठी राषि. जौ तिल कुस लि संकल्पगरि सहि सनद गरि. जसले राष्याको छ. उस्का सन्तान कुवुद्धिका जुवाऱ्या नसावाद वेइलमी बेरोजगार भै कमाई. षान सामर्थ नभयाकाले आफ्ना वावु वराज्यूले.राष्याका गुठि सदावर्तमा तेस्ताका जहान समेतले १ मानु षानु र एकलत्ता लाउन पाउछन्. नित्य नमीतिक वंद गरि. फर्मायसी गरि षान पाउदैनन्. वेच्या वाधा राष्या. किंन्या वेचन्या दुवैको कच्चा हुंछ. एस्ता जगामा साहुको पनी लाग् धाग् लाग्दैन. राज षत अरू गैह्र षतमा पनी सर्कार लाग्दैन ।

११. आफ्ना वावु वाज्याले राष्याका.गुठीमा टल्सीं वोटिमा. धर्म चलाउछु जगा कमाई. मोही वोटि आफु षांछु भन्या. आफ्ना गुठिका. कुरिया उठाई वस्नर. मोही षोसि. षेत कमाउन पाउछ. नेपालकाले दसैका टिका देषि सिठि संम र पर्वतकाले. दसैका टिकादेषी श्रीपंचमीसंम षोसन पाउछ बाहा उप्रान्त षोसन हुदैन । कुयाममा षेस्यो भन्या. तेसै जगाका १ सालका वाली वमोजिम. दंड गर्नु. याममा षोसियाका मोहीले. कुयाममा षोस्यो भनी कराउन आयो भन्या. २॥ रूपैया दंड गर्नु, रूपैया नतिऱ्या मैन्हाका ५ रूपैयाका दरले कैद गर्नु.

१२. आफ्ना जन्माउन्या वावु आमा पुर्षाका गुठि विर्ता आगं पुजाहारिको पर्पजनि गर्दा सद्य छोरा भया सद्यले.नभया कमसल छोराले कमसल छोरा पनी नभया अपुताली छोरीलाई लेषिदियाको भया छोरीले. लेष्याको. नभया एका वाजेवाट जन्म्याका दाज्यू भाईका संतानले एस्ता पनी नभया.कागज लेषिदियाको नभया. पनी छोरीले पजनी गरि. धर्म चलाउनु. एति छंज्याल. अरू अपुतालि. षान्या.टाढाकाले पाउदैनन्. एतिमा कोही नभया. टाढाकामा दाईयादार.ले धर्म चलाई. पजनि गर्नु.

१३. चारवर्ण छतिसै जातका आफुले र आफ्ना पुर्षाले. राष्याका गुठि सदावर्त र आगं देवालि पुजा गुठि श्राद्ध गुठि गैह्र दानदातव्यमा जादैनं. एका वाज्याका ससंतान छं भन्या उनैले पाउछन्.उस्ता रहेनछं अथवा अपुतालि छोरिले षायापछि गुठि गैह्र पनि हामिलीदौन भनी छाड्याभन्या र वावु आमा परि अपुतालि परि अैन वमोजिम अपुतालि छोरी र छोरीका पाया भन्या आफ्ना पुर्षाले.राष्याको गुठिमा.अघि वावुले.चलाई आया वमोजिम.को धर्म चलाई. आफ्ना वावुका भाग वमोजिम पाउछन्.अपुतालि षान्या दाज्यू भाईले. षान पाउदैनन्.

१४. गुठिका तावापत्र सिलापत्र लालमोहोर. दानपत्रमा लेख्या वमोजिम रोजीं दा वाडनु भन्याकामा. मागन आउन्या छदा छदै. रोजिदा वाडेन.ढेरै लेख्यामाथोरै वाड्यो भन्या दाता र दाताका संतान वाहेक अरू कारिंदा गुठियारले षायाको विगो ठहऱ्या विगा वमोजिम १।२ मुठि मात्रै चोरिषायाको ठहऱ्यो भन्या. तेस्तालाई ५ रूपैया दंड गरि. काम देखि षोसिदिनु.

१५. राज गुठि राज सदावर्त र. दुनीयाले राष्याका गुठि सदावर्तवाट रैकर जगा मीच्याको रहेछ भन्या. मिच्याको जति रैकर जगाकट्टा गरि. रैकरै गराई दि मिचन्या गुठियारलाई मिच्याका जगाका १ सालका. उवजनी बमोजिम. दंड गर्नु. गुठी सदावर्तको जगा जौन धर्मको हो. उसैमा थामीदिनु गुठिको. जगा कट्टा हुदैन.

१६. पुराना गुठिका जगा वेचि नञा जगाकिनी गुठि राषछु भनी पुराना गुठी वेच्यो भन्या नयाँ जगाको पैदास मिलाई.उसै मील्दो जगाकिनि. गुठी रषाई. पुराना वेचाउनु. एस्ता वीहोरासित वेच्याको पक्का ठहर्छ. पुराना गुठी वेच्यो नञा कीनेन रूपैया मास्यो भन्या.पुरानागुठि.गुठी थामी गुठी किंन्याको थैलि. तेसै असामिवाट भराई. दिनु रूपैया तिर्न सकेन भन्या. फाछ्र्यापत्र फराई. कपालि तमसुक गरि. वेचन्यालाई तेसै जगाको. १ सालका उवजनी वमोजिम. दंड गर्नु. रूपैया नतिऱ्या मैन्हाका ५ रूपैयाका दरले कैद गर्नु.

१७. कसैका पुर्षाले राष्याका गुठिमा गुठियारका संतानले वेच्यो र. कोही साहुले किन्यो भन्या. तेस गुठीका दानपत्र सिलापत्र सनद हेरि. गुठि ठहऱ्यो भन्या. तेसले वेच्याको वदर. किंन्याको पनि वीसही. जौना कामको गुठि हो उही धर्म चलाउन. थामींछ असामीसितका रूपैया. कपाली हुन्छ. तेहि असामी साहुलाई सौपिदिनु. सर्कारको केही रकं कलंको बाँकी छ भन्या पनि दुनियाको कारोवार. छ भन्या पनी. गुठिका जगा समाउन हुदैन. गुठिजानी किंन्या साहु रहेछ भन्या. साहु असामी दुवैलाई १।१ सालका उवजनी वमोजिम. दंड गर्नु. रूपैया तिरेन भन्या मैन्हाका ५ रूपैया का दरले कैद गर्नु.

१८. आफुलाई सर्कारको वाकि पनि लाग्याको छैन. रिन पनि लाग्याको छैन. अरू दुनियाको वांकी पनी लाग्याको छैन. तेस्तावषतमा आफना धन संपत्तिले जगा किनी भयो वा आफना विर्ता भयो गुठि राष्याको रहेछ पछि केही रकंको सर्कार को वांकि र रिन लाग्न गयेछ अथवा अरू दुनीयाको. रिन र वांकी लागेछ भन्या. सर्कारवाट र साहुले गाजि लिन पाउदैनन्.गुठि सदर हुन्छ. सर्कारबाट पनि अरु दुनियाले पनि समाउन पाउदैनन्. वाकी र रिन जो ठहर्छ उस्का

अरू धन संपति वाट उठाई लिनु. धन संपति नभया. कपाली तमसुक गराई दिनु. (रिन पनि लाग्याको छैन.

१९. आफुलाई.सर्कारको.वांकी र रिन लाग्याको रहेछ. अथवा अरू दुनीञाको वांकी र रिन लाग्याको रहेछ. वांकी र रिन लाग्यापछी. गुठी राषेछ भन्या त्यो गुठी राजा र साहु ढाटन राष्याको ठहर्छ. सदर हुदैन.सर्कारिया हवस्.दुनीञाको हवस जस्को रिन र वांकी छ. उसैले त्यो नञा राष्याको गुठिका जगाले हवस वा. रूपैया उठाई लेवस. आफना रूपैया अनुसार लिन पाउछ. दानपत्र-तावापत्र गरायाको भयापनी वदर हुंछ. अदालत ठाना. अमालवाट धुलाई दिनु.

२०. असामीले. गुठीको. जगाविर्ता हो भनी. ढाटी साहु तिऱ्यो. वंधक राष्यो भन्या. गुठीको जथा दि साहु तिर्न हुदैन. गुठिको थामी दिनु. तेस्ता तमसुक च्यातिदिनु. गुठिको जगा दि साहु तिर्न्यालाई. ढांटी तिऱ्या वंधकराष्या वावत. घर षेत लट्टी पट्टीले साहुको थैलि उस्का धनवाट तिराई दिनु. तिर्न सकेन भन्या. कपाली. तमसुक गराई. १ सालका उवजनी वमोजिम. दंड गरि लिनु साहुको थैलि र दंडका रूपैया तिऱ्या लि छाडनु. तिर्न सकेन भन्या मैन्हाका ५ रूपैयाका दर्ले कैद गर्नु ( अैन बमोजिम १

२१. कसैले गुठीका जगालाई. विर्ता हो भनी वेच्यो वंधकराष्यो भन्या. त्यो वेच्याको र वंधक. राष्याको अदालत ठाना अमाल वाट किन्या वंधक. लिन्या. दिन्याको तमसुक च्याति अैन वमोजिम. थमाई दियाका गुठिका पजनि दाईयादार. दाज्यू भाई. रहचा छन्भन्वया. उनैलाई. थामि दि उनैबाट धर्म चलाइ. दिनु. दाइयादार दाज्यू भाई नभया उन्को चलि आयाको. धर्म थामी सर्कारवाट पजनी गर्नु वेचन्याले पाउदैन. तेस्तालाई षारेज गरि. गुठी चलाउन्या इमांदार धर्म चिंह्रा मानिस ठहराई. पत्र पात्र वमोजिम्को धर्मचलाई दिनु.

२२. गुठिलाई विर्ता हो भनी वेचन्यालाई. एकसालका. उवजनी वमोजिम. दंड गरि लिनु. दंडका रूपैया तिर्न सकेन भन्या. मैन्हाका ५ रूपैयाका दरले कैद गरि. म्याद पुग्या पछि छाडीदिनु.

२३. गुठी हो भनी जानी जानी गुठीलाई विर्ता हो भनी किन्या रहेछ भन्या तेस्ताको थैलि भुसिंछ.

२४. सनद पत्र विर्ताको छ. तेही साहु सित. धीतो राषि रूपैया काढि लियो वंधक मध्ये विर्ता लेषिदियो पछि त्यो जगा गुठिमा छ भन्यो भन्या.त्यो असामी झुट्टा सही.तमसुक हेरि साहुको पक्का गरि.जगा वीहोराई दिनु.ढाट्या वावत.विगा वरावर दंड गरि लिनु. दंड तिर्न सकेन भन्या मैन्हाका. ५ रूपैयाका दर्ले कैद गर्नु.

२५. सनद पत्र गरि गौचर राष्याको जो छ फलानाको गौचर. फलानाले राष्याको हो भनि.सनद पत्र देषायो भंन आयो भन्या.त्यो गौचर आफ्ना धनले किनी कन राष्याको रहेछ की आफ्ना पिता पुर्षाका विर्तामाराष्याको रहेछ सनद. हेरि ठहऱ्या.गौचर थामनु.किनुवा रहेछ भन्या किन्या बेचन्याको सनद हेरि गौचर थामनु सर्कारबाट पाईकन राष्या रहेछ भन्याःलालमोहर तावापत्र हेर्नु नभया च्याँग्रा कौसीमा मोहोरको नकल हेरि.गौचर थामनु गौचरमा सिलापत्र रहेछ भन्या पनी तेही सनद हेरि थामनु. एतिरितको गौचर जो छन्. पछि जस्ले पायाको छ उनैले गौचर राष्याको रहेछ भन्या. पनी थामी दिनु एतिरिति भीत्रका गौचर मा कसैले विर्ता पायाको रहेछ त्यो गौचर अर्काले कमायाको रहेछ भन्या. अदालतका हाकिमले वझ्र्याई दिनु वजीरले सट्टा दिनु एस्ता गौचर जगामा अदालतका हाकिमले तलास गरि सनद हेरि वझ्र्यायानं भन्या अदालतका हाकिमलाई पापलागला वझ्र्यायाका एस्ता जगाको सट्टा नदिया वजीरलाई पाप लाग्ला.

गोर्षा सर्कारवाट स्वदत्तां परदत्तां गरि राष्याकार दुनिया गैह्रले विर्ता गरि दियाका गुठिमा गर्न्या अैन----------------------

२६. कसैका पुर्षाले देवालय पाटि पौवा साघुधारा तलाउं कुवा वाटो सदावर्त धर्मसालाश्राद्ध गुठिअट्का पर्व पर्वको नित्य नैमितिक पुजा गुठिभजनीत्रा गुठि पानी गुठी सर्वत गुठि सिधा वाडन्या भात पकाई षुवाउन्या क्षत्र गुठि सिवालय पाटि पौवा तलाउं कुवा वाटो भत्क्या विग्ऱ्याको वनाउन्या जगेरा गुठि गैह्र वनाई आफनु विर्ता गुठि राषी तावापत्र शिलापत्र तारपत्र दस्षत सहिसनदमा एति जगाको आम्दानीले एति एति कुराको पुजा चलाउनु एति विहोराले सदावर्त चलाउनु एति विहोराले भत्क्या विग्ऱ्याको वनाउनु भनी कागज पत्र तावापत्र शिलापत्र तारपत्र गरि लेषिया वमोजिम चलाउ तिमिलाई दान गरि दित्रा तिम्रा संतान दरसंतानले काम गर्नु.भोग गर्नु भनी देवता साछि १ मनुष्य साछि २ जसले हर्ला पंच महापातक ३ स्वदत्तां परदतां वा भंन्या सिलोक ४ दान गरि दिञ्यू तिम्रा संतान दरसंतानले भोगगर्नु ५ एति ५कुरामा १कुरो मात्रलेषियाको भया पनी गुठि राषन्या र गुठि राषन्याका संतानले आफुले काम गरि षांछु भंन पनी पाउदैनन्.पजनी गरि अर्कालाई दिन पनी पाउदैनन्. सर्कारवाट र. अदालत ठाना अमाल गैह्रवाट पनी एस्ता गुठि झिकि गुठि राषन्याका संतानलाई र. अरू कसैलाई नदिलाउनु. एस्ता गुठिको नैव्यद्य र सेष रह्याको दान पाउन्याले र

उस्का संतानले लेषिया वमोजिमको काम गरि षान पाउछन्.एस्ता विर्ता गुठि ठहर्छन्.एस्ता गुठि जस्ले दान पायाको छ त्यो दान पाउन्यामा मानु नछुट्याई जति भाई एका घरमा वस्याका छन्. उतिले अंस नगरि अैन वमोजिम पालापालसित तामापत्र तारपत्र शिलापत्र कागज पत्रमा लेषिया वमोजिम्को काम चलाई षान पाउछन्. दान पाउन्या र दान पाउन्याका संतानले वेच्याछन्. वाधा राष्याछन् अथवा लेषिया वमोजिम्को काम नचलाई.धर्म लोप गरि षायाछन् भन्या गुठि पाउन्याका संतानले जाहा वेच्या वंधक राष्याकोछ साहुलाई वेचन्या वंधक राषन्याका नाउंमा कपाली तमसुक गराई एस्ता गुठिका जगा नवेचन्या वंधक नराषन्या लेषिया वमोजिमको धर्म चलाउन्याहरू र.दान पाउन्या र दान पाउन्याका भाई छोरा संतानले मात्र पाला सित षान पाउछन्. वंधक राषन्या वेचन्या धर्म नचलाई षान्या र उन्का संतानले षान पाउदैनन्. गुठि पाउन्याको अपुतालि पर्‍यो भन्या पनी गुठि राषन्याका संतानले चलन गर्न र अर्कालाई दिन पाउदैनन्. दान गरि अर्कालाई दियाको हुनाले राज गुठि ठहर्छ.सर्कारवाट गुठि कचहरिमा फिर्ता लेषिया वमोजिम.काम चलाई दिनु. एस्ता विर्ता गुठि पाउन्याका संतान छदै लालमोहर मुषत्यारका रूक्का दस्षत गरि हवस् अदालत ठाना अमाल गैह्र वाट अर्कालाई दिलाई दियाको रहेछ भन्या पनी अंन्याय हो अर्काका नाउंमा भयाका मोहोर रूक्का दस्षत धुलाई. सनदपत्र च्याति विर्ता गुठि पाउन्याका संतानलाई दिलाई दिनु एस्ता जगामा म पाउछु भनी झगरा गर्न आउन्यालाई उसैजगाका एक सालका उवजनीको सयकरा २ ॥ रूपैया दंड गरि ठोकी दिनु.

सर्कारवाट र.अरू राजा रजौटा दुनिआगैह वाट पुजाहारि गुठियार राषी एति एति काम गर्नु भनी राष्याका गुठिमा गर्न्या अैन---

२७. कसैका पुर्षाले देवालय पाटि पौवा साघु धारा तलाउ कुवा सदावर्त धर्मशाला श्राद्ध गुठि अड्का पर्व पर्वको नित्य नैमित्तिकको पुजा गुठि भजनिआ गुठी पानी गुठी सर्वत गुठी सिधावाड्न्या भात पकाई षुवाउन्या क्षत्र गुठि शिवालय पाटि पौवा तलाउ कुवा वाटो भत्क्या विग्र्याको वनाउन्या जगेरा गुठि गैह्र वनाई आफना विर्ता गुठि राष्याकामा काम चलाउन्या कारिंदा कसैका पुर्षाले राष्याको रहेछ र कारिदा गुठियार पुजाहारिले काम वेसगरि नचलाई गुठि राष्याका जगाको आम्दानी आफुले षान्या उडाउन्या वेचन्या वंधक राषन्या कामकाममा ठेकियाको कलम वंद गरि आफना संतानलाई अंश गरि दिन्या गुठियार र.वेहान व्यलुका नित्य नैमित्तिकको पटल पद्धति वमोजिम्को पुजा नगर्न्या पुजाहारिलाई जसले जस्का पुर्षाले

राष्याकोछ. उस्ले र उस्का अंश को दाइया भयाका संतानले अैन वमोजिम्को विगो षडा गराई दंड गरि लिन हुंछ.इनवाट काम भयेन इनको वदला अर्कालाई राषछु भन्या पनी इनले केही विरायाको छैनतापनी.इनलाई षोसछुँ भन्यापनी षोसन पाउछन्.हाम्रा पुर्षाले राष्याको गुठीहो लेषिया बमोजिम्को कामगरि कसर वाकी रह्याको आफै षांछु भन्या पनी अंशको दाइया भयाका संतानहरूले साल सालको पालासित धर्म चलाई षान पाउछन्. आधा काम तिमी गर आधा काम हामी गर्छौ भनी जगा वाडी षान पाउदैनन्. पुर्षाले राष्याका गुठिको लेषीया वमोजिम्को काम नगर्न्या गुठियार कारिंदा पुजाहारि षोसि आफ्ना घरवाट काम चलाउछन् तापनी अरू कारिंदा राषि काम चलाउछं तापनी अैन वमोजिम अंस षान्या संतानको षुसि पुर्षाले राष्याका गुठीमा धर्म लोप गर्न्या वेचन्या वंधक राषन्याले र उस्का संतानले षान पाउदैनन्. धर्म चलाउन्या जगा नवेचन्याहरूले र उस्का संतानले मात्र पाला सित धर्म चलाई षान पाउछन्. एस्ता दुनिञा गुठी सदावर्त गैह्र सर्कारका मोहोर. मुषतियारका रूक्का दस्षत कचहरिका सनदले पजनी गर्न हुदैन.सनद गरि दियाको भया पनी सदर हुदैन.बुद्धि नपुग्याकाले र अंन्याय गर्न्याले गरि दियाका मोहोर रूक्का दस्षत धुलाई सनदपत्र च्याति इन्का संतानलाई दिलाई दिनु.जस्का पुर्षाले गुठि राष्याको हो उसैका संतानले आफुले काम चलाउनु र अर्कालाई राषी काम चलाउनु गुठी राषन्याका संतानको षुसी हुंछ आफना पुर्षाको धर्म थामन उनै जांदछन्.एस्ता जगाका गुठीयार कारिंदा पुजाहारिहरूले हामी पाउन्या हुं भनी कराउन आया भन्या उसै जगाका उसले षान पाउन्या १ सालका वालिको सयकरा २॥ का दरले दंड गरि ठोकी दिनु.

# जग्गा जमीन्को

१. रैकर राज गुठी किपटजपती जिल्लामा दुनियारैतिलाई.षेतको रैवंदी गर्दा.का लावंजर. फाडि वाभ्फो फोरि कुलो भ्फीकी वगर विहाई. विह्राउन्याले कमाई षायाका जगा रैवंदीका भाग भंदा वढता भया पनी.विह्राउन्यालाई.थामी.अरू अवादी षेतमा सवै रैतिलाई निका ननिका षेतको वंदोवस्त पारी जहावल अनुसार. वाडि रैवंदी. गरि.दिनु. वाभ्फो विह्रायाका जगाले रैवंदीको भाग पुगेन भन्या. गाउंल्या सरहको भाग अवादीवाट पुऱ्याई दिनु.विह्रौटाले भाग पुग्याको भया. उनलाई. अरु षेत दिनु पर्दैन. बिह्रौटा नषोसनु आफनु बिह्रौटो अघि देषी अर्काले कमायाको रहेछ. मेरो विह्रौटो भनी. पछी पाउदैन.आफुले चलन गरि.षाई आयाका विह्रौटा षोसन्यालाई. १ सालका उव्जनी वमोजिम. दंड गरि. थामीदिनु. दंडको चौथाई जिताउरी लिनु.

२. लालमोहर. र. मुषत्यारका दसषत नगराई सर्कार नबक्साई. भारादार रकमी जाचकी कारिंदा कसैले वेसनद आफना दस्षत पुर्जीले वा. उसै विर्ता गुठी वेषक फीगटार मरोट्छाप मानाचावल. घरवारी ज्यूनी भनी रैकर जगा कसैलाई.दियाको भया सदर हुदैन.तेस्ता जगा सर्कारलगाई. दिन्यालाई उही जगा मोली मोल बमोजिम दंड गर्नु.जगा पाउन्याबाट पायाको षेत पाषा जगाको जति सालको वालिषायाको छ उति वर्षको टलसिं वोटी कुत सेर्मा महसुल. जोहो वुभ्फि लिनु दंड पर्दैन.

३. वजीर र वजीरका भाई छोरा.हरू अरू दुनीत्रादार गैह्र कसैले अवाद नभयाको बाभ्फो कालावंजर जगा वाह्र साल देषी.बढ विह्राई. अवाद गऱ्या भन्या.पंच साला दुवै वोटी विह्राउन्याले पाई. वाहा उप्रान्त मालमा दराई दिनु. वाभ्फो काला वंजर. अवाद गर्न्यालाई. दुनीत्रा सरहको अवाद गऱ्याका १० षंडको १ षंड विर्ता दिलाई दिनु.

४. कसैलाई सनदपत्र गरि. दियाका जगामा. पछि कसैले जाचता बुभ्फदा १० रोपनीमा १ रोपनी संम बढता निस्क्याको उसैको हुंछ थामी दिनु.

५. १९०९ साल देषी पट्ट वाभ्फो रैकर जगामा लालमोहोर. दस्षत पट्टा गराई. ठेकि चार दामराषी आफना आतका वलले. अवाद गुल्जार गरि. एक सय रूपैया पैदा हुन्या तुल्यायो भन्या. १० रूपैया तेस अवाद गर्न्यालाई. षानगी दिनु. जगा जाच गरि.टल्सीं वोटी जगा

वालाले.षानु.मोही वोटी कमाउन्याले षानु.षेत जगाको ठेकदारि. मुष्यालि तेसै.लाई दिनु.टल्सीं वोटी र लाग्याको तिरो भरो गरंज्याल. संम तेसको जगा षोसन हुदैन. षोस्यो भन्या. तेसै जगाका. १ सालका पैदा वमोजिम. दंड गरि. कमाउन्यालाई थामी दिनु.

६. सर्कारवाट दरवार बनाउदा गढि किल्ला अदालत मेगजीन् पल्टन्को छाउनी वारूदषाना सिलषाना टुडिखेल दफदर बनाउदा सिवालय धर्मशाला पाटी पौवा पोषरी. धारा कुवा इनार घाट पुल बनाउदा सडक बाटो वगैचा चौतारा बनाउंदा. दुनीञाका गुठी विर्ता गैह्र जगा लिनु पर्‍यो भन्या जौन जगामा षुसिराजीले दुनीयामा जौन जौन मोलमा लिनु दिनु गरि. जगा को षरिद विक्री चली आयाको छ उसै जगाका. सर्ह वमोजिंको मोल दी जगा. लिनु. जगाका धनीले. मोल लिंन. जगै सट्टा मीलोस् भन्यो भन्या. जगाको उठती र.नापी मिलाई जगै सत्ता दिनु एति कुरा बनाउंदा.दुनीञाको जगा पर्‍यो भन्या हामी जगा दिदौन. भंन पाउदैनन्.

७. सर्कारवाट सेरा गुठी राषनलाई. र दाइजो विर्ता दिनलाई दुनीयाका जगा किंनु पर्‍यो भन्या. जगाकाधनीलाई. राजी षुसी गराई लिनु. धनीले मेरो जगा दिंन भन्या. एस्ता कुरामा कर लगाई सर्कारवाट दुनीञाका जगा लिन हुदैन.

८. रैकर जगामा कसैले गौचर राषछु भनी. राषन पाउदैनन् रैकर जगामा. सडक वाटो निकास पानी घाट. संघि सर्पन् राषी जगा विह्राई. षाँछौ भन्या. विह्रायाका जगाको. दुनीञाँमा चल्याको तिरो भरो गरि चलन गरि षान पाउँछन्.संधी सर्पन वाटो निकास.पानिघाट थुनीयो भनि कोही कराउन आयो भन्या र. जाचता थुनियाको ठहर्‍यो भन्या. ५ रूपैया दंड गरि लि. वाटो पानी घाट निकास. संघि सर्पन वाटो रषाई दिनु.

९. सडक वाटो भन्याको सर्कारको र दुनीञाँको साझाहो. सडक वाटो विगरि सर्कार वाट पनी षेत विह्राइन्या छैन. दुनिञाहरूले पनी नविह्राउनु. सडक विगारि. विह्रायाको ठहर्‍या विह्रायाका जगाका उवजनी वमोजिम. दंड गरि. सडक थमाई दिनु. वालि लायाको रहेनछ भन्या. ५ रूपैया दंड गर्नु.

१०. नयाँ कुलो झिकी षेत विह्राउंदा. वाझो जगावाट कुलो झिकी. षेत विह्रिया रहेछ भन्या कुलो झीकता रैकर विर्ता गैह्र कसैले. थुंन. हुदैन नञा कुलो झिकी वाझो विह्राउन पाउछन्. अवादी षेतवाट कुलो ल्याउंदा. १ षंड वाट कुलो झिकी ३ षंड बढता विह्रीन्या. रहेछ भन्या. अवादी रैकर विर्ता गैह्र काटि कुलो ल्याउन हुंछ. ३ षंड काटि कुलो ल्याउदा. १ षंडमात्र विह्रीन्या रहेछ भन्या अवादी षेत काटि कुलो ल्याउन हुदैन नदिनु.

११. दुनित्रा गुठी सदावर्त विर्ता वेषफिटार.छाप माना चावल मरोट ज्यूनी फर्मायसी भर्ना भया उंमाहोहरिया कीपट सेवा विर्ता रजवाधानानकार.को षेत पाषो जो छ.अघि देषीको हवस. एस विहोरा सित. पछिपायाको हवस. एति कलंका षेत पाषो व्याङवाला वोसि घासिकर्मी गोल्या. वारूद षाना. कागत्या थापल्या हुलाकी चौकी यति कामका रकमीलाई अघी दरियाको छैन भन्या पछी नदर्नु. कदाचित कसैले दऱ्या भन्या. मोहोररूक्का दस्षत. वाट झिकि दिनु दरिदिन्या लाई. १ सालका. उवजनी वमोजिम दंड गर्नु.

१२. व्याङवाला वोसि धासिकर्मी गोल्या. वारूदषाना. कागत्या थापल्या हुलाकी चौकि एति कामका रकमीलाई.अघि देषी आज संम सनद भै सनदमा दरिया को राज गुठि दुनीत्रा गुठी मठ सदावर्त वेषफीगटार.छापमाना चावल मरौट् ज्यूनी. पेटीया षेर्च फमायसी भर्नाभयापाउं मोहरिया कीपट् सेवा विर्ता.जागिर महसुल्यारजवाधानानकार सेराकाषेतपाषामा. अघि देषी आज सम तिरि आया भंदा कुत इजारा वढाई हवस. केही नवढाई. हवस सर्काको काम हरज गरि षोसि पजनी गर्न पाउदैन. अघि रैकर छदा इनै रकंमा दरियाका पछि राज गुठि दुनित्रा गुठि मठ सदावर्त विर्ता वेष फीगटार. छाप माना चावल मरौट ज्यूनी रजवाधानानकार. सेरा फमायसी भर्ना मपाउं गैह्रका वेहोरा संग पछी कसैले पाया भन्या. उनले पनी. षोसि पजनी गर्न पाउदैन. कसैले षोसि पजनि गऱ्या भन्या तेस जगाको १ सालका मोहीले षानपाउन्या उवजनी. वमोजिम जरिवाना गर्नु जरवानाका रूपैया तिर्न सकेन. भन्या. मैन्हाका ५ रूपैयाका. दरले कैद गर्नु.

१३. दुनित्राले. जगा जमीन घरषेत कींदा वेचता.मोल तोल भै.फाछ्र्या पत्र भया पछि सुक्री विक्रीको मोहोर. गराई देउ भन्न आउंदा कोही जग्गामा गहाकी वझाउंदा उस्ले रूपैया वढता दियो जगा उसैलाई दिलाई. मोहोर गराई दिंदा रह्याछन. उसैलाई छापींभंदा रह्याछन्. अब उप्रान्त जस्ले मोलछिनी फाछ्र्यापत्र गऱ्याको छ उसलाई.नदि छापीं भन्या रकंमलगाई. वढता रूपैया दिन आउन्या लुच्चालाई. जगा दीलाई. दिन्यालाई जति रूपैया वढतालियाको ठहर्छ विगो भराई विगा वमोजिम जरिवाना गर्नु.रूपैया नतिऱ्या अैन वमोजिम मैन्हाका ५ रूपैयाका दरले कैद गर्नु.

१४. कसैले आफना अंशमा आयाकार आफना पौरषले कमायाका जगा जमीन.वाधा विर्ता घरवारि षेत वेचता आफना हकवाला अंसियार. भाई लाई मैले फलानु कुरो वेचनलाग्या. तिमिहरू लिंछौ भन्या देसिले दियाको थैलिदि तिमिलेउ तिमिहरू लिदैान भन्या अरूलाई दिन्छु भन्नु र. हक वा अंशियार भाई.ले लिंछ भन्या.इनैले पाउंछन्.देसिले पाउदैनन्.अंसियार. भाई भन्या. टाढारह्याछन आफुलाईगर्जपर्दा बेचेछ भन्या वेचन्याले अंसियार भाईलाई. लेषी पठाउनु. किन्याले पनी वेचन्याका हकवाला अंसीया. र भाइ.लाई लेषी पठाउनु र. ३५ दिन भित्रमा निषंन आयो भन्या.अलीपत्र भयाको भया पनी उस्को परल रुपैयाँ सौंपी अंसीयार.भाईले निषनी लिन पाउंछ ३५ दिन संममा थैली तिर्न आयेन भन्या. भाई साछी वस्याका.नभया पनी. गौंराई षायाको नभया पनी. वेच्या किन्याको सदर हुंछ. ३५ दिन नाध्या पछी. आउन्या भाईले. निषन्न पाउदैनन्.

१५. जग्गा जमिन गैह्र जिनीस्को लिन दिन गर्दा. मोल पटक गौराई वैना गऱ्याका दिनमा. साल सरन वस्तु सरन भयाको रहेछ भन्या र.तरतमसुक.भयाको रहेछ भन्या. लिन्याको माल सदर वेचन्यालाई लिषत वमोजिम. थैलिको साउंव्याज भराई दिनु. गौराई वैन्हादियो माल. दाताका घरमा छ. मैन्हा १ संममा गौराई.वैन्हादिन्याले.थैलिसौपी.आफुले माल लै गयेन.भन्या.पछी लिन पाउदैनन्.माल मालकै धनीले चलगर्नु. गौराई वैन्हादियाको हो भनी. १ मैन्हा उप्रांन्त. झगरा गर्न आउन्यालाई. विगाका सयकरा.५ रूपैयाका दरले दंड गर्नु. रूपैया नतिऱ्या. अैन वमोजिम. कैद गर्नु. लियाको गौराई. वैन्हा फिर्ता गर्नु पर्दैन.

१६. कसैका अंसनभैएका घरमा संगवस्याका भाईमा अरू दाज्यू भाई.सित सल्लाह नगरि.एका भाई.ले मात्र.घर षेत जगा जमीन.वेचेछ. र अरू भाईले. एसले वेची हाम्रा. अंस जान्या होइन भनी उजूर गऱ्या भन्या जाहान पालदा वेच्याको भया र . आफना भागमा.आउन्या अंसजति वेच्याको भया.सदर हुंछ. आफना भाग भंदा बढता र.भाई सित सल्लाह नगरि.वेच्याको रहेछ.घरका जहान पालनालाई.वेच्याको पनी.रहेनछ.भन्या र.हामीएकै घरमा थीऱ्यूँहामी सित सल्लाह नगरि.हाम्रो भाग नराषी.एसले मात्र वेची जान्या होइन.भनी. घरमा रह्याका भाईले.१ वर्ष भीत्र.मा र.वर्ष दिन नाघ्या पछि.पर्देस गयाको. भाई आई पुग्यो भन्या. आई पुग्याका दिन. ३५ भित्रमा उजुर गऱ्यो भन्या. वेचन्यावाट किन्याको थैली फिर्ता गराई. जगा भाईलाई दिलाई दिनु. वेचन्यावाट थैली पुगेन भन्या. कपाली तमसुक. गराई दिनु. भरायाका. जंमाको दसौद विसौद लिनु.

१७. सर्कार लगायत् उमराव भारादार.रैयत.गैह्र कसैले.घर षेत कमारा कमारि. चौपाया नगद जिनसी अर्कासित सट्टा.पट्टा गर्दा. धनीको चित्त बुझाई. षुसि राजीले मात्रै सट्टापट्टा गर्नु.कर नलगाउनु. करलगाईकन र. जवरजस्ती गरि.कसैले केही कुरो साटफेर गरिलियो र. धनीले कराउन. आयो भन्या. करलगाई.लिन्यालाई.विगा वमोजिम दंड गर्नु.रूपैया नतिऱ्या मैन्हाका. ५ रूपैयाका दरले कैद गर्नु.

१८. जगाजमीन. चौपाया जवाहेर.गेह्र जीनिसमाल. गैह्र साछी सुर्ता गरि हवस. आफना राजीले हवस २ जनाका मनोमानले १ फेरा साटासाट गरि. आफु आफुले.माल चलन गऱ्या पछि.तेरो माल ननिको विकंवा रहेछ.मलिंन भनि. फीराउन पाउदैन अघि सट्टापट्टा गरि लियाको. सदर हुंछ. पछि झगरा गर्न आउन्यालाई विगाका दसौदका दर्ले दंड गर्नु. रूपैया नतिऱ्या अैन. वमोजिम कैद गर्नु.

१९. कसैका भाई भाई अंशका झगरामा. अंघि अंस नपाउन्या होस. भनी झगरा भयो निसाफ गर्दा.अंस पाउंन्या ठहऱ्यो.पछि तेसै भाईका.अंशका विर्ता लाई झगरिया भाईले. त्यो जगा रैकर. भन्यो भन्या रैकर भन्याको अंसविर्ता रैकर गराई दिनु उस्को विर्ता जादैन थामीदिनु.

२०. सर्कारका विर्ता वेषछाप मरौट् फीगटार गैह्र जगा लालमोहर. दस्षत गराई ढांटी षायाको रहेछ भन्या.मोहोर दस्षत धुलाई.ढाटी षायाको जगा जस्को हो उसलाई. विहोराई.दिनु.उसै जगाका मोल विगा वमोजिम दंड गर्नु. रैकर जगा ढाटी षायाको भया.रैकर जगा झीकी १ सालका उवजनी वमोजीम दंड गरि रैकर हो भनी जाहेर गर्न आउन्यालाई लाग्याको तिरो भरो गरंज्याल उस्का दससतांन सम्मलाई षोस मोस नगर्नु. भंन्या श्री प्रायंमीनीष्टर.को दस्षत. गराई जगा दिलाई दिनु.

२१. लालमोहर. दस्षत नगराई. अर्काका. अवाद जगा जमीन ढाटी षायाको रहेछ भन्या. ढाटी षाया वमोजिम.को विगो भराई विगा वमोजिम जरिवाना गर्नु.

२२. गुठी विर्ताविषका.मोहि रैतिले.आफुले कसैको सर्सापटि षाई. आफुले कमाया को षेतपाषो. अर्कासित. वधंकराषयो भन्या वधंकराष्याको. तमसुक च्यताई. उसका नाउंमा. कपाली तमसुक. लेषाई दिनु. धनीले तेस्ता मोहीलाई. षोसि पजनी गर्न धनिको षुस. वेचन्यालाई जति सालको वाली. अटकायाको छ उति विगा वमाृजिम दंड गर्नु. वाली अडकायाका रहेनछ

भन्या. एक सालका वाली वमोजिम दंड गर्नु. रूपैया नतिऱ्या मैन्हाका ५ रूपैयाका दरले कैद गर्नु.

२३. कसैले किपटीया पर्जाहरूलाइ रूपैया कार्जा दि उस्को किपट जगा भोग दुष्टि वंधक लेषाई.लीयाको छ.पछि त्यो रूपैया षान्या भागी मरिगयो र. जगा अमालि द्वाऱ्या थरि मीझार गौरुंहरूले पजनी गरि.अर्का रैतिलाई.दि अर्काले लाग्याको तिरोभरो गरि षायाको रहेछ. त्यो जगा हामीलाई. लेषीदियाको छ.भनी साहुले.जगा गाजन आया पाउदैनन् किपट जगा धितो लि. रूपैया कर्जा दियाको थैली असामी र. असामीका संतानले रूपैया तिऱ्या तिराई. दिनु तिर्न सकेन भन्या उसैंका नाउंमा कपालि तमसुक गराई दिनु. किपट जगा पजनी गरि. लाग्याको रैरकम. बुझाई. डोको वोको चलाउन्या रैतिलाई. दिनु.

२४. विर्ता घर षेत जगा जमीन. कसैले अघि वाट एकालाई. दृष्टि भोग वंधक. गरि वाफाछर्या गरि कसैलाई दियाको रहेछ.उस्को थैली.नतिरि. उही जगा अर्कै साहुलाई. वंधक तेषिदियेछ वा. सुक्री गरि. वेचेछ र. म्याद भित्रमा भंन आयो भन्या. जगा अगाडीवाला. साहुको सदर हुंछ. सुक्री विक्रीको मोहोर गरायाको भया पनी.मोहोर धुलाई.सनदपत्र भया.विक्री फराई.अगाडी वालालाई विहोराई दिनु. पछाडीवालाको थैली तिर्न सकन्या रहेछ भन्या. विगो भराई. थैलीतिर्न सकन्या रहेनछ भन्या. कपाली तमसुक लेषाई दि पछील्ला का थैलीका विगा वमोजिम. दंड गर्नु. रूपैया नतिऱ्या मैन्हाका ५ रूपैयाका दर्ले कैद गर्नु.

२५. पोतातिऱ्याका सुनाविर्ता षेत पाषामा. षोला पैरो लाग्यो. वाझो भयो. पोता तिर्न सकीन भन्यो भन्या. तेस्को राजीनामा लेषाई लि. पोतामा मिन्हा गराई दिनु. पछी अवाद भया पछि. मेरो जगा हो सलामी. पनी दिन्छु. पोता पनी तिर्छु. भन्या. त्यो जगा विर्तावारले पाउदैन. रैकर हुंछ. वालि सर्कार लाग्छ. षोलो पैरो वाझो भया पछी पनी. पोतातिर्दै रहन्याका. विर्ता षोलाले छाड्या पछी. विह्रीयो भन्या. विर्तावारैले पाउछ जगा उसैलाई दिनु. पोता तिर्न सकीन भनी. पोता मेटाई. राजीनामा लेषी. छाड्याको जगा. मेरो हो भनि. चंलगर्न्यालाई. १ सालका. उवजनी वमोजिम. दंड गरि ली जगा रैकर गराई दिनु.

२६. कसैका सुनाविर्ताका एकै जगामा कोही जगाको सनद रहेछ. केही जगाको सनद रहेनछ. पोत वरावर तिरि आया रहेछ भन्या पोता सनद वमोजिम्को. जगा विर्तवारको हुंछ.थामी दिनु पोता सनद वाहेकको जगा रैकर गराई दिनु. सर्कारिया हुंछ. १ सालका विगा वमोजिम दंड गरि. लिनु. रूपैया नतिऱ्या मैन्हाका ५. रूपैयाका दरले कैद गर्नु.

२७. किपटवालाको पनी आफना किपट आफैले. चलन गरि रैकर जगा किपट भीत्र हाली चोऱ्यो चाप्यो भने जति रैकर चाप्याको छ उति जमीन. बमोजिम. उस्को कीपट पनी रैकरै गराई दिनु.

२८. वीर्तावारको घर विर्तामा छैन. विर्तवार टाढा छ. मोहीले चलगर्दा विर्तावाट रैकर जगा चापी चोरि लियाको डहऱ्यो भन्या.ति मोहीलाई. जमीनका उवजनी बमोजिम. दंड गरि. चोऱ्याको जगा झिकि लिनु. दंडका रूपैया. नतिऱ्या. मैन्हाका ५ रूपैयाका दर्ले कैद गरि. छोडी दिनु. विर्तवारको. विर्ता जफत हुदैन. थामी दिनु.

२९. विर्ता वेषछाप माना चावलफिगटार मरौट ज्यूनी पेटी. या.षर्चका जगावाट जगा वालाले आफुले रैकर किपट जगा चापी. चोरी ली.याको ठहऱ्यो भन्या. चोऱ्या वापत त्यो जगा सर्कार वाट रैकर चाप्याको रैकरगराई. चाप्याका जगा जती उसको विर्तास्मेत कि.लाउषेली नाप बमोजिम कट्टा गरी. रैकर गराई दिनु. चाप्याका रैकर जति.उस्को विर्ता.ले पुगेन भन्या.अन्त उस्को जगा रहेछ भन्या उसै जगाबाट भर्ना लिनु.अन्त जगा रहेनछ भन्या भयाजति जगा लिनु दंड पर्दैन वावु वाज्या दाज्यूका पालामा मिच्या रहेछ भाई संतानले. मिच्याको रहेनछ.भन्या.रैकर मिच्या जति.जगा कट्टा गरि लि १ रूपैया दंड गर्नु.

३०. विर्ताकिपट गुठिछाप वेषफिगटार मरौट माना चावल गैह्र जगा जमिन्का साधका झगरामा. कसैको सनद रहेछ कसैको रहेनछ भन्या. सनद हुन्यालाई. सनद भया वमोजिमको जगा वेहोराई दिनु सनदपत्र न्हुन्याले अर्काका सनद वाहेकको जगा चलन गर्नु दुवैका सनदपत्र केही रहेनछ. भन्या. र. १६ वर्ष सम्म अदालत अमालमा.कुरो पऱ्याको रहेनछभन्या. जस्ले भोगरि आयाकोछ उसैको सदर गरि. वहालिगराई दिनु.झगरागर्न आउन्यालाई.तेसै जगाका. १ सालका. पैदावार वमोजिम. दंड. गर्नु रूपैया नतिऱ्या. अैन बमोजिम. कैद गर्नु. जीतन्यालाई. दंडको चौथाई. जिताउरि. लिनु.

३१. नेपाल्या राजाकापाला देखि आजसम्म भोगगरि. राष्याका विर्ता गुठि घर षेत पाषो जमीनको सहिसा चंतारपत्र हेरि. सो सनद वमोजिम कौसलमा श्री प्रायई मीनिष्टर यान सग विस्तार जाहेर गरि. अदालतमार्फत सनद गराई दिनु. नेपाल्या राजाका पाला देषी.आज तक.भोगगऱ्याका.जगाको पनी.सनद गराई पाउला.साना ठुला ढेरैथोरै. जगाको सनद गर्दा. दस्तुर लेषौनी छपौनी. २ रूपैया तिऱ्या पुगछ. (मोजिम)

३२. विर्ता गुठि वेषरैकर किपट जगा षेत पाषो अघिका राजाहरू देषी पाई षाई. आयाको भोग गरि आयाको जगा. अघि पछीका राजाले.सहिसाच गरि.दिया कारहयाछन् भन्या सहिसाच हेरि. दातव्यका सहिसाचवमाजिं. भोग गऱ्याको थामींछ एकै जगामा केहीजगाको सहिसनद रहेछ.केहि जगाको रहेनछ भन्या. सनद भयाको जति.थामीन्छ सनद नभयाका जगा १६ वर्ष अघि देषी.चलन गऱ्याको. हो भन्या. पनी विनासनद.बढता.चलंगऱ्याको रहेछ भन्या. कट्ट गरि. रैकर. हुंछ. १ सालका उवजनी वमोजिम.दंड गर्नु. दातव्यपाई भोगरि.रह्याको छ. सहिसाच केहिछैन भन्या. साध सधियार.षोलो टोलो राषी भोग वमोजिम थामी मोहोर गराई दिनु.

३३. खारेजः (पत्र पनी छैन.पात्र पनि छैन साछी गुहाई पनी छैन.भोगको पनी थाहा छैन.दुवै झगरियाले भाकीलींछौ भन्न लाग्या भन्या.कतैवाट तजवीजगर्दा पनी कुरौछिंन्या ठाउं पाईयेन भन्या. दुवै झगरियाका. नातापक्ष नभयाका इमानदार धर्म देषन्या. पऱ्याका भलामानिस. २५ जनावसि आफना आफना बुद्धिले देष्याको कुरा वकनु र. जौन झगरिया तिर १ जना अर्घ्यालो निस्क्यो उसैको जित गराई दिनु.)

३४. विर्ता घर षेत. वेषफीगट मरौट माना चावल छाप घर वारि.पेटियाषर्च ज्यू नी रजवाधा गैह्र जगा जमीनका झगरामा.कागजपत्र केही निस्केन. देषन्या जान्न्या साछि रह्याछन् अरू वीहोराले छिनेन.दुवै झगरियाले.साछी सघीयार. श्रेस्तादार डगोलकर्मीका सिरमा दिया भन्या उनैका नाउंमा सिरवंदीले लेषाई. साछी गुहाई.वकाईछिंनु पऱ्यो हरि वंस भकाइ.छिन्नु. स्रेस्तादारका सिरदी छिन्नु पऱ्यो भन्या. घरमा कर्मी षेतमाडगोल हालि ठहऱ्या वमोजिम गरि छिनीदिनु. हार्न्यालाई जगाका मोलका विगा वमोजिम दंड गर्नु रूपैया नतिऱ्या मैन्हाका ५ रूपैयाका दरले कैद गर्नु. जीतन्यावाट दंडका ३ षडंको १ षंड जीताउरिलिनु.

३५. रैकर किपट जफति जील्लाका घरवारी षेतषरकका झगरामा. कागजपत्र निस्केन देषन्या जाँन्या साछि रह्याछन् दुवै झगरियाले साछि सुर्ताका सिरमा. सिरवंदी लेषीदीयाभन्या र. अरू विहोराले छिन्न सकीयन भन्या २० रूपैया सम्म उठति हुन्या जगाका झगरामा इमांदार मानीसलाई.वकाई.उनले. वक्या वमोजिम गरि छीनी दिनु.धर्म नभकाउनु. २० रूपैया देषी उभो उठती हुन्या जगाको झगरामा धर्म भकाई. वक्या वमोजिम गरिछिनी दिनु हार्न्यालाई हाऱ्याका जगाका. १ सालका उवजनी वमोजिम दंड गर्नु. जीतन्या वाट दंड को चौथाई जिताउरि लिनु.

३६. गुठिविर्ता वेषफीगठार मरोट माना चावल छाप घरवारि पेटीयाषर्चज्यूनी कीपट जफति जिल्ला रजवाघा गैह्र जगाका साधमा झगरा भै अदालतमा फिराद गरि.दुवै सधियारहरू जोरी हामी साधमा मिल्यौन भनी. सोधन आया भन्या.तिनहरूको. सनदका भया सनदपत्र हेरि नभया तेसै जगाका सधियार झिकी. भोग बुझी छिनी दिनु. फिराद नगरि सोधनी गर्न आउन्यालाई. दंड जिताउरि नगर्नु.दस्तावेज गरि.देउ भन्या. सयकरा २॥ रूपैया सलामी ली. गरिदीनु.

३७. पुराना राजाका सनद र लेषौटमा किरोपनिछुट्यायाको रहेछ. भन्या सोही वमोजिम सनद गर्नु सनद लेषौटपत्र केहिरहेनछभन्या.भोगगर्‍याको कतिरहेछ. गाउं घरका जान्या पाका भलामानिस राषी उन्हेहरूको एति सम्म हो भनी लेषौट सनद लि उति वमोजिम कीला रोपनी छुट्याई.लेषी सनद गराई दिनु.

३८. सहर्काघरको साधसीवाना गर्दा अघि राजा जयस्थिति मल्लले.वंदेज गरि.गया वमोजिम नीजको २४ अंगुलको. १ हातको. संष्याभयाको चीनकठ्ठीले. घर पातल लमाई हात २२॥ गज हात १ को जवा १ एस्ता ४ जवाको १ षा हुंछ. एसैरितले. नापी गर्नु.

३९. मध्येसमा नापी गर्दा श्री ५ सर्कारका वाहुलिका. नापीको ९ हातका लगाले लमाई लगा १ गज लगा १ को धुर. १ एस्ता रितको धुर २० को कट्ठा १ एस्ता कट्ठा २० को विगहा १ गरि एसै रितले नापी गर्नु.

४०. पाहाडका जगा जमीन. षेतपाषाको नापी गर्दा अघि राजा जयस्थिति मल्लले बंदेज गरी गया वमोजिम नीजका २४ अंगुलको १ हातको संष्या भयाको चिनकठ्ठी का हिसावले ५॥। हातका लगाले चारदर गरि.औवल जगामा.लमाई टागा ४ गज टाँगा ४ को षेत मुरी १.का हिसावले लमाई टांगा ८ गज टांगा ८ को षेत मुरि.४को रोपनी १ दोयम् जगामा लमाई टांगा ४॥ गज टांगा ४ को षेत मुरि.१ का हिसावले.लमाई टांगा ९ गज टांगा ८ को षेत मुरि ४ को रोपनी. १ सिम जगामा लमाई टांगा ५ गज टांगा ४ को षेत मुरि १ का हिसावले लमाई टांगा १० गज टांगा ८ को षेत मुरि. ४ को रोपनी १ चहार जगामा. लमाई टांगा ६ गज टांगा ४ को षेतमुरी. १ का हिसावले.लमाई टांगा १२ गज टांगा ८ को षेतमुरी ४ को रोपनी १ गरि नापी छुट्याई दिनु. साध सिवाना नापी गर्दा औवल दोयं सिम चहार जौनदरको जमीन छ. सो वमोजिम. उस जगाका. संधियार. भला मानिस राषी उन्को एसदरको जमिन हो भन्या मुचुल्का लेषाई लि. नापी साध सिवाना गरि दिनु.

४१. कसैले आफनु विर्ता.सर्कार लगाई. सट्टा माग्न्यालाई.नेपालका.जगाले नेपालैमा पर्वतका जगाले पर्वतैमा.मध्येसका जगाले. मध्येसैमा.नापी सर्कारको विसमा ५ नाफा हुन्या गरि भर्ना गरि लि.सट्टा दिनु सर्कारवाट सट्टा दिंदा. २० को ५ देषीकमीजगा सट्टा लि भर्ना दिन्या.सदर दफदर षानाका कारिंदालाई.विगा वमोजिम दंड गर्नु.सर्कारलाई सट्टा दियाको जगा षोलोपैरो नलाग्न्या हेरिलिनु. षोलो पैरोलाग्न्या जगा रहेछ भन्या तेस्ता जगा लि सट्टा कसैलाई नदिनु.सट्टा दिंदा पाषोको सट्टा पाषो षेतको सट्टा षेत दिनु.षेतको सट्टा पाषो पाषोको सट्टा षेत नदिनु.

४२. कौने कुरामा पनी. वावु वराज्यूले फरेव जाल साज गरि झुट्ट मुठको साचो तुलाई कचहरिको चित्त वुझाई जित्याका झगरामा. १६ वर्ष नपुग्दै हार्न्याले. फीराद गरि फिरादको निरोपन गर्दा.कचहरिवाट अघि जित्याको. कचा ठह्राई.हार्न्याको सनद हेरि. पक्काठहर्‍यो भन्या. अघि जस्का नाउंमा जीतापत्र भयाको छ उ मानिस सावुद रहेछ. भन्या विगा वमोजिम जरिवाना गर्नु. त्यो मर्‍यापछि तेस्का भाई छोरा संग झगरा पर्‍यो भन्या सनद वमोजिमको जगा विहोराई दिनु. ति भाई छोरालाई विगोपनी तिर्नु पर्दैन. विगा वमोजिम जरिवाना पनि हुदैन. लाष रूपैया देषी तृण संमका. झगरालाई पनी. भाई छोराको कायेलनामा लेषी मोहोर रूपैया. १ जरिवाना गर्नु. वढता नलिनु.

४३. अर्काका वाधाविर्ता वेषफीगढार माना चावल. मरौट सुनाविर्ता घर षेतका झगरामा मैले पाउन्याहुं भनी कराउन आयो भन्या. नीसाफ गर्दा नपाउन्या ठहर्‍यो भन्या.जगाको पंच किर्ति मोल गरि विगा वमोजिम दंड गर्नु. रूपैया नतिर्‍या अैन वमोजिम मैन्हाका ५ रूपैयाका दरले कैद गर्नु.

४४. जगा जमीनका झगरामा जितन्या सित जिताउरी लिंदा हार्न्यालाई. भयाको दंडका ३ षंडको १ षंड लिनु.वढता नलिनु उसवषत्मा जिताउरिका रूपैया दिनसकेनभन्या.जौन जगा जित्याको छ उही जगाधितो लि. रूपैया षोजीले भंनु र.तिर्‍या रुपैया ली नतिर्‍या.तेसै जगाका आमदानीवाट जिताउरीको.जमा चुक्ति भया पछी. जगा फुकुवा गरि. वहाली चलाई. दिनु.

४५. सवांक माफ भयाका.जगाका झगरा अदालत ठाना अमाल कचहरिमा. फिराद पर्दा धनि र ईजारा अमानतका.द्वार्‍याहरू.ले हाम्रा जगाको.झगरा हामी छिंदछौं भन्न आया भन्या झगरिया इनहरूलाई सौपीदिनु.धनीलाई र इजारा अमानत्का द्वार्‍याहरूले.कसैले केही भन्न आयानन् अदालत ठाना अमाल कचहरिवाट झगरा छिनी सक्या पछी धनी र.इजारा अमानतका

द्वाऱ्यावस्याका.ठाउं कचहरिदेषी जतिदिनको वाटो छ. वाहावाट कचहरिमा.आई पुग्ना सम्मका म्यादमा. आई पुग्या भन्या.छिन्याका झगराको.छैटि कचहरिवाट लि आम्दानी सर्वाक माफ भयाका जगाका धनी र.इजारा अमानत्का द्वाऱ्यालाई. फिर्ता गरिदिनु आई पुग्न्या संमका म्यादमा आई पुगेन भन्या. त्यो आम्दानी फिर्ता गर्नु पर्दैन सर्कारीया हुंछ.

४६. सर्वां क माफ भयाका जगाका धनी र. इजारा अमानत्का. द्वाऱ्याले. विजाई गऱ्या भनी अदालत ठाना अमाल कचहरिमा फीरादगर्न आयाका कुराको आम्दानी. फिर्ता गर्नु पर्दैन. सर्कारको हुंछ.

४७. विर्ता. विर्ता रैकर. रैकर. अथवा. विर्ता र. रैकर जगा वारि पारि. भयामा षोला साधको झगरा पऱ्यो भन्या. पारिपट्टी षोलो गै. वारि पट्टी वगर वस्यो भन्या. त्यो वगर वारि पट्टीका.. जगावालाको हुंछ. वारि. पट्टी षोलो गै. पारिपट्टी वगर वस्यो भन्या. पारिपट्टीका जगावालाको हुंछ. रैकर विर्ता वालाले हाम्रो जगा षोलाले षायापछी. हामी पाउंन्या हुं भनी षोला पारिको. विर्ता जगासमाई वाली समेत षायाको रहेछ भन्या. षायाका वालीको विगो भराई. विगै वमोजिम दंड गर्नु वालिषायाको. रहेनछ भन्या. १० रूपैया दंड गर्नु जीतन्यालाई. दंडका. ३ षंडको. १ षंड जिताउरी लिनु रैकर जगा समाई. वाली स्मेत. षायाको भया. १ सालका उवजनी वमोजिम्. वाली षायाको. रहेनछ भन्या. ५ रूपैया दंड गर्नु. जितन्यावाट दंडको ४ षंडको. १ षंड जिताउरि लीनु.

४८. षोला साध भयामा वारिको जगा पारि तिर. वगर पऱ्या. पारितिरकाले. पाउछन् पारितिरको जगा वारि. तिर वगर पऱ्या वारि तिरकाले पाउंछन्. दुवै तरफवाट कसैले वनायेन. अवाद गरेन. वाझो राष्यो भन्या.तेस्ता रैकर जगा जो सुकैले. वनायापनी. लाग्याकातिरो भरो गरि. षान पाउछ वनाया पछि हाम्रो जगा हामीहरूले पाउँन्या हुं भंन्याले. पाउंदैन. जस्ले वनायो. उसैले कमाई तिरो भरो गरि षानु विर्ता भया बाझो राषोस्तापनी कमाउन लाउवस्ता पनी विर्तावारको. षुसी. वाझो वगर. अर्कालाई. दी. उसैले विह्रायाको रहेछ भन्या. लाग्याको तिरो भरो गरंज्याल् षोस्न पाउदैन.

४९. षोला साधका झगरामा. षोलाले छाडी जता पट्टी वगर वस्यो त्यो वगर उतै पट्टीका षोला साध हुन्या जगावालाको हुंछ.पारि पट्टिकाले मेरो जगा षोलाले. षाया पछी.त्यो वगर म पाउन्या हुंछ.भनी.षोला वारिको वगर पाउदैन.

५०. षोलाले आफुहिड्याको.पुरानु वाटो छोडी.षोला साध भयाका.दुवै तरफका.जगा छोडी अर्कै वाटा लाग्यो भन्या.अघि षोलो हिड्याको.वगर.रैकर हुंछ.षोलो साध भया पछि.त्यो जगा.हाम्रो हुन्या हो भंन्या ले पाउदैनन्.आफना आठा संमको. मात्रै पाउंछन्.

५१. कसैले विर्ता वेषफीगठार जगा जमीन. षेत पाषो घर वारि. कमारा कमारि अघिवाट गाली फाछर्‍या गरि वा. भोग दृष्टि वंधक गरि एकालाई दिया वेच्या को रहेछ.उही कुरो पछिवाट अर्का कसैलाई.मैले अरू कसैलाई.दिया वेच्याको छैन भनी भोर पारि.फाछर्‍या गरि वा. दृष्टि भोग गरि दियेछ.पछीवाट लिन्याले अघिल्लाले भोग चलन. मोही पजनी.गर्‍याको केहीथाहा पायाको रहेनछ पछीवाट लिन्याले जगा भोग चलन. गर्न जादा.यो जगा ता.फलानाले लियाको छ भनी. जगा चलन गर्न्या कमाउन्याले पनी थाहा दियाको रहेनछ. पछीवाट फाछर्‍या गरि वा.भोग दृष्टी गरि लिन्याले.भोग चलन.मोही पजनी गर्‍याका ९ मैन्हा सम्ममा. अघिवाट फाछर्‍या गरि. वा. भोग दृष्टि वंधक गरि लिन्याले मैले लियाको छ भनी. जाहेर गरेन भन्या.र.राजकाजले वा. आफनो सोषले.देश पर्देश गयाको रहेछ र. उस्का घरका. अरू जान्कार. कोही रह्यानछन्. भन्या आईपुग्याका ९ मैन्हा भित्रमा आई फलानु जगा ता एस विहोरा सित. मैले लियाको छु भनी. जाहेर गरेनछ भन्या. अघिवाट लिन्याले पाउदैन. पछीवाट फाछर्‍या गरि वा.भोग दृष्टि वंधक.गरि लिन्याको सदर हुंछ.पछि लिन्यैको सदर गराई. वेहोराई दि दोहोरो पारि वेचन्यालाई. थैलीका विगा वमोजिम.दंड गरि.उस्का अरू जगा भया अघिल्लालाई. उहि जगा लेषाई दिनु. जगा नभया. अरू धनमाल.वाट.भराई दिनु.केही दिन सकेन भन्या. कपाली तमसुक गरि.रस्त किस्तको कागज गराई. छाडी दिनु.कैद हुदैन.अघिवाट विर्ता वेषफीगठार जगा जमीन षेतपाषो घर वारि. कमारा कमारी. फाछर्‍या गरि. वा भोग दृष्टि वंधक गरि लिन्याले पछिवाट लिन्याले लियाका ९ मैन्हा भित्रमा र राजकाजले. वा आफना सोषले. देश पर्देश जान्याले.घर आई पुग्याका ९ मैन्हा भित्र मा आई फलानु जगा ता मैले लियाको छु.भनी जाहेर गर्‍यो वा.जगा भोग चलन.गर्न्याले. ९ मैन्हा भित्रैमा पछीवाट लिन्यालाई. यो जगा ता फलानाले.लियाको छ भनी. जनायाको रहेछ र. रोवकार गर्दा. अघिवाट लिन्याको तमसुक फाछर्‍यापत्र सदर ठहर्‍यो भन्या.अघिवाट लिन्यैको सदर हुंछ.उसैलाई वेहोराई दि दोहोरो वेचन्यालाई.पछील्लाका.थैलीका विगा वमोजिम दंड गरि. उस्को अन्त जगा रहेछ. भन्या पछील्लालाई. उही जगा लेषाई दिनु.जगा नभया.अरू धन माल वाट भराई दिनु.केही दिन सकेन भन्या.कपाली तमसुक गरि.रस्त किस्तको कागज गरि.छाडी दिनु.कैद हुदैन.पछि वाट विर्ता वेषफीगठार जगा जमीन घर.वारि षेत पाषो कमारा कमारि

लिन्याले. अघि अर्कालाई फाछ्र्या गरि. वा.भोग दृष्टि गरि दियाको वा. अघिवाट लिन्याले. भोग चलन मोही पजनी. गऱ्याको. थाहापायाको रहेछ वा. फलानु जगा फाछ्र्या गरि वा. भोग दृष्टि. वंधक गरि. अघि मैले अर्कालाई. दिया वेच्याको छु भनी जनायाको रहेछ. अथवा भोग चलन गर्न्याले. पछी वाट लिन्यालाई. योजगा ता. फलानाले एस्ता विहोरा सीत. लियाको छ भनी ९ मैन्हा भीत्रै मा. जनाउंदीयाको रहेछ. र पछिवाट लिन्याले. जानी लियाको ठहऱ्यो भन्या.अघि लिन्याले. ९ मैन्हा पछी भंन आया पनी. ९ मैन्हा भीत्रै भंनअयापनीं अघिवाटै लिन्याको. सदर हुंछ. उसैलाई वेहोराई दिनु.जानी जानी दोहोरो पारि वेचन्या किंन्या.दुवै जनालाई. विगाका दसौद दसौदका. दरले दंडगर्नु. पछीवाट लिन्यालाई.जगाभोग चलन गर्न्याले. यो जगा ता. फलानाले लियाको छ भनी ९ मैन्हा भीत्रमा गै जनाउ दियाको रहेछ. र जानी जानी. जगामा. भोग चलन. गर्न गयेछ. भन्या पनि. विगाको दसौद दंड गर्नु. रूपैया नतिऱ्या. अैन वमोजिम कैद गर्नु. पछील्ला साहुले असामीसित ले.वस नलेवस. उसैको षुसी.

५२. कुलाका झगरामा. परा पूर्वदेखी चलीआया वमोजिम पानीको भाग वाडी. आयाका ठाउंमा र. भाग वमोजिम पानी दिनु. भन्या भयाका ठाउंमा भाग वमोजिम पानी दिनु. अरू जगामा. माथिवाट षेत रोपी सक्या पछी. कुलाको पानी थुंन पाउंदैन. मनिवाटका षेतवालले. पानी लगाई. रोपनु. माथिवाटका षेतवालाको केही विहोराले.अटकाउं भै.रोपन नसकी रहन गयो भन्या.मेरो षेत नरोपी पानी दिंन भनी.रोकन पाउदैन. मनीवाटका षेत वालाले पानी लगीरोपन पाउंछ. रोपनु. माथिवाटका षेतवालाले. पछिवाट रोपनु. आफना आफना षेत रोपी स.क्या पछी.सवैले भाग वमोजिम.कुलाको पानी लाउनु.

५३. घर षेत जगा जमीन्.किंदा वेचता. अलि राषी वा.फाछ्र्या गरि.कसैले लियाको रहेछ र.सुक्रि विक्री.को मोहोर गराउन्या. कारिंदा रकमीले. सुक्री विक्रीको मोहोर नगराई.हुदैन भन्यो भन्या.विक्री भयाका जगाको. अघिको पुरानु सनद पत्र रहेछ र.जगा लीन्याले.उसै सनदवमोजिम.फाछ्र्या पत्रका सहिले. षांछु सुक्रि विक्रीको.मोहोर गराउदीन.भन्या मोहोर गराउनाको कर लाग्दैन. अघि जगा पाउंदाको. सनदपत्र रहेनछ. भोगका सहीले मात्र. षाई चर्चीआयाको रहेछ भन्या. एस्ता जगा षरिद विक्री भया पछी.सुक्री विक्रीको. मोहोर गराउनुपर्छ अघि देषि चलीआया वमोजिमको. दस्तुर लि. अैनमा वेत्यास नपारी. सुक्रीविको लालमोहोर. गराई दिनु.

५४. कसैले साहुहरूलाई. दृष्टि भोग गरि धितो दिंदा. अघिवाट २।३ जगा षला. एउटालाई. लेषी दि कर्जालियाको रहेछ. तिनै जगा मध्येको. १।२ षला पछी वाट अर्का कसैलाई. धितो लेषीदि. दोहरो पारि. रूपैया कर्जा लियेछ भन्या. ९ मैन्हाका म्यादका. अैन वमोजिं जस्को सदर ठहर्छ. जगा उसैको सदर गराई दि. दोहरो पार्न्या.असामीलाई दोहरो पर्‍याको. जति जगाहो उतिका मोल विगा वमोजिम दंड मात्र गर्नु.

५५. नेपाल पाहाडका विर्ता गुठि वेषफीगढार. मरौट माना चावल. छाप ज्यूनी रैकर किपट सेवा विर्ता रजवाधा. नानकार. गैह्र तिरो भरो गरि. षान्या षेत पाषो जगा कमाउन्या मोही रैतिले जगाकातालुक वाला. सित चार दाम राषी. हवस.चार दाम राषनु नपर्न्या जगामा.चली आया वमोजिम राहा वाहा गरि. जगा मल जल गरि वाली रोपी छरि लाई.सक्यापछी.अर्काले विज उल्टाई.षन जोत गर्‍यो भन्या तेस्ता लाई.विज उल्टीयाका जति.जगामा हुन्या.वालीको १ सालको विगो भराई.विगै वमोजिमदंड गर्नु.

५६. सेर्मा पनी साउंन्या फागुपनी. दरि चली आयाका जगामा पर्‍याको अस्मानी दंड कुंड गैह्र सेर्मा षान्याले.षान पाउंछ.उसैले षानु.सेर्मा नलाग्याका साउंन्या फागुमात्र तिरि आयाका.जगाको दंड कुण्ड अस्मानी गैह्र आम्दानी साउंन्या फागु उठाई षान्याको हुंछ. एकै जगामा एउटाले सेर्मा षाँदोरहेछ. एउटाले. साउन्या फागु खादो रहेछ भन्या दंड कुंड गैह्र अस्मानी.आम्दानी सेर्मा षान्याको हुंछ.एस्ता जगामा.कोही रैतिवसैगयो र जगा षाली रहो भन्या सेर्मा षान्याले. पजनी गर्नु. साउंन्या फगु मात्र उठाई षान्याले जगाको पजनी गर्न पाउदैनन्.

५७. अघि देषी रकम्मा. नदरियाका- जगा गुठि रैकर. सर्कारिया. सेरा वाहेक अरू दुनित्रा गुठि मठ सदावर्त. विर्ता वेषफीगढार. छापमाना चावल ज्यूनी पेटिया षर्च. भया उ मोहरिया फर्मायसि गैह्र. जगामा अव उप्रान्त. सर्कारवाट रकम्मा नदर्नु. एस्ता जगाकसैले व्याड्वाला वोसिघासि. कर्मीगोल्या. वारूद.षाना. कागत्या थाप्ल्या. हुलाकी चौकी. गैह्र ई रकंमा दरेछ भन्या उसैजगाका. १ सालका. मोही वोटीका. विगा वमोजिम. दंड गरि. जगा रकं.वाट भिकिदिनु. जगाका धनी उमराव भारादार. दुनिया रैयत.हरूले. आफना जगामा आफना तरफवाट रकंमा दरन हुंछ. वातलाग्दैन. अघि देषी रकंमा नदरि.याका राज गुठि सर्कारि.या सेरा रैकर. जगामा अव उप्रान्त पनी. सर्कार वाट रकम्मा दर्न हुंछ.

५८. अव उप्रान्त कसैलाई गुठि विर्ता वेषफिगटार वक्सदा रैकर जगेरा उकास र. वाझा जगामा मात्रै वाटो निकास राषि साध सिवाना लगाई. दिनु जगेरा उकास. वाझा जगाले. पुगेन भन्या जगा किनि साध लगाई दिनु. कमपु पल्टं कंपनी. भैभारदार. जंगी नीजामती. गैह्र जागिरदारका षानगीमा. दरियाका अवादी षेत. पाषा जगामा साध लगाई नदिनु. जागीरदारका अवादी जगामा. साध लगाई दिन्यालाई. उसै जगाका. १ सालका. उवजनी वमोजिम. दंड गरि जगा झिकिदिनु.

५९. कंपु पल्टन कंपनी भैभारदार. जंगीनिजामती गैह्रका जागिरमा वरियाका षेत पाषा जगामा र. षोलो पैरो गैह्र नभयाकामा. षोलो पैरो लाग्यो. कुलो भत्क्यो भनी. ढाटी मीन्हा गराई. षायाका जगामा र षोलो पैरो लागी. कुलो विग्री जाँचमा दफदरमा. मिन्हा गराई. षेत कुत सेर्मा घटायाका पछी अवाद गरि. नदराई. गाभी षायाका. जगामा. जगीर्दारले. मिन्हा पाई सक्याको ठहऱ्या. तेस्ता अंवादी जगामा. अवादी हवस. वा. वाझो रहाका. जगामा गुठिविर्ता. वेषफीगटार.को साध लगाई दिन हुंछ. षत लाग्दैन. जागीर्दार्ले. मीन्हा पायाको नठहऱ्या साध लगाउनु हुदैन.

६०. श्री ५ सर्कारवाट वझ्याउनु कमोत नगर्नु. भंन्या भै वझ्यायाका जगामा. उर्दि नमानी जवर.जस्ती गरि चलं गरेछ भन्या. पैल्हा पटक एक सालका सेर्मा वमोजिम.दंड गरि. घर षेत. रहेछ भन्या. छपर उजारि उठाई दिनु. तेति गऱ्या पछी फेरी आई चलन गरेछ भन्या. एक सालका सेर्माको दोवर दंड गरि. सोही वमोजिम गरि उठाइदीनु. ताहा पछि फेरी पनी आई चलन गऱ्याको भया. १ सालका सेर्माको तेवर दंड गरि उठाई दिनु. तेति भया पछि पनि फेरि आई.चलं गऱ्याको ठहऱ्या. २।२ वर्ष कैद गर्नु. म्यादका रूपैया दिया लि छाडनु उर्दी नाघी वल जफत चलं गऱ्याका जगामा. लाग्याको वाली. तिन्ले षान पाउदैनन् लाया छऱ्याको मात्रै भया वन जन्तुले षाउन तेसै छाडनु. पाक्या छिपीयाको वाली भया. जाँच गर्न जान्याले. वुझी एति ज्मा रहेछ भन्या आफ्ना. आफिसर मार्फत. साघि पठाउनु र. जवाफ गया वमोजिम. गर्नु.

६१. सरहदका वादसाहा राजाहरूसंग आफनु जमीन. कत्ति ढेरै रूपैया पायापनी गद्धीनसेनले नवेचनु. गद्धीनसेनले वेचभंन्या. हुकुम दिया पनी. वजीर कौसलले नवेचनु. हुकुम पाई. हवस हुकुम नपाई आफना तजविजले हवस थोरै जमीन को ढेरै रूपैया पाइ हवस आफना सिवाना भीत्रको जमीन सरहका वादसाह राजा संग वेचन्या वजीर कौसल. अप्सर निमक हराम

ठहर्छन्. नीमक हराम हुं भनि सन्सारले जाँनु. जहान परियार स्मैत्. भै आफना. सरहदमा. आई. रैयत्. भैवस्याका.लाई. वेचन हुन्छ.

६२. सरहदका वादसाह राजाहरू संग सिवाना मिलन्या अवादीले अवादी. पर्तिले परति. जगा १ षंड आफुदि २ षेंड अर्काको पाइंछ भन्या साटन हुंछ. आफनु पर्ति रैति नभयाको जगा दि अर्काको अवादी रैति भयाका. जगा डेढो वढता पाया पनी. साटन हुंछ. साटि सिवाना. सच्याउनु. विच सट्टा पटा न गर्नु.

६३. दुनीञादार गैह्रले आफना मुलुकका वासिंदासित र. जहान वच्चा स्मेत. गरि अरू मुलुकवाट आई रैयत वासिंदा भयाका सित. जगा जमीन वेचन कींन हुंछ. विराना वादसाह राजाका रैयत दुनीयांलाई. वेच्या भन्या. किंन्यालाई थैलि दिलाई जगा सर्कारवाट जफत गरि लिनु. वेचन्याले थैलि मासि सक्याको रहेछ भन्या. उस्को अरूधनमाल भया. उसै वाट थैली भराई. जगा जफत गरि लिनु. केही नभया सर्कार वाट थैली दि जगा लिनु.

६४. सुरषेत अवाद गराउनालाई जत्र तत्र वाट रैति झिकाई चाहिदो भोता पोता दि अवाद गर्न लगाउनु. वस्ति वस्न भनी आयाका रैतिमा. सर्कारको वाकि लाग्याको नतिरि वा. सर्कारको ह.वस् अरूको हवस. सर सापट् कर्जा षायाको नतिरि आयाका रहाछन् भन्या उस ठाउंमा कुरिया भै वसंज्याल तिन्लाई छेक थुन गरि कसैले पनी लिन पाउदैनन् नलिनु. उस्ले कमायाका धन संपतिमा षानलाउन संम. रैतिलाई थामी वढता ठहऱ्याकामा उसठाउंका हाकिम अमाला ले साल सालमा एति एति तिर्नु. सो वमोजिम साहुले लिनु भन्या रस्त किस्तको भाषा वन्दोवस्त गराई दिनु. वर्ष दिन अघि देषि भागी मुगलानामा गयाका उताबाट आई सुरषेतमा षेति पाति घर गरि वस्याका कमारा कमारि लाई धनीले पक्रन पाउदैनन्. नपक्रनु. गोरषा राजवाट भागी सुरषेत मा गै बस्याका कमार कमारीलाई धनीले पक्रि ल्याउन. वेचन हुंछ वात लाग्दैन.

६५. मोरङ् जिल्ला अवाद गर्नालाई जत्र तत्र वाट रैति झिकाई चाहिदो भोता पोता दि अवाद गर्न लगाउनु. वस्ति वस्न भनी आयाका रैतिमा सर्कारको वाँकी लाग्याको नतिरि वा सर्कारको हवस् अरूको हवस् सर सापट् कर्जा षायाको नतिरि आयाका रह्याछ भन्या. उस ठाउंमा कुरिया भै वसंज्याल तिन्लाई छेक थुन गरि कसैले पनि लिन पाउदैनन् नलिनु. उस्ले कमायाका धन संपतिमा षान लाउन संम रैतिलाई थामी वढता ठहऱ्याकामा उसठाउंका हाकिम अमाल ले साल सालमा एति एति तिर्नु. सो वमोजिम साहुले लिनु. भंन्या रस्त

किस्तको भाषा वन्दोवस्त गराई दिनु. वर्ष दिन. अघि देषी भागी मुग्लानामा गयाका उतावाट आई मोरङ जिल्लामा षेती पाति घर गरि वस्याका कमारा कमारिलाई धनीले पक्रन पाउदैनन्. नपक्रनु. गोर्षराजवाट भागि मोरङमा गै वस्याका कमारा कमारि लाई धनीले पक्रि ल्याउन वेचन हुंछ वात लाग्दैन.

कचहरिवाट थुनुवा भयाका जगाको फुकुवा पुर्जि नभै चलन् गर्न्या वालि षान्यालाई गर्न्या अैन--------------------------------

६६. कसैका जगा जमीन घर षेत गैह्रको झगरापरि कचहरिवाट थुनुवा गऱ्याको रहेछ भन्या झगरा नछिनी र उसै कचहरिको फुकुवा पुर्जि नभै झगरियाले तेस जगाको वाल वाली षान. र जगा वेचन वंधक राषन हुदैन उसै कचहरिको फुकुवा पुर्जि नभै अदल मिचि कसैले वाल वाली षायेछ भन्या उसै जगाका उवजनीका सयकरा ५ जगा वेचेछ वंधक राषेछ भन्या सयकरा १० का दरले दंड गर्नु. झगरा छिंदा जसले वाली षायाको वेच्याको छ उसैले पाउन्या ठहऱ्या अैन वमोजिम दिलाई दिनु. अर्काले पाउन्या ठहऱ्या साहुको थैली जग्गा वेचन्याका नाउंमा कपाली गराई अर्का चाहिलाई दिलाई जवरजस्ति गरि षायाका वाली मोहीलाई थुनुवाको पुर्जि गयाको रहेछ. र मोही नजाची साहुले किन्याको रहेछ भन्या किंन्या वेचन्या दुवै वाट गरि भराई दिनु. दिन सकेन भन्या अैन वमोजिम कैद गर्नु.

कचहरिवाट थुनुवा भयाका जगाको फुकुवा पुर्जि नभै चलन् गर्न्या वालि षान्या मऱ्या पछी जाहेर हुदा गर्न्या अैन--------------------

६७. जगा जमीन गैह्रको झगरा परि कचहरिवाट जगा थुनुवा गऱ्याको रहेछ र उसै कचहरिको फुकुवा पुर्जि नभै झगरियाले जगा वेचेछ वंधक राषेछ र. जगा वेचन्या वंधक राषन्या मरेछ भन्या झगरा छिन्दा जगा अर्काले पाउन्या ठहऱ्या उसैलाई विहोराई दि साहुको थैली उस्को अपुतालि षान्याले अपुतालि षाया को रहेछ भन्या उसवाट तिर्न सक्या तिराई नसक्या कपाली तमसुक गराई दिनु. अपुतालि षांनौ भनि छोड्यो भन्या. तेसै का अपुतालीका धनमा दामासाहि गरि भराई दिनु.

# मोही टलसिंको

१. आफना विर्ता वाधा षेतपाषा घर वारि.माना.चावल छापवेष मरोट् फीगढार ज्यूनी पेटीया षर्चका जगामा नीज आफैले कमाउछु भन्या मोहीलाई उठाई घर वारि षेत कमाउन पाउंछ. पर्वत्काले. दसैका टिकादेषि श्री पंचमी सम्म र. नेपालकाले. दसैका टिका देषी सिठि षष्टि संम. षोसि नीजले चलन गर्न हुंछ. वाहा देषी उप्रान्त कुयाममा उठाउंन पाउदैन. कुयाममाउठायो भन्या.उठाउन्या धनीलाई. कमायाका जगाका १ सालका उवजनी वमोजिम. दंड गरि. उसैलाई थामी दिनु. अर्का सालमा समयपारि उठाउन पाउछ.

२. विर्ता वेषमाना चावल घर वारि छाप मरौट फीगढार. ज्यूनी पटीया षर्चका जगामा निज आफै धनीले घर हालि वस्छु. षेतकमाई षांछु. भन्या अवादी वाझो विह्रायाको भया पनी रैति उठाई वस्न र षेत षोसि चलन गर्न पाउंछ. रैती वस्ता धनी सीत जस्तो वोल कवोल गरि वस्याका छन्. अदालत अमाल. वाट उही रित वुझी निसाफ गर्नु.

३. विर्ता गुठि वेषमाना चावल. किपट रैकर जगा षेत पाषामा. घर वाहेक. पुरानी या मोही कुरियाले कुतवाली सेर्मा वेला वेलामा. पुऱ्याउँज्याल. मोही पजनी. गरि. कसैले नषोसनु षोस्यो भन्या. अदालत ठाना अमाल दफदरवाट उसैलाई. थामीदिनु षोसन्यालाई षोसियाका जगाको १ सालका उवजनी वमोजिम दंड गर्नु. रूपैया नतिऱ्या मैन्हाका ५ रूपैयाका दरले. कैद गर्नु. वेअंवलवाट फटक्या गरि कमायाका. जगामा. नयाँ वढन आयो भन्या वढ्याको पुरानीत्रा मोहीले दिन्छ भन्या. थामी दिनु. वढन सकेन भन्या नत्रा लाई दिनु.

४. जागिरदार.लाई.ढाटि(तंम्रो पजनी चलन्याहो भनी.पजनी नचलन्या जगामा.चार दाम राषि. विसहि भयो भन्या. चार दाम राषन्यालाई. सयकरा १० रूपैया दंड गर्नु रूपैया नतिऱ्या. अैन वमोजिम कैद गर्नु.

५. रैकर किपटका. षेत पाषाको नासो लिन पाउदैन. अदालत ठाना अमालवाट जसले कमायाकोछ. उसैलाई. वेहोराई दिनु. छोडीगयापछि. मेरो हो भँन्याको फिराद नसुन्नु.

६. अर्काका विर्तामा. भयो रैकर कीपट षेत पाषा गैह्रमा भयो. कसैले चार. दान ठेकी राष्यो चलं गर्न्या वेलासंममा चार दाम ठेकी राषन्या आयेन. उस जगाका. साधका जगामा. विज परंज्याल. चारदाम राषन्याले चलन गर्न आयेन भन्या.त्यो जगा धनी अमाली थरि

जिम्मावाल.ले पजनी गर्नु. तेस्को ठकी चार दाम. भुसिंछ. जगा वाफो नराषनु. अर्काले. चलन गऱ्यापछी. फेरी झगरा गर्न पाउदैन. झगरा गर्न आयोभन्या. तेसै जगाका १ सालका उवजनीका. ३ षंडको १ षंडका दरले दंड गर्नु. नतिऱ्या मैन्हाका ५ रूपैयाका दर्ले कैद गर्नु.

७. षारेज- (कसैले सर्कारको रकम गैह्न लियाको छ.वहि पत्र नवुझाई भाग्यो भन्या तेस्का नछुट्टियाका एका घरका. जहानैको. सर्वस्व हुंछ.नछुट्टियाका एकाघरका वावु दाज्यू भाई. स्वास्नि छोरा नातिले. वहि पत्र पनि वुझाउछौ ठहऱ्याको वाकी पनी तिछौं भन्या. वही वुझाई लाग्याको वांकी तिऱ्या भन्या जफत हुदैन. तिन्का जगा छोडी दिनु. )

८. आफ्ना जफति जिल्ला षेत आफुले छोडी गयाका अरूले अवादगरि लाग्या को तिरो भरो गरि कमायाका जगा षोसिदैनन्. थामींछ. पछी जिल्लावालाले. मेरो जगा म कमाउछु भंन आयो भन्यापाउदैनस् भनी.दिनु. जसले कमाई. आयाकोछ.उसैलाइ थामी दिनु.पट्टा वाफो जगा रहेछ भंन्या म कमाउछु भंन्या जिल्ला वाला लाई. दराईदिनु. छोडीगै अर्काले. चलन गऱ्याको. म कमाउँछु भंन्यालाई नदिनु. जस्ले पुरानालाई षोसि जिल्लावाललाई देला. उसलाई. तेसै जगाका १ सालका उवजनी वमोजिम. दंड गर्नु. रूपैया नतीऱ्या. मैन्हाका ५ रूपैयाका दरले. कैद गर्नु.

९. कोहि रैयत्ले. वेजाई विदुत्त.षतवात गरि.जहान वच्चा लीगयो १५ दिन भित्र मा रैकर घर वारी षेतको षोज षवर गर्न आयेन भन्या. तेस्को षेत घरवारी. जस्ले तिरो भरो गरि. कमाउछु भंछ अमालीले उसैलाई दिनु.

१०. हुलाक व्याङ वोसि घासिगोल्या. वारूदषाना वाला गैह्न रकम्मा दरियाका. जगा आफ्ना सावगासले मैले रकम्म चलाउन सकीन जगा छाडछु भनि कसैले भन्यो भन्या. रकम्का मुषिया नाइक्या द्वाऱ्या प्रधानहरूले छाडछु भंन्याको. राजीनामा लेषाईलि रकम चलाउन सकन्या मोही ठहराई.रकम गछाई जगा दिनु. राजीनामा लेषी छाडी जान्यारकमीले मेरो हो म पाउन्या. हू. भनी पछी. पाउदैन म पाउन्या. हुं भनी. कराउन आउन्यालाई २॥ रूपैया दंड गर्नु. रूपैया नतिऱ्या. १५ दिन कैद गरि. छाडी दिनु.

११. विर्ता वितलव फिगढार.वेष माना चावल.ज्यूनी पेटिया.षर्च छाप कसैको छ. तेस जगाका धनीहरूले. ज्यू सनवंधको. र हाडनाता छोइ छिटो हालनु पर्न्या जात सितको करणी भै भातपानीमा. पारि भागन्याका.एकाघरमा.नछुट्टीयाका वावु आमा दाज्यूभाई स्वास्नि छोरी रह्याछन्भन्या उन्को अैन वमोजिमको अंस परसारी. भागन्याको अंश सर्कार लाग्छ.जफत

गर्नु.एस्ता कोही रहेन्छन् भन्या तेस्को सबै जगा सर्कार लाग्छ. छुट्टी परसऱ्याका दाज्यू भाई. अपुतालिषान्याले पाउदैनन्.

१२. छोडी गयाका.जिल्लामा.अरूले अवाद गरि कंपनीलाई. तिर्न्या कुरा तिऱ्याको रहेछ.भन्या.मेरो जिल्ला हो भनी. पछिलिन आउन्यालाई.जगा नदिनु. जस्ले कमायाको छ उसैलाई. विहोराई दिनु. रूपैया लिल्ला वंधक दियाको रहेछ भन्या. धनीलाई कपालि तमसुक गराई दि जगा रैवंदी हुदा.जस्का नाउंमा. दरियाको छ. उसैले लाग्याको तिरो भरो गरि षान पाउंछ.

१३. आफना विर्ता वाधा षेत पाषाको लाग्याको कुत्दैदस्तुर. षेताला पुराना मोहीले. दिया भंदानत्रा मोहीले. वढता दिंछु भनी. कवुल गर्न आयो भन्या. नत्राले वढन आया वमोजिम. कवुल गऱ्यो भन्या. पुरानीत्रामोहीले पाउंछ. नत्रा मोहीले पाउदैन.पुरानीत्राले कवूल गररेन भःन्या नत्रा वढन आउन्याले पाउंछ. पर्वतकाले. श्री पंचमी. देषि दसैका टिका संम र. नेपालकाले सिठी षस्टी देषी दसैका टिका संम. जगा षोसन.पाउँदैन. षोस्यो भन्या. तेस कुयाममा षोसन्या विर्तवारलाई. एकसालका उवजनी वमोजिम. जरिवाना गर्नु. याममा षोसियाका मोहीले. कुयाममा षोसिदियो भनी. कराउन आयो. भन्या. तेस मोहिलाई. २॥ रूपैया जरिवाना गर्नु.

१४. याममा षोसियाका मोहीले. कुयाममा षोस्यो भनी कराउन. आयो र. वुझदा याममा षोस्याको ठहऱ्यो. भन्या. तेस्ता मोहिलाई. २॥ रूपैया दंड गर्नु. रूपैया नतिऱ्या १५ दिन कैद गरि छोडिदिनु.

१५. रैकर जगामा वस्याका घर वारिमा दरियाको. साल सालको तिरो भरो नअटकाउन्या घर वारी जगा उठाउन कसैले पाउदैन तेस्ताका घर वारि. जगा जस्ले षोसी पजनी गर्ला उसलाई. २० रूपैया दंड गरि लि घर वारी जगा जस्को हो उसैलाई. थामी दिनु. रूपैया नतिऱ्या. अैन वमोजिम. कैद गर्नु.

१६. कसैका जिल्ला षेत वाझो रह्‌यो वाझो रहाका वर्षको वाली जिम्मा. वालले तिऱ्यो भन्या. षेत षोसिदैन. वाझो राष्यो वाली पनि तिरेन भन्या. वाझाको वाली पनि मतिर्छु. षेत पनी षांछु भन्यी कोहि भंन आयो भन्या. जसले वाझाको वालि तिर्छ. षेत उसैले पाउंछ.

१७. रैतानमा षेतको. पजनी गर्दा रैतिले अघि देषी षाई आयाका: पुराना अवादी षेतमा वाझो विह्वाउन्या कवुल गर्छस भन्या. तेरा अवादी षेत पाउछस्. नतर पाउदैनस भनी कर लगाई.

वाफ्को गछ्याउन हुदैन. पुरानो षेत पनी. षोसन हुदैन. षुसिले वाफ्को विह्राउन माग्यो भन्या विह्राउन दिनु. कर लगाई. वाफ्को विह्रा भंन हुदैन.

१८. रैकर विर्ता गुठि छाप माना चावल्. वेष गैह्र जगामा. पट्ट वाफ्को वगर भयाको. जस्ले वनायो अवाद गर्‍यो तेसलाई नषोसनु. लाग्याको सुदामत सेर्मा कुत तेसैवाट साल वसाल लिनु षोस्यो भन्या अदालत ठाना अमालवाट वाफ्को वगर वनाउन्यालाई. चलन गराई दिनु. लाग्याको सुदामत दैदस्तुर. तिरेन वाली अटकायो भन्या. षोसिदिनु. विर्ता वेष छाप माना चावल मरोटफीगठार. ज्यूनी पेटीया षर्च. गैह्र जगामा. धनीले आफनु घर वनाई. वस्छु भन्या. घर वनाई वस्न र. जगा कमाउन पाउछ. षोसि अर्कालाई. दिन पाउदैन.

१९. जस्ले आफना आतका वलले वाध कुलो वनाई. षेत पाषो विह्रायाको छ. उस जगामा. नत्रा वढन आउन्यालाई. जगा नदिनु. षेत पाषो गुँजायस हेरि डगल हालि नपाउदा वढता ठहर्‍याका षेत पाषामा. कुत ठेक दरि. पुरानो मोहीलाई. गछ्याई. दिनु.वाली.तिर्न्या कवुल गराउनु. मीहिनेत गर्न्या मोहिलाई. अघित्रा वालीतिरंज्याल. जगा नषोसनु. लाग्याको कुत.दैदस्तुर. नतिर्न्यालाई षोसिदिनु.

२०. लडाईमा गै ज्यान दिन्या र. सर्कारका. काजमा. गै मर्न्या. मानिसका स्वास्नी छोरा छोरीका घर वारी षेत. पाषाको लाग्याको तिरोभरो गरंज्याल्. गुठि रैकर. जफती जगा गैह्रका धनीले. कसैले पनि षोसन हुदैन. तिरो भरो गरि षान पाउछन् कसैले षोस्यो भन्या र. मैले पायाको छ भनी. जवरजस्ती जगा चलन गर्न गयो भन्या दुवैलाई षोस्याका जगाका १।१ सालका उवजनी वमोजिम दंड गरि. जगा उनैलाई थामि दिनु विर्ता वेषछाप फिकठारका धनीले आफुले कमाउछु भन्या. पनी ति वालषको १६ वर्षको उमेर भयाको रहेनछ. भन्या र. तिरो भरो अट्क्याको रहेनछ. भन्या. षोसन हुदैन. षोसन्यालाई सोही वमोजिम. दंड गर्नु ति वालषको. १६ वर्षको उमेर भया पछी. विर्ता वेषछाप फिगठार.का धनीले. आफु घर वनाई. बस्न र जगा कमाउछु भन्या.षोसन हुंछ. षत लाग्दैन.

२१. कसैका वावु पनी आमा पनी मर्‍या छोरा छोरि वालष टुहुराछन्. तिन्का दाज्यू भाइ इष्ट मीत्रहरूले. इन्का घरवारी षेतमा. लाग्याको तिरो भरो पनी. हामी तिरि दिंछौ इन्का जगा जमीन. पनी हामीले. कमाई वालषहरूलाई पालछौं. इ जांन्या समर्थ भया पछी आफना घर वारिमा वसी चलन गर्नन भनी.कसैले भन्यो भन्या त्यो जगा जमीनका लाग्याको.तिरो भरो गरि दि ति वालष पाली चलन गर्न पाउदछन्.ति केटाकेटीको सामर्थ भया पछी आफना वावु

आमाले. चलन गऱ्याका जगा इनैले पाउंदछन्. अदालत अमालवाट इनै वालषलाई वेहोराई दिनु. घर वारि षोसन्यालाई २० रूपैया षेत षोसन्यालाई षोस्याका जगाका १ सालका उवजनी वमोजिम दंड गर्नु रूपैया नतिऱ्या मैन्हाका ५ रूपैयाका दर्ले कैद गर्नु.

२२. हुलाक व्याङ. वारूद्षाना वोसीघासिवाला गोल्या गैह्र. रकममा दरियाका षेत पाषा जगामा वावु आमा मऱ्या छोरा छोरि. रकंचलाउन सकंन्या वालष टुहुरा छन्भन्या.तिनले कमाउन सक्या संमको जगाषोसि पजनी. गर्न कसैले हुदैन. १२ वर्ष देषि उधोकाछन् भन्या तिनले जीयले गर्न्या रकम तिर्नु पर्दैन. १२ वर्ष नाघ्या पछी. तिरोभरो गरि.आफना वावु आमाले. जियले गऱ्याको रकम चलाई.आया वमोजिमको.तिरो भरो. गरि रकम चलाई. तिनैले षान पाउछन् एस्ता वालष टुहुराका. जगा जमीन. षोसन्यालाई. षोस्याका. जगाका. १ सालको.उवजनी वमोजिम दंड गर्नु.रूपैया नतिऱ्या. अैन वमोजिम कैद गर्नु.

२३. हुलाक व्याङ. वारूद्षाना वोसीघासि. वालाले चलन गऱ्याका रैकर. पाषा सुवारा घर वारि षेतमा लौग्न्या मऱ्यो. स्वास्निमानिस्ले लाग्याको रकम कलं हुलाक चलाई.टल्सीं अमालीको.कुत ठेक तिरो भरो गरि.षेत जगा षांछु भन्या. इन्का जगा षोसि दैनन् थामी. दिनु कसैले षोस्यो भन्या.तेसै जगाका १ सालका उवजनी वमोजिम.दंड गर्नु.

२४. तिरो भरो गरि.षान्या रैकर जफति.किपट षेतपाषा जगाको सेर्मा कुत चली आयाको तिरोभरो.ढाटन्या घर ढाटन्या हल घरलाई. कोदाल्या लेषाई. दर घरमा ढाटन्या. षेतको.घ्यूषानी कुत ढाटन्या.षोलो पैरो नलाग्याका. जगामा खोलोपैरो लाग्यो भनी.ढाटी लेषाउन्या.रैतिले रहेछ भन्या.जति ढाट्याको छ. ढाट्या जति जगाको षेतमा १ सालका उवजनी वमोजिम. पाषामा १ सालका. सेर्मा वमोजिम दंड गरि. जगा जाहेर गर्न आउन्या.लाई दिलाई दिनु. मुषीया जिंमावल.हरूले.ढाट्याको रहेछ भन्या सोही वमोजिम. दंड गरि ली मुष्याली जिम्मावाली गर्न सकन्यारहेछ भन्या. तेसै जाहेर गर्न आउन्यालाई. मुष्याली जिम्मावाली गरि दिनु मुष्यालि जीम्मावाली ता.गर्न सकन्या.रहेनछ भन्या. गाउंका पत्यायाका.भलाआदमीलाई. मुष्याली जिम्मावाली. दिनु. ढाट्या जति जगा षेतपाषो जाहेर गर्न आउन्यालाई कामदार धनी जिम्मावाल अमाली मुषीया कचहरिवाट दिलाई.दिनु.दियेन भन्या.जस्ले दिलाई दियाको छैन. उसैलाई.तेसै जगाका १ सालका उवजनी वमोजिम. दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम. मैन्हाका ५ रूपैयाका दर्ले कैद गर्नु.

२५. कंपुँपल्टन् कंपनी भरभारदार गैह्र जंगी नीजामतिका जागिरमा.दरियाका. जगामा महाजाच भै.रैवंदी गरि सयकरिस्मेत लिदुनीत्रा रैतिलाई. दरिया वमोजिम. जाँचवाट सनद भयाका. जगामा.अर्को जांच नहुंज्याल्.षेत कुत तिरो भरो वद्यो भनी. षोसी पजनी गर्न हुंदैन. जसले षोसी पजनी गर्छ. उसलाई षोस्याका जगाका १ सालका. उवजनी वमोजिम.दंड गरि.जगा पुरानीयालाई. थामी दिनु. रैति अंत वसै गयो भन्या र. षेत कुत ढाट्यो घटायो दरिचली आयाको. तिरो भरो अटकाई हिमायेत गऱ्यो भन्या. तेस्ता मोहिलाई. रैवंदीका. भागमा दरियाको भया पनी.षोसि पजनी. गर्न हुंछ. षत लाग्दैन.

२६. कम्पू पल्टन् कंपनी.नीजामती गैह्रका.जागिरमा.दरियाका.षेतपाषा जगा.सदर.दफदर.दफदर. महाजाँचले जाँची मोही नाईक्या जीम्मावाल मुषीया थानी थरी सुवाराई. मजिया जीम्मावाल. ठेकदार. चौधरि. मुकदं.जीमीदार. मीझाऱ्या झुत्तावाल. गैह्रका जिम्मा गरि दि. आफु आफुले. जिम्मा लियाका. जगा जांच बुझ हेर विचार गर्दै. रहनु आफना जिम्मा लाग्याका जगाका लिगलागमा जगा विह्लीन्या रहेछ भन्या विह्लौटा विह्लाउन लगाई. ३ साला दुवै वोटि कमाउन्यालाई षान दिनु. तृसाला पुग्यापछि कम्पूपल्टन. कंपनीको जगाका लीगलागका. विह्लौटा भया. उसै उसै दफदरमा नीजामती गैह्र अरू जग्गाका लिग लागका. विह्लौटा भया. दफदर दफदर्मा गैलेषाई देषाई वाली उठाई वुझाई रसिद लिनु. तृसाला पुग्यापछि पनी विह्लौटा. नदराई वाली उठाई षायाको ठहऱ्या. जति वर्षको वाली मोहि रैतिवाट उठाई ली वुझाउन्या ठाउंमा नवुझाई. दवाई षायाको ठहर्छ उति विगो भराई. विगा वमोजिम दंड गरि. षोसी दिनु. फलाना षला विह्लौटा जगाको वाली वुझाउन ल्याउ. भनी. मोही नाईक्या जिम्मावाल गैह्र तालुकवालाले माग्न पठाउंदा. मा पनी झेल गरि वाली नवुझाउन्या मोही रैतिलाई. विगो भराई विगा वमोजिम दंड गर्नु. रूपैया नतिऱ्या. अैन वमोजिम कैद गर्नु.

२७. कंपु पल्टन. कंपनी नीजामती गैह्रका जागिरमा दरियाका हउन् वा. जगेरा उकासका हउन्.षेत पाषा जगामा. षोलो पैरो लाग्यो कुलो विग्र्यो षेत रोपीयेन भनी. ढाटी आफुले षाई वा. रैतिलाई षुवाई. दफदर जागीरदारवाट मीन्हा लियाको ठहऱ्या जति सालको. जति जति मीन्हा लियाको ठहर्छ. उति सालको षान्यावाट टल्सींवोटिको विगो भराई. तालुकदारलाई. विगा वमोजिम दंड गरि. जगा षोसि दिनु. ढाटी मिन्हा लिया जति. जगा जाहेर गर्न आउन्यालाई. तिरो भरो गर्न्या गरि. कमाउनु दिनु. जिम्मावाली मोहि नाइक्या गैह्रभन्या काम पुऱ्याउन. सकन्या. लायेक मानीस. ठहराई. जिम्मावाली मोही नाइक्या. गैह्र दिनु.

२८. सदर. दफदर दफदर महाजाचकीले मोही नाइक्या. जिम्मावाल. मुषिया थरी थानी चौधरी. मुकदम जिमीदार मीझाऱ्या झुत्तावाल पर्पजनी गर्दा आफ्ना जिम्माका षेत पाषाका लिगलागका जगा विह्राया भन्या. त्रिसाला पुग्या पछि. विह्रौटा दराई. वालिस्मेत् वुझाउंला देषाईन र. दवाई वाली आफुले षाया.वा. रैतिलाई. षुवाऱ्याँ भन्या. वालीको विगो भराई. विगा वमोजिम जरिवाना तिरौला. षोलो पैरो नलाग्याकामा षोलो पैरो लाग्यो भनी. जागिरदार. सदर दफदर. दफदरवाट मिन्हा लिया भन्या. मिन्हा लियाका वालीको विगो भराई विगा वमोजिम जरिवाना स्मेत गरि. हामीलाई षोसी पजनी गर्नु. भन्या वीहोराको. मुचुल्का लेषाई लि जगा दिनु. लेषि दियाको मुचुल्का वमोजिम. नगरि. जगा वाली दवाई. छपाई. आफुले षायाको रैतिलाई.षुवायाको वा ढाटी मिन्हा लियाको ठहऱ्या. तहकित गरि. तेस्तालाई. लेषीया वमोजिम विगो र दंड गरि. षोसि पजनी गरि. अर्को काम पुऱ्याउन सकन्या लायेक मानिस ठहराई. मुष्यालि जीम्मावाली झुतावाली गैह्र दिनु.

२९. गोर्षाराज भरमुलुक मध्येस. पाहाडका सावुद जगामा. षोला पैरो षस्ती पर्ति सुषा दहार बालुवुर्ज गैह्र भयो भनी. ढाटी षायाको अदालत ठाना सदर दफदर दफदर. कुमारिचोक अडा गौडा अमालमा जसले जाहेर गर्न. आउंछ. तेस्ता जगा कायेल गरायो भन्या. जति सालको ढाटी षायाको ठहर्छ. उति सालको. टल्सींवोटिको विगो भराई. विगै वमोजिम दंड स्मेत गरि षोसि जगा जाहेर गर्न आउन्या काम पुऱ्याउन सकन्या. लायेकको रहेछ भन्या. तेसैलाई दिलाई दिनु. फलानाले ढाट्याका छ भनी. जाहेर गरेछ रोवकारमा ढाटि षायाको ठहरेन. पोल्याको ठहऱ्यो भन्या. तेस्ता पोलाहालाई. उसै जगाका. १ सालका टल्सिं वोटिका विगा वमोजिम. दंड गर्नु. रूपैया नतिऱ्या. अैन वमोजिम. कैद गर्नु.

३०. महाजाचले जांची रैवंदी गरि. सयकरि स्मेत्. वुझी लि रैतिलाई. दरिदीयाका. षेतपाषा जगा कमाउन नसकि वाझो रहन लाग्दा. नाउं दरिन्याले. हवस् वा जिम्मावाली मोही नाइक्या गैह्रले हवस् अर्कालाई कमाउन चलन गर्न दि उसलेजगा वनाई रोपी लाग्याको तिरो भरो गरि. षाई चर्चि आयाका जगामा. तिरो भरो नअटकाउंज्याल्.षोसि पजनी गर्न हुंदैन. रैवंदी. मा नाउ दरिन्याले पनी मेरो नाउंना दरियाको म कमाउंछु भंन पाउदैनन्. एस्ता जगा कसैले. षोसि पजनी गऱ्या भन्या. १ सालका. टल्सींवोटीका. विगा वमोजिम. दंड गरि. जगा कमाउन्यालाई थामी दिनु.

३१. धान गहु वालीमा पाकेन. सुषा भयो असिना पऱ्यो सलहले षायो षोलो पैरो लाग्यो पुरूवा भयो भन्या. जगा कमाउन्या मोही गैह्रले. आफ्ना नजीकका. अडा थुममा कराउन जानु. अडा थुम वालाले. उस ठाउका. जीम्मा वाल थरि. मुषियाका नाउमा पुर्जि गरि. पठाई दिनु. सो वमोजिम उस ठाउका जीम्मावाल थरि मुषिया. भला मानीस्. लैगी साछी राषि कटाई पाथी लगाई. ठहऱ्याको वाली अैन वमोजिम.टल्सींलाई.वुझाई.तिर्जा रसिद मागि लिनु. जीम्मा.वाल मुषिया थरि भला मानिस्.हरूले पनी. मोहिले अडा थुमको पुर्जि ली आया पछी आफु वसी जस्ताको तस्तो गरि.कटाई मडाई ठहऱ्याको.वाली आफुले लेषिसाछि स्मेतको नाउं हाली. १ पर्ति कागज आफुसंग राषनु. १ पर्ति कागज मोहीलाई दिनु. १ पर्ति कागज अडामा पुऱ्याई दिनु. अडा थुमवालाले. आफना स्याहामा. लेषि राषनु. जिम्मावाल थरि मुषिया. भला मानीस्.लेजस्ताको तस्तो नगरि. मोहिका मोलाहिजामा लागी. घटी पाऱ्याको ठहऱ्यो भन्या. घटी पाऱ्याको विगो मोहीवाट भराई. उसै विगो वमोजिम. जिंमावाल थरि मुषिया. भला मानिसमा. साछि वस्न्या जो हो.उसलाई दंड गर्नु. जीम्मावाल थरि मुषिया. भलामानीस् वसी. कटाया मडायाका वालीमा. वाली घट्यो भनी टल्सींहरूले उजुर गर्न पाउदैनन्.अैन वमोजिम वुझी लिनु. अडा थुमवालाको. पुर्जि नलगी. जींमावाल थरि मुषिया. भलामानिस्मा. एकजना पनि साछि नराषी आफु आफैले मात्रै कटाया मडायाको ठहऱ्या. टल्सींले मीन्हा दिनु पर्दैन. दरिया वमोजिमको वाली वुझाउनु पर्छ.

# बालि नतिर्न्या मोहीको

१. मोहि गैह्रसित विर्तवार जागीरदार.हरूले. हामीलाई. धानै चाहिंछ भन्या. धानै. दिनु. मोहिले वोकि पुऱ्याई दिन्या. श्रेस्ता भया वोकि पुऱ्याई दिनु. न वोकन्या श्रेस्ता भया धानै सौपी दिनु. मोहिले वोकि पुऱ्याउन पर्दैन.

२. रैकर विर्ता जागिरका षेतमा लाग्याको कुत दैदस्तुर गैह्र तिर्न्या कुरा नतिर्न्या षेतमा पनी बढिया धान उवज्यामा घटिया भुस्याहा उवज्याको हो भनी. ढाटन्या. षोलो पैरो. आगो असिना नपऱ्याका.मा असिना पऱ्यो पैरो लाग्यो. षोलाले षायो. कुलो विग्री पानी नभै उवज्येन भंन्या साल वसालको तिर्नु पर्न्या वालि साल वसाल अटकाउन्या. मोहिलाई. जिल्ला विजील्ला वाझो फोऱ्या. को हो भन्या पनि. षेत षोसि पजनी गर्नु.

३. रैकर किपट जिल्ला जफती गुठि विर्ताका मोहीले. षेतमा. उवज्याका धान. दवाई पोवटा भुस देषाई. लैग्या लैजा नतर छैन. एस्तै उवजोथ्यो. भनी. ढाटी झेल. षेल गरि, टल्सींलाई. दुःष दिन्या मोहीको षेतषोसि. नञाँ मोहिलाई दिनु.

४. रैकर षेत पाषो हुलाकमा हाल्याको. छ. जागिरमा पऱ्याको छ भनी. तिरो भरो नगरि. ढाटी दवाई षायाको. जगा जस्ले जाहेर गर्न आउंछ. उस्ता जगा षेत चलन गर्न तेसै जाहेर गर्न्यालाई दिनु. लाग्याको कुत दैदस्तुर. उसैवाट लिनु. दवाई षान्याले. जति वर्षको वालिषायाको ठहर्छ. उति वर्षको दवायाका. जगाको टल्सींवोटीको विगो भराई. उसै विगा वमोजिम दंड गर्नु. जगा जाहेर. गर्न आउन्यालाई. श्री प्रायम्मीनीष्टर.को दस्षत गराई दिलाई दिनु.

५. कंपु पल्टन कंपनी भारादार. जगीर्दार गैह्रका षानगी ढडामा दरीयाको र दफदर. दफदरको जगेरा उकास षेतको वाली वुझाउंदा. पुराना ढडा तिर्जाका षेत पाषो षोलो पैरो गैह्र भयाको र. विह्रायाका जगामा. कुतमा घटवढ पऱ्यो भनी मोहि टल्सीं र. दफदरको झगरा भयामा. १० सालका महाजांचले जांची ल्यायाका मोट ढडाको सहि गरि निज १० सालका जांचका मोठ ढडामा. लेषी या वमोजिम. बढ्याका ठाउंमा बढ सकार गरि. र. घट्याका ठाउंमा. मीन्हा दि टल्सीं दफदर गैह्रले वुझी लिनु. सोही वमोजिम मोहिले पनी तिर्नु महाजांचले मुलुक जांची आया पछी.षोलो पैरो गै षेत कुत घट्यामा. जागीर्दारलाई.दरियामा जागिर्दारले. जाँची

बुझी र. जगेरा उकास्को दफदर दफदरले. जाँची वुझी ठहराई. मुनासिव माफिक मोहिलाई. घट्याको मिन्हा दी वाकी वुझी लिनु. अैन वमोजिम काहि वढ भयो भन्या पनी. जागिरमा दरियाकामा. जस्का षानगी मा. वढ भयो उसैले षानु. जगेरा उकासमा वढ भयामा दफदर दफदरले वुझी लिनु. सोही वमोजिम. षानगी ढडामा पनी. जागिरमा दरियामा जागिरदारले सच्याई. मागनु दफदर दफदरले पनी सच्याई दिनु जगेरा उकासमा दफदर दफदरले सच्याउनु.

६. व्याङवाला वोसिघासि कर्मी गोल्पा वारूदषाना का.गत्या थापल्या. हुलाकि चौकीहरूले. कमायाका षेत पाषा जगाका साल वसालको दरि चली आयाको कुत दैदस्तुर. वाली अटकायो भन्या. रकम् रकम्का. तालुकवालालाई भनी उनैवाट आफनु वाली लिनु. तालुकदारले. तेस्ता वालि नतिर्न्या. मोहिलाई. षोसि वालि नअटकाउन्या.आफुलाई दरीयाको.रकम्को काम पुऱ्याउन.सकन्या मोहि तजविज गरि. जगा पजनी गर्नु. तालुकवालाले. वाली दियेन भनी टल्सीं कराउन आया वाली. नदिन्या तालुकवालालाई. ५ रूपैया दंड गरि. तेसैवाट वाली भराई दिनु.

७. वालिमा असिना पऱ्यो.धान पाकेन सुषा भयो सलहले षायो भनी कराउन आउन्या.लाई जांची चौथाई सम्म घट्याको भया.मीन्हा नदिनु.चौथाई. देषी वढता नोक्सान.भयाको रहेछ.भन्या अधिञा वडाई दिनु.

८. मोहिका घरमा.केही काजले २।४ वर्षको वाली रहन गयाको छ. विक्री गर्दा भाउ मीलेन भन्या.टल्सीं पुग्याको रहेछ मोहीले झेल षेल छलछाम. गरि अटकायाको रहेछ भन्या जागिर्दार पुग्याका.वेलाको भाउंर हालका भाउंमा. जागीर्दारको जौना भाउमा.कीफायेत हुंछ.उही भाउ वमोजिम भराई. दिनु टल्सीं नपुगि वाली रहन गयाको रहेछ भन्या.जौना वेलामा टल्सिंर टल्सींका मानिस पुग्दछं उसै वेलाका चल्याका भाउंमा.जति सालको वालि रहाको छ.उति सालको. वाली भराई दिनु.

९. मंसिर देषी श्रावण संममा मोहि सित.आफनु वालि लिन जादा मोहिले झेल षेल गरि. वालि दियेन भनी.जागीर्दार कराउन आया मोहिलाई ल्याई रोवकार गर्दा.मोहिले झेल षेल गऱ्याको ठहऱ्यो भन्या.तेस्ता मोहिलाई. थुनी लट्टी पट्टी घर षेतले जागिरदारको वालि भराई.दिनु. उत्तिले पुगेन. भन्या कपाली तमसुक गराई दिनु.घर षेत लट्टी पट्टीले पुगेन र. वरू मेरा वालिमा कट्टा होला एस सित तमसुक गरि माग्दिन.अैन वमोजिम नेल हालि देउ. भन्यो भन्या.नेल हालि

सडकमा पठाई मैन्हा.का ५ रूपैयाका दवरले छुट्टी भया पछी.छाडी दिनु जागीर्दारले.मोहिलाई.माफ गरि छाडी दिंछन्. भन्या पनी. पाउछन्. छाडी दिनु. मोहीलाई वाली नदिया वावत्. नेल हलाया पछि. फेरि उससित. षोजन पाउदैनन्.

१०. अर्काको जगा कमाउन्या मोही रैति कुरियाले आफुले. कमायाका जगाको वुझाउनु पर्न्या वाली. वेलामा लैगी वुझाउनु वुझायेन र.आफना घरमा.रहाका धान वालीमा फागुन मैन्हासंम र गहु वालीमा. साउंन्या संक्रान्तिसंममा. आफना घरमा आगो लागी व्ज्र परि घर विग्री डढ्यो भंन्याले मीन्हा पाउदैन कमाउन्या मोहीका कपाल लाग्छ.उहादेषी उप्रान्त.भाउघट्या पछी. वेचौला भनी टल्सींले मोहीका घर राष्याको वाली.डढ्याको भया.मोहीका कपाल लाग्दैन.जागिर्दार टल्सी.ले मीन्हा दिनु. पर्छ.गाउं घरजाँची डढ्या जतिमिन्हा गराई दिनु.

११. अर्काको गुठि विर्ता रैकर गैह्र जगा कमाउन्या मोही कुरियाले कमायाका जगाको वुझाउनु पर्न्या वाली वुझीलेउ भनी मोही कुरीयाले.भंदा राजकाजमा टाढा गया वाहेक धनी र जार्गिदार दफदरले. वर्ष दिन नाघ्या पछि पनी.वुझी लियाको रहेनछ र.मोहिको घरमा रहाको ठहऱ्यो भन्या. जौन जौन सालको वाली वुझाउनु वुझनु पर्न्या हो.उसै उसै सालको वाली. मोही कुरीयाले.भरि दियो भन्या.वर्ष प्रति मुरी १ को पाथी १ का दर्ले.टल्सी दफदरले मिन्हा दी.वांकी मोहीवाट वुझी लिनु.अघिको भकारि.मास्याको ठहऱ्यो र. पछिको अन्नदिंछु भन्याको रहेछ.भन्या टल्सीं ले मिन्हा दिनु.पर्दैन.अैन वमोजिम मोहीले वुझाउनु पर्छ भराई दिनु.

# बालि बिक्रीको

१. जागीरदार र.अरू कसैले.तिर्जा पुर्जा दोहरो वेच्यो वंधक राष्यो भन्या अगाडी वाला साहुको सदर हुंछ अगाडीवाला साहुलाई.विहोराई दिनु. पछाडीवाला साहुका रूपैया तिर्न सकन्या रहेछ भन्या विगोभराई.विगो तिर्न सकन्या रहेनछ भन्या. कपाली तमसुक लेषाई दि पछील्ला साहुका थैलीका विगा वमोजिम दंड गर्नु. रूपैया नतिऱ्या मैन्हाका ५ रूपैयाका दरले कैद गर्नु.

२. जागीरदारका तिर्जा पुर्जा हरायो. चोरीयो भन्या. आफुले भयो दफदरका पुर्जीले भयो तुरंत एस्तो विहोरा भयो भनि जगामा थुनी.पठाउनु. थुनुवा पुग्यापछि मोहिले हराया चोरीयाका. तिर्जा पुर्जाले वाली दियाको भया. दफदर र जागिर्दार. लाई तेस मोहीले वाली वुझाउनु पर्छ थुनुवा पुग्याको रहेनछ. चोरले लि गयाका तिर्जा पुर्जाले मोहिले वाली दियाको रहेछ भन्या. तिर्जा पुर्जा लि वाली दिन्या मोहिले. दोहोरो तिर्नु पर्दैन. तिर्जाले वाली उठाई लैजान्यालाई. षोजी दफदरिया र जागिर्दारले. आफनु वाली वुझीलिनु.

३. वैसौत्या धोक्र्या ईजारादार ठेकदार.ले किन्याका धान मोहिले थाम्छु.भाउंसित रूपैया लैजाउं भन्यो भन्या. जौन मैन्हामा तिर्जा लि गयाको छ. उसै मैन्हाका षोलामा चल्याका भाउले.रूपैया लि जानु. धोक्र्याले धानमा कर लगाई लिन पाउदैन. कर लगाई लियाको ठहऱ्यो भन्या.लियाका ज्माको दसौद दंड गरि लिनु.मोहिलाई विसौदपर्दैन मोहिले राजीले दियाको. भया षत लाग्दैन. एसै अैन वमोजिम गर्नु.

४. जागीर्दार र जागीर्दारहरूले. आफना आफना षानगीको वाली साटा साट गरि. आफनु तिर्जा पुर्जा अर्कालाई दि अर्काको.आफुले लियाको वाली जगामा. गै मोहि सित लिन जादा.तिर्जा लि वाली उठाउन जान्याले तिर्जा वमोजिमको वाली लिंछु भन्या. पनी भाउ सितका. रूपैया लिंछु भन्या. पनी.उस्को षुस हुंछ मोहिको कर लाग्दैन.वाली साटासाट गर्न्या धोक्रयाका.सरहमा जादैनन्.

५. कंपु पल्टं कंपनि.का जागीरदारको तिर्जा दर्द ठेकमा र धानमा.आफना षुसले भाउ. गरि वेच्याको सदर हुंछ. तिर्जामा लेषीयाको. वाली षोलो पैरो आगो असिना भै घट्याका वालीमा मोहीलाई र जागिरदारलाई. धोक्र्याले नसमाउनु. अगावैजांची वुझी ठहराइ किंनु किनीसक्या पछि. षोलो पैरो आगो असिना लाग्याको छ. भनी धोक्र्याले. मोहिलाई र. जागीरदारलाई पक्र्यो भन्या. जति रूपैया वावत. पक्रयो उति रूपैया धोक्र्या संग जरिवाना गर्नु.

# रैरकम्को

१. पंचसाला तोडन्या पट्टवन्को दस्तुर षान्या.वजिर.रैयत.मार्न्या सर्कार.को रूपैया वर्बाद गराउन्या.गौमास षान्या.निमक हरामी वजीर हो महाकालि पुर्व मेचि पश्चिमका गैह्न मधेस.का जमीन भयो.प्रगंना प्रगंना छुट्याई कन भयो. इजारामा उठाउन्या वजीर. सर्कारमा आउन्या. रूपैया आफु षान्या. इजारादारलाई षुवाउन्या रैतान्को धनमालमा लुट गराउन्या त्यो नीमक हराम वजीर. वा.यो अैन थामी गरोस्तापनी यो अैन मेटि गरोस्तापनी. त्यो नीमक हराम वजीर हो भनी श्री ५ सर्कार.लगायेत भर भारादार उमराव दुनित्रा रैयतले वुझनु भंन्या कौसलको तजविजले. ठहराई भयाको अैन हो.

२. इजारा अमानतका रकंको वंदोवस्त गर्दा आफना मुलुकमा घर द्वार गरि. जहान वच्चा समेत गरी वस्याकामा.मातवर मानीस तजवीज गरि रकम दिनु. आफना मुलुक्मा. घरद्वार जहान वच्चा नभयाका मुगलानाकालाई. ५० हजारका जगामा लाषरूपैया सम्म बढन आया पनी तेस्ता अर्काका मुलुकमा घर वा जहान वच्चा समेत. गरी वस्याका. मुकगलानीत्रालाई. रै.रकम्.केहि नदिनु.कसैले थाहा नपाई.दिएछभन्या.मोहोर. पट्टा षैचि. धुलाई दि रकम् आफना मुलुकमा घरजहान भयाकालाई दिनु.जानी जानी मुगलानीत्रा मानिसलाई. रकम दीदा जतिमा मोहोर पट्टा गरि दीयाको छ. पजनी गर्न्या जोहो. उस वाट सर्कारको जंमा उठाई उसै जंमाका सयकरा ५ रूपैयाका दर्ले जरिवाना गर्नु. रूपैया नतिऱ्या मैन्हाका ५ रूपैयाका दरले. कैद गर्नु.

३. रैकरजागीर.गुठिविर्ता वेषछापमाना चावल गैन्ह जगाका इजारा ठेकको वंदोवस्त हुंदा हवस.वंदोवस्त भया पछि हवस्.जगाका रैतिले.हाम्रो जगा ईजारा ठेक गरि.अर्कालाई नदेउ.उसले कवुल गऱ्या वमोजिमको ज्मा फलाना मारफत.हामी रैति रैतिहरू भै वुझाउला.कदाचित उसले जम्मा हिना मिना पाऱ्यो भन्या पनी ठहऱ्याको जम्मा हाम्रा घर घरानावाट वुझाउला भनी चैत्र मैन्हा सम्ममा. भंन आया. भन्या र.मातवर जमीनी दी मुचुल्का समेत. लेषी दिया भन्या जगा ठेक.इजाराको.वंदोवस्त गरि अर्कालाई दियाको भया पनी. वदर गिर. रैतिहरूका. जिंमा लोकाभार गरि दिनु.

४. जगा पजनी गरि पट्टा कवुलियेत.समेत गरि.सौप्या पछि. ठेक लिन्याले. पनी किस्ता मुहुडा.दियापछी.मिति नपुग्दैन.जगा षोसि षीचोला पारिदियो र. ठेक लिन्याले जगाको चलन. दामकाम गर्न पायेन भन्या. पट्टा वमोजिमका मितिमा. जति मैन्हा जति दिन. वेहोर्न पायाको छैन. इजाफमा दामासहिका भागले पुराना इजारादार.लाई.मिन्हा गराई दि.मिति नपुगी पजनी गर्न्यालाई. जगा लिन्या अघिल्लाले.कवुलियेत वमोजिमको जम्मा चुक्ति गऱ्याको रहेछ भन्या र.हिसावमा.वढता गयाको.रहेछ भन्या.वढता गयाका रूपैयाको दसौदका दरले.व्याज स्मेत भराई दि पुरानाले.मीन्हा पायाका विगा वमोजिम दंड गर्नु. रूपैया नतिऱ्या मैन्हाका ५ रूपैयाका दरले कैद गर्नु.ठेकदार इजारादारका वर्गतले.तहसिल गर्न नसाकी मिति पुग्या पछि जगामा रह्याको वांकी भन्या ठेकदार.इजारादारलाई.मिन्हा हुदैन.वुझाउनु पर्न्या.ठाउं आफुले वुझाई.जगामा रस्त किस्त गरि हाकीम छेउ मुनासिव माफिक.को वल मद्दत.मागी. आफुले उठाई लिनु.

५. जगा जमीन रैरकम् गैह्रका ठेक इजाराको.पजनीगर्दा.कसैले म एति दिंछु भनी कवुल गरि.म्यादको.पुर्जी टसायो अथवा मालिकहरू सित.गै विंतिगऱ्यो पछिवाट जगा लिंन भनी छाड्यो भन्या.तेस्तालाई.इजाफ वढयाको रहेछ भन्या वडयाका ईजाफ वमोजिम.इजाफवढयाको रहेनछ भन्या.२० रूपैया वेकुवी दंड गर्नु. भागी गयो भन्या.म्याद संम पर्षनु.म्याद संममा.आयेन भन्या.जगा वंदोवस्त गरि.जतिमा लाग्छ.पजनी गर्नु एस्ता वेकुफ र भगुवाले वोल्याका ज्माको सदर हुदैन.भगुवालाई. जैल्हे फेला पर्छ पक्रिसोही वमोजिम. दंड गर्नु. नतिऱ्या अैन वमोजिम कैद गर्नु.

६. षुवाका जगाको वाजवि सेर्मा अघि देषि दरि चलिआयाका रकं कलम. ठेक रूपैया तिर्नु पर्न्यामा.जगामा नघटी घट्यो भंन्या र.घर उठ्यो भनी. रूपैया नतिर्न्या वषेडा गर्न्यालाई. जति घट्यो भंछ उति विगो वुझी विगा वमोजिम जरिवाना गर्नु.

७. षारेज -इजारा ठेक कुत लाउन्या.ले.विर्ता वेष छाप जागिर. षुवा गुठि गाउं जीमि जगा गैह्र र.रकम्मस्मेत.को इजारा ठेक लाउंदा.अगावै जति. वढछ. जगा लीन्यालाई. मुषले वढाउन्ज्याल. वढाउनु. जस्लाई. दिनु छ. हानाहानमा जस्ले वढ्यो. आफुले पत्यायाकालाई. लाल मोहर दस्षत पट्टा. चारदाम भै वहालिदिया पछि उसै सालमा. ७ दिन भित्रमा. अर्को व.ढन आयो भन्या. वढन्यालाई दिनु. सात दिन उप्रान्त अरू वढन आया पनि. अघिल्लालाई. षोसन हुदैन.अघिल्लैको सदर हुंछ. अदालत कौसि दफदर.कुमारिचोक् मुलुकी षाना जागिर्दार

गैह्र र. सर्वाक माफी विर्ता छाप वेषफीगठार. मरोट माना चावल्. गुठी गैह्रका. धनीले. अघिल्लै.लाई थामीदिनु. अैन नाघी पजनी गर्न्यालाई. सयकरा १० रूपैया जरिवाना गर्नु.रूपैया नतिऱ्या.मैन्हाका. ५ रूपैयाका दर्ले कैद गर्नु.)

८. महाकालि पूर्व.मेचि पश्चीम मध्येस्.पाहाड र भर मुलुकका.रैरकंको पर्पजनी गर्दा.कौसितोसाषाना.प्रभृति जगा जगाका. कारिंदाहरूले चुल्हो नछुटीयाका र अंश नभै संगवस्याका. वावु छोरा दाज्यू भाईमा. कसैलाई १ जनाको मात्रै नाउं हालि.रैकर.षुवागुठी विर्ता छाप माना चावल.वेष षानी टक सार. गैह्र इजारा अमानत. रंक कलं दिदा र. धन जमानी गैह्र दिंदा. का पट्टा कवुलियत् सवाल.मुचुल्का. जमानी पत्र गैह्र लेषायामा तेस्कोचुल्हो नछुट्टियाका र अंस नभै सग वस्याका वावु छोरा दाज्यू भाई.गैह्र जहान.कोहि आई. त्यो लेषीदियाका. कागजमा हाम्रो नाउ पनी पऱ्याको छैन. एस कुराका. षती उपतिमा हामी सामेल छौन भनी. कराउन आया. भन्या कागजमा नाउ लेषिन्या चाहिको अंसवाट मात्रैलीन पाइन्छ. अरू सामेल नहुन्याका. अंसवाट लिन पाइदैन नलिनु. उसवाट जंमा उठिसकेन भन्या. जगादि कागज लेषाई. लिन्या कारिंदावाट भर्ना गराउनु. चारवर्ण छत्तिसै जात दुनित्रा गैह्रले पनी गुठि विर्ता वेष मरौट माना चावल. षुवा धन जमानीपत्र लेषी दियाकामा चुल्हो न छुट्टीयाका र.अंस नभयाका.अंसीयार.सवैको नाउ पऱ्याको कागजपत्र भयाको मात्रै.सवै सित लिनपाइँछ.नभयया अरूलाई. पक्रन हुदैन.जस्को नाउं कागजमा लेषीयाको छ. षति उपति.उसैकोहुंछ. उसैसित मात्रै लिनु. वावु आमाले.लेषि दियाको भया. छोराले वुझाउनु पर्छ.सवाल पट्टा कवुलियेत्. जमानीपत्र गैह्र. लिन दिनका. कागजपत्रमा लिन्याका दाज्यू भाई वावु छोरा. एका चुल्हामा भात षान्यामा.कसैले मेरो नाउ पनी पऱ्याको छैन. एस कुरामा सामेल पनी छौन भनी.२ मैन्हा भीत्रमा कोहि. भंन आया तिन्ले तिर्नु पर्दैन. २ मैन्हा भीत्र.थाहा पाई जनाउ. दिन नआउन्याले. नाफा नोक्सानमा. सामेल भै तिर्नु पर्छ १९१४ साल मंसीर मैन्हा संम एस्ता कुरा परि आया अघिचल्या वमोजिम गर्नु.वाहा उप्रान्त एसै अैन वमोजिम गरि छिनीदिनु.

९. कसैले सवाल पट्टा कवुलियेत गरि इजारा अमानत लियाका जगामा. मानिस हालि काम लाउदा नाफा नोक्सानको भाग गरि षानु भनी सारा षति उपतिको कवुलियेत. को लेषत भयामा नाफा पनी आफना भाग अनुसार.षानु.नोक्सान पऱ्यामा पनी.आफना भाग अनुसार तिर्नु. दर्माहाको सरषत्. हुन्याले सरषत वमोजिम पाउछ.सरषत छैन. एतिदिउला भंन्या कवुल

पनी छैन.आफनु षर्च षाई.काम.गऱ्याको रहे.छ भन्या.मैन्हाका ३ रूपैयाका दरले. काम गऱ्यासम्मको दर्माहा दिलाईदिनु.सरषत् कवुल केही रहेनछ रकमीको षर्चखाई.काम गऱ्याको रहेछ भन्या.उस्का षुसले दियामात्रै पाउंछ. नदिया कर लाग्दैन एस्ताकुरामा सारा षती उपतिको.लिषत भयाको. रहेनछ. जगामा नाफा भयो र.मैले काम गऱ्याको छ. भाग पाउन्या हुं भन्न आया लिषत नभै भाग पाउदैनस भनी ठोकी दिनु सारा षति उपतिको.लिषत भयाको रहेनछ.जगामा टुटपऱ्यो भनी जगा लिन्याले त र म भै.काम गऱ्याको हुं टुटा पऱ्यो यो टुटा तैले पनी तिर्नु पर्छ भन्यो भन्या.लिषत नभयाकाले.टुटातिर्नु पर्दैन.एस्ता झगरामा.दंड जीताउरी. नगर्नु. दसौद विसौद लि छिनी दिनु.

१०. वेपारि महाजं गैह्रले साजा वेपार गर्दा जति जना गुमस्ता भयाका छन्.सवैले रास हालि वेपार गऱ्याका रहाछन्.भन्या रास हेरि.माग गरी दिनु. एकाको मात्रै रास रहेछ अरू गुमस्ता भै गयाका रहाछन् भन्या साहुवाट नाफा नोक्सानको भाग गरि दियाको रहेछ भन्या र.दर्माहाको कवुल गरि लेषिदियाको रहेछ भन्या लिषत वमोजिम नाफा नोक्सानको भाग पाउंन्यालाई. भाग र दर्माहा.पाउन्यालाई. दर्माह.भराई दिनु साहुको सर्षत.नभयाकाले. नाफाको भाग दर्माहा कवुल गऱ्याको छ भनी समाउन पाउदैन. काम भन्या गऱ्याको रहेछ. एतिदिनु भन्या सर्षत भन्या रहेनछ. भन्या तेस्ता गुमस्तालाई षानदी काम गरायाको भया केहि दिनु पर्दैन षान दियाको रहेनछ भन्या काम गऱ्याका दिनको हिसाव गरि. मैन्हाका ३ रूपैञाका दरले काम गराउन्यावाट दिलाई दिनु. काम भन्या केही गऱ्याको रहेनछ. साहुले सर्षत पनी गरिदियाको रहेनछ. कवुल पनी रहेनछ. म एति पाउंन्याहु भनी उसै समाउन आयाको रहेछ भन्या सरषत नभै अर्कालाई समातन आउन्या झुट्टो ठहर्छ उसले समात्याका.विगा वमोजिम दंड गर्नु.

११. सर्कारीया रूपैयामा अमानतका रूपैया इजाराका रूपैया. जागीरका रूपैया मुलुकका रूपैया जगात भंसार षानी टकका. गैह्र कारिंदा सितका. मुलुक वाकि ढुकटि तहविल दफदर सदर दफदर. कुमारिचोक अदालत ठाना अड्डा गौडा मेगजिन धर्माधिकार.रकमी कारोवारि जंगी मुलुकी. नीजामती गैह्र रूपैया पैसाको काजकाम गर्न्याले.लाषौ रूपैया फलाना कारिंदा.ले षायाको छ भनी. कसैले पोल्यो तेस्मा १ रूपैया साबीत गऱ्यो भन्या. ढेरै पोल्यामा १ रूपैया मात्रै सावित भयो भन्या पनी पोलन्यालाई.षत लाग्दैन.डंड जरिवाना हुदैन. पोल्हाले पोल्याका ज्मामा. १ रूपैया पनी.सावित गर्न सकेन भन्या.पोलन्यालाई.जति पोल्याको छ उसै विगा

वमोजिम.दंड गर्नु रूपैया नतिऱ्या. मैन्हाका ५ रूपैयाका दर्ले. कैद गर्नु पोलाई माग्न्यालाई. केही पर्दैन.

१२. चार अदालतको. सालसालको जम्मा षर्च फारष गर्दा अघिदेषी चलिआया वमोजिम.को दस्तुर रूपैया. ९ मात्रै अदालत इटाचपलि.वाट ली अदालतका मालिकका नाउमा षाल षालको. जुदा जुदै फारषगरि दिनु.जुदा जुदै फारष भया पछि. फरष पिछेको. दस्तुर लाग्छ भनी नलिनु.

१३. श्री ५ सर्कार लगायेत.दुनीञादार कसैले २१ साल श्रावण शुदी. १ रोज देषी उप्रान्त इजारा अमानत्को.रकम दिंदा.कसैलाई तमसुकी रूपैया सापट दीदा. तहविलको. जीम्मा दिंदा. १० हज्जार देषीमाथि षर्च गर्नाको. अषत्यारिको काम दिंदा एस्ता कुरामा सवाल पट्टाकवुलियेत. तमसुक. अक्रार. ज्मानवंदी लेषाउदा १६ वर्ष देषी माथीका वावु छोरा भतिजा नाति. ३ पुस्ताको नाउ लेषी तिनै जनालाई सहिहलाई लिनु. ३ पुस्ता छैन भन्या. १६ बर्ष नाघ्याका. २ पुस्ताको नाउँ लेषाई २ जनाको सहिहलाई लिनु. १६ वर्ष नाघ्याका २ पुस्ता पनि छैन भन्या भाइ भतिजाको नाउँ लेखि उस्को स्मेत् सहि हलाई लिनु.सवाल पट्टामा पनि यहि रितसंग नाउँ हाली दिनु.१६ वर्ष नपुग्याका बालषलाई. सहि हलाई लियाको. तमसुक कवुलियेत अक्रारको सहि हुदैन.यो रित नपुऱ्याई.एकै जनाका नाउंमा र.१६ वर्ष नपुग्याको छोरा.नाति भाई भतिजाका नाउंमा तमसुक अक्रार कवुलियेत सवाल.पट्टा. गरि दिनु. भनी.रूक्कादस्षत्.गरि दियो भन्या.तेस संग वाकिरहाको धन.रूक्का दस्षत. सवाल पट्टा गराई दिन्यावाट लिनु. वावु छोरा नाति भाई.भतिजामा.सहि हालन्या कोहि रहेनछ भन्या. तेस्तालाई. माथि लेषीयाको काम नदिनु सहि हाल्यापछि.वाज्या वावु दाजु भाई.भतिजाको धन संपति पनि.षान लाग्याको वांकी तिर्दीन भन्न पाउदैन. सहि हाल्या पछि वांकी तिर्नु पर्छ.

१४. अडा अडा गौडा गौडामा रहाका र.जगा जगामा असुल तहसिल गर्न गयाका जंगी नीजामति हाकीम. रकमी गैह्रले. सवाल वमोजिम्का तहसिल हुन्या. आम्दानी सर्सलामी.दैदस्तुरात.वा जेरकम.स्मेत नगदि जीनसी.आम्दानी.असुल भयाका दिनकोर.छिन्याका झगडाको.आम्दानी नछिन्याका.झगडाको विगो आम्दानी जांच र अदालतवाट दंड गैह्र तोकियाका.दीनको रोज रोजको नगद जिनसी.आम्दानी.षर्चस्याहा चढाउनु. सो स्याहा वमोजिम. एक अक्षर एक मात्रा फरक नपारि.अर्को प्रतिउतारि. आफनु सहिछाप गरि.नेपालकाले. ३ दिनमा. कौसलमा दाषिल गर्नु. टाढाकाले जाना आउना वाटाका दिन वाहेक ६०।६० दिनमा कौसलमा पठाई दिनु.कौसलियाले.पनि.त्यो कागज आफुसंग राषि तेस्को नकल सारि कुमारिचोक.मा पठाई

दिनु. नेपालकाले. ३ दिन. नघायेर ल्यायो भन्यार. टाढाकाले. जान आउन बाटाका दिन बाहेक. ६० दिन नघायेर ल्यायो भन्या तेस्तालाई. विगो षडा गरि. विगाको दसौद जरिवाना गर्नु.

१५. कुमारिचोकले कौसलवाट पायाका कागज वमोजिम् आम्दानी कसि वहि वुझनु. जुन मितिमा असुल भयाको उस मीतिमा स्याहामा आम्दानी नचह्राई अर्का मितिमा स्याहामा.आम्दानी चह्रायाको रहेछ भन्या.मिति फरक पारि पछि स्याहा चह्रायाका नगत जीनिस्को सयकरा २० दंड गर्नु.

१६. रयतवाट असुल भयाको एकथोक रोज रोजको स्याहा वमोजिम. सहि छाप गरि कौसलमा रपोट् पठायाको एक थोक वहि वुझन्या वेलामा स्याहा हेर्दा भन्या. रयतवाट असुल भया वमोजिम. दुरस्त रहेछ भन्या भुल ठहर्छ. तेस्तालाई षत वात लाग्दैन. रयतवाट एक थोक असुल हुन्या रोज रोजको स्याहा वमोजिम. सहिछाप गरि कौसलमा रपोट् एक थोक पठाउन्या. स्याहा नचह्राउन्या एस्तो गर्‍याको रहेछ भन्या विगा वमोजिम. दंड गरि काम देषी षारेज गर्नु.

१७. सर्कारका गोला गद्दिमा मात्र वेचनु. अरू सित नवेचनु भंन्या. उर्दिभयाको. अलैची गैह्र जिनिसि माल गोला गद्दिमा नलगी अरूलाई वेच्याको ठहर्‍या. विगो जफत गरि किन्या वेचन्या दुवैलाई.सोहि विगाको आधिआधिका दरले दंड गर्नु सर्कारवाट दादनिसमेत लियाका माल मुगलानामा लैगि. वेच्याको रहेछ भन्या. वेचन्यावाट वेच्याका रूपैया लीलाम् गरि विगा वमोजिम दंड स्मेत गर्नु गोला गद्दिमा जान्या वाटो नलगी.चोर वाटो गरि लैग्याको ठहर्‍या.वाटो देषाई दिन्याले. केहि षाई देषायाको भया. षायाको वुझीली उसै वमोजिम केहि नषाई देषायाको भया १० रूपैया दंड गर्नु मुगलानामा वेचन लैगयाको माल जानि जानि घाट तारिदियाको ठहर्‍या. घाट तारिदिन्याले लियाको षेवा जफत गरि सोही विगा वमोजिम् जरिवाना समेत गर्नु.

आम्दानी षर्चमा नगद जिनिस् गैह्र जस्तो माल जुन जात हो उस्को दर नांप तौल गंति ज्मा लिन्या दिन्याको नाउ ठाउं ज्या लेषनु पर्न्या हो लेषीउस्मा वुझाउन्याको र. वुझन्याको सहि छाप साविकको जंमा लेषीयाको हालको कच्चावार लेषीयाका वाकिमा मसित वांकी एति छ भंन्या तहविलदारको सहिछाप पर्‍याको रोज रोजको आम्दानी षर्च एतिकै हो भन्या लेषीयाकामा अडाका हाकिमले वुझी सहि छाप गर्नु भंन्या २२ साल देषीचल्याको जानि जानि रूपैया राषि कवुल गरि काममा लाग्याका आम्दानी षर्चको काम गर्न्या अडावाला गैह्रले

सो रित वमोजिम्को स्याहा कौसल कुमारिचोकमा ल्याउंदा जादाका वाटाका दिनको अंदाज र. कागज पत्र वनाउदाको म्याद एति एतिमा ल्याउल भंन्या कवुल वमोजिम्का दिन भित्रमा ल्यायानन् भन्या सो कवुलका म्याद भित्र कागज ल्याउन्या र नल्याउन्यालाई. हाल चल्याका श्रेस्ता वमोजिम्को कागज वनाउन्या र नवनाउन्यालाई. तपसिल वमोजिम्को नेकनामोदिनाको र. सजाय गर्नाको अैन -----------------------३

१९. कवुल गऱ्याका म्याद भित्र कागज पत्र नल्याउन्या नेपाल षाल्दा भित्रकालाई. पहिले पटक ताकितालाई प्यादा पठाई ल्याई थुनि उस्का कवुल वमोजमको. कागज तयार गर्न लगाई छाडी दिनु.दोश्रा पटक पनी कागज तयार गरेन भन्या. प्यादा पठाई पक्रील्याई नेल ठोकी कागज तयार गर्न लगाई छाडीदिनु. फेरि तेश्रा पटकमा पनी. कागज तयार गरेन भन्या पक्री ल्याई नेल ठोकी कागजपत्र तयार गर्न लगाई काम वाट वर्षास गरि दिनु.

२०. कवुल गऱ्याका म्याद भित्र कागजपत्र नल्याउन्या नेपाल षाल्दा वाहेककालाई. ताकितिको दस्षत पठाउनु. दस्षत पुग्यापछि. चाहिन्या स्याहा आवार्ज्या पठायो भन्या.उस्का कवुल वमोजिम.रित पुग्या नपुग्याको जाची रीत पुग्याको रहेछभन्या.सदर गर्नु चाहीन्या रीत पुग्याको रहेनछ भन्या. एति कुरो पुग्याको रहेछ. एति कुरो पुग्याको रहेनछ भंन्या वेहोरा जनाई.स्याहा आवार्ज्या लेषि पठा भंन्या. ताकितिको अर्को दस्षत गरि पठाई.स्याहा आवार्जा झीकाउनु तेति गर्दा पनि पठायेन भन्या.दोश्रा पटकमा.श्री प्राइम् मिनिष्टरका तजविजले चुक अनुसार आना देषी माथी २० रूपैयासम्मको जरिवाना स्मेत.तोकि अर्को ताकितिको दस्षत गरि पठाई.स्याहा आवार्ज्या झिकाउनु.तेति गर्दा पनि उस्का कवुल वमोजिमको स्याहा आवर्ज्या पठायेन भन्या. सिपाही पठाई. नेल ठोकी ल्याई. कागजपत्र तयार गर्न लगाई कामवाट वर्षास गरि दिनु.

२१. २२ सालका. कवुलीयत् सवाल वमोजिमको सवै रित पुऱ्याई स्याहा आवार्ज्या लेष्याको रहेछ. कवुल गऱ्याका म्याद भित्रमा. सो स्याहा आवार्ज्या ल्याई. कुमारीचोकमा दाषिल गरि वुझ वुझारथ गरि फारषत लिन्या रकमी कामदार लाई कच्चा षोजन्या ठाउराषि दामकाममा घटी वढि नपारि कवुलका म्याद भित्र स्याहा आवार्ज्या दाषिल गरि वही वुझाई. फारषत लीयो.यो अैन सवाल माफिक कत्ति घटी वढि नपारि काम गर्न्या रहेछ भंन्या वेहोरालेषी आफनु पुछ्या छाप्लगाई नेकनामीको रूक्का दस्षत गराई दिनु.

२२. दफदरषाना. श्री कुमारी चोकवाट अव उप्रान्त वहि वुझि फारष दिंदा २२ सालमा भयाका. कवुलियेत सवाल वमोजिम्को स्याहा नवुझि. अर्कैरीतको स्याहा वुझि फारक गऱ्याको ठहऱ्यो

म्याद वमोजिम तीन पटकको ताकिति गरि स्याहा नभ्किकायाको ठहऱ्यो. रपोट् दिनु भन्याकामा. रपो्ट नदियाको ठहऱ्यो. कच्चा षोजन्या ठाउं नराषि मालको दर नाप तौल गंति लिन्या दिन्याको नाउ जात घरमा न. नलेषियाका आम्दानी षर्च घटी वढीपारि लेषायाकामा मिन्हा दियाको ठहऱ्यो भन्या. श्री प्राईम् मिनिष्टरका तजविजले. चुक अनुसार जरिवाना गर्नु.

२३. अडा अडा जगावाट आम्दानी जिम्मा यो हो. तेस मध्ये षर्च यति भयो वांकी एति छ भन्या स्याहा आया पछि फलाना मिति देषी फलाना मितिसम्मको आम्दानी षर्च वांकीको स्याहा हामिले वुभ्किलीयुँ भन्या सनत लेषी कुमारि चोकका हाकिमको पुछऱ्याछाप लगाई ल्यायाकामा कौसलको छाप लगाई रूक्का दस्षतको भर्पाई गराई दिनु. रूक्का दशषतको भरपाई देषाया पछि तेस स्याहामा. पछि अरू कसैले. पक्रन पाउदैनन्. रकमीले पनी वुभ्काउनु. पर्दैन पछि त्यो स्याहा कसैले हेर्नु पऱ्यो भन्या.कुमारि चोकैवाट मागी स्याहा हेर्नु.अर्को उतारि लिनु. कुमारि चोकमा वुभ्काई भर्पाई ली सक्याका स्याहामा तैले दिनु पर्छ भनी रकमीलाई पक्रन्यालाई १० रूपैया जरिवाना गर्नु.

आफना जिम्मारहृयाका तहविलका ज्माको रिपोट् हाल्दा घटी पारि रिपोट् हालन्यालाई दंड सजाय गर्न्या अैन-----------

२४. आफना जिम्मा तहविलमा रहाको र. आफुले वुभ्काउनु पर्न्या कुराको रिपोट हाल्दा वुभ्काउनु पर्न्या ज्माको दसौदसम्म मात्रै फरक पाऱ्याकोरहेछ. जमा तहविल्मै रहेछ भन्या मुषत्यारका तजवीजले १ रूपैया देषी २० रूपैयासम्म जरिवाना गरि कागज सच्याई छाडिदिनु. ज्मा भन्या तहविल्मै रहेछ रिपोट् मा दसौद देषी वढता फरक पारि दियाको ठहऱ्या ज्मा वुभ्कीली जागीर षोसि वदला गरि दिनु. ज्मा पनी तहविल्मा रहेनछ रिपोटमा पनी थोरै देषायेछ भन्या आफुले षानाका लागी ढाट्याको ठहर्छ. तहविल मासन्वाका अैन वमोजिम गर्नु.

७. इजरा लागन्या रकम जगाको अैन सवालको राहा पुऱ्याई यति रूपैया वढी म लिंछु भन्न आउन्यालाई.अैन सवालको राहा पुऱ्याई पुर्जि टासि दिनु ७ दिनका मियाद भित्र वढन आउन्याको सदर हुंछ.अैन सवाल वमोजिमको राहा पुऱ्याई पत्यार पार्न सकेन भन्या ७ दिनको म्याद पुग्याको हो भनी उजूर गर्न पाउदैन अैन सवालको राहा पुऱ्याई.पत्यार पार्न सकन्याको सदर गराई दिनु. अैन सवालको राहा नपुऱ्याई ७ दिनका म्यादका भरले मात्र इजरादिन्या हाकिम लाई जति ज्माको इजरा लायाको छ उसै ज्माको सैकरा १० रूपैयाका दरले जरिवाना गरि इजरा उल्टाई दिनु.

१८. नेपालवाट पजनी हुन्या सर्कारिया रकम गैह्रमा अैन वमोजिम म्यादको पुर्जि टसाउदा अडावालाको छाप लगाई ल्यायाका पुर्जिमा कौसलको स्मेत छाप लगाई नक्कल आफुसित राषि म्यादको पुर्जि टासनु. अड्डावालाको र कौसलको छाप नलगाई पूर्जि टास्याको ठहऱ्यो भन्या र. पुर्जिको म्याद पुग्दाका १ दिन अगाडी मुषत्यार सित जाहेर नगऱ्याको ठहऱ्या तेस पुर्जिको सदर हुदैन. छाप नलगाई मषत्यार सित नजनाई टसायाको सदर हुंदैन भंन्या विहोरा जनाई अर्को पुर्जि टसाई. अैन वमोजिम रकम गैह्र दिनु.

# २२ साल देषी अघिका रकम् वुझाउन्या अैन

वहि झिकाउन्या म्यादको अैन

१. वहि नवुझाई रहाका ढाक्र्या जागीऱ्या रकमी र रकमीका भाई छोरा गैह्रलाई दिन ३५ भित्रमा आफुले वुझाउनु पर्न्या वहि र वुझाउनु सकन्या कारिंदा पठाउछौ तापनी. आफु आउछौ टापनी आउ म्याद भित्रमा आफुले वुझाउनु पर्न्या वहि र.वुझाउनु सकन्या कारिंदा पनि पठायनौ आफुपनी आयनौ भन्या पक्री नेल ठोकी विइज्जत भै आउला भंन्या नेपाल षाल्डा भित्रका रकमीलाई उर्दि दिनु. नेपाल षाल्डा बाहेकका रकमीलाई सोहि वेहोराको रूक्का दस्षत गराई पठाउनु मियाद नाघ्यापछी पनी न आउन्या.ढाक्र्या जागीऱ्या रकमी गैह्र जो सुकि भया पनी पक्रील्याई अैन वमोजिम गरि वहि वुझ्नु.

म्याद भित्र वहि वुझाउन नआउन्या रकमीलाई नेल ठोकि ल्याउनालाई रूक्का दस्षत पठाउन्या अैन-----------

२. साल सालका रकमीहरूमा. आजसम्म कुमारीचोकमा वहि नहालन्यालाई उसका कवुल वमोजिम साल तमान् भया पछि आउना जाना वाटाको अंदाज का दिन र.कागज तयार गर्न के.दिन ३५ को म्याद समेत राषि कुमारिचोकको पुछ्र्या छाप लाग्याको कौसलको पुर्जि पठाउनु सो पुर्जि जादापनीवहिल्यायन भन्या दोश्रा पटकमा मानिस पठाई भया पनी अर्का अडालाई लेषी भया पनी नेल ठोकिल्याउनु भंन्या विहोरको रूक्का दस्षत लेषी कुमारीचोकको र. कौसलको पुछ्न्या छाप लाग्या पछि रूक्का दस्षत गराई रकमी झिकाउनु.

रकमी आई पुग्या पछि आम्दानी षर्च वाकि मध्ये हक वाकिको मंजुरनामा गर्न्या अैन————————————

३. २१ सालसम्मका रकमी कुमारीचोकमा आई पुग्या पछि तैले सवाल सनत अैन प्रमानगी र.जरूरातको काम परि आउदा आटि गऱ्याको समेत आम्दानी षर्च गरि लेषीयाको मैले काम पाया देषी आजसम्मको वुझाउनु पर्न्या कागज र कागजमा लेषीयाको आम्दानी षर्च वाकि एतिकै हो ञाहां देषी घटी वढी कागज पनी छैन.सो वाकि मध्ये उजरात एति हो षुद वाकि एति हो भन्या रकमीको सहीछाप गऱ्याको कागज लि सोहि वमोजिम्. षुद वाकिको मंजुरनामा गराई. आफुले वुझीलीयाको अम्का साल देषी अम्का साल तकको कागज पत्र र वासील वाकीको वाकीमा उजुरात भनी राष्याको एति मंजुरनामा गऱ्याको एति भन्या कागज लेषि र

सोट् हालि सदर भयापछि कुमारी चोकको पुछत्या छाप कौसलको छाप लगाई रकमीलाई रसीद गरिदि नेल पऱ्याको भया नेल काटि मोठ् तहविलमा सोपी दिनु.

रकमीले उजूर गऱ्याका कुरामा कौसलमा रिपोट् हाली म्यादभित्र रूक्का दस्षतली आया मिन्हा दिन्या सनत ल्याउन नसक्या नदिन्या अैन--

४. उजरात भनी रकमीले आफुसित राष्याका वाकीको रसिद दियाको उजरात निकासा गर्नालाई रकमीलाई दिन ३५ को भाषा षावा दिनु. भाषा भित्र कौसलमा रपोट् हाल्नु.कौसलवाट पनी मिन्हा दिनु मुनासिव ठहऱ्याकालाई मुनासिव ठहराञ्यू भनी रिपोट् लेषी मुषत्यार सित जाहेर गर्नु र जवाफ भया वमोजिम गर्नु.भाषा भित्रमा उजरात् मिन्हाको ठेगना गराउन सकेन भन्या र वेमुनासिव नचाहीन्या कुराको उजूरात्. गऱ्याको ठहऱ्यो भन्या.तेस्को समेत मंजुरनामा गराई मोठ् तहविलमा पठाई देउ भंन्या कौसलको पुर्जि समेत गरि.त्यो रकमी कुमारी चोक्मा पठाई दिनु.

वहि नवुझाई मर्न्या रकमीका भाई छोरालाई वहि वुझाउन आउ भंन्या ताकिति गर्न्या अैन --------

६. वही नवुझाइ रहाका रकमी गैह्र मऱ्याका रहाछन्. रकम लिंदा अंसनभै सगवस्याका उनका इ छोरा भतीजा रहाछन् भन्या उनलाई एस्तो अैन भयाको छ यो उर्दी पुग्यका १० मैन्हाभित्रमा आफुले वुझाउनु पर्न्या वहि र वुझाउन नसक्न्या.कारिंदा पनी पठायनौ आफु पनी आयनौ भन्या पक्री नेल ठोकी विइज्जत भै आउला भंन्या नेपाल षालडाभीत्रका रकमीलाई उर्दि दिनु.नेपाल षाल्डा वाहेकका रकमीलाई सोहि वेहोराको रूक्का दस्षत गराई पठाउनु म्याद नाघ्या. पछि पनी नआउन्या ढाक्या जागीऱ्या रकमी गैह्र जो सुकी भया पनी पक्री ल्याई अैन वमोजिम् गरि. वहि वुझनु.

हक वाकीमा मंजूरनामा सहि नआली अडिन्यालाई साधक गर्न्या अैन--

५. रकमीको वही वुझदा सवै परिवंद हक वाकीमा मंजूरनामा सहि नआली अडिन्यालाई साधक गर्न्या अैन- पूजी वाकि ठहऱ्याका कुरामा मंजुरनामा गराउदा अडि सहि नगर्न्या धिगनाहालाई साधक गरि सहि नहालंजी नेल हाली कैद गर्नु.मंजुरनामामा सहि हाल्या पछी नेल षोली मोठ तहवीलमा. सपुर्द गरि दिनु. मोठ तहवीलवाट अैन वमोजिम गर्नु.

वाकि नतिरि मर्न्या रकमीका भाई छोराले वहि पत्र वुझाउन सक्तैनौ वाकी र कर्जातिर्न पनि सक्तैनौ भन्न आउदा गर्न्या अैन--------

७. वहि वुझाई फारष.लिनु पर्न्याकर्जा तिर्नु पर्न्या मानिस कोहि वही नवुझाई वांकी र कर्जा नतिरि मरेछ भन्या तस्को भिन्न नभै एकाघर वस्याका वावु दाज्यू भाइ छोराहरूमा १६ वर्ष नाघ्याकाले मुर्दा नउठाउदैमा र १६ वर्ष मनीकाले मुर्दा नउठाउदैमा हवस् वा मुर्दा उठाई सकी पछीवाट हवस् हामी वही पत्र वुझाउन सक्तौन.कर्जा र वाकी तिर्न पनी सक्तौन.जो भयाको घर षेत जगा जमीन नगत जिनिस लेषि दिंछौ. सर्कार लागोस् भनी नेपालकाले कुमारी चोकमा. टाढाकाले आफना नजीकमा अडा गौडा. अमालमा आई जाहेर गऱ्या.तिनलाई वहि वुझाउनाकोर.वाकि कर्जा तिर्नाको कर लागदैन. उनका एकाघरका जहानैको. हाम्रा जो भयाको धन माल एतिकै हो. दवाया छपायाको छैन भंन्या मुचुल्का लेषाई ली.धनमाल सवै ताजात गरि लि ठाडो फारषत गराई दिनु.दवायाको ठहऱ्या.धन सम्पति दवाई भन्न आउन्या लुच्चो ठहर्छ दवायाको पनी वाकि मध्ये भर्ना गरि लिन पुग्याकामा.अैन वमोजिम कैद गर्नु १६ वर्ष नाघ्याका वावु दाज्यू भाई.छोराहरूले मऱ्याको मूर्दा पोली सक्या पछि भन्न.आयाको ठहऱ्या. धनमाल लुकाई. सर्कार ढाटन आउन्या. फरेवी ठहर्छ तेस्तालाई पक्री वही वुझी रकमको वाकी र.कर्जाको हिसाव.षसो षास गरि मुनासिव माफिक मिन्हा दि रहाको वाकी तिनहरूवाट वुझी फारक गराई दिनु वाकी र सापटी नतिऱ्या अैन वमोजिम कैद गर्नु.

वही नवुझाई भागन्या रकमीका भाई छोरालाई मंजुरनामा गर्न्या अैन–

८. वही वुझाई फारक लिनु पर्न्या मानिस्.कोहि वहि नवुझाई वाकि नतिरि भाग्यो भन्या. त्यो चोर रकमी हो.तेस्ताका भिन्न नभै.संग वस्याका वावु दाज्यू भाई छोरा.हरूले. हाम्रो फलानु भाग्यो तापनि तेस्को वही पनि हामी वुझाउछौ जो ठहऱ्याको वाकि पनी तिर्छौ भन्या अैन सवालका रित वमोजिम वहि वुझी ठहऱ्याको वाकी स्मेत वुझी ली फारक गराई दिनु दंड हुंदैन रकम् लिन्या भाग्या पछि उस्का वावु दाज्यू भाई छोराहरूले हामि तेस्को वहि वुझाउन पनी सक्तौन वाकि पनी तिर्दौन उस्को धन सम्पत्ति पनिषादौन भन्न पाउदैनन् एस्ता चोर रकमीका मानु नछुटीयाका जहान सवैको धन सम्पति लिलाम् गरि वांकी लाग्याका विगो र विगा वमोजिम् जरिवाना वापत् भर्ना गरि लि वढता ठहऱ्या फिर्ता गराई दिनु पुगेन भन्या रकम् लिन्या भाग्या पछि उस्का वावु दाज्यू भाई छोरालाई वांकी र विगो वमोजिमका जरिवाना कैद गर्न हुदैन कपाली तमसुक लेषाई पल्हायामा लिनु भंन्या रस्तकिस्त गराई दिनु. सोहि रीत सित लिनु.

रकम् लिदा सग रहाका वाकी लाग्न लाग्यो भनी वा वाकी लाग्या पछी भिन्न हुन्या भाई छोराले वाकि तिर्दौन भंदा गर्न्या अैन---

९. कसैको वावु दाज्यू भाई छोरा भिन्न नभै संग वस्याका रहाछन्.तिन्मा एकजना ले रकम लिंछु भनी सो रकमको पट्टा स्मेत लीया पछि वांकी लागन्या तौर देषी वा.वाकी लाग्या पछी. एस्का वाकीमा हामीहरू समेत पर्न लाग्युं भनी. छुटि भिन्न भयाका रहाछन् भन्या हामि छुटियाकाले तेस्को वाकी तिर्दौन भनी धन सम्पति षान पाउदैन. रकम् लिदा. मानु नछुटियाका.पछि छुटियाका जहानैका धन सम्पत्तिवाट भर्ना गराई वाकी लिनु.

रकमीले म सित वाकी एति उजरात वाकी एति छ भनी सहि गरि दियाका मा षर्च नगरि उजुर गऱ्याको ठहऱ्यामा दोचंदा लिन्या अैनम्––

१०. मेरा हिसाव एति कै हो भनी लेषी सहिछाप गरि दि सक्याका. कागजवाट जांचवुझ गर्दा र.तयार भयाका ज्मा षर्चवाट षस्याकावाकि रूपैयामा मुलुक वाट असुल गरि सर्कार नवुझाई रकमीका पेटमा रहाका रूपैयाको दोचंदा स्मेत लगाई मंजुरनामा गराई पठाउनु.

रकमीले मंजुर गरि कुमारीचोकवाट पठायाका मंजुरनामाको वाकी तिर्न नसकन्यालाई गर्न्या अैन--- --- --- --- --- ---

११. कुमारी चोकवाट र मुलुकीषानावाट मंजुरनामा भै आयाका रकमीको मोठ् तहविलले र. कौसलले पत्यायाको ज्मानि दिंछ। भन्या वर्ष १ को भाषा षावा दिनु नगत तिर्छु भन्या वुझी लि छाडी दिनु नगत पनी तिर्दैन ज्मानी पनी दिन सकेन भन्या घर षेत जवाहेर. सुनाचादि लहना गहना जगा जमीन कसन् तमन्. नगत जिनिस कमारा कमारी. चौपाया गैह्र जो छ सो लिलाम् गराई भर्ना गराउनु.तेति गर्दा पनि भर्ना भयेन भन्या.एति वाकिको यो असामी वुझि लि रसीद देउ भनी अदालत इटाचपली वुझाई. रसीद लिनु. सो रसीद वमोजिम् मोठ तहवील्लाई मिन्हा दीनु.

फलानाका ज्मानी म भत्रा तेसले तिर्नु सकेन भन्या मेरा घर घरानावाट तिरूंला भनी ज्मानी हुन्यालाई मंजूरनामा गराउन्या अैन--- --- ---

१२. फलानाको धन ज्मानी म भत्रा तेसले तिर्न सकेन भन्या मेरा घर घरानावाट तिरूला भनी ज्मानी भयाको रहेछ भन्या असामीका जायजातवाट नउठी वांकी रहाको. ज्मानीका जाय जातवाट भर्ना गराउनु. दुवैका जायजातवाट पनी भर्ना नभै वाकि रहो भन्या तेस वाकीको रकमी असामीवाट कपाली तमसुक गराई ज्मानी हुन्यालाई सपुर्द गर्नु ज्मानी हुन्यालाई ११।१३ लम्वरका अैन वमोजिम कैद गर्नु. ज्मानी कैद पऱ्या पछि. असामी रकमी कैद पर्दैन.

मंजुरनामाको वाकी तिर्न नसक्ता इटाचपलीमा वुझाउन ल्यायाका असामीलाई नेल ठोकन्या अैन --- --- --- --- --- ---

१३. वही पत्र वुझाई वाकी तिर्नु पर्‍र्या रकमी. असामीलाई कुमारीचोक्वाट वहि वुझदा ठहर्‍याको हकवालीमा र मुल्कीषानावाट मंजुरनामा भै मोठ तहवील मा सपुर्द भया पछि वाकि तिर्न सकेन उसका घर षेत नगत जिनिसवाट पनी भर्ना हुन सकेन र मोठ तहवीलका हाकिम् कारिंदाहरूले. फलाना सित लिनु पर्‍र्या वाकी रूपैया एसवाट नउठता अैन वमोजिम कैद गरि देउं भनी आफनु सहिछाप समेत गर्‍याको. कागज र वाकिवाला. असामी. अदालत इटाचपलीमा वुझाउन आया भन्या. सो कागज वमोजिम् असामी वुझी लि. अैन वमोजिम. मैन्हाका ५ रूपैयाका दरले कट्टि नहुंज्याल कैद गरि झेलषानामा पठाई दि मोठ तहवील्वाट एति रूपैया नतिर्‍या वावत् कैद गरि दिनु भनि ल्यायाको फलानु मानिस् वुझीलि नेल हाली झेलषानामा गयो भंन्या. इटाचपलीको रसिद दिनु. सो वमोजिम्. मोठ तहवीललाई मोजरा होला. कैद भयाका रकमीले तिर्न ल्यायो भन्या. त्यो आम्दानी अदालतको हुंछ. अदालतैका स्याहामा दरि मुल्कीषाना वुझाउनु.

वहि वुझाउनु पर्न्यारकमको वहि पत्र झिकाउन्या म्यादको अैन--- --- ---

१४. अव उप्रान्त कुमारिचोकवाट वहि वुझनालाई जगा जगावाट कागजपत्र झिकाउदा. जाना आउनालाई तप्सील वमोजिम. वाटाका दिन र कागजपत्र तयार गर्नलाई दिन ३५ सम्मको म्याद दिनु सो म्याद भित्र आफुले वुझाउनु पर्न्या वहि कागज पत्र ल्याउना तयार गर्नालाई अैन सवालका रित वमोजिम वहि वुझी फारक गरि दिनु.अथवा दिन ३५ भित्र वुझाउनु पर्न्या कागज तैयार गर्न सकेन भन्या लगात स्याहा आवर्ज्यालि.कुमारिचोक मै आई.तैयार गराउनु सो म्याद भित्रमा वहि पत्र ल्याइ कुमारी चोकमा दाषिल गर्नसकेन भन्या साल तमाम भयाका एति पछि वहि झिकाउनु. भन्या अैन सवाल वमोजिम. ताकिति गरि. वहि पत्र झीकाउनु. तप्सीलमा लेषीया वाहेक अरू अडावाट झिकाउनु पर्‍यो भन्या पनी तप्सीलमा लेषीयाका रित माफिक जान आउन वाटाको अंनाज गरि. म्याद दि वहि पत्र झिकाउनु.

| असामी-- | नेपालवाट जगा जगामा हुलाक जाना | जगा जगावाट नेपालमा भारि स्मेत लि मानिस | कागज तयार गर्ना के अैन वमोजिम का | ज्मादिं |
|---|---|---|---|---|

| | | | | |
|---|---|---|---|---|
| | को दीन-- | आउनाकोदिन-- | म्यादको दिन | |
| वैतडी झुलघाट | ३५--- | ७५--- | ३५--- | १४५ |
| डोटी - | ३०--- | ६५--- | ३५--- | १३० |
| डडेलधुरा | ३२--- | ७०--- | ३५--- | १३७ |
| जुम्ला | २५--- | ४४--- | ३५--- | १०४ |
| सुरषेत | १८ --- | ३८--- | ३५--- | ९१ |
| दैलेख | १६ --- | ३६--- | ३५--- | ८७ |
| सल्ल्याना | १३ --- | ३०--- | ३५--- | ७८ |
| प्युठाना | १० --- | २१--- | ३५--- | ६६ |
| पाल्पा | ८--- | १८ --- | ३५--- | ६१ |
| पर्वत | ८--- | १५ --- | ३५--- | ५८ |
| स्यागजा | ६--- | १३ --- | ३५--- | ५४ |
| पोषरा | ३--- | १० --- | ३५--- | ५० |
| गोर्षा | ३--- | ६--- | ३५--- | ४४ |
| चिसापानी | १--- | २--- | ३५--- | ३८ |
| उपर डाड् चितवन् | ४--- | ७--- | ३५--- | ४६ |
| सिंधुली | ३--- | ६--- | ३५--- | ४४ |
| उदैपुर | ८--- | १६ --- | ३५--- | ५९ |
| माझ किरात | ९--- | १८ --- | ३५--- | ६२ |
| कुनकुटा | १२ --- | २२--- | ३५--- | ६९ |
| इलाम् | १८ --- | ३०--- | ३५--- | ८३ |
| <u>नयां मुलुकी</u> | | | | |
| ब्रह्म देउमंडी | ३०--- | ७०--- | ३५--- | १३५ |
| महाकालीकाठमहल | ३०--- | ५५--- | ३५--- | १२० |
| कंचनपूर | ३०--- | ५५--- | ३५--- | १२० |
| मुहाना नदी | २५--- | ४५--- | ३५--- | १०५ |
| कैलाली कचहरि | २५--- | ४५--- | ३५--- | १०५ |
| नेपाल गंज | २०--- | ३५--- | ३५--- | ९० |

| | | | | |
|---|---|---|---|---|
| वाकी कचहरि | २०--- | ३५--- | ३५--- | ९० |
| रापती काठ कहाल | १८ --- | ३५--- | ३५--- | ८८ |
| वुटवल | | | | |
| तर्फ स्पूराज | १३ --- | २५--- | ३५--- | ७२ |
| तर्फ षजहनी | १२ --- | २४--- | ३५--- | ७१ |
| तर्फ माझषंड | ११ --- | २३--- | ३५--- | ६९ |
| तर्फ पाल्हीनवल | | | | |
| पूर | ११ --- | २३--- | ३५--- | ६९ |
| नारायणी काठमहल | १२ --- | २४--- | ३५--- | ७१ |
| वाणगंगा काठमहल् | १२ --- | २४--- | ३५--- | ७१ |
| ७ जिल्ला | | | | |
| जिल्लै पर्सा | ५--- | ८--- | ३५--- | ४८ |
| जिल्लै वारा | ५--- | ८--- | ३५--- | ४८ |
| तप्पा रौहट | ७--- | १० --- | ३५--- | ५२ |
| प्रगन्ना सर्लाही | ८--- | १२ --- | ३५--- | ५५ |
| जिल्लै महुतरि | १० --- | १५--- | ३५--- | ६० |
| जिल्लै सप्तरि | १५ --- | २२--- | ३५--- | ७२ |
| जिल्लै मोरङ | २५--- | ३०--- | ३५--- | ९० |
| चौतरिया गोला | १७ --- | २६--- | ३५--- | ७८ |
| जिल्ला पर्सा छपक | | | | |
| हीया काठमहल | ५--- | ८--- | ३५--- | ४८ |
| वनचौर गोसवारा | | | | |
| काठ महल | १० --- | १५ --- | ३५--- | ६० |
| कौसिका पछुवारि | | | | |
| काठमहल् | १७ --- | २६--- | ३५--- | ७८ |
| गोसावारा रंगेली | | | | |
| काठमहल् | २५--- | ३०--- | ३५--- | ९० |
| मेचीद्वार | ३०--- | ४५--- | ३९--- | ११० |

# रकम् बंदोबस्त

१. भारदार कामदारले आफुले गऱ्याको काज कामको १ वर्षको कागजपत्र दोश्रा सालमा पनि वहि वुझायेन भन्या.वहि वुझाई फारष नलिंज्याल् जागीर नदिनु.

२. मुषले र चिठी पत्रले जसले काज काम गऱ्याको छ उसले वहि पत्र वुझाउनु पर्दैन.जसका हातले नगत जिनीस. अनाज गैह्र.तर्तहसिल गऱ्याको छ.जसले नगत जीनिस अनाज गैह्र षर्च गऱ्याको छ.उसले वहि वुझाउनु पर्छ उसै सित वहि वुझीली ठहऱ्याको वांकी पनी उसै सित लिनु.फाजिल समेत उसैलाई दिलाई फारष गराई दिनु.

३. अदालत ठाना अमाल.अडा अडाका डिट्ठा विचारि. ढोका गौडाका भारादार. कारिंदा गैह्र सुवा फौजदार कानुगोय चौधरी मुकद्दम् गैह्र इजारादार जिम्मावाल जेठावुढा कटुवाल मिझार गैह्रले नचल्याको रकम्लाई. दुनियाँमा रूपैया. पैसा. तहविल गऱ्या भन्या. जसले दरीचली आया वाहेक वढता नचल्याको तहसिल गरि लियाको छ उसलाई काम देषी षोसिदिनु. वढता तहसिल गऱ्याको रूपैया. कचहरिका वही स्याहामा चढायाको रहेछ भन्या जाहेर भयाका मितिसम्मको वालि षान दिनु स्याहामा चढायाको रहेनछ भन्या दुनित्रालाई विगो भराई दि विगा वमोजिम् दंड गर्नु रूपैया नतिऱ्या मैन्हाका ५ रूपैयाका दरले कैद गर्नु.

४. दुनित्रालाई वढता रकम् कलम्मा टंटा लगाई दुष दिन्या जिम्मा वाल मुषिया ठेकदार.इजारादारलाई जति रकम. कलम वढता लायाको छ उति विगो भराई विगै वमोजिम् दंड गरि.षोसि दिनु दाम काम पुऱ्याउन्या रैतीलाई राजी राषन्या अन्याय विजात्री नगर्न्यालाई ठहराई जगा दिनु.

५. कुट पिट् गाली गोफता कुलाका पानीमा साना तिना कुरा चुक्याको तोफा न पोलाहामा दंड गऱ्याको आफना मितिसम्ममा असुल गर्न सकेन.ठेकदार. अमाली द्वाऱ्या. षोसियो र अर्को अमाली द्वाऱ्या ठेकदारले पायो भन्या पुरानाले असुल नगर्नु. नत्राले पनी असुल नगर्नु. रैतिलाई माफ हुंछ. एस्ता माफ भयाका कलम. अैन नमानि कसैले असुल गऱ्यो भन्या. लियाको विगो रैतीलाई फिर्ता गराई उसै वमोजिम् जरिवाना गरि लिनु.

६. एकसरो भाडा एक सरो ओछ्याउन्या ओढन्याछ.हल गोरू वंचरो षुकुरि. षुर्पाकोदाले भदालो एक सरो छ भन्या.तैस्तालाई कौनै कुराका रकम्. का तहसिलदारले पनी.एक सरो हात हाली बेचाई नलिनु.जगाको वाली पाक्या पछि वालिवाट उठाई लिनु.पुऱ्यायेन भन्या लिनु पर्न्या रूपैयाको. कपाली तमसुक गराई तेसको जगा षोसी अर्कालाई दिनु.एस्तो लिन्यालाई जतिलियाको छ.उसै वमोजिम जरिवाना गर्नु.रूपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु.

७. रैयत प्रजाहरू सित रकमलिदा.अघि देषी दोको वोको गरि तिरि आया वमोजिम लिनु. कुरियाले षेत वारि केहि कमायाको छैन.नगत जिनिस केही छैन. वंद वेपार पनी केहि गर्दैन भन्या तेस्ता रैयतका घर वाट चांद्रयणको १ पैसा मात्रै लिनु.याहा देषी वाहेक अरू गोड धुवा.चुमावन गादि ममारक्.साउनया फागुफारा गैह्र रकम् केहि नलिनु.कसैले लियो भन्या विगो फिर्ता गरि विगा वमोजिम् जरिवाना गर्नु.

८. कसैले इजारा ठेकको वंदोवस्त गरि लियाका.जगामा सुषादहार. वालुवुर्जषस्ति पर्ति मर्कि भयो कुलो विग्र्योषोलो पैरो आगोलाग्यो असिना पऱ्यो.चोरी भयो षोलो तर्दा डुंगा घोपटी डुव्यो रैती भाग्या जगावाट वेस धानी भयो भनी इजारादार ठेकदारले मिन्हा मोजरा माग्या भन्या पट्टा कवुलियेतमा मिन्हा दिनु भनी लेषीयाका कलम्को मिन्हा दिनु.नलेषीयाका कुराको मिन्हा नदिनु ठेकदारले वुझाउनु पर्छ. सर्कारिया रकममा मिन्हा नदिनु. भन्याका कल्मा मिन्हा दिन्या कारिंदावाट मिन्हा दियाको विगो भराई विगा वमोजिम् दंड गर्नु.

९. कसैले अमानतको वंदोवस्त गरि लियाका जगामा.सुषादहार. वालुवुर्ज षस्ति पर्ति मर्कि भयो कुलो विग्र्यो षोलो पैरो आगो लाग्यो असिना पऱ्यो चोरि भयो षोलो तर्दा डुगोघोपटि डुव्यो रैति भाग्या जगावाट वेस धानि भयो र मिन्हा देउ भनी माग्या भन्या कवुलीयेत पट्टा सवाल वमोजिम् मिन्हा दिनु भनी.लेषीयाका. कुराको जगामा वुझि उस जगाका भलामानिसको भुचुल्काली मीन्हा दिनु. नलेष्याका कुराको मिन्हा नदिनु. सर्कारिया रकम्मा मिन्हा नदिनु भन्याका कलम्मा मिन्हा दिन्यालाई. मिन्हा दियाका विगो भराई विगा वमोजिम् मिन्हा दिन्या कारिंदालाई जरिवाना गर्नु.

१०. सदर मुलुकी षानावाट इजारा अमानत्का रकम्दार कारिंदाहरूसंग असुल गर्नु पर्न्या.रूपैत्राको जगा जगावाट ज्मान बंदी कागज झिकाई किस्ता वमोजिम असुल तहसिल गर्नु साल आषिर वासिल वाकि गरि ठहऱ्याको जोछ.वजीर संग जाहेर गरि असुल तहसिल गर्नु माया मोलाहिजामा लागी किस्ता वमोजिम. असुल हुन सकन्या रूपैत्रा आफना गाफिलिले असुल नगऱ्या सदर मुलुकी षानाका.कारिंदालाई मुषत्यारका र. कौसलको तजविजले जरिवाना होला मुलुकी षानामा तहसील भयाका.रूपैत्रा मुलुकी षानाका.कारिन्दा कसैले सापटी दिया भन्या सापट् दिन्यालाई सापट् दियाका रूपैत्रा र तस्को व्याज समेत वुझी लि विगा वमोजिम जरिवाना गर्नु.रूपैत्रा नतिऱ्या अैन वमोजिम कैद गर्नु.

११. कौसि तोसा षाना मुलुकी षाना कुमारी चोकवाट इजारा अमानतका. रकम् दार संग असुल गर्दा र.तनुषाह मोजराको दस्षत गराउदा ११ साल पौष शुदी १३ रोज देषी फाजिल पारि असुल तहसील नगर्नु. दस्षत पनी नगर्नु जसले रकम्दारलाई. वेइजत सकस गरि फाजील पारि असुल गर्ला. दस्षत गराउला तेसलाई फाजिल पऱ्याका रूपैत्राको सैकरा २० रूपैत्राका दरले. जरिवाना गर्नु. एसलाई जरिवाना भया पछी. सकस गरि लिदामा. फाजिल पऱ्याका रूपैत्रा कौसीतोसाषानावाट फिर्ता गरि दिनु.

१२. इजारा अमानतका रकम्दारले ११ साल पौष शुदि ११ रोजका मिति देषी ओढो किस्ता वमोजिम् दिनु. फाजिल पारि नदिनु. फाजिलपारि दस्षत गरायाको रहेछ भन्या मुषत्यारसित विन्तिगर्न आउनु विन्ती नपारीफाजिल दिन्यालाई. कुमारी चोक र अरू मिन्हा हुन्या जगावाट मिन्हा पाउन्या छैनन्.

१३. भर मुलुकका थुम्षुवा गाउका रैति ठेकदार सित वाजवि सेर्मा सिर्तो महसुल साउन्या फागु. दरि चलियाको रकम् कलम्.मिति मितिको साल तमाम् भै सकिया पछि पनी असुल तहसिल गरि लिनु.रैतिले पनी मिति मितिको साल तमाम्मा चुक्ति गरि वुझाउनु जारिदार द्वाऱ्याहरू. षोसीया पछि पनी आफना पालाको वाज्वी वाकी रैति सित असुल गरि लिन पाउंछ रैतिले पनी वुझाउनु पर्छ.

१४. हाड फोरा परि मासिन्या र. ओछ्यानमा पर्न्या गरि कुटियाका जात भात विगार्न्याको नगत जिनिस सुना चादि अनाज जमीन चोऱ्याको षत्मा दंड गऱ्याको जौना द्वाऱ्या ठेकदारका पालामा दंड आम्दानी गऱ्याको हो उ द्वाऱ्या ठेकदार षोसीयाको भया पनी आफुले आम्दानी गऱ्याको पछि असुल तहसिल गरिलिनु पाउछन्.अैन वमोजिम्को दंड जिताउरि तहसील गरि लिनु.अघिल्ला मुषतियारका पालामा भयाको दंड पट्क मुषत्यारि वदलियापछि असुल गरि लिन पाउदैनन्.

१५. षारेज भयो.

१६. रकमको वंदोवस्त गर्दा दामकाम नविगार्न्या मातवर मानिस ठहराई पाउंज्याल धन हुन्या मानिसलाई. रकम् दिनु. धन भयाको मानिस आयेन अरूलाई दिनु पऱ्यो भन्या. धन हुन्या मानिसको जमानि लि. सर्कारको नविग्रन्या. रैयत दुनित्रा नमर्न्या गरि इजारा. अमानतको वंदोवस्त गरि पजनी गर्नु. धन हुन्या मानिस ज्मानि पायेन र धन हुन्याले इजारा ठेक पनी लियेन भन्या. कंगाल लाई दि सर्कारको ज्मा नविगार्नु. सर्कारका तरफवाट अमानतको. तहसिल गर्नालाई मानिस षटाई काम गराउनु. अमानत तहसील गराउदा नोक्सान पऱ्यो भन्या. वजिरलाई र अरू कारींदालाई वात लाग्दैन घर घरानावाट तिर्नु पर्दैन सर्कारकै नोक्सान हुंछ. अमानत पनी राषेनछ धन हुन्या मानिसलाई पनि दियेनछ र ज्मा नउठन्या कंगाल मानिसहरूलाई ठेक इजारा दि ज्मा विग्रन गयो भन्या. पजनी गर्न्या वजिर र. अरू कारिंदामा जो हो उसैवाट सर्कारको र दुनियाको ज्मा उठाई लिनु.

१७. श्री ५ गोर्षा माहाराज वाहेक अरू गैह्र राजाले. गादि ममारष गोडघुवा चुभावन माफ गरि. जगा दियाको रहेछ भन्या.उनको तषत हरिया पछि अघि का राजाहरूले माफ गरिदियाको यो रकम् माफ हुदैन लिनु. तषत गया का राजाले पनी अघि इ रकम माफ गरिदियाको रहेछ. पछि गोर्षा सर्कारवाट पनी लालमोहर गरि इ रकम् माफ गरि थामि वक्स्याको रहेछ भन्या एस्ता जगा पाउन्या र पाउन्याका संतानले भोग गरि आयाको भया पनी. अरूलाई दान् दातव्य दिया. किंन्या वेच्याको रहेछ भन्या पनी माफ भयाको यो रकम् लाग्दैन नलिनु.

१९. श्री ५ सर्कारका मुलुकको अमानत काज काम गर्न्या जगात भन्सारको अमानत काज काम गर्न्या. षानीको अमानत काज काम गर्न्या. लकडीको अमानत काज काम गर्न्या. अरू गैह्र रकमको अमानत काज काम गर्न्या. सर्कारवाट पर्याका मालिकलाई धर्मपत्र गरि मुषले घुस सलामी दिन्या. कागजपत्र गरि सहिछाप गरि एति दिउला भनी लेषी दि हवस वा उसै हवस. सर्कारको नोक्सान पारि आफु किफायत गर्न्या कारिंदा सित मिलि. राजा वजीर लाई थाह नदि. भित्र भित्र गछ पत्र गरि सर्कारको नोक्सान पारि. आफु वेपार चलाउन्या. आफुले तिर्न्या महसुल घटाउन्या रूपैया छुट्गराउन्या जगा छुट्गराउन्या. एस्ता निमिक हरामी जागीर्‍या रहेछ भन्या घुस सलामी दियाको विगो लिलाम् गरि उसै विगा वमोजिम दंड गरि जागिरवाट षारेज गरि दिनु ढाक्र्या रैयत महाजन रहाछन् भन्या.घुस सलामी दियाको विगो लिलाम् गरी. उसै विगा वमोजिम् दंड गर्नु रूपैया नतिर्‍या मैन्हाका ५ रूपैयाका दरले कट्टि नहुंज्याल कैद गर्नु.

२०. रैकर जगा जमीन राज गुठिको अधिऔ कुत तिहाउको वंदोवस्त गर्दा लालमोहर दस्षत सवाल पट्टा थीति गर्दा.षानि टक्सार जगात भन्सार. चौधराई एक हट्टि सुढिमहालको वंदोवस्त गर्दा मध्येसमा चौधरी मुकदम् जिमिदार ग्रैह्रको पजनी गर्दा काठमहल कास् चरार ठिगुरिमहल भुसकट्टा सायेर गोला आफिममहाल सोरामहाल मंडी गैह्रको वंदोवस्त गर्दा काला बंजर को १० साला पंचसाला.पट्टा गर्दा गादि ममारष चुभावन गोडधुवाको रकम लाउदा. इआदी गैह्र नेपाल पाहाड मध्येसको इजारा अमानतको पजनी वंदोवस्त गर्दा. कसैले एति सलामी दिंछु भन्न आयो भन्या जौना रकम मा सलामी भनी दियाको छ. उसै रकमका पट्टा कवुलियतमा चढाई ज्मा वाधि दीनु.रकमीले सलामी दियाको वंदोवस्त गरन्या हाकिम् कारिंदाले केहि नषानु सलामी भनी दियाको. पट्टा कवुलीयतमा नदराई आफुले षायाको ठहर्‍यो भन्या.विगो जफत गरि विगा वमोजिम् जरिवाना गर्नु. रकम् कलम गैह्र दिना लिनाको मन हेर्न लगाई आफना षुसिले.हाकिम जानि कसैले कर नलगाइ नजर भनी दियाको पनी हाकिम कारिंदाहरूले केहि नषानु. स्याहामा दराई सर्कार दाषिल गर्नु. षायाको ठहर्‍या विगो जफत गरि लि विगै वमोजिम जरिवाना गर्नु.

२१. अदालत अदालतमा वसी निसावको काम गर्न्या वहि वुझी फारक दिनाको. काम गर्न्या असुल तहसील गर्न्या. सदर दफदर षानामा वसि जगा जमीन लिन दिनगर्न्या.कौसि तोसाषानामा

वसी किनमेल गर्न्या. तनुषाह गर्न्या जगा. जमीन. इजरा अमालतमा लाउन्या एक हट्टि सुटि महल्को वंदोवस्त गर्न्या.हुकुम्ले इनाम् पात दिन्या. थिति गर्न्या गादिममारष चुमाउन गोडधुवाको वंदोवस्त काज काम गर्न्या गुठी कचहरिमा वसी राज गुठीको काज काम गर्न्या. कंपूपल्टन् कंपनिका दफदरमा वसी उकास पकाशको. जगा जमीन् पजनी गर्न्या. षेत पाषाको अधिञा कुत. तिहाउको पजनी गर्न्या. उकास थुनुवाको जगा लाउन्या. वालि तहसिल गर्न्या कंपूपल्टन कम्पनीका दर्द तनुषाहा गर्न्या दर्दवालिदिन्या. लालमोहर गराउन्या. मुषत्यार पछिका मालिक्का.दस्षत चीठी छाप लाउन्या अडा गौडाका भरभारादार.षानी टक्सार जगात भन्सार गैह्र इजारा अमानतको कामलिन्या. पाहाडका अमाली द्वार्‍या. मुषिया जिम्मावाल.मध्येसको काज काम लिन्या. मुष्या हाकिम् जिल्ला जिल्लाका कर्णेलहरूले. चौधरि मुकदम् जिमिदार गैह्र पजनी गर्दा काठमहल कासचराई ठिगुरिमहाल भूस हट्टा सायेर. गोला अफिममहाल. सोरामहाल. मंडीको पजनी काम काज गर्दा. काला वंजरको पंचसालाको पट्टा गर्दा.जगा जमीनको साध सिमाना लाउदा. गैह्र नेपाल पाहाड मध्येसको काम काज गर्दा. काम काज गर्न्या हाकिम.कारिंदा गैह्रले. घुस सलामी नलिनु. घुस सलामी आफुले लियापछि. स्याहामा चह्रायाको भया पनी. स्याहामा नचढायाको भया पनी.त्यो लियाको घुसै षायाको ठहर्छ विगो जफत गरि उसै विगा वमोजिम दंड गर्नु.

२२. सर्कारवाट सनत सवाल नभै कसैले हट्टी गरि वा हट्टिको तवर गरि रकम हरू उठायेछ. हट्टि गरेछ भन्या तेसले हट्टि लिया देषी उप्रान्त. जति नाफा षायाको ठहर्छ उति नाफाको विगो जफत गरि. उसै विगा वमोजिम दंड गर्नु. रूपैया नतिर्‍या. अैन वमोजिम् कैद गर्नु.

१८. श्री ५ सर्कारका मुलुकको अमानत काज काम गर्न्या षानीको अमानत कामकाज गर्न्या लकडीको अमानत काज काम गर्न्या जगात भन्सारको अमानत काज काम गर्न्या. अरू गैह्र रकमको अमानतको काज काम गर्न्या मालिक भै ढाक्र्या जागिर्‍या महाजन रैयत्सित मिलि मुषले. धर्म गरि हवस् वा कागजपत्र गरि. धर्म गरि सर्कारको घटाउन्या कारिंदाहरू जो हुन्. निमक हराम हुन्. तेस्तालाई. जागीरवाट षारेज गरि दुनिञासित मिलिषायाका रूपैया तेसैवाट षडा गरि ति रूपैञा ली. विगा वमोजिम् जरिवाना गरी जरिवाना समेत ली छाडी दिनु दुनिञा सित मिली षायाका रूपैञा र. जरिवाना को रूपैञा तिरेन भन्या मैन्हाका ५ रूपैञाका दरले कट्टि नहुंज्याल. कैद गर्नु.

२३. रैरकम् हरू लिदा इजाफ बढिहवस वा साविक वमोजिम् हवस २।३ जना मिली पट्टा कवुलियतमा नाउ लेषि साजा भाइ भै.रकम् उठायाको रहेछ पछिवाट केहि दिन कामलाया पछि भाईका विसल्लाहले कसै भाईलाई काम काज गर्न नदि कोहि भाइले मात्रै अघि सरि काम चलायाछन् वा. पट्टा कवुलीयेतमा नाउ लेषीयाका भाईलाई वीचमा षारेज गरि. अर्कैलाई काममा लगायाछन्. भन्या.पट्टा कवुलियतेमा नाउ लेषियाका भाईलाई विसल्लाहले वाहेक गरायाको जति मैन्हा ठहर्छ उति मैन्हाको पट्टा वमोजिम् मिति तक्को हिसाव गरि. उस रकम्को नाफा भयाको भयापनी नोक्सान पऱ्याको भयापनी पट्टा कवुलियतमा लेषीयाका सवै भाईको लेषीया वमोजिम्को भाग लाग्छ नाफा दियेन भनी कराउन आया नाफाको भाग दिलाई दसौद विसौद लिनु. भाइका सल्लाहले सामेल हुन त पनि राजिनामा लेषि छाड्याको भया तेसलाई नाफा नोक्सानको भाग लागदैन न भराउनु.

२४. वहि वुझाउनु पर्न्या काज काम गर्न्या छोटा वडा कसैले पनी ऐनसवालका रूह वमोजिमको. कागजपत्र तैयार गरि वहि वुझाई ठहऱ्याको वाकि समेत वुझाई सक्याको रहेछ मर्मिन्हा हुन्या कुरालाई पनि दफदरषाना. श्री कुमारी चोक्वाट तहकित भै रिपोट् कौसलमा पुग्याको रहेछ भन्या. फारषको लाल मोहर हुनालाई ढिल हुन गयो तापनि रकमीलेवुझायाको ठहर्दैन. कुमारीचोकवाट नसिद्धियाको ठहर्छ एस्ता रकमीलाई जागिर दिनु हुन्छ.

आफुले तहसील गर्न पठायाका मानिसले.दोहोरो पारि वा वढता रकम् लगाई तहसील गऱ्यो भनि कराउन आउँदा मैले काम लायाको तहसील गर्न पठायाको होइन अथवा अघि काम लायाको हो आज काल षारेज भयाको छ. भनी ढाटि कुरा गर्न्यालाई दंड गर्न्या अैन---

२५. जागिरदारका षुवाको र. वेसौन्या धोक्रया गैह्र ठेक इजारा लिन्या. कसैले जगामा तहसील गर्न भनी षटाई पठायाका मानिसले जगामा नचल्याको वढता रकम् लगाई लियेछ. अथवा चुक्ति गर्न्या सित वाकि छ भनी घर पकड गरि दोहोरो पारि लियेछ र. रैति कराउन आउंदा. ति मानिसलाई तैले तहसील गर्न पठायाको हो होइन भनी सोधनी गर्दा मैले तहसील गर्न पठायाको मानिस होइनन्. अथवा अघिकाम लायाको हो आज काल षारेज भयाका छन्. भन्यो

र. वुझदा उसैले पठायाको ठहऱ्यो षारेज भयाको ठहरेन भन्या. आफुले तहसिल गर्न पठायाका मानिसलाई मैले पठायाको होइन षारेज गऱ्याको छ भनी ढाटी कुरो गर्न्यालाई. दोहोरो पारि तहसील गऱ्याको उसले थाहा पायाको ठहरेन भन्या २० रूपैञा. जरिवाना गर्नु. वढता तहसील गऱ्याको. अैन वमोजिम रैतिलाई फिर्ता गराई दिनु. वढता तहसील गर्न्यालाई अैन वमाजिम गर्नु.

मिति पुगी वा मिति नपुग्दै वुझन्याका मनोमानले असुल भयाको र जगा वाकि रहाको जो छ सो वुझी रसीद फारषति गरि दिया पछि फेरि त सित वाकि छ भनी निज रकमीलाई पक्रन्यालाई गर्न्या अैन----

२६. इजारा अमानतका रकममा मिति पुग्या पछि हवस वा मिति न पुग्दै हवस रकम दिन्याले रकमि सित राजिनामा गरि असुल भयाको र मुलुकमा वाकि रहाको मै तहसील गर्छु भनी निज रकमीले असुली र वाकि वुझाई वुझीलि रसीद फारषत गरि दियाका रकम्मा सोहि हाकिम वाट यो वाकि राष्याको तैले तिर्नु पर्छ भनी कर लगायो भनी रकमी कराउन आयो भन्या नीज हाकिम्ले पक्ऱ्याका ज्मा वमोजिम् दंड गर्नु. दंडका रूपैञा नतिऱ्या अैन वमोजिम् कैद गर्नु. जितन्यावाट सैकरा २ रूपैयाका दरले जिताउरि लिनु.

# मिनाहा मोजराको

१. वहि वुझन्या अडामा वसि काज काम गर्न्या कारिंदाले वहि पत्र वुझि मिन्हा मोजरा दिंदा. लालमोहर मुषतियारको दस्षत भै आयाको भया पनि आफना चित्त नवुझ्याका वेमुनासिवका कुरामा मिन्हा मोजरा नदिनु. चित्त नवुझ्याका कुरामा मुषतियार सित गै वेहोरा जाहेर गर्नु. मुषतियार सित विंति नपारि मोहर दस्षत भयाको छ भनि. वेमुनासिवका कुरामा जौना कारिन्दाले मिन्हा मोजरा देला तेस्ता कारिंदालाई मिन्हा दियाका ज्माका सयकरा ५ रूपैञाका दरले जरिवाना गर्नु रूपैञा नतिऱ्या मैन्हाका ५ रूपैञाका दरले कैद गर्नु.

२. रकमदारहरूले इजारा ठेकको वंदोवस्त गरिलियाका जगामा. असिना पऱ्यो सुषा भयो वालुवुर्ज भयो षोलो पैह्रो लाग्यो चोरी भयो षोलामा डुव्यो रैति भाग्या जगामा वेस धानि भयो सर्कारवाट मिति नपुगी पजनी भयो र वाकि रहन गयामा इजारा ठेकदारका घरषेतवाट उठाइ ली वाकि रूपैञा रहन गया रस्त किस्त गरि दिनु संतान पल्हाउदा लिन्या गर्नु.

३. रकम् कलम् वुझाउनु पर्न्या काज काम गर्न्याहरूलाई लाल मोहर मुषत्यारका दस्षत भया वमोजिम्. मुनासिव माफीकको मिन्हा मोजरा दिनु. लाल मोहर दस्षत नभै मोजरा नदिनु. सर्कारको हुकुम र मुषत्यारका प्रमानगी ले दियाको हो भन्यालाई पनी मोजरा नदिनु मऱ्या भाग्याका मानिसलाई प्रमानगी देषाउन्यालाई पनी मोजरा नदिनु.

४. कोहि कारिंदा रकमीहरूले जगा जमीन रकम् कलमको काममा सर्कारको षर षाहि हवस् भनि सवाल दरवंदी भंदा. रकम् कलम् वढता लायछ त्यो वढता लायाका रकम् कलम्को आम्दानी आफुले एक पैसा नषाई स्याहा श्रेस्तामा चह्राई सर्कार दाषिल गरेछ भन्या. आफुले नषाई सर्कारमा दाषिल गऱ्याको हुनाले एस्ता उल्लु कारिंदा रकमीलाई जरिवाना हुदैन सवाल दरवंदी भंदा वढता लगाई ल्यायाको जगा जमीन नगत जो छ जस जसको हो सर्कारमा विन्ति पारि. सनत गराई सर्कारवाट रैतानलाई फिर्ता गरि रैतानको भरपाई लिनु.

५. कोहि कारिंदा रकमीहरूले जगा जमीन रकम् कलम्का काममा सर्कारको षयर षाहि हवस् भनी सवाल दर वंदी भंदा रकम् कलम् वढता लायछ त्यो वढतालायाका रकम् कलम्को

आम्दानी स्याहा श्रेस्तामा चह्राई सर्कार दाषिल गरेछ केहि आफुले षायेछ अथवा सवै आफुले षायेछ भन्या सर्कार दाषिल गऱ्याको सर्कारमा विंति पारि सनत गराई सर्कारवाट र कारिंदा रकमीहरूले षायाको कारिंदा रकमीवाट. रैतानलाई फिर्ता गराई भर्पाई लिनु. कारिन्दा रकमीले स्याहा नगरि सर्कार दाषिल नगरि आफुले जति षायाको छ उसै विगा वमोजिम् कारिंदा रकमीलाई दंड गर्नु.

६. कोहि कारिंदा रकमीहरूले जगा जमीन रकम् कलम्का काममा सवाल दरवंदीमा लेष्या भंदा जानि जानी घुस रोसवत षाई. अथवा मोलाहिजा गरि घटि गरि लि अरू छोडेछ भन्या छोड्याको विगो र विगा वमोजिम् दंड समेत कारिंदा रकमीवाट असुल गरि लिनु. कारिंदा रकमीले जति सालको छोड्याको छ त्यो दाम रैतिले तिर्नु पर्दैन.

७. अदालत ठाना. सर्कारवाट अमानत रहाका जगामा कसुर माफिक दंड जरिवाना जिताउरि पान फुल वक्साउनि दसौद विसौद. ज्यू विक्री गैह्र कलम्मा कैद नगरि थुनिया प्यादा लायामा भागी गयो केहि पत्तालागेन भन्या मोलाहिजामा छोड्याको होइन फलाना ठाउमा थुन्याको हो फलानालाई फलानु सिपाही प्यादालायाको हो भनि वुझन्या ठाउवाट मुचुल्का लेषाई ली सनत गराई वहि वुझन्या कारिंदाहरूले मिन्हा गरि दिनु. घुस रोसवत षाई मोलाहिजाले र अलसि गरि छोड्यामा भाग्याको ठहऱ्यो थुन्यामा. प्यादा लायामा भाग्याको ठहरेन भन्या जसले नथुनि प्यादा नलगाई घुस रोसवत षाई मोलाहिजा गरि अलसी गरि छोड्याको छ उस कारिंदावाट भाग्न्याले तिर्नु पर्न्या विगो र विगा वमोजिम दंड गरि लिनु.

८. कुमारि चोक लगायेत वहि वुझी ज्मा षर्च गरि फारक गरि दिनाको काम गर्न्याहरूले इजारा अमानत गैह्रको वहि वुझदा स्याहामा केहि कलम् लेषियाको देषीयो अवार्ज्या धपोट्हरूमा लेषियाको रहेनछ. अथवा आवार्ज्या धपोट्हरूमा लेषीयाको रहेछ स्याहामा लेषीन गयाको रहेनछ भन्या एउटा कागजमा लेषीया पछि चोरीषानाका लागी नलेष्याको ठहर्दैन. गाफिल ठहर्छ सच्याउन पर्न्या कागजमा सच्याई ज्माषर्च फारक गरि दिनु एस्ता भुलचुक पऱ्याकामा दंड जरिवाना पनी हुदैन.

९. श्री ५ सर्कारवाट कसैलाई इनाम वक्स भयाको हवस. अघि दुनित्रा रैतिवाट तरतहसील भयाको पछि केही वेहोराले नलिनु फिर्ता दिनु भंन्या भयाको नगत जीनिस गैह्र दुनित्रालाई फिर्ता दिउला भनी आफुले जिम्मा लि वुझिलियाको माल. जसलाई फिर्ता दिनु पर्न्या हो. उ भयाका ठाउ पुग्या पछि वा. उस सित भेट भया पछि दिन ३५ सम्ममा दुनित्रा रैतिलाई नदि आफुले राष्यको ठहऱ्या आफुले षानाका लागी राष्याको ठहर्छ विगा जसलाई दिनु पर्छ दिलाई विगा वमोजिम दंड गर्नु. पाउन्यावाट दसौद लिनु. रूपैत्रा नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

# वाकि नतिर्न्या

१. पूर्व पश्चिम अडा अडा र काठमाडौंका भारादार कामदारले अमानतका रकम् कलम्का रूपैया पैसा दर्वारमा वुझाउनु पर्न्या कुरामा वुझाउन ल्यायाका रूपैयाको. जगावाट जिनिसी उठ्याको रहेछ भन्या मुचल्का लेखाइ लि त्यो जिनिसी जौना मोलमा आयाको हो सोही मोलमा लि ल्याउन्यालाई मोजरा दिनु.त्यो माल जनरल कर्णेल. कपर्दार काजी षजांची सर्दार सुवा डिट्ठा राषि उसैमा लिलाम् गरि. जो ठहरियाका रूपैया दर्वारवाट वुझिलिनु. जगामा दरि चली आयाका मोल भंदा वढता लेषउन्या र. जगावाट नउठ्याको जिनिसी जगावाट उठ्याको हो भनी ढाटी ल्याउन्यालाई कायैल गराई जगामा उठ्याका मोलमा जति नाफा गरि लायाको छ तसै नाफा वमोजिम् दंड गर्नु जगामा नगत उठ्याकामा जिनिसी षरिद गरि ल्याई जिनिसी उठ्याको हो भनी ल्याउन्यालाई नगत भराई उसै विगा वमोजिम् दंड गर्नु रूपैंञा दियेन भन्या मैन्हाका ५ रूपैंञाका दरले कैद गर्नु.

२. मुलुकमा गाउका रैतानवाट ठेकदार गुमस्ताहरूसंग उठाई. आफु लिन्या वाकि जगामा छ भनी सर्कार ढाटन्या. चोर इजारादार ठेकदारहरूलाई ढाट्याका रूपैंञा भर्ना गराई विगा वमोजिम् जरिवाना गर्नु. रूपैया तिरेन भन्या विगा र जरिवानाका रूपैंञामा मैन्हाका ५ रूपैंञाका दरले कैद गर्नु

३. षारेज भयो.

४. जगावाट वेसधानी भै वाकि लाग्याकालाई सध्या वमोजिम्को रूपैंञा वुझी लिन सध्याको वाकि तहसील गरि ल्या भनी वर्ष दिनको भाषा दिनु ताहासम्म पनि रूपैंञा दिन सकेन भन्या. तेस्तो ठेकदार तहसीदार गैह्र जोहो उसलाई मैन्हाका ५ रूपैंञाका दरले कैद गर्नु वाकि लाग्याका रूपैंञाको म्याद पुग्यापछि छाडि दिनु

# झारा षेताला

१. विर्ता सुनागुठि छाप रैकर षेत पाषामा मोहि कुरीयाले. लेषत पत्र गरि षेताला भरिया दिन्या गऱ्याको रहेछ भन्या तेस्तालाई षतवात लागदैन. कवोल लेष पत्र नभयाकालाई कर लगाई षेताला भरिया लियेछ र कोहि कराउन आयो भन्या रोजको १० पैसाका हिसावले मजुरी दिलाई सोही वमोजिम् दंड गर्नु कवुल वमोजिम् मोहिले दियेन भन्या षोसि दिनु.

२. अमाली रकमीहरूले आफना काज निमित्त रैतिलाई गुहारि लि काम मा नलाउनु अमाली जागिरदार रकमीले गाउ सहर षुवामा जादा. कर लगाई मेजमानी नषानु रैति प्रजाले पनी नदिनु. ज्याला मजुरि कवुल गऱ्याको दियन् र जवरजस्ति सित गुहारि भनी काम लगायो केहि दियेन भनी रैति कराउन आयो र सावित ठहऱ्यो भन्या मंजुर कवोल गऱ्याकालाई. कवुल वमोजिम् जवर जस्ति गुहारि लिन्यालाई रोजको ४ आना मंजुरीलाई सोही वमोजिम् जरिवाना गर्नु.

३. दरिचली आयाका राज काजका झारा वाहेक जागिरदार अमानत इजरादार ठेकदार फौजदार. चौधरि कानुगोइ मुषिया रकमी गैह्र कामदारले आफना निमित्त र पुर्व पश्चिम जान्या जनरल कर्णेल. चौतरिया काजी सर्दार. भारादार गुरूप्रोहित छोटा वडाका निमित्त वेगारि झारा वेठिं नलगाउनु वेमुनासिव गरि रैति दुनित्रालाई झारा वेठि वेगारि लगाई कराउन आया भन्या रोजको जना १ के चार आनाका दरले ज्याला मजुरी दिलाई दिनु दिलाया वमोजिम् जरिवाना गर्नु.

४. आफना षुवा गाउका मानिसहरूलाई भरिया तुल्याई काहि लैजानु पऱ्यो भन्या जति दिन लाग्छ हीसाव गरि साज विहान षान र रोजको दस पैसा मंजुरिदि लै जानु मजुरी पाइन भनी कराउन आया एसै हिसावले दिलाई दि वीगा वमोजिम् दंड गर्नु.

# दर्द दर्माहा

१. कंपूपल्टन् कम्पनी जंगी निजामति गैह्र जागीरदारहरू.का तिर्जा पुर्जा दर्द दर्माहा वाली दिंदा थुनुवा गर्नु पर्न्या वालीलीई थुनुवाको कागज समेत. निजामतिको वाली वाडन्या पगरि कामदारहरूलाई दिनु अघिवाट तिर्जा पुर्जा वाली दर्माहा दियो वाली वाडि सक्या पछि थुनुवा दियो भन्या त्यो थुनुवा वाली दफदरीया गैह्र वाली दिन्या कारिंदाले वुझाउनु पर्छ जसले थुनुवा नदि वाली दियाको छ उसैवाट वालीको विगो भराई विगै वमोजिम् दंड गर्नु. अघि तिर्जा पुर्जा वाली दर्माह लिदा थुनुवा स्मेत लियाको रहेछ वाली थुनुवा नगरि वाली दिन्या कामदार तैनाथ पाउन्या भारादार पलटनीत्रा पगरी हुँदा गैह्रबाट थुनुवा वालीको विगा भराई विगा वमोजिम् डंड गर्नु रूपैत्रा नतिऱ्या मैन्हाका ५ रूपैत्राका दरले कैद गर्नु.

२. कंपूका दफदर षानाका कारिंदाले तिर्जा पुर्जा दर्द दिंदा पल्टनका कप्तान लेफटेन इन्सायेन् सुवेदार. ज्मादार हुद्दालाई राषि दिनु. पल्टन्. कप्तान लेफटेन् इन्सायेन. सुवेदारहरू सामेल छैनं भन्या ई तिन पगरि. मध्य १ पगरि र हुद्दा. ज्मादारलाई राषि दिनु. नराषि दर्द तिर्जा पुर्जा दिन्या कारिंदालाई विगा वमोजिम दंड गर्नु.

३. कंपूपल्टन कंपनी गैह्रका दफदपरीया सुवा षरिदार मेजर पल्टनीत्राहरूलाई प्रमानगीका दस्षत वमोजिम्. सरसापटी दिंदा जसलाई सापटी दिनु छ उहि भयाको पल्टंका कप्तान. लेफटेन् सुवेदार उसै पट्टीका ज्मादार हुद्दा षलासी पिपा लाजिमा छ भन्या उसैका कोत्या डिट्ठा कोत्याका नाउको तमसुक लेषाई ली सापटी दिनु तमसुक नलेषाई नदिनु. तिर्जा पुर्जा दर्द दिंदा पनी सोहि माफिक् पगरिहरूलाई राषी उनैका जिम्मा गरि दिनु एति नगरि उसै दियो भन्या उर्दि नाघि दियाको ठहर्छ विगा वमोजिम् तिर्जा पुर्जा दर्द दिन्या दफदरियालाई जरिवाना गर्नु.

४. कंपूका दफदरषानावाट तिर्जा पुर्जा दर्द वाडि पल्टनका कप्तान्. लेफटेन इनसायेन्. सुवेदार ज्यमादार हुद्दाले पनी वाडि सक्या पछि केहि तकसीर भै. वालि थुनुवा भयो भन्या जगामा रहाको वाली थुनी असुल गरि ल्याउनु तिर्जा पुर्जा दर्द पाई जागिरदारले जगामा असुल गरि

षाई. सक्या पछि वात लागी थुनियाको वाली जगामा वुझदा पनी वाकि ठहरेन भन्या दफदर षानाका कारिंदा र पल्टन्का पगरि. ज्मादार हुद्दा मोहिले तिर्नु पर्दैन.

साउन्या संक्रान्ति पछि दर्शन गरि अर्को साउन्या संक्रान्तिमात्र पायेन विच मा मर्‍यो भन्या तेस्ताले वाली पाउनाको हिसाव्---

६. वैसाषमा मर्न्याले षानगीमा तीन षंडको एक षंड पाउछ जेठमा मर्न्याले षानगीमा चार षंडको २ षंड पाउछ. असारमा मर्न्याले षानगीमा तिन षंडको २ षंड पाउछ मैन्हावारि दर्माह षान्याले सर्षत पट्टा वमोजिम् को पाउंछ.

६. टाढा गौडाको कंपूपल्टन कंपनी छ वदला दिन. श्री पंचमीसम्म पुगेन भन्या पुरानीयाले गहुको वाली पाउछ. श्री पंचमी अगावै दर्शन गर्‍याको हो भनी नत्राले झगडा गर्न पाउदैन.

८. श्री पंचमी अघि षोसियाको छ तानावाना वुझायाको छैन पछिवाट तानावाना वुझाया पनि तेसले गहुको वाली पाउदैन. त्यो वाली श्री पंचमी अघि दर्शन गरि ठेकियाकाले पाउछ.

७. श्री पंचमी अघि दर्शन गर्‍याकोछ. तेसलाई षानगी श्री पंचमी पछि षोसिन्याको षानगी ठेकिन गयो भन्या षोसिन्याले गहुको वाली पाउंछ.

९. श्री पंचमीका दिनसम्म नषोसि तानावाना वाधि रहन्याले गहुको वाली पाउंछ.

१०. साउन्या संक्रान्ति देषी अघी दर्शन गर्न्याले संक्रान्ति पछि षोसियो भन्या पुरो वाली पाउछ.

११. साउन्या संक्रान्ति देषी पछि दर्शन गर्‍याको जागीर. श्री पंचमीका दिन वसंत नसुनि षोसियो भन्या तेसले वाली केही पाउदैन.

# जागीरदारका वहाली वर्षासी

१. कंपूपल्टन कम्पनीका पगरि आफिसरका तानावाना. घोडा साज समेत. षोसिन्या पगरीले. आफनो घोडा साज सराजाम् चुस्ता श्री मिनिष्टकम्यांडर इनचिफवाट फर्मायसी गरि वनायाको माल जो छ. त्यो माल षानगी पाउन्या आफिसर पगरीले लिनुक्या मोलमा लियो. कति माल विग्न्यो कति दुवलायो. त्यो तजविज गरि मोल घटाई षोसीन्यालाई दिनु. षोसीन्या ढाक्रयाले त्यो माल असवाफ जस्ताको तस्तो राष्याको छ विग्न्याको र घोडा दुवलायाको पनि छैन तैयारि छ भन्या जौना मोल मा लियोथ्यो. सो मोलमा लिनु दिनु.

२. षोसिन्याले त्यो माल असवाप घोडा अघि आफुले लिंदा भंदा. वेस गरि वनायाको छ घोडा पनी पोसि तयार गरि राष्याको रहेछ भन्या. उसै पल्टनका पगरि आफिसरले मोल वढाई दिया वमोजिम लिनु दिनु वढी जान्या र सन्र्या पगरिले म दिन्न मैलाई चाहिछ भन्या कर लाग्दैन नहुन्याले भाई सरह अर्कै षोजनु.

# वालिगाजी साहु तिराउन्या

१. जागीरदारका वालीमा सर्कारको. दर्शनभेट कर्जा तैनाथ पाउन्याहरूवाट लियाके. सापट्टी सर्कारिया रकम् तहसीलको वाकी आफुलाई लाग्याको सर्कारमा आउन्या. दंड जिताउरि वाहेक अरू वाहिडा साहुका कर्जा सापट्टिमा जागीरदारको वाली थुनि कसैले नतिराउनु. वाहिडा साहु वावत्मा जागिरको वाली थुनितिराउन्या कारिंदालाई उसले तिर्नु पर्न्यै रूपैञा रहेछन् भन्या पनी तिरायका रूपैया जसलाई. दियाको हो. उसै सित षोजी ले भनी जागिरदारको वाली कारिंदावाट भराई दसौद लिनु तिराई दिन्या कारिंदालाई विगा वमोजिम् दंड गर्नु रूपैया नतिऱ्या मैन्हाका ५ रूपैयाका दरले कैद गर्नु.

२. जागीरदार सिपाहि गैह्रका साहु इछ्याई लिन्या. सुवेदार ज्मादार हुद्दालाई विगा वमोजिम् जरिवाना गर्नु जागिरदार सिपाहि गैह्रको र. साहु का मनोमान सित पगरि हुद्दा राषि इछ्याई दियाको रहेछ भन्या जरिवाना पर्दैन.

३. अडा अडामा साल वसाल कंपूपल्टन् कम्पनी तैनाथ पाई जान्या भारादार दफदरिया र नीज पल्टन्का पगरि निज पट्टिका ज्मादार हुद्दा स्मेतले जागिरदार लाई सापट्टि दिंदा कच्चिको पक्कि गरि पक्किको डेडी वाधि हिसाव गरि लिंदा रहाछन्. अव उप्रान्त सापटी दिंदा. जौनजातका रूपैया सापटी दियाको छ. सोहि जातका रूपैयाका सयकरा. ११ को हिसाव गरि रूपैया लिनु रूपैञा तिर्न सकेन जागिरमा कट्टा गर्नु पऱ्यो भन्या. उसै ठाउको जागीरदारका मनोमान संग भाउ वाधि कट्टागरी लिनु. यो वंदेज नाघी वढता व्याज् र भाउमा वेवाजवी पारि जौना भारादारले लेला. तेस्ता भारादारवाट वढता लियाको विगो भराई विगै वमोजिम् डंड गर्नु रूपैया नतिऱ्या मैन्हाका ५ रूपैञाका दरले कैद गर्नु.

# साहु रिणीको

१. साहुका वावु छोरा दाज्यू भाईहरू साछि भयाको तमसुक कीर्त्या ठहर्छ. जगा कवुलियेत लिन्या र. असामीका वावु र १६ वर्ष माथिका छोरा साछी राषि तमसुक इजारा ज्यामीका लेषौट् साछि गऱ्याको रहेछ भन्या तेस्ताका साहुले वावु छोरा दुवै सित लिन पाउछ. साछि वस्यो सहि हाल्यो पछि साहु पनी तिर्दैन अंस पनि षान्न भनी सुष पाउदैन. छोराको नाउ पट्टा तमसुक कवुलियेतमा लेषियाको पनि रहेनछ. वावुको धन सम्पति षान्न रीन कर्जा पनी तिर्दैन भन्यो भन्या. तेस्तालाई पक्रन पाइदैन.

२. कोहि मानिस मर्न लाग्यो. उस्को सुनाचादि नगत जिनिसी. जवाहेर कसन् तमन्. घर षेत कमारा कमारि चौपाया गैह्र केहि कुरो मलाई लेषीदियाको छ भनी कसैले समाउन आयो भन्या पत्र पात्र हेर्दा साछि लेषक साछि स्मेत लेषीयाको रहेछ भन्या. असामी मर्न्या वेलामा. साहुहरू सामेल भया पनी नभया पनी. पत्र पात्रका रूहले तिर्नु पर्छ भराई दिनु भराई दियाका थैलीको दसौद बिसौद लिनु.

३. असामी मर्न्या वेलासम्ममा पनी फलानाको एति षायाको छ भनी कसैलाई सुनायाको छैन. घरका जहान गाउल्या छिम्याकि भला मानिसहरू कसैले पनि एसले. फलानाको एति षायाको छ भन्या. थाहा पायाको छैन. साहुले पनी असामी ज्यूदो छंज्याल् केहि भन्याको छैन. भन्या तेस्ता साहुलाई मऱ्याका भाई छोरा स्वास्नीले लाषौ देषी तृणसम्म कति पनी तिर्नु पर्दैन नतिराउनु मुषले मात्र भन्यछ भन्या वेमुनासिवका कुरामा पक्रन्या साहुलाई समात्याको ज्माका सैकरा १० रूपैया डंड गर्नु जाल साज गरि कित्र्या तमसुक गरि समाउन आयाको ठहऱ्यो भन्या उसै तमसुकका विगा वमोजिम दंड गर्नु.

४. वावु आमा दाज्यूले कर्जा षायाको र कारोवार गऱ्याको रहेछ तमसुक हुन नपाई वावु आमा दाज्यू मऱ्या छन्. लिदा दिंदाका साछि गुहाई रहाछन् भन्या उस्का घरका जान्कार र अदालत ठाना अमाल साछि राषि तमसुक गराई दिनु. एस्ता रित सित. १६ वर्ष देषी तल दुद षान्या वालष सम्मको तमसुक गराई दियाको सदर ठहर्छ रूपैया लिन पाउछन्.

५. कोहि साहु रिणीको तमसुकी वेतमसुकी वहि षाता लीन दिन कारोवार गर्‍याका कुरामा. साहु रिणि वसी हिसाव गरि तमसुक फारि छुट्टी गरि सक्याका कुरामा एक जना १६ वर्ष नपुग्याको सानु रहेछ सानु चाहिको उमेर पक्का भया पछि मेरो चित्त वुझ्दैन भनी. उजूर गर्‍यो भन्या फेरि हिसाव गरि चित्त वुझाई दिनु. दुवै जनाको १६ वर्ष नाघ्याको पक्का उमेर भयाको रहेछ तेस्तामा एकजानाले उजूर गर्‍यो भन्या हिसाव छिन्याका ६ मैन्हा भित्र उजुर गर्‍यो भन्या फेरी हिसाव वुझीदिनु ६ महिना पछि भन्न आयो भन्या. उजुर गर्न पाउदैन अघि हिसाव किताव गरि कागत च्याति भयाको सदर हुंछ.

६. श्री ५ सर्कार लगायेत दुनिञादार गैह्र कसैले तमसुक लेषी वा उसै दि असामीले आफना जीयले षायाका. रीन कर्जामा असामीको धन रहेछ भन्या तिराई दिनु धन रहेनछ घर षेत जगा जमीन कसन् तमन् चौपाया गैह्र रहेछ भन्या उसै वाट तिराई दिनु. त्यो पनि रहेनछ भन्या रस्त किस्त को वेहारा वधाई कागज गराई दिनु भरायाका धनको साहुवाट दसौद असामी वाट विसौद लिनु कर्जा भनि दियाका धनमा साहुले. असामीलाई कैद गराउनु पाउदैन. अडा अदालत ठाना अमालवाट कैद नगर्नु.

७. आफना श्री ५ सर्कारवाट वक्सयाका वा अरू राजाहरूले दियाका कुस विर्ता पाउन्याले थामन नसकी २।३ जना सित वंधक राष्याको रहेछ वा फार्छा गरि दियाको रहेछ र जगा लिन्याहरूको झगडा पर्‍यो भन्या सर्कारवाट लियाको भया पनि अरू दुनिञाले लियाको भया पनि ९ मैन्हाका म्यादका अैन वमोजिम् जस्को ठहर्छ उसको सदर गराई दिनु.

८. आफना श्री ५ सर्कारवाट वक्स्याका वा अरू राजाहरूले दियाका कुश विर्ता वाहेक अरू विर्ता वेष मरौट् फिकटार छाप ज्यूनि माना चावलका धनीले २।३ जना सित वंधक राष्याको रहेछ वा. फाछ्र्या गरि दियाको रहेछ र जगा लिन्याहरूको झगडा पर्‍यो भन्या दुनिञा दुनिञाको झगडा भया ९ मैन्हाका म्यादका अैन वमोजिम जस्को ठहर्छ उसैको सदर गराई दिनु सर्कारवाट वंधक वा फाछ्र्या गरि लियाको रहेछ भन्या. अरूका भंदा पछि लियाको भया पनि झगडा नपर्दै सर्कारवाट कर्जा वापतमा भोग दृष्टि फाछ्र्या गरि लेषीलियाको रहेछ भन्या सर्कारवाट कर्जा वापतमा भोग दृष्टि फार्छर्या गरि लेषीलीयाको रहेछ भन्या सर्कारवाट लियाको सदर हुंछ ९ मैन्हाका म्यादका अैनले पाउन्या भया पनी एस्ता वक्स फिर्ता गैह्र

सर्कारवाट लियाका जगा अघिल्लाले लिन पाउदैनन् झगडा पऱ्या पछि यो जगा अरू साहुलाई दिन्न. सर्कारका कर्जा वावतमा लेषीदिंछु भनी असामीले भन्या पनि सर्कारवाट लिन हुदैन ९ मैन्हाका म्यादका अैन वमोजिम् जुन साहुको ठहर्छ उसैलाई वेहोराई दिनु.

९. आफना छोरि वहिनी नातीनिहरूलाई उन्का घर तर्फवाट दियाका गहना भाडा वर्तन गैह्र माईति कसैले मासिवेचिषाई दियाको रहेछ भन्या त्यो अर्का सित पोइल गै मरि भन्या पनी माईतिले मासिषान पाउदैनन्. लोगन्याका विवाहीता पट्टिका दाइयादारको हुंछ माइतिले मासिषायाको ठहऱ्या विगो भराई विगाको आधि दंड गर्नु. गहना किन्यालाई कपाली तमसुक गराई दिनु गहना फिर्ता पाउन्यावाट दसौद लिनु.

११. षारेज भयो.

१२. सर्कारिया लिन दिन रैरकम वाकि गैह्रमा हवस् दुनिञाकालिन दिन कारोवारक. मुद्दामा हवस् तिर्नु पर्न्या नगद दिन नसकि मेरा जगा जमीन दिंछु भनेछ र अडा अदालत अमालवाट र श्रेस्तावाट जगा दिलाउनु पऱ्यो भन्या जौना जातका रूपैञा तिर्नु पर्न्या हो उसै जातका रूपैञाको पहाडका षेतको सयकरा ६ रूपैञा नेपालका षेतको सैकरा ४ रूपैञा. मध्येसका जगाको सयकरा ६ रूपैञाका दरले उठति हुन्या गरि दिनु लिनु गराई दिनु. लिन्या दिन्या दुवैका मनोमानले दिया लियाको भया जौन सुकि दरमा लिया दियाको भया पनि सदर हुंछ.

१३. साहु असामीका लिन दिन गर्दा तमसुक भै कर्जा लिया दियामा असामीले व्याज नतिरि १० वर्ष पुग्याको भया थैलिको दोवर मात्र भराउनु. वढता लिन पाउदैन. रूपैया कर्जा लियाका मिति देषी व्याज पाक्या पछि व्याज भंदा असामीले साहुलाई बढता रूपैञा भर्ना दियाको रहेछ भन्या. तमसुक वमोजिमका रूपैञाको दसौद व्याजसम्म कट्टा गराई दि वढता ठहऱ्याका रूपैञा साउमा कटाई दिनु. व्याज भंदा घटी रूपैया दियाको भया व्याजमा मात्र कट्टा गर्नु साउमा कट्टा हुदैन. साउलाई चाहिन्या व्याज र. साउ मध्ये केहि रूपैञा दियाको रहेछ केहि वाकि रहन गयाको रहेछ र रूपैञा तिर्न नसकि १० वर्ष नाघ्याको रहेछ भन्या. साउमा जति वाकि रहाको छ उति रूपैयाको मात्र दोवर भराउनु ज्मा साउको दावेर पाउदैन अ ं नको १० वर्ष नाघ्याको रहेछ भन्या तेवर भराउनु वढता पाउदैन.

१४. असामीले तिर्न नसकि वाकिरहाका व्याजको व्याज षान्या गरि तमसुक नगर्नु मतसुक गराई कसैले व्याज षायेछ वा कागजमात्र लेषायेछ भन्या जति रूपैञाको व्याजको तमसुक गराई व्याजको व्याज षाया लेषायाको ठहर्छ उति रूपैञा असामीले तिर्नु पर्न्या रूपैञामा कट्टा गराई उसै विगा वमोजिम साहुलाई डंड गर्नु रूपैञा नतिऱ्या अैन वमोजिम कैद गर्नु.

१५. तमसुक लेषीयाको षाता वही स्याहामात्र लेषीलिन दिन कारोवार गऱ्याका वेतमसुकी धनमा लिन दिन गर्न्या दुवै जनाका वहीषातास्याहा कागजपत्र हेरी साउको पनि व्याजको पनि दोह्रोरै चढता फिर्ता हिसाव गरि लिनु दिनु गराई छिनि दिनु

१०. आफना छोरि वहिनी नातिनीहरूलाई उन्का. घर तर्फवाट दियाका गहना भाडा वर्तन् गैह्न माइति कसैले मासि वेचिषाई दियाछन् भन्या. छोरिको सलाह लि मास्याको वेच्याको रहेछ भन्या दसौद लि माईतिवाट भराई दिनु. डंड. पर्दैन.गहना गैह्न माल माईतिवाट निस्केन भन्या हिसाव गरि नगत रूपैया भराई दिनु त्यो माल माईतिवाट किन्यालाई. केही पर्दैन. छोरिको सल्लाह नली. जवरजस्ती गरि आफुले मास्या उठायाको रहेछ भन्या माईतिवाट गहना भराई दि पाउन्यावाट दसौद विसौद लिनु विगाको आधि दंड गर्नु माईतिवाट किन्यालाई कपाली तमसुक गराई दिनु.

# साहु तिर्नाको

१. अदाल ठाना अमाल वाट सर्कारिया वाकि रकम्को वाकि जागीर दारका वालीको वाकि टं ल्सी वोटिको वाली मास्याको वाकि अर्काको घर पोलीदियाको विगो चोरिको विगो साहुको थैली भराउनु पर्दा एति ७ कलम् मा अंशवंदा गरि नछुटियाका एका घर वस्याका भाई छोराको अंस पर सर्दैन सवैका ज्मा धनवाट असुल गरि भर्ना गराई दिनु.

२. वावुको अंश पनी षान्न साहु लायाका पनि तिर्दैन भनी छोराले छोड्यो भन्या वावुको सम्पति जो भयाको साहुले लिनु वावुको संपति षान्न भन्या छोरालाई वावुका साहुले समाउन पाउदैनन् जो भयाको धन साहुलाई दामासाही गराई अदालत ठाना अमालवाट फारक गराई दिनु भराई दियाका रूपैञाको दसौद लिनु.

३. आमा वावुका विसल्लाहले छोराले रिन कर्जा लायाको साहुले छोराका आर्जन कमाईमा लिनु आमा वावुका धन संपतिमा आमा वावुले उनका षुसीले तिरि दिया मात्रै. साहुले लिनु तिरि दियानन् भन्या. आमावावुको ज्यू छंज्याल् लिन पाउदैनन्.

४. संग वस्याका छोराले केहि विजात्री गरी तकसीर गऱ्यो भन्या वावुले तिरि दिनु. वावुले तिरि दिन्न कैद गरि देउ भन्या मैन्हाका ५ रूपैञाका दरले कैद गरि दिनु सर्वस्व जान्या तक्सीर गऱ्यो भन्या पनि छोराकै अैनवमोजिमको अंस मात्रै सर्वस्व हुंछ.

५. कसैले तलाई नाफाको भाग एति दिउला भन्याकवोल गरि कागज लेषी साहुको रास कर्जा ली वेपार गरेछ भन्या एति नाफा तिरौला भन्या कागज वमोजिम् साउ र नाफा लिन पाउछ अदालत ठाना अमालवाट भराई दिनु. नाफाको कवोल रहेनछ व्याजको कवोल रहेछ भन्या सयकरा १० रूपैयादेषी वढता पाउदैन.

६. कसैले सयकरा यति मुरि अन्न तिरूला भंन्याकवोल गरि कागज लेषी साहु सग रूपैया कर्जा लियाको रहेछ तिर्न्या वेलामा साहु असामीको झगडा भै अदालत ठाना अमालमा कराउन आया भन्या कवोल गरि लेष्याको कागज छ ता पनी सयकरा १० रूपैयाका हिसावले व्याज भराई दिनु कवुलियेत वमोजिम् अन्न र विक्रीका भावले रूपैया पाउदैन.

# दाईजो पेवाले साहु तिर्नाको

१. दाइजोले पोइ र. पोइका जहानहरू कमारा कमारि पालीयाका रहाछन् भन्या त्यो दाइजो पोइका साहुले लिन र. पोइका षतमा सर्कारवाट हर्न पाइदैन.

२. सासु ससुरा देवर जेठाज्यू र सौता लोग्न्याले वाहिर राष्याका अरू स्वास्नि हरू कोहि रहानछन्. लोग्न्या र दाइजो हुन्या स्वास्नि रहाछन् उनलाई पाल्दा र उसै स्वास्नी तिरका छोरा परिवारलाई पाल्दा लाग्याको रीन रहेछ भन्या त्यो रीन स्वास्नीका दाइजा स्मेतले पनि साहु तिर्नु पर्छ. एका घरमा वस्याका सासु ससुरा देवर जेठाज्यू र सौताहरू रहाछन् भन्या स्वास्निका दाईजावाट लोग्न्याले साहु तिराउन पाउदैन. लोग्न्याले राज षत गऱ्याको भया पनि ज्मानि पस्ता रकम् लिदा जुवाषेल्दाको वाकि कर्जा लाग्याको भया पनि लोगन्याका षतमा स्वास्निको दाईजो जादैन. जौन स्वास्निको दाइजो हो उसैलाई थामि दिनु.

३. स्वास्निलाई ज्यूनि ज्येठ्याक नदिनु दियाको रहेछ भन्या पनि तेसले साहु पनि तिर्नु पर्छ. सौता सौतामा फलानीले ज्यूनि ज्येठयाक पाई. मैले केहि पायाको छैन भनी. कराउन आया सवै सौतालाई अैन वमोजिम् वाडी दिनु २।३ स्वास्निमा एवटी स्वास्नीलाई मात्रै दियाको ज्यूनि जेठ्याक पेवा सदर हुदैन अदालत अमालवाट छिनियाका झगडाको कचहरिवाट दसौद लिनु.

४. अघि रीन लाग्याको छ पछि स्वास्निलाई ज्यूनि जेठ्याक् लेषीदियो भन्या कर्जा लाग्याको नतिरि. लेखिदियाको ज्यूनी जेठ्याक् सदर ठहर्दैन. साहु तिर्नु पर्छ साहुलाई तिराई दिनु.

५. कसैका स्वास्निहरूले दातव्य गरि छोरि जुवाञी गैह्र कसैलाई दिंछु भनी साहु नतिरि दातव्य गर्न लाग्या भन्या साहु वुझाई आफनु अंस उठायाको मात्र सदर हुंछ साहु नवुझाई उठायाको दातव्य कच्चा ठहर्छ.

# साहु असामीको

१. साहु टल्सीं अमाली रकमी जिम्मा वालले आफुले लिनु पर्न्या धनमालमा असामी मोही रैतिका घर वाट हात हालि ल्याउदा आफना ज्मा भंदा घटीको माल ल्यायाको रहेछ भन्या ल्याउदामा गाउँका पंचराषि मोल गरि ल्यायाको भया नपुग्याको पछि लिन पाउछ हिसाव वमोजिम् लिनु. असामी मोही रैतिका हातले पनी दियाको रहेनछ गाउका तेसर पनि राषेनछ मोल तौल पनी केही नगरि जवरजस्ति गरि हात. हालि लियाको रहेछ भन्या आफुले असामी मोहि रैतीका घरवाट हातहाली लिया पछि जम्मा नपुग्याको भया पनि. फेरि मेरो वाकि लिनुछ भनि समाउन पाउदैन.

२. साहु टल्सीं अमाली रकमी जिम्मावालले असामी मोहि रैतिका घरवाट आफुले हातहालि माल ल्याउँदा आफुले लिनु पर्न्या ज्मा भंदा दसौद व्याज सम्म वढता ल्यायाको रहेछ भन्या षत लाग्दैन. फिराद गर्न आयो भन्या हिसाव भंदा. वढता ल्यायाको फिर्ता गराई दिनु. ज्मा र दसौद व्याज देखी वढता हात हालि ल्यायाको रहेछ भन्या वढता लियाको मालको व्याज समेत असामी मोहि रैतिलाई विगो भराई दि. भराई दियाका विगाको तेसै साहुवाट दसौद विसौद लिनु. असामी मोहि रैतिलाई केहि पर्दैन.

३. साहु टल्सीं रकमी अमालीले जिम्मावाल, आफ्ना लिनाकर्जा वाली वावत्मा किस्ता भाषा वोल पुग्या पछि असामी मोही रैतिले दियन् र. असामी मोहिका घर वाट केही माल हात हालिल्याउदा पंचकिर्ति मोल गरी पंचतेसर राषी आफुले लिनु पर्न्या ज्मा सम्म ल्यायाको रहेछ भन्या साहु टल्सीं लाई खत लाग्दैन मोही रैति असामीले. माल फर्काउछौ. भन्या ३५ दिन भित्रमा रूपैया तिर्न आया आफनु माल फिर्तागरि लिन पाउछ ३५ दिन नाघ्या पछि फर्काउन पाउदैनन्.

४. मोहि टल्सीं गैह्रका लिन दिनका झगरामा मोहिले रूपैया तिरि अडियो भन्या उस्का घरका धनवाट भराई दिनु उस्का घरवाट धनतिरि रूपैया पुगेन भन्या टल्सींले मैन्हाका ५ रूपैयाका दरले म्याद वमोजिम् कट्टा गरि दिंछु एश्लाई कैद गरि देउ भन्यो भन्या टल्सींको राजीनामा

लेषाई लि कैद गरि दिनु म्याद पुग्या पछि छाडी दिनु. म्यादमा हलाया पछि मेरो लिनु छ भनि टल्सींले फेरि समाउन पाउदैन.

५. कसै साहुले तर्तमसुक जगा जमीन गैह्रका कुरामा अर्काका सधवा विधवा स्वास्नीलाई ल्याई आफना घरमा थुन्यो भन्या अदालत ठाना अमालवाट थुनियाकि असामि स्वास्निवाट दसौद लि तमसुक फराई दिनु. एस्ता साहुको थैली भूसिंछ एस्ता स्वास्नि असामीले रूपैया दियानन् र. प्यादा लाउनु पऱ्यो भन्या असामीका घरैमा स्वास्नि मानिस प्यादा पठाई छेक थुनगरि आफना रूपैया. उठाई लिनपाउछ लिनु रूपैया दिन्न भनी कराउन आया अदालत थाना अमालवाट वुझी हक तिर्नु पर्न्या ठहऱ्या भरर्या दिनु रूपैया नतिर्नु पर्न्या ठहऱ्या साहुलाई ढोकी दिनु धन तिर्जू पर्न्या रहेछ तिर्न सकिन भन्या रस्त किस्त भाषा तमसुक गराई छोडी दिनु.

६. असामीले रूपैया तिरेन भनी साहुले फिराद गर्न आयो भन्या धन हुन्या असामीसंग जस्तो लियाको हो तस्तो भराई दिनु. रूपैया निस्केन भन्या घर षेत जगा जागिर नगद जीनीस चौपाया कमारा कमारी गैह्र जो उठ्याको भराई दिनु. एति केहि पनि असामीको नभया साहुवाट रस्तकिस्त गराई. दिनु साहुले रस्तकिस्त गरि दियेन भन्या आफनाजियले साहु लायाको भया पनी दामासहि गराई दिनु. आफना जियले लायाका रिनमा साहुलेरस्त किस्त गरि दिंछु भन्यो भन्या दामासहि गरि देउ भनी असामीले करायो तपनि एस्ताको दामा सहि हुदैन.

७. कसैले अर्काका कमारा कमारिलाई रिनलाई रिन सापटी दियाको रहेछ ति कमारा कमारिलाई छेकि थुनी धनिको काम अट्काउन हुदैन जैल्है कमारा कमारिले रूपैया तिऱ्यो उहिले लिनु छेक थुन गरि धनिको काम अट्कायो भन्या जति दिन अट्कायाको छ तेस साहुवाट धनीलाई दिनको चार आना निम्याक् भराई कमारा कमारि धनीलाई सौपाईदिनु निम्याक भरायाका विगा वमोजिम् जरिवाना गर्नु.

८. कसैका कमारा कमारिको धन षसम्ले मालिषाई दियो र कमारा कमारि कराउन आया भन्या कमारा कमारिको धन जवर जस्ति गरि. षान पाउदैनन् षसम्ले षाई दियाको विगो र दसौदका हिसावले ठहऱ्याको व्याज स्मेत षसम्वाट झिकी कमारा कमारिलाई भराई दिनु

कमारा कमारि मरि अपुतालि पऱ्यो भन्या त्यो अपुताली अदालत ठाना अमालले पाउदैन षसम्ले पाउंछ.

९. साहु असामीका तमसुकी वेतमसुकी सरसापटि वहिपत्रको लेषौट् गैह्र का लिन दिनका झगरामा १६ वर्ष देषी ओढोसंमा व्याज वट्टो दिंदै रहाको पछि व्याज अट्क्याको रहेछ भन्या त्यो लिन दिन सच्चा ठहर्छ हिसाव वमोजिम् साहुलाई भराई दिनु १६ वर्ष देषी ओढो व्याज तिऱ्याको रहेनछ भन्या र वावु वाज्याहरूका पालाको कारोवार रहेछ साहुले तर्तमसुक वहिपत्र लि समाउन आयो भन्या कारोवार जांन्या साछि गुहाई ज्यूदा रहाछन् उन्लाई ल्याई वकाउदा ठहऱ्यो भन्या पनि भराई दिनु १६ वर्षदेषी ओढो व्याज षायाको रहेनछ वावु वाज्याले गऱ्याको कारोवार लिन दिन छोरा नातिले सुन्याजान्यको पनी रहेनछ लिदा दिंदाका साछि गुहाई पनि कोहि रहेनछन् मऱ्या भाग्याका साछि देषायो भन्या साहु झुट्ठा ठहर्छ रूपैया तिर्नु पर्दैन जति रूपैया समयाको छ तेस्ता झुट्ठा साहुवाट समात्याका ज्माको दसौद लिनु. रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु. पोलाई माग्न्या असामीवाट २॥ रूपैया सलामी लि जिता पत्र गरि छाडी दिनु पांच रूपैया देषी घटी पोल्याको भय = आना लि जीतापत्र गरि दिनु.

१०. आपस्मा देसिमा लिन दिन कारोवारको झगरा पऱ्यो भन्या जति रूपैया भर्नु भराउनु गरिछिनियो उति रूपैयाको दसौद विसौद लिनु दंड जिताउरि नलिनु.

११. महाजनि वहि षाताका कारोवारमा जस्जस्को कारोवार भयाकोछ उन्हेरू दुवै ज्यूदा रहाछन् भन्या दुवै का कागजपत्र हेरि झगरा छिनि दिनु. कारोवार गर्न्या मऱ्या छन् छोराहरूलाई मेरो एति लिनु छ भनि समाउन आयो दोहरा वहिषाता र कारोवार जाँन्या मानिस साछि रहाछन् भन्या ठहऱ्याको भराई दिनु दोहरा वहिषाता पनि रहानछन् कारोबार जांन्या मानिस पनि रहान छन् भन्या त्यो साहु झुट्ठा ठहर्छ तिर्नु पदैन तेस्ता साहुलाई सयकरा २ ॥ रूपैंयाका दरले जरिवाना गर्नु.

१२. अैनले जार हांन हुन्यासम्मका स्वास्नि र ल्याईता स्वास्निहरुसंग पोइ र १६ वर्ष संमका छोरालाई नजनाई कसैले नगद जिनिसि जवाहेर चौपाया कमारा कमारी तर तमसुक लेखि दि रूपैया सापट् दियाको रहेछ वा. किनिलियाको रहेछ भन्या तेस्ता साहुलाई पोइको र छोराका

कमाइले तिर्नु पर्दैन तेहि स्वास्निका दाईजा पेवाले साहु तिराउनु स्वास्नीले वेच्याको र. सापटि लियाको सदर हुदैन. दाइजा पेवाले साहु तिराउदा पुगेन भन्या स्वास्नि कैदमा पर्दैनन्.

१३. आफना अैनले जार हांन हुन्या संमका स्वास्निहरूलाई आफुलाई र १६ वर्ष सम्मका छोरालाई नसुनाई विचमा स्वास्निसंग एकान्त वसि अर्काले रूपैया सरसापटि दियाको देष्यो र जार हान्यो भन्या करणि गऱ्याको हवस वा नगऱ्याको हवस एकांत वस्याकै वेलामा हान्याको हुनाले तेसलाई षत वात लाग्दैन.

१४. कसैका स्वास्नि वुहारि छोरिले वेच्या उठायाकामा घरका मालिकले एस्ले दिया लियाको मंजुर छ भनि षत् गरि दियाको रहेछ भन्या तेस्ताको लिन दिन गऱ्याको सदर हुंछ.

१५. साहु गैन्हले आफुले कर्जा दियाको धन नदिन्या असामीलाई धर पकर गर्दा नालमा नहालनु चर्पिमा नथु ं नु. नेल ठिगुरा चमौट् पनि नहालनु वाध छाद पनि नगर्नु अन्न पानि षान पिन दि चाकरि गराई कट्टि गराउछ ता पनि कोठा छीडिमा तालचा लगाई वा उसै थुनि धन उठाई लिन पाउछ षत लाग्दैन.

१६. आफुले अर्कालाई रिनकर्जा दियाको कुरो हिसाब किताव गरि असामीवाट वुझि लि तमसुक कागज पत्र फारि सक्या पछि उसै कुराको अर्को कित्र्या तमसुक कागज पत्र गरि मेरो यति वाँकि छ भनी असामीलाई वा असामिका छोरा परियार. दाज्यू भाईलाई पक्रन्या वा असामीवाट अर्को कागज लेषाई लि रूपैयामा तगादा गर्न्या लाई जति ज्मा समात्याको छ उसै विगा वमोजिम् दंड गर्नु. असामिलाई सयकरा १ रूपैया लि जिता पत्र गरि छाडिदिनु.

१७. कसैका साहु ढेरै रहाछन् तेस्मा. एका साहुले पक्रि थुनि राष्याको रहेछ तेस्तैमा अर्का साहुले वा अरू कसैले तेसै असामिलाई पक्रि लै गयेछ र. पछि वाट पक्रि लै जान्या साहुका घरमा त्यो असामि मऱ्याको ठहऱ्यो भन्या अर्काले थुन्याकालाई जवर जस्ति गरि पक्रि लैजान्यालाई भारि दंड गर्नु मर्न्या असामीले तिर्नु पर्न्या रूपैयामा पछि वाट पक्रिलै जान्या साहुले तिर्नु पर्दैन.

१८. कसैका साहु ढेरै रहाछन्. एउटा साहुले पक्रि लैगी थुनि राष्याको रहेछ र उस्ले थुन्याका थाउबाट अर्का साहुले झिकि लैगी थुन्याको रिन नतिरि उस ठाउंवाट पनि भागी गयाको ठहऱ्या जस्का घरवाट भाग्याको छ उस साहुलाई भारि दंड गर्नु.अरू साहुको थैलि तेस साहुले तिर्नु पर्दैन अर्काले थुन्याका ठाउंवाट पक्रि ल्याई आफ्नु ज्माउठाई लि असामी भगाई दियाको ठहऱ्या अघि थुंन्या साहुको ज्मा स्मेत तेहि भगाउन्याले तिर्नु पर्छ. तेसैवाट भराईदसौद विसौद लिनु.

१९. कसैका साहु धेरै रहाछन् र. अघिवाट एका साहुले लैगी थुन्याको उस ठाउवाट भागी विदाभै वा उसै निस्कि दुलफिर गर्न लाग्याको रहेछ र. अर्का साहुले पक्रि लै गयेछ पछिल्लाले पक्रदा अघिवाट पक्रन्या साहुका मानिस प्यादा पनि कोहि रहेनछन् भन्या. अघिवाट पक्रन्याले मैले पक्र्याको भंन पाउदैन पछिवाट पक्रन्याले अैन वमोजिम् आफनु धन उठाई लिन पाउछ.

२०. कसैका साहु ढेरै रहाछन् र. तेस्मा एका साहुले पक्री थुनि राष्याका असामिलाई. अर्का कसैले जवर जस्ति गरि उश्ले थुन्याका ठाउवाट झिकिलैगयाको रहेछ. र त्यो असामि मरेछ वा भागेछ भन्या त्यो लैगयाका दिन ७ भित्रमा भन्न आयाको भया अैन वमोजिम् निसाफ गरि दिनु. आफुले थुन्याको असामी अर्काले पक्री लै गया पछि उसवेलामा कराउन नआई मऱ्या भाग्याको थाहा पाई ७ दिन देषी पछि कराउन आयाको ठहऱ्यो भन्या तेस्को कुरा न सुँनु.

२१. लंवर षारेज्

भिन्न नहुदै एकाघर संग छदा लाग्या कारिन मा भाई भिन्न भया पछि साहुले पक्रदा गर्न्या कुराको अैन--

२२. संग वस्ना भाईमा एका भाईले आफना नाउको तमसुक गरि वाउसै सापट् लि घर षर्च काजकाम गऱ्याको रहेछ पछि भाई भिन्न भै अंस गर्दा अरु भाईहरूका फाट् मा साहुपर्न गयेछ भन्या फलाना साहुका यति फलाना भाईलाइ पऱ्याको छ उसै सितलेउभनि कारोवार गर्न्या भाईले फाट् वताई दियो भन्या उस लाई दियाको होतपनि जुन भाईका फाट्मा पऱ्याको छ

उस असामी तिर्न सक्न्या भया पनि नसकन्या भया पनि साहुले उसै भाई सित लिनु पर्छ तेरा नाउंको तमसुक छ तलाई दियाको तैसित मात्रै लिंछु भन्न पाउदैन.

२३. लिन दिन कारोवारमा फलाना सित मेरो लिनु एति छ भनी आफुले लिनु पर्न्या भंदा वढताको ज्मा समाई पक्राइ ल्यायेछ रोवकार हुदा उसले पक्रयाको सवै तिर्नु पर्न्या ठहरेन थोरै वहुत मात्रै तिर्नु पर्न्या ठहऱ्यो भन्या पत्र पात्रका रूहले हक तिर्नु पर्न्या ठहऱ्याका रूपैया भराई.भराया का धनको अैन वमोजिम् दसौद विसौद जोहो लिनु थोरै लिनु पर्न्या मा तहकित नगरि वढता लीनु छ भनि पक्राउन्या झुट्टा साहु लाई वढता पक्रायाका ज्माको सयकरा १० रूपैयाका दरले दंड गर्नु.रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

साहुले लिनु पर्न्या ज्मामा असामिलाई केहिमाफ दि केहि लिदा साहुवाट साहुले लियाका ज्माको मात्र असामीवाट माफ् पायाका ज्माको पनि तिऱ्याका ज्माको पनि दसौद विसौद वक्सौनि जोहो दिनु भंन्या अैन--- --- --- --- --- --- --- ---

२४. लिन दिनकारोवारका कुरामा २ थर झगरिया वाझि अदालत ठाना अडा गौडा अमाल कचहरि श्रेस्तामा कराउन आया र वुझ्दा लिन दिन गऱ्याको कायेम भयो साहुले केहि माफ गरि दियेछ भन्या माफ गरि दिया जति ज्माको माफ दिन्या वाट दसौद वक्सौनि केहि नलिनु. साहुले पायाका ज्माको मात्र दसौद वक्सैनि लिनु. माफ पाउन्या असामीवाट माफ पायाका रूपैयाको पनी भरायाका रूपैयाको पनि विसौद वक्सौनि जोहो लि झगरा छिनिदिनु.

# धितो समाउन्याको

१. साहुले रूपैयाहरू कर्जा दिदा ज्यू जमीन् धितो लेषी कर्जा दियो असामीले व्याज वुझाउन सकेन र. केहि वर्षको व्याज रहाको थियो असामिले व्याज तिर्न सकिन लेषि दियाको जग्गा ज्यू जो छ उसैको चलन गर भनी अघिको व्याज स्मेतको ज्मा गरि साहुलाई भोग लेषीदि चलन गऱ्याको रहेछ भन्या त्यो निषन्न आउदा कागज वमोजिम्का ज्मा रूपैया वुझिलि जगा ज्यू छाडी दिनु.

२. साहुले कर्जा दिदा ज्यू जमिन गैऱ्ह धितो लेषी कर्जा दियो असामीले व्याज दिन नसक्ता साहुले भोग नलेषाई धितो समाई चलन गऱ्याको रहेछ र पछि असामीले थैली तिर्न आयो भन्या लेषिया वमोजिम्को थैलि वुझीलि जगा ज्यू छाडी दिनु धितो भोग गऱ्या पछि भोग गऱ्याका मिति देषी अघिको व्याज वाकि रहाको छ भनी लिन पाउदैन.

३. जिनिस गैऱ्हका कारोवारमा मोल तौल गरि हवस नगरि हवस् भाषा राषिमाल सापटि लियोर भाषा भित्रैमा तिऱ्यो भन्या सापटी मालमा साहुले व्याज पाउदैन. भाषा सम्ममा पुऱ्याउन सकेन भन्या. भाषा नाघ्या पछि नाघ्याका मिति देषीको दसौद व्याज स्मेत लिन पाउछ. मोल तौल गरि लियाको मालको सोहि वमोजिम र. मोल तौल नगरी लियाका मालको पंच कचहरीले. ठहराया वमोजिमम्को वाजवि मोल गरि उसैको दसौद व्याज स्मेत गरि भराई दिनु. कचहरिवाट भरायाका मालको दसौद विसौद लिनु.

४. लिन दिन कारोवार गर्दा सर्कार कंपू पल्टन् जंगी निजामती देसी माहाजन दुनिञादार रैयत् गैऱ्हले १९०८ साल कार्तिक सुदि १५ रोज देषि अघिका तमसुक वेतमसुकि साहु असामिका मनोमानले एस मितिसंममा हिसाव गरि लिनु दिनु गऱ्यामा जौन दर्ले व्याज दिया लियाको छ दिनुलिनु गरि सक्याको उहि हिसाव सदर हुंछ तमसुकमा दसौद देषी वढता लेषायाको रहेछ लिया दियाको रहेनछ भन्या दसौद व्याज भराई दिनु एस मिति देषी अघि वढता व्याज लेषायाका तमसुकमा दंड हुदैन ८ साल मार्ग वदी १ रोज देषी पछि दसौद देषी वढता व्याज र. घ्यू षानिलियो भनी कोही कराउन आयो भन्या साहु असामिको लिन दिन हिसाव गर्दा तमसुकमा सयकरा १० देषी वढता लेषायाको रहेछ भन्या पनी सयकरा १० का हिसावले

लिन दिनगर्नु सयकरा १० देषी वढता तमसुकमा व्याज लेषायाको र. घ्यू षानी ठेकी भनि लियाको रहेछ भन्या लियाको रूपैया साउंमा मिन्हा गराई दि दसौद देषी वढता जति लियाको ठहर्छ. उसै विगा वमोजिम दंड गर्नु रूपैया नतिऱ्या मैन्हाका ५ रूपैयाका दरले कैद गर्नु. व्याज भराउदा जौन जौन जातका रूपैया लियाका हुन सोहि जातका रूपैयाका हिसावले भराई दिनु. दसवर्ष नाघ्याको तमसुक रहेछ व्याज पायाको रहेनछ भन्या दोवर भराई दिनु. असामीवाट जस्तो लियाको तस्तो निस्केन जो भयाको घर षेत आल मालले साहु तिर्छु भन्यो भन्या पंचकिर्ति मोल गरी साहुले लिनु. अदालत अमाल ठानावाट तिराउनु पऱ्यो भन्या साहुवाट दसौद असामिवाट विसौद लि भर्नु भराउनु गरि छिनिदिनु.

५. लंवरको षारेज भयो

६. रूपैया पैसा सर सापटी दिदा आफना मुलुककालाई सापटी दिनु. आफन मुलुकका वाहेक मुगलानित्राहरूलाई. सापट्टी दि व्याजवट्टा कसैले नषानु. असामीले वेइमानि गऱ्या आफना सर्कारवाट अदालतमा नालिस गरि लिन पाइदैन.

७. एस मुलुका मानिसले संवत् १९११ साल श्रावण वदि १२ रोजका दिन देषी उप्रांन्त मुगलानका जगा जमिन् पनी कसैले नलिनु. कंपनीमा सुद मा रूपैया पनि ज्मा कसैले नगराउनु कंपनिमा सुदमा रूपैया ज्मा गराउन्या र मुगलानमा जगा लिन्यालाई जागीर रैरकम् केहि पनि नदिनु.जागिऱ्या भयाको रहेछ भन्या पनि षोसी दिनु. मुगलानाको झैझगरा पनि त्रहाबाट नसुन्नु.

८. कसैले एकावाट दृष्टि भोग गरि ज्यू जमिन गैन्ह वंधकलियाको रहेछ र उसलाई गर्ज पर्दा आफुले लिया जतिमा अर्को कसैलाई लषवंधक दियेछ र अघि आफनु जगा वंधक दिन्याले थैली तिर्न आयो भन्या पछिल्ला लषवंधक लिन्याले थैली वुझी लिनु पर्छ पछि लिन्याले मेरो मितिमा थैली लिउला भन्न पाउदैन.

धितो नलेषीयाको जगा आफना लिना दाम वमोजिममा असामिको जगा गाल्यो भन्या व्याज नपुग्याको र वढता लियाकामा गर्न्या अैन--- --- --- --- --- --- --- ---

९. साहु असामिका लिन दिनमा तमसुकमा भोग दृष्टि नलेषियाको जगा साहुले चलन गरि आयाको रहेछ भन्या तेसजगाका उवजनिवाट साहुको दसौद व्याज र. दसौदभंदा घटी उवजनिषायाको रहेछ भन्या जगा भोग गऱ्या पछि मेरो व्याज पुगेन भनि असामिवाट पछि लिन पाउदैन दसौद व्याज भंदा बढताषायाको रहेछ भन्या वढता षायाको साउँमा कटाई वाकि रहाको साउँ भराई दिनु आफुले व्याज नतिर्दा साहुले जगा भोग गऱ्या पछि मैले तमसुकमा लेषी दियाको छैन भनी असामिले भंन पाउदैन.

# धितो लेषाउँदाको

१. साहुलाई आफनु विर्ता दृष्टी भोग वंधक लेषीदियाको जगा सर्कारवाट जफत भयो वा साहु असामीमा एक जनाको सर्वस्व भै तमसुकमा लेषीयाको जगा सर्कार लाग्याको रहेछ भन्या साहुले असामीका संतानलाई समाई लिन पाउदैनन् जगा फुक्यो वा सट्टा पट्टा पायो भन्या साहुले तेसै जगावाट लिनु. एस्ता कुराको नालिस गर्न आयो भन्या २० रूपैया दंड गरि लि छोडि दिनु.

२. कसैले साहु सित कर्जा लिदा आफना विर्ता जगा जमिन वंधक् लेषीदिदा जगाका आमदानीवाट व्याज उठाई वढता आम्दानीले साउमा कट्टा गर्नु जगाका आम्दानिवाट साहुको थैली भर्ना नहुंज्याल् थैली तिरि ननिषंनु भनि लेषीयाका र वालीले थैली कट्टा नहुंज्याल जगा साहुले चलन गर्नु भनि मासि लेषीयाका. जगामा तेस जगाका. आम्दानीवाट थैली कट्टी नहुंज्याल् असामीले रूपैया तिरि निषंन हुदैन. साहुको थैली भर्ना भै सकिया पछि तमसुक फराई दिनु.

३. ज्यू जमिन भोग लिन्या साहुले तेहि जग्गा अरूसित सारि आफनु थैली उठाउदा आफना तमसुक वमोजिम्को थैली लि सार्नु हुंछ आफना तमसुक भंदा वढता रूपैया वंधक सार्न्या साहुलाई लियाको विगो पुराना दातालाई दिलाई भरायाका वीगै वमोजिम् दंड गर्नु.

४. जगा जमिन् भोग वंधक् लिदा दिदा पैल्हा जाच वुझ गरि लिनु आफुले भोग गर्‍या पछि जगा घटीया रहेछ थोरै रहेछ भनि भोग षान्या साहुले असामिलाई टंटा गरि थैलीमा कर लाउन पाउदैन.

५. घर षेत जगा जमिन् कमारा कमारि वाधा वधेत्यानि वाधा लिन्या दिन्याले वट् करार भाषा मैन्हा मितिको जौन वंदोवस्त गरि वाधा लिनदिन गर्‍याको छ सोहि मितिमा साहु तिरि निषंनु सोहि वमोजिम् दिन लिन गर्नु भाषा नपुगि निषन्न हुदैन भाषा नपुगि साहु असामिले तगादा नगर्नु भाषा नपुगि विचमा रूपैया तिर्न आउन्या असामीलाई र भाषा नपुगि तगादा गर्न्या

साहुलाई सयकरा २० रूपैयाका दरले जरिवाना गर्नु रूपैया नतिऱ्या मैन्हाका ५ रूपैयाका दरले कैद गर्नु.

६. कसैले जगा जमिन् घर षेत चौपाया कमारा कमारि कसन् तमन् सुना आदि जवाहेर कागज पत्र लेषि साछि गुहाई राषि वंधक राष्याको छ भन्या उस्का हक्वाला दाज्यू भाई अपुतालि षान्या दाज्यू भाईले लेषिदिया वमोजिम्का रूपैया तिरि निषंछु भन्या धनि र धनिका संतान छंज्याल् उनले दियामात्रै हकवालाले थैलि तिरि निषंन पाउछ नदिया निषंन पाउदैनन्. धनि र धनिका संतान नभया देसि ले दियाको थैली तिरि अपुतालि षान्या हकवालाले निषंन पाउछ निषंन दिनु १६ वर्ष भया पछि कसैले हाम्रा फलाना दाज्यू भाई वावु वराज्यूले फलानु कुरा वंधक राष्याको छ हामि निषंन पाउन्या हुं भनि नालिस गर्न आया भन्या पत्र पात्र जाची ठहऱ्यो भन्या दिलाई दिनु व्याज षादै आयाको रहेछ भन्या पत्र पात्र नभया पनि दिलाइ दिनु. व्याज पनि षायाको रहेनछ पत्र पात्र पनी केहि ठहरेन भन्या एस्तालाइ त पाउदैनस् भनि ठोकि समात्याका ज्माका सयकरा १० रूपैयाका दरले दंड गरि लिंनु रूपैया नतिऱ्या मैन्हाका ५ रूपैयाका दरले कैद गर्नु.

७. मालहरू धितो वाधाराषि कर्जा लिदा दिदा तमसुकमा मालको मोल तौल चढाई लिन दिन गर्नु असामीले रूपैया तिरि माल निषंन आउदा साहुवाट जस्ताको तस्तो माल फिर्ता दियो भन्या साहुको साउ र हिसाव वमोजिम्को दसौद व्याज स्मेत भराई दिनु साहुले धितो वंधक राष्याको माल फिर्ता गरि दिन सकेन षर्च गरेछ भन्या तेस साहुले रूपैयाको व्याज पाउदैन हिसावमा असामीको फाजिल पर्ऱ्या रहेछ भन्या तमसुकका मितिदेषीको हिसाव गरि व्याज स्मेत फाजिल रूपैया असामीलाई फिर्ता गराई दिनु भराई दियाका रूपैयाको दसौद विसौद कचहरिवाट लिनु.

८. कसैले घर षेत ज्यू जमिन् वाधाराष्याको छ निषन्न जादा साहुले तेरा कमाइका तेरा घरका रुपैया हुन्भन्या निषंन दिंछु लैजा अरूसितका रूपैया ल्यायाका हुन्भन्या. निषंन दिदौन भन्यो थैली लियेन भनि कराउन आयो भन्या थैली षडा गरि दिया पछि जाहा सुकैवाट ल्यायाको भया पनि साहुले लीनु पर्छ वषेडा गरि थैली बुझी लियेन भनी असामी कराउन आयो भन्या सयकरा १० रूपैया दंड गरि तिर्न तिराउनु गरिछिनिदिनु तेस्तो विहोरा लेषायाका कागज फराई दिनु भराई दियाका थैलीको अदालत ठाना अमालवाट दसौद विसौद लिनु. आफनु थैली

ल्याई निषनुला अर्काको थैली ल्याई निषंन्या छैन भन्या करार लेष्याको भया अर्काको थैली ल्यायाको भया पनि थैली तिरि निषंन पाउछ साहुलाई १० रूपैया दंड हुदैन तिरायाका थैलीको दसौद विसौदमात्र लिनु.

९. षेत भोग वंधक लिन्या साहुले आफना भोगका जगामा षोलो पैरोलाग्यो भन्या असामीसित रूपैया लिन पाउदैन त्यो जगामा वगर वस्यो भन्या साहुको हुंछ.

१०. कसैले साहुसित कर्जा लिदा जगा जमिन् घर षेत कमारा मारि चौपाया सुना चादि कसन तमन् जवाहेर गैऱ्ह नगद जिनिस तमसुक भाषा पत्रमा भोग धितो लेषाउदा फलाना भाषामा लाग्याको साउ व्याज तिरि मेरो माल निषनी लैजाला भाषामा रूपैया तिर्न सकिन भन्या लेषिदियाको जगा माल तेसै थैलीमा साहुले पचगरि लिनु भनी साछि सुर्ता राषि लेषिदियाको रहेछ भन्या भाषा नाघ्या पछि असामिले निषंन पाउदैन साहुको पच हुंछ जगा जमिन् नगद जिनिस जवाहेर चौपाया कमारा कमारी गैऱ्ह असामीले लेषीदियाको भाषा नाघ्या पछि साहुले सुक्री विक्री गरि चलन गर्न पाउछ.

११. कसैले कमारा कमारि जगा जमिन चौपाया जवाहेर गैऱ्ह जिनिस माल साछि सुर्ता गरिहवस् आफना राजिले हवस् २ जनाका मनोमानले एक फेरा साटासाट गरि आफु आफुले मालको चलन गऱ्या पछि तेरो माल ननिको विकंवा रहेछ मलिंन भनी फिराउन पाउदैन अघि सट्टा पट्टा गरी लियाको सदर हुंछ पछि झगरा गर्न आउन्यालाई विगाका दसौदका दरले दंड गर्नु रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु

१२. कमारा कमारि चौपाया जगा जमिन गैऱ्ह जिनिस्को लिन दिन गर्दा मोल पटक् गौराई वैना गऱ्याको दिनमा माल सरन् वस्क्तसरन् भयाको रहेछ भन्या र तर्तमसुक भयाको रहेछ भन्या लिन्याको माल सदर. वेचन्यालाई लिषत् वमोजिम् थैलिको साउ व्याज भराई दिनु गौराई वैना दियो माल दाताकै घरमा छ मैन्हा १ सम्ममा गौराई वैना दिन्याले थैलि सौपि आफुले माल लैगयेन भन्या पछि लिन पाउदैन माल मालकै धनिले. चलन गर्नु. गौराई वेना दियाको हो भनी १ मैन्हा उप्रांन्त झगरा गर्न आउन्यालाई. विगाका सयकरा ५ रूपैयाका दरले दंड गर्नु रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु

१३. ढेरै भाईमा अंस नभै संग वस्याकामा एका भाइले कमारा कमारि घर षेत वेच्यो भन्या संग वस्याका भाईमा विसल्लाहले एक भाईले मात्र वेच्याको रहेछ भाईमा अरूको हिस्सा राषी आफनु हिस्सा जति वेच्याको रहेछ भन्या किन्या वेच्याको सदर हुंछ जहान पाल्दामा अरूका हिस्साको वेच्याको रहेछ भन्या पनि सदर हुंछ. अरू भाईको अंस हिस्सा नराषी आफना षर्चको निमित्त वेच्याको भया सदर हुदैन. किंन्याको थैली भराई कमारा कमारि घर षेत फिर्ता गराई दिनु.

१४. कसैले अघि षेत पाषो भोग दृष्टि वंधक लेषी लि रूपैया कर्जा दियाको रहेछ पछि जफत भै गऱ्हो सर्कार लागी पाषो मात्रै थामियाको रहेछ वा पाषो सर्कार लागी गऱ्हो थामियाको रहेछ र असामीले दामा साहिका हिसावले जफत भयाका जगाको थैली कट्टा गरि थामिया जति जगाको माात्रै रूपैया तिर्छु जगा छाडी देउ भंन आया सवै ज्मा थैली दिया मात्रै जगा छाड्छु भनि साहुले भंन पाउदैन दामासहिका हिसावले थामियाका जगाको रूपैया वुझिलि जगा छाडी दिनु.

# दामासाहीको

१.	कसैको दामासहि गराई दिनु पर्दा सर्कार लगायेत दुनिञादारसम्ममा दृष्टि वंधक् भोग वंधक लियाका जगामा असामिको दामासहि हुन लाग्यो भन्या वंधक थैलि साहुको पर सारि पंच कृति मोलमा जगावाट केहि वढता निस्क्यो भन्या त्यो वढता निस्क्याको दामासहिका हिसावमा ज्मा गरि वंडा गरि दिनु. भराई दियाका धनको दसौद विसौद लिनु.

२.	आफना जियले गर्‍याका लिन दिन कारोवारमा साहुले असामीवाट केहि पायेन जैल्हे असामी पल्हाउला उसै वेलामा लिउंला भंछ धर पकर तगादा केहि गर्‍याको छैन भन्या तेस्ता लुच्चा असामीले मात्र आई दामा सहि गरि देउ भन्या साहुले तगादा नगरि उसै आई दामासहि हुन सक्तैन नगराउनु.

३.	कसैले मेरा साहु ढेरै लाग्या दामासहि गरि देउ भन्यो उस्का साहुहरूले पनि कवुल गर्‍याका रहाछन् भन्या असामिका सिरमा हरिवंश राषी काल भैरव उस ठाउका देवता गंगामा एका ठाउमा लैगी भकाई मेरो जो भयाको एतिकै हो ञाहा देषी वाहेक अरू दवाया छपायाको केहि छैन भन्या लेषाई ठहर्‍याका ज्मामा जो भयाको सवै साहु वटोलि दामा सहि गरि दिलाई दिनु.

४.	कसैका वावुले लगायाका साहु ढेरै रहाछन् धन माल भन्या थोरै रहेछ तेस्मा कसै साहुले धितो दृष्टि भोग वंधक लेषी दियाको वाहेक असामीका अरू धनमा हात हालि धर पकर गरि केहि माल लिया छन् कसैले भन्या केहि पायानन् र. कराउन आया भन्या हात हालि धर पकर गरि लैगयाको माल फिर्ता गराई ल्याई सवै ज्मा गरि. अैन वमोजिम् दामा सहि गरि सवै साहुलाई वाडी दिनु.

५.	सर्कारका मुद्दामा हवस् अरू दुनिञाका लिन दिनमा हवस् कसैको दामासहि गराउदा असामिले नगद जिनिस ज्यू जमिन गैन्ह केहि दवायाको रहेछ र पछि कसैले पत्ता लाइ ल्यायो भन्या जस्ले षोजिल्यायाको छ उस्का रूपैयाले षाम्या सम्म उसैले पाउछ उसैलाई दिलाई दिनु वढता ठहर्‍यो भन्या दामासहिका दरले अरू साहुलाई वाडि दिनु. सर्कार ढाट्न र. साहु वावत मार्न्यालाई धनलुकाया लुकाउन्यालाई लुकायाका विगा वमोजिम् दंड गर्नु. तिर्न सकेन भन्या मैन्हाका ५ रूपैयाका दरले कट्टि नहुंज्याल् कैद गर्नु.

६. कसैलाई रिन कर्जा ढेरै लाग्याको रहेछ वा वाकी लाग्याको रहेछ र. वाकि र रीन कर्जा नतिरि मरेछ वा देस पर्देस गयाको रहेछ उस्को धन माल भन्या रहेछ र. साहु गैऱ्हले दामासहि गरि लिंछौ भन्या कर्जा र वाकी लाग्न्या मानिस वा उस्का वारिस हाजिर न भै. सर्कार लगायेत् साहु गैऱ्ह कसैले पनि दामासहि गरि. लिन पाउदैनन्. वाकिवाला र. असामी मरेछ. उस्को वारिस पनि कोहि छैनन् भंन्या तहकीत भयो भन्या सवै साहु गैऱ्हले दामासहि गरि लिन पाउंछन्. भोग दृष्टि लेषियाका मा मोल गर्दा वढता निस्क्याको र. भोग दृष्टिलेषिया वाहेक अरू धन मालमा दामासहि गरि लिनु. साहु तिराई वढता भया सर्कारको हुंछ.

७. फलानासित एति लिनु छ भनि कोहि साहुले कराउन आयो र. असामिलाई पक्रदा धन तिर्न सक्तिन भन्यो साहुले एस्का संपतिमा आधि लिंछु आधिको भाषा दिंछु भन्यो भन्या अदालत ठाना अमालवाट असामिको धन संपत्ति तायदात गरि ज्मा धन मध्ये आधि साहुलाई भराई साहुको जो वाकि ठहर्छ तेस्को भाषा तमसुक गराई दिनु.

८. फलानासित एति लिनु छ भनि कोहि साहुले कराउन आयो र. असामीलाई पक्री ल्याउदा धन तिर्न सक्तिन भन्यो असामीको संपत्ति थोरै रहेछ साहुको थैली ढेरै रहेछ र जो भयाको संपत्ति लिंछु भन्यो भन्या अदालत ठाना अमालवाट असामिको संपति सवै तादात गराई साहुलाई भराई दिनु साहुको धन जति सुकै लिनु भया पनि असामीको सवै संपति लिया पछि फेरि असामि पक्रन पाउदैन. तमसुक च्यताई दिनु. भरायाका धनको दसौद विसौद साहुवाट लिनु असामिले तिर्नु पर्दैन.

९. फलानासित एति लिनु छ भनि कोहिसाहुले कराउन आयो र. असामिलाई पक्रिल्याउदा धन तिर्न सक्तिन भन्यो भयाको भर्नु भराउनु नगरूज्यालसम्म अरू साहु पनि रहेछ र. साहुले भन्न आयो वा असामिले भन्यो र कोहि साहुले भाषा दिंछु भन्या कोहि साहुले जो भयाको लिंछु भन्यो भन्या अदालत ठाना अमालवाट असामिको तादात गरि दामासहिका हिसावले लिंछु भंन्यालाई भराइ तमसुक च्यताइ दिनु. भाषा दिंछु भंन्याको भाग असामिकै जिम्मा गरि जैल्हे कमाई तिर्नसक्ला उहिले लिउला भंन्या विहोराको कागज गराई दिनु.

# अंस बंडा वाबु छोराको

१. कसैका एउटै स्वास्नि छ उस्तिरका ढेरै छोरा छन् आमा वावुसित छुट्टि भिन्न भया भन्या. वावुले आफ्ना षुसिले अंस गरी दिया मात्रै पाउछन् मेरो ज्यछंजाल अंस दिन्न भन्या छोराको कर लाग्दैन वावुकै षुस हुंछ ढेरै स्वास्नि तिरका छोरा छन् र कोहि स्वास्नितिरकालाई प्यारो कसैतिरकालाई हेला गरेछ र हेला गर्‍याका छोराले भींन हुंछु भन्या हुन पाउछ अैन वमोजिम छोराको अंस गरि दिनु. अदालत ठाना अमालवाट गराई दियाका अंसको दसौद लिनु.

२. आमाले घरको धन र. आफनु दाइजो जो भयाको सवै छोराहरूलाई वाडि दिंछु भन्या पनि मेरा ज्यूता भर कसैलाई दिंनभन्या पनि आमाको षुस हुंछ छोराहरूको कर लाग्दैन. आमाका सेष पछि अंस गर्दा घरका श्री संपतिमा सवै छोराहरूको अंस हुंछ. दाइजो भन्या आमाका जियले वाडि षानु भनि लेषिदियाको भया सवै छोराले पाउछन् लेषीदियाको रहेनछ भन्या आमाको सहिसंभार गरिसंग वस्न्या छोराले पाउछ.

३. वावु मर्‍यो आफुलाई जन्माउन्या आमा छ उसतिरका छोराले अंसमा झगरा गर्‍यो भन्या आमाको ज्यू छंज्याल् छोराले आमासित अंस षोजन पाउदैन आमाका सेषपछि छोराहरूले पाउछन् वावु पनि मर्‍यो सौतिन्या आमा छ अंसमा झगरा गर्‍या भन्या अैन वमोजिम सौतिन्या आमाको र छोराहरूको अंस गरि दिनु.

४. छोराहरूले अंस लि पर सर्दौन वावु आमाको सेष पछि अंस लिउला भंन्यालाई वावु आमाले अंस लियेर परसर भनि कर लगाई छुट्याउन हुदैन अदालत ठाना अमालमा कराउन आया पनि अंस बांडो नगर्नु.

५. कसैका २।३ स्वास्नि तिरका छोरा रहाछन् र. वावुले तिन्हैरूको अंस वण्डा गरिदिदा चाहिन्या दाज्यू भाई भला मानिस् राषी अैन वमोजिम् अंस गरि दियाको रहेछ आफु एका स्वास्नि छोरातिर आफनु अंस ज्यूनि लि वस्याको रहेछ भन्या अंस लि वेगल वस्याका स्वास्नि छोराले वुढाका अंस ज्यूनिको दाइया गर्न पाउदैनन् असल भया पनि कमसल् भया पनि वावुसित संग रहाका छोराले वावुको जो भयाको षति उपति सवै पाउछ.

६. छोराहरू भिन्न गराउदा गुरू प्रोहित दाज्यू भाई कोहि राष्याको रहेनछ अैन वमोजिम्को अंस नदि आफुले धर षेत घन दौलत ढेरै आफुसित राष्याको रहेछ छोराहरूलाई थोरै वहुतको मात्र अंस दि कोहि छोरा वेगल गरायाको रहेछ कोहि छोरा पैल्है देषी संग राष्याको रहेछ वा छोराहरू पर सारि केही दिन केहि वर्ष आफु वेगलवसि पछिवाट कोहि छोरासंग मिसाइ राष्याको रहेछ भन्या वावु आमाका सेष पछि वावु आमाले राष्याको घर षेत धन दौलत र छोराहरूलाई अघि अंस भनि वावु आमाले दियाको हिसाव मिलाई अघि वावु आमाले अैन वमोजिम षसो षास अंसगरि दियाको नहुनाले संग रहाका छोरा को र भिंन भै परसऱ्याका छोराको अैन वमोजिम् अंस गरि दिनु भराई दियाका अंसको अदालत ठाना अमालवाट दसौद लिनु.

७. वरोवर जात भात मिल्दा स्वास्नि छोराको अघि अंस वंडा गरि दिदा लोग्न्या ले र वावुले कसै पट्टीका स्वास्नि छोरालाई वढता कसै पट्टिका लाई घटी गरि पक्ष गरि अंस दियाको र जात मिल्दा छोरा एकातिर ढेरै एकातिर थोरै रहाछन् र. सौतिन्या अंस गरि दियाकामा भाई झगरा परि अदालत अमाल ठानामा कराउन आया भन्या र. अघि पक्षपात गरि अंस गरि दियाको ठहऱ्यो भन्या छोरा स्वास्निको अैन वमोजिम् अंस गरि दिनु.

८. विर्ता घर षेत कमारा कमारि चौपाया असामि गैह्र साजा धनमालमा भाई भिन्न हुदा साछि राषि हवस् कागज पत्र गरि हवस् एक फेरा अंस वंडा गरि चित्त वुझि आफनु आफनु अंस लि पर सऱ्या पछि मेरा अंसमा षोलो पैरो दैवी लाग्यो मेरो षंड सानु रहेछ घटीया रहेछ भनी भाई झगरा पऱ्यो भन्या अघि एक फेर अंस भै रोजी छाडी भया पछि फेरी अंस गर्न पाउदैन अघि गऱ्या को अंस वंडा सदर हुंछ एस्ता कुरामा झगरा गर्न आउन्यालाई जति ज्मामा झगरा गर्न आयाको छ उसै ज्माका सयकरा ५ रूपैयाका दरले दंड गर्नु रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

९. वावु छोरा दाज्यू भाई स्वास्नि नाति भतिजा भाउज्यू वुहारिहरूको अंश गर्दा आफ्ना गुरू प्रोहित दाज्यू भाई इष्ट मित्र राषि अंस गरी दियाको रहेछ अंस लिन्याको चित्त वुझि छाप सहि गरी वंडा पत्र उठाई लियाको रहेछ भन्या अंश वंडा भयाको सदर हुंछ त्यो झगरा उल्टिदैन.

१०. वावु छोरा दाज्यू भाई स्वास्नि नाति भतिजा भाउज्यू वुहारिहरूको अंश गर्दा आफना गुरू प्रोहित दाज्यू भाई इष्ट मित्र राषी अंस भयाको रहेछ अंस लिन्या ले सहिछाप गऱ्याको कागज रहेछ केहि कुरामा चित्त नवुझी वाड पत्र पनि समात्याको रहेनछ अंस पनि लियाको रहेनछ भन्या त्यो वंडा पत्रको सदर हुदैन षाई लाई सक्या वाहेक वावु वाज्याको षति उपति ज्मा गरि हामीसितको धन माल एतिकै हो दवायाको छैन भंन्या दुवै थरलाई धर्मभकाई जोठहऱ्याको अैन वमोजिम् धन वाडि दिनु मानु छुट्याया पछि लायाको रिन र. कमायाको धन आफनु आफ्नु हुंछ.

११. कसैले अंस वंडा गर्दा हाम्रो धन माल एति कै हो दवाया छ पायाको छैन भनी धर्म गऱ्या पछि केहि धन माल दवाया छपायाको ठहऱ्यो भन्या त्यो धन माल दवाई धर्म गर्न्या चाहिले पाउदैन नदवाउन्या अरू अंसियारले अैन वमोजिम् अंस गरि षानु.

# अंसवंडाको

चार वर्ण छतिसै जातका विवाहिता कंन्या ल्यायाका विधवा ल्यायाका जारि गरि ल्यायाका आफु भंदा कम जातका कंन्या विहा गरि ल्याया का आफु स्मेत तेश्रो लिंग परि ल्यायाका चौथा लिंग र वाहा देषी उभो का वेस्या ल्यायाका कंन्या वेस्या वधेत्यानि कंन्या कमारि वेस्या कमारि स्वास्नि तुल्याई राष्याका एस्ता तरहका स्वास्नि र. इनैवाट जन्म्याका छोरा छोरीका अंस विहा षर्च वाड्नाको र. साहु तिर्नाको अैन --- --- --- --- --- --- --- --- --- ---

तपसिल

१. विहा गरि ल्यायाका भात षायाका हवस् नषायको हवस् उन्का संतान जात मिल्दा कंन्या विधवा जारि गरि ल्यायाका आफना भताहाले भात षायाका एति तरहका स्वास्नि छोरा हरूको र. आफना वरोवर अंश हुंछ.

२. आफु भंदा कम जनै लाउन्या जातकि कंन्या ल्यायाकि र. जात मिल्दाका विधवा ल्यायाका जारि गरि ल्यायाका आफुले र आफना भताहा भाईले भात नषायाका तेस्ता स्वास्नि र. तिनवाट जन्म्याका संतानलाई सद्य स्वास्नि छोरा जति छन् उन्ले जनही ४।४ भाग पाया. एस्ता स्वास्नि छोरा जति छन् जनहि १।१ भाग अंस दिनु.

३. तागा धारिले जनै नलाउन्या जातका कंन्या र विधवा ल्यायाका जारि गरि ल्यायाका आफुले र. भताहा भाईहरूले भात नषायाका एस्ता स्वास्नि छोरालाई. भात चलन्या स्वास्नि छोरा जति छन् उन्ले जनहि ५।५ भाग पाया एस्ता स्वास्नि छोरा जति छन् जनहि १।१ भाग अंश दिनु.

४. आफु स्मेत तेश्रो लिंग परि ल्यायाका स्वास्नि छोराहरूलाई सद्य भात चलन्या स्वास्नि छोरा जति छन् उन्ले जनहि ८।८ भाग पाया इनलाई १।१ भागको अंस दीनु.

५. कंन्या कमारि कंन्या वधेत्यानि राषि जन्म्याका संतान् छोरा स्वास्निहरूलाई सद्य स्वास्नि छोरा जति छन् उन्ले जनही ६।६ भाग पाया इनलाई जनहि १।१ भागको अंस दिनु.

६. एक जनासित मात्रै विग्र्याका आफना घरकि केटी कमारि करिया देषी छटाई राष्याका स्वास्नि र इन्का संतानलाई सद्य स्वास्नि छोराले जनहि १०।१० भागको अंस पाया इनलाई १।१ भागको अंस गरि दिनु.

७. वेस्या कमारि र वेस्या वधेत्यानि वाहिर फेरा दुलदा फिर्दा स्वास्नि तुल्यायाका आफ्ना घरमा पनि नल्यायाका डेरा षोजि पनि नराष्याका. एस्ता वेस्या स्वास्निवाट जन्म्याका छोरा स्वास्निलाई सद्य जति छन् उनले जनही १००।१०० रूपैया पाया इनलाई अढाई अढाई रूपैया अंस पाउछन्.

८. उपाध्या ब्राहाणले रजपूत जैसी गैह्र तागाधारि जात गैह्रका छोरि विहा गरि लैगयो भन्या एस्ता स्वास्नि छोरालाई विहा गर्‍याको हुनाले सद्य भात मिलन्या स्वास्नि छोराका सरहको अंश पाउछन् भात षानाको कर लाग्दैन.

९. रजपूत जातले आफु भंदा कम रजपूत कि र. अरू तागाधारि क्षत्रि जात गैह्रका छोरि विहा गरिलैगयो भन्या एस्ता स्वास्नि छोरालाई विहा गर्‍याको हुनाले. सद्य भात मिलन्या स्वास्नि छोराका सरहको अंस पाउछन् भात षानाको कर लाग्दैन.

१०. जैसी जातले आफूभन्दा कम जैसीकार. रजपूत तागाधारि क्षत्रि जात गैऱ्हका छोरी विहा गरि लै गयो भन्या एस्ता स्वास्नि छोरालाई विहा गर्‍याको हुनाले सद्य भातमिलन्या स्वास्नि छोराका सरहको अंस पाउछन्. भात षानाको कर लाग्दैन.

११. तागा धारी क्षत्रि जातले आफु भंदाकम अरू तागाधारि जात्का छोरि विहा गरि लैगयो भन्या एस्ता स्वास्नि छोरालाई विहा गर्‍याको हुनाले सद्य भात मिलन्या स्वास्नि छोराका सरहको अंस पाउछन् भात षानाको कर लाग्दैन.

१२. अघि स्वास्नि राषता विहा गर्दा ज्यूनि जेठ्याक लेषिदियाको रहेछ भन्या अव उप्रांत ज्यूनि जेठ्याक् पाउदैनन् अैन वमोजिम अंस पाउछन्.

१३. जात अनुसार धन अनुसार दाज्यू भाई पंच भलामानिस्का तजविजले ठहराया वमोजिम्को जोग्य सित निसाफ पारि छोराको र छोरिको विहा षर्च पर सारि वाकि रहाकामा अैन वमोजिम्को अंस गराई दिनु.

१४. वावु वाज्याले लायाका साहु तिर्नु पर्दा जुन् जुन् रितको अंस भाग स्वास्नि छोराहरूले पायाका छन्. सोहि हिसाव वमोजिम् साहु तिर्नु.

१५. कसैका विहानभै जन्म घरमा रह्याका छोरि छन् भाई भिंन हुन लाग्या भन्या ३५ वर्ष मनिका उमेरका विहा नभयाका छोरीलाई अैन वमोजिम्को विहा षर्च दि भाई अंस गर्नु ३५ वर्ष नाघ्याका छोरि विहा नभै माइतिकै घर वस्याका रहाछन् भन्या भाई सरहको अंस पाउछन् ति मऱ्या पछि माईति दाज्यू भाईले काज कृया पनि गर्नु पर्छ अपुतालि पनि माइतिकै हुंछ ३५ वर्ष नाघ्या पछि विहा भयो भन्या अंस लि जान पाउछे पोइल गै भन्या अंस लि. जान पाउदिन.

१६. वावुले छोराहरूलाई अंस दिया पछि विवाहिता ल्याईता स्वास्नि पट्टि अरू छोरा जन्म्या भन्या आमा वावुको अंस ज्यूनिमा वावुसित संग वस्याको छोराले र पछि जन्म्याका छोराहरूले अैन वमोजिम् वाडि षानु. वावु आमासित अघि अंस लि भिंन वस्याका छोराले पाउदैनन् अदालत ठाना अमालमा कराउन आया यसै अैन वमोजिम् छिनिदि भराई दियाका. अंसको दसौद लिनु.

१७. दाज्यू भाई एका घरमा मानु नछुटचाइ एक चुल्हामा भात षाई वस्याका छन् भन्या सवै भाइले कमायाको धन लायाको रिन अैन वमोजिम वरावर भाग लाग्छ.

१८. एकै आमाका छोरा ढेरै छन् तिन्मा कोहि वावु आमासित संग वस्याका रहाछन् कोहि अंस नलि वेगल वस्याका रह्याछन् र. वावु आमा मऱ्या पछि अंसको झगरा गर्न आया भन्या वावु आमाको काज कृया गरि वाकि रहाका रिन धनमा सवै छोराको अंस लाग्दछ अैन वमोजिम् अंस गराइ दिनु अंस गराइ दियाका धनको अदालत ठाना अमालवाट दसौद लिनु.

१९. कसैका विवाहिता ल्याईता वेस्या राष्याका ढेरै स्वास्नि छोरा वेगला वेगलै घर गरि वस्यका रह्याछन् वावुका जियले अंस गरि दियाको रहेनछ छोराले चित्त वुझी अंस नषोजि वस्याका रह्याछन् वावु एका स्वास्नि छोरातिर वस्याको रहेछ भन्या वावु मऱ्या पछि वावुको काज कृया गरि वाकि रह्याका सवै भाईसितका वावु वाज्याले आर्ज्याका रिन धनमा अैन वमोजिम् सवै छोरास्वास्निलाई रिन धन वाडि दिनु. मानु छुटचाइ पर सऱ्या पछि भाई भाइले कमायाको धन र. लायाको रिन जोछ आफनु आफनु हुंछ अदालत ठाना अमालमा कराउन आया भन्या अैन वमोजिम दसौद विसौद लि अंस गराई दिनु.

२०. ढेरै भाई एकै घरमा छन् छुट्टियाका छैनन् तेस्तैमा एका भाईले भात नचलन्या कमि जातका स्वास्नि तुल्याइ छोरा छोरी जन्म्याका रह्याछन् उस्तै विचमात्यो भाई मऱ्यो र. ति छोरा छोरीलाइ जेठा वावु कांछा वावु दाज्यू भाईहरूले अंस विहा षर्च दिनु पऱ्यो भन्या एकै चुल्हामा भात षाइ अंस नभै एकै घरमा संग वस्याको हुनाले एस्ता छोरा छोरीले अैन वमोजिम्को अंस विहा षर्च मात्रै पाउछ. वावुको सवै अंस पाउदैनन् अैन वमोजिम्को दि वाकि रहाको एका घरमा संग वस्याका ज्येठा कांछा वावु दाज्यू भाईहरूले पाउछन्. वावु छुट्टि अंस लि वेगलै घर गरि वस्याको रहेछ र त्यो वावु मऱ्यो भन्या भात नचलन्या केटि कमारि वेस्या गैऱ्ह जोसुकै पट्टीको छोरो भया पनि विन्दका नाताले आफना जन्माउन्या वावुको सवै श्री संपति षान पाउछन्.

२१. एका घरमा वस्याका दाज्यू भाइमा कोहि मऱ्या र तिन्का छोरा स्वास्निहरूले अंसको झगरा गरि कराउन आया भन्या र कसैका स्वास्नि छोरा ढेरै रह्याछन् कसैका थोरै रह्याछन् भन्या तिन्को अंस गर्दा आफना आफना वावुका अंसमा ढेरै भाई हुन्याले पनि वाडि षानु थोरै भाइ हुन्याले पनि आफनै वावुको अंस षानु पर्छ भाई अंस हुदैन. कसैका षसमका सत्यमा वस्याका विधवा स्वास्नि रहाछन् भन्या उस्का लोग्न्याले पाउन्या अंस सत्यमा वसंज्याल् विधवाले षान पाउछन् सौता सौता रहाछन् भन्या सवै सौताहरूले आफना लोग्न्याका अंसमा अैन वमोजिम् षानु पर्छ.

२२. कोहि मानिस् तिर्थ वर्त गैऱ्ह गर्न निमित्त विराना मुलुकमा ग केहि भेष गरि आफना जात थामि फकिरिमा लाग्याको रहेछ तेसले आफना मुलुक्मा आइ गृहस्थानामा वस्छु भन्या आफना

घर षेत जगा जमिन् गैन्ह धन संपत्तिको दाईया गर्न पाउछ अंस अपुतालि षान्या भाइले दियानन्भनी कराउन आया अदालत ठाना अमालवाट दिलाइ दिनु.

२३. कसैले मुडिइ विजया होम गरि दस नाम जोगि जंगम सेवडा कानफट्टा एति गैन्ह जातमा १ जात भै आफनु अंस संपति छाड्याको रहेछ पछि आफना अंस धन संपत्तिमा दाइयागर्न आयो भन्या एस्ताले धन संपत्ति केहि पाउदैन.

२४. आफना षुसि राजिले आफु भंदा घटी जात र. छोया छिटो हालनु पर्न्या पानि नचलन्या जातमा मिलन जान्याले अघि वावु आमा दाज्यू भाईसित अंसलि वेगलै वस्याको रहेछर आफना जात मिल्दा स्वास्नि छोरा छोरी रहानछन् भन्या आफुनु श्री संपति घटी जातमा गयापनि लि जान पाउछ अंस भयाको रहेनछ भन्या र आफना जात भात मिल्दा स्वास्नि छोरा छोरि रहाछन् भन्या जानि जानी आफना जात देषी घटी जातमा गया पछि वावु आमा दाज्यू भाई स्वास्नी छोराहरूले षुसिले दियाको मात्रै पाउछ मेरो अंस भयाको छैन भनी अंसमा झगरा गर्न पाउदैन अदालत ठाना अमालमा कराउन आया पनि एस्ता कुरा न सुंनु अंस नदिलाउनु.

२५. राष्याका ३ वर्ष देषी वढता भया पछि वेस्या स्वास्नि जश्ले राष्याको छ उसैका घरमा मऱ्या भन्या उस्ता रषुइ वेस्या स्वास्निको धन जौन लोग्न्याका घरमा मरि उसै लोग्न्याले षान पाउछ काज कृया पनि उसैलोग्न्याले गराउन पर्छ वेस्याका घरमा गै वसी लोग्न्या वाहि मऱ्यो भन्या तेसले वेस्याका घरमा पुऱ्याएको धन वेस्याको हुंछ.

२६. उपाध्याय व्राहाण जैसि रजपूत क्षत्रि तागा धाीर कसैका विहा गऱ्याका कंन्या ल्यायाका विधवा ल्यायाका जारि गरि ल्यायाका भताहाले भात षायाका स्वास्नि विहागऱ्या पछि हवस् विहा नगर्दै हवस् पोइल गयाकी रहीछ त्यो कुरो जाहेर नभै विहा गऱ्याका लोग्न्याका विर्येले छोरा छोरी भयाका रहाछन् भन्या तागा धारि जातसंग विग्ऱ्याकि रहिछ भन्या तेस्ता छोराले जनै पाउछ भात षाजा चल्दैन छोरालाई सयकरा ५ का दरले अंस पाउछ मतवालि जातसंग विग्ऱ्याकि रहिछ भन्या पनि जनै पाउछ भात षाजा चल्दैन सयकरा २॥ का दरले अंस पाउंछ विर्य वाल वावुले उसै जात मिल्दामा विहा गरि दिनु. पानी नचलन्या र छोया छिटोहालनु

पर्न्या गैऱ्ह जातसंग विग्न्याकि रहिछ भन्या ति संतान उहि आमा विग्न्याका जातमा जांछन् तेस्ता छोराले वावुका टहल्मा रहंज्याल् एक माना षान पाउछन्. अंस पाउदैनन्. आमाका जातमा गयाका हुनाले एस्ता संतानलाइ वावुले विहा गरि दिनु पर्दैन.

२७. उपाध्या जैसी रजपूत क्षत्रि तागा धारि गैऱ्ह जातले भात नचलन्या ३ लिंगका र. वेस्या स्वास्नि आफ्ना घर ल्याई राष्याकि अरू सित पनि करणि गराउदी रहिछ र यो कुरो जाहेर नभै घर ल्याई राष्युन्या लोग्न्याका विर्येले छोरा छोरी जन्म्याका रहाछन् भन्या तागाधारि जातसित विग्न्याकि भया तेस्ता संतानको भात चल्दैन जनै पाउछ सयकरा २॥ रूपैया अंस पनि पाउछन् मतवाली जातसित विग्न्या कि भया जनै पाउछ भात चल्दैन सयकरा १। रूपैया अंस पाउछ एस्ता छोरा छोरीको वावुले उसै जात मिल्दामा विहा गरि दिनु पर्छ पानी नचलन्या गैऱ्ह जातसित विग्न्याकि भया संतान आमा विग्न्याकै जातमा जाँछन् आमाका जातमा गयाका हुनाले एस्ता संतानको वावुले विहा गरि दिनु पर्दैन अंस पनि दिनु पर्दैन.

२८. कसैले वाहिर फेरा वेस्या स्वास्नि राषता लोग्न्याले हात उठाई दियाको धन माल वेस्याले पाउछे लोग्न्याले फिर्ता गरिने लिन पाउदैन कसैले एत्ति वर्ष एति मैन्हा तलाइ राषछु एतिदिउला भनी कवुलगरि घर ल्याई राष्यो कवुलसम्म वसि भन्या कवुल वमोजिम् दीयाको पनि लि जान पाउछे कवुल नपुग्दै अंत गै भन्या कवुल गऱ्याको हो भनी पोइल गया पछि लिजान पाउदिन. वोल कवुल भन्या केहि गऱ्याको छैन घर ल्याइ राष्याकि स्वास्नी पोइल गै भन्या लोग्न्याले आफना षुसिले दियाको मात्रै पाउछे जवर जस्ति हात हालि लियाको पाउदिन. लोग्न्याले फिराई लिन पाउछ. लोग्न्यावाट कागज लेषाई लियाको रहेछ लेषिदियाको धन माल पाया कि रहिनछ भन्या त्यो लेषी दियाको सदर हुदैन. तेसै लोग्न्याका सत्यमा रहुंज्याल अैन वमोजिम्को अंस पाउछे लेषी दियाको हो भनी पाउदिन.

२९. चार वर्ण छतिस जात गैऱ्हले आफना जन्मायाका वालष छोरा छोरी मुलपरि जन्म्यो भनि हवस वा उसै हवस् घर वाहिर कतै फाल्यो भन्या वावु आमाको सल्लाहले फाल्याको रहेछ भन्या अैन वमोजिम् वावु र आमाको अंस र फालीयाको छोरो रहेछ भन्या उस्को अंस १ ज्मा अंस ३ त्यो वालषलाई १ जनाको मात्रै सल्लाह रहेछ भन्या वावु आमामा उस्को १ अंस मात्रै लैगि पालन्यालाइ दिलाई दिनु जारि गरि जन्मायाको छोरा छोरी रहेछ भन्या जन्माउन्या

आमाको दाइजो र. जारि गर्न्या चाहि वावुको अंस पालन्यालाई दिलाई दिनु पालन्याको धर्म पुत्र ठहर्छ त्यो फाल्याको वालषले पायाको अंस वालष मर्‍यो भन्या तेस्को अपुताली जन्माउन्या वावुले पाउदैन तेहि पालन्या वावुले पाउछ त्यो फालियाको वालष छोरि रहिछ भन्या वावुको अंस र आमाको दाईजो छोरीको विहा षर्च स्मेत त्यसै वालषलाई दिलाई दिनु पालन्या वावु आमाले तेसै धन मध्ये आधि धन षर्च गरि वालष पालनु आधि धनले विहा गरि दि जोरहाको तेसै छोरिलाई दाइजो दिनु एस्का जन्माउन्या वावु आमावाट आयाको धन एसै छोरिलाइ दाइजो गरि दिंछु मेरो धनले विहा गरि दिंछु भन्या पनि पालन्याको षुसि त्यो छोरि मरि भन्या सवै धन संपति पालन्याको हुंछ एस्ता गाउ सहरमा फाल्याका कोहि रहाछन्भन्या अदालत ठानाले अैन वमोजिम् पालन लगाउनु वाहिर फेराको रहेछ भन्या अमालीले अदालत अडामा पुर्‍याई दिनु अडा वाला भारदारले संभारसित अदालतमा पठाइ दिनु फाल्याको वालषका वावु आमाको पछि पत्ता लाग्याका वालषहरूमा पालन्याले आफु भंदा ठुला जातको वालष ल्याई पालियाको रहेछ भन्या जाति धर्म थामि जात मिल्दासंग विहा गरि दिनु. समजात रहेछ भन्या आफना जातमा मिलाई लिनु. आफु भंदा कम जातको रहेछ भन्या षत्रि छोरो गरि राषनु एस्ता छोरालाइ अंस दिदा आफु भंदा उपल्लो जात र समजातकालाई जन्मायाका छोराले ३ षंडमा २ षंड पाया एस्तालाई १ षंड अंस दिनु. पानि चलन्या कम जातको रहेछ भन्या एस्तै का अैन वमोजिम्को अंस दीनु पानी नचलन्या र छोइ छिटो हालनु पर्न्या जातको रहेछ भन्या मिलदा जातलाई पालन दिनु. उसैका वावु आमाको अंस पाउछ पालन्याले दया मायाले दिया सम्मको मात्र पाउछ पालन्याका श्री संपतिमा दाइया लाग्दैन.

३०. वाटामा फाल्याका वावु आमाको पत्ता नभयाका वालष जस्ले ल्याई सहि संभार गरि पाल्याको छ त्यो बालष ब्राहाण जातले पाल्याको षत्रि ठहर्छ अरू गैन्ह जातले पाल्याको . जौना जातले पाल्याको छ उसैको जात ठहर्छ भात षाना नषानालाई पालन्याको षुसि कर लाग्दैन अंस वाडो गर्दा जन्मायाका छोरालाइ ३ षंडको २ षंड दिया एस्ता पाइ ल्यायाका छोरालाई ३ षंडको १ षंड दिनु जन्मायाका छोरा नभया पालन्या वावु आमाको काज कृया गरि लाग्याको साहु तिरि धन माल एसैले षान पाउछ अपुतालि षान्याले पाउदैनन्.

भिन्न नभै संग वस्याकामा घरको लिनु दिनु काज काम गर्न्या जानकारले अंस वंडा गर्दा आफ्नु जो भयाको घर षेत कमारा कमारि नगद जिनिस कसन् तमन् गैन्ह रिन धनको जस्ताको तस्तो षसो षास फाट नदी अंस दिनामा झेल गर्दा गर्न्या अैन----४

३१. आफुले जान्या सुन्या सम्मको जो भयाका रिन धनको जस्ताको तस्तो षसो षास फाट नदि अडिन्या तेस्तालाई फाट नदिया सम्म नेल ठोकि कैद गरि राषनु.

३२. फाट दियाको जति जति माल जो आउंछ अंस दिनु पर्न्या सवैलाई अैन वमोजिम् वाडि दिनु.

३३. फाट नदि झेल गऱ्या वावत् कैद पऱ्याकाले जैल्हे रिन धनको षसो षास फाट दिंछ उसैदिन फाट दीयाको माल अंस दिनु पर्न्या सवैलाई अैन वमोजिम् वाडि दि कैद पऱ्याकालाई अरूले फाट दियाकामा मंजुर गऱ्यो भन्या नेल काटी छोडी दिनु.

३४. अंस गर्दा षसो षास वंडा गरि दियाको रहेछ दवाया छपायाको कचहरिवाट हेर्दा केहि दसी प्रमान ल्याइ सावित गर्न सकेन र. केहि ठहरेन भन्या रिन धनको फाट दियेन भनी अत्व लगाई दुःष दिन्यालाइ समात्याका ज्माका सयकरा १० रूपैयाका दरले दंड गर्नु.

अैन राहाले थोरै पाउन्या वा कत्ति नपाउन्या ठहऱ्याकाले अंस अपुताली ज्यूनि गैन्ह अठ्याइ राषता गर्न्या कुराको अैन------३

३५. उसले लियाको नगद जिनिस घर षेत जगा जमिन चौपाया कमारा कमारि गैन्ह जो ठहर्छ फिर्ता गराई पाउन्याहरूलाई अैन वमोजिम् दिलाई दिनु.

३६. आफुले नपाउन्या ठहऱ्याको ज्यू जमिन धन माल गैन्ह दियेन भन्या वुझाउनु पर्न्या कुरा सवै नवुझाउदा सम्म नेल हालि कैद गरि राषनु.

३७. वुझाउनु पर्न्या ठहऱ्याको ज्यू जमिन् धन माल गैन्ह वुझाई ज्मान वंदी कायेलनामामा सहि हालि दिया पछि अैन वमोजिम दंड विसौद वक्सौनी गैन्ह जो हो ली नेल काटि छाडी दिनु.

आफुले नपाउन्या अंस अपुतालि ज्यूनि पेवा दाइजो दियेन भनी कराउन आउन्यालाई दंड गर्न्या अैन --- --- --- --- ---

३८. मलाई फलानाले अंस अपुताली दाईजो पेवा ज्यूनि दियेन भनि अदालत ठाना अमालमा कराइ पक्र्याई ल्यायो र निसाफ गर्दा नपाउन्या ठहऱ्यो भन्या तेस्तालाई उसैले समात्याका ज्माको सयकरा १० का दरले दंड गर्नु. जितन्यावाट दंडको चौठाई जिताउरि लिनु.

# लोग्न्या स्वास्नीको

१. कसैका विवाहिता कंन्या विधवा ल्याइता जारि गरि.ल्यायाको वेस्या केटि वघेत्या नि अघि आफुले स्वास्नि राष्याकालाई लोग्न्याले खानपिन नदीई छोडेछ अंगको भंग गरी कुटपिट पनि गरेछ भन्या उसलोग्न्या कि एउटै स्वास्निमात्रै रहिछ भन्या पनि अदालत ठाना अमालमा आई मलाई लोग्न्या सित छुट्याइ देउ भनि कराइ र. अंस लिंछु दिंछु भन्या स्वास्निको राजिनामा लेषाइ लि जौना जानकी स्वास्नि हो उसैका अैन वमोजिम् हिस्साको अंस गराई दिनु.

२. कसैले कमारि स्वास्नि राषी जाय जन्म भयाको रहेछ भन्या र. पार गरि स्वास्नि तुल्याई राष्याकि. तेस्ता स्वास्निलाई षान पिन नदी. अंग भंग गरि कन पनि कुटेछ र. तेस्ता स्वास्निले अदालत ठाना अमालमा आई म लोग्न्या देषी छुटिंछु भनी भन्या अैन वमोजिम्. चाहिन्या रित संग अंस गरि दिनु. दिलाई दियाका धनको दसौद लिनु.

३. विवाह गऱ्या कि स्वास्निलाई बीना विराउ सिन्को काटछु भनी सिंन्को काट्योर स्वास्नि कराउन आइ भन्या. वुझी लोग्याका अंसमा अैन वमोजिम् अंस गरि दिनु. दिलाइ दियाका अंसको दसौद लिनु.

४. लौग्न्याले स्वास्निलाई कुट्ता अंगको भंग पनी गऱ्यो हात षुट्टा भाचि दियो आषा फोरी दियो भनी. स्वास्नि फिराद गर्न आइ भन्या स्वास्निलाई अैन वमोजिम्को अंस दिलाइ लोग्न्यालाई कुट् पीट्का अैन वमोजिम्. सजाय गर्नु तेस्ता षुन भयाका स्वास्नि पोइ सित वस्तिन भनी. अंस लिगया भन्या सीन्को कटाइ छाडी दिनु. सत्यमा वस्नु नवस्नु स्वास्निको षुसि कर लाग्दैन. फिरा दगर्न आया षत वात पनि लाग्दैन भराई दियाका अंसको दसौद लिनु.

५. स्वास्निलाई वेहक्मा कुट पिट् गरि दियो र. फिदार गर्न आया भन्या पुर्पछ गरि. दिनु अर्कि राष्या कि स्वास्नि घरमा ल्याई. विवाहितालाई धपायो भन्या लोग्न्या संगका अंस लाग्न्या धन मा छोराको अंस. छोरीको विवा षर्च पर सारि लोग्न्या स्वास्निको वरोवर. अंस गरि दिनु. अंस वाडो भया पछी फेरी लोग्न्याले दियेन भन्या पक्रिल्याई विगा वरावर जरिवाना गरी उस्को अंस दिलाई दिनु.

६. आफना विवाहिता र दियो कलस पुजि कन्या ल्यायाका विधवा ल्यायाका स्वास्निले जात जान्या अमक्षकुरो षाया भन्या र. माहारोग भया कि भडारो फर्क्या कि फुकौनि निस्क्या कि रहिछ भन्या तेस्ता स्वास्निको करणी गरेन भनि लोग्न्यालाई दोस छैन. तेस्तालाई षान लाउन लोग्न्याले दिनु. षान. लाउन केहि दियेनन्. भनी स्वास्नि कराउन आइ भन्या अैन वमोजिम्को अंस दिलाई दिनु. भराई दियाका अंसको दसौद लिनु.

७. लोग्न्या पर्देस गयाको पनि छैन. रोगि पनि छैन. अरू स्वास्निहरू संग भन्या वरोवर जाँछन्. हामि विवाहिता संग भन्या वर्ष मा १ फेरा पनि करणि गर्दैनन्. भनि कोही स्वास्निले नालिस गर्न आया भन्या. तेस्ता तेस्ता स्वास्निलाई अैन वमोजिम्को अंस दिलाई दिनु त्यो पोइल गै भन्या. म. जार हान्या छैन मेरो अलाग भनी लोग्न्यावाटका कागज लेषाई दिनु. एस्ता स्वास्नि अर्का सित पोइल गया भन्या जार काट्न पाउदैन. काट्यो भन्या ज्यानको वदला ज्यान् जांछ.

८. सासु ससुरा जेठाज्यू देवर नंद आमाज्यू. सौताहरू संग झगरा परि पोइमन नपरि माइत र. अन्येत्रै वस्न्या स्वास्निले मलाई. षान लाउन दियानन्. मसित पनि सुत्तैनन्. भनी भंन आया स्वास्निलाई अंस नभराउनु. मेरि स्वास्निलाई नेल हालीदेउ भन्या राजिनामा लेषाई ली. नेल ठोकी लोग्न्याका सपुर्त गरि दिनु.

९. लोग्न्याले षान लाउन दिंछु मेरै घर वस माइत र. अरू नाता संम्वंध का घर नवस भंछ स्वास्नि अंतैगै वसी अंस माग्छे भन्या पाउदिन तेस्ता स्वास्निलाई घरैमा ल्याई नेल हालछु वक्साई देउ भन्यो भन्या. अदालत ठाना अमालबाट नेल दिनु. आफ्नी स्वास्निलाई केहिदिन कायम गर्न दिनु.

१०. लोग्न्याले वाहिर पनि स्वास्नि राष्याको छैन. वाहिरका स्वास्नि घरमा ल्यायाको पनि छैन. एउटि विवाहितामात्रै छ र तेस्ता स्वास्निले फिराद गर्न आया भन्या एस्ता झगरा नसुँनु एस्ता स्वास्निलाई उसैका लोग्न्याका सपुर्त गरि दिनु.

११. एकाघरमा लोग्न्या स्वास्नि छन्. लोग्न्याका साव गासले नपुगि आर्जन केहि सक्तैन षान लाउना निमित्त स्वास्निको दाइजो मासिषायो भन्या लोग्न्याले तिर्नु पर्दैन. लोग्न्याले दौलत् कमाया माति षर्च भयाकोछ स्वास्निले मागी लिनु.

स्वास्नीको दाईजो लोग्न्याले मास्यो वेच्यो स्वास्नीलाईसाछि राखेन भन्या त्यो मास्याको वेच्याको कच्चा ठहर्छ. स्वास्निलाई दिलाई दिनु. साहुको थैली लोग्न्यावाट भराई दिनु. धन पुगेन भन्या कपाली तमसुक गराई दिनु. स्वास्निका सल्लाहले वेच्या मास्याको. वेच्याका कागज मा स्वास्निको नाउ रहेछ भन्या किन्या वेच्याको सदर हुंछ.

१३. दाइजो हुन्या स्वास्निलाई हेला गरि. निकालि दियो अर्कि स्वास्नि ल्याई राष्यो भन्या त्यो निकालि दिया कि स्वास्निको पेवा दाइजो जो मासिदिदियाको छ लोग्न्याले तिर्नु पर्छ अदालत अमालवाट भराइ दिनु. भरायाका धनको दशौंद लिनु.

१४. कोहि सधवा स्वास्निको षसमंतिर्थ गर्न वेपाल गर्नवा राज काजले टाढा पर्देश गयाको रहेछ र. स्वास्निले षान लाउनलाई र. छोरा छोरीको विहा ब्रतवंध गर्नलाई कठिन पाऱ्यो र. आफ्ना ज्यू जमिन् वेचनु पर्दा आफना षसमको सनद मगाइ सनद वमोजिम् वेच्या उठायाको सदर हुंछ षसमको सनद नझीकाइ स्वास्निले आफना मौवासिले वेच्या उठायाको रहेछ लोग्न्या आई मंजुर गऱ्यो भन्या पनि सदर हुंछ. म. नभयाका वेलामा मेरि स्वास्निले ज्यू जमिन् वेचीछ फलानाले लियेछ भनि कराउन आयो भन्या स्वास्निले षायाको थैली तिरि निषानि लिन पाउछ.

१५. जेठी छँदै कांछिलाई ज्यूनि लेषि दियो भन्या कांछिका ज्यूनि वरावर. जेठी लाई ज्येठ्याक दिनु. कांछिलाई ज्यूनि दिंदा जेठीलाई पुगेन भन्या आधाआधा भाग वाडी दिनु. ज्येठीलाई ज्येठ्याक् नदि. कांछिलाई ज्यूनि दियाको रहेछ भन्या तेस ज्यूनि मा जेठीलाई आधि अंस दिलाई दिनु.

१६. आफ्नु लोग्न्या मऱ्याको सुन्या पछि सामेल भै जात का रितको जुठो नवार्न्या काज कृया नगर्न्या. आफु उहि भै. वेरामी. हुदामा. सहि संभार नगर्न्या घर छाडी. अंन्यत्र वस्न जान्या स्वास्निले एति कुरामा एउटै कुरो मात्रै गऱ्याको भन्याको भया पनि. अंस ज्यूनि गैह्र षान पाउदैनन्. नदिलाउनु लोग्न्याले कागज लेषी उदयाको भया. पनि सदर हुदैन.

# विधुवाका अंस धनको

१. स्वास्नि मानिसले आफनु लोग्न्या मऱ्या पछि. षसम्का सत्यमा वसी षेती पाति गरि भयो अरू केहि तरहले. आर्जन गरि जिविकका गरि रहाका स्वास्नि अर्कासित. पोइल गया भन्या अघिला लोग्न्याका सत्यमा वस्ता कमायाको धन माल नगद जिनिस्. वस्तु चाकरे गैह्र केहि पनि लिजान पाउदिन सवै संपति सघ पट्टि का छोरा छोरी र अरू अंस अपुताली षान्या हरूले अैन वमोजिम् पाउछन्.

२. एउटी स्वास्निले वेस्या भया पछि. पहिलेका लोग्न्याबाट १।२ छोरा छोरी भया अर्का लोग्न्या सित गै उसबाट १।२ छोरा छोरी भया फेरि तेसलाई पनि छाडी अर्का सित गै १।२ छोरा छोरि पाई अरू सीत पनि गै छोरा छोरीपाई भन्या. जौना जौना वावुका छोरा छोरि हुन्. आफना आफना वावुको अैन वमोजिम्को अंस विहा षर्च पाउछन्. आमाले वेस्या भै पछि कमायाको सबै पोइतिरका छोरा छोरिले अंस विहा षर्च वाडी लीनु. कचहरिबाट भराई दियाका. अंसको दसौद लिनु.

३. ४५ वर्ष नपुग्याका स्वास्निमानिसहरू कोही अर्कासित विग्र्याका वा जात पतित भयाका रहाछन् र यो कुरा जाहेर भया पछि. हामि केहि पाउन्या छौन भनी जगा जमिन् नगद जिनिस् ज्यू गैह्र वेच विषन दान दातव्य गऱ्याका रहाछन्. भन्या तेस्ताले विग्र्याको जाहेर नहुदैमा वेच्या उठायाको भया पनि सदर हुदैन. अपुताली षान्या भाई साछि राषि वेच्या उठायाको र. अदालत ठाना अमालमा १ ठाउ साछि राषि उठाया वेच्याको भया त्यो स्वास्नि अर्का सित पोइलगयाकि रहीछ जाहेर भयाको रहेनछ. भन्या पनि तेसले वेच्या उठायाको सदर हुंछ अपुतालि षान्यामा पनि कोहि साछि वस्याका रहानछन्. अदालत ठाना अमाल ई ४ मा एक जगा पनि साछि राष्याको रहेनछ र. वेच विषन दान दातव्य गरि. अर्का सित पोइल गया कि रहिछ भन्या. तेस्ता स्वास्निले वेच्या उठायाको सदर हुदैन.

४. कसैको लोग्न्या मऱ्यो स्वास्नि विधवा भै षसम का सत्यमा वस्याकामा अंस भै छुट्टियाका हउन वा. अंस वंडा नगरि संगै वस्याका हउन एस्ता स्वास्निले. आफना अंसका घर षेत ज्यू जमीन ४५ वर्षको उमेर नहुंज्याल उठाउन वेचन पाउदैनन्. षान लाउनलाई नपुगी ज्यू जमिन् घर षेत वेचता वाधा राषाता अपुतालि षान्या भाइ छोरा साछि राषी उठायाको सदर

हुंछ अपुताली षान्या साछि वसि दियानन् भन्या जाहानलाई षान लाउन संम र. मुनासिव माफिक्को दान दातव्य गर्दा अदालत ठाना अमाल साछी गरि षान अनुसार वेचनु र मुनासिव माफिक दान दातव्य गर्न पाउछन् ४५ वर्ष नाघ्या का स्वास्निहरूले आफना अंसका ज्यूनी पेवा घर षेत ज्यू जमिन् नगद जिनिस कसं तमन् जवाहेर. गैह्र जो भयाको श्री संपतिमा दान पुण्य वेच विषन आफनु षुस गर्नु पाइछ दाज्यू भाई अदालत अमाल वस्नु पर्दैन.

५. चार वर्ण छतिसै जातका लोग्न्या नभयाका स्वास्नि मानिसहरूले ४५ वर्षको उमेर नपुग्याको भया पनि आफुलाई वेथालागि असाध्य भयाका वषतमा र. सतिजादामा अैन वमोजिम्. आफनु अंस ज्यूनि पेवा धन संपति जगा जमिन्. चौपाया कमारा कमारि मध्ये सयकरा १० का हिसावले आफुनु क्रिर्या षर्च लाई पर सारि वाकि रह्याको दान पुण्य गर्न पाउछन् तिनले दान पुण्य गर्‍याको सदर हुंछ पाउन्याको पनि पक्का हुंछ क्रिया षर्चलाई सयकरा १० भन्दा वढता वाकि राषछन् भन्या पनि स्वास्नि मानिसको षुसि पछि वाचन् गया भन्या पनि दान गर्‍याको विसही हुदैन.

६. अंस नभै एका घरमा संग रह्याका छोरा नहुन्या विधवा स्वास्निहरू कसैले तिमिहरू सित संग वस्तिन अंस द्यौ र. वेगलै वसछौं भन्या छन् र उन्का सासु ससुरा देवर ज्येठा ज्यू सौता द्यौरानी ज्येठानी सौताका छोरा र भतिजाहरूले हामिले लाया षाया सरहको लाउ षाउ हामिले गर्‍या वमोजिम्को दान पुण्य गर भनि मुषले पनि भंदा रह्याछन्. सोही वमोजिम् कामले पनि गर्‍याका रहाछन् भन्या छोरा नहुन्या विधवा स्वास्निले अंस ली अंत गै वस्न पाउदैनन्. संगै वस्नु पर्छ. आफना सरहको षान पाउन र. दान पुंण्य गर्न दियाका रह्याछन्. न वा. पैल्है अंस लि भिन्नै वस्याका रह्याछन्. वा सौता सौता मात्रै रह्याछन्. भन्या. अैन वमोजिम्को आफ्नु अंस लि वेगलवसि षन पाउछन्.

७. छोरा नहुन्या विधवा स्वास्निलाई उन्का सासु ससुरा देवर जेठाज्यू सौता द्यौरानि ज्येठानी सौताका छोरा र. भतिजाहरूले हाम्रा सरहको लाउ षाउ हामिले गर्‍या वमोजिम्को दान पुंण्य गरि घरैमा वस घर छोडी माइत र. अरू नाता सम्वंधका घर वस्न नजाउ. भंदा रहाछन्. ति कुरा न मानि घर छोडी माइत र. अन्यत्र गै वस्न्या स्वास्निले लैगयाको धन माल गहना गैह्र पनि वुझाउनु पर्छ. वाहिर वस्ता रीन लाग्यो भन्याको पनि घर तर्फ वाट तिरि दिनु पर्दैन.

# वक्स फिर्ता गरायाको वाडनाको

१. एका घरमा संग छदा अंस वाडन्या साजा जगा जमिन. घर षेत गैह्र सर्कार लाग्याको छ भाइ भिंन भया पछि कोहि भाइले सर्कार रिझाइ हरियाको सर्वस्व जमिन् जगा फिर्ता गरि पायो र. अंसियार भाइहरूले हामि पनि अंस पाउन्या हुं भनी षोज्या भन्या फिर्ता गरि. वक्स्यौ भन्या मोहोर. माएकौटी गरि. षानु भन्या रहिछ भन्या भाइहरूले पाउदैनन्. जसले पायाको हो उसैले षानु. गोसवारा मोहोर छ. छेडियाको छैन. भन्या र फिर्ता गरि बक्सौ भंन्या मात्रै छ. भन्या भाइहरूले अंस गरि लिन पाउछन् ३ साल सपुत्याइ सर्कारवाट. पाउन्याले दुवै वोटि भोग गरि षानु. चौथा साल देषी भाइ अंस गरि वाडि षानु.

२. एका घरसंग छदाको सर्कारवाट जफत भयाको र. थुनुवा भयाको सर्कारवाट निकासा नभै रह्याको वकस् दर्ददर्माहा वालि भाइ भिंन भया पछि एक जनाले सर्कार रिझाइ वक्स फिर्ता पायो र. अंसियार भाइले हामी पनि पाउन्या हूं भनि दाइया गर्न आया भन्या फिर्ता वक्सदा फिर्ता वक्सौ भंन्या मात्रै भयाको रहेछ भन्या सर्कार रिझाइ निकासा गर्न्या भाइलाई दसौद दि बाँकिमा.निकासा गर्न्या र अरू सवै भाइले अैन वमोजिम् वाडी षानु पर्छ तलाई वक्सौ भंन्या भयाको रहेछ भन्या जश्ले पायाको छ उसै भाईले एकौटि गरि सवै षानु. अरू भाईले पाउदैन.

# दाइजो पेवा

१. कसैका विवाहिता २।३ स्वास्नि छन् छोरा छैनन्. कसैका छोरी मात्र छन् छोरीका आमाले दान दातव्य गरि छोरि जुवाञी गैन्ह कसैलाई दिंछु भनि ज्मा धन उठाउदा सवै सौताहरू वसि कागज पत्र गरि दियाको भयासदर हुंछ सौताहरू साछि वस्याका छैन भन्या आफना अंस जति उठायाको मात्रै सदर हुंछ. सौताहरूको अंस उठायाको सदर हुदैन.

२. षसम पनि छैन आफुले जन्मायाका र. सौता तिरको छोरा पनि छैनन्. तेस्ता स्वास्निले छोरिहरूलाइ दातव्य गरि रहाका आधि धनमा छोरीहरूको र. अपुताली षान्या भाइको भाग लाग्दैन. आफना षुसले जसलाइ दिन्छे उसैको हुंछ. उस्का जीयले उठाइ वाकि रहाकाले तेस्तो काज कृया गरि जोरहंछं त्यो अघि उस्का हातले उठाइ साछि श्रोता राषि दातव्य लेषी दियाको रहेछ भन्या उस्ले पाउछ. रहेनछ भन्या. लोग्न्या एका वाज्यावाट जन्म्याका ज्येठा कांछा वावु दाज्यू भाइ छोरा भतिजा नाति र. ज्येठि कांछि आमा भाउज्यू वुहारिहरू भया उनले पाउछन्. उस्ता न भया वावु आमाको काज कृया गराइ रहाको सवै छोरिले अैन वमोजिम् वाडि षानु.

३. कसैका स्वास्निहरू ढेरै छन्. छोरा छैनन् २।३ आमा पट्टीका छोरि मात्र छन्. वावु चाहि मऱ्यो र. कसैका आमा पनि मऱ्या कसैका आमा वाच्याका छन् र. वाचन्या चाहि आमाले जो भयाको दान दातव्य गरि दिंछु भनि भन्या ज्मा धनमा आधि आफना जिवि. कालाई राषी आधिमा आफना षसमवाट जन्म्याका छोरीलाइ अैन वमोजिम्का रीत सित दियाको पक्का हुंछ.

४. कसैका लोग्न्या छैनन्. छोरा पनि छैनन्. सासु वुहारि दुवै विधवा छन्. सासु कि छोरि छ छोरीलाई दातव्य दिंछु भनी भन्या आफ्ना छोरीलाई आफनु अंस दातव्य दियाको पाको हुंछ वुहारिका अंस मध्ये दियाको पाको हुदैन वुहारि कि पनि छोरी रहिछ. म पनि मेरा अंसमा दातव्य दिंछु भन्या आफनु अंस दियाको पाको हुंछ वुहारिको हिस्सा नराषि सासुले छोरीलाई दियाको र. सासु को हिस्सा नराषि वुहारिले छोरिलाई दियाको कच्चा ठहर्छ फिराद गर्न आया भन्या दुवैको अैन वमोजिम् अंस गरि दिनु.

५. कसैका आफना वावु वाज्याहरूले दातव्य गरि दियाको उनैका पाला देषी दातव्य पाउन्याले भोग गरि आयाका जगा जमीन् नगद जिनिस् कमारा कमारि चौपाया गैह्रमा दातव्य गरी दिन्याका भाइ छोरा नातिहरूले पछि झगरा गर्न आया भन्या दाज्यू वावु वाज्याले दि भोग गरि आयाको रहेछ भन्या र पत्र पात्र गरि दियाको रहेछ भन्या दान पाउन्याको सदर गराइ थामि दिनु. दान दिन्या मऱ्या पछि फलानाका वावु वाज्या दाज्यूले मलाई फलानु कुरा दान गरि दियाको मैले पायाको छैन. भनि कोही कराउन आयो भन्या पत्र पात्र रहेछ भन्या पनि दिनु नदिनु. दाताका संतानको षुसी १६ वर्षदेषी वटो को दान रहेछ दान दियाको दाताले विहोरायाको रहेनछ भन्या साछि श्रोतावोलाई पत्र पात्र हेरि ठहऱ्या वमोजिम् दिलाई दिनु. १६ वर्ष देषीअघिको दान भया त्यो झगरा नसुँनु दिनु नदिनु. दाताको र दाताका संतानको षुसी.

६. माइतिले दियाको दाइजो दातव्य पाउन्या आमाका छोरा. रहानछन्. नविग्ऱ्या का छोरि पनि रहानछन्. विवाहिताको सत्य छोडि पोइल गया कि छोरी रहाछन् भन्या त्यो दाइजो दातव्य पोइल गया कि छोरिले पाउदिन. त्यो दाइजो विवाहीता लोग्न्याको हुन्छ उ पनि नभया मर्न्याका ससुराले जन्माका छोरा देवर ज्येठाज्यू र देवर ज्येठाज्यूका छोराले पाउछन् अैन मा लेषीयाका दाइजो पेवा दातव्य षाना फिराउन पाउदैनन्. कोही नभया धन अनुसार देवालय पाटि पौवा सदावर्त दान दातव्य गराई दिन्छन् भन्या पनि आफु लिंछ ता पनि दाइजो दिन्या माइतिको षुसि.

७. कसैले छोरीलाई दाइजो दियाको रहेछ र. त्यो छोरी मरि भन्या मर्न्याका छोरा भया छोराले पाउछ उ पनि नभया उसै मर्न्याका विवाहिता लोग्न्याले पाउछ उ पनि नभया छोरिले पाउछ . उ पनि नभया मर्न्याका सैतीन्या पट्टीका छोराले पाउंछन्. यतिमा कोहि नभया मर्न्याका ससुराले जन्मायाका छोरा देवर ज्येठाज्यू देवर ज्येठाज्यूका छोराले पिंड पानि चलाई षान पाउछन्. एतीमा यक जना छनज्याल. माइतिले दाईजो फिराउन पाउदैनन. कोही रह्यानछ. भन्या दाइजो मर्न्या छोरीका नाउमा धन अनुसार देवालय. पाटि पौवा सदावर्त दान दातव्य गराइ दिंछ भन्या पनि आफु लिंछन्भन्या पनि दाइजो दिन्या माईतिको षुसी.

८. व्राह्मण लगायत. तागाधारि जात र नमासिन्या मतवालि जात गैह्रका सधवा स्वास्नि करणिमा विग्री भन्या. स्वास्निको नाक नकाटिन्या हुनाले एस्ताले आफ्नु दाइजो पेवालि जान.

पाउदैनन्. तेस्का छोरा भया छोराले नभया विवाहिता लोग्न्याको हुंछ लोग्न्या पनि रहेनछ भन्या छोरीले पाउछे उ पनि नभया पोइल जान्या स्वास्निका विवाहिता पट्टीका ससुराले जन्मायाका. छोरा देवर ज्येठाज्यू र देवर ज्येठाज्यूका छोराले षान पाउंछन् उ पनि नभया जस्ले दाइजो पेवा दियाको हो उसैको हुंछ अदालत अमालवाट.दसौद लि भराई दिनु. एस्ता कुरामा दाइजो पेवा षान पाउन्या अैनमा लेषियाका वारिस वाला कोहि कराउन आया भराइ दीनु. कराउन नआया भराउन पर्दैन. अदालत अमालवाट वारिस वालाको षोजि गर्नु पर्दैन.अैनमा लेषीयाका.वारिस वाला कोहि रहानछन् भन्या अपुतालि षान्याले त्यो दाइजो पेवा षान पाउदैनन्. उसै स्वास्निले आफ्नु दाइजो पेवा लि जान पाउछे लैजान दिनु.

१०. चार वर्ण छतिसै जात गैह्रले छोरी वेटिलाई दाइजो दातव्य गैऱ्ह दिंदा सनद पत्र साछि श्रोता गरि दियाको कुरा पाउन्याले भोग गरि षाई चर्ची आयाको कुरा छोरिले दाइजो दातव्य पाइ जुवात्रिका घरमा पुऱ्यायाको कुरा सदर ठहर्छ. विहोराइ दिनु दाइजो दातव्य पाउन्याले भोग गऱ्याको पनि रहेनछ. साछि सनद पनि केहि रहेनछ भन्या र. माइतिका घरैमा रहाका कुरालाइ. फलानु. कुरो ता हामिलाइ दियाको हो भन्न आया सदर हुदैन. पाउदैनन्.

११. दाइजो दातव्य पाउन्या छोरीहरू कसैले आफ्नुले पायाका दाइजो दातव्यका ज्यू जमिन् नगद जिनिस्. गैऱ्ह थामन नसकि वेच्या वेचन लाग्या भन्या अैन वमोजिम् दिन ३५ भित्रमा मोष्य दाइजो दिन्या र. दिन्याका संतानले. उस्ता नभया दाइजो पाउन्याका एका वावुवाट जन्म्याका दिदि वैन्हि र दिदि वैन्हिका संतान आइ देसिले दियाको थैली हाम्राघर. घरानावाट दिंछौ भन्न आया भन्या देसिले पाउदैनन्. इनै दाइयादारले लिन पाउछन्.

९. कसैलाइ माइतिले दाइजो दातव्य दियाको रहेछ त्यो स्वास्नि अर्कासित पोइल गैछ र तेस्को दाइजो पेवा षान पाउन्या अैनमा लेषीया वमोजिम्मा वारिसवाला कोहि नहुदा जो भयाको दाइजो दातव्य पेवा स्मेत लि गयाकि रहिछ तेहि स्वास्नि पछि अरू २।३ जनासित पोइल गै छोरा छोरी पायाकि रहीछ भन्या त्यो दाइजो पेवा सवै पोइ तिरका छोरा छोरीलाई अैन वमोजिम्. वाडि दिनु.

१२. तागाधारि लगायेत. पानी चलन्या सम्मका विधवा स्वास्नि आफु भंदा उपल्ला जात र. आफु मिल्दा जातमा पोइल गया भन्या तिन्का माइति मावली गैन्हले पक्का गरि. दाइजो दातव्य दियाका ज्यू जमिन. नगद जिनिस गैन्ह जो छ तेस्का छोरा भया छोराको नभया छोरीको हुंछ. छोरि पनि नभया तेहि विग्रन्या स्वास्निले लैजान पाउछे लैजान दिनु. आफु भंदा घटी पानि चलन्या जातमा. पोइल गै भात्मा वोऱ्याको भया २० रूपैया दंड गरि भात्मा वोऱ्याकि नभया दंड हुदैन. तेसै विग्रन्या स्वास्निले आफ्नु दाइजो दातव्य लैजान पाउछे पानी नचलन्या जात र छिटो हालनु पर्न्या जात्मा पोइल गयाकि भया भात्मा वोरोस् नवोरोस दाइजो दातव्य लि जान पाउदिन तेस्को छोरा भया छोराको छोरा नभया छोरिको हुंछ छोरि पनि नभया सौतिन्या छोराको हुंछ. सौतिन्या छोरा पनि नभया. उस्का विवाहिता लोग्न्यालाइ जन्माउन्या सासु ससुरा र उनवाट जन्म्याका देवर ज्येठाज्यू र देवर ज्येठाज्यूका छोराले पाउछन्. उपनि नभया तेहि दाइजो दातव्य दिन्या माइतिको हुंछ अैनमा लेषीयाका वारिसवाला कोहि नभया. त्यो दाइजो दातव्य सर्कारको हुंछ. सर्कार लगाइ दिनु. अर्कासित विग्री वा जात पतित भया पछि. माइति मावलीले दया माया गरि. पछि दियाको ज्यू जमिन नगद जिनिस गैन्ह जो छ अरू वारिस वालाले लिन पाउदैनन् तेहि विग्या कि स्वास्नीको हुंछ लैजान दिनु.

१३. तागाधारि लगायेत् . चारवर्ण छतिस जातका विधवा स्वास्निले आफु भंदा घटी पानी चलन्या सम्मका हातको भात षाई भयो वा अरू जात जान्या भक्ष्य षाइ. भात वाहेक भया भन्या तेस्ताले आफुलाइ माइति मावलीहरूले पक्का गरि दियाको दाइजो दातव्य जोछ तेस्का छोरा भया छोराको छोरा नभया छोरीको हुंछ छोरि पनि नभया भताहालाइ भात्मा वोऱ्याकी भया २० रूपैया दंड गरि भात्मा वोऱ्याकि नभया दंड हुदैन. तेसैले जो भयाको दाइजो दातव्य लि जान पाउछे लैजान दिनु. पानी नचलन्या र छिटो हालनु पर्न्या जातका हातको भात पानी षाइ जात पतित भयाकिले अर्कालाइ भात पानिमा वोऱ्याकि भया पनि नभया पनि दाइजो दातव्य लि जान पाउदिन तेस्को छोरो भया छोराको छोरा नभया छोरीको हुंछ. छोरि पनि नभया सौतिन्या छोराको हुंछ उपनि नभया विवाहिता लोग्न्यालाइ जन्माउन्या सासु ससुरा र उन्वाट जन्म्याका देवर. ज्येठाज्यू र. देवर ज्येठाज्यूका छोराको हुंछ उपनि नभया तेहि दाइजो दातव्य दिन्या माइतिको हुंछ अैनमा लेषियाका वारिस वाला कोहि नभया त्यो दाइजो दातव्य सर्कारको हुंछ.

अंस लि छुट्टिया पछि आफनु अंस षाइ उडाइ सक्या पछि. दुःख पायाको देषी दयामायाले पछि कसैले दियाको ज्यूजमिन्को वाली षान मात्र पाउछ. वेचन उठाउन पाउदैन जस्ले दियाको हो उसैको हुंछ भंन्या र. आजसम्म दित्राथ्या अव दिंन भन्या पनि लिन पाउछ भन्या अैन --- --- --- ---

१४. कसैका दाज्यू भाइ छोरा वुहारि भाउज्यूहरूलाइ अंस वंडा गरि छुट्टा याको रहेछ आफनु अंस षाइ लाइ उडाइ सकेछ र. उस्का वावु आमा दाज्यू भाइले दया माया गरि एति षा भनि केहि जगा जमिन् कमारा कमारि दियाको रहेछ कागज पत्र लेषी मायामारि दियाको रहेनछ भन्या जगाजमिनको वाली षान लाउन र कमारा कमारीको काम लिन मात्रै पाउछ दान दातव्य वेच विषन गर्न पाउदैन त्यो मऱ्या पछि. तेस्को अपुतालि षान्याले पनि लिन पाउदैनन् जस्ले दियाको हो उसैको हुंछ आजसम्म दित्राथ्या अव मलाइ चाहियो दींन भन्या पनि लिन पाउछ.

# अपुतालीको

१. कसैका एका वाज्यावाट जन्म्याका छुट्टियाका ज्येठा कांछा वावु दाज्यू भाई छोरा भतिजा नाति र. ज्येठी कांछि आमा. भाउज्यू वुहारिहरू पनि छन्. एका भाइ कि एउटै छोरि मात्र छ वावु मऱ्यो र. अपुताली पऱ्यो भन्या. वावु आमाले छोरिलाई कागज लेषी साछि श्रोता राषीदिया. को रहेछ भन्या. त्यो अपुताली छोरिले पाउछे. एका वाज्यावाट जन्म्याका जेठा कांछा वावु दाज्यू भाइ छोरा भतिजा नाति र. ज्येठी कांछी आमा भाउज्यू वुहारिहरूले पाउदैनन् कागजपत्र लेषीदियाको पनि रहेनछ साछि श्रोता पनि कोहि राष्याको रहेनछ भन्या छोरिले पाउदिन. एका वाज्यावाट जन्म्याका जेठा कांछा वावु दाज्यू भाइ छोरा भतिजा नाति र. ज्येठी कांछी आमा भाउज्यू वुहारिहरूले अपुतालि षान पाउछन्.

२. कसैका वावु मऱ्यो एका वाज्याका छोरामा जेठा कांछा वावु दाज्यू भाइ छोरा भतिजा नाति र. ज्येठी कांछि आमा भाउज्यू वुहारिहरू कोहि रह्यानछन्. विवाहिता पट्टीका वा ल्याइता पट्टिका छोरि मात्र रहाछन् भन्या विवाह भयाका हउन नभयाका हउन छोरिले वावुका साहु पनि तिर्छौं अपुतालि पनि षांछौ भन्या. तिनै छोरिले पाउछे टाढाका दाज्यूभाइले पाउदैनन् काज कृया गराउनालाइ सद्य छोरी सद्य छोरीको छोरा रहेछ भन्या तिनैले गर्नु अरू कृया गर्न्या अधिकारकालाई कृया गर्न लाउछन् भन्या पनि लाउन हुंछ. कमसल पट्टी कि छोरी रहिछ भन्या र कृया गर्न्या अधिकारकालाई षोजी कृया गराई अपुताली कमसल पट्टीकी छोरी र छोरीका छोराले पनी षान पाउछन् असल पट्टिका पनी कमसल पट्टिका पनि छोरी रह्याछन् भन्या काज कृयाको अधिकार हुनाले काज कृया भन्या सद्यले गर्नु पर्छ काज कृया गराइ रह्याका अपुतालीमा सद्य पट्टिकाले र कमसल पट्टीका छोरीले अैन वमोजिम वाडी षानु. असल पट्टीका नभया कमसल पट्टीकाले पाउछन् एस्ता कुराको फिराद पऱ्यो भन्या एसै अैन वमोजिम् गरि छिनी दिनु. भराई दियाका धन संपत्तिको अदालत अमालवाट दसौद लिनु.

३. वावुहरू जन्म्याका एका वाज्याका संतानमा ज्येठा कांछा वावु दाज्यू भाइ छोरा भतिजा नाति र ज्येठीकांछा आमा भाउज्यू वुहारिहरू कोहि छैनन्. विवाहिता ल्याइता रषुइ तिर का छोरिहरू ढेरै छन्. तिनमा कसैको विवाह भयाको छ. कसैको छैन भन्या विवाह नभयाका छोरिलाइ अैन

वमोजिम्को विहा षर्च परसारी वावु आमाको काज कृया गरि वाकि रह्याका धनमा विवाह भयाका नभयाका सवै छोरिले अैन वमोजिम् वाडि षानु.

४. छोरा छैनन् छोरि छ वावु मऱ्यो र छोरिले वावुको साहु पनि तिर्दिन अपुतालि पनि षंन भन्या छोरिलाइ कर लाग्दैन टाढाका दाज्यू भाइ कसैले अपुताली षांन्रौ साहु पनि तिर्दौन भन्या उनलाइ पनि कर लाग्दैन नजीकका दाज्यू भाई रह्याछन् भन्या कृया गर्नु पर्छ अपुताली षानाको र. साहु तिर्नाको कर लाग्दैन. मर्न्याको अपुताली जो छ. सवै ज्मा गरि साहुका थैली जम्मामा दामासाहि गरि वाडि दिनु. दाग दिन्या काज कृया गर्न्यालाइ साहुहरूका षटौनले कृया षर्च दि वाकि लिनु.

५. कसैका आफ्ना एका वाज्यावाट जन्म्याको जेठा कांछा वावु दाज्यू भाइ छोरा भतिजा नाति र ज्येठी कांछी आमा भाउज्यू वुहारिहरू कोहि छैनन् आफना छोराका छोरि नातिनि छन् अघि वावु मऱ्यो पछि वाज्या वज्यू मऱ्या र अपुताली पऱ्यो भन्या वाज्या वज्यूको काज कृया पनि गर्छु लाग्याको साहु तिरि अपुताली पनि षांछु भन्या टाढाका दाज्यू भाइले त्यो अपुताली पाउदैनन् छोरा कि छोरि नातिनिले काज कृया गरि साहु तिरि. अपुताली षान पाउछे.

६. कसैका आफना एका वाज्यावाट जन्म्याका ज्येठा कांछा वावु दाज्यू भाइ छोरा भतिजा नाति र ज्येठी कांछि आमा भाउज्यू वुहारिहरू कोहि छैनन्. आफुजन्मायाका छोराका संतान पनि छैनन्. छोरि मात्र थि छोरि पनि वावु आमा भंदा अघिवाट मरिछ छोरिको छोरो रहेछ वाज्या मरि.अपुताली पऱ्यो भन्या वाज्यावज्यूको काज कृया पनि गर्छु साहु तिरि अपुताली पनि षांछु भन्यो भन्या छोरीका छोरिले काज कृया गरि लाग्याको साुह तिरि वाज्या वज्यूको अपुताली षान पाउछ टाढाका दाज्यू भाइले पाउदैनन्.

७. कसैका आफना एका वाज्यावाट जन्म्याका ज्येठा कांछा वावु दाज्यु भाइ छोरा भतिजा नाति र ज्येठी कांछी आमा भाउज्यू वुहारिहरू कोहि छैनन् वावु कि पनि छोरि छ. छोरिकी पनि छोरि छ. अघिवाट वावु मऱ्यो. पछि छोरि मरि अपुताली पऱ्यो भन्या वावुको काज कृया पनि गर्छु. रिन पनि तिर्छु. धन पनि षांछु भन्या छोराकि छोरिले पाउछे. वावु चाहिकी छोरिले पाउदैनन्. अघिवाट छोरो मऱ्यो. पछिवावु चाहि मरि अपुतालि पऱ्यो भन्या. तिन्का धनमा वावु छोराको

२ भाग गरी साहु पनि तिर्छु धन पनि षान्छौ भन्या वावु चाहिंका भागमा वावुचाहिं का छोरिहरूले छोरा चाहि का भागमा छोराका छोरिहरूले अैन वमोजिम भाग गरि षान पाउछन्.

८. कसैका आफना एका वाज्यावाट जन्म्याका ज्येठा कांछा वावु दाज्यु भाइ छोरा भतिजा नाति र ज्येठी कांछी आमा भाउज्यू वुहारिहरू कोहि छैनन् छोरि रहिछ अघि वावु आमा मऱ्या छन् पछिवाट दाज्यू भाइ मरि अपुताली पऱ्यो भन्या. एका वावुवाट जन्म्याका छोरिले आफना आमा वावुको पींड पानि पनि चलाउछु. दाज्यू भाईको काज कृया पनि गर्छु वावु आमा दाज्यू भाइका साहु तिरि जो भयाको अपुताली पनि षांछौ भन्या एका वावुका छोरि हुनाले इनै दिदि वैन्हिले षान पाउछन् टाढाका दाज्यू भाइले षान पाउदैनन्.

९. तागाधारि लगायेत जार हांन्या नमासिन्या मतुवाली जात सम्मका कसैका एका वाज्यावाट जन्म्याका ज्येठा कांछा वावु दाज्यु भाइ छोरा भतिजा नाति र ज्येठी कांछि आमा भाउज्यू वुहारिहरू कोहि रहानछन् छोरि मात्र रहिछ त्यो छोरि पनि विवाहिता लोग्न्याको सत्य छोडी दियो कलस पूजि अर्काले लैगयाकि रहिछ वा. विग्री वेस्या भै पोइल गया कि रहिछ भन्या तेस्ता छोरिले वावु आमाको अपुताली षान पाउदैन. सद्य छोरि भया सद्यले पाउछन् उस्ता नभया अपुताली षान्या टाढाका दाज्यू भाइले पाउछन् उस्तापनि कोहि नभया त्यो अपुतालीका धनले मर्न्याको काज कृया गराइ लाग्याका साहु तिराइ जो वाकि रहाको सर्कारको हुंछ सर्कार लगाइ दिनु.

१०. यौटाको कमारो यौटाकि कमारिसित वस्याको छ दुवै मरि अपुताली पऱ्यो भन्या कमाराको धन कमारैका धनिको हुंछ कमारिको धन कमारिकै धनिको हुंछ कमाराले आफनी. स्वास्निलाइ दियाको धनमा ल स्वास्निकै हुंछ. अरूले लिन पाउदैनन्.

११. वावु चाहि षसम्का घर रहाको छ. छोरा छोरी विकि अनेत्र गयाका र दातव्य दाइजो दि अंतै गयाका छन् वावु चाहि षसम्का घर मऱ्यो भन्या बेचि दान दातव्य गरि दि सक्याका छोरा छोरिले वावुको अपुताली षांछु भन्या पाउदैन विक्याका दाइजो दियाका छोरा छोरिवाट वावु आमाको धनले काज कृया गराइ रहाकामा सयकरा १० रूपैया कृया गर्न्या छोरा छोरि लाई दि रहाको षसमले षानू षसम्ले पाउछ.

१२. कमारा कमारि पार भै एका अम्वलमागै धुरी धुवाइ तिरो भरो गरि वस्याका छन् पार भया पछि जन्म्याको छोरा छोरि छैनन् पार नहुदै जन्म्याका कमारा कमारि छोरा छोरि एकै अंवलमा छन् भन्या पनि अर्कै अम्वलमा रहाछन् भन्या पनि अपुताली उस्का छोरा छोरीले षान पाउछन् अमालि धनिले पाउदैनन् सर्कार पनि लाग्दैन.

१३. स्वास्निले लोग्न्यासंग अंस लियेर छुटिया पछि तेस्ता स्वास्नी पोइल गया भन्या जार हांन्या विहोरा कि स्वास्नि रहिछ भन्या जार हान्न पाउछ विहा षर्च लिन्या वीहोरा कि स्वास्नि रहिछ भन्या विहा षर्च लिन पाउछ दण्ड हुन्या विहोराकि रहिछ भन्या दंड गराउन पाउछ मुडन्या जातकि रहीछ भन्या मुडन पाउछ तेस्ता अलग वस्याकि स्वास्नि मरि भन्या काज कृया गरी लोग्न्याले अपुताली षान पाउछ धन छैन भनी आफना स्वास्निको काज कृया गरेनछ भन्या २० रूपैया दंड गरि लि काज कृया गर्न लाउनु रूपैया नतिऱ्या मैन्हाका ५ रूपैयाका दरले कैद गर्नु.

१४. सिन्को काटि छोड्याका र पाचुके गरी वेस्या भै माइत आइ माइतिले वेगलै घर तुल्याइ राख्याका र आफनै मानु षाइ रहाका स्वास्नि मऱ्या भन्या तेस्का धनले माइतिवाट कृया गराई रहाका अपुताली आधा अमालिले आधा माइतिले लिनु. माइतिका छिम्याकमा वस्या कि रहिछ त्यो मर्दा माइतिले मुर्दा पनि उठायानन्. काज कृया पनि गरेनन् भन्या जात मिल्दो मानिस लगाइ काज कृया सतगति गराइ जो रहाको पेवा ज्यूउनि दाइजो मध्ये तेसले लायाका साहु तिराइ रहाको अमालीले षानु.

१५. लोग्न्याले सिन्को काटि छोड्याका र. पाचुके गऱ्याका स्वास्नि आफनै मानु षाइ वेगलै घर गरि वस्याका मऱ्या र. अपुतालि पऱ्यो भन्या तिन्को दाइजो पेवा जो भयाको धन माल मध्ये अदालत ठाना अमालवाट जात मिल्दो मानिस लगाइ काज कृया गराइ वाकि रहाका अपुताली मध्ये उस्ले लायाका साहु तिराई वाकि रहाको अदालत ठाना अमालवाट लिनु अपुतालि माइतिले पाउदैनन्.

१६. सिन्को काटि लोग्न्याले छोड्याका र. पाचुके गरि माइत आइ माइति कै घर वस्याका माइतिहरूले षान लाउन दि पाल्याका स्वास्निहरू मऱ्या र अपुतालि पऱ्यो भन्या तिन्को दाइजो पेवा जो भयाको आल मालले माइतिहरूवाट कृया वर्षि गर्दा जो लाग्याको षर्च लगाइ तेस्ले लायाको साहु तिरि वाहि रह्याको आलमाल माइतिले षानु अपुताली षान्या दाज्यू भाइ र अमालीले पाउदैनन्.

१७. विंर्ता वितलव मरौट् वेष छाप माना चावल ज्यूनि गुठि गैह्र चाकचकुइ मऱ्यो अपुताली सर्वाक माफि जगाका कोही मरि अपुताली पऱ्यो भन्या अपुताली षान्या दाज्यू भाइ भतिजा छोरी ताढाका दाज्यू भाइ भया मर्न्याको काज कृया गरि लाग्याको साहु तिरि रह्याको अपुताली एतिमा अैनले जसले पाउन्या हो उसैले षानु उस्ता कोहि नभया जगाका धनीले जात मिल्दो मानिस षोजी काजकृया गराइ साहु तिरि रह्याको अपुताली षानु. जगाका धनीले अपुताली षा न्न भन्या कर लाग्दैन. साहुलाइ दामासहि गरि वाडि दिनु. काज कृया भन्या जगाका धनीले तेसैका अपुतालीका धनवाट गराइ दिनु.

१८. क्या देसी. क्या हाम्रा मुलकमा मरि अपुताली पर्न्याका दाज्यू भाइ कोहि ञाहा रह्यानछन्. यो अमका जगाको हो भंन्या ठेकाना पाइयो भन्या आफना मुलकको रहेछ भन्या जोना जगाको हो उहाका भारादारहरूलाई लेषी पठाउनु र. देसी हिंदुस्तानि रहेछ भन्या अदालतका हाकिम वार. षवर लेषी मुन्सीका जिम्मादिनु. मुन्सीवाट रमाना गरि पठाउनु र छ मैन्हासम्ममा वारिस कोहि आया भन्या जो भयाको आल माल अपुताली षान्याका जिम्मा दि कचहरिवाट दसौद लिनु. अपुताली षान्या ६ मैन्हासम्ममा पनि कोहि आयानन्. भन्या त्यो अपुताली सर्कारको हुंछ सर्कार लगाइ दिनु.

१९. अघिवाट छोराहरू छुट्टि पंच राषी निति पूर्वक अंस वाडो भया पछि वावु आमा मऱ्या भन्या अंस वाडो भै पर सऱ्याका छोराहरूले वावु आमाको अंस ज्यूनि पाउदैनन्. वावु आमाले आफुलाई राष्याको अंस ज्यूनी जो छ जसले तिन्को काज कृया गरि पछि लायाका साहु तिरिसंग वस्याका छोरा असल पट्टिको भया पनि कमसल् पट्टिको भया पनि तेसैले जो भयाको षति उपति षान पाउंछ.

२०. संग वस्याका भाइका सद्य छोरा छन् एका भाइका कमसल् छोरा छन् अर्को एउटा भाइ मऱ्यो र अपुताली पऱ्यो भन्या असल कमसलका अंस वंडामा जौन सरहले वाडनु. भंन्या अैन छ सोही वमोजिम् अपुतालीको अंस भाग लाग्छ.

२१. आफुले नुवारण देषी काम गरि आयाको आफैले जन्मायाका छोरा र षुइतिरको. भया पनि त्यो छ भन्या आफना विंद छदै दाज्यू भाइले अपुताली पाउदैनन्.

२२. एका भुडीका ढेरै भाइ छन् छुट्टिदा २ भाइ एकातिर वस्याका छन् अरू भाइ माना चावल छुट्याइ भिंन वस्याका छन्. पछि संग वस्याका २ भाइमा एका भाइको अपुताली पर्न गयो र माना चावल छुट्याइ भिंन वस्याका भाइले अपुताली षोज्यो भन्यासंग वस्याका भाइले. अपुताली षान पाउछ माना चावल छुट्याइ भिन्न वस्याका भाइहरूले पाउदैनन्.

२३. विवाह गऱ्याका स्वास्नि. तिर छोरा छोरी छैनन्. भात नचल न्याल्याइता पट्टि २।३ छोरा छन्. लोग्न्या मऱ्यो भन्या अैन वमोजिम्. स्वास्नी स्वास्निको र छोराको अंस छोरिको विहा षर्च स्मेत लगाइ अैन वमोजिम्. अस वाडि दिनु. विवाहिता स्वास्नि मऱ्या पछि उन्ले षइ लाइ दान पुँण्य गरि साहु तिरि वाकि रहाका धन मा सत गति काज कृया गराई वाकि रहाको सम्पत्ति अपुताली तिनै छोराले षानु.

२४. एक भुडीका ३।४ भाई छुट्टि अंस लि वेगलै वस्याका छन्. एका भाईको अपुताली पर्न गयो भन्या सवै भाइले वरावर गरि वाडि लिनु. कोहि भाइका छोरा छन्. कोहि भाइका राडि स्वास्नि छन्. भन्या राडि स्वास्निको पनि वरावर भाग लाग्छ एकावावुका २।३ स्वास्नि तिरका छोरा छोरि रहाछन् कोहि स्वास्नि भात चलन्या रहाछन् कोहि भात नचलन्या रहाछन् भन्या तेस्तामा कोहि मरि अपुताली पऱ्यो भन्या अपुतालीको अैन वमोजिम् अंस र विहा षर्चको भाग वाडी दिनु.

२५. आफना जातको विहा गऱ्याका २।३ स्वास्नि तिरका छोराले आफना अंश लि भिन्न वस्याका छन् एकातिरको भाइ मऱ्यो र अपुताली पऱ्यो भन्या मर्न्या का अपुतालीको धन संपतिको भाग

विमातृ तिरका भाइहरूले पाउदैनन् जौना आमातिरको छोरो मर्‍यो. उसैतिर जन्म्याका भाइले पाउछन्.

२६. कसैका ३।४ छोरा रहाछन् र सवैले अैन वमोजिम आफनु आफनु अंस लि कोहि वेगला वेगलै वस्याका रहाछन् कोहि भाइ वंडा भयाको आफनु अंस मिसि षति उपति जोरि एकै भांसा गरि.संग वस्याका रहाछन्.र.संगवस्याका भाइमा १ जना मरि अपुतालि पर्‍यो भन्या वंडा भयाको अंस मिसाइ षति उपति जोरि एकै भान्सा गरि एका घरमा संग वस्याका. असल पट्टिको भया पनि कमसल पट्टीको भया पनि त्यो अपुताली उनैसंग वस्याका भाइले पाउछन् अंस लि पर सर्‍याका भाइले पाउदैनन्. अंस भन्या गर्‍याको रहेछ सहि संभारका निमित्त मात्रै एका भाइसित एका घर संग वस्याको रहेछ षानु पिनु पनि आफना हिसावसित षादा रहाछन् भन्या तेस्ता भाइ मरि अपुताली पर्‍यो भन्या त्यो अपुताली संग वस्याकाले पनि अंस लि वेगल वस्याकाले पनि अैन वमोजिम् सवै भाइले वाडी षान पाउछन्.

२७. तिरो भरो गर्नु पर्न्या रैकर जगाका चार वर्ण छतिस जात गैह्र कोहि मरि अपुताली पर्‍यो भन्या त्यो अपुताली मर्न्याका दाज्यू भाई भतिजा र छोरि भया इनले. नभया टाढाका दाज्यू भाइले काज कृया गरि लाग्याका साहु तिरि वाकि रहाको एतिमा अैन वमोजिम जसले पाउन्या हो उसैले षानु सर्कार लाग्दैन. एतिमा कोहि नभया तेसैका धनबाट काज कृया गराइ साहु तिरि रह्याको सर्कारबाट लिनु. अपुताली पनि जादौन साहु पनि तिराइ दिदौन भन्या सर्कारलाइ कर लाग्दैन साहुलाई दामासहि गराइ दिनु. काज कृया भन्या तेसैका धनवाट सर्कारवाट गराइ दिनु.

२८. रैकरमा घर वारि गरि वस्न्या रैतिकोहि मरि अपुताली पर्‍यो भन्या तेस्को घर वारि षेत धुरिषडाराषि लाग्याको तिरो भरो गरि. अपुताली षान्याले षान पाउछ धुरि षापि षान पाउदैन धूरि षडा गरेन तिरो भरो पनि गरेन भन्या एस्ता जगा अमालीले धुरि षडा गरि लाग्याको तिरो भरो गर्न्यालाई दि पजनी गर्न पाउछ.

२९. रैकरमा घर वारि गरि वस्याका विधवा स्वास्निले घर वारि छोडी माइति गैह्र अर्का ठाउमा गया भन्या तीनैले घर वारि षेत पजनी गरि अर्कालाइ सौपन पाउदैनन्. दरि चली आयाको

ज्मा नघटाइ धुरी षडा राषी तिरो भरो गरि अपुताली षान्याले षांछ भन्या इनैले पाउछन्.तिरो भरो गर्दैनन्. धुरी षडा राषदैनन्. भन्या अमालीले पजनी गरि धुरि षडा राषि तिरो भरो गर्न्यालाई दिनु.

३०. रैकर जगामा घर वारि गरि वस्याका विधवा स्वास्निले अर्का नाठा सित विग्री उसै लोग्न्यालाइ. उहि घरमा राष्या कि रहिछ भन्या त्यो घर वारि षेत तिनले पाउदैनन्. धुरि षडा गरि लाग्याको तिरो गरि अपुताली षान्या भाइ बस्छन् भन्या उनले पाउछन् धुरि षडा राषदैनन् तिरो भरो गर्दैन. भन्या अमालीले पजनी गरि धुरि षडा राषि तिरो भरो गर्न्या लाई दिनु.

३१. कोहि मानिस मरेछ र. उस्को काज कृया गर्न्या हकवाला दाज्यू भाइ उहि भै काज कृया गरेनछन् र. अरूले काज कृया गऱ्याको ठहऱ्यो भन्या तेस्को धन संपति जो छ कृया गर्न्यालाई कृया षर्च दिलाइ वाकि रहाकामा लाग्याका साहु तिराइ जो रहंछ तेस्को दसौद पनि कृया गर्न्यालाई दि रहाको अपुताली हकवालाले षान पाउदैनन्. सर्कारको हुंछ हकवाला वेरामी भै. कृया गर्न नसकि अर्कालाइ लगाइ क्रिया गरायाको ठहऱ्यो भन्या र. हकवाला देस पर्देस जादा अर्काले क्रिया गऱ्याको रहेछ भन्या क्रिया गर्न्यालाई. कृया षर्च र. सोही वमोजिम्. दसौद दिलाइ. जो रह्याको उस्का साहु तिरि. हकवालाले. अपुताली षान पाउछन्.

३२. चार वर्ण छतिसै जात कोहि मरि अपुताली पऱ्यो र. अपुताली षान्या अैनमा लेषिया वमोजिम्का हकवाला कोहि ठहऱ्यानन् भन्या मर्न्याका धनवाट काज कृया गराइ लाग्याका साहु तिराइ. रहाको तागा धारि जात र. नमासिन्या मतवाली जातको अपुताली नेपालकाले अदालत इताचपलिमा वुझाइ रसिद लिनु. पूर्व पश्चिम. टाढाका मानिसको अपुताली आफना नजीकका अदालतमा वुझाइ रसिद दिनु. मासिन्या जातको अपुताली गुठी विर्ता. गैह्र माफि जगाका रैति कुरीयाको भया धनीले षानु. जागीरमा दरियाका जगाको अपुताली जागीर्दारले षानु. इजारा अमानत्. का जगाको भया. इजाराठेक लिन्याको हुंछ.

वक्सौनी तिरि फुकि वाहेक भै जान्याले अंस अपुताली षोजन आयामा दंड गर्न्या अैन––

३३. नेवार जात गैह्न कसैले तिम्हेरू मऱ्या जन्म्या हामिले जुठो सुतक नवार्नु हामिहरू जन्म्या मऱ्यामा तिम्हेरूले जुठो सुतक नवार्नु भनी अदालत अमालमा बक्सौनी तिरि षति उपति छाडि फुकि वाहेक भै जान्याले अंस अपुताली षान पाउदैन. फुकि वाहेक नभयाका अरू अंस अपुताली षान्याले अैन वमोजिम् षान पाउछन्. फुकि वाहेक भयाकाले अंस अपुतालीमा झगरा गर्न आयाको ठहऱ्या २० रूपैया दंड गरि ठोकि दिनु.

# धर्मपुत्रको

१. चारवर्ण छतिसै जातले धर्म पुत्र राषता आफु जन्म्याका एका भुडिका सन्तान्मा राषनु उस्ता छैनन् भन्या. सौतिन्या आमा पट्टिका छोराका सन्तानमा राषनु. उस्ता नभया आफनी छोरिका छोरामा राषनु. उपनि छैनन्भन्या आफना दिदि वैन्हिका छोराहरूमा राषनु. एस्ता कोहि छैनन् भन्या आफना गोत्रका दाज्यू भाइमा राषनु. वाटामा फाल्याको वालष पाइल्याइ पाल्याको छ भन्या त्यो धर्मपुत्र पनि पक्का ठहर्छ एतिलाइ छोडि अरू गोत्रका र. स्वास्नि तिरका नातादारलाई नराषनु.अैन देषी वित्यास्.पारि राष्याको धर्म पुत्र कचा ठहर्छ. एस्ता धर्म पुत्रलाइ हुन पाउदैनस्. भनि ठोकी तेस्लाइ जन्माउन्या वावुको अंस दिलाइ दिनु.संतान नुहन्याले धर्म पुत्र राषछु भनि दाज्यू भाइ छोरि सौतिन्या भाइ दिदि वैन्ही सित माग्दा इनले दियानन् भन्या तिन्को दिंन भन्या व्यहोराको लिषत गरी ली अरू आफु टाढाको दाजु भाईमा षोजी राषनु. अपुताली षान्या दाज्यू भाईहरूले छोरा पनि दियानन्. साछी पनि वसि दियानन्. छोरो दिंन भंन्या लिषत पनि लेषी दीयानन् भन्या अदालत ठाना अमाल साछि राषी आफना ससुरालि तर्फको भया पनि अरू जात भया पनि जात मिल्दमा जस्को छोरा. पाउछ उसैलाइ धर्म पुत्र गराइ दिनु धर्म पुत्रको कागज लेषाई दिदा अदालत ठाना अमालवाट २ रूपैया सलामि लिनु वढता नलिनु. अदालत ठाना अमाल ई ३ अडामा १ अडा साछि गरि लेषायाकामा. अपुताली षान्या भाइले झगरा गर्न. पाउदैनन्.

२. आफना सौताका असल पट्टिका भया पनि कमसल पट्टिका भया पनि एका पट्टि छोरो जन्म्या पछि छोरा नुहन्या सौताहरूले मेरो छोरा छैनन्. धर्म पुत्र ठ्याके मचा राषछु भनि कौनै स्वास्निले पनि राषन पाउदैनन्. अैन नाघि कसैले राष्या भन्या ति कच्चा ठहर्छन्. तेस्ता स्वास्नि मऱ्या पछि तस्को जो भयाको श्री संपति असल पट्टिको भया पनि कमसल पट्टिको भया पनि सौताले जन्मायाका आफना षसमका छोराले अैन वमोजिम्. षान पाउछ तेस्ता धर्म पुत्रले अंस पाउदैनन्. अैन नाघि रहाका धर्म पुत्र ठ्याके मचाहरूले जन्माउन्या वावु पट्टिको अंस पाउछ.

३. चार वर्ण छतिसै जातका कसैले आफना विवाहिता विधवा कंन्या वेस्या कमारि गैह्र पट्टि छोरा जन्मी घर ल्याइ नुवारन् पास्नि गऱ्या पछि. पछिवाट आफ्ना दाज्यू भाइ दिदि वैन्ही छोरिका

छोराहरूमा धर्म पुत्र राष्यो भन्या पनि इन्हेरूले अंस पाउदैनन् अघि आफना विंदले जन्म्याका. असल कमसल पट्टिको छोरा छ भन्या उसैले पाउछ असल कमसल पट्टिमा छोरो जन्म्या पछि राष्याका अरू धर्म पुत्रले पाउदैनन्.

४. कसैले कागज पत्र साछि सुर्ता गरि राष्याको धर्म पुत्र छोराले वुढा वुढीलाइ छोडि भिंन वस्यो वुढा वुढीको सहि संभार गरेन भन्या त्यो धर्म पुत्र वदर हुंछ धर्म पुत्रको कागज फराइ दिनु.धन माल अपुताली षान्याले ति ज्यूदा छन्ज्याल् सहि सम्भार र मऱ्या पछि काज कृया गरि षान पाउछन्. अघि कागज पत्र लेषि धर्म पुत्र राष्यो.पछीवुढा वुढीले घरवाट निकाली दियो भन्या अैन वमोजिम्को अंस दि.निकाल्याको रहेछ भन्या सदर हुंछ वावुका अंसवाट छोडाइ ल्याइ आफुले अंस नदि निकाल्याको रहेछ भन्या आफना अंस सम्म वुढा वुढीले उठायाको सदर हुंछ. धर्म पुत्रको. अंस उठायाको सदर हुदैन.

५. धर्म पुत्र ठ्याके मचा वस्न जान्याले वुढा वुढिका विसल्लाहले घर षर्च गर्न र वुढावुढीलाइ साहु लगाइ दिन हुदैन. साहुले पनि धर्म पुत्र ठ्याक्य मचालाइ दियाको कर्जा वुढा वुढीसित लिन पाउदैनन्.वुढा वुढिको सेष पछी काज कृया गरी वुढा वुढीका साहु तिरि वाकि रहाको संपतिले आफना साहु तिरि वाकि धन षानु.

६. कसैले आफना छोरा भाइ र. आफना वावु वाज्याका छोरा भाइ वाहेक अरू टाढाका अंस अपुताली नपाउन्या दाज्यू भाइले धर्म पुत्र ठ्याके मचा हुं काज कृया गऱ्या मैले अंस पाउन्याहं भनि नालिस गर्न आया पुर्पक्ष गर्दा अैन का रितले अंस नपाउन्या ठहऱ्यो काज कृया भन्या गरेछ तेस्ता धर्म पुत्र ठ्याक्य मचालाइ दंड पर्दैन अंस पनि पाउदैन कृयामा लाग्याको षर्च मात्र भराइ दिनु.

७. आफना संतान भयानन् भनि अैन वमोजिम् आफना अंसियार भाइका संतानमा धर्म पुत्र ठ्याके मचा राष्यो. तेस धर्म पुत्र ठ्याके मचा हुन्याका पनि संतान भयानन् र अपुताली पऱ्यो भन्या आफना अंसियार भाइका सन्तानले अपुताली षान पाउछन् अंसियार भाइ देषी वाहेक अर्का गोत्रको धर्म पुत्र ठ्याके मचा भयाको रहेछ र. तेस्को अपुताली पऱ्यो भन्या धर्म पुत्र ठ्याके मचा राषन्या पट्टिका अंसियार भाइले अपुताली षान पाउछन्. आफु जन्म्याका पट्टिका

दाज्यू भाइले अर्का गोत्रमा धर्म पुत्र ठ्याके मचा हुन जान्याको अपुताली षान पाउदैनन्. मर्न्याको काज कृया गराइ. रहाको सर्कारको हुंछ.

८. कसैका २।३ भाइछन् संतान भयेन र तेस्मा एका भाइले कसैलाइ धर्म पुत्र राष्याको छ अरू भाइका पनि संतान नभै अपुताली पऱ्यो भन्या.मर्न्या ज्येठा कांछा वावुको काज कृया सत गति गरि जो रह्याको अपुताली तेसै धर्म पुत्र वस्न्याले षान पाउछ भिन्न भै परसऱ्याका दाज्यू भाइले पाउदैनन्.

९. अैन वमोजिम् राष्याका धर्म पुत्र ठ्याके मचाले र. डोलाजि स्वास्नि राषी जन्म्याका छोराले आफना जन्माउन्या वावु तिर. अरू छोरा छन्. भन्या उस तिरको अंस पाउदैनन्. धर्म पुत्र ठ्याके मचा राषन्या वावुको र. डोलाजी तिरका छोराले आफना आमाको धन संपतिको अैन वमोजिम्को अंस षान पाउछन्.

१०. आफना जन्माउन्या वावु तिर अरू छोरा छैनन्. वावुको अपुताली पऱ्यो भन्या त्यो अपुताली अपुताली षान्या भाइले पाउदैनन्. धर्म पुत्र ठ्याके मचा र. डोलाजीवाट जन्म्याका छोराहरूले जन्माउन्या आमा वावुको काज कृया गरि उस्को धन संपति षान पाउछ धर्म पुत्र राषन्या वावु आमा पट्टिको पनि. धन संपति षान पाउछ.

११. धर्म पुत्र डोलाजी ठ्याके मचा जस्ले राष्याको हो उस्को अंस उसैले पाउछ. अरूभाइहरूको अंस अपुताली पाउदैन.

१२. धर्म पुत्र ठ्याके मचां ल्याया पछि आफुलाइ छोरा छोरि भया भन्या छोरिको विहा षर्च पर सारि छोरासंग वरावर अंस धर्म पुत्रले षानु.

१३. चार वर्ण छतिसै जातले धर्म पुत्र ठ्याके मचा राषता आफ्नु संतान नजन्मदै अघिवाट अैन वमोजिम् धर्म पुत्र राषी सक्याको रहेछ भन्या पछिवाट आफना विवाहिता भातचलन्या हवस् नचलन्या ल्यायिता पट्टि हवोस सन्तान जन्म्यो भन्या धर्म पुत्रको र. विवाहिता ल्याइता पट्टि जन्म्याका संन्तानको आफनु. विन्द हुनाले धर्म पुत्रको र ल्याइता पट्टिका सन्तानको वरोवर अंस हुंछ गरि दिनु.

१४. ब्राह्मण लगायेत पानी चलन्या संमका कसैले आफु भंदा उपल्ला जातकालाइ धर्म पुत्र राष्यो र १६ वर्ष उभोको उमेर भयाका धर्म पुत्र वस्न्याले. म आफना षुसिले धर्म पुत्र राषन्या वावुका हातको भातषाइ उनैका जातमा मिल्छु भनि अदालत ठाना अमालमा भंन आयो अर्कालाइ भातमा वोऱ्याको पनि रहेनछ भन्या. आफना षुसि राजिले पानी चलन्या संमका घति जातको धर्म पुत्र भै भातसमेत षान्यालाइ र. धर्म पुत्र राषन्या वावुलाइ. षत वात लाग्दैन त्यो धर्म पुत्र उसैको गोत्र भै उस्को अैन वमोजिम्को अंस श्री संपति षान पाउछ काज कृया पनि उस्ले गर्नु पर्छ १६ वर्ष देषी उघोका ज्ञान नपस्याकालाइ फुल्याइ फकाइ आफु भन्दा कम जातकाले धर्म पुत्र राष्याको हो भात षुवायेछ भनि उस्का वावु दाज्यू भाइ र. तेहि भात षान्याले कराउन आयो भन्या भात षुवाउन्या नमासिन्या जातलाई अैन वमोजिम्. सर्वस्व गर्नु मासिन्या जातले भया मासि दिनु. भात षान्या १२ वर्ष देषी उभोको उहि जात हुंछ . उसै जात्मा मिलाइ दिनु. १२ वर्ष मुनिको भया अवल्लाइ ५ दोयम् लाइ ४ सिंलाइ ३ चाहार्लाई २ रूपैयाका दर्ले गोदान लि भातको पतिया गराइ दिनु.

१५. धर्म पुत्र राषन्या पट्टि छोरा जन्म्याका छन्. धर्म पुत्र ठ्याके मचा वस्न्याले जन्माउन्या वावु आमाको काज कृया गरि उस्को अंस अपुताली षायाकामा धर्म पुत्र ठ्याके मचा र डोलाजी राषन्या पट्टिका छोराको भाग लाग्दैन. धर्म पुत्र ठ्याके मचा र डोलाजी राषन्या वावुको धन संपति र. धर्म पुत्र ठ्याके मचा डोलाजी वस्या पछि कमायाका अरू धनमा जन्म्याका छोराको र धर्म पुत्र ठ्याके मचा डोलाजी तिरका छोराको अैन वमोजिम् अंस लान्छ. धर्म पुत्र डोलाजी ठ्याके मचा राषता एति दिउला भनि राष्याको रहेछ. भन्या. लेष्याको मात्रै पाउछ लेष्यादेषी वाहेक्मा दाइया गर्न पाउदैन.

# चलन्को

१. आफना राजाका छाप लाग्याका असर्फि मोहोर पैसा गालन्यालाइ १ रूपैया गाल्याको भया ५ रूपैयाका हिसावले जति गाल्याको ठहर्छ. उस्को ५ षंड वढता दंड गरि लिनु. रूपैया नतिऱ्या अैन वमोजिन् कैद गर्नु.

२. घर विग्री दाहामा परि असर्फि मोहोर. पैसा दाम गलि डल्लो पऱ्यो चाका पऱ्यो काम लागेन आज्ञा वचन दिया गाली फोरि अरू काम लगाउदा हुं भनि कोहि सोधन आया भन्या. अडा गौडा अदालत ठाना अमालका मालिक्. द्वाऱ्या अमाली. मुषियाहरू.ले त्यो डल्ला चाका हेरि विकम्वा भयाको ठहऱ्या गालन फोर्न. आज्ञा वचन दिनु. इन्को आज्ञा वचनली गाल्याका फोऱ्याका कुरामा गालन्या फोर्न्यालाई र सोधन आयामा हेरी विकम्वा भयाका गालन फोर्न हुंछ भनि आज्ञा वचन दियाका कुरामा आज्ञा वचन दिन्यालाइ षत वात लाग्दैन.

३. छाप लाग्याका माना पाथि तुलो ढक कुरूवाहरू पुराना विकम्वा भया पनि आफना मुनासिवले गालन लाउन्या र. गालि दिन्या दुवैलाइ १०।१० रूपैया दंड गर्नु रूपैया नतिऱ्या अैन वमोजिम् कैदगर्नु विकम्वा भैकन लाग्न्या भयाका गालनालाइ अदालत अडाका. अदालत ठाना गौडाका मालिक द्वाऱ्या अमालि मुषिया. सोधि उन्का आज्ञा वचनले. गालन्यालाइ. षत वात. लाग्दैन अदालत अडाका अदालत ठाना गौडाका मालिक अमाली द्वाऱ्या मुषियाहरूले विकम्वा भयाका पाथि माना कुरूवाहरू गालनलाइ वचन दिनु. पुराना कुच्याइ नयां वनाउन साधन आयामा वचन दियाका कुरामा षत लाग्दैन.

४. हिरा मोति पंना पुष्पराज तिर मुगा मानिक ल्हसुन्या गोमेदलाल लाल डियुगैह्र किंन्याले किनि सक्या पछि जचाउदा झुट्टो ठहऱ्यो भनि १ मैन्हाभित्र कराउन आया वेचन्यालाइ माल फिर्ता गराइ दि किंन्याको थैली वेचन्यावाट भराइ दि झुट्टा माललाइ. सच्चा भनी वेचन्यालाई विगा वमोजिम् दंड गर्नु किन्याका १ मैन्हा पछि झुट्टा रहेछ भनि कराउन आया फिराद नसु ंनुं वेच्या किन्याको सदर हुंछ.

५. अफिम कस्तुरि अन्तर चरस्. एतिकुरा मिसाहा कपटिया गरि बेच्यो भनि कोहि कराउन आयो भन्या किंन्याले जाचिवुझि किंनु किनिसक्या पछि कपटिया हो भनि फिर्ता गर्न पाउँदैन किन्याको माल सदर. वेच्याको दाम सदर हुँछ यो माल कपटिया भया फिर्ता गरौला भंन्या लेषत गर्‍याको रहेछ. भन्या लिषत बमोजिम गर्नु. ई रकम्मा लिषत नभयाको गुहाइ जवानले पोल्याका सदर हुदैन.

६. रूपैयाको चलन गर्दा कासाका तामाका षोटा रूपैया कसैले पनि नलिनु. नदिनु. छेउछाउ. मा फुट्याका र मलता सद्य रूपैया लि साटन आउन्यालाइ २२ गंडीका दरले पैसा दिनु. पैसा लि मोहोर्साटन आउन्यालाइ २२॥ गंडीका दरले पैसाली मोहर दिनु नत्रा नेपाली असर्फिले मोहोर्साट्न आउन्यालाइ २३॥ रूपैयाका दरले असर्फि ली मोहर रूपैयाले असर्फि साट्न आउन्यासित २४ रूपैयाका दरले मोहोर लि असर्फि दिनु.

७. पाथि माना कुरूवा तुलो ढक्मा कमानि वाला वनाइ कपट गर्न्यालाइ २० रूपैया दंड गर्नु. कमानि वाला षारेज गरि वढीयामा छाप. लगाइ चलन गर्न लाउनु.

८. छाप नलाग्याका मिट्याउदा १।२ मुठि १।२ तोलाको फरक पर्न्या गरि चलन गर्न्यालाइ षत वात लाग्दैन. तेस्ता माना पाथि कुरूवा तुलो ढक् वरोवर गरि मिलाइ छाडी दिनु.

९. छाप नलाग्याका तुला ढक फेला पर्‍याका अदालत ठानावाट जफत गरि लिलाम गरि सर्कार दाषिल गर्नु.

१०. पाथि मा. माना १॥ को फरक पार्न्यालाई रूपैया २० माना १ को फरक पार्न्यालाइ रूपैया १५ मुठि ७ को फरक पार्न्यालाइ रूपैया १० मुठि ५ को फरक पार्न्यालाई रूपैया ५ मुठि ३ को फरक पार्न्यालाइ रूपैया २॥ पाथि १ मा मुठि २ माना माना १ मा ॥ को घटी वढी पार्न्या लाइ दंड पर्दैन. माना पाथी कुरूवाहरू मिट्याइ वरावर गराइ छोडि दिनु. रूपैया नतिर्‍या अैन वमोजिम कैद गर्नु.

११. तुला ढकमा ६ तोलासम्मको घटी वढी पार्न्यालाइ दंड पर्दैन तुलो ढक मिट्याइ वरावर गरि छाडी दिनु धार्नि १ मा ६ तोला देषी ९ तोलासम्मको फरक पार्न्यालाइ १० धार्नि १ मा ९ तोला देषी ११ तोला सम्म फरक पार्न्यालाइ २० धार्नि १ मा १२ तोला देषी तोला १४ सम्म फरक पार्न्यालाई ४० तोला १५ देषी तोला १९ सम्म फरक पार्न्यालाइ ५० तोला १९ देषी तोला २९ सम्म घटी वढी पार्न्यालाइ १०० रूपैया तोला ३० देषी वढता घटी वढी पार्न्यालाइ १५० रूपैया दंड गर्नु रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

१२. नेपालका कल्दार असर्फिको लिन दिन गर्दा. सर्कारको वाकि तिर्दा साहु तिर्दा माल किंदा २४ रूपैयामा लिनु दिनु २४ रूपैयामा नलिन्या कारिदा तहविल्दार साहु माल वेच्न्या जागिरदार दर्माहादार. महाजन गैऱ्ह नलिन्यालाई. विगा वमोजिम् जरिवाना गर्नु. असर्फि लि मोहोर साटन्यालाइ दर्वारका सराफि वजारका सराफिले आठ आना घटाइ २३ ॥ रूपैयाले साटि लिनु चासनि घटायो तौलमा घटायो भन्या घटायाको कसर जति ठहर्छ उति विगो लि विगा वमोजिम् टक सारि लाइ जरिवाना गर्नु.

१३. दस च्युटिको एक मुठि दस मुठिको एक मानु आठ मानाको एक पाथि विस पाथिको एक मुरि एसै रितले लिन दिनको व्यवहार गर्नु एसै रितको चलन गर्नु एस वमोजिम्मा घटी वढी पारि चलन गर्न्यालाइ ५ रूपैया दंड गरि लि एहि रित वमोजिम् थामि दिनु.

१४. दस लालको एक मासा दस मासाको एक तोला चार तोलाको एकपल् सताई सतोलाको एक वोडि. एक सय वाह्र तोलाको एक विसौली २ विसौलि को एक धार्नी तुलाको एसै रितको विवहार गर्नु. एसै रितले लिन दिन. गर्नु एस वमोजिम्मा घटी वढी पारि चलन गर्न्यालाइ २० रूपैया दंड गरि एहि रित थामि दिनु.

१५. आफना राजाका राज्यमा वसि आफनै राजाको वाहिडो टक जस्ले लाउला वनाउला उस्का भाइ छोराको अंस र छोरिको विहा षर्च पर सारि. सर्वस्व गरि ६ वर्ष कैद गर्नु. म्यादका रूपैया डवलका दरले मैन्हाका १० रूपैयाका हिसावले दिया लि छाडी दिनु. एस देसका मानिसले मुगलानामा गै टक्माऱ्याको रहेछ भन्या रजिडंट सित भनि तेस्तालाइ झिकाइ सदर वमोजिम् सजाय गर्नु.

१६. आफना मुलकका मानिसले हवस वा अर्काका मुलकका मानिस्ले हवस्. आफना मुलुक्मा वसि विराना देसका राजाको वाहिडो टक वनाउन्यालाइ . अैन वमोजिम्को अंस सर्वस्व गरि १ वर्ष कैद गर्नु रूपैया तिऱ्या लि छाडी दिनु.

१७. टकसार वाहेक अरू ठाउमा आफना मुनासिवले कसैले असर्फिमोहर पैसाको टक्माऱ्याको देषी अदालत ठाना अमालमा जाहेर नगरि दवाउन्यालाइ सुनको टक्माऱ्याको देषी दवायाको ठहऱ्या १०० चादिको टक्माऱ्याको देषी दवायाको ठहऱ्या ६० पैसाको टक्माऱ्याको देषी दवायाको रहेछ भन्या २० रूपैया दंड गर्नु रूपैया नतिऱ्या मैन्हाका ५ रूपैयाका दरले कैद गर्नु.

१८. कसैले फलामका पैसा वनाइ तावाका पैसा वमोजिम् चलन चलायो भन्या तेस्को अैन वमोजिम्को अंस सर्वस्व गरि ३ वर्ष कैद गर्नु. म्यादका रूपैया डवलका दर मैन्हाका १० रूपैयाका दरले दिया लि छाडी दिनु. फलामका चक्कि मात्र वनायाको रहेछ टक लायाको रहेनछ चलं पनि चलायाको रहेनछ भन्या १॥ वर्ष कैद गर्नु म्यादका रूपैया दिया लि छाड्नु.

१९. सर्कार.र.दुनिञामा षोटा रूपैयाको चलन् कसैले नगर्नु मलता र छेउ छाउमा घेरा झऱ्याका र फुट्याका सर्कारका. कारिंदाले पनि वुझी लिनु दिन्या ठाउमा पनि दिनु. वजारका महाजन सराफी. पसल्या गैऱ्हले पनि मलतार. फुट्या को घेरा झऱ्याको लिन दिन गर्नु जस्ले फुट्याको र. घेरा गऱ्याको भनि ले वैन. सर्कारका. कारिंदा दुनिञा महाजन सराफि. पसल्या गैह्रले जति रूपैया लिदैन उति रूपैया जरिवाना गर्नु.

# इलम्‌रोजिको

१. सुना चादि सच्चो जस्‌ले वनाउन जांदछ. उस्‌ले वनाउनु. वचनु षत लाग्दैन. तामोराङ षाप्प्रा पितल्‌को झुट्टा वनाइ. सुना चादि होभनि वेचन्यालाइ र कच्चा सुना चादि वेचि हिडन्यालाइ अैन वमोजिम्‌को अंस पर सारि. तेस्ताको अंस सर्वस्व गरि. ६ वर्ष कैद गर्नु. एस्ताका मतलवमा पसि कच्चा सुना चादि. वेचि हिडन्यालाइ. ३ वर्ष कैद गर्नु. इन्हेहरूका म्यादको रूपैया मैन्हाका १० रूपैयाका दरले दिया लि छाडि दिनु.

२. वारूद वनाउन जांन्याले वारूद वनाउनु . वेचनु षत लाग्दैन.

३. डामि छोडयाका साढचा जोतन्या चार वर्ण छतिसै जात गैह्‌लाई २॥ रूपैया दंड गर्नु . फलानाले साढया जोत्याको छ भनि अर्कालाइ. पोलि सावित्‌ गर्न नसक्‌न्यालाइ. पनि २॥ रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम्‌ कैद गर्नु.

४. औसि लगायेत्‌. पर्व चाडवाडमा दुनिञाले. गोरू जोत्यो भनि. दंड गर्न्या अमालिलाइ उसले दंड गरि लीयाको. विगो रैतिलाइ फिर्ता गराइ उसै विगा वमोजिम्‌ दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम्‌ कैद गर्नु.

५. उपाध्या जैसि रजपुत तिन सहरका नेवार जात गैह्‌ चार वर्ण छतिस्‌ जातका लोग्न्या स्वास्निहरूले आफ्नो जीविका निमित्त गोरू रागा घोडा नारि हलो जोतन्यालाइ षत लाग्दैन जोतन्याले प्रायश्चित्त पनि गर्नु पर्दैन. कसैले हलो जोत्यो भनि भातकाढया भन्या.१० पानि काढया ५ रूपैयाका दरले काढन्यालाइ दंड गर्नु.

६. चार वर्ण छतिसै जात गैह्रका लोग्न्या स्वास्निहरूले हलो जोत्यो भनि षत लगाइ अदालत्‌ ठाना अमालवाट दंड गऱ्या भन्या उन्‌ले गऱ्याका दंडको विगो वमोजिम्‌ षत लाउन्या अदालत ठाना अमालवाला जो हो उसैलाइ दंड गरि लिनु.

७. इलम्‌ भन्याको जात जातको छैन. चार वर्ण छतिसै जात सवैले. पाइन हालनु जुत्ता कपडा स्युन षानि षंन सुन धुन अवालमा आगो लाउनु कुहमाल्‌को काम गर्न मादलहरूमा षरि लगाउनु गैह्र सवै कामको इलम्‌ गर्न वेच विषन गरि जिविका गर्न हुंछ. जात जादैन एस्मा जात जांछ भंन्या र. भात पानि काढन्याइ ५०।५० रूपैया दंड गर्नु.

८. चार वर्ण छतिसै जात गैह्रले तल मानिस्‌ सुगुरको नरक. उभो हिरा मोति सम्मको वंदवेपार गर्न हुंछ. माना पाथि कुरूवा. तुला ढक्‌ले भर्नु तौलनु जोषनु पनि हुंछ. षत लाग्दैन जात पनि जादैन. षत लाग्छ. भंन्या र जात जांछ भंन्यालाइ ५०।५० रूपैया दंड गर्नु.

९. कसैले तागाधारि. जात गैह्रलाइ. यो तागाधारि जात हो. भनि जानि जानि. जाड रक्सी जात जान्या कुरो षुवायो भन्या. षुवाउन्याको अंस सर्वस्व गरिमासि दिनु. जात थाहा नपाइ. भोरमा षुवाये छ भन्या र. षान्या तागाधारि जातले पनि आफना जात छपाइ ढाटि षायाको रहेछ भन्या. षुवाउन्यालाइ षत वात लाग्दैन. षान्यालाइ जात पतित् गरि. मतवालि श्रूद्र जातमा मिलाइ दिनु.

१०. जाड रक्सि अजीमना. मद गैह्र वनाउन्या वेचन्याले अनाज गैह्रको वनाउनु यो जात हो भनि जनाउ दि वेचनु. किंनु दालचिनि. मसला काठपात् फल्फुल् जरिवुटि लागु चीज गैह्रको अरष हो भनि. कसैले नवेचनु. नकिंनु. वेचन्यालाइ अैन वमोजिम्को अंस सर्वस्व गर्नु. किंन्या षान्यालाइ. १०० रूपैया दंड गर्नु.

११. १२ वर्ष देषि उधोका केटाकेटि वावु आमा दाज्यू भाइ. मामा कोहि. नभयाका असामि घर षेत् जगा जमिन् पनि केहि नभयाका.अदालत ठानामा आया भन्या. तिन्को जन्मथात् जातभात् सोधि नाउ लेषि तेस्तालाइ अदालत ठानाका आफिसर्ले सदावर्त वाट रोजिंदा सिधाको हंडिको वंदोवस्त गरि पालनु. वर्षको २ जोर कपडा षाडि सर्डुका. नगदि आम्दानिवाट. दिलाइ दिनु. एस्ता केटाकेटि व्राह्मण क्षत्रिय वैश्य शुद्र इ चार जातलाइ कुमारिचोक्का सुव्वा डिठ्ठा मुषियाका. जिम्मा गरि हाजिरमा लेषिवहिका काममा लेषपढ गर्न सिकाइ तालिम् गर्नु. सूद्र जात् वोकन्या षंन्या षेति गर्न्यालाइ कंपुका जंगी कोत्या डिठ्ठा लाजिमा डिठ्ठा हातिसार तवेला गाइका गोठका डिठ्ठाका. जिम्मा हाजिर गरी तालिम् गर्नु. काम गर्न दिनु. कारीगढलाइ मेगजिन्. दर्जिषाना सिल्षानाका डिठ्ठाका. जिम्मा तालिम काम गराउन दिनु. धोवि तेलिलाइ धोवि तेलि नाइक्याका. जिम्मा तालिम् गर्न काम लाउन दिनु. वेकाममा इन्हेरूलाइ नराषनु. जात थाहा नपायाका मानिस्को जात्. षात् षवास् हुन्छन्.

# रूषकाट्न्या

१. लालमोहर दस्षत्ले वंद गऱ्याका जगामा र. अर्काका गुठि वित्र्ता वेषछाप् गैह्रमा पाल्याका रूषहरू काटन्यालाइ अवल् दोयम् सीम् चहार गरि ४।३।२।१ रूपैयाका दरले दंड गर्नु काटयाको रूष पनि जस्को हो उसैलाइ फिर्ता गराइ दिनु.

२. वाटा पधेरा कुलामा लायाका. रूष जगाका धनिले. पनि नकाटनु. अरूले पनि कसैले नकाटनु. वाटा पधेरा कुला मुहान्का रूष काटन्यालाइ. अवल् रूष काटन्यालाइ ४ दोयम् रूष काटन्यालाइ ३ सिम् रूष काटन्यालाइ. २ चाहार रूष काटन्यालाइ १ रूपैयाका दरले दंड गरि काटयाको रूष पनि नदिनु. रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

३. गोर्षा राज भर मध्येस् गैह्रमा. गुठि सदावर्त वेष छाप् माना चावल् र. रूपैया तिरि षान्या र जागिर्को. विहोरा पऱ्याका. फिगढार. वालाले र. जागीरदारले. वन काटि काठ वेचन हुदैन. आफ्ना घर वगैचा. वारि वनाउन संम हुंछ. अैन भया पछि. कसैले वन काटि काठ वेचेछ भन्या वेच्याका रूपैया लिलाम् गरि. उसै विगा वमोजिम् दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम्. कैद गर्नु.

४. विर्तवारले आफ्ना विर्ताका ४ किलाभित्रका जगाका. रूष काटि वेचन हुंछ. षत लाग्दैन.

# कागज जाच्को

१. कुमारिचोक्वाट रकम् कलम्का ज्मा षर्च फारषको लाल् मोहोर गराउदा. ज्मा षर्चका सिरको वन्द मात्र ल्याइ मोहोर नगराउनु. ज्मा षर्च वासिल् वाकि तयार गरि ढडामा सिर गासि तैयार भयापछि मोहोर गराउनु. यो अैन नाघि काम गर्न्या कुमारिचोक्का डिट्ठा मुषियाहरूलाइ केहि नषाइ गऱ्याको रहेछ भन्या. १० रूपैया दंड गर्नु. केहि षाइ गऱ्याको रहेछ भन्या विगा वमोजिम् दंड गर्नु.

२. कम्यांडरि किताव लेषन्याले थमौति गर्न्या वढुवा हुन्या नत्रा हुन्या मानिस्को नाउ विंति पारि किताव्मा लेषि दिनु अडा गौडामा र काजमा टाढा गयाका भारादार. कामदारहरूसितका जागिऱ्या मानिस्हरूको थमौति पजनि गऱ्याको तोफावत् नपर्न्यागरि कागज लेषि पठाउनु सो वमोजिम कम्यांडरि किताव लेषन्याले मुषत्यारसित जाहेर गरि किताव्मा नाउले लेषि दिनु. कम्यांडरि किताव लेषन्याले किताव्मा नाउ चढाइ दियेन भन्या. तेस जागिरदारका. वालि किताव् लेषन्या अषत्यारवालावाट भराइ दिनु जागिर पाउन्या थमौति गर्न्या वढुवा हुन्या मानिस्ले. पनि आफ्नु नाउ चढाइ माग्न गयाको रहेनछ. भन्या वर्ष दिन काम गऱ्याको भया पनि वालि पाउदैन.

३. जस्को जिम्मावालि लेषिंछ. उस्को भरपाइ नलि उस्लाइ थाहा नभै जिम्मा वालि नलेषनु जस्ले जिम्मावालि लेषियाका मानिस्लाइ राषेन उस्ले आफ्नु मानिस् पनि लिन पठायाको छैन. भन्या लेषन्याले तेस्को विहोरा वुझाउनु पिठिया परि लेषियाकाले वुझाउनु पर्दैन.

४. कारिंदाले यो दस्तावेज गर्न हुदैन एस्तो दस्तावेज भया सर्कार कम्पू पल्टन कंपनिको घट्छ विग्रंछ. भनि समझाउदा समझाउदै मालिकले दस्तावेज गरि दिया भन्या. र कारोवारिका पीठ परि मालिकले मोहोर दस्षत्. दस्तावेज गैह्र सनद गरि दिदा विग्रन गयाका कुरामा कारोवारि कारिंदालाइ वात लाग्दैन. सनद गरि दिन्या मालिकले वुझाउनु पर्छ. घटायाका विगा वमोजिम् जरिवाना गर्नु.

५. हाकिमले आफ्ना कारिंदालाइ अघिवाट एका सवाले काम लायो. पछि वहि पत्र वुझाउदा पुरानु सवाल लुकाइ. अर्कै सवाल तुल्याइ देषाया छन् र. फार्षत् नहुदै अघिवाट जाहेर भयो भन्या. सवाल् गरि दिन्या हाकिम् र. सवाल उठाउन्या रकमि दुवैलाइ १ लाषको १ सय रूपैयाका दरले जरिवाना गर्नु. फार्षत् भैसकिया पछि जाहेर भया. अघिवाट भयाको लुकाइ पछिवाट

तुल्यायाका दस्षत् सवालले चोरिषाया वमोजिम्को विगो भराइ. विगा वमोजिम दंड गर्नु. रूपैया नतिऱ्या मैन्हाका ५ रूपैयाका दरले कैद गर्नु.

६. तिथि मिति वेहोरा ढाटि मोहोर दस्षत् भयाकालाइ. कुशमयमा. पनि षोसि १ सालका उव्जनि वमोजिम दंड गरि. लि ढाटि गरायाको मोहोर दस्षत् धुलाइ दिनु. तिथि मिति वेहोरा नढाटि भयाका अजानमासमा षोसन हुदैन. अजानमासमा षोसन्यालाइ पनि १ सालका उव्जनि वमोजिम् दंड गर्नु. दंड को चौथाइ जिताउरि लि जगा विहोराइ दिनु.

७. अघि परापूर्वदेषि श्री ५ सर्कारवाट कौनै कुराको लाल् मोहोर गरि वक्सदा मुषत्यार लगायेत्. सवै भारादारहरूले मोहोरका पीठमा नाउ थर मात्र मार्फत् रूजुमा लेषन्या दस्तुर चलाइ आयाको रहेछ. एस् कुराले दर्जा मान् मरातव थाहा होइ सक्तैन. तसर्थ १९२२ साल आश्विन शुदि १० रोज ७ देषि मुषत्यार भारादारले लाल् मोहोरमा मार्फत् रूजु चह्राउदा. आफ्ना आफ्ना दर्जा मान् मरातव स्मेत्को नाम लेषनु नाम मरातव नलेषियाका. मार्फत् रूजुको सदर हुदैन. एहि अैन वमोजिम् गर्नु.

८. ज्यानको वदला ज्यान मार्न लाल् मोहोर गरि मार्फत् रूजु चह्राउनु पर्दा अदालत्का मालिक् श्रीजज् १ श्री गुरू धर्माधिकार १ कौसिका मालिक् १ षंजाचि १ एति ४ को मार्फत् नभै लाल मोहोरको रमाना नगर्नु कौसिका मालिक् षजांचि नभयादेषि अरू ऽाहाका काजि कर्णैलहरू.को मार्फत् चढाइ. जगा जगामा पडाउनु पर्न्या ठाउ पठाउनु.

९. लाल् मोहोर दस्षत्. गर्दा गराउदा जगाको उठति सवै लेषि तिर्न्या र माफ हुन्या कलम् छुटयाइ लेषनु लेषाउनु. मोहोर दस्षत् भया पछि. उठति दवायाको ठहऱ्यो भन्या दवाइ षायाको विगो फिर्ता गराइ. मोहोर दस्षत् गर्न्या गराउन्यामा जो दवाहा ठहर्छ उस्लाइ जगाका उठति वमोजिम्. जरिवाना गर्नु. दंडका रूपैया तिरेन भन्या अैन वमोजिम् कैद गर्नु. जगा उस्वाट झिकि दिनु. जगा पाउदा षेरि मुठ ढाटि गर्न्या पाउन्या र गराइ दिन्यालाइ अैन वमोजिम् जरिवाना पनि पर्छ. जगा पनि झिकिंछ. पाउदा षेरि मुठ ढाटया को रहेनछ पछिवाट ४ किला र सिवाना लगाभित्र अवाद गुल्जार गरि. वढयाको रहेछ भन्या. सनद गर्न्या र. गराउन्यालाइ दंड जरिवाना पर्दैन. जगा पनि झिकिदैन.

१०. लाल्मोहोर श्री मिनिष्टरका दस्षत् छाप लगाउन्याहरूले. कसैको ज्यूजान्या सर्वस्व गर्न्या रूपैया पैसाको तनुषा गर्न्या घरवारि गर्न्या एति कामका दस्षत् मोहोर गर्दा श्री मिनिष्टर संग साधि कौसि कुमारिचोक अदालत्का कारिंदाले जसले पूछ्या छाप लाउनु पर्न्या हो उनले पुछरमा छाप मार्फत गरि ल्यायाका मोहोर दस्षत गराउनु पूछ्याछाप नलायाका. विचैमा छाप

गरायाको ठहऱ्यो भन्या मोहोर दस्षत जाचन्या तेस्ता कारिंदालाई कामवाट वर्षा सरि जागिर षोसिदिनु. गराई दियाको मोहोर दस्षत वदर हुंछ.

११. मुषत्यारको छाप लगाउनु. पर्न्या गैह्र दस्षत्मा जगा जगाका कारिंदाको पूछ्चा छाप लगाई. ल्याउनु. जगाजगाका पुछ्चा छाप लागी आयाका र पुछ्चा छाप नलाग्न्या हुकुम ले भया का दस्षत्मा. प्रमानगि लेषि गैह्र दस्षत्का पीठमा मुलुकी सुव्वाको निसानिको छाप लाग्या पछि मुषत्यार्को छाप लाउनु. वेमुनासिव दस्षत गऱ्याको ठहऱ्यो भन्या पुछ्चा छाप लाउन्या र मुलुकि सुव्वालाई जागिर षोसि काम देषि षारेज गरि दिनु.

१२. अंग्रेजवाट आयाका. याददास्तका कागजको दुइ दिनभित्रमा श्री मिनिष्टर सित विंति गरि जवावको कागज तयार गरि. कौसिमा वसि. कारोवारको काम गर्न्या मालिक छेउ दी छाप गराइ पठाइ दिनु. जवावको कागत तैयारि गरेनन् भन्या.मुन्सीलाइ ५ रूपैया जरिवाना गर्नु. जवाव्को कागज मुन्सिले तैयार गरि दिया पछि. छाप् लाउन्या कामलिन्याले रात दिन जौनावषत् मा भया पनि विंति पारि. छाप् गराइ दियेन भन्या उसलाइ पनि ५ रूपैया जरिवाना गर्नु. श्री मिनिष्टरसंग विंति गर्दा. जवाव् निकासा भयेन भन्या. मुन्सिलाइ र. छाप् गराइ दिन्यालाइ जरिवाना माफ.

१३. स्वास्निमानिसहरूकले. हाम्रा तरियानिमा. घर हुन्या वाहेक. महाभार हिमालय नाघि कांहि तीर्थ वर्त गर्न भनि जाँछौ भन्या. ४५ वर्ष नाघ्याका सधवा आफ्ना षसम्का साथमा जाँछौ भंन्यालाइ र. विधवाहरूलाइ. जान दिनु. एस्ताको राहादानि गर्न्या जिम्मा हालन्या लैजान्यालाइ षतवात लाग्दैन. ४५ वर्ष नपुग्याका स्वास्नि मानिस्लाइ. २५ जनसम्म पहरा चौकि गरिलैजान सक्न्याले लैजानु राहादानि पनि गराइ दिनु. एति पहरा. राषन नसक्न्याले सधवा विधवा स्वास्निहरू र. कमारि वधेत्यानि चाकर्निस्मेत्. कसैलाई पनि जान नदिनु. एस्ताको राहादानि पनि नगर्नु. जिम्मा पनि कसैले नहालनु. लि पनि कसैले नजानु. ४५ वर्ष नपुग्याका स्वास्नि मानिस्को राहादानी गरि दिन्या. लाई र. जिम्मा हालिदिन्या लाइ जागिरवाट षारेज गरि जतिजना को राहादानि गरि. दियाकोछ. उतिको मुडको २०।२० रूपैयाका दरले जरिवाना गर्नु. लैजान्यालाइ पनि सोहि वमोजिम् जरिवाना गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु.

१४. ४५ वर्ष देषी उधोका स्वास्नि मानिस् गैह्र तीर्थ गर्न जाँछौ भन्यालाइ महाभारको डाडो काटन नदिनु. आफ्ना स्वास्नि छोरा छोरी लि हाम्रा मुलुक् तराइमा गै षेतिपाति गरि षांछौ भन्यालाइ. गै वस्नदिनु. एस्तालाइ राहादानि गर्न्या जिम्मा हालन्यालाइ जरिवाना हुदैन.

१५. लालमोहोर र. वजिर्को दस्षत् गराउदा. एक थोक् वेहोराको एक थोक् वेहोरा देषाइ वजिरलाइ वेहोरा ढाटि लालमोहोर दस्षत् गराइ लियाको ठहर्‍यो भन्या तेस्ता मोहोर दस्षत् ढाटि गराइ दिन्या र. कारिंदा भै आफुले जानि जानि विहोरा ढाटि गराइ. दियाको ठहर्‍यो भन्या तेस्तालाइ. अैन वमोजिम्. सर्वस्व गरि. जागिर देषि षारेज गर्नु. मालिकको प्रमान्गिले भयाकार. यो कुरा एस्तो हो भनि वेहोरा षोलि मालिक्लाइ जनाइ भयाका कुरामा कारिंदालाइ पक्राउ पर्दैन.

१६. कोहि राज्यसित लडाइ पर्‍यो. उस वेलामा दुसमन्सित गै मिलि आफ्ना जगा जमीन सहि गराइ. थामन्याका जगा जमीन् सर्कारवाट जफत् गरि लिनु. इ अैन अघि १८२५ सालमा श्री ५ वडामहाराजा पृथ्वीनारायण साहवाट वाधिवक्स्याको सदर ठहरि सोहि अैन थामियो.

१७. महाराज वजिर कौशल् अरू उमरावहरूले कौशल गरि. मोहोर तावा पत्र भै कौसिका स्याहामा नक्कल् पनि लेषियाको छ भन्या. जगा जमीन. सदावर्त्त गुठि विर्ता मरौठ् फिगढार वेष घर वारि ज्यूनि इजत् मान् मरातव जात भात जसजसले रिझाइ जो जो सनद वमोजिम् वक्सि पाइ आयाको छ. सो त्क्सीर नभै जफत हुदैन इ अैन अघि १८२५ सालमा श्री ५ वडामहाराज पृथ्वीनारायण साहवाट वाधि वक्स्याको सदर ठहरि सोही अैन थामियो.

१८. सर्कारवाट मुषत्यार र. मुषत्यारका भाइ छोराले पायाको गुठि विर्ता फिगटार वेषमरौट्माना चावल. घर वारि छाप् गैह्र पायाका कुराको मोहोरमा उस वषत्माका काजि र भारादारहरूको मार्फत्. पर्‍याको रहेछ. भन्या सदर हुंछ. मार्फत नभयाका मोहोरले पायाका सदर हुदैन दुनित्रा गैह्रले पायाकामा. उस वेलाका मुषत्यारको मार्फत भयाका लालमोहोरले पायाको सदर हुंछ. मुषत्यारको मार्फत नभयाका मोहोरले पायाको सदर हुदैन. जफत् हुंछ.

१९. ज्यान सनवंधिंका कुरा. जारिका कुरा जात्सनवंधिका कुरा करणि भात पानि संवंधिका कुराको कागज लेषता आफुले लेष्या लेषयाका कागजमा नभयाका मानिस्.साछि लेष्या अथवा नभयाको साभासमुच्चय साछिले लेष्यो तेसै कागजले केहि विरानगर्न्याको ज्यान मर्‍याको रहेछ. रोवकारगर्दा. कागजमा लेषियाका मानिस् साछि वस्याका ठहरेनन्भन्या. तेस्तालाइ ज्यान को वदला ज्यान् लिनु. मुडिन्या जात रहेछ भन्या दामल् गर्नु. ज्यान मर्‍याको रहेनछ. भन्या. कागज लेषाउन्यालाइ. १॥ वर्ष कैद गर्नु. म्यादका रूपैया तिर्‍या लि छाडिदिनु. अर्काले अह्राइ नभयाका मानिस् साछि हालि कागज लेषि दिन्यालाइ ५० रूपैया दंड गर्नु.

२०. अदालत् ठानावाट निसाफ हेर्दा अंन्यायमा लालमोहोर दस्षत् भयाको रहेछ निसाफ गर्दा पनि अंन्यायै ठहर्नै गयो भन्या. त्यो लालमोहोर दस्षत् झिकि अैन वमोजिम् निसाफ गर्नु. झिकियाका लालमोहोर दस्षत् सवै ज्मा गरि वर्ष दिन सम्मको एकै चोटि धुलाउन ल्याउनु.

२१. ज्यान संवधि जारिकरणि जात भातका कुरावाहेक अरूकुरामा नभयाका मानि.स्को नाउ लेषि कचहरिमा नभयाका मानिस्को सहि हालि झुट्टा चिठि पत्र मुचुल्का तमसुक गैह्र कागज. जालसाज गरि लेषन लाउन्यालाइ ६० रूपैया जानि जानि एस्ता कागज लेषि दिन्यालाइ ५० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

२२. लोग्न्या मानिस् वा स्वास्नि मानिस कसैले.मानिस माऱ्याको रहेछ. वा कुट् पीट गरि अैनका म्याद भित्रमा मानिस मऱ्याको रहेछ र. एस्तो गरि मानिस् मऱ्याको कुरामा फलानाले माऱ्याको होइन वा. फलानाले कुटयाको चोट्ले म्याद भित्र मऱ्याको होइन म्याद नाघ्या पछि मऱ्याको हो भनि जालसाज गरि. झुट्टो कागज लेषन लाउन्या र. लेषन्या ज्यान संवंधिमा जालसाज गऱ्याको ठहर्नाले मोष्यलाइ ६० रूपैया अरूलाइ ५०।५० रूपैया दंड गर्नु. म्यादका रूपैया दिया लि छाड्नु.

२३. कोहि सधवा स्वास्निले आफ्ना लोग्न्याका साथमा तीर्थ वर्त गर्न देश पर्देश जाँछौ भन्या ४५ वर्षको उमेर भयाको नभया पनि उस्का लोग्न्याका साथमा तीर्थ गर्न जानदिनु. एस्ताको राहादानि गर्न्या जिम्मा हालन्या लैजान्याहरूलाइ वात लाग्दैन.

२४. कसैले अंस नभै. एकाघरैमा. वस्याका वावु वाज्या दाज्यू ज्येठा कांछा वावु वज्यू आमा भाउज्यू ज्येठि कांछि आमाहरूमा घरको लिन दिन गर्न्या. जान कार मोष्य मालिक छदै भाइ छोरा नाति वुहारिहरूलाइ फुल्याइ फकाइ हवकि ददवकि गरि वा. राजि गराइ घर षेत ज्यू धन गैह्र लेषाइ दियेछ. मागि लियेछ भन्या. घरको मोष्य मालिकले मंजर गऱ्या दिन्या लिन्यालाइ बात लाग्दैन सदरैहुंछ. जानकार मोष्य मालिकहरूले. हामि छदै अरूले दि जान्या होइन भनि. कराउन आया तिन्ले दियाको सदर हुदैन. मोष्य मालिकलाइ नभनि अरूले दियाको नगद जिनसि गैह्र माल भया मालै फिर्ता गराइ दसौद लि सौपि दिनु. पाउन्या लिन्याले मासेछ उठायेछ भन्या. तिर्नसक्या तिराइ दिनु. तिर्न सकेन भन्या भाषा तमसुक गराइदिनु. घरका जानकार कर्त्ताछदै उन्लाइ थाहा नदि अरूवाट लिन्यालाइ लियाका ज्माका सयकरा १० रूपैयाका दरले दंड गर्नु.

२५. आफ्ना वावु वाज्या दाज्यू भाइ ज्येठा कांछावावुहरू साछि लेषियाका जगा जमीन् लिनदिन कारोवार गैह्र कुरामा र. बुढापाका जानकार भला मानिस् भनि अडा श्रेस्ता कचहरिवाट झिकाइ फलाना मुद्दामा तिम्हेरूले. देष्या जान्या सुन्याको व्यहोरा जो हो जस्ताको तस्तो लेषिदेउ भनि सोधनी हुदा फलाना कुरामा हामिले जान्या सुन्या देष्याको एस्तो हो भनि. कागज लेषि. सहि स्मेत् हालि दियाका कुरामा पछि भाइ छोरा नातिले उजूर गऱ्यो वा. ढेरै जनाले सहि हाल्याका कुरामा कसैले उजूर गऱ्या भन्या अघि सहिहलाउदा उस् वेलामा नसाअ ं वल् षायाको अजान अदवेश्रो वालष वौल्हायाको पनि रहेनछ कचहरिवाट कर लगाइ छेक थुन पनि गऱ्याको रहेनछ आफुले जानि वुझि सहि हालि दियाको ठहऱ्यो भन्या. सहि हाल्याको कुरो उल्टिदैन सदरै हुंछ. मामिला उल्टाउनाका लागि फरेव झेल गर्न्या झेलाहालाइ. उसै झगराका. विगाको दसौदका दरले दंड गरि छाडि दिनु. अघि सहि हलाउदा थुनिछेकि सहि हलायाको अनाज अदवश्रो वालष वौल्हा रहेछ र सहि हालि दियाको मैन्हा ४ भित्र सहि हालन्यैले उजूर गऱ्यो वा. एस्तालाइ सहि हलायाको हो भनि अरू उजूर गर्न आयो भन्या कुरो वुझि अैन वमोजिम् निसाफ गरि दिनु. म्यादनाघ्या पछि कराउन आउन्याको कुरोनसुन्नु.

# कित्र्याकागज

१. कित्र्या तमसुकले असामि समायो पुर्पक्षमा कित्र्या ठहऱ्यो भन्या तेस्ता कित्र्या तमसुक गर्न्यालाइ जति रूपैया समायाकोछ मैन्हाका ५ रूपैयाका दरले कटि नहुंज्याल् कैद गरि राषनु. कैदका रूपैया तिऱ्या लि छाडि दिनु.

२. लिनदिन कारोवार केहि नभयाका कुरामा. फरेवि झुट्टो कागज वनाइ एति रूपैया लिनुछ भनि पक्रन आउन्यालाइ विगा वरावर दंड गरि लिनु. दंडका रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

३. सर्कारलाइ एति जगा एति रूपैया चाहियो अथवा ज्यू चाहियो भनि फरेवि कित्र्या मोहोर मुषत्यारका कित्र्या दस्षत्. लि मुलुकमागै काजकाम तर्तहसिल् गर्न्यालाइ अैन वमोजिम् अंस विहा षर्च परसारि उस्को सर्वस्व गरि दामल् गर्नु. लालमोहर दस्षत् नगराइ मुलुकमा गै सर्कारलाइ मुषत्यारलाइ चाहिंछ. भनि जफति गरि वा ढाटि लिन्यालाइ दुनित्राको विगो फिराई विगाको दोवरका दर्ले कैद गर्नु. रूपैया तिऱ्या विगाको चौवर दित्रा लिनु.

४. कसैलुच्चाले अर्काका जागीर विर्ता गैह्र जगाको वालि तिर्जा पुर्जा गराइ ढाटि छलिविचमा जगावाट उठाई लैगयो भनि कोहिकराउन आयो भन्या तेस्ता लुच्चालाइ पक्रि उसले उठाइलियाका वालीको विगो भराईदि विगै वमोजिम जरीवाना गर्नु. नतिऱ्या अैन वमोजिम कैदगर्नु वालि वेचन्या जागिऱ्या रहेछ भन्या. तेस्को जागिर जफत गरि तानावाना च्याति पल्टन्मा घुमाइ छोडि दिनु. एस्ताको पाक्याको वालि भया पनि नदिनु.

५. दर्वारवाट नपायाको पगरि मैले पात्रा भनि पर्पजनी गर्न्या जगाको काग काम गर्न्याका भाइ छोराको अंस र छोरिको विहा षर्च पर सारि सर्वस्व गरी तेसलाइ ३ वर्ष कैद गर्नु. एस्तालाइ म्यादका रूपैया डवल्का हिसावले दिया लि छाडिदिनु.

६. दर्वारवाट नपायाको पगरि पात्रा भनि पर्पजनि गर्न्या अर्काको छाप् चोरि ढाटि लाउन्या कित्र्या छाप् गरि. दस्षत् पट्टा चिठि पत्र तिर्जा पुर्जा पतिया रसिद फारषत् तमसुक गैह्र गर्न्या संग

यो झुट्टो हो भनि जानि जानि तेस्ता संग मिलिकाज गर्न्यालाइ १॥ वर्ष कैद गर्नु म्यादको रूपैया तिर्छ भन्या. अैन वमोजिम् लि छाडि दिनु.

७. दर्वारवाट नपायाको पगरि. पाजा भनि पर्पजनि गर्न्या अर्काको छाप् चोरि ढाटि लाउन्या कीर्त्या छाप् गरि दस्षत् पट्टा चिठि पत्र तिर्जा पुर्जा पतिया सवाल फारषत् तमसुक रसिद कवच गैह्र गर्न्या संग यो झुट्टो हो भनि थाहा नपाइ. मिलि काम गर्न्यालाइ छोडिदिनु. तक्सीर जरिवाना केहि पर्दैन.

८. लालमोहोर मुषत्यारका दस्षत्का किर्त्या छाप् वनाउन लायाको हो भनि जानि जानि छाप् वनाउन्या र. नमुना वनाइ दिन्यालाइ अैन वमोजिम सर्वस्व गरि छाडि दिनु.

९. लालमोहोर मुषत्यारका दस्षत चोरि छाप् लाउन्या र. किर्त्या वनाउन्यालाइ अैन वमोजिम्को अंस सर्वस्व गरि दामल् गर्नु.

१०. लालमोहोर मुषत्यारका दस्षतको अंक अक्षर षुर्कि मेटि घटि वढि पार्न्यालाइ अैन वमोजिम्को अंस सर्वस्व गरि छाडिदिनु. दफदरका तिर्जा पुर्जा धर्माधिकारको छाप् लायाका पतिया र. भै भारादारका दस्षत्को अंक अक्षर षुर्कि मेटि घटि वढिपार्न्यालाइ विगो भराइ. विगै वमोजिम् दंड गरि लि १ वर्ष कैद गर्नु. दंडका रूपैयामा अैन वमोजिम दिया लिनु. कैदको डवल दिया लि छाडि दिनु.

११. कसैले. आफुलाइ भयाका जितापत्रमा थोरै रहेछ उस्मा अंक अक्षर षुर्कि घटि वढि पारिलेष्याको रहेछ भन्या. जति वढायाको छ उपनि लिनु. जितापत्र भै जित्याको जगा पनि जफत् गरि लिनु. त्यो नगद जिनिस् चौपाया जगा जमिन् जो हो सर्कारिया हुंछ.

१२. अदालत प्रमालवाट कायेलनामा ल्याइ साधक गर्दा अैनमा हेरि अैन वमोजिम् फलाना सजाय दंड गर्नु भनि. अैनमा जो लेषियाको छ. त्यो साधक दवाइ अथवा तेस्मा अंक अक्षर घटाइ. वढाइ षुर्कि मेटि ज्यू नमासिन्यालाइ नमासिन्या जातका हाकिमले मासेछ भन्या अैन

वमोजिम्को अंस सर्वस्व गरि छोडि दिनु. मासिन्या जातका हाकिमले मासेछ भन्या. तेसै हाकिम्लाइ मासिदिनु.

१३. ढाक्रा जागीऱ्या. भरभारादारहरूको. किर्त्या छाप् वनाइ. छाप् चोरि दस्षत् पट्टा चिठि पत्र पतिया सवाल षारषत रसिद तर्तमसुक गैह्रगर्यालाइ जतिज्माको किर्त्या गऱ्याको छ उति विगो भराइ विगा वमोजिम् दंड गरि ३ वर्ष कैदगर्नु विगो रदंड कैदका रूपैया नतिऱ्या मैन्हाका ५ रूपैयाका दरले कैद गरि म्याद पुग्या पछि छाडि दिनु.

१४. धर्माधिकारको दफदरको अदालत ठानाका छाप् जानजानी किर्त्या वनाइ दिन्या र नमुना वनाइ दिन्यालाइ १ ॥. वर्ष कैद गर्नु. अरू भर भारादारका छाप् जानि जानि कीर्त्या वनाइ दिन्यार. नमुना वनाइ दिन्यालाइ. १ वर्ष कैद गर्नु. म्यादका रूपैया डवल् दिया लि छाड्नु.

१५. अरू भरभारादारहरूका. छाप् कीर्त्या वनायो. लाउन पायेनभन्या. १ वर्ष कैद गर्नु. म्यादका रूपैया दिया लिछाड्नु. सर्वस्व हुंदैन.

१६. दफदर दफदरवाट हुन्या तिर्जा पुर्जा. हरू चोरि छाप् लाउन्या र. किर्त्या गर्न्यालाइ विगो भराइ विगा वमोजिम् दंड गरि लि ६ वर्ष कैद गर्नु.विगो र दंडमा अैन वमोजिम् दिया लिनु. कैदको डवल दिया लि छाड्नु.

१७. धर्माधिकारको छाप्. दफदरको छाप् अदालत ठानाको छाप् किर्त्या वनायेछ. लाउन पायाको रहेनछ भन्या अैन वमोजिम्को सर्वस्व गरि ३ वर्ष कैद गर्नु म्यादको रूपैया दिया लिनु.

१८. लालमोहोर मुषत्यारका दस्षत्को कीर्त्या छाप् वनायेछ. लाउन पायाको रहेनछ भन्या तेस्को सर्वस्व गरि ६ वर्ष कैद गर्नु. म्यादका रूपैया दिया लिनु.

१९. लालमोहोर. मुषत्यारका दस्षत् किर्त्या गरि मुलुक्मा तर्तहसिल् गर्यालाइ अैन वमोजिम्को सर्वस्व गरि दामल् गर्नू मोहोर दस्षत् किर्त्या गऱ्याको रहेनछ मुषैका परिपंचले सर्कारको हुकुम् मुषत्यारको मर्जि आज्ञा भयाको छ भनि सर्कारका रकम्का तवर सित मुलुक्मा तर्तहसिल् गऱ्याको रहेछ भन्या. सर्कारिया विगो सर्कार लगाइ दुनिञाको विगो दुनिञालाइ. फिर्ता गराइ

दि तहसिल गर्न्यालाइ. अैन वमोजिम् अंस सर्वस्व गरि. ४ वर्ष कैद गर्नु. म्यादका रूपैया दिया लि छाडि दिनु.

२०. श्री ५ सर्कारको वाकि वुझाउन्या विहोरामा जागीर्दारको वाली जागीर्मा. भाइभाइका अंस वंडाका कुरामा सर्वस्व हुन्या विहोरामा दामासहि हुदामा. साहु ढेरै भै साहुमार्न्या कुरामा. कित्र्या तमसुक गरि जाल्साजि गर्न्या साहु असामि लेषक साछि साछिहरू जतिछन् उन्लाइ. जतिज्माको कित्र्या तमसुक गर्‍याको छ. उसै ज्मामा दामासहिका दरले दंड गर्नु रूपैया नतिर्‍या अैन वमोजिम् कैद गर्नु.

२१. तषत हरि राज्य छुट्याका राजाको कीत्र्या मोहोर गर्न्या वा. लिफामा कित्र्या लेषन्या लेषाउन्यालाइ. कित्र्या गर्‍या वावत्. जौन जगा जमिन्. लिया दियाको ठहर्छ. उस्का मोल्का विगा वमोजिम् दंड गरि ७ वर्ष कैद गर्नु. दंडको अैन वमोजिम् दिया लिनु. कैदको डवल् दिया लिनु. दियालियाको जगा जमिन् पनि सदर हुदैन.

२२. अर्काको ज्यू जान्या जात् जान्या कुरा र. करणि संवंधि कुराको वकवाद वदनामि हुन्या. हुज्जत हुन्या. कुरा लेषि जगा जगामा कागज पुर्जि टासन्यालाइ काटिन्या जातलाइ काटि मारिदिनु. मुडिन्या जातलाइ अैन वमोजिम्को. अंस सर्वस्व गरि जनै झिकि मुडि धपाइ दिनु.

# अदालतीको

१. कसैको जितापत्र गर्दा पाचसय देषि मनिका विगाको जितापत्र अदालत ठाना अमालका डिट्ठा विचारि र. विर्ता वितलव गुठि फिगढार माना चावलका धनिले गर्नु. पाचसय देषि माथिका विगाको जितापत्र गर्नु गर्दा मुषत्यारको र. अदालत ठानाका मालिकको छाप् लगाइ जितापत्र गरि दिनु.

२. अैन नहुदै अघि अडा गौडा अदालत ठाना अमालमा कुरो परि. एक फेरा छिनियाका नगद जिनिस् सुना चादि कसन् तमन् जवाहेर चौपाया कमारा कमारि अंन कसैले जवर जस्ति गरि र. चोरि लियाका कुरामा. ढेरै दंड गर्नु पर्न्या ठाउमा थोरै दंड गरि छुट्याको रहेछ भन्या. एक वार दंड भया पछि थोरै भयो भनि फेरि दंड गर्नु हुदैन. एकै षत्मा दोश्रा दफे जति दंड जस्ले गऱ्याकोछ. उसवाट डाडिन्या मानिस्लाइ दंड गऱ्याको फिर्ता गराइ डाडन्यालाइ. विगा वमोजिम् दंड गर्नु. दंडका रूपैया नतिऱ्या मैन्हाका ५ रूपैयाका दरले कैद गर्नु.

३. विर्ता गुठि सदावर्त वेषफिगढार मरौट् माना चावल छाप् पेटिया षर्च भनि पायाका जगा किपट रैकर जागिर गैह्र जगामा पऱ्याको. कुराको विगा भरायाका झगरामा विगै वमोजिम्को दंड गरि आम्दानि जगाका धनिले षानु. विगो भराउन नपर्न्या कुराका झगरामा अवल द्वयम् सिम चाहार गरि आठ आना देषि उभो २० रूपैयासम्मको निसाफ गरि दंड गरि धनिले लिनु. विगो नभरायाका झगरामा कसैले २० रूपैया देषि वढता दंड गऱ्याको भया झगरियासित अैन वमोजिम् दंड गरि लिनु वढता लियाको फिर्ता गराइ दिनु वढता दंड गर्न्या अमालि हाकिम्लाइ उसैले अैन भंदा वढता जति पटक गऱ्याको छ उसै वमोजिम् दंड गरि अदालतवाट लिनु. रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

४. नगद जिनिस् चौपाया कमारा कमारि. अनाजका झगरा पऱ्याकामा विगा वरावर दंड गर्नु. अरूसानातिना कुराको विगो तिराउनु नपर्न्या झगरामा षतवात हेरि १ रूपैया देषि २० रूपैयासम्म दंड गर्नु. रूपैया तिर्न नसक्न्यालाइ मैन्हाका ५ रूपैयाका दरले कैद गर्नु.

५. अडा अदालत ठाना अमालका डिट्ठा विचारि अमालि द्वाऱ्या इजारादारले विनाषत्मा दंड गऱ्याको ठहऱ्यो भन्या वेहक्मा दंड गरि लियाको विगो फिर्ता गराइ उसले गऱ्याको पटक् वमोजिम् डिट्ठा विचारि द्वाऱ्या इजारादारलाइ दंड गरि लिनु.

६. अदालत ठाना अमालवाट र. रकम्दारले ज्यान सन्वंधिका कुरामा दामल् हुन्या वाहेक अरू कुरामा सर्वस्व लिना दामल् गर्ना मानिसलाइ दंड गरि छोड्यो भन्या दंड गरि छोडन्यालाइ उसले असुल गरि लियाको विगो फिर्ता गराइ उसैले गऱ्याका पटक् वमोजिम् दंड गर्नु. षतुकिलाइ ढुँगो छुवाइ दंड गऱ्याका लेषत् जादैन अैन वमोजिम् जोगर्नु पर्न्या सजाय हो फेरी पक्रि सो माफिक सजाय गर्नु.

७. अडा अदालत. ठाना अमालका हाकिम् डिट्ठा विचारि अमालि द्वाऱ्या रकमदार गैह्रले ज्यू जान्या षतुकिलाइ र. ज्यान सनवंधिका कुरामा दामल हुनु पर्न्या मानिसलाइ दंड गरि छोड्यो भन्या उस्ले दंड गरि लियाको विगो फिर्ता गराइ दंड गरि छाडन्याको अैन वमोजिम्को अंस सर्वस्व गरि लि छाडि दिनु. ज्यू जान्या षतुकिलाइ दंड गऱ्याका लेषत जादैन. पक्रियो भन्या ज्यूको वदला ज्यू लिनु.

८. मासिन्या जात कसैले दंड हुन्या विरां गऱ्यो दंड हुन्या तक्सीरमा अमालि द्वाऱ्या वितलव गुठि सर्वा कि माफि जगाका. कसैले दंडका षत्मा ज्यू मास्याको रहेछ भन्या मासिन्यालाइ अमलेष गराइ दिनु. मासन्यालाइ दंड गऱ्याका रूपैया भूस् गराइ १०० रूपैया दंड गरि लिनु. रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

९. मासिन्या जात कसैलाइ दंड हुन्या तक्सीर गऱ्यामा घरमा धन हुन्यालाइ अैन वमोजिम् पटकका रूपैया लि छोड्नु अैन वमोजिम् पटकका रूपैया तिर्न सकेन भन्या मैन्हाका २ रूपैयाका हिसावले चाकरि गराइ छाड्छ तापनि मैन्हाका ५ रूपैयाका हिसावले कैद गराउछ तापनि .अमालि द्वाऱ्या विर्तावार गुठियारहरूको षुस कदाचित् म्याद नपुगी भागीगयाको पछि पक्रियो भन्या तेसलाइ फेरि मैन्हाका १ रूपैयाका दर्ले कट्टि नहुंज्याल चाकरि गराइ छोडि दिनु. दंड वावत्का रूपैयामा दंड गर्न्याले वाधा लेषाइ लिन हुदैन वाधा लेषाइ लियाको भया. थैलि भुस् गराइ थैलि विगा वमोजिम् दंड गर्नु. दंड गर्न्या हाकिम अमालाले तेहि वाधा

अर्कासित सारि रूपैया लियाको रहेछ र लिन्याले जानि जानि किन्याको भया. किंन्याका थैलि लिलाम् गरि लि वेचन्यालाइ. विगा वमोजिम् दंड गर्नु. लिन्याले जान्याको रहेनछ भन्या उस्कोथैलि भराइ दि वाधा सार्न्या अमालिलाइ सोहि विगा वमोजिम् दंड गर्नु.

१०. अैन भया पछि अैन आफ्ना गोदमा राषि. कम्ति वढति गरि. वेमुनासिव दंड गर्न्यालाइ विगा वमोजिम् दंड गर्नु. षतलाग्न्यासित अैन भंदा वढता लियाको रहेछ भन्या अैन देषि. वढता लियाको फिर्ता गराइ दिनु. अैन भन्दा घटि लियाको रहेछ भन्या षत वात लाग्न्या सित अैन वमोजिम्मा जति घटि लियाको छ. उति फेरि पनि असुल गरि लिनु. घटि वढि पार्न्या हाकिम्लाइ वढता जति पटक गर्‍याको छ उति उति दंड गर्नु. घटि पार्न्यालाइ अैनका पटकमा जति घटायाको छ उति पटक गर्नु. रूपैया नतिर्‍या मैन्हाका ५ रूपैया का दरले कैद गर्नु अैन वमोजिम् गर्न्या अदालत ठाना अमालवालालाइ षत लाग्दैन.

११. अदालत ठानाका. हाकिम र. पूर्व पश्चिम अडा गौडाका हाकिम अमालका द्वार्‍याहरूले झै झगरा गैह्र मामिला छिंदा. अैनका कितावमा लेषियाकासम्मका काम कुरा परि आयामा कौसल्मा. साधनु पर्दैन. अैन वमोजिम् आफैले आटि छिनि दिनु. अैनमा लेषियासम्मका कुरामा आफैले नछिनि कौसल्मा साधनु आया भन्या अदालतका हाकिमलाइ २० डिठ्ठालाइ १० विचारिलाइ. ५ वहिर अमाल्का द्वार्‍यालाइ ५ रूपैयाका दरले जसले साधन आउछ. उस्लाइ जरिवाना गरि लिनु. अैनमा नलेषियाका र. अैनमा विहोरा नमिलन्या कुरा परिआया भन्या. कौसलमा साधनु र कौसलियाले तजविज गरि. अैनमा लेषाउनु पर्न्या कुरो रहेछ भन्या अैन तजवीज गरि लेषाइ दिनु. विहोरा नमिल्न्या कुरो रहेछ भन्या. विहोरा मिलाइ एस्ता तरहले छिन भनि तोकि दिनु.

१२. अडा अदालत ठाना अमाल्मा परि आयाको विगो भराउनु पर्न्या मुद्दाका झगरामा लियाका विगो कसैले नमासनु. मास्यो भन्या श्री ५ सर्कारका हुकुमले मासियाको भया तेस्को सट्टा तोसाषानावाट दिलाइ दिनु. वजिरका सनदले मासियाको भया वजिरवाट दिलाइ दिनु. अडा अदालत ठाना अमाल्का हाकिम् गैह्रले मास्याको भया त्यो विगो मासन्या जो हो उसवाट विगो भराइ विगा वमोजिम् दंड गर्नु. विगो दिन सकेन भन्या अैन वमोजिम् सर्वस्व गरि लि विगावालालाइ विगा वावत् भर्ना गराइ दिनु सर्वस्व भया पछि. विगो पुगेन भन्या. विगावालाले

वाकि नपुग्याको पाउदैन माया मार्नु पर्छ. विगो भराइ वढता भयाको श्री ५ सर्कार लगाइ दिनु.

१३. अडा अदालत ठाना अमाल पूर्व पश्चिम उत्तर दक्षिण गैह्र नेपालका भ्रूलषानामा भर्ति भै कैदमा पऱ्याका जो छन् तिन्हेरूका विराव अनुसार कैद गर्नु. कैदीका अैन वमोजिम् रूपैया लि छोड्नाको र. म्याद पुग्याका कैदिलाइ छाड्नाको गैह्र भ्रूल षानाको अषत्यार अदालतका हाकिमको अदालतका हाकिम. देषि वाहेक नेपालका भ्रूलषानामा पऱ्याका कैदिको कैद गर्नाको र. छाड्नाको अरूलाइ अषत्यार गराय अदालतका हाकिमलाइ जरिवाना होला.

१४. भ्रूगरा छिंदा दामल हुन्या. ज्यू जान्या मुडिन्या मासिन्या. कैद हुन्या जरिवाना हुन्या गैह्र अदालत ठाना अमालमा पऱ्याका मामिला छिंदा. दोहोरो कुराको छलफल गरि एस्तालाइ एस्तो सजाय लेष्याको रहेछ भनि अैन देषाइ कायेलनामा लेषाइ अैन वमोजिम् छिनि दिनु.

१५. अदालतमा डिट्ठा विचारि हाल्दा. अैनको किताव वाचन नजाँन्यालाइ डिट्ठा विचारि नहालनु. अक्षर नजाँन्या अैनको किताव पढ्नजाँन्या डिट्ठा विचारि हालन्यालाइ २० रूपैया जरिवाना गर्नु.

१६. डिट्ठा विचारि अमालि द्वाऱ्या विर्तावार वितलव गुठियार जागिदारले आफ्ना षुवा जागिर्का कुरा हेर्ना वाहेक अरूले धात फिराद भ्रूगराको कुरा सुँनु भंन्या दस्तावेज प्रमानगि भयाकाले. सुँनु विचमा सनद प्रमानगि नभै घर सार घर भ्रूगरा वाहेक अरूकसैले धात फिराद सुन्यो भन्या. दंड जिताउरि ठेकि वक्सौनी जति सुनाया पटक गऱ्याको छ उति दंड गरि लिनु. उसले लियाको विगो हकसित हवस्. वेहकसित हवस् जसवाट लियाको हो उसैलाइ. फिर्ता गराइ. दि अदालत अमालवाट अैन वमोमिज् निसाफ गर्नु एस्ता वेतालुकवालाले गऱ्याको निसाफ सदर हुदैन कुरामात्र सुन्याको रहेछ भन्या २० रूपैया जरिवाना गर्नु. तेस कचहरीमा वस्न्या पंचहरूलाइ जनही ५।५ रूपैया दंड गर्नु. नेल ठोकन्यालाइ दिनको २।२ रूपैया पाताफर्काउन्यालाइ घडिको ४।४ रूपैया कोर्रा ठोकन्यालाइ चोट्को ४।४ रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु.

१७. पाँच वर्ष देषि माथि सोह्र वर्ष देषि मनिका केटाकेटी र वुढा वुढि स्वास्निमानिसका झै झगरा पैल्है छिंनु. एस् पछि निर्धा डुवलाको छिन्नु. डिट्ठा विचारिले एहि रितले छिन्नु.

१८. अडा गौडामा जान्या भारादार. जगाजगामा जान्या कामदार. अदालतका हाकिमले वुझिलियाको विगो कर्पन् र. दामलकैदको कायेलनामा कागज तानावाना षर्षजाना सर्कारिया माल स्मेत दुरूस्त गराइ राख्नु आफु वदलि भयामा षसोषास वुझाइ रसिद लिनु. पाइ आउन्याले पनि षसोषास वुझि रसिद दिनु. पाइ आउन्याले पनि वुझि लियेन. षोसिन्याले पनि वुझाइ दियेन भन्या जागिर जफत होला षोसिन्याले वुझाउन सकेन भन्या प्राइम्मिनिष्टर सित र कुमारिचोकमा जाहेर गर्नु. जाहेर गऱ्या पछि. पाउन्या हाकिमलाइ वात लाग्दैन.

१९. अव उप्रान्त अडा अदालत ठाना अमालवाट वावति गैह्रलाइ दंड सजाय गर्दा र अरू मामिला हिसाव किताव वासिल वाकि फरफारक गैह्र. अैन वमोजिम्का. कामकुरा गर्दा. अैन मिलाइ. फलाना महल्का एति लम्वर का अैनले यो कुरो गर्नु भंन्या जनाइ लेषनु.

२०. साहु रिणिका कुरामा हवस. अरू विहोरामा हवस. अदालत ठाना. अमाल र अरू कचहरिमा कुरो परि. विगो वुझि लिया पछि. वा धन ज्मानि लिया पछि. झगरा छिन्नालाइ २।४ वर्ष ढिल भयो तापनि. कचहरिमा विगो दाषिल गऱ्याका र. धनज्मानि लेषाइ लियाका दिन देषि पछिको व्याज लाग्दैन. नतिराउनु.

२१. अव उप्रान्त अडा अदालत ठाना अमालवाट र कचहरि श्रेस्तावाट साहु रिणीका मुद्दामा हवस. रै रकम गैह्र अरू मुद्दामा हवस. कचहरिमा विगो भराउदा झगरियाका मुषले भन्या वमोजिम् विगो नसमाउनु. दोहोरो छलफल गरि. तमसुक वहि षाता स्याहा श्रेस्ता साछि गुहाइका रूहले हक तिर्जु पर्न्या ठहऱ्याको विगो अदालत ठाना अडा गौडा अमालका हाकिमले समाति उस्का नगद जिनिस घर षेत् ज्यू जमिन् गैह्र तायदातवाट तिर्न सक्या तिराइ दिनु. नसक्या कपालि तमसुक गराइ दिनु. कचहरिवाट भरायाको ज्माको अैन वमोजिम् दसौद विसौद दंड गैह्र जो हो लिनु. भाषा तमसुक गरायाका ज्माको दसौ वक्सौनि केहि पर्दैन् नलिनु. विसौद.

२२. अदालत ठाना अमाल कचहरिमा फिऱ्याद आउदा जौन मुद्दाको नालिस गर्छ सो कुराको व्यहोरा षोलि कागज पत्र र मेरो मुद्दा येति कै हो ञाहा देषि वढता छैन भंन्या मुचुल्का लि पुर्पक्ष हेर्नु.यो मुचुल्का नलि झगरा हेर्न्यालाइ २० रूपैया जरिवाना गर्नु. आफुले मुचुल्का लेषिदिया पछि. फेरि अर्को मुद्दाको कागज छ भन्यो भन्या त्यो कागजका मुद्दावाट पुर्पक्ष नहेर्नु.

२३. कौसल अदालत ठाना कौसि कुमारिचोक् मुलुकीषाना. मोठ् तहवील्. सदर दफदर. दफदर छेभडेल. वुभडेल् तोसाषाना. र पाहाड मध्येस भोट् अडा गौडा श्रेस्ता गैह्रवाट. इ अडाका हाकिम्का दर्जा भंदा वढता दर्जा भयाका मानिस लाइ केहि कामले डाकनु पऱ्यो वा . नडाकि आफै आया भन्या आफु वस्याका विछाउनामा आउनु हवस् वस्नु हवस्.भनि आफ्ना दाहिनातर्फ राषि आफु वरोवरका र आफु भंदा कम् दर्जाका भया. मानिस् हेरि आफ्ना वाञा तर्फ राषि गर्नु पर्ऱ्या कुरा कहानि गर्नु उन्ले जाञी गऱ्याको ठहऱ्या वढिया गऱ्याको रहेछ भंनु. वेजाञी गऱ्याको ठहऱ्या यो कुरो नवुझाइ हुदैन भंनु. दोहोरो कुरो वुझदा. विडिकर्पन् गराउनु पर्न्या ठहऱ्या आफै तलसरि. विडि हाल्छ तापनि आफु अषत्यार अर्कालाइ अघि सारि उसवाट हलाउछ तापनि उनैको षुसि आफुमाथि वसि अषत्यारवाट विडि हलायामा कुरा कहानि छलफल सम्म अषतियारवालाले गऱ्याको सदर कागजमा सहि हलाउदा. मालिकैको नाउ लेषि मालिकैको सहि हलाउनु. पानिको छित लागी. आयाका मानिस् आफु भंदा ठुलो दर्जाको भया पनि आफु वरोवर. आफु भंदा कम् दर्जाको भया पनि संग राषनु पर्दैन. फरकै राषि कुरो हेर्नु.

२४. इजद्दार भै भारदार गैह्र लोग्न्या मानिस् कसैले.ज्यान संवंधि. दामल् हुन्या करणि भात पानिको कुरो बाहेक अरू गैह्र कुराका झै झगरामा यस कुरालाइ. म कचहरिमा जांन. मोरो साटो कुरा कहानि गर्न फलानालाइ अषत्यार. गरया. पठाउछु भन्या. मैले फलाना कुरामा. फलानालाइ अषत्यार. गराइ पठाञा तेसले जित्या मेरो जित्. तेसले हाऱ्या मैले हाऱ्या अैन वमोजिम् जो पऱ्याको वुझाउला. मेरो उजुर नास्ति भन्या मालिकको अषत्यारनामा लि उस्ले लेषि दियाका अषतियारवाट कुरो वुझनु कचहरिका रूहले ज्मान वंदि मुचुल्का कायेलनामा गैह्र लेषनु पऱ्यामा. तेसै अषतियार. वालाको सहि हलाइ. झगरा छिंनु आफुले अषत्यारनामा लेषि दिसक्यापछि अषत्यारले गऱ्याका कुरा उल्टाइ उजूर गर्न पाउदैन. अषतियारवालाले अैन

वमोजिम् गऱ्याको सदर हुंछ. ज्यान सनवंधि दामल् हुन्या करणि भात पानिका कुरामा अषतियार नलिनु. जस्लाइ कुरो लाग्याको छ. उसैलाइ ल्याइ. अैन वमोजिन् गर्नु.

२५. मेरा मामिला जो भयाको. कागजपत्र साछि सुर्ता भोग दसि प्रमाण. वाट वेहोराको इजहार लेषि चह्राायाको छ त्र्याहादेषि वढता अरू पत्रपात्र साछि सुर्ता भोग दसि प्रमाण सै सनदवाट झगरा छ भनि झगरा पर्दैमा. ल्यायो भन्या पनि मेरो जो भयाको विहोरा एतिकै हो भनि आफुले सहिछाप् गरि दिया पछि. ल्यायाको सदर हुदैन लेषि दियाका इजहारका मुद्दालि अैन वमोजिम् निसाफ् गरि छिनि दिनु.

२६. जुन् झगरियाले इजहार दि इजहारका मुद्दा वमोजिम् अैनले टोकियाका मुद्दामा नीजका वावु भाइ छोरा स्वास्नि देस पर्देस गयाका रहाछन् र. इजहार लेषि झगरा पऱ्याको झगरा छिनिन्ज्याल्सम्म थाहा पायाको रहेनछ भन्या र. एस झगरामा हाम्रो पनि दाइया लाग्छ यसले मात्र हारि हाम्रो मुद्दा जान्या होइन भनि अघि हार्न्याका वावु भाइ छोरा स्वास्निले सै सनद ल्याया भन्या. अघि एहि मुद्दाको इजहार लि छिंन्या हाकिम्लाइ. वात लाग्दैन अैन वमोजिम् निसाफ् गरि छिनि दिनु.

२७. हाकिम् गौडाका मालिक्. अदालत् ठाना. अडाका मालिक् डिठ्ठा विचारि अमालि द्वाऱ्या गैह्रले निसाफ पुऱ्याइ. अैन नमिलाइ दंड जिताउरि गऱ्याको रहेछ भन्या रित नपुऱ्याइ दंड जिताउरिका विगा वमोजिम् दंड गर्नु. अैन भया देषि ओढो अनरित पारि दंड जिताउरि गरि श्री ५ सर्कार दाषिल् भयाको रहेछ भन्या. सनद गराइ श्री ५ सर्कारवाट पनि फिर्ता गरि दिनु.

थुनुवा कैदिले अरू कसैलाइ केहि कुरो पोल्दा गर्न्या कुराको अैन ———

२८. षतवातले थुनियाका झगरिया कैदिले आफु थुनियाका मुद्दाका कुरा कहानि गर्न हुंछ वात लाग्दैन.

२९. आफु थुनियाकै ठाउमा अरू कसैले भात पानि संवंधि ज्यू जान्या दामल हुन्या घुस षायाको चोरि गऱ्याको औ सर्कारिया मुद्दाको कुरा भयाको देष्यो सुन्यो भन्या तहकित वुझि जाहेर गर्नु पोल्हा ठहर्दैन.

३०. दामल थुनुवा कैदि झगरिया गैह्र कसैले एति कुरा वाहेक् अडा अदालत ठाना अमाल्का हाकिमलाइ. हवस् अरू कसैलाइ हवस्. षतवात लाग्न्या दंड जरिवाना हुन्या केहि कुरो पोल्यो भन्या. थुनुवा वाहेकको. अर्को वारिस् अघि सारि उसै वारिसका नाउको इजहार दिंछ भन्या अैन वमोजिम् निसाफ् वुझि दिनु. इजहार दिन्या वारिस अर्को षडा गर्न सकेन. भन्या थुनुवा कैदि झगरियाले भन्याको सदर हुदैन. त्यो कुरो नसुँनु पोलाहा ठहर्छ.

३१. मेरा फलाना कुराका झगरामा. चाहिन्या जो भयाका. पत्र पात्र भोग दसि प्रमाण वात वेहोरा एति कै हो ञाहादेषि वढता अरू केहि छैन पछि केहि छ भनि उजूर गऱ्या झुट्टा गराइ दिनु. भंन्या वेहोराको आफ्ना षुसि राजिले इजहार लेषि सहि हालि दियाका मा कचहरिवाट वादि प्रतिवादि जोरि कुरो हुदा झगरा हार्न लाग्याको तवरदेषि अघि दियाका इजहारमा वेहोरा पुगेन छ अंक अक्षर घटाइ वढाइ देउ भन्यो वा. पैल्हेको इजाहार फिर्ता गरि देउ अर्को लिंचौ भन्या. एका मुद्दाका झगरामा २ इजहार नलिनु पैल्हेको इजहार फिर्ता गर्न अंक अक्षर घटाउन. वढाउन पनि नदिनु. पैल्हे दियाको इजहारमा लेषियाका कुराले पक्र्या वमोजिम् पत्रपात्र भोग दसि प्रमाण गैह्रको रूह वुझि अैन वमोजिम् निसाफ् गरि दिनु. एका कुराका झगरामा २ इजहार लिन्या. इजहार साटन दिन्या. वा उसै इजहारमा अंक अक्षर घटि वढि पार्न दिन्या ज्मान वंदि लिया पछि उसै प्रतिवादिको उसै मुद्दामा अर्को इजहार लिन्या अडा श्रेस्ता अदालत्का हाकिम् डिट्ठा विचारि अमालिलाइ उसै झगराका विगाको सयकरा ५ रूपैयाका दरले जरिवाना गर्नु.

३२. वादिले इजहार दि अडा अदालतमा तोकि आयाका झगरामा. प्रतिवादिलाइ झीकाइ तेरा नाउमा फलाना मुद्दामा फलानाले इजहार हाल्यो वादिले इजहार दियाकामा लेषियाको कुरो साचो हो भंछस् भन्या. सोहि विहोराको ज्मान वंदिमा सहि हालि दे तेसले इजहारमा लेष्याको कुरो होइन मेरो विहोरा अर्कै छ अथवा तेस इजहारमा लेष्याका कुरा मध्ये एति कुरा साचो हो. एति कुरा होइन भंछस् भन्या. एस् झगराका मुद्दामा इजहारमा मिल्याका कुराको ज्मान

वंदि निमल्याका कुराको तेरो पनि भया भरको विहोराको इजहार दे भनि कचहरिवाट रोजाउदा. ज्मान वंदि पनि लेषि नदिन्या. इजहार पनि दिन नसक्न्या. एस्ता धिंगनाहालाइ. दिन ३५ सम्म थुनि राषनु. म्यादभित्र इजहार दियो वा. ज्मान वंदि दियो भन्या. अैन वमोजिम् गरि झगरा छिनि दिनु. दिन ३५ सम्ममा पनि इजहार ज्मान वंदि केहि दियेन भन्या. वादि इजहारले पक्रयाका रूह वमोजिम् गरि छिनि दिनु. तेस्ता प्रतिवादिको उजूर लाग्दैन.

३३. अडा अदालत ठाना कचहरि कचहरिवाट झगरिया लिन पक्रन पठायाका प्यादा सिपाहीले झगरियालाइ. पक्री कचहरिमा हाजिर नगरि विचैवाट दंड जिताउरि दसौद विसौद ठेकि वक्सौनि गैह्र मात्र लि आयेछ. भन्या विगो जस्को हो. उसैलाइ फिर्त्ता गराइ अैन ले वक्सौनि लिनु भंन्या कलम्मा लियाको ठहऱ्या. विगो वमोजिम् दंड गर्नु. अैनले वक्सौनि नलिनु भंन्या कलम्मा लियाको ठहऱ्या वालि स्मेत् जफ्त गरि जागीर षोसि छाडि दिनु. आफुलाइ नअह्रायाका कुरामा आफ्ना मुनासिवले प्यादा गयाका पक्रन गयाका सिपाहीले दंड जिताउरि दसौद विसौद ठेहि वक्सौनि पान फुल् लि छोड्याकाले झगरीयाको षत जादैन पक्री ल्याइ अैन वमोजिम् गर्नु.

पत्रपात्र भोग दसि प्रमाण केहि नभयाका झगरामा. पंचका सिरमा दिपंचले आफैले तजवीज गरि छिन्या पनि पंचले भन्या वमोजिम् गरि छिनि दिनु भंन्या अैन् --- -
-- --- --- --- ---

३४. पत्र पनि छैन पात्र पनि छैन. साछि गुहाइ पनि छैन. भोग पनि थाहा छैन. एस्ता कुरामा जगा जमिन् घर षेत्. सुना चादि कसन् तमन् नगद जिनिस् जवाहेर चौपाया कमारा कमारि गैह्र.को. झगरा पर्न आयो र झगरा छिंन्या हाकिम्हरूले एस्कुराको यो इन्साफ् हो भन्या. तजवीज गर्नु. सकेनन् भन्या कचहरिमा वस्याका. मानिस्मा कोहि लागवादिको हो भन्या कोहि प्रतिवादिको हो भंन्या भया भंन्या दुई झगरियाका नाता पक्ष नभयाका घुस रोसवत् नषान्या इमांदार धर्म चिंन्हा भलामानिस गाउल्या छिम्याकि २५ जना राषि ई २५ जनाले डुइ झगरियालाई धर्म भाकन दिन्नौ २५ जना हामि तजवीज गर्छौ जतापट्टि अर्ध्यालो पंच हुनन्. उसैको जित गरि. दिउला भंछन् तापनि इ डुइ झगरियामा संतान भयाका धन भयाका इमांदार जस्ता ठहरायाकालाइ धर्म भाकन दिछिंदछन् भन्या पनि २५ जनाको षुसि पत्ता

नपायाका झगरामा. एस तजवीज सित छिनि हार्न्यालाइ अैन् वमोजिम्को दंड गरि कचहरिमा वस्याका पंचको स्मेत् नाउ हालि जितन्यालाइ जितापत्र गरि दिनु.

कचहरीमा वस्याका भला आदमि जस्का झगराका कुराको उठान गर्‍याको छ. उस् वेलामा कुरो काटि वोलन्या र गर्न लाग्याका कुरो नसुनि अरू कुरा गर्न्यालाइ जरिवाना गर्न्या र कचहरि गर्न लाग्याका वेलामा अरू कुराको वक्वक् गर्न्यालाइ. गलहत्तालाइ निकालि दिनु भंन्या अैन् --- --- --- --- -- --- --- -

३५. कौसल्मा अदालत्मा जौन कुराको झगरा पर्‍याको छ. उस्मा जौन भला आदमिले कुरो उठान गर्‍याको छ. उ कुरो सवैले सुँनु कुरो गर्‍याको सुनि सक्या पछि चित्त वुझ्या को भंनु चित्त वुझेन भन्या. चित्त नवुझन्याले भन्याका कुरा अरू पंच भलाआदमिले सुँनु एति रित गरि पाला पाला सित वोल्नु. अघिवाट बोल्न्याले बोल्न लाग्याको कुरो गरी नसकि कुरो काटि होपापापि गरि उछिनि वोलन्यालाइ १ रूपैया जरिवाना गर्नु. एउटा मामिला छिंन भनि वस्याका पंच भलादमिमा कोहि उहि मामिलाको कुरो गर्न्या कोहि पंच भला मानिस्. मामिला पर्‍याको कुरो सुँनु वुझन छोडि आपस्मा ठट्टा मस्करि गैह्र अरू कुरा गर्न्यालाइ. पनि १ रूपैया जरिवाना गर्नु. षुनका कुरा वाहेक कचहरिमा जौन कुरा पर्‍याको छ. उस्कुराको रहनि वसि नसकि अरू कुरा नहेर्नु. एउटा कुरो गर्नलाग्याको वेलामा कचहरिमा अरू अरू कुराको. वक्वक् गर्न्यालाइ नवोल भंनु. मानेनन् भन्या गर्धनी लगाइ निकालि दिनु. यो जरिवाना गर्दा अड्डाषालका हाकिमले गर्नु

हुकुम् मर्जि वाहेक् आफ्ना तैनाथका र. आफ्ना नाताका मानिस्को झगरा हेर्न्या हाकिम् र षालवालालाइ दंड गर्न्या अैन् ---

३६. गौडा वाहेक. अरू अडा अदालत ठाना अमालहरूवाट झगरा गैह्र सुँदा उस ठाउका हाकिम्का तैनाथका मानिस्को र. हाकिम् र षालवालाका. अपुतालि पर्‍या षान पाउन्या दाज्यू भाइ आमाका वावु. आमा मामा. सासु ससुरा ज्येठु साला मीत. आफ्ना दिदि वैन्हि छोरि दियाका जुवाइ. भानिज आफुले लिन दिन कारोवार गर्‍याका मानिस्का झै झगरा पर्न आया.मा सर्कारको हुकुम र. मुषतियारको मर्जी नभै उस् ठाउका हाकिम र. षालवालाले नहेर्नु. इजहार

फिर्ता गरि अर्कै षालमा जाउ भनि पठाइ दिनु विना हुकुम् मर्जी आफ्ना तैनाथका मानिसहरूको र लेषिया वमोजिम्का नाता पक्षका झगरा सुनि निसाफै गर्‍याको ठहर्‍या पनि १० रूपैया दंड गर्नु. अन्याय गर्‍याको ठहर्‍या. उसै झगराका विगा वमोजिम् दंड गर्नु.

हाकिम् अमला डिट्ठा विचारिले इजहार लि इजहारमा लेषियाको षडा गरि अैन वमोजिम् झगरा छिंन्या अैन् --- --- ---

३७. हाकिम गौडाका मालिक. अदालत ठाना अमाल्का सुव्वा डिट्ठा विचारि अमालि द्वार्‍या थरि मुषिया मिझार चौधरि जिमिदार राइ कर्त्ताहरूले झगरा छिंदा अैनको वेहोरा मात्रै हेरि अंग पुगि सक्तैन तस निमित्त इजाहर कचहरिमा दाषिल भया पछि. इजहारमा भयाको प्रमाण कागज पत्र भोग दसि गुहाइ तेसर यति कुरा षडा नगरि झगरा छिंनु हुदैन इजहारमा लेषियाका यति मुद्दाको रीत पुर्‍याइ. घुस रोसवत् नषाइ. आफ्नु विरानु नछुट्याइ पनपक्ष नगरि धर्म र अकवत् सम्झी आफु चोषो रहि हक निसाफ् गर्‍या मालिकवाट इज्जत चढाइ वक्सीन्या छ भंन्या ठहराइ. पंचको चित्त वुझाइ. अैन वमोजिम्. निसाफ् गरि झगरा टोडि दिनु. लेषियाको कुरो छोडि जानि जानि अधर्म गरि. जो निसाफ् गर्ला त्राहा राज दंडमा पर्ला. मर्‍यापछि ज्यमराजको दंडमा पर्ला.

झगरिया र. झगरियाका मुषसार भै कचहरिमा. आउन्यालाइ हतियार लि आउन नदिनु. भंन्या अैन् --- --- ---

३८. कौसल अदालत् ठाना अमाल् कचहरिवाट झगरा हेर्दा लाग वादि प्रतिवादि र उन्का मुषसार भै वोलन्या मानिस्लाइ कचहरिमा आउदा हतियार लि आउन नदिनु हतियार फरक् राषन लगाइ कचहरिमा आउन वस्नदि निसाफ् हेर्नु.

# कैदी झिकाउन्याको

१. पूर्व पश्चिम भर मुलुकका षतुकि दामलमा पर्न्या जनम्भर. का कैदिलाइ झिकाउनु पर्दा चार अदालत. तैनाथ पाउन्याले श्री मिनिष्टरको दस्षत् गराइ वाटामा नउम्कन्या गरि झिकाउनु.

२. राज धानि सहर.इटाचपलि वाहेक पुर्व पश्चिम उत्तर दक्षिण अडा अडामा षुन षतडा ज्यान संवंधि ज्यू जान्या षतकालाइ. ज्यू मार्न्न पर्दा गोडा गौडावाट. साधक् गरि कायेल नामाको नक्कल स्मे नगरि इटाचपलिमा पुऱ्याइ दिनु. इटाचपलिका मालिकले. मारिन्या मानिस्को कायेलनामा अैनमा मिलाइ. कौसलमा जाहेर गर्नु. कौसलियाले तजविज गरि ज्यू मार्न्या ठहऱ्याकालाइ. ज्यू लिनु भंन्या लाल मोहोर गराइ पठाइदिनु. ज्याँन लिदा विना लाल मोहोर. पूर्व पश्चिम अडा गौडामा ज्याँन नमार्नु.

३. महाकालि पूर्व. मेचि पश्चिम मध्येस पाहाड हाम्रा भरमुलुकका अडा अडामा जान्या भारादार र. थुम थुमका अमालि द्वाऱ्या सवं किमाफ भयाका वितलव गुठिका मुषिया गुठियार. गैह्रले अदालत्मा मुद्दा मामिलालाइ नझिकाइ नहुन्या. मानिसलाइ झिकाउनु पर्दा. अदालत्का मालिकले जौना अडा अम्वलको मानिस झिकाउनु पऱ्यो तेसै अडाका मालिकलाइ लेषि पठाउनु. अमालि भारादारहरूले अदालतका मालिकको कागज पुग्या पछि. आफ्ना अम्वल भरमा. मानिस रहेछ भन्या पक्राइ. मानिस साथ लगाइ चांडो गरि पठाइ दिनु. अम्वल भरमा मानिस रहेनछ भन्या. उत्तरा चाडो लेषि पठाइ दिनु. मानिस पनि नपठाउन्या. उत्तरा पनि नपठाउन्या. गौडामा रहन्या भारादारलाइ ५० रूपैया अडाका डिट्ठा विचारिलाइ १५ रूपैया अरू थुम थुम्का अमालि द्वाऱ्या विर्त्तवार. गुठियार. सर्वाकमाफि वालास्मेतलाइ १०।१० रूपैयाका दर्ले जरिवाना गर्नु.

४. महाकालि पूर्व मेचि पश्चिम राज धानि जगामा षतवातमा पऱ्याका. ज्यू जान्या धन जान्या दामल हुंन्या कैद हुंन्या दंड हुन्यालाइ अैन वमोजिम जो गर्नु पर्न्या हो सो माफिक चार अदालतका मालिकले दस्षत पुर्जि गरिदिनु. साधि पठाउन्याले दुरूस्त पारि पठायाको रहेनछ. कायेलनामा पनि दुरूस्त भयाको रहेनछ भन्या. तेस्मा अदालतका हाकिमलाइ षतवात लाग्दैन. तेस्तो वेदुरूस्तिमा धक पठाउन्यार. कायेलानामा गर्न्या पूर्व पश्चिम अडा गौडाका

हाकिम र. अमालि विचारि द्वाऱ्या थरिको ज्यूको वदला ज्यू. धनको वदला धन होला षतवात उसैका थापलामा लाग्ला.

५. पाटन् भादगाउ काठमाडौंका अदालत ठानामा पऱ्याका राजकाज वाहेक.अरू कुरामा काटिन्या सात्रिधुवा जो छन्. तिन्को कायेल नामा स्मेत्. साइ धुवा र. अरू मुडिन्या दामल हुन्या षत्का सात्रिधुवाको अैन वमोजिमको सर्वस्व र. कायेलनामा साइधुवा इटाचपलि अदालत्का हाकिमसित. पुऱ्याइ दिनु.

६. ज्याँन जान्या दामल हुन्या मुडिन्या कुरा र. पानि नचलन्या जातसित तागा धारि लगायेत्. पानिचलन्या गैह्र जातले करणि गरि गराइ. भात पानिमा वोरियाका कुरा रैकर किपट जगामा पऱ्याको भया पनि सर्वाक माफि गुठि विर्ता वेषफिगढा र. छाप माना चाँवल गैह्र जगामा पऱ्याको भया पनि. पक्रि तिन्का ज्मानवंदि कायेलनामा भया कागज स्मेत्. कागजपत्र नभया तेसै वात लाग्न्या मानिस अदालतमा पुऱ्याइ दिनु. एस्ता कुरा परि आयामा. अरू कचहरि र. अमालवाट नहेर्नु. अदा तैवाट कुरो हेरि. अैन वमोजिम गर्नु.

७. मुगलानित्रा मानिसलाइ हाम्रा मुलकका मानिसले मुगलानावाट जवरजस्ती गरी लग्या भनी मुगलानित्राले फिराद गरि. सावित गऱ्यो भन्या त्यो जवरजस्ती गरी ल्याउन्या हाम्रा मुलुकका मानिसलाइ ५०० रूपैया जरिवाना गरि. ६ मैन्हा कैद गर्नु. जरिवानाका रूपैया नतिऱ्या कैद गर्नु. कैद र. जरिवानाका रूपैया तिऱ्या अैन वमोजिम ली छाडनु.

८. गौडा अदालतका हाकिम बाहेक अरू जगा जगावाट ज्यू जान्या १ दामल हुन्या १ सर्वस्व हुन्या १ मुडिन्या १ षोपिन्या १ जातजान्या १ पांन सय देषि माथिका ज्माको रूक्काको जितापत्र. गर्नु पर्न्या जगा जमीन्को कुरो. १ एति ७ कुराको कायेलनामा र. साधक आउदा. मुद्दा नपुऱ्याइ गऱ्याको कायेलनामा रहेछ र. अदालतवाट मुद्दा सच्याइ. अर्को कायलनामा गराउनु पऱ्यो भन्या अघि मुद्दा नपुऱ्याइ कायेलनामा गरि साधक् पठाउन्यालाइ मुषतियारसित. जाहेर गरि. मुषतियारका तजवीजले मुद्दा हेरि. २० रूपैयादेषि मनि आठ आनासम्म दंड गर्नु. गौडा अदालत्का हाकिमले मुद्दा नपुऱ्याइ कायेलनामा गऱ्याको ठहऱ्या अैन वमोजिम गर्नु.

९. अडा गौडा अदालत ठाना अमाल गैह्रवाट ज्यानमारा दामल षतुकि वापती चोर डाकु गैह्र अदालत इटाचपलिमा वुझाउन पठाउदा फलानाले फलानु कुरो गर्दा ताहा पठायाको छ वुझि लिनु भंन्या अडावाला हाकिमको छाप सहि भयाको चिठि र. षतुकिको ज्मान वंदि कायेलनामा औ. कायेल गराउन्या. मुद्दाका कागजपत्र प्रमाण जो जो छन्. सो स्मेत गरि पठायाको रहेछ भन्या इटाचपलिवाट वुझि लि रसिद दिनु. अडावालाको चिठि र. षतुकिको ज्मानवंदि. कायेलनामा नपठाइ. षतुकि मात्र पठायाको रहेछ भन्या षतुकि वुझि तेस अडाका हाकिमलाइ वेकुवि जरिवाना १० रूपैया स्मेत्. गरि चाहिन्या ज्मानवंदि कायेलनामा निज वापति ढालन्या वादिहरूको मुचल्कोहरू झिकाइ पठाउनु.त्यो कागजपत्र नआइ पुग्दासम्म वावति वुझ्याको रसीद. नदिनु. षतुकिको ज्मानवंदि कायेलनामा भयाको रहेनछ. मानिस मात्रै वुझाउन ल्यायाको रहेछ र. यस्ले गर्‍याको कुरा देषन्या जान्न्या कायेल गर्न सकन्या इनै हुन्. भनि दसि प्रमाण स्मेत. पुर्‍याइ ल्यायाको रहेछ भन्या इन्हेरूको इजहार्लेषाइ लि षतुकि वुझि लिनु. विहोरा नपुर्‍याइ. ल्यायाका वावति वुझि लिन्या. इटाचपलिका हाकिमलाइ १० रूपैया जरिवाना गर्नु. षतुकिको ज्मानवंदि. कायेलनामा गैह्र लिषत्. देषन्या जांन्या कायेल गराउन सकन्या साछि प्रमाण वादिहरू नल्याइ. फलानाले एस्तो षत गर्‍याको छ भनि मानिस मात्रै पक्रि ल्यायाको रहेछ भन्या. एस्लाइ साछि प्रमाण पुर्‍याइ कायेल गराउला कायेल गराउन सकिन भन्या अैन वमोजिम पर्‍याको वुझाउला. भंन्या षतुकि सौंपन ल्याउन्याको मुचुल्का लि षतुकिलाइ नेल हालि कैद गरि तेसलाइ कागज पत्र साछि प्रमाण षोजनालाइ दिन १० जादा आउदा वाटाको अंदाज स्मेत. गरि भाषा करार गराइ. ज्मानि स्मेत् लेषाइ. लि छोडि दि. उस जगामा पठाइ कागज पत्र साछि प्रमाण वादि झिकाइ अैन वमोजिम निसाफ गर्नु. साछि प्रमाण कागज पत्र ल्याइ सावित गर्न सकेन र. पोल्याको मात्र ठहर्‍यो भन्या जौन कुरो पोल्याको छ. उसै कुराका पोल्हाका अैन वमोजिम सजाय गर्नु.

# कायलनामा लेषाउन्याको

१. दंड हुन्या षत्मा दसि नपाइ कुट्पीट् गरि कायेलनामा लेषायो.पछि कुरो ठहरेन भन्या हाकिमलाइ १०० रूपैया दंड गर्नु. दसिपाइ कुट्पीट् गरि. कायेलनामा लेषायो पछि ठहरेन भन्या र. कुट्पीट् केही नगरि कायेलनामा लेषि दियो पछि ठहरेन भन्या हाकिमलाइ षत लाग्दैन.

२. दामल हुन्या षत्मा हाकिमले दसि सषलष नपाइ कुट्पीट् गरि कायेलनामा लेषायो पछि ठहरेन भन्या. तेस्ता हाकिमलाइ. ३६० रूपैया दंड गर्नु दसि सषलष पाइ कुट्पीट् गरि. कायेलनामा लेषायो पछि कुरो ठहरेन भन्या र. कुट्पीट् केहि नगरि कायेलनामा लेषि दियो पछी कुरो ठहरेन भन्या हाकिमलाइ षत वात लाग्दैन.

३. ज्यू जान्या षतमा दसि सषलष नपाइ कुट्पीट् गरि कायेलनामा लेषायो पछि ठहरेन भन्या तेस्ता हाकिमलाइ ७२० रूपैया दंड गर्नु. दसि सषलष पाइ कुट्पिट् गरि कायेलनामा लेषायो पछि. कुरो ठहरेन भन्या र. कुट्पिट् केही नगरि कायेलनामा लेषि दियो पछि कुरो ठहरेन भन्या हाकिमलाइ षत लाग्दैन.

४. अर्कालाइ जहर्षुवाइ मार्न्या. हातले हतियार चलाइ मार्न्यालाइ जहर्षुवाइ मार्‍यूं हातले हतियार. चलाइ मार्‍यूं. भनि कायेलनामा लेषाउनु पर्न्या विहोरामा आफ्नू नाता पक्ष नपर्न्या घुस रोसवत् नषाइ वुद्धि नपुगि. हातले हतियार. छोड्याको होइन जहर विष षुवायाको होइन. भंन्या विहोराको कायेलनामा लेषायाको रहेछ भन्या उस हाकिम् विचारिका जागिर्को उठतिका सयकरा ५ रूपैयाका दर्ले जरिवाना गर्नु. इजरा अमानत्का अमाली द्वार्‍याहरूले यस्तै विहोराको कायेलनामा लेषायाको रहेछ भन्या जौन जगाको अमालि द्वार्‍या भयाको छ. उस जगाको उठति हेरी. उसैका ज्मामा सयकरा ५ रूपैयाका दर्ले जरिवाना गर्नु.

५. जहर्षुवाइ हतियार चलाइ ज्यान मार्‍याको छ. कसैलाइ कुट्पिट् नगरी संकाले. त होस्कि भनी केरकार सोधपुछ. गर्दा. कैल्हे मैले हो भनि कायेलनामा लेषी दियो. कैल्हे होइन भनी कुरो फेर्‍यो भन्या. एस्ता कुरामा हाकिमले वुझि निसाफ् गर्नु. कुट्पिट् नगरि. कायेलनामा लेषि दियो र. पछि कुरो फेर्‍यो भन्या कायेलनामा लेषाउन्या हाकिमलाइ षतलाग्दैन.

६. अर्कालाइ जहर्षुवाइ मार्न्या हातले हतियार चलाइ मार्न्यालाइ घुस रोसवत् षाइ भयो नाता पक्षपात गरि भयो हातले हतियार छोडी ज्यू नमार्न्या जहर विष नषुवाउन्या भनि कायेलनामा

लेषाउन्या. अदालत्का हाकिम विचारि. गाउका अमालि द्वाऱ्या लाइ काम देषि षारेज गरि ६ वर्ष कैद गर्नु. म्यादका रूपैया नलिनु. डवल दिया लि छाडी दिनु.

७. अदालत्का हाकिम विचारि. गाउगाउका अमालि द्वाऱ्याले ज्यान नकाटन्या लाइ र. जहर नषुवाउन्या मानिसलाइ. रिसले काटन्या जहर षुवाउन्या भनि कायेलनामा लेषाइ कटायो भन्या ज्यानको वदला ज्यान् मारि दिनु. कायेलनामा मात्रै लेषायेछ. कायेलनामा लेषन्याको ज्यान मारियाको रहेनछ. भन्या कारिन्दालाइ.काम देषि षारेज गरि अैन वमोजिम उस्को अंस सर्वस्व गरि. छाडि दिनु. अदालत्का हाकिम विचारी गाउका अमालि द्वाऱ्याले त्यो वावति संका लाग्याकालाइ हाकिमले नसा पनि षायायाको रहेनछ. त्यो षतुकिलाइ कुट्पीट् पनि गऱ्याको रहेन छ वापतिले आफै मुषपतित्. भै मैले या विराव गऱ्याको हो भनि कायेलनामा लेषि दियेछ. पछि षतुकि अर्कै ठहऱ्यो भन्या हाकिम अमालिलाइ. षत लाग्दैन.

८. ११ वर्ष देषि उभोको वोलन नजान्या. लाटालाटिहरूले ज्यान माऱ्याको र. चोरि करणि गैह्र षत लाग्न्या कुरा गऱ्यामा. कचहरिमा ल्याइ. रोवकार गर्दा विजाइ गऱ्याको साचो ठहऱ्यो भन्या. वोलन नजान्या हुनाले एस्तोको कायेलनामा गर्दा उस्का वावु आमा दाज्यू भाइ नजिकका नातादार. वारिस झिकाई एसले आहां सम्मको तक्सीर गऱ्यामा कायेल भयो भंन्या विहोराको उनै वारिसवालाको ज्मानवंदि लेषाइ लि उनैलाइ साछि हालि ति लाटा लाटिको कायेलनामा लेषाइ लाटालाटिका अैन वमोजिम्को सजाय गर्नु.

९. अडालतका हाकिम लेफ्टेन डिठ्ठा विचारिले झगरियालाइ दोहोरो पुर्पक्ष दोहरो सिरवंदि लेषाइ दोहोरो पंच राषि वकायामा पंच तेसरले वक्तामा हार्न्याले कायेलनामा नलेषि अडी रहन्यालाइ थुनि नेल हालि कायेलनामा लेषाउनु. तेस्तालाइ ज्मानि लि छोडन्या हाकिमलाइ २० लेफ्टेनलाइ १० डिठ्ठालाइ ८ विचारिलाइ ६ रूपैया जरिवाना गरि कौसलवाटलिनु. ज्मानि लि छोडनाका झगरियाले तिर्नु पर्न्या विगो हाकिम लेफटेन डिठ्ठा विचारि जस्ले छाडयाको छ. उसैवाट भराइ दिनु. आफुले तिऱ्याको विगो उनै झगरियावाट अदालतवालाले षोजि लिनु.

१०. अदालत ठानाअमाल कचहरिमा दोहरो पुर्पक्ष हेरि. निसाफ् श्रेस्ता अैनले कायेलनामा लषनु पर्न्या ठहऱ्याकाले सहि हालेन धिगनाहि गऱ्यो भन्या तेस्तालाइ कैद गरि राषनु. जस दिन सहि हालछु भंछ. उसै दिन सहि हलाइ अैन वमोजिम दंड जिताउरि गरि. कैद भयाका दिनदेषिको म्याद कट्टि गरि जो रहाको बाँकि तीर्छ भन्या रूपैया लि छाडी दिनु. रूपैया तिरेन भन्या कैद पुऱ्याइ छाडि दिनु.

११. झगरामा निसाफ श्रेस्ता अैनले भेटचाका कुरामा कायेलनामामा सहि हाल्नु पर्न्या. चांहिले सहि हालेन धिगनाहि गरि. कैदमापऱ्यो भन्या उस्का झगरियाले जति जितन्या ठहऱ्याको छ उसैको जित गराइ. अैन वमोजिम दसौंद विसौंद . जिताउरि जो हो लि जिता पत्र गरि दि वहालि चलाइ झगरा रफा गरि दिनु. सहि हालेन भनि त्यो झगरा नटागनु.

१२. १२ वर्ष मनिका वोलन जांन्या नजांन्या लोग्न्या हउन् स्वास्नि हउन्. एस्ता वालषले करणि संवंधिका कुरा गऱ्यामा अदालत ठाना अमालका हाकिमले. एस्ता केटाकेटिको कायेलनामा ज्मानवंदि गर्नु पर्दा ति केटा. केटिका वावु आमा दाज्यू भाइ मावलि ससुरालि नातादार. वारिसवाला झिकाइ जांहांसम्मको करणि गऱ्याको हो उति कुराको जमानवंदि कायेलनामा लेषाउदा झिकाई जहासम्मको करणी इनै वारिसवालामा नजिककालाइ साछि राषि ति केटाकेटिका हातको सहि हलाउनु.साछि वस्न्यालाइ षत वात लाग्दैन. करणिका अैन वमोजिम भात पानि वाहेक्. गर्नु. पर्न्यालाइ भात पानि वाहेक् गर्नु. भात पानिको पतिया गर्नु. पर्न्यालाइ पतिया गराइ दिनु. सर्वस्व दंड कुट्पिट् कैद केहि नगर्नु.

१३. अमालि द्वाऱ्या गैह्रले भात पानि संवंधका कुराको संका गरि. दसि वादि पोल्हा कोहि नभै उसै पक्रि केरकार गरेछ र. मैले यो कुरो गऱ्याको भनि मुषले मात्र भनेछ वा कागज लेषि सहि स्मेत् हलाइ लियेछ र. पछि तेसै मानिसले अडा अदालतमा आइ मैले गऱ्या विरायाको छैन मलाइ. हवकिदवकि गर्दा वा कुट्पीट गर्दा मात्रभन्याको भनी नालिस गऱ्यो र. रोवकार गर्दा चुक्या विरायाको ठहरेन अमालि द्वाऱ्याहरूले वेहक्मा लेषायाको ठहऱ्यो भन्या अमालि द्वाऱ्या गैह्रले हवकिदवकि गर्दा. अतास्मा लेषि दियाको ठहर्छ कागज लेषि दिन नजान्या वाव्त. २ रूपैया दंड गर्नु. प्रायश्चित पर्दैन जातैमा रहंछ. वादि पोलाहा दसि नभै. भात पानि संवंधमा नभयाका कुराको कागज लेषाउन्या अमालि द्वाऱ्यालाइ. ६० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु.

# जमानि गर्न्या

१. अदालत ठाना अमाल्मा पऱ्याका झगरामा झगरियाहरूले दंड र सर्कारिया वांकि तिर्नु पर्न्या कुरा षत भया पछि. ज्मानि लिनु पर्न्यामा जगाजमीन्. नगद जिनिस. कमारा कमारि वस्तु भाउ. गैह्र जौनसुकै. कुरामा पनि ज्मानि हुन्याका घरवाट. ज्मा उठन्या ठहऱ्याकालाइ ज्मानि लिनु. ज्मा  उठन्या रहेनछ भन्या तेस्तालाइ जमानि नलिनु. जसवाट दंड लिनु पर्छ उसैलाइ. मैन्हाका ५ रूपैयाका दर्ले कैद गरि छाडि दिनु

२. अर्काले षायाका नगदि जिनिस ज्यू जमीन् गैह्र. मा कागज लेषि कोहि धन ज्मानि भयाको रहेछ भन्या ज्मानि हुन्या मानिस्. ज्यूदो छंज्याल्. साहुले ज्मानि हुन्यालाइ. धर पकर गरि. आफ्नु धन उठाइ. लिन पाउछ. ज्मानि हुन्या मऱ्याको भया तेरो फलानु.धन ज्मानि भयाको हो असामि हांमि छुदै नै त्यो धन दे भनी. ज्मानि हुन्याका वावु आमा स्वास्नि छोरा छोरि दाज्यू भाइ भतिजाहरूलाइ पक्रन पाउदैन. आफ्नु असामि र. असामिका संतानलाइ. अैनवमोजिम पक्रि लिनु. ज्मानि हुन्याले असामिवाट नगद जिनिस ज्यू जमीन् गैह्र लेषाइ लि भोग गऱ्याको रहेछ भन्या धन ज्मानि हुन्याका अपुतालि षान्या जो हो उसैले तिर्नु पर्छ. असामि समाउन पाउदैन. भोगऱ्याको रहेन छ भन्या ज्मानि वस्न्याको अपुतालि षान्यालाइ समाउन पाउदैन.

३. जगा जमीन् चौपाया ज्यू सुना चांदि कसन् तमन् नगद जिनिस गैह्रको लेषपढ केही छैन. मुषको ज्मानि भयाको छ भनि कचहरिमा फिराद गऱ्यो भन्या. साछि सूर्ता छन्. भन्या पनि लेष पढ नभयाको धन मुषका ज्मानिले तिर्नु पर्दैन.

४. ज्यू जान्या र दामल हुन्या वात लागि पक्री आयाका षतुकिलाइ नेल ठिगुरा चमौट् हाली पूर्पक्ष हेर्नु. एस्तालाइ ज्मानि लि कसैले नछोडनु. कसैले ज्मानि लि छोडचौ र. त्यो षतुकि विचवाट भाग्यो भन्या ज्यू जान्या षत लाग्न्या भाग्याको रहेछ भन्या. सर्वस्व नगरि त्यो ज्मानि लि छोडन्या हाकिम्लाइ सात्रिधुवा नपक्रिंज्याल. कैद गरि राषनु. दामल हुन्या षत्कालाइ. ज्मानि लि छोडचो भन्या अैन-वमोजिम् सर्वस्व लि छोडि दिनु.

५. ज्यू जान्या षत् र. दामल हुन्या षत्कालाइ. ज्मानि लि छोडचा वावत् कैद भयाको र. सर्वस्व भयाका हाकिमका दाज्यू भाइ. इष्टमित्रले सात्रिधुवालाइ पक्रि ल्याया भन्या सर्वस्व भयाका हाकिम्को सर्वस्व फिर्ता गरि दिनु. कैद भयाका हाकिमलाइ कैदवाट छुटाइ दिनु. सर्कारवाट र.

अरू कसैले पक्रि ल्याया भन्या सर्वस्व भयाका हाकिम्को सर्वस्व मध्ये १ भाग सर्कार लगाइ २ भाग फिर्ता गरि दिनु. कैद भयाका हाकिमलाइ कैदवाट छुटाइ दिनु.

६. ज्यू जान्या र दामल हुन्या षत्का मानिस्को ज्मानिली छोडन्या हाकिमको सर्वस्व र कैदभयाकालाइ ज्यू जान्या र दामल हुन्या षत्का मानिस मऱ्याको षवर. आयो भन्या सर्वस्व हुन्या हाकिमको सर्वस्व मध्ये १ षंड सर्कार लगाइ २ षंड फिर्ता गरि दिनु. कैद भयाकालाइ कैदवाट छोडि दिनु.

७. दंड हुन्या कुरामा पक्रि आयाका मानीस् मध्ये. अैनले ज्मानिमा छाडन्या ठहऱ्याका मानिसमा ज्मानि गरि छाडघाको रहेछ र. कोहि भागि गयाको ठहऱ्यो भन्या ज्मानि हुन्यालाइ ल्याइ फलानाले फलानु कुरो गऱ्याका कुरामा मज्मानि भयाको हुं. उ भाग्यापछि. उस्ले वुझाउनु पर्या दंड म वुझाउछु. भंन्या ज्मान वंदि लेषाइलि त्यहि ज्मानि हुन्यालाइ अैन वमोजिम दंड जरिवाना गरि लिनु. भाग्याको मानिस पक्रीयो भन्या उसैको कायेलनामा लेषाइ दंड गरि लि तेसै मध्ये ज्मानि हुन्यावाट लियाको दंड जति उसलाइ फिर्ता गराइ दिनु. वावतिलाइ अैन वमोजिम गर्नु.

८. कसैले अंस नभै. संग वस्याका घरको दिनु लिनु गर्न्या जातका र मालिक् वावु वाज्या दाज्यू ज्येठा कांछा वावु. आमा वज्यू भाउज्यू. ज्येठि कांछि आमा छदै उन्का १६ वर्ष मनिका वालषलाइ. आफ्नाघर अंस गर्ना वाहेक ज्मानि हलाइ वा साछि राषि कागजपत्र लेषायाको ठहऱ्यो भन्या ज्मानि हलाउन्या साछि राषि कागज गराउन्यालाइ जति ज्मामा ज्मानि हलायाको साछि राष्याको छ. उसै ज्माका सयकरा १० का दरले दंड गर्नु १६ वर्ष मनिका अजान वालषलाइ ज्मानि गरि वा साछि हालि. लेषायाका कागजको सदर हुदैन.

ज्यान संवंधि दामल करणि भात पानिका कुरामा अषतियार नलिनु वात लाग्न्यैलाइ ल्याइ अैन वमोजिम गर्नु. एति वाहेक अरू कुरामा कचहरिमा जान्न अषत्यार दिन्छु भंन्यालाइ. एस्ले हाऱ्या हार. जित्या जित भंन्या विहोरा को मुचुल्का लेषाइ लि. अषत्यारनामा लि झगरा हेर्नु. भंन्या अैन --- --- --- --- --- --- --

९. भै भारादार. रैयत् दुनित्रा गैह्रसंग इजहार लिदा लाग्न्या मानिस कसैले ज्यान संवंधि दामल हुन्या करणि भात पानिको कुरा वाहेक अरू गैह्रकुराका झै झगरामा एस्कुरालाइ म कचहरिमा जांन मेरो साटो कुरा कहानि गर्न फलानालाइ. अषतियारी गरी पठाउछु भन्या. मैले फलाना कुरामा. फलानालाइ. अषतियार गराइ पठात्रा. तेसले जित्या मेरो जित. तेसले हाऱ्या मैले हाऱ्या. अैन वमोजिम जो पऱ्याको वुझाउला. मेरो उजुर नास्ति भंन्या मालिकको

अषत्यारनामा लि. उश्ले लेषि दियाका. अषतियारवाट कुरो वुझनु. कचहरिका रूहले ज्मानवंदि मुचुल्का कायेलनामा गैह्र लेषाउनु पऱ्यामा. तेसै अषतियारवाल को सहि हलाइ झगरा छिन्नु. आफुले अषतियारनामा लेषि दिसक्या पछि अषतियारले गऱ्याका कुरा उल्टाइ उजुर गर्न पाउदैन. अषतियारवालाले. अैन वमोजिम् गऱ्याको सदर हुन्छ. ज्यान संवंधि दामल हुंन्या. करणि भात पानिका कुरामा अषतियार नलीनु. जसलाइ कुरो लाग्याको छ उसैलाइ. ल्याइ अैन वमोजिम गर्नु.

अषत्यारनामा लिदा एका मुद्दामाको येउटै अषत्यारनामा लिनु. भंन्या र. अषत्यार हुन्यालाइ फुर्सत् नहुदा. सट्टा राषन दिना नदिनाको औ जागिर्दारलाइ. अषत्यार नलिनु. भन्या र. कागजलेषाइ नलि अषत्यार लिन्याको अैन---

१०. अषत्यारनामा लिदा येक मामिलाको येक मानिस्को यौटे अषतियार लिनु. २ नलिनु १ मानिस्को ४ मामिला पऱ्याको रहेछ भन्या. ४ मध्ये जौन मामिलाको सामग्रि जोरियाको छ. सो मामिला तोडया पछि. एक मामिलाको एक. एक. अषतियार. लि मामिला तोडनु. त्यो अषतियारको कोहि मरि आफुले कृया गर्नु पऱ्यो अथवा. घरमा आगो लाग्यो अथवा कचहरिमा जान नसकन्या गरि. साह्रै वेरामि भयो. अथवा. घरमा देस्याद पस्यो भन्या मात्र. त्यो अषतियार. जश्ले राष्याको हो. उश्ले वदल्न पाउछ. मुचुल्कालेषि अषत्यारनामा दियापछि. आफै कचहरिमा कुरा गर्छु भन्या कुरा गर्न पाउछ. विच त्यो अषतियार वदल्न पनि पाउदैन. अषतियारले छोडन पनि पाउदैन. सर्कारिया जंगी निजामतिवालालाइ झगराको अषतियार नलिनु उन्ले पनि नहुनु. हाकिमले अषतियारनामा लिदा म जागिऱ्या छैन. भंन्या ज्मानवंदि लेषाइ लि अषतियारनामा लिनु. ज्मानवंदि नगराइ अषतियारनामा लियाको रहेछ भन्या हाकिमलाइ ५० ढाटि अषतिंयार हुन्यालाइ पनि मोहोरू ५० जरिवाना गर्नु

अर्काका झगरामा. अषतियारनामा लेषि झगरा गर्न आउन्या भाग्दा म्याद टांस्ताको अैन --- --- --- ---

११. मामिला मुकद्दमा पर्दा अषतियार हुन्या भाग्यो भन्या. भाग्न्या झगरियाका उहि अैन वमोजिम् मियादको पुर्जि टासि झगरा छिन्नु.

# दवाहाको

१. कसैले वेहक्मा कसैले ज्यान मार्‍यो. ज्यान मार्दामा मतलवमा नपस्याको मानिस् मार्‍याको चाल पाइ तेस षुनिलाइ जालसाज गरि. वचाउन्या दवाहाहरूमा. ज्यान मार्न्यावाट. घुस रोसवत् षाइ दवायाको रहेछ भन्या. अैन वमोजिम् अंस र . विहा षर्च परसारि. उस्को अंस सर्वस्व गरि ५ वर्ष कैद गर्नु. घुस रोसवत् नषाइ मोहवत्‌ले मात्र दवायाको रहेछ भन्या तेसको अैन वमोजिमको अंस मात्रै सर्वस्व गरि. छाडि दिनु. आफ्ना वावु आमा स्वास्नि सहोदर दाज्यू भाइ दिदि बैन्ही छोरा छोरी सासु वुहारिले दवायाको भया एतिलाइ षतवात लाग्दैन.

२. मानिस मार्नाको मतलवमा नपस्याको मार्छन्भनि चालपाई. कसैलाइ नकहि दवाउन्यालाइ. मानिस मारियाको रहेछ भन्या. नमासिन्या जातका लोग्न्या लाइ अैन वमोजिमको अंस सर्वस्व गरि लि ४ वर्ष कैद गर्नु. मासिन्या जातका लाइ मासि दिनु. स्वास्निमानिसलाइ. २ वर्ष कैद गर्नु. मासिन्या जातका लोग्न्या स्वास्निमा चाल पाइ नकहन्यालाइ मासि दिनु. ज्यू मर्‍याको रहेनछ भन्या. नमासिन्या मासिन्या जातका लोग्न्या मानिसलाइ सर्वस्व गरि २ वर्ष कैद गर्नु. स्वास्नी मानिसलाइ. २० रूपैया दंड गर्नु. म्यादका रूपैया दिया लोग्न्या मानिस्को पनि स्वास्नि मानिस्को पनि लि छाडनु.

३. आफ्ना लोग्न्याले भात पानिमा पर्न्या कुराको विराव गर्‍याको थाहा पाइ दवाइ भात पांनि षायाको रहेछ भन्या तेस्ता स्वास्निको भात पानि काढि दिनु. लोग्न्याले ज्यू जान्या कुरो चोरि गैह्र गर्‍यामा अदालत ठाना अमालमा भन्न आया पनि नआया पनि स्वास्निलाइ षतवात केहि लाग्दैन. छोडि दिनु. लोग्न्यालाइ अैन वमोजिमको सजाय गर्नु.

४. आफ्नै एकाघर्सगै रहाका स्वास्निहरू कसैले आफ्ना घराका जाहान्मा सौताले सौतालाइ भयो सासुले वुहारिलाइ वुहारिले सासुलाइ भयो. आमाले छोरिलाइ. छोरीले आमालाइ दिदिले बैन्हिलाइ. बैन्हीले दिदिलाइ कुट्पीट् गरि. थला परि. अैनका म्यादभित्र. मा कोहि मर्‍या छन्. फलानाका चोट्‌ले. मर्‍याको हो भनी चाल पाइ अदालत ठाना अमाल्मा जाहेर नगरि. दवायाको भया थाहा पाउन्यामा घरको मोष्य मालिक. जो हो लोग्न्या मानीस् भया उस्को १ जनाको अैन वमोजिम्. अंस सर्वस्व गरि छाविड दिनु. स्वास्नि मानिस भया २ वर्ष कैद गर्नु.

म्यादको डवल दिया लिनु. अरू घरका जहान्. परिवारलाइ षत लाग्दैन. ज्यांनमार्न्या स्वास्नि मानिसलाइ दामल गर्नु.

५. अडा गौडा झेलषाना कोत इटाचपलि ठाना अमालमा थुनियाका ज्यू जान्या षत्का साइधुवा भाग्याका जस्ले दवाइ राषछ. जहान् वाहेक. पर्चक्रिले दवायाको भया ३ वर्ष कैद गर्नु. म्यादका रूपैया डवल दिया लि छाडि दिनु. वावु दाज्यू भाइले दवायाको भया ५० रूपैया दंड गर्नु. आमा स्वास्नि एका भूडिका दिदि वैन्हि छोरी वुहारि सासु फुपु. सौतिन्या आमाले दवायामा षत लाग्दैन.

६. अडा गौडा झेलषाना कोत इटाचपलि ठाना अमाल गैह्र.मा थुनियाका दामल हुन्या षत्कालाइ जानि जानि दवाउन्यालाइ. आफ्ना दाज्यू भाइ छोराले दवायाको रहेछ भन्या. २५ रूपैया जरिवाना गर्नु. घरका एका भुडिका दिदि वैन्हि छोरी वुहारि. सासु फुपु सौतिन्या आमा स्वास्नि मानिश्ले दवायाको रहेछ भन्या. षत् वात् लाग्दैन. अरू परचक्रिले दवायाको रहेछ भन्या १॥. वर्ष कैद गर्नु. कैदका रूपैयादिया लि छाडि दिनु.

७. अडा गौडा झेलषाना कोत. इटाचपलि ठाना अमाल गैह्र.मा थुनियाका जात पतित् हुन्या दंड षत् वातले थुनियाका म्याद पुग्या पछि छुट्न्या कैदि भाग्याकालाइ वावु दाज्यू भाइ छोराले दवायामा १२॥ रूपैया जरिवाना गर्नु. घरका एका भुडीका दिदि वैन्हि छोरी वुहारि. सासु फुपु सौतिन्या आमा स्वास्नि मानिस्ले दवायामा षत लाग्दैन. अरू परचक्रिले दवायाका भन्या ९ मैन्हा कैद गर्नु. रूपैया तिर्छ भन्या अैन वमोजिम्का रूपैया लि छोडि दिनु.

८. दामल हुन्या भागि गयाका पक्रिया पछि. हात्मा स्मेत् नेल हालि दामलै गरि दिनु

९. झेलषानामा थुनियाका कैदि भागि गयाका फेरि पक्रि आयापछि. अघि जतिकै कैद हुन्या गरि. थुनिकाया हुन्. तेस्को डेढो म्याद वढाइ कैदका कितावमा चढाइ कैदमा हालि दिनु.

१०. आफ्ना आमा वावु स्वास्नि दाज्यू भाइ दिदि वैन्हि. छोरा छोरी सासु वुहारि. गैह्र सनहेमा करणि संवंधि र. भातमा पानि संवंधिको कुरो उठि अदालत् ठाना अमाल्मा लैगि रोवकार

गराउदा कुरो ठहरेन. भात षान्या ठहरि. भताहाले भात षाया छन्. पछि उहि करणि भात पानि. को कुरो ठहर्न गयो भन्या पनि. अघि उस्का हातको भात षान्या भताहालाइ अदालत् ठाना अमालवाट वुझ्दा कुरो नठहरि. भात षायाको हुनाले. तिन्लाइ वात लाग्दैन पतिया दिनु.

११. आफ्ना आमा वावु स्वास्नि दाज्यू भाइ दिदि वैन्हि छोरा छोरि सासु वुहारिका करणिका कुरामा भातमा पर्न्या कुरो थाहा पाइ. उस्का हातको भात आफुले षाइ अरूलाइ स्मेत् वोरे छ भन्या अैन वमोजिम्को अंस सर्वस्व गरि. उसै जातमा मिलाइ दिनु. उसैका हात्को आफुले षायेछ. अरूलाइ वोरेको रहेन छ. भन्या सर्वस्व नगरि. उसै जात्मा मिलाइ दिनु. चालपाइ कुरो जाहेर नगरि दवायो. भात आफुले षायाको रहेनछ. भन्या तेस्को जात जादैन. आफ्नै जातमा रहन्छ कुरो दवाया वावत् ५० रूपैया दंड गर्नु.

१२. तागाधारी जातका आफ्ना हाडनातामा र. भात पानि नचलन्या जातमा करणिमा बिग्र्या भनि. कसैलाइ वात लाग्यो भन्या अडा अदालत ठाना अमाल्मा लैगि पुर्पक्ष गराउनु. अडा अदालत अमाल्मा नलगि घर कचहरि गरि. कुरो छिनि करणि नभयाको ठहराइ भात षाया छन् पछि उहि कुरो अडा अदालत ठाना अमालवाट हेर्दा करणि गयाको ठहर्‍यो भन्या. अघि करणि भयाको थाहा पाइ जाल साज गरि जिताइ. आफुले भात षायेछ भन्या षान्यालाइ. ५० रूपैया दंड गरि विग्रन्याको जौन जात हुन्छ. उसै जात्मा मिलाई दिनु. भात षाइ अरू भताहालाइ स्मेत् वोरेछ भन्या. अैन वमोजिम्को सर्वस्व गरि. उसै जात्मा मिलाइ दिनु. करणिको कुरो भन्या थाहा नपायाका घरमा कचहरि गरी. जिताइ भात षान्यामा अवललाइ २० दोयंलाइ १५ सिंलाइ र. चाहारलाइ १० रूपैया दंड गरि पतिया गराइ दिनु. कचहरिमा नवस्याका जित्यो भंदा भात षान्यालाइ दंड पर्दैन पतिया गराइ दिनु.

१३. तागाधारी जात्का छोरि वुहारि. स्वास्नि नाति नातिना भांजि आमा वज्यूमा कसैसंग विग्र्या भनि वात लाग्यो अदालत अमाल ठानामा नलगि आफ्ना घर घरैमा वसि झगरा छिनि करणि नगर्‍याको ठहराइ. भताहाले भात षायाको रहेछ भन्या र. तेहि कुरामा फेरि. अदालत ठाना अमालमा कुरो परि निसाफ हेर्दा करणि नगर्‍याको ठहर्‍यो भन्या तेस्ता भात र. करणि संवंधिका कुरा घर घरैमा छिन्या वावत्. ति कचहरि गर्न्या र. कचहरिमा वस्न्यालाइ जनहि १०।१० रूपैया दंड गर्नु.

१४. आफ्ना नाता संवंधि.मा अमालि द्वाऱ्या विचारि आफु भै. करणि जात भात संवंधि कुरो केहि पर्न आयामा. मोलाहिजा पछि लागी पुर्पक्ष निसाफ हेरेन भन्या तेसलाइ १०० रूपैया दंड गर्नु. फिराद भन्या गर्न आयो पत्र पात्र वादि प्रतिवादि साछि गुहाइको ताकित गर्दागर्दै सामेल नहुदा ढिल भयाको रहेछ भन्या तेस् हाकिमलाइ वात लाग्दैन.

१५. हाड नाता आफु भन्दा उपल्लो जात पानि नचलन्या जात छिटो हालनु पर्न्या जात्सित विग्र्याको र. भातमा पाऱ्याको संका पाइ. आफ्ना आषाले नदेषि दवाउन्यामा साछि गुहाइ नपाइ ३ मैन्हासम्म जाहेर गर्न नसक्न्या तहकित गरि. जाहेर गरौला भनि दवाउन्या दवाहा ठहर्द्दैन तेस्लाइ षतवात लाग्दैन प्रायश्चित् पाउछ दिनु.

१६. छोया छिटो हाल्नु पर्न्या जात्का लोग्नया स्वास्निहरू आफु भंदा पुला पनि चलन्यासम्मका विष्ट जातसित करणि गरि विग्र्याको र. भात पानि षाइ विग्र्याको कुरो इनै पानि नचलन्या छिटो हालनु पर्न्या जातले देषि जानि अरूलाइ. नकहि दवायेछ भन्या दवाउन्या लोग्न्या स्वास्नि सधवा विधवा कंनया जो हो उस्लाइ मासि दिनु.

१७. कसैले आफ्ना नाता गोता वाहेक. करणि सनवंधका कुरामा र. भात नचलन्या जात्का हात्को भात षायाको देषि जाति कुरो दवाइ एस्ताका हातको वा. एस्ताका हातको षान्याका हातको जानि जानि आफुले भाता षाइ अरू भताहालाइ वोरेछ भन्या अैन वमोजिम सर्वस्व गरि. स्वास्नि मानिस भया सर्वस्व नगरि. करणि गर्न्या गराउन्या भात षान्याको जौन जात हुन्छ. उसै जात्मा मिलाइ छाडि दिनु. आफुले मात्र षायेछ. अरूलाइ वोऱ्याको रहेनछ भन्या सर्वस्व हुदैन.उसै जात्मा मात्र मिलाइ छाडि दिनु.आफुले तेस्ताका हात्को वा. तेसताका हात्को षान्याका हात्को भात्. जानि जानि षायाको रहेनछ भन्या जात जादैन. दुनिञाँ भातमा पर्न्या कुरो आफुले देष्या सुन्या पछि जाहेर गर्नु पर्न्या कुरामा जाहेर नगरि कुरो दवाया वावत्. लोग्न्या मानिसलाइ ५० स्वास्नि मानिस भया २५ रूपैया दंड गर्न. रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु. भोरमा परि षान्यालाइ. भोरको पतिया दिनु.

१८. छोइ छिटो हालनु पर्न्या नपर्न्या जात गैह्रले पानि चलन्या चोषा जात्मा करणि गरे गरायाको थाहा पाइ. दवाउन्या भगाउन्या. साथ लाग्न्या पानि नचलन्यामा मासिन्या जात गैह्रलाइ मासिदिनु.

१९. चार वर्ण छतिसै जात गैह्रका स्वास्नि मानिस्ले आफ्ना लोग्न्या छोरा ससुरा देवर ज्येठाज्यू. मा जात पतित हुंन्या र. सर्वस्व हुन्या विरां गऱ्याको चाल पाइ कुरो जाहेर नगरि दवाइ उसैका हात्को भात पानि आफुले षाइ. आफु स्मेत् जात पतित्. हुन्या स्वास्निमा भात जान्या कुरो भया २५ पानि स्मेत् जान्या कुरो भया ५० रूपैया दंड गरि. उसै जात्मा मिलाइ दिनु. रूपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु.

२०. तागाधारी लगायेत्. पांनि चलन्यासम्मका. चोषा जात् कसैले. पानि नचलन्या छिटो हालनु नपर्न्या.जातमा जानि जानि करणि मात्र गऱ्या गरायाको रहेछ उस्का हात्को भात् पानि षायाको रहेनछ.त्यो कुरो आफ्ना आमा वावु गैह्र नाताकाले वा. नाता नलाग्न्या अरू कसैले देषि हवस्.करणि गर्न्या गराउन्याका मुषले हामि एस्ता जातसित विग्ऱ्याका छौं भन्याको सुनि दवायाको रहेछ आफुले देष्या सुन्यापछि इन्का हात्को वा इन्का हातको षान्याका हात्को जानि जानि आफुले भात पानि षायाको रहेनछ. भन्या तेस्ता दवाहा लोग्न्या मानिस भया ५० स्वास्नि मानिस भया २५ रूपैया दंड गर्नु.जात जाँदैन.आफुले देष्या सुन्या पछि. एस्ताका हात्को वा. इनैका हात्को षान्याका हात्को जानि जानि आफुले भात पानि षायेछ भंन्या करणिले पतिया पाउन्या हुनाले लोग्न्या मानिस भया १०० स्वास्नि मानिस भया ५० रूपैया दंड गरि पतिया दिनु. जात जाँदैन. पानि नचलन्या छिटो हालनु नपर्न्या जात्मा करणि गरि गराइ वा. उसै भात् पानि स्मेत् षायाको आफुले देषेछ वा. इनैका मुषले हामिले एस्ता जातको करणि गऱ्याको छ वा. इन्का हात्को भात् पानि षायाको छु. भनी सुनायाको कुरो दवाइ. एस्ताका हात्को वा. इनैका हात्को षान्याका हात्को जानि जानि भात पांनि षाइ. भताहालाइ. वोरेछ भन्या अैन वमोजिम सर्वस्व गरी स्वास्नि मानिस भया सर्वस्व नगरि. करणि गर्न्या गराउन्या जौन जात भयाका छन् उसै जात्को १ अक्षर वाऱ्याँ गालामा षोदि उसै जात्मा मिलाइ छाडि दिनु. आफुले मात्र षायेछ भताहालाइ र. घरका अरू जाहान्लाइ वोऱ्याको रहेनछ भन्या. सर्वस्व हुदैन. अक्षर पनि षोदनु पर्दैन. भात पांनि वाहेक् गरि उसै जात्मा मात्र मिलाइ छाडी दिनु. आफुले तेस्ताका हात्को वा. तेस्ताका हात्को षान्याका हात्को.

भात् पानि जानि जानि षायाको रहेन छ भन्या. जात जादैन. दुनिञाँ भात पानिमा पर्न्या कुरो आफुले देष्या सुन्या पछि. जाहेर गर्नु पर्न्यामा जाहेर नगरि. दवाया वावत्. लोग्न्या मानिस भया ५० स्वास्नि मानिस भया २५ रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु. भोरमा परि षान्यालाइ. भोर्को पतिया दिनु.

२१. तागाधारि लगायेत्. पांनि चलन्यासम्मका चोषा जात्कसैले. छोया छिटो हालनु पर्न्या जातमा जानि जानि करणि मात्र गऱ्या गरायाको वा. एस्ताका हात्को भात पानि षायाको कुरो आफ्ना आमा वावु गैह्र. नाताकाले वा. नाता नलाग्न्या अरू कसैले देषि हवस् करणि गर्न्या वा भात पानि षान्याका मुषले हामि एस्ता जातसित विग्ऱ्याका छौं भन्याको सुनि दवाइ. भात पानिमा पर्न्या कुरामा जालसाज गरि. घुस षुवाइ. घुस षुवाउन लगाइ. घुस दिन गै घुस षाइ कुरो दवाइ. आफुले देष्या सुन्यापछि. एस्ताका हातको वा. इन्का हात्को षान्याका हात्को आफुले जानि जानि भात पानि षाइ. भताहालाइ र. घरका अरूलाइ वोरेछ भन्या लोग्न्या मानिसले भया घुस षायाको जफत् गरि. अैन वमोजिम अंस स्मेत् सर्वस्व गरि स्वास्नि मानिश्ले भया सर्वस्व नगरि. घुस्को विगो मात्र जफत् गरि. करणि गर्न्या गराउन्या जौन जात हुन्छ. उसै जातको १ अक्षर वाञाँ गालामा षोदि भात् पानि वाहेक् गरि. उसै जात्मा मिलाइ छाडि दिनु. आफुले मात्र षायेछ अरू भताहालाइ र. घरका जाहान्लाइ वोऱ्याको रहेनछ. भन्या सर्वस्व हुदैन. अक्षर पनि षोदनु पर्दैन. घुस्को विगो मात्र जफत् गरि. उसै जात्मा मिलाइ छाडि दिनु. आफुले देष्या सुन्या पछि करणिका हातको वा. कारनिका हातको षान्याका हातको जानि जानि भात आफुले षायाको रहेनछ भन्या. आफुले देष्या सुन्या पछि कुरो दवाइ. भात पानि संवंधमा जालसाज गऱ्या वावत्. घुस्को विगो जफत् गरि. कुरो दवाया वावत् लोग्न्या मानिस भया २०० स्वास्नि मानिस्. भया १०० रूपैया दंड गर्नु. जात जादैन. भोरमा परि षान्यालाइ. भोरको पतिया दिनु.

२२. तागाधारि लगायेत् पानि चलन्यासम्मका चोषा जात्कसैले पानि नचलन्या छिटो हालनु नपर्न्या जातमा जानि जानि करणि गऱ्या गरायाको कुरो आफ्ना आमा वावु. गैह्र नाताकाले वा. नाता नलाग्न्या अरू कसैले देषि हवस्. करणि गर्न्याका मुषले हामि एस्ता जात विग्ऱ्याका छौं. भन्याको सुनि दवाइ. भात पानिमा पर्न्या कुरामा जालसाज गरि. घुस् षुवाइ. घुस षुवाउन लगाइ. घुस दिन गै. घुस षाइ. आफुले एस्ताका हात्को वा इन्का हात्को षान्याका हात्को भात

पानि षायाको रहेनछ भन्या आफुले देष्या सुन्यापछि. दुनित्राँ भात पानिमा वोरिन्या. कुराको जालसाज गरि दवाया वावत्. घुस्को विगो जफत् गरि लोग्न्या मानिस भया ५० स्वास्नि मानिस्. भया. २५ रूपैया दंड गर्नु. जात जादैन आफुले देष्या सुन्या पछि एस्ताको हात्को वा. इन्का हात्को षान्याका हात्को आफुले जानि जानि भात पानि षायेछ भन्या.करणिले पतिया पाउन्या हुनाले लोग्न्या भया १०० स्वास्नि मानिस भया ५० रूपैया दंड गरि. पतिया गराइ दिनु. जात जादैन. एस्ता जात्मा करणि गरि वा. उसै भात पानि स्मेत्. षायाको देषेछ वा. करणि गर्न्या गराउन्याका मुषले हामि एस्ता जातसित विग्रि वा. उसै भात पानि स्मेत्. षायाको छु. भन्याको सुनि कुरो दवाइ जालसाज गरि घुस षुवाइ. घुस षुवाउन लगाइ. घुस षाइ दिन गै. घुस षाइ. आफुले एस्ताका हात्को षान्याका हात्को जानि जानि भात पानि षाइ भताहालाइ वोर्न वोराउन लगायेछ भन्या लोग्न्या मानिस भया घुस् षायाको जफत् गरि. अैन वमोजिम्. अंस सर्वस्व गरि. अैन वमोजिम्. अंस सर्वस्व गरि. स्वास्नि मानिस्ले भया. सर्वस्व नहुनाले. घुसको विगो मात्रै जफत् गरि. करणि गर्न्या गराउन्या. जौन जात हुन्छ. उसै जात्को १ अक्षर वात्राँ गालामा षोदि. भात पानि वाहेक् गरि. उसै जात्मा मिलाइ छाडि दिनु. आफुले मात्र षायेछ. अरू भताहालाइ र. घरका जाहान्लाइ. वोऱ्याको रहेनछ भन्या सर्वस्व हुदैन. अक्षर षोदनु पनि पर्दैन. घुस्को विगो मात्रै जफत् गरि. उसै जात्मा मिलाइ छाडि दिनु. आफुले देष्या सुन्यापछि. करणिका हात्को.वा.करणीका हात्को षान्याका हात्को जानि जानि भात पानि आफुले षायाको रहेनछ. भन्या आफुले देष्या सुन्यापछि. कुरो दवाइ. भात पानि संवंधिमा जालसाज गऱ्या वावत्. घुस्को विगो जफत् गरि कुरो दवाया वावत्. लोग्न्या मानिसलाइ भया १०० स्वास्नि मानिस् भया ५० रूपैया दंड गर्नु. जात जाँदैन. भोर्मा परि षान्यालाइ. भोर्को प्राया दिनु.

२३. लंवरले अैन षारेज.

२४. तागाधारि जात र नमासिन्या मतवालि जात कसैले छोया छिटो हालनु नपर्न्या पानि नचलन्या जात्का स्वास्निको करणि मात्र गऱ्याको रहेछ उस्का हात्को भात पानि भन्या षायाको रहेनछ. तेसै लोग्न्याले प्रायश्चित नगरि आफु मिल्दा र. आफु भंन्दा घटि पानि चलन्या जात्का अरू सधवा स्वास्निको करणि गरेछ भन्या अैन वमोजिम् साधुको षुसि कंन्या र विधवाको करणि गरेछ वा. भात पानि षुवायेछ भन्या ५० रूपैया दंड गरि अैन वमोजिम प्रायश्चित दिनु.

लोग्न्याले प्रायश्चित पाया पछि तेस्लाइ भोरमा करणि दिन्या स्वास्निले पनि प्रायश्चित पाउछन्. विग्न्याको जानि जानि करणि दिन्या स्वास्निमा. नमासिन्या जात्का स्वास्निलाइ ५० रूपैया दंड गरि. अैन वमोजिम प्रायश्चित्त दिनु. मासिन्या जात्का स्वास्निलाइ. मासि प्रायेश्चित्त दिनु. कमारि भया ६ मैन्हा कैद गरी प्रायश्चित्त दि षसम्का जिम्मा गरि छोडि दिनु.

२५. मासिन्या जात कसैले. छोया छिटो हालनु नपर्न्या. पानि नचलन्या जात्का स्वास्निको करणि मात्र गऱ्याको रहेछ. स्वास्निका हातको भात पानि. भन्या षायाको रहेनछ र. कसैले प्रायश्चित नगरि. आफु मिल्दा र. आफु भन्दा घटि पानि चलन्या जातका सधवाको करणि गरेछ. भन्या अैन वमोजिम् साधुको षुसि कंन्या र. विधवाको करणि गरेछ वा. भात पानि षुवायेछ भन्या तेस्तालाइ मासि प्रायश्चित्त दिनु. लोग्न्याले प्रायश्चित्त पाया पछि. तेसैसित भोरमा करणि गराउन्या. स्वास्निले पनी प्रायश्चित पाउछन् जानि जानि करणि गराउन्या स्वास्निलाइ मासि प्रायश्चित्त दिनु.

२६. कसैले दामल हुन्या तक्सीर गरि वा. पानि नचलन्या छिटो हालनु पर्न्या जातमा करणि गरि भात पानि वाहेक् हुन्या कुरा गरि कचहरिमा कुरो नपर्दैमा भयो वा. कुरो नउठतैमा भागि गयाहाले हरू स्वास्निको करणि गरेछ भन्या त्यो स्वास्निले भोरमा करणि दियाको ठहऱ्यो भन्या. पानिको पतिया दिनु. एस्ता कुरा गऱ्याको छ भनि जानि जानि करणि दिन्या स्वास्निले पतिया पाउदिन. लोग्न्या मानिसले दामल हुंन्या भात पानि वाहेक हुन्या तक्सीर्गऱ्याको कुरो अदालत अमाल्मा कुरा परि भात पानिवाट पतित् भै. प्रकास् भयाका मानिसलाइ. प्रकास भयाको कुरो थाहा नपाइ भोरमा करणि दिन्या स्वास्निले अरूलाइ भात पानिमा पाऱ्या पनि. नपाऱ्या पनि उसै जातमा मात्र मिलाइ दिनु. कैद पनि हुदैन. ज्यू पनि मासिदैन. जानि जानि करणि दिन्या स्वास्नीले अरूलाइ भात पानिमा वोऱ्याको रहेनछ भनया. उसै जात्मा मात्र मिलाइ छाडि दिनु.अरूलाइ भात पानिमा पारि छ. करणि गराइछ भन्या. तागाधारि लगायेत्. नमासिन्या जात्का स्वास्निलाइ १ वर्ष कैद गरि. तिऱ्या रूपैया लि. नतिऱ्या कैद पुग्यापछि. उसै जात्मा मिलाइ छाडि दिनु. मासिन्या जात्की स्वास्निलाइ. उसै जात्मा मिलाइ मासि दिनु. कैद हुदैन.

२७. तागाधारि लगायेत् पानि चलन्यासम्मका चोषाजात कसैले छोया छिटो हालनु पर्न्या जातमा जानिजानि करणिमात्र गऱ्या गरायाको रहेछ वा. उस्का हात्को भात पानि षायाको रहेछ र. त्यो कुरो आफ्ना आमा वावु गैह्र नाताकाले वा. नाता नलाग्न्या अरू कसैले देषि हवस् करणि गर्न्या गराउन्याका मुषले. हामि एस्तासित विग्र्याका छौं भन्याको आफुले देष्या सुन्या पछि कुरो दवाइ एस्ताका हात्को वा. एस्ताका हातको षान्याका हात्को जानिजानि आफुले भात पानिषाइ घरका जाहान्लाइ. र. अरू भताहालाइ वोरेछ भन्या अैन वमोजिम सर्वस्व गरि. स्वास्नि मानिस भया सर्वस्व नगरि करणि गर्न्या गराउन्या जौन जात भयाका छन्. उसै जात्को १ अक्षर वायां गालामा षोदि. उसै जात्मा मिलाइ छाडिदिनु. आफुले मात्र षायेछ भताहालाइ. वोऱ्याको रहेनछ भन्या सर्वस्व हुदैन. अक्षर पनि षोदनु पर्दैन. उसै जात्मा मिलाइ छाडिदिनु. आफुले तेस्ताका हात्को वा. तेस्ताका हात्को षान्याका हात्को भात पानि जानिजानि षायाको रहेनछ. भन्या जातजादैन. दुनिञा भात पानिमा पर्न्या कुरो आफुले देष्या सुन्या पछि. जाहेर गर्नु पर्न्या कुरामा जाहेर नगरि दवाया वावत् लोगन्या मानिस भया १०० रूपैया स्वास्नि मानिस भया. ५० रूपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु. भोरमा पारि षान्यालाइ भोरको पतिया दिनु.

२८. तागाधारी जात गैह्र लोग्न्या स्वास्नि मानिस कसैले हाड नातामा र. आफु भन्दा घटि पानि चलन्यासमंमा करणि गरि गराइ जात भात जान्यासम्मको कुरा गऱ्याको आफ्ना आमा वावु गैह्र नाताकाले वा. नाता नलाग्न्या अरू कसैले देषि हवस् करनि गर्न्या गराउन्याका मुषले. हामि एस्ता सित विग्र्याका छौ. भन्याको आफुले देष्या सुन्या पछि कुरो दवाइ. आफुले भात षाइ अरू भताहालाइ वोरेछ भन्या अैन वमोजिम सर्वस्व गरि स्वस्निमानिस भया सर्वस्व नगरि. करणि गर्न्या गराउन्या. जौन जात हुन्छ. उसै जात्मा मिलाइ छाडिदिनु. आफुले मात्रै षायेछ मात्रै षायेछ.अरूलाइ बोऱ्याको रहेनछ.भन्या सर्वस्व हुदैन. उसै जात्मा मात्र मिलाइ छाडिदिनु. आफुले तेस्ताका हात्को वा. तेस्ताका हात्को षान्याका हात्को भात् जानि जानि षायाको रहेनछ. भन्या जात जादैन. दुनियाँ भात्मा पर्न्या. कुरो आफुले देष्या सुन्या पछि जाहेर गर्नु पर्न्या कुरामा जाहेर नगरि कुरो दवाया वावत्. लोग्न्या मानिस भया ५० स्वास्नि मानिस भया २५ रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु. भोरमा परि षान्यालाइ. भोरको पतिया दिनु.

२९. पानि नचलन्याजात र. छोइ छिटो हालनु पर्न्या जात्का स्वास्निले आफ्नु जात छपाइ ठुला जात्कीहं भनि जात ढांटि आफु भंदा ठुला जात्का लोग्न्यालाई भोरमा करनी गराई पनीमा पारिंछ. त्यो कुरो जाहेर हुंदा करनी गर्न्या लोग्न्याले मैले एस्को भोरमा करनि गऱ्याको छ. एस्का हात्को पानि पनि षायाकोछ. भनि जाहेर गर्न्यालाई दंड पर्दैन भोरको पतिया दिनु. भोरमा करणि गऱ्याको रहेछ. पानि पनि षायाको रहेछ. त्यो कुरा जाहेर हुंदा. मैले पानि मात्रै षायाकोछ. भनि पुर्जि पतिया गऱ्यो. पछि रोवकार गर्दा करणि स्मेत् गऱ्याको ठहऱ्यो भन्या तेस्ता वेकुफलाइ २५ रूपैया दंड गरि पतिया गराइ दिनु. पुर्जि पतिया गरायाको रहेनछ. पानिमा मात्रै पऱ्याको छु भन्ने आयो रोवकार गर्दा करणि स्मेत गऱ्याको ठहऱ्यो भन्या. २० रूपैया दंड गरि. पतिया गराइ दिनु. करणि पनि गऱ्याको रहेछ. पानि पनि षायाको रहेछ. फलानु जातकि स्वास्नि रहिछ भनि. आफुले थाहा पायापछि फलाना जात्को स्वास्नि हो भनि कुरो प्रकास भै. तेु स्वास्निमा पर्न्या अरूले पतिया गऱ्याको कुरो आफुले थाहा पाया पछि. आफुले करनि गऱ्याको पानि षायाको कुरो दवाइ. अरूलाइ भात पानिमा वोरेछ भन्या अैन वमोजिमको अंस सर्वस्व गरि उसै जात्को १ अक्षर षोदि. उसै जात्मा मिलाइ. छाडि दिनु

३०. छोया छिटो हालनु पर्न्या जात्मा करनि गरि गराइ. अजात भयाको लोग्न्या स्वास्नि मानिसहरूका हातको जानि जानि  भात पानि षाइ अरूलाइ. स्मेत् वोरेछ भन्या लोग्न्या स्वास्नि जो हो तागाधारि लगायेत्. नमासिन्या जात रहेछ भन्या अैन वमोजिम सर्वस्व गरि. अक्षर षोदि उसै जात्मा मिलाइ दिनु. अरूलाइ भात पानिमा वोऱ्याको रहेनछ. भन्या उसै जात्मा मिलाइ दिनु. अक्षर षोदनु पर्दैन. सर्वस्व पनि हुदैन मासिन्या जातले भात पानिमा पारेछ भन्या. अक्षर षोदि मासि दिनु. अरूलाइ भात पानिमा पाऱ्याको रहेनछ भन्या उसै जात्मा मिलाइ दिनु. अक्षर षोदनु पर्दैन ज्यू मासिदैन.

३१. छोया छिटो हालनु पर्न्या जातमा करणि गरि गराइ जात भयाका लोग्न्या मानिसलाइ जानि जानि करनि लिन्या लोग्न्या स्वास्नि मानिसहरूलाइ करणि गरी अरूलाइ भात पानिमा वोऱ्याको भया तागाधारि लगायेत्. नमासिन्या जातकालाइ. अैन वमोजिम सर्वस्व गरि भात पानिमा वोऱ्याको रहेछ. भन्या सर्वस्व गरि उहि जात्को १ अक्षर्वा ञाँगालामा षोदि उसै जात्मा मिलाइ छोडि दिनु. एस्ताले जात पाउदैन. मासिन्या जातले भात पानिमा वोरेछ भन्या. अक्षर

षोदि मासि दिनु. अरूलाइ भात पानिमा पाऱ्याको रहेनछ भन्या उसै जात्मा मिलाइ दिनु. अक्षर षोदनु पर्दैन. ज्यू मासिदैन.

३२. छोयाछिटो हालनु पर्न्या जात्का लोग्न्या मानिसलाइ करणिदि छिटो हालनु पर्न्या जात्का स्वास्निको करनि लि तागाधारि लगायेत् पानि चलन्या गैह्र जात्का अजात् भयाका लोग्न्या स्वास्नि मानिसलाइ जानि जानि करनिदि वा. करनि लि भात षाइ अरू जात्भयाका. एस्ता लोग्न्या मानिसलाइ जानि जानि करनि गराउन्या र. गर्न्या एस्ता स्वास्नि लोग्न्याका हातको भात पानि षाइ दवाउन्या दवाहा तागाधारि जात लगायेत पानि चलन्या जात्का लोग्न्या स्वास्निमानिसले आफ्ना आतावाट अरूलाइ भात पानिमा वोऱ्याको रहेछ. भन्या लोग्न्या मानिस्को अैन वमोजिम्को अंस सर्वस्व गरि स्वास्नि मानिस् भया सर्वस्व नगरि जौन जात्मा करणि गरि गराइ अजात भयाका छन्. उसै जात्को १ अक्षर वाया गालामा षोदि उसै जात्मा मिलाइ छाडि दिनु. आफुले एस्ताको करणि गरि गराइ भात पानि षाइ. अरूलाइ. वोऱ्याको रहेनछ. भन्या सर्वस्व नगरि. उसै जात्को १ अक्षर षोदि छाडि दिनु.

३३. मासिन्या जात कसैले पानि नचलन्या छोया छिटो नपर्न्या जात्का स्वास्नि को करणि मात्र गऱ्याको रहेछ. तेस स्वास्निका हात्को आफुले भात पानि भन्या षायाको रहेनछ आफुले करनि गऱ्या पछि प्रायश्चित नगरि आफ्ना हातवाट भताहालाइ भातमा र. दुनियांलाइ पानिमा वोरेछ वा. अरू आफु मिल्दा र. आफु भन्दा घटि पानि चलन्या जात्का स्वास्निको करणि गरेछ. करनि गराउन्या स्वास्निले तेस लोग्न्याले पानि नचलन्या जात्को करनि गऱ्याको जानि जानि करनि गराइछ भन्या तेस्लाइ . मासि पतिया दिनु. स्वास्निले तेस् लोग्न्याले. पानि चलन्या जात्मा स्वास्निको करणि गऱ्याको थाहा नपाइ. भोरमा करणि गराइछ भन्या ज्यू मासिदैन पतिया दिनु .

३४. उपाध्या. रजपुत्. जैसि. क्षत्रि. तागाधारि जात नमासिन्या मासिन्या मतवालि पानि चलन्या गैह्र जात्का लोग्न्या मानिस्ले हवस्. स्वास्नि मानिस्ले हवस्. पानि नचलन्या जात र. छोया छिटो हालनु पर्न्या जातमा करनि गरि. गराइ मुडि जात् पतित् गरि उसै जात्मा मिलायाका लोग्न्या मानिसले फेरि पानीमा पाऱ्यो भन्या ६ वर्ष कैद गर्नु. स्यादको डवल दिया पनि नलिनु. स्वास्नि मानिस्ले भया ३ वार्ष कैद गर्नु. स्यादका रूपैया तिऱ्या लि छाडनु. इनै पतित

भयाकामा वाहुन्. पतित् भयाकाले ज्यान् मार्‍यो भन्या अैन वमोजिम अंस सर्वस्व गरि. दामल गर्नु. स्वास्नि मानिसले मार्‍याको भया सर्वस्व हुदैन. तेसै दामल गर्नु. व्राम्हण र स्वास्नि वाहेक्. अरू जात्का एक फेरा सजाय भै. पतित् भयाका लोग्न्या मानिस्ले ज्यान् मार्‍या भन्या ज्यानको वदला ज्यान् मारि दिनु. इनैका जात् पतित् भयापछि. जंन्म्याका संतान्. ले भात पानिमा पार्‍या ज्यान्मार्‍या भन्या अैनले जौन् जात् भयाका छन्. उसै जात्का अैन वमोजिम् सजाय गर्नु.

३५. नमासिन्या मतुवालि जात गैह्रका लोग्न्या स्वास्नि मानिस कसैले हाड नातामा र आफु भंदा घटि पानि चलन्यासम्ममा करणि गरि गराइ जातभात जान्या सम्मको कुरा गर्‍याको आफ्ना आमा वावु गैह्र नाताकाले वा. नाता नलाग्न्या अरू कसैले देषि हवस्. करणि गर्न्या गराउन्याका मुषले. हामि एस्ता जातसित विग्र्‍याका छौ भन्याको आफुले देष्या सुन्या पछि. कुरो दवाइ आफुले भात षाइ हरू भताहालाई वोरेछ भन्या २० रूपैया दंड गरि करणि गर्न्या गराउन्या को जौन जात हुन्छ. उसै जात्मा मिलाइ छाडि दिनु. आफुले मात्र षायेछ अरूलाइ वोर्‍याको रहेनछ भन्या दंड पर्दैन. उसै जात्मा मात्र मिलाइ छाडि दिनु. आफुले तेस्ताका हात्को वा. तेस्ताका हात्को षान्याका हात्को भात जानि जानि षायाको रहेनछ भन्या जात जादैन. दुनियां भातमा पर्न्या कुरो आफुले देष्या सुन्या पछि जाहेर गर्नु पर्न्या कुरामा जाहेर नगरि. कुरो दवाया वावत्. लोग्न्या मानिस् भया ४० रूपैया स्वास्नि मानिस भया २० रूपैया दंड गर्नु. रूपैया नतिर्‍या अैन वमोजिम कैद गर्नु. भोरमा पर षान्यालाइ भोरको पतिया दिनु.

# कैदि भगाउन्याको

१. मानिस मार्न्या सात्रिधुवार मानिस मार्‍याका मुद्दामा दामल हुन्या सात्रि धुवालाइ हाल्याको नेल ठिगुरा चमौट फोइ दिन्या र. कोठा छिडिमा थुनियाका वाध्याका लोग्न्या मानिस वा स्वास्नि मानिसलाइ फोइ दिन्याको अैन वमोजिम अंस सर्वस्व गरी लिनु मैन्हा दिन भित्रमा तेसले षोजिल्यायो भन्या ५० रूपैया दंड गरी लिसर्वस्व फिर्ता गरि दिनु. मैन्हा दिन भीत्रमा अरूले पक्रिल्याया पनि. मैन्हा दिन पछि तेसले पक्रि ल्याया पनि सर्वस्व फिर्ता हुदैन. सात्रिधुवा फेला पर्‍या पछि अैज वमोजिं सजाय गर्नु.

२. चोरि सनवंधका कुरामा नेल ठिगुरा चमौट् हाल्याका वाध्याका कोठा छिडिमा थुन्याका लोग्न्या स्वास्नि मानिसलाइ फोइ दिन्यालाइ २० रूपैया दंड गरि चोरले चोर्‍याको विगो तेसैवाट चोरिन्यालाइ भराइ दिनु. चोर तेसैले पक्रि ल्याया पनि अरू कसैले पक्रि ल्याया पनि चोर पक्रिया पछि त्यो चोर विगो दिन सक्न्या रहेछ भन्या विगो उठाइ तेहि फोइ दिन्यालाइ दिलाइ दसौद लिनु. विगो दिन सकेन भन्या कपालि तमसुक गराइ चोर्न्यालाइ अैन वमोजीम दंडकैद गर्नु.

३. जारिका मुद्दामा नेल ठिगुरा चमौट हाल्याका वाध्याका कोठा छिडिमा थुन्याका लोग्न्या मानिसलाइ वा स्वास्नि मानिसलाइ फोइ दिन्यालाइ तागाधारि जातकालाइ फोइ दियाको भया विहा षर्च १२० रूपैया. अरू जातकालाइ फोइ दियाको भया उसै जातका अैन वमोजिमको विहा षर्च भराइ २० रूपैया दंड गर्नु. जारि गर्न्या फेला पर्‍यो भन्या जार हांन्या जातले जार हांन पाउछ. दंड हुन्या जातलाइ दंड हुन्छ. मासिन्या जातलाइ मसाउन पाउछ.

४. हाडनातामा र. आफु भन्दा तल्ला उपल्ला जातमा आफु वरावरका जातमा करणि संवंधका कुरामा नेल ठिगुरा चमौट हाल्याका कोठा छिडिमा थुन्याका वाध्याका लोग्न्यामानिसलाइ हवस्. स्वास्निमानिसलाइ फोइ दिन्यालाइ ४५ रूपैया दंड गर्नु मैन्हा दिनभित्रमा तेसले पक्रि ल्यायो भन्या. २५ रूपैया फिर्ता दिनु. २० रूपैया मात्रै लिनु. मैन्हा दिनभित्रमा अरूले पक्रि

ल्याया पनि मैन्हा दिन उप्रान्त तेसले पक्रि ल्याया पनी अरू कसैले पक्रि ल्याया पनि रूपैया फिर्ता गर्नु पर्दैन. अैन वमोजिम कैद दंड गर्नु.

५. पानि नचलन्या जात र. छोया छिटो हालनु पर्न्या जातसित करणि सनवंधका कुरामा नेल ठिगुरा चमौट हाल्याका वाध्याका कोठा छिडिमा थुन्याका लोग्न्या मानिस् र स्वास्निमानिसलाइ फोइ दिन्यालाइ ५० रूपैया दंड गर्नु. मैन्हा दिन भित्र तेसैले पक्रि ल्याया २५ रूपैया फिर्ता गरि दिनु. २५ रूपैया मात्रै लिनु. मैन्हा दिन भित्रमा अरूले षोजि ल्याया पनी मैन्हा दिनदेषि उप्रान्त तेसैले पक्रिल्या पनि. अरू कसैले पक्रि ल्याया पनि दंड फिर्ता हुदैन. अैन वमोजिम दंड कैद गर्नु.

६. कुटपिट रगत पक्षका झगरामा नेल ठिगुरा चमौट हाल्याका वाध्याका कोठा छिडिमा थुन्याका षतुकि लोग्न्या मानिस् वा स्वास्नि मानिसलाइ फाोइ दिन्यालाइ १० रूपैया दंड गर्नु. षतुकि फेला पऱ्या पछि अैन वमोजिम दंड कैद सजाय गर्नु.

७. जगा जमिनका झगरामा नेल ठिगुरा चमौट् हाल्याका वाध्याका कोठा छिठिमा थुन्याका लोग्न्यामानिस् वा स्वास्निमानिस्लाइ फोइ दिन्यालाइ झगरा पऱ्याको जगा मोलि उसैका सयकरा १० रूपैयाका दरले दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु. झगरियालाइ अैन वमोजिम दंड कैद गर्नु.

८. सुना चादि जवाहेर कसन्तमन् चौपाया अन्न नगद जिनिस् गैह्र कुरा परि थुनियाका नेल ठिगुरा चमौट हाल्याका वाध्याका कोठा छिडिमा थुनियाका झगरिया लोग्न्यामानिस वा स्वास्निमानिसलाइ फोइ दिन्यालाइ जति ज्माको झगरा पऱ्याकोछ. उसै जम्माका सयकरा १० रूपैया दंड गर्नु. झगरियालाइ अैन वमोजिम दंड कैद गर्नु.

९. अमालि टल्सिले आफ्ना हक लिनु पर्न्या कुत वालि सेर्मा महसुल नदिदामा नेल ठिगुरा चमौट् हाल्याका वाध्याका कोठा छिंडिमा थुन्याका लोग्न्यामानिस् वा स्वास्निमानिस्लाइ फोइ दिन्यालाइ जति ज्माको झगरा पऱ्याको छ उसै जम्माका सयकरा १० रूपैया दंड गर्नु. झगरियालाइ अैन वमोजिम दंड कैद गर्नु.

१०. भाग्याका वाधा वधेत्यानि पक्रिल्याइ नेल ठिगुराच मौट हाल्याका वाध्याका कोठा छिंडिमा थुन्याकालाइ फोइ दिन्यालाइ २० रूपैया दंड गरि थैलि भराइ दिनु. मैन्हा दिन भित्र ज्यू फेला पारिल्यायो भन्या ज्यू सौ पाइ दिनु. भराइ दियाको थैलि फिर्ता गराइ दिनु.

११. आफ्ना घरको काज काम गऱ्यान भंन्या कुरांमा र. भाग्याका पक्रियाका कमारा कमारिलाइ नेल ठिगुरा चमौट हाल्याका वाध्याका कोठा छिंडिमा थुनियाका कमारालाइ हवस् कमारिलाइ हवस्. फोइ दिन्यालाइ २० रूपैया दंड गरि कमारा कमारिका उमेरका मोलका अैन वमोजिम मोल भराइ दिनु. ज्यू फेला पारि ल्यायो भन्या. मोल लिन र ज्यू लिन धनिको षुसि.

१२. अडा गौडा अदालत ठाना अमाल गैह्रवाट नेल ठिगुरा चमौट् हालि पक्रि ल्याउदा वाटामा हवस् अडा गौडा अदालत ठाना कोत इटाचपलि झ्रेलषानामा थुनियाका कैदिलाइ हवस्. भगाउनाका लागी बंचरो काटन्या कुरो र डोरि काठहतियार गैह्र भाग नहुन्या कुरो कसैले दियेछ र. कैद भयाको मानिस् भागन् नपाउदैमा जाहेर भयो भन्या भगाउनाको मतलव गरि वंचरो काटन्या कुरो र. डोरी काठ हतियार गैऱ्ह भाग नहुन्या कुरा दिन्या नाताको हवस. अरू कोहि हवस् लोग्न्या स्वास्नि जो हो उसलाइ २० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या मैन्हाका ५ रूपैयाका दरले कैद गर्नु.

१३. ज्यान जान्या र दामल हुन्या मुद्दाका कचहरिमा पक्रि आयाका थुनियाका मानिस्कोहि भागी गया छन्. र भगाउन्या कचहरिका हाकिमहरू गैह्र र. अमालि द्वाऱ्या गैह्रलाइ भगाया वाव्त अैन वमोजिमको दंड सजाय हुन नपाउदैमा भागी गयाको षतुकि पक्रि आयो भन्या वात लाग्न्यालाइ अैन वमोजिम गर्नु. अैनले षतुकि भगाया दवायामा एतिलाइ वात लाग्दैन भंन्या लेषियाका नातासनहे वाहेकका मानिसले नाता पक्ष मोलाहिजा गरि वा घुस रोसवत् षाइ भगायाको ठहऱ्यो भन्या. पछि वापति उसैले पक्रिल्यावस् वा. सर्कारवाट. र अरू परचक्रि कसैले पक्रिल्यावस्. भगाउन्यालाइ ज्यू जान्या षतको भगाउन्यालाइ ५० दामल हुन्या षतको भगाउन्यालाइ २५ रूपैया दंड गर्नु. ज्यू जान्या र दामल हुनु पर्न्यालाइ वुद्धि नपुगी जिम्मा जमानी गरि छाडचाको भागेछ र भगाउन्यालाइ दंड सजाय हुन नपाउदैमा पक्रि आयो भन्या. ज्यू जान्या षतकालाइ जिम्मा जमानि गरि छोडन्यालाइ २५ दामल हुनु पर्न्या षतकोलाइ

जिम्मा जमानि गरि छाडन्यालाइ १२॥. रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु.

१४. मधेस तराइका अदालत ठानामा अैनले रूपैया नलिनु भंन्या भै कैद भयाका कैदिलाइ पालो पहरा वस्याका कसैले घुस रोसवत् षाइ उमकायाको भया तेसलाइ लाग्या वमोजिमको कैदको ४ षंडको १ षंड कैद गर्नु स्यादका रूपैया नलिनु.

१५. मधेस तराइका अदालत ठानामा चोरि मुद्दामा कैद भयाकालाइ पालो पहरा वस्याका कसैले घुस रोसवत् षाइ उमकायाको ठहऱ्या चोरले तिर्नु पर्न्या विगो र दंड कैदको ४ षंडको १ षंड उम्काउन्यालाइ दंड कैद गर्नु. चोरिन्याको विगो तेसैवाट भराइ दिनु.

१६. मधेस तराइका अदालत ठानामा ज्यान माऱ्याका मुद्दामा कैद भयाकालाइ पालो पहरा वस्याका कसैले घुस रोसवत् षाइ उमकायाको ठहऱ्या तेसलाइ ४ वर्ष कैद गर्नु. स्यादको चौवर दिया पनि नलिनु. भाग्याको षतुकि पक्रियो भन्या कैद भयाकालाइ छाडी दिनु.

१७. मधेस तराइका अदालत ठानामा पालो पहरा वस्याकाले घुस रोसवत् केहि नषाइ गाफिलिले उम्कायाको रहेछ भन्या तेस्को नाउ काटि षारेज गरि दिनु. भाग्याको मानिस् पछि उसैले पक्रि ल्यायो भन्या. गाफिलिले उम्काउन्या सिपाहिलाइ फेरि भर्ना गरि दिनु. अरूले पक्रिल्याया भन्या उम्काउन्या सिपाहिको थमौति भयाको रहेन भन्या पाक्याको वालि. थमौति भयाको रहेछ भन्या थमौति गऱ्याका सालको वालि जफत गरि अर्का साललाइ भर्ना गर्नु.

१८. मधेस तराइका अदालत ठानामा पालो पहरा वस्याका र प्यादा लाग्याका मानिस थोरै रहा छन्. कैदि थुनुवा ढेरै रहा छन्. वा काम गराउन लैजादा गाफिलिले उम्कायाको ठहऱ्या उमकाउन्यालाइ १०।१० वेत ठोकि छाडि दिनु.

# प्यादालाई हुल गर्न्या

१. अडा अदालत ठाना अमालका डिठ्ठा विचारि कामदार सिपाहि प्यादा र द्वाऱ्याहरूलाइ निसाफ गर्दा गर्दै र पक्रन गयामा कचहरिमा सामेल नभै कसैले हाकिमका प्यादा सिपाहीलाइ वेअदप गरि वाधन्या र समाउन्या गऱ्याको रहेछ भन्या वाधन्या र समाउन्यालाइ ५०।५० रूपैया दंड गर्नु. हातले नसमाइ हुलमात्र उठाउन्यालाइ २०।२० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु.

२. सर्कारिया वाकिवाला र झगरियाहरूले आफुलाइ लिन पक्रन आउन्या अदालत ठाना गैह्रका सिपाहि प्यादालाइ ढुँगा लाठाले हानि रगत काढ्या भन्या र लात्ति जुतिले हान्या भन्या हांन्यालाइ २५ गाउल्या धुरा उठि कुट्या छन् भन्या र ५।७ दिन थलिन्या गरि कुट्या छन्भन्या जति जना सामेल भै कुट्याको ठहर्छ उतिलाइ जनही ६०।६० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु.

३. सर्कारिया वाकिमा र. अदालत ठानामा पऱ्याका झगरामा लाग्याका प्यादा सिपाहिहरूले लिन पक्रन भनि गयामा वाकि वाला र. झगरियाहरूले प्यादालाइ लछार पछार गऱ्या गाला ठोक्या गर्धनि लगाया जवरजस्ति गरि अडिइ घुर्चा घुर्ची गऱ्या भन्या रगत आया पनि नआया पनि २० रूपैया दंड गर्नु. गाउल्या गैह्रले धुरा हुल उठि प्यादालाइ लछार पछार गऱ्या र झगरिया उमकाया भन्या तिन्हेरूलाइ पनि जनहि २०।२० रूपैया दंड गर्नु रूपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु.

४. अर्काको ज्यान मार्न्या मानिसलाइ पक्रन भनि जादा उसैले हतियार लट्ठि चलाइ उम्क्यो अथवा उस्का जहानले हुल गरि पक्रन तलासि गर्न नदि ज्यान मार्न्यालाइ उम्काया भन्या. हुल गर्न्या स्वास्नी मानिसलाई जनही २०।२० रूपैया दंड गर्नु लोग्न्यामानिसलाइ जनही ४०।४० रूपैया दंडगर्नु. ज्यान मार्न्या सासिधुवालाइ अैन वमोजिमको अंस सर्वस्व गर्नु. त्यो पक्रिया पछि अैन वमोजिम. काटनालाइ काटनु दामल गर्नालाइ दामल गर्नु. मुडनालाइ मुडनु. कैद गर्नालाइ कैद गर्नु जरिवाना गर्नालाइ जरिवाना गर्नु.

५. तागाधारि जात गैह्रका आफ्ना दिदि वैन्हि छोरि वुहारि फुपु भाउज्यु आमा वज्यु सासु. कसैसित अरूका कंन्या पतिब्रता विधवा स्वास्निहरू सित झगरा पर्दा आफ्नालाइ अरूले अर्ध्यालि गऱ्याको छ तापनि इ आफ्ना हुन्. भनि लोग्न्या मानिसले धुरा उठि कुटपीट नगर्नु. छुट्याइ अदालत ठाना अमालमा पुऱ्याइ दिनु. छुट्याइ दिना पछि नलागी कुटपीट गऱ्यो हात छोड्यो भन्या. तागाधारि जातका स्वास्निलाइ कुटयो भन्या ५० मतवालि जातका स्वास्निलाइ १।२ चोट मात्रै कुटन्यालाइ १० नील पारि थलिन्या गरि कुटन्यालाइ अैन वमोजिम दंड सजाय गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु. झगरामा पैल्हे हात छाडन्या स्वास्निलाइ पनि अैन वमोजिम दंड गर्नु.

६. झगरिया पक्रन भनि सिपाहि वक्साइ लैगया पछि झगरिया फेला परेन पक्राउन सकेन भन्या सिपाहिले षायाको प्याज षानि फिर्ता गर्नु पर्दैन.

७. झगरियाले सिपाहि लिगै झगरिया देषाइ दिया पछि देषाइ दियाकालाइ पक्रि ल्याइदिनु. सिपाहिले पक्रया पछि उमकायो भन्या फेरि तेसै सिपाहिलाइ पक्रि ल्या भनि षटाइ दिनु.एक फेरा झगरिया पक्राइ दिया पछि सिपाहिले उम्कायो भन्या अर्का पटक पक्रि ल्याउनालाइ प्याज षानि दिनु पर्दैन.

८. झगरिया पक्रि ल्याउनालाइ अदालत ठानामा सिपाहि माग्न आउन्याले जति जना सिपाहि मागि लैग्यो उतिलाइ जति दिन लाग्छ. उति दिन प्याज षानि दिदा नगद लिंछौ भंन्या सिपाहि प्यादालाइ जनहि २ आना पैसा दिनु. सिधा षांछौ भंन्यालाइ २ छाकमा २ आनाले पुग्न्या जति सिधा दिनु. सिधा षान्या लाइ पैसा दिनु पर्दैन. पैसा लिन्यालाइ सिधा दिनु पर्दैन. लेष्या देषि वढता प्याज षानि लिन्यालाइ विगा वमोजिम दंड गर्नु.

# मुद्दा दामल गर्दाको

१. राजकाज वेहोरामा हवस्. अैनले षत लाग्न्या हाडनातामा करणि गऱ्यामा हवस्. मुडनु भनि लेषियाका जातलाइ मुडदा अक्षर षोदनु पर्दैन. तागाधारि जातलाइ अैन वमोजिमको अंस सर्वस्व गरि जनै झिकि मुडि मद सुगुरको मासुषुवाइ जात पतित गरि नमासिन्या सूद्र जातमा मिलाइ नमासिन्या सूद्रजातलाइ अैन वमोजिमको अंस सर्वस्व गरि कुकुरको मासु षुवाइ मुडि जात पतित गरि भोट्या जातमा मिलाइ पूर्वको भया पश्चिम. पश्चिमको भया पूर्व तर्फ नदि कटाइ धपाइ दिनु. मुडि जात पतित भयाका मानिसले विहा वरि गर्दा आफु जौन जातमा मिल्याका छन् उसैजातमा गर्नु.

२. दामल हुन्याहरूलाइ वाञा गालामा चिन्ह रहन्या गरि षुदि दामल्मा हालि दिनु.

३. मुडिन्या जात गैह्रले तक्सिर गरि मुडि घपाया पछि फेरि पनि मुडिन्यै तक्सिर गऱ्यो भन्या तेस्तालाइ दामल गर्नु.

४. आजसंम राजधानि सहर इटाच पलि वाहेक अरू जगावाट मात्र मानिस्को ज्यान मार्नु पर्दा विना लालमोहोर ज्यान नलिनु भंन्या थियो. अबउप्रांत राजधानि सहर इटाचपलिवाट हवस्. अडा गौडा अरू जगावाट हवस्. राजकाज वाहेक् षत वातमा अैन वमोजिम मानिस्को ज्यान मार्नु पर्दा र. साधक गर्दा ज्यान लिनु भन्या भयाका मानिस्को ज्यान लिदा. औ. मुडनु षोदनु दामल गर्नु जात पतित गर्नु जनै झिकनु पर्दा विना लालमोहोरले सजाय नगर्नु. फलानु सजाय नगर्नु भंन्या वेहोरा षोलि लाल मोहोर गराइ लि सजाय गर्नु.

५. अडा अदालतवाट षतवातमा अैनले मुडनु भन्याकालाइ मुडि जात पतित गर्नालाइ मदिरा अभक्ष षुवाउदा पानि चलन्या चोषा जातका हातवाट मात्रै षुवाउनु. पानि नचलन्यार छिटो हालनुपर्न्या जातका हातवाट नषुवाउनु.

# सर्वस्व गर्दाको

१. स्वास्निमानिसहरूले सर्वस्व हुन्या तक्सिर गऱ्यामा सर्वस्व नगर्नु स्वास्नि मानिसको सर्वस्व हुदैन.

२. सर्वस्व हुन्या कुरामा र मासिन्या कुराको वात लागी पक्रियाका वापतिहरू कायेल भया पछि सर्वस्व हुन्याको सर्वस्व नआउन्ज्याल् र. मासिन्या र नमासिन्या जातको पत्ता नलागन्ज्याल् कैदैमा राषनु. सर्वस्व हुन्याको सर्वस्व आया पछि र मासिन्या र नमासिन्या जातको पत्ता लाग्या पछि अैन वमोजिम दामल हुन्यालाई दामल गर्नु. मुडनालाइ  मुडनु. षोदि छोडनालाइ अक्षर षोदि छाडि दिनु. मासिन्या जातलाइ मासिदिनु.

३. काटिन्या दामल हुन्या मुडिन्या मासिन्या मानिस् सिवाना लङ्घा नाघि भागी गया भन्या. अैन वमोजिम अंस पर सारि भाग्न्याको अंस सर्वस्व गर्नु.

४. ज्यान मारिन्या र. मासिन्या तक्सिर गर्न्याहरूलाइ भाग्न नपाइ पक्रि ज्यान मारियो मासियो भन्या तेस्ताको सर्वस्व नलिनु.

५. अदालत इटाचपलिवाट वा पतिको सर्वस्व गर्दा कुमारि चोकका मानिस् र ठानाका मानिस राषि तादात्को कागज लेषि अैन वमोजिम वा पतिको अंस सर्वस्व लिनु सर्वस्वमा आयाका १०० रूपैया देषि उभोका जगा जमिन्.षेतपाषो सदर दफदर दाषिल गर्नु. १०० रूपैया देषि उधोका जगा र घर कमारा कमारि चौपाय जिनिस गैह्र मोल पंचकृति मोलिन्या माल गरी तौल हुन्या मालको तौल दागगरि लिलाम हुन्या लिलाम गराइ अदालत इटाचपलिमा स्याहा गरि मुलुकिषाना वुझाइ दिनु. तमसुक वहि पत्रका असामिको लहना गहना तहसिल भयासंम तहसिल गरि. तहसिल न भयाका तमसुक कागज पत्र कुमारिचोक वुझाउनु. कुमारिचोक वालाले पनि वुझिलि भर्पाइ दिनु.

६. अमाल अमालवाट वापतिको सर्वस्व गर्दा २।३ थुमका अमालि थरि भला मानिस वसि तादात गरि अैन वमोजिम्को वापतिको अंस सर्वस्व गर्नु.सर्वस्व का जगा जमीन षेत पाषो नगद सुना चादि जस्तो उठ्याको मालै ल्याइ गाइ भैसि चौपाया गैह्र जिनिस माल षोलाका भाउमा विक्रि गरि नगद पारि वापति समेत अदालत इटाचपलि वुझाइ दिनु. इटाचपलीवाट वापतिलाइ ऐन वमोजिम सजाय गर्नु. सर्वस्वको १०० रूपैया देषि वढताको जगा जमिन्. सदर दफदर दाषिल गर्नु. १०० रूपैया देषि तलको जगा भया तेस्ता जगा र अरू नगद वाहेकको धन माल लिलाम हुन्या लिलाम गरि मोल हुन्या मोल गरि नगद पारि मुलुकिषाना वुझाइ रसिद लिनु.

७. वापति षतुकिको सर्वस्व गर्दा षतवात जाहेर नहुदै साहुले भोग गर्‍याका जगा र तमसुकमा धितो वंधक लेषियाका ज्यू जमिन माल गैह्रको तमसुक बमोजिमका साहुका रूपैया भर्ना गराइ दि वढता ठहर्‍याकामा र उस्का घरका अरू धनमालमा आमा वावु दाज्यू भाइ स्वास्नि छोराको अंस र. विहा नभयाका छोराको र छोरिको विहा षर्च पर सारि वापति षतुकिको अंस मात्रै सर्वस्व गर्नु.

८. भिंन नभै एकै घरमा सग वस्याका दाज्यू भाइ वावु छोराहरूमा एक जनाको सर्वस्व भयो भन्या साहुका जम्मा थैलिमा दामासहिको हिसाव गरि सर्वस्व हुन्याको भाग जति साहुले पाउदैन. रहाका अंसमा दामासहिका दरले जो जो पाउन्या ठहर्छ सो वमोजिम साहु पनि तिर्नु पर्छ. साहुलाइ भराइ दिनु.

९. ज्यू भन्या रहो सर्वस्व मात्रै भयाकोछ भन्या साहुलाइ आधि धन तिर्नु पर्छ.

१०. ज्यू काटिइ सर्वस्व थामिन्या मानिस्का साहुतिर्दा त्यो थामियाको सर्वस्व भोग गर्न्या एकाघरसंग वस्याका छोरा स्वास्नि भाइ भतिजा गैह्रले सर्वस्व हुन्याका फाटमा लाग्याका साहुलाइ आधा धन तिर्नु.सवैतिर्नु पर्दैन. आफ्ना अंसको फाट मा लाग्याका साहु भया सवै तिर्नु पर्छ. मानुँ छुटयाइ वेगल वस्याकाले ज्यू काटिन्याको अंसको सर्वस्व षायाको रहेछ भन्या ज्यू जान्याको उपति षाया पछि उस्का फाटमा लाग्याको सबै साहु तिर्नु पर्छ आधि मात्रै तिर्छु भंन पाउदैन. काटिन्याको थामियाको अंस पनि षांन साहु तिर्न पनि सक्तिन भनि छाड्यो भन्या

सवै साहु वटोलि दामासहिका हिसावले तिराइ दिनु. ज्यू काटि सर्वस्व स्मेत् भयो भन्या उस्का साहुले केहि पाउदैन.

११. दामल पनि हुन्या दियो कुचो भै सर्वस्व पनि हुन्याका साहुले केहि पाउदैन.

१२. कसैले सर्वस्व हुन्या तकसीर गऱ्यो भन्या वा पतिको अैन वमोजिम्को अंसमात्रै सर्वस्व गर्नु. उस्का अरू स्वास्नि भाइ छोराको अंस र. स्वास्नि छोरि वुहारिको दाइजो जफत हुदैन थामि दिनु.

अदालत ठाना अमालवाट अंस गराउनु पर्दा र. सर्वस्व गरि लिनु पर्दा विहा नभयाका छोरा छोरिको विहा षर्च दिनाको १

१३. अदालत ठाना अमालवाट कसैको अंस वंडा गराउनु पर्दा हवस् वा. षतवातमा सर्वस्व लिनु पर्दामा छोरा छोरिको विहा षर्च पर सार्नु पर्दा विहा नभयाका छोरा छोरि ढेरै भया पनि थोरै भया पनि ज्मा धन संपति २ हजार देषि वढता ठहऱ्या सयकरा ५ दुइ हजार देषि मुनि एक हजार सम्मको धन संपति ठहऱ्या सयकरा १० एक हजार देषि घटिको धन संपति ठहऱ्या सयकरा २० का दरले विहाषर्च पर सारी ऐन वमोजिम गरीदिनु. सर्वस्व गर्नु पर्दा पनि एहिरितले विहा षर्च पर सारि वापतिको अंस सर्वस्व गरि लिनु.

# दस्तुर लिन्याको

१. अदालत ठाना अमाल गैह्रमा अव उप्रांत ढुंगो छुवाइ पटक गर्दा अैनमा लेषिया वमोजिम दंडका रूपैया मात्रै लिनु ढुंगो छुवाउदाको १ पैसा देषि वढता ढुंगाका रूपैया कसैले नलिनु. लियो भन्या लियाको फिर्ता गराइ उसै वमोजिम लिन्यालाइ जरिवाना गर्नु. ढुंगाको १ पैसा लियाको अदालतका कोटालहरूलाइ दिनु. अमालको कटुवाल्याले लिनु.

२. कोहि झगरियाका अैन वमोजिमका झगरा छिंदा साभासुद्रिका पैसा नलिनु. कसैले साभासुद्रिका पैसा लि वाडि षाया भन्या विगाको दोवर जरिवाना गरि लिनु.

३. कोहि कैदि म्याद पुगि नेल षोलि दिदा गक्ष अनुसार.कैदवाट षुलन्याले मोहोर देषी पैसा सम्म दियाको लिनु. नभया कर लाग्दैन.

४. अदालतका हाकिम डिट्ठा विचारि अर्जबेगी महानाइक्या महान्या अमालका द्वाऱ्या मुषिया पूर्व पश्चिम अडा अडाका डिट्ठा विचारि गैह्रले चोरलाइ कसैले सौपन ल्याया भन्या वुझि इन्साफ गरिदिनु. चौर सौपन ल्याउन्या सग दस्तुर नलिनु. चोर सौपदाको दस्तुर. लिया भन्या विगाको दोवर जरिवाना गरिलिनु.

५. कौसि तोसाषाना कंपूका दफदर. सदर दफदर अदालत ठाना कुमारि चोक मुलुकि षाना मेगजिन छेभडेल वुभडेल हिटि चोक पोतादार काठ महल सायेरदार गैह्र र. पहाड मधेस अडा गौडाका भर भारादार र डिट्ठा विचारि कामदार. अमानत्का रकमदार गैह्रले अघि देषि चलि आया वमोजिम. पाइ षाइ आयाको नेग दस्तुर गैह्र जो छ अव उप्रान्त कसैले नषानु. सर्कार दाषिल गरि रसिद लिनु. सर्कार दाषिल नगरि कसैले षायेछ भन्या षान्यावाट विगो वुझिलि विगा वमोजिम दंड गर्नु.

६. गोर्षाराज भरमुलुक पहाड मधेस सर्कार मोफसल अडा गौडाका अदालत ठाना कचहरिका हाकिम डिट्ठा विचारिले अैन वमोजिम छिन्याको झगराको दंड जरिवाना जिताउरि वक्सौनि

पान फुल अपुतालि ठेकि दसौद विसौद सर्वस्व गैह्र लियाको जो छ आम्दानि कचहरिका स्याहामा लेषाइ चलि आया वमोजिम रसिद फारषदिनु एस्ता कुरामा दस्तुर फारषतको रूपैया लाग्छ भनी केही नलिनु. अैन भयापछि कसैले लियेछ भन्या. विगो जस्को हो उसैलाइ फिर्ता गराइ उसै विगा वमोजिम दंड गर्नु.

# अदालतका फिऱ्यादिको.

१. विर्तागुठी वेषमरोट माना चामल छाप गैह्र माफि जग्गाका धनिर जागीर दारले आफ्ना जगाका षुवाका झै झगरा परि आयामा आफु सित अघि फिराद गऱ्याको आफैले हेरि अैन वमोजिम. निसाफ पारी छिनीदिनु. आफ्नो  जगा र षुवा बाहेक अरूको फिऱ्याद आयाको र.आफुले हाल्याका द्वाऱ्या र रकमीका नाउको फिराद आयाको अदालतमा पठाई दिनु. अदालत बाहेक आफ्ना दलानघरमा झगरा कसैले नसुं नु. दलानघरमा बिचारी पनि नहाल्नु. अरु रकं रकंका कचहरीले पनि आफुलाई भयाका सनद सवाल बाहेक अरु केहि झगरा नसुनु. अरु गैह्र झगरा अदालतैबाट हेरी अैन बमोजिम निसाफ पारी छिनी दिनु.

२. अदालतका हाकिम डिट्ठा विचारि ठानाका मालिकले अैन बमोजिम निसाफ मिल्याका कुरा छिन्नु. अैन देषि वाहेकको निसाफ गरि छिनि देउ भनि सर्कार्को हुकुम वजिर्को मर्जि आज्ञा प्रमानगी र. सर्कारको लालमोहोर वजिर्को दस्षत् भै आया पनि नमान्नु. अैन वमोजिमको निसाफ गरि छिनि दिनु. मोहोर दस्षत् हुकुम मर्जि आज्ञा प्रमानगी मानेनन्भनि इन्लाइ जरिवाना तक्सिर केहि लाग्दैन.

३. अदालत्मा अदालत्का हाकिमले अन्याय गर्न्यालाइ कायेलनामा लेषाइ सहि हालेन भनि थुन्याका वेलामा. अथवा पूर्पक्ष गर्नलाइ थुन्याका वेलामा छोडि देउ भनि प्रमानगी श्री ३ महाराजको. प्राइम्मिनिष्टर जनरल कर्णेल अरूको आयो भन्या एक पटक एस्तो वेहोरा हो भनि जनाइ पठाउनु. जनायापछि पनि फेरि छोडि देउ भंन्या प्रमानगी आयो भन्या भन्या प्रमानगी भै आउन्यालाइ थुनि दिनु. प्रमानगी भै आउन्यालाइ थुँन सकेन भन्या अदालतका हाकिमलाइ ५ रूपैया जरिवाना गर्नु.

४. नगद जिनिस जगा जमीन्का कुरामा र करणिका ज्यान लियाका कुरामा अदालत अमाल्का हाकिम डिट्ठा विचारि अमालि द्वाऱ्याहरूले झगरियालाइ कुटपीट केहि नगरि सोधपुछ गर्दा आफ्ना षुसिले कायेलनामा लेषि दियाको रहेछ भन्या उसै कागजको सहि गरि सजाय गर्नु तेसले अंन्यायमा पऱ्या निसाफ पाइन भन्यो भन्या पनि फेरि अर्को कायेलनामा हुदैन. अघि कायेलनामा लेषाउदामा कुटपीट गरि लेषायाको रहेछ वा १६ वर्ष मनिको वालष रहेछ वा.

अदवेश्रो रहेछ वा उसवेलामा जाड भाग गैह्र नसा षाइ वेहोस भयाको रहेछ. गुहाइ तेसरले पनि नसा षायाको साचो हो भन्या र. एस्ताले निसाफ पाइन भनि करायो भन्या. अघि लेषायाका कागजको सदर हुदैन. फेरि पनि कुरो वुझि अैन वमोजिम् निसाफ गर्नु. जाड भाग अफिम नसा गैह्र षायाका मानिसलाइ नसा षायाको उत्र्या पछि निसाफ हेर्नु नसा नउत्रि हेर्‍याको कुरो सदर हुदैन.

५. अदालतका हाकिमलाइ गालि गर्न्या घुस्याहा भंन्यालाइ हाकिमलाइ भन्याको भया १० डिठ्ठालाइ भंन्यालाइ ५ विचारिलाइ र अमालिलाइ भंन्यालाइ २॥. रूपैया दंड गरि लिनु एति रूपैया घुस षायाको छ भन्यो. र कायेल गर्न सकेन भन्या जति रूपैया षाको छ भनि पोल्याको छ उति रूपैया पोल्लन्याबाट दंड गरि लिनु. हाकिम डिठ्ठा विचारिले घुस षायाको ठहर्‍या घुस लिलाम गरि अदालतवाट ठानावाट षारेज गर्नु घुस षायाको थाहा पाइ भन्याको रहेछ भन्या वात लाग्दैन.

६. अदालत अमाल जगा जगाका हाकिमका नाउमा अरू अरूसंग अन्याय गर्‍यो भनि भनि हिडन्या हाकिम र विचारिसंग जोरि कायेल मुकायेल् गर्न नसक्न्या मालिकसंग पनि विन्ति गर्न नसक्न्या एस्त वकवाद गरि हिडन्यालाइ २० रूपैया दंड गर्नु मालीकसंग आइ अन्याय गर्‍यो भनि फिर्‍याद गरि अदालत अमालका हाकिमसंग जोरिकन कायेल गर्न सकेन वकवाद गरि हिडन्या ठहर्‍यो भन्या तेस्तालाइ जौन कुराको अंन्याय गर्‍यो भनि विन्ति पार्‍याको छ सो बमोजिम प्राइमिनिष्टरले सजाय गर्नु पर्न्या भया सजाय गर्नु जरिवाना गर्नु पर्न्या भया जरिवाना गर्नु.

७. अैन भयाका मिति देषि अघि अदालत अमाल्मा एक फेरा कुरा परि छिनियाका रैकर गुठि विर्ता गैह्र जगा जमिन घरवारिका झगरा सुना चादि जवाहेर कसन्तमन् गैह्र नगद जिनिसका झगरा. तर्तमसुक वहि षाताका लिनदिन कारोवार. साहु रिणिका झगरा. वाधा वधेत्यानि कमारा कमारि अजा पुत्र औ चौपाय गैह्रका झगरा दान दातव्य दियाको पत्र पात्रको धर्म भकायाको निञा हलायाका गैह्र कुराका झगरामा अैनका राहले मिल्छ निसाफ गरिदेउ भनि कसैले कराउन आयो भन्या अघि छिन्याको कुरो उल्टि अर्को निसाफ हुन सक्तैन. अघि छिन्यै वमोजिम्को कुरो सदर हुंछ भनि ठोकि दिनु. त्यो निसाफ नहेर्नु. अघि छिन्यैको सदर हुंछ.

८. अर्काका अड्डा षालमा पऱ्याको झगरा जानि जानि आफ्ना अड्डावाट विना प्रमानगी मर्जि आज्ञाले झगरा भिकि हेर्न्या कुरो छिनि दिन्या डिट्ठा विचारि अमालिलाइ ५ रूपैया दंड गर्नु.

९. अडा गौडा अदालत अमाल्मा झगरा तोकिया पछि डिट्ठा विचारि आमालिहरूले कुरा हेर्दा हेर्दैमा फलाना ठाउवाट हाम्रो झगरा हेरि दियानन् छिनि दियानन्भनि झगरियाहरूले कराउन आया भन्या. अघि जौना ठाउमा पऱ्याको हो उसै ठाउमा अैन वमोजिम निसाफ पारि चाडो छिनि दिनु भनि अह्राइ दिनु. अर्का अडामा नसार्नु.

१०. अैन भया पछि अैन वमोजिम तोकि छिन्याका कुरा उल्टाई थोरै कुराको ढेरै. ढेरै कुराको थोरै गरि फरेव गर्न्या जो छ तेस्तालाइ मुषत्यारले भया सर्कारवाट सजाय गर्नु अरू छोटा वडा गैह्रले अैन वमोजिम विंति गऱ्या दस्षत् गऱ्या मुषत्यारवाट सजाय गर्नु.

११. सर्कार्का हुकुमले विराना मुलुकका सर्कार्माउकिल वकिल भै काज काममा जान्या र जागीर षाइ हुकुम कमान ले विराना राजमा जान्या फौज मानिसले वहा केहि तक्सीर गऱ्यो भन्या. आफ्ना मुलुकमा छदा तक्सीर गर्दा जौन सजाय हुन्या हो सोहि वमोजिमको सजाय विराना मुलुकमा गै तक्सिर गऱ्याको भया पनि आफ्ना मुलुकमा आया पछि सजाय गर्नु.

१२. अर्काको ज्यू काटद्या माऱ्याका कुराको वात लागी जितन्या दामल हुन्या कुराको वात लागिं जितन्या. करणि संवंधिका कुरा जितन्याहरूलाई अदालत ठाना अमालवाट जिताउरि लिदा ५ रूपैया लिनु वढता नलिनु. एस्ता कुरामा ५ रूपैया देषि वढता जिताउरि लिन्यालाइ वढता लियाका विगा वमोजिम दंड गर्नु.

१३. झगरियाले मलाइ निसाफ गरि दियानन्. अंन्यायमा कायेलनामा लेषाया भनि कोहि कराउन आयो भन्या र कुरो हेर्दा अडा अदालत ठाना अमालका हाकिम डिट्ठा विचारि अमालि द्वाऱ्या र कामदार गैह्रले झगरियाको कायेलनामा गराउदा अैन वमोजिमको निसाफ पुऱ्याइ कायेलनामा गरायाको ठहऱ्यो भन्या तेस झगरियाको झुठ्ठो कुराको नासिल गऱ्याको अर्को कायेलनामा गराइ सय रूपैया देषि माथिका विगाको झगरा भया २० रूपैया सय रूपैयादेषि तल ५०

रूपैया संमका विगाको झगरा भया १० रूपैया ५० रूपैयादेषि तलका विगाको झगरा भया ५ रूपैया दंड गरि लि त्यो झगरिया अघि जौना षालमा कुरो पऱ्याको हो उसै षालमा पठाइ दिनु अैन वमोजिम निसाफ गऱ्याको रहेनछ अर्को कायेलनामा लेषाउन पऱ्यो भन्या अघि कुरो पऱ्याका ठाउबाट लेषायाको कायेलनामा च्याति रीत माफिकको झगरियाको कायेलनामा गराइ वेनिसाफको कायेलनामा लेषाउन्या हाकिम डिट्ठा विचारी अमालि द्वाऱ्या रकमि गैह्र जो हो उसलाइ उसैले गऱ्या वमोजिमको दंड गरि झगरियालाइ अैन वमोजिम निसाफ गर्नु.

१४. अदालत ठाना अमालका हाकिम डिट्ठा विचारि अमालि द्वाऱ्या रकमदारहरूले अैन वमोजिम निसाफ गरि छिन्याका कुरामा अन्याय भयो भनि झगरिया कराउन आयामा अर्का षालवाट कुरो वुझदा अघि कुरो पऱ्याका षालवाट अैन वमोजिम कै निसाफ गऱ्याको ठहऱ्यो भन्या निसाफ गरि छिन्याका कुरामा अंन्याया भयो निसाफ पाइन भनि झुट्टा कुरामा कराउन जानिन भंन्या वेहोराको कायेलनामा गराइ अघि कुरो पऱ्याका षालवाट दंड गऱ्या वमोजिम फेरि दंड गरि लि अघि कुरो पऱ्या षालवाट दंड दसौद विसौद वक्सौनि गैह्र जो गऱ्याको छ उसै षालमा पठाइ दिनु. पछि गऱ्याको दंड पछिवाट कुरो हेर्न्या षालबाट लिनु. रूपैया नतिऱ्या मैन्हाका ५ रूपैयाका दरले कैद गरि रूपैया कट्टि भै सकिया पछि छाडि दिनु.

१५. रैकर विर्ता गुठि किपट गैह्र घर वारि षेत जगा जमिन्का झगरामा यो नगद जिनिस् सुना चादि जवाहेर चौपायाका झगरामा भयो. चोरिका कुरामा भयो कचहरिमा कुरो पऱ्या. पछि आफ्ना झगरिया वादि सित गै यो कुरो भनि न देउ भनि घुस दियेछ र. पुर्पक्षगर्दा कुरो जाहेर भै घुस दियाको ठहऱ्यो भन्या त्यो झुट्टा ठहर्छ मामिला हेर्नु पर्दैन घुस दिन्याको हार हुंछ.

१६. अघिका अैनले डाका माऱ्याका मुद्दामा चोरि वावत्मा करणि वावत्मा पऱ्याका दामल भयाका अक्षर षोदियाका नछुटि कैद भै रहाका कैदिमा अवका अैनले दामल नहुन्या ठहऱ्याकालाइ र. छाडिदिनु भन्यालाइ छाडिदिनु.मासनु भन्याकालाइ मासिदिनु कैद घटाउनु भन्याकालाइ घटाइ दिनु. कैद वढाउनु भन्याकालाइ वढाइ दिनु. अव उप्रांत. अव भयाका अैन वमोजिम गर्नु. अघि अघिका अैनमा मिलाइ छिनि छोडि सक्याका मुद्दाका अवका अैनले उल्टाइ झगरा नहेर्नु. अघिकै अैनमा मिलाइ छिनि छोडि सक्याको सदर हुंछ.

१७. अडा अदालत ठानावाट र. श्रेस्तावाट ल्यायाका साधक्मा झगरियाको इजहार फरक पारि अर्को इजहार लेष्याको ठहऱ्यो अथवा इजहारमा लेष्याको झगरा तोडिन्या कागजपत्र साछि प्रमाण गैह्र चाहिन्या मुद्दा नभिकाइ उतै साधक हाल्याको झगरियाले सावित गऱ्यो भन्या. साधक हालन्या अडावालालाइ नाता गोता पक्ष गरि वा घुस षाइ गऱ्याको ठहऱ्यो भन्या उसै झगराका विगाका ज्माका सयकरा ५ रूपैयाका दरले जरिवाना गर्नु. नाता पक्ष गरि वा घूस षाइ गऱ्याको ठहरेन भन्या २० रूपैया जरिवाना गरि साधक वदर गरि पठाइदिनु.

१८. कौसलियाले प्रमाण मुद्दा नपुग्याका सधक् सदर गरि पठायाको ठहऱ्यो भन्या मुद्दा नपुग्याको विचार नगरि सदर गर्न्या कौसलियालाइ २० रूपैया जरिवाना गर्नु त्यो साधक् वदर.

१९. अदालत ठाना अडा श्रेस्तावाट दोहोरो छलफल गरि ज्मानवंदि कायेलनामा भै सो वमोजिम साधक् तयार गरि झगरिया स्मेत् कौसलमा लगी कौसलमापनि २ थर झगरियाले सहिछाप स्मेत् गऱ्याको रहेछ र. सो साधक् कौसल लगायेत् मर्जिसंम सदर भयाको रहेछ भन्या जितन्याको जित् हार्न्याको हार छदैछ . त्यो झगरा उल्टिदैन. उजुर गर्न्या झगरियालाइ २० रूपैया दंड गर्नु.

२०. अदालत ठाना अडा श्रेस्तावाट २ थर झगरिया जोरि कुराको छलफल भै ज्मानवंदि कायेलनामा लेषाउनु पर्दा. एक थर झगरियाले सहि हाल्यो एक थरले हालेन. हामिले अैन सवालको राहा पुऱ्याइ गऱ्याका निसाफमा एस्को चिवुझेन एसलाइ अैन मुताविक कागजमा सहि नहालंजि नेलहालि कैद गर्न्या ठहराञ्यु भनि साधक् तैयार गरि अडावालाले स्मेत् सहि छाप गरि सो साधक् र २ थर झगरिया स्मेत्कौसलमा ल्याया पछि कौसलवाट झगरियालाइ सोद्धा पनि २ थर झगरियामा एक थरले सहि हाल्यो. एक थरले सहि हालेनर कौसलवाट पनि एस्ता धिनाहालाइ अडावालाले नेल हालनु भंन्या ठहराइ साधक् हाल्याको मुनासिव रहेछ भनि सो साधक सदर गरि सहि हालि कौसल लगायेत् मर्जिसम्म सदर भयाको रहेछ भन्या त्यो झगरा उल्टिदैन साधक्माजितन्याको जित् हार्न्याको हार जो छ सोहि सदर गरि छिनि दिनु.

मेरा वादि फिरादि कोहि नभै आफै हाकिंवादी भै. अंन्याय गऱ्यो भनि कराउदा. सो हाकिम्लाइ दिन ३५ को म्याद दि झगर छिन्या अैन र मेरा वादि फिरादि कोह नभै.

सवाल सनद वादी छ भनि सवाल सनद मा नभयाको अंन्याय गऱ्या भनि अराउन आउदा सवाल सनद वादीछ भनी अंन्याय गर्‍या हाकिम.लाइ दिन ३५ को म्याददि झगरा छिन्या अैन.

२१. फलाना हाकिम डिठ्ठा विचारि. रकमदार अमालिद्वाऱ्या गैह्रले. अंन्याय गऱ्यो भनि कसैले ईजहार दियो भन्या. तेरा नाउमा फलानाले ईजहार हाल्यो सो विहोरा राहा पुऱ्याई गऱ्याको भया यस्तो विहोरा गरि. छिन्याकोछ भन्या साधक लेषि आफ्नु सहि छाप गरि पटा अैन सवाल सनद प्रमानगीले गऱ्याको छ भंछस भन्या. सोहि विहोरा लेषि पठाउ भनी टाढा भया जाना आउना बाटाको अैन वमोजिमको दिन र. कागज लेषना लाइ दिन ३५ को म्याद दिनु सो म्याद भित्रमा रित पुऱ्याइ हाधक हाल्यो वा फलानु अैन सवाल सनद प्रमान्गीले यो विहोरा गऱ्याको छ भंन्या लेषि पठायो भन्या अैन वमोजिम गरिदिनु. म्याद भित्रमा साधक पनि हालन सकेन. अैन सवाल सनद प्रमानगीले गऱ्याको छ भंन्या पनि लेषि पठायेन भन्या फिऱ्यादिले दियाका इजहारको सदर गरि. यस्ता वादि भयाका हाकिमलाइ अैन वमोजिम दंड दंड सजाय गरि छिनी दिनु नजिकको रहेछ भन्या कचहरिको पुर्जि गरि सिपाहि पठाइ तेसलाइ झिकाइ सोहि वमोजिम गरि छिनि दिनु.

# अदालत र अमालीको झगरा

१. जागिरदार ले आफ्ना जागिर षुवाका झै झगरा परि आयाका जागीरदार आफैले हेरिछिंनु. जागिरदार ले हाल्याका द्वाऱ्याले विजात्रि गऱ्या भनि रैति कराउन आया भन्या जागिरदारले न हेर्नु अदालत ठानामा पठाइदिनु. अदालत ठानावाट द्वाऱ्या र रैतिजोरि अैन वमोजिमको निसाफ गरि छिनि दिनु.

२. अमालमा फिऱ्याद नपरि अदालत ठानामा फिरादगर्न आउन्याको पुर्पक्ष गरि आम्दानि अदालत ठानावाट लिनु. श्रीमिनिष्टरप्रभृति गैह्रका विर्ता जागिर वेष छाप फिगढार माना चावल षुवाका फिरादि आयाको अदालत ठानावाट पुर्पक्ष गर्नु अघि अमालमा फिऱ्याद गरि पुर्पक्ष हुदा हुदै यौटाले भागिआइ अदालत ठानामा करायाको रहेछ भन्या अदालत ठानावालाले सौपिदिनु. अमालमा १ फेरा कुरा पऱ्याको छिन्न नसकि १।२ मैन्हा रहि पछिवाट अदालत ठानामा कराउन आयो भन्या कुरो हेरि आम्दानि अदालत ठानावाट लिनु. अमालि द्वाऱ्याले वेनिसाफमा दंड गरिलियाको ठहऱ्यो भन्या विगो फिर्ता गराइ विगा वमोजिम दंड गर्नु रूपैया तिरेन भन्या मैन्हाका ५ रूपैयाका दरले कैद गर्नु.

३. अमालमा फिराद परि कुरो जोरि पुर्पक्ष हुदा हुंदै अदालतमा फिराद गर्न आया भन्या अदालत ठानावाट मागी अमालैमा लैजानु. अदालत ठानावाट पनि दिनु. माग्न आयानन् अदालत ठानैवाट छिन्यो भन्या. आम्दानि अदालत ठानैवाट लिनु. अमालमा कुरो पऱ्याको भनि अमालिले आम्दानि माग्या भन्या पाउदैनन्. अमालिले यो झगरा अदालत ठानैवाट छिनिदिनु भनि छिनियाका झगराको आम्दानि अदालत ठानैवाट लिनु अमालिले पाउदैनन्. अमालमा सामान जोरि वौटा झगरियाले अमालमा फिराद गऱ्यो. यौटाले अदालतमा फिराद गऱ्यो भन्या त्यो झगरा अदालत ठानैवाट छिन्नु. आम्दानि अदालत ठानैको हुंछ.

४. ज्यान सनवंधि र दामल हुन्या करणि संवंधि भात पानिमा पर्न्या औ चोरि घुसा षायाको सर्कारिया रकंकलं दबायाका कुरा बाहेक् अरू गैह्र कुरामा अदालत ठाना अमाल कचहरिमा फिराद परि पुर्पक्ष हुदा विगो राष्याको भया पनि कायेलनामामा सहि नहालंज्याल्सम्ममा दुबै झगरियाका मनोमान षुसिराजि सँग हामि मिल्छौ घरसार गर्दछौ भन्या र अथवा झगरियाका

इष्ट मित्र नाता गोता भला मानिसहरू आइ हामि मिलाउछौ भनि भंन आया भन्या दुवै झगरियावाट झगरामा भर्नु पर्न्या विगाका सयकरा जनहि १।१ रूपैयाका दरले वक्साउनि लि मिल्छौ भंन्या झगरियालाइ उस्को कागजपत्र सहिसनद र. विगो स्मेत् फिर्ता गरिदि हाकिमले छोडिदिनु. कायेलनामामा सहि हालिसक्याको भया वक्साउनि ल्याया पनि छाडन हुदैन अैन वमोजीम निसाफ गरि कचहरिवाटै छिनिदिनु. वक्साउनि दि घरसार गर्दछौ भनि गया पछि नमिलि फेरि कचहरिमा झगरा गर्न आया भन्या अैन वमोजिम गर्नु. फेरि मिल्छौ भन्या मिलन पाउदैनन्.जाहा कुरो पऱ्याको छ उसै ठाउवाट हेरि छिनिदिनु. अघि लियाको वक्साउनि फिर्ता गर्नु पर्दैन.

५. ज्यान संवंधिका कुरा करणि संवंधिका कुरा चोरिका कुरा दंड वावत्का कैदमा पऱ्याका औ. सर्कारिया कारोवारमा रोकियाका झगरा वाहेक्. अरू आफ्ना लिन दिन कारोवार गैह्रको झगरा भै फिराद पर्दा एका षालमा ठूलो ढेरै विगाको एका षालमा सानु थोरै विगाको फिऱ्याद पऱ्याको रहेछ भन्या जौना ठाउमा ढेरै विगो भयाको ठुलो झगरा पऱ्याको छ उस ठाउमा त्यो झगरा स्मेत् झगरिया पठाइदिनु. दवै झगरा उसै ठाउका हाकिमले छिंनु.

६. ज्यान संवंधि र दामल हुन्या करणि संवंधि भात पानिमा पर्न्या औ घुस षायाको सर्कारिया रकंकलं दवायाका कुरामा वक्सौनी हुदैन अैन वमोजिम गर्नु. एति वाहेक अरू विगो भराउनु नपर्न्या र विगाको प्रमाण नभयाका गैह्र कुराका झगरामा अदालत ठाना अमालमा कुरा पऱ्या पछि कायेलनामा मा सहि नहाल्दासंममा दुवै झगरियाका मनोमान षुसिराजिसित हामि मिल्छौ भनि वाइनै झगरियाका इष्ट मित्र नाता गोता भला मानिस् कसैले इनलाइ हामि मिलाउछौ भनि अदालत ठाना अमालमा कोहि भंन आया भन्या उनलाइ हुनु पर्न्या दंडका सयकरा १।१ रूपैयाका दरले दुवै झगरियाबाट वक्सौनि लि छाडिदिनु. कायेलनामा सहि हालिसक्यापछि र १ फेरा मिल्छौ भनि गै फेरि नमिलि अदालत ठाना अमालमा आया भन्या फेरि मिल्छौ भनी मिलन पाउदैनन्. अैन वमोजिम दंड सजाय कैद गर्नु.

७. विर्ता वेष फिगढार छापमानाचावल्. मरौट् गुठि जागिरका अमालि द्वाऱ्या रकमीहरूले हाम्रा झगरा हेरि देउ भनि अदालत ठानामा ल्याइ अडा अदालत ठानाबाट छि न्याका झगराको दंड

कुंड दसौद विसौद गैह्र जो आम्दानि भयाको छ. तेस्को दसौदलि विर्ता वेष फिगढार छापमाना चावल् मरौट् गुठि जागीरको जस्को जगा हो उसै जगावालालाइ सौपिदिनु.

८. कसैले लुला लगडा लाटा ग्वागा बाहेक कसैलाइ कुटपीट रगत पक्ष अंगभंग गालि गैह्र गरेछ र. कुटाइ गालि गराइमाग्न्याले तेसले गऱ्यो तापनि मैले सह्या एस कुराको नालिस् गर्दिन भनि छाडचो भन्या अडा अदालत ठाना अमाल गुठि विर्ता वेष छाप छपेलाका धनिले र. इजारा अमानत् वालाले नपक्रनु. कुटिन्या गालि गराइ माग्न्याले फिराद गरि कायेलनामा भै सकियापछि पनि एसलाइ माफ दिन्छु छाडिदेउ भन्यो भन्या ढुँगो दुभो नहुदासंममा भन्या.कुटन्या गालि गर्न्यालाइ हुनु पर्न्या दंडको सयकरा १।१ रूपैया कुटन्या गालि गर्न्यावाट लि कायेलनामा फारि मिलापत्र गरी छाडिदिनु. फिराद परि कचहरिवाट कायेलनामा भै ढुँगो दुभो स्मेत् भै सकियाको भया कुटाइ गालि गराइमाग्न्याले माफ दिंछु छाडिदेउ भन्या पनि माफ हुदैन. कचहरिवाट अैन वमोजिम गर्नु. कुटाइ गालिगराइ माग्न्या लाइ जिताउरि पर्दैन छाडिदिनु.

९. कसैले अर्काको जवाहेर सुना चादि कसन्तमन्. नगद जिनिस् गैह्र र जगा जमिन्. घर षेत कमारा कमारी चौपाया पशु पंछि बालि गैह्र अड्याइलियेछ चौपाया गैह्रले वालि षुवायेछ मसायेछ र. धनिले अदालत अमालमा फिराद नगरि आफ्ना धनमाल गैह्र बुझिलि हवस्. मायामारि हवस्.एस्को षत माफ गरि छाडी दियो भन्या छाडन पाउछ षत वात लाग्दैन कचहरिमा फिऱ्यादन गरि कायेंलनामा भया पछि षत माफ गरिदिंछु छाडिदेउ भन्या. ढुँगो दुभो नहुदासंममा भन्याको भया. कायेलनामा फारि मिलापत्र लेषि हार्न्यालाइ जति दंड हुनु पर्न्या हो तेसैको सयकरा १।१ रूपैया वक्साउनि लि छाडिदिनु. कचहरिमा फिऱ्याद परि कायेलनामा लेषाइ ढुँगो दुभो स्मेत् भै सकियाको भया. धनिले छाडछु भन्या पनि दंड र दसौद विसौद माफ हुदैन. कचहरिवाट अैन वमोजिम गर्नु. विगामा भन्या छाडनु नछाडनु धनिको षुस्.

साहु असामिका लिनदिन कारोवारका कुरामा कसैले एति लिनुछ भनि अर्कालाइ पक्राइ ल्याइ रोवकार हुदा पक्रया जति ज्मा लिनु पर्न्या ठहरेन र. तेस्तैमा मिल्छौ भंन आउदा वक्सौनि लिदाको अैन् --२

१०. दिन्या लिन्या दुवैको मुष मिल्या जति ज्माको दुवैवाट गरि सयकरा १।१ रूपैयाका दरले वक्सौनि लिनु.

११. मुष नमिल्याकामा तहकित नगरि थोरै लिनु पर्न्यामा ढेरै लिनुछ भनि इजहार चह्राइ पक्राउन्या जोहो उसैवाट वढता लेषियाका ज्माको सयकरा २ रूपैया वक्सौनि लिनु. पक्राइमाग्न्याले तिर्नु पर्न्या नठहऱ्याका रूपैयाको वक्सौनि तिर्नु पर्दैन.

# म्यादको

१. जगा जमिन् नगद जिनिस चौपाया कमारा कमारि जात भात हाडनाता करणि संवंधका कुरामा र चोरि जारिका कुरामा कचहरिमा कुरो जोरिया पछि पऱ्याको कुरो नछिनि झगरिया भागि गयो वा कुरो नजोरिदै अघिवाट भागि गयो र. उस्का घरमा अैन वमोजिम दिन ३५ का म्यादको पूर्जि टासिया पछि तेश्ले म्यादभित्रैमा मुषत्यार सित गै नालिस गऱ्यो भन्या जौन षालवाट पुर्जि टासियाको हो उस ठाउका कामदारलाइ भनिदिनु. उसै ठाउमा प्रमानगी पठाइदिनु. ३५ दिनका म्यादभित्रैमा जौनाषालवाट पुर्जि टासियाको छ उसै ठाउमा सामेल हुन आयो भन्या पनि अैन वमोजिम्. निसाफ हेरि छिनि दिनु. म्यादभित्र सामेल हुन आयेन भन्या र. म्याद नाघ्या पछि मैले मुषत्यार सँग विंति गऱ्याथ्यां अथवा अरू कचहरिमा नालि गऱ्याथ्यां भन्या र वादि मऱ्या पछि ३५ दिनभित्रै आयो भन्या पनि ३५ दिन पछि आयो भन्या पनि फेरि तेस्को कुरा नसुँनु. भात वाहेक् हुन्या षत लागी भाग्न्यालाई भात वाहेक् गरिदिनु पानी वाहेक् हुन्या कुरो गरि भाग्न्यालाइ पानि वाहेक् गरिदिनु. करणिको वात लागी भाग्याको भया त्यो करणि तेसैले गऱ्याको ठहर्छ अैन वमोजिम सजाय गरि भात पानिमा पर्न्यालाइ पतिया गराइदिनु. ३५ दिन पछि कराउन आउन्या झुट्टो ठहर्छ अघिल्लाको षत अनुसारका अैन वमोजिम दंड सजाय गरि म्यादका निसाफले छिन्याका झगरामा फरेव गर्न्या झगरियालाइ १ मैन्हा वढता कैद गर्नु म्यादका रूपैया डवल् दिया लि छाडिदिनु.

२. मानिस्को ज्यू माऱ्याको कुरामा आफूलाइ वात लाग्याको सुन्या पछि वा अघि वाट भागोस् वा. कचहरिमा जोरिया पछि भागोस्. फेरि अदालत ठाना अमालवाट ३५ दिनको पुर्जि टासिया पछि मुषत्यारसित गै नालिस गऱ्यो भन्या जौना षालवाट पुर्जि टासियाको हो उसै ठाउका कामदारलाइ कुरो हेरि छिनिदिनु भनि अह्राइदिनु वा प्रमानगी पठाइदिनु. ३५ दिनका म्यादभित्र आफै कचहरियामा आया पनि अैन वमोजिम निसाफ हेरि छिनिदिनु. ३५ दिनभित्र सामेल नभै म्याद नाघ्या पछि मुषत्यारसँग विंति गऱ्याथ्यां भन्या र. अरू कचहरिमा नालिस गऱ्या थ्यां भंन्या. औ वादि मऱ्या पछि ३५ दिन भित्रैमा कराउन आयो भन्या पनि झुट्टो ठहर्छ एस्तो कुरो नहेर्नु.अैन वमोजिम ज्यान काटिन्या ज्यान काटिन्छ. मुडिन्या मुडिंछ. दामल हुन्या दामल हुंछ.

३. अर्काको ज्यान मार्न्यालाइ अदालत अमालवाट पक्रन भनि मानिस जादा भागि गै ज्यू वचायो भन्या त्यो भागी जान्या जहिले पक्रिंछ. उसै दिन काटिन्या काटिन्छ दामल हुन्या दामल हुंछ. ३५ दिनसंम अदालत अमालमा सामेल नभै भाग्यो भन्या. अैन वमोजिम सर्वस्व गर्नु. सर्वस्व भया पछि षतुकि पक्रियो भन्या षत अनुसार अैन वमोजिम सजाय गर्नु. ३५ दिनसंम सर्वस्व हुदैन. ३५ दिन पुगी सर्वस्व गऱ्या पछि षतुकि पक्रियो षतुकिलाइ सजाय भयो भन्या पनि सर्वस्व फिर्ता हुदैन.

४. वात लाग्याकाले पुर्पक्ष नगरि भाग्यो भन्या लोग्न्या स्वास्नि जोहो तेसले हाऱ्यो झगरा नटागनु. रहन्याले जित्यो भाग्न्याले हाऱ्याको ठहर्छ.

५. अडा अदालत ठाना अमाल कचहरि गैह्रमा फिऱ्याद गरि पुर्पक्ष हुदा हुदै झगरिया भागि गयो भन्या भाग्न्याका घरका दैल्हामा ३५ दिनका म्यादको पुर्जि टासनु म्यादभित्रमा जोरिन आया अैन वमोजिम निसाफ गरि छिनि दिनु. ३५ दिनसंम जोरिन आयेन भन्या भाग्न्याले हाऱ्यो रहन्यालाइ जितापत्र गरिदिनु. भाग्न्या फेला पऱ्या पछि कायेलनामा लेषाइ दंड गर्नु. कचहरिवाट पन्पक्ष गरि सकस गर्दा भाग्न्याले अदालत ठाना अमालका हाकिम डिट्ठा विचारिका नाउमा दिन ३५ भित्रैमा फिराद गर्नु अर्का कचहरिमा जोरि दिनु ३५ दिन उप्रांन्त आउन्या झुट्टा ठहर्छ. तेस्तालाइ कायेंलनामा लेषाइ अैन वमोजिम दंड गर्नु.

ज्यान माऱ्यो भंन्या वात लगाइ अर्कालाइ थुनाइ आफु जोरिन आउदा गर्न्या अैन
--- --- --- --- --- --- --- ---४

६. अर्कालाइ थुनाइ जोरिन आयेन भन्या तेस्का घरका दैल्हामा दिन ३५ का म्यादको पुर्जि टासनु.

७. म्यादभित्र पोल्हा जोरिन आया अैन वमोजिम निसाफ गर्नु.

८. वात लाउन्या पोल्हा म्यादभित्रमा जोरिन आयेन भन्या थुनियाकालाइ छाडिदिनु.

९. पोल्हा जैल्हे पक्रिंछ उसै दिन ज्यान संवंधिका पोल्हालाइ लेष्याका अैन वमोजिम सजाय गर्नु.

अैन वमोजिम म्यादको पुर्जि टासिइ कचहरिमा सामेल भयाका झगरिया वापतिले एस मुद्दामा चाहिन्या प्रमाण सहि सनदगैह्र फलाना ठाउ छन् लि आउछु भन्दा गर्न्या कुराको अैन् –––२

१०. इजहारमा लेषिया वमोजिम् चाहिन्या पत्र पात्र साछि श्रोता भोग दसि प्रमाण गैह्र झिकाउनालाइ कचहरिका हाकिमका तजविजले जौना व्यहोरा सित झिकाउनु ठहर्छ उतिको जादा आउदाको अंदाज र कागजपत्र षोजनालाइ मुद्दा हेरि १ दिन देषि १० दिनसम्मको भाषा षावादि चाहिन्या कागजपत्र प्रमाण झिकाई अैन वमोजिम निसाफ गर्नु

११. इजहारमा लेषिया वमोजिम्मा झिकायाका कागजपत्र साछि श्रोता भोग दसि प्रमाण गैह्र मध्ये नल्यायाका कुराको अकर्ननामा लेषाइ लिल्यायासंमका पत्र पात्र साछि श्रोता भोग दसि प्रमाण वुझि अैन वमोजिम् झगरा छिनि दिनु. अकर्न लेषि दिया पछि. पछिवाट ल्यायाका सहि सनद प्रमाण झुट्टा ठहर्छ.

म्यादको पुर्जि टासियाका झगरियाले म्यादभित्र सामेल हुन आइ फेरि भाग्या गर्न्या कुराको अैन ––––––––––––३

१२. म्यादभित्रमा उसै कचहरिमा सामेल हुन आइ फेरि भागि गयो भन्या पैल्हे टासियाका पुर्जिमा जति दिन वाकि रहयाको छ. उसै वाकि दिनको मात्र म्याद गरि फेरि अर्को पुर्जि टासनु.

१३. वाकि दिनका म्यादभित्र जोरिन आया अैन वमोजिम् गरि छिनि दिनु.

१४. वाकि दिनका म्यादभित्र जोरिन आयेन भन्या तेसले हार्‍यो झगरा नटागनु. रहन्यालाइ जितापत्र गरि दिनु म्यादभित्र सामेल भै कुरो नछिनि फेरि भागन्या फरेवि झुट्टो ठहर्छ.

म्याद टासियाका झगरियाले म्यादभित्र आफु नआई चिठ्ठी खवर लेषि पठाउदा गर्न्या कुराको अैन -------------------३

१५. घरमा म्यादको पुर्जि टासियाका झगरिया सर्कारवाट षटाइ गया वाहेक आफ्ना सोषले देस पर्देस टाढा गयाको रहेछ र. उस्ले म्यादभित्रमा आफु आउन नसकि चिठि षवर पठायो भन्या. म्यादभित्रमा चिठि षवर पठाउदा. आफुले सहिछाप गर्‍याको अक्रार स्मेत् गरि पठायाको रहेछ भन्या म्याद नाघ्यो भनि झगरा जादैन. दिनको ४ कोसका हिसावले आउन वाटाको अंदाज र. कागजपत्र षोजनालाइ दिन १० सम्ममा कचहरिमा हाजिर भयो भन्या तेस्को अैन वमोजिम निसाफ गरि दिनु.

१६. लेषियाका दिन भित्र कचहरिमा हाजिर पनि हुन आयेन.अक्रार पनि पठायेन भन्या अघिल्ला म्यादको सदर गरि झगरा तोडि दिनु.

१७. आफु आउन पाइन तेस मुद्दालाई चाहिन्या पत्रपात्र प्रमाण जो भयाको लि फलानालाइ अषत्यार गरि पठायाको छु एसदेषि वढता पत्रपात्र प्रमाण केहि ठहर्‍या अकर्न झुट्टा. एसले हार्‍या हार जित्या जित भंन्या लेषि आफ्नु सहिछाप स्मेत् लगाइ जो भयाका कागज प्रमाण अषत्यार स्मेत् पठायो भन्या सो कागजका मुद्दा वुझि अैन वमोजिम् निसाफ गर्नु.

मोफसलवाट अैन वमोजिम म्याद टासियाकाले सदरमा. कराउन आउदा गर्न्याकुराको अैन. --- --- --- --- --- --- २

१८. घरमा दिन ३५ को म्याद टासिया पछि म्यादभित्र उस्कचहरिमा सामेल नभै मेरो चित्त वुझेन सदरमा कराउन जांछु भनि अडामा आफ्नु चिठि पुर्जि पठाइ सदरमा कराउन आयाको रहेछ भन्या आउदा दिनका ४ कोसका हिसावले वाटाको अंदाज गरि उति दिन भित्रमा आइ पुग्याको भया म्याद नाघ्यो भनि तेस्को झगरा जादैन. अैन वमोजिमको निसाफ गरि छिनि दिनु. मोफसलवाट टास्याको म्याद वदर.

१९. आउदा वाटाका दिनभित्र सदरमा कराउन आइ पुग्याको रहेनछ भन्या अडामा पुर्जि चिठि पठात्रा भंन्या झुट्टो ठहर्छ अघिल्लै म्यादको सदर गरि छिनि दिनु.

२०. नेपाल अदालतमा कुरो परि झगरियाले ज्यानवंदि लेषि सहि हालि दि सकि सो बमोजिम्को साधक तैयार गरि अडाले सहिछाप गर्‍याको साधक् कौसलमा पुर्‍याइ सक्या पछि भाग्न्या झगरियाले भाग्याका दिन ७ भित्र मुषत्यारसित गै करायो भन्या कुरो वुझि अैन वमोजिम निसाफ गराइ दिनु ७ दिनसम्म कराउन आयेन भन्या तेसले हार्‍यो त्यो झगरा नराषनु. साधक्को सदर गरि छिनि दिनु. भाग्न्याले तिर्नु पर्न्या विगो र विगा वमोजिम्को जरिवाना उस्का घर घरानावाट लिनु. पुगेन भन्या पक्रियाका दिन साधक् बमोजिम्मा वाकि रहाको लिनु पर्न्या र. सजाय गर्नु जो पर्छ साधक् वमोजिम गर्नु.

# दफे अदालतका फिरादीको

वादि प्रतिवादिको इजहारमा लेष्याको मुद्दा केहि छोडि केहि लेषि साधक हालन्या अडावालालाइ दंड गर्न्या अैन ---------------

२२. अडा अदालतका हाकिम् डिट्ठा विचारिले दुइ थर झगरिया वादि प्रतिवादिको इजहारको मुद्दा वुझि प्रमाण पुऱ्याइ साधक् हालनु इजहारमा लेषिया वमोजिम्को मुद्दा वुझी प्रमाण पुग्या पछि ज्मान वंदि साधकमा सहिनहाली धिगनाहि गऱ्यो भन्या. कायेलनामा लेषाउन्याका १० लंवरका अैनले नेल ठोकन्या ठहराञ्यू भनी साधक् हालनु. सो साधक वुझ्दा इजहारको प्रमाण सवै नवुझी केहि प्रमाण वुझि केहि प्रमाण छोडि साधक हाल्याको ठहऱ्यो भन्या. सोप्रमाण वुझदा हार्न्याले जितन्या जित्न्याले हार्न्या तुल्याइ मुद्दाको प्रमाण छोडयाको ठहऱ्यो भन्या. तेस हाकिम्को ज्मानवंदि गरि नातापक्ष गरि वा घुस षाइ गऱ्याको ठहऱ्यो भन्या उसै झगराका विगा वमोजिम् दंड गर्नु. नाता पक्ष गरि वा घुस षाइ गऱ्याको ठहरेन भन्या मुषत्यारका तजवीजले १ रूपैया देखि २० रूपैयासम्म जरिवाना गरि साधक् वदर गरिदिनु. मुद्दा छोडयाको छ तापनि जित्न्याले जित्न्यै हार्न्याले हार्न्यै गऱ्याको ठहऱ्यो भन्या वुद्धि नपुग्याको ठहर्छ. साधक हाल्न्या हाकीम्लाइ वात लाग्दैन. एस्तो कुरो भुल पारि गर्न जानीन भंन्या ज्मान वंदि लेषाइ छाडिदिनु.

# निञा हलाउन्याको

१. कसैले भनि कोहि जगामा निञा हाल्दा धोकामा हालि पानिमा डुवाइ निञा हाल्दा रहाछन्. अव उप्रांत अैन नाघि तेस्ता निञा नहालनु. डुवायाको मऱ्यो भन्या त्यो निञा हलाउन्या डिट्ठा विचारि आमाली जिम्मावाल मुषिया जोहो उसलाइ तेसै धोकामा हालि पानिमा डुवाइदिनु. निञा वदर.

२. जगा जमिन चौपाया सुना चादि जवाहेर. कसन्तमन्. नगद जिनिसिन ज्यू माऱ्याको अजा पुत्रलाइ कमारा कमारि हुंन्भन्या र. वोक्स्याराको कुरो करणि सनवंधि गैह्र कुरामा न्याय गैह्र नहालनु.न्याय हालि हार जित गराउन्या अदालतका हाकिम डिट्ठा विचारि आमलि द्वाऱ्या थरि मुषिया मिझाऱ्या गौडा गौडाका भारादारलाइ २० रूपैया जरिवाना गर्नु. त्यो निञा हालि हार जित भयाको विसहि. त्यो झगरा फेरि अदालत अमाल गौडावाट हेर्नु. पत्र पात्र सहि साचसाछि सुर्ता ग्वाहि भोगको विचार गरि झगरा छिंनु. एस्ता वेहोरा सग जस्ताको तस्तो निसाफ गर्दा दुइ झगरियामा जश्लेजित्छ उसैको सदर गरायिदिनु.

# दंड कैद गर्नाको

१. एकै जनाले ढेरै पटक् ज्यू जान्या दामल हुन्या मासिन्या षत गऱ्यामा अैन वमोजिम ज्यू लिनु दामल गर्नु मासनु. एति कुरामा षत षापिदैन चोरि गऱ्यामा एकै जनाले जति पटक् चोऱ्याको ठहर्छ. उति पटक् चोरिका अैन वमोजीम् षत षापि कैद गर्नु. करणिका कुरामा आफुभंदा घटि पानि नचलन्या र. छिटो हालनु पर्न्या जातमा करणि गऱ्यामा २।३ जनाको करणि गऱ्या पनि षत षापिदैन. एकै पटक् करणि गऱ्याको सजाय गर्नु. आफुभंदा ठुला जातका हवस् वा घटि जातका हवस् पानि चलन्या जातका स्वास्निको करणि गऱ्याको भया जति जनाको करणि गऱ्याको छ. उतिको अैन वमोजिमको पटक् पटक् जोरि ज्मा गरि कैद जरिवाना गर्नु.

२. एकै जना झगरियाले ढेरै पटक्को विजात्री गऱ्याको रहेछ भन्या जति विजात्री गऱ्याको छ उसले गऱ्याका विजात्रिका अैन हेरि सवै अैनको ज्मा गर्दा जति कुराको वेजात्रि ठहर्छ सवै षतको ज्मा गरि अैन वमोजिम पटक् कैद गर्नालाइ कैद गर्नु. दंड गर्नालाई दंड गर्नु.

३. जगावाट तहसिल गरि दाषिल गर्न्या ठाउमा दाषिल नगरि रहयाका वाकि वाल र. धन चोरको विगो विगा वरावर दंडका रूपैया नपुग्यासंम मैन्हाका ५ रूपैयाका दरले कैद गर्नु.

४. विगो भराइ जिताउरि गऱ्याको र दसौद लिनु पर्न्यामा झगरा गर्न आउन्या मऱ्यो भन्या पनि उस्का जहानले विगो भोग गऱ्या पछि दसौद जिताउरि तिर्नुपर्छ. अैन वमोजिम जिताउरि दसौद जो लिनु पर्न्या हो मर्न्या झगरियाका छोरा स्वास्नि भाइहरूवाट वुझिलिनु.

५. अदालत ठाना अडा अमाल सर्वाक माफ भयाका गुठि विर्ता वितलव र वेष मरौट् छाप माना चावल् किपट रैकर गैह्रवाट दंड पान फुल विसौद गैह्र पटक गरि प्यादा लगायाका ज्मानि लि छोडयाका कचहरिवाट भागि गयाका असामिहरु कोहि मऱ्यो भन्या. मऱ्याका मानिस्को षत माफ हुंछ. जौना षतुकिलाइ दंड भयाको छ उ मऱ्या पछि उस्का अरू स्वास्नि छोरा भाइ परियारले दंड तिर्नु पर्दैन जहान परियारलाइ नसमाउनु. जहान वच्चा समाइ लियो भन्या लिन्यालाइ विगा वमोजिम दंड गरिलिनु.

६. अैनमा दंड जरिवाना भयाकाले दंड जरिवानाका रुपैया तिऱ्यो भन्या छोडि दिनु. दंड जरिवाना तिरेन भन्या मैन्हाका ५ रुपैयाका हिसावले कैद गरि रुपैयाको म्याद पुऱ्याइ छोडि दिनु. वर्ष मैन्हा कैद पर्न्यालाइ पनि मैन्हाका ५ रुपैयाका दरले तिर्छु भन्या रुपैया लि छोडिदिनु. रुपैया तिरेन भन्या. जति मैन्हा जति वर्षकैद लेषियाको छ उतिकैद गरी छोडि दिनु. रुपैया लि नछाडनु भन्याकालाइ डवल् दिया लि छाडिदिनु. डवल् दिया पनि नछाडनु भन्याका मानिस्को ज्यू मार्न्या ज्यानमार भनि वचन दिन्या. ज्यान मार्नाको मतलव गर्न्या चोरि गर्न्या एति वाहेक्. अरू कुरामा म्यादको चौवर दिया रुपैया लि छाडिदिनु.

७. साहु रिणिका झगरा वाहेक् चोरि वावत् जगा जमिन् नगद जिनिस् चौपाया गैह्रका झगरामा विगो पनि तिर्न सकेन दंडका रुपैया पनि तिर्न सकेन भन्या. झगरियाले विगो माया मारि दियो भन्या. दंडका रुपैयामा मात्रै मैन्हाका ५ रुपैयाका दरले कैद गरि छोडिदिनु. धनिले विगो माया मारेन उस्का घरवाट पनि केहि उठेन भन्या. विगो र दंडका दुवै रुपैया ज्मा गरि मैन्हाका ५ रुपैयाका दरले कैद गरि छोडिदिनु. कैद गरि छाडिदिया पछि धनिले विगाका रुपैयामा उजुर गर्न पाउदैनन्.

८. कर्णेलदेषि पिपातलक जागिरदारबाट अैन वमोजीम दंड जिताउरि वक्सौनि छैटी दसौद विसौद सर्वस्व गैह्र जोदिनु पर्न्या कुरो दियेन भन्या अदालतका हाकिमले दफदरका कारिन्दालाइ फलाना वेहोराले फलानाका षानगीवाट एति रुपैया लिनु पऱ्यो तेस्को षानगी थुनुवा गरि रुपैया पठाइदेउ भनि छाप लाग्याको पुर्जि पठाइदिनु तेसै पुर्जि वमोजिम दफदर दफदरका कारिन्दाले उस्को षानगी थुनि चाहिदा रुपैया वुझाइ रसिद लिनु. अदालतका हाकिमले फलानाका षानगिको एति रुपैया एस वेहोरामा चाहियो भनि छाप लाग्याको पुर्जि पठायामा ताकिति गरि षानगी थुनुवा नगर्न्या र रुपैया पठाइ नदिन्या दफदर दफदरका कारिन्दालाइ विगा वमोजिम जरिवाना स्मेत गरि झगरिया जागिर्दार्को विगो लिनु. अदालतवाट आयाका पूर्जि वमोजिम्का रुपैया जागीर्दार का षानगीले पुगेन भन्या भया जति रुपैया वुझाइदिनु. नपुग्याकामा दफदर दफदरका कारिंदालाइ जरिवाना हुदैन.

९. चार अदालत ठाना पूर्व पश्चिम अडा गौडा जगा जगाका अदालत अमालवाट अैन वमोजिम दंड जरिवाना भयाको तिर्न नसक्दा कैद पऱ्याका र म्यादि कैदि चोर दामल ज्यू जान्या

कैदभयाका भागि गया र षोज्दा फेला पऱ्यानन् भन्या. तिन्का कैदको वाकी रुपैयामा कैद गर्न्या अदालत ठानाका हाकिम डिठ्ठा विचारिलाइ र. अमालका द्वाऱ्यालाइ पक्राउहुदैन. कुमारिचोक्र अरु वहि वुझन्याहरुले मिन्हा दिनु. घुस रोसवत् षाइ. वा माया मोलाहिजा गरि भगाया उमकायाको ठहऱ्यो भन्या भगाउन्यावाट कैद पर्न्याले वुझाउनु पर्न्या रुपैया मध्ये उसदिन सम्मको म्याद कट्टि गरि वाकि ठहऱ्याका रुपैयामा कैदि पक्रियो भन्या कैदका रुपैया भगाउन्याले तिर्नु पर्दैन. कैदका वाकि रुपैया का विगा वमोजिम दंड मात्रै गर्नु. कैदि भाग्याको पक्रियेन भन्या कैदिका म्यादका वाकि रुपैया र घुस षायाको विगो स्मेत्. भगाउन्या जोहो उसवाट लि घुसका र म्यादका वाकि रुपैयाका विगा वमोजिम दंड गर्नु. रुपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु.

१०. अर्काको ज्यान मार्न्या दामल हुन्या तक्सिर गर्न्या जारि गर्न्या चोरि गर्न्या भात पानि नचलन्या षतवात गर्न्या र. सर्कारिया हउन् दुनित्राका हउन्. असामि भया वाधा कमारा कमारि भया एस्ता कोहि आफु वस्याका पुरानु राजमा छदा षतवात तक्सिर गरि आफ्नु राज छाडि विराना राजमा गै अघिदेषि वस्याका रहाछन्. पछि लडाञि भै हवस् मेल भै हवस्. त्यो मुलक आइ अर्को नञा सिवाना भै मुलुक् आफ्नु भया पछि तेस मुलुकमा आफ्नु सिवाना नहुदै अघिदेषि गै वस्याका एति लेषियाका षतवात तक्सिर गर्न्या मानिसलाइ राजषत लाग्दैन सजाय हुदैन जारि गर्न्यालाइ साधुले जार काटन र. अैन वमोजिम सजाय गर्न पनि हुदैन. मेरो असामि भनि साहुले पक्रन पनि पाउदैन सर्कारले पनि नपक्रनु. भागि गै वस्याका वाधा कमारा कमारि पनि अम्लेष हुंछन् धनिले पक्रन हुदैन. अैनले भात पानि नचलन्या षत गरि गै वस्याकाको भन्या भात पानि चल्दैन.

११. अर्काका अैनले जार हांन हुन्या र विहा षर्च भराउनु पर्न्यासंमका सधवा विधवा कंन्या स्वास्निलाइ तैले फलानु कुरा विरायाकि छस् भनि वादि फिऱ्यादि कोहि नभै उसै अत्तो लगाइ पक्ऱ्यो. तेस स्वास्निले चुक्या विरायाको केहि ठहरेन उसै अत्तो लगाइ पक्ऱ्याको ठहऱ्या भन्या पक्रन्या अडा गौडाका भारादार अदालत ठानाका हाकिम डिठ्ठा विचारि अमालका अमालि द्वाऱ्या रकमि गैह्रलाइ तागाधारि जातका स्वास्निलाइ पक्ऱ्याको भया १०० रुपैया नमासिन्या मतवालि जातका स्वास्निलाइ पक्ऱ्याको भया ८० रुपैया मासिन्या मतवालि जातका स्वास्निलाइ पक्ऱ्याको भया ६० रुपैया छिटो हालनु नपर्न्या जातका स्वास्निलाइ पक्ऱ्याको

भया ४० रुपैया छिटो हालनु पर्न्या जातका स्वास्निलाइ पक्र्याको भया ३० रुपैया दंड गर्नु रुपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु.

१२. चार्वर्ण छत्तिसै जात गैह्रका लोग्न्या मानिसलाइ तैले फलानु कुराविरायको छस्भनि पक्र्यो उसले गऱ्या विरायको केहि ठहरेन वादि फिऱ्यादि कोहि नभै उसै अत्तो लगाइ पक्र्याको ठहऱ्यो भन्या पक्रन्या अडा गौडाका भारादार अदालत ठानाका हाकिम डिठ्ठा विचारि अमालका अमालि द्वाऱ्या रकमिगैह्रलाइ २५ रुपैया दंड गर्नु. रुपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु.

१३. कसैले सुना चादि कसन्तमन् नगद जिनिस् जवाहेर जगा जमिन् चौपाया कमारा कमारि करणि जात भात घरवारि लिन दिन का निमित्त झगरा भै घ्यू तेल तिहुन् पानी मैन दुद मदिरा तताइ भयो भुँरो भुत्भुत्या षरानि कसैका आगमा षन्याइदियो र. उ मानिस् तेहि घाउ पाकि तेहि घाउका वेथाले मऱ्यो भन्या मुडिन्या जातलाइ अैन वमोजीम अंस सर्वस्व गरि दामल गर्नु. स्वास्नि मानिसलाइ सर्वस्व नगरि दामल गर्नु. काटिन्या जातलाइ ज्यानको वदला ज्यान काटि मारि दिनु. तातो कुरो षन्याइ दियाको मानिस् मरेन मैन्हा दिनभित्र निको भयो भन्या ५० दुइ मैन्हा लागीकन निको भयो भन्या १०० तिन् मैन्हा लागीकन निको भयो भन्या १५० चार मैन्हा लागीकन निको भयो भन्या २०० पाच मैन्हा लागीकन निको भयो भन्या २५० छ मैन्हा लागिकन निको भयो भन्या ६०० सात मैन्हा लागीकन निको भयो भन्या ७०० आठ मैन्हा लागिकन निको भयो भन्या ८०० नौ मैन्हा लागीकन निको भयो भन्या ९०० दस मैन्हा लागीकन निको भयो भन्या १००० एघार मैन्हा लागीकन निको भयो भन्या ११०० वाह्र मैन्हा लागीकन निको भयो भन्या १२०० रुपैया जरिवाना गर्नु. तातो वस्तु षन्यायाको घाउले अंगुला चलेन भन्या थलियाको जति मैन्हाको जरिवाना लेष्याको छ. उसमाथि ५०० रुपैया थपि जरिवाना गर्नु. गोडा षजाहा भयो भन्या थलियाको जति मैन्हाको जरिवाना लेष्याको छ उसमाथि १००० रुपैया थपि जरिवाना गर्नु. एक आषा वंद भयो भन्या थलियाको जति मैन्हाको जरिवाना लेष्याको छ उसमाथि १५०० रुपैया थपि जरिवाना गर्नु. दुइ आषा वंद भयो भन्या थलियाको जति मैन्हाको जरिवाना लेष्याको छ उसमाथि २००० रुपैया थपिजरिवाना गर्नु. कान वंद भयो भन्या आषाका अैन वमोजिम जरिवाना गर्नु. जरिवानाका रुपैया तिऱ्यो भन्या रुपैया लि छोडिदिनु. रुपैया तिर्न सकेन भन्या मैन्हाका ५ रुपैयाका हिसावले कैद गर्नु. स्वास्नी मानिसले यो तक्सिर गऱ्याको रहेछ भन्या लेष्याका जरिवानाको आधा जरिवाना गर्नु.

१४. कसैले सुना चादि कसन्तमन् नगद जिनिस् जवाहेर जगा जमिन् चौपाया कमारा कमारि जात भात घर वारि कुलो पानि वाटो करणि लिन दिन स्वास्निका निमित्त झगरा भै थुँनु पर्न्यालाइ अंन पानि आफुले पनि षान नदि थुनि त्यो मानिस मर्‍यो भन्या मुडिन्या जातलाइ अैन वमोजिम अंस सर्वस्व गरिदामल गर्नु. स्वास्नि मानिसले भया सर्वस्व नगरि दामल गर्नु. काटिन्या जातले अंन पानि वंद गरि थुनि मार्‍याको रहेछ भन्या ज्यानको वदला ज्यान काटि मारि दिनु अंन पानि वंध गरि १ दिन १ रात् मात्रै थुन्याको रहेछ भन्या ५ रुपैया २ दिनको १५ रुपैया दिन ३ को ३० रुपैया दिन ४ को ६० रुपैया दिन ५ को १२० रुपैया दिन ६ को २४० रुपैया दिन ७ को ४८० रुपैया दिन ८ को ९६० रुपैया दिन ९ को १९२० रुपैया दिन १० को ३००० रुपैया दिन ११ को ४००० रुपैया दिन १२ को ५००० रुपैया दिन १३ को ६००० रुपैया दिन १४ को ७००० रुपैया दिन १५ को ८००० रुपैया दिन १६ को ९००० रुपैया दिन १७ को १०००० रुपैया दिन १८ को ११००० रुपैया दिन १९ को १२००० रुपैया दिन २० को १३००० रुपैया दिन २१ को १४००० रुपैया जरिवाना गर्नु. स्वास्नि मानिसले अंन पानि वंद गरि थुनि ज्यू मर्‍याको रहेनछ भन्या एस्को आधि जरिवाना गर्नु. जरिवानाका रुपैया नतिर्‍या मैन्हाको ५ रुपैयाका दरले कैद गर्नु.

१५. कसैले सुना चादि कसन्तमन्. नगद जिनिस् जवाहेर जगा जमिन् चौपाया कमारा कमारि जात भात घर वारि कुलो पानि वाटो स्वास्नि लिन दिन करणि षत छितका निमित्त झगरा भै थुंनु पर्न्यालाइ थुन्याको रहेछ. आफ्नु हवस् वा उस्को हवस् अंन पानि षान दियाको रहेछ त्यो मानिस मर्‍यो भन्या थु ंन्या मानिसलाइ षतवात लाग्दैन. त्यो थुनिन्या मानिसलाइ थुँन्या मानिसले अंन पानि षान दियाको नषाइ आफै अनास्मा पसि मर्‍यो भन्या पनि थुँन्या मानिसलाइ षतवात लाग्दैन.

१६. कसैले सुना चादि कसन्तमन् नगद जिनिस् जवाहेर जगा जमिन् चौपाया कमारा कमारि करणि जात भात घर वारि कुलो पानि वाटो स्वास्नि षत छित लिन दिनका निमित्त झगरा भै अंन पानि वंद गरि थुनि राष्याको रहेछ. त्यो थुनियाको मानिस मर्‍यो भन्या. थुँन्या मानिस दामल हुन्या जात दामल हुंछ. काटिन्या जात काटिंछ. काटिन्या र दामल हुन्याका संतानले थुनि मर्न्याका संतानसंग आफ्ना कारोवार लिन दिनका रूपैया माल लिन पाउदैन. अंन पानि

वंद गरि थुनियाको रहेछ थुनिन्याको ज्यान मरेन भन्या थुन्यालाइ थुन्याका दिन देषिको दिन गंतिको जरिवाना तिऱ्या पछि. आफ्ना असामिसंग हिसाव वमोजिमको रूपैया लिन पाउछ.

१७. कसैले सुना चादि नगद जिनिस् कसन्तमन् जवाहेर जगा जमिन् चौपाया कमारा कमारि करणि जात भात घर वारि कुलो पानि वाटो स्वास्नि लिन दिन गैह्रका निमित्त झगरा भै थुँनु पर्न्या मानिसलाइ पक्रिल्याउदा वाटामा आफै भीरवाट लडी काहि फाल हालि खोलामा फाल हालि भागी जादा ठेसठक्कर लागी मऱ्यो अथवा हात षुट्टा जषम भयो अंन भंग भयो भन्या पक्रिल्याउन्या लाइ षतवात लाग्दैन थुनिराषता अंन पानि षानदि आफ्ना घरमाभयो अर्काका घरमा भयो कोठा चोटा वैगल छिडिमा थुनिराष्यामा थुनियाको मानिस झ्याल कौसी छानावाट फाल हालि मऱ्यो हात षुट्टा जषम भयो अंग भंग भयो आफ्ना हातले सेरियो हतियार धसि मऱ्यो घर भक्ति मिचियो आगो लागी मऱ्यो पासो लागी मऱ्यो जहर षाई मऱ्यो भन्या थुँन्या मानिस लाइ षतवात लाग्दैन त्यो मर्न्यासंग लिनु पर्न्या हिसाव वमोजिमका रूपैया मर्न्याका संतान अपुतालि षान्यासंग लिन पाइन्छ.

१८. अडा गौडा अदालत ठाना सदर दफदर दफदर कुमारि चोक अमाल रकमदार ठेकइजारादारका कचहरिमा आयाका थुनुवा झगरियाहरूलाइ १ दिन १ रात् अन्नषान दियाको रहेनछ भन्या षत लाग्दैन. १ दिन १ रात् अंन पानि पनि दुवैथोक वंद गरि षान नदि थुन्याको रहेछ भन्या थुनुवाका अैन वमोजिम कारिंदालाइ तक्सिर लाग्छ.

१९. झगरिया थुनुवाहरूका आफ्ना घरको षानाको सावगास पनि रहेछ. उस्का इष्टमित्र चाकर वाकरको त्यो झगरिया थुनुवासितको आवत जावत पनि रहेछ भन्या तेस्ताले षान पिन पाइन भनि करायो भन्या तेस्को नालिस सुनिदैन थुन्याका कुराको षत लाग्दैन.

२०. ज्यू जान्या र दामल हुन्या कुराकालाइ नेल ठोकि पुर्पक्ष हेरि श्रेस्ताले ठहऱ्याको निसाफ गर्नु. अरू कुराको झगरा जोरियाको छ. तेस्तैमा ज्यू जान्या दामल हुन्या मुद्दाको कुरा परि आयो भन्या. इन्को कुरो नसुनि अरूको झगरा नसुँन्नु.

२१. ज्यान जान्या र दामल हुन्या सर्वस्व हुन्या षतवात गर्‍या किर्त्या लाल मोहोर मुषत्यारका दस्षत. धर्माधिकार्को पतिया कचहरिको पुर्जि दफदरका तिर्जा रसिद फारषत् तमसुक किर्त्या गर्न्या नपायाको पगरि पाजा भनि पर्पजनि गर्न्या. औ अर्काका सधवा विधवा कंन्याको र. आफु भंन्दा ठुला जातका स्वास्निको करणि गर्न्या अैनले वंद भयाका हाड नातामा करणि गर्‍या पानि नचलन्यार छोया छिटो हालनु पर्न्या जातको करणि गर्न्या भात पानि षान्या. अर्काको सुना चादि नगद जिनिस् चौपाया जवाहेर ज्यू जमिन डाका मार्न्या लुट पिट गर्न्या ढाटन्या चोरि गर्न्या र. अैनले कैद गर्नु भनि लेषियाका कुरामा कसैले नालिस गर्‍यो भन्या झगरा नजोरिदै प्रतिवादिलाइ पक्रन पठाउदामा भया पनि. पक्रिआया पछि भया पनि नेल ठोकि कुरो हेर्नु एस्तालाइ नेल ठोक्याका कुरामा अदालत ठाना अमालवालालाइ वात लाग्दैन. अरू कुरामा वादिले नालिस गर्‍यामा पक्रि आएका प्रतिवादीलाइ नेल नहाल्नु नजर वंदि गरि कुरो हेरि अैन वमोजिम निसाफ गरि छिनि दिनु.

२२. फलानाले मानिस मार्‍यो भनि हवस् फलानाले मार्‍यो भंन्या संकाले हवस् अडा गौडा अदालत ठाना अमालमा कोहि फिराद गर्न आयो भन्या ज्यू संवंधिका कुराको नालिस आयामा अल्सि गरिवा कामको फुर्सत्भयेन भनि निसाफ नहेर्न्या षोज षवर नगर्न्या अडा गौडा अदालत ठानाका हाकिम डिट्ठा विचारि अमालि द्वार्‍या जो हुन् उसलाइ २०० रूपैया दंड गर्नु. रूपैया नतिर्‍या अैन वमोजिम कैद गर्नु.

२३. मानिस मार्‍याको वा फलानाले मानिस मार्‍यो हो भंन्या कुराको फिराद गर्न आयो फलानाले मार्‍यो भंन्या मानिस्. आफ्ना नाता गोताको रहेछ र. फिर्‍याद सुनि कुरा नहेर्न्या अडा गौडा अदालत ठानाका हाकिम डिट्ठा विचारि र. अमालका अमालि द्वार्‍यामा जो हुन् उस्लाइ ५०० रूपैया दंड गर्नु. रूपैया नतिर्‍या अैन वमोजिम कैद गर्नु.

२४. आफुसित फलानाले मानिस मार्‍यो भनि हवस्. वा फलानाले मानिस मार्‍यो हो भन्या संकाको कुरो लि फिरा दगर्न आयामा घुस षाइ कुरा नसुँन्या अडा गौडा अदालत ठानाका हाकिम डिट्ठा विचारि र. अमालका अमालि द्वार्‍या जो हुन्. उस्को अैन वमोजिमको अंस सर्वस्व गरि ४ वर्ष कैद गर्नु. स्यादको डवल् दिया लि छाडनु.

२५. ज्यान मार्‍याका कुरामा कसैले फिर्‍याद गरि पक्रि आयाका हउन् वा उसै पक्रिआयाका हउन्. कचहरिमा आइ मैले मार्‍याको हो भनि कायेल भयाका साइधुवालाइ घुस षाइ जमानि गरि छोडोस् वा उसै छोडोस्. छाडन्या अडा गौडा अदालत ठाना.का हाकिम डिट्टा विचारि र. अमालका अमालि द्वार्‍या जो हुन्. उन्को अैन वमोजिमको अंस सर्वस्व गरि ६ वर्ष कैद गर्नु. म्यादको चौवर दिया लि छाडनु.

२६. ज्यान मार्न्या कुराको वचन दियाका कुरामा र. मतलव गर्‍याका कुरामा कसैले फिर्‍याद गरि पक्रि आयाका हउन् वा उसै पक्रि आयाका हउन्. कचहरिमा आइ मैले मतलव गर्‍याको हो वचन दियाको हो भनि ज्यान मरायाका कुरामा कायेल भयाका मानिसलाइ घुस षाइ ज्मानि गरि छोडोस् वा उसै छोडोस् एस्तालाइ छाडन्या अडा गौडा अदालत ठानाका हाकिम डिट्टा विचारि र अमालका अमालि द्वार्‍या जो हुन्. उन्को अैन वमोजिमको अंस सर्वस्व गरि ६ वर्ष कैद गर्नु. म्यादका रूपैया चौवर दिया लि छाडनु.

२७. ज्यू जान्या र दामल हुन्या षतवाहेक अरू जौन जौन कुरामा रूपैया लिकन न छाडनु म्यादसंम कैद गर्नु भनि अैन लेषियाको छ तेस षतुकिले रूपैया तिर्छौं छोडिदेउ भन्या मैन्हाका १० रूपैयाका दरले रूपैया दिन्छ भन्या रूपैया लि छोडि दिनु. डवल दिया पनि नछाडनु भंन्या लेषियाकामा मानिस्को ज्यू मार्न्या ज्यान मारभनि वचन दिन्या ज्यान मार्नाको मतलव गर्न्या चोरि गर्न्या एति वाहेक अरू कुरामा म्यादको चौवर दिया लि छाडनु.

२८. षतवातले पर्‍याका कैदि जौना अडा अदालतवाट कैद भयाका छन् उसै अडा अदालत ठानावाट कायेलनामा भया पछि. कैदमा पर्न्यालाइ तैले फलानु कुरा गर्दा अैन वमोजिम एति वर्ष एति मैन्हा एति दिन कैद भैस् भनि कचहरिको छाप लाग्याको मिति वारको पुर्जि दिनु. झ्येल षानाको हेर विचार गर्न्या डिट्टा राइटर हुदा सिपाहि महान्याया जो छ. उससितका कैदिका हाजिरि कागजमा पनि मिति वार लेषाइ दिनु. कचहरिका हाकिम डिट्टा विचारिले कैद पर्न्यालाइ छाप लाग्याको पुर्जि दियेनछ. कैदिका हाजिरि ढडामा पनि लेषायेनछ र. कैदि भयाको मानिस म्याद भंदा वढता कैद पर्‍याको ठहर्‍यो भन्या म्याद नाघ्याका मैन्हा दिन देषि उभो जति दिन वढता कैद भयाको ठहर्छ. उति दिनको मैन्हाका १० रूपैयाका दरले कैद

गर्न्या हाकिम डिट्ठा विचारि अमालिमा जो हो उसलाइ जरिवाना गरि लि आधि अैनका म्याद भंदा वढता दिन कैद पर्न्या कैदिलाइ दिलाइ आधि कौसलवाट लिनु.

२९. नमासिन्या जात हो वा मासिन्या जात हो भनि पत्ता केहि नलाग्याका मतवालि गैह्र जातलाइ तक्सीर सजाय गर्दा मासिन्या जातको सरह नगर्नु.नमासिन्या मतवाली जातका अैन वमोजिम दंड सजाय कैद गर्नु.

३०. करणिका कुरामा र चोरि गैह्र अरू षतवात गर्‍या वावत् अैन वमोजिम अघि झेल षानामा कैद परि रहाका मानिस पछि ज्यमदलमा भर्ना भै छुट्ता हामिले अव उप्रांत पनि तक्सिर गर्‍यौं भन्या अघि वाकि रहाका कैदको दोवर कैद गर्नु. भनि मुचुल्का लेषि छुट्याका कैदिले फेरि कसैको चोरि करणि गैह्र कैद हुन्या षतवात गर्‍या भन्या उन्ले लेषि दियाका मुचुल्का वमोजिमको दोवर कैद थपि कैद गर्नु. अघि दामल भयाकाले षतवात गर्‍याको रहेछ भन्या दामलै गर्नु.

भित्ता फोर्न्या डाका मार्न्या लुट् गर्न्या आँषा छलि टिपन्या अवल् चोरलाइ गर्न्या अैन ----

३१. भित्ता फोर्न्या डाका मार्न्या लुट् गर्न्या आँषा छलि टिपन्या एस्ता चोरहरूमा जस्ले चोरछ जस्तो विराउछ.चोरका अरू अैन वमोजिम गर्नु. ज्यान मार्न्या र. दामल हुन्या वाहेक चोर्‍याको विगो र विगो वमोजिम दंड षडा गर्नालाइ चोर्‍याको धन षादा जति संग छन्. तिन्को र चोर्‍याको धन षाया पछि भिंन हुन्या तिनहरूको स्मेत अैन वमोजिमको अंस पर सर्दैन. नगद जिनिस् सुना चादि जवाहेर कसंतमन्. लत्ता कपडा घर षेत चौपाया दुइपाया कमारा कमारि वाधा वधेत्यानि जो छ सवै तायदात गरि विगो र दंडलाइ चाहिदो लिलाम् गरि भर्ना गर्नु. अैन वमोजिम दंड भर्ना भया पछि वढता संपति ठहर्‍यो भन्या. उसैलाइ फिर्ता गरि दिनु. तेति गर्दा पनि संपतिले पुगेन भन्या वाकि रहाका रूपैयामा ६ रूपैया मैन्हाका हिसावले कैद गर्नु. ३६ वर्ष उधोमा कैदको म्याद पुग्यो भन्या जुन् दिन म्याद पुग्यो. म्याद पुग्याका दिन छोडि दिनु ३६ वर्षसम्म कैद गर्दा वाकि रूपैयाका हिसावले कैद पुगेन भन्या पनि ३६ वर्ष पुग्या पछि कैद नगर्नु छोडि दिनु कैद पर्‍याका वषत्मा तेस्ता चोर कैदैमा मर्‍यो भन्या संग वस्याका भाइ छोरा

स्मेतको संपतिले विगो र दंड वावतमा लिलाम गरि अघि वाटै लियाको हुनाले ३६ वर्ष पुगि मरोस्ता पनि नपुगि मरोस्ता पनि मऱ्या पछि तेस्का भाइ छोरा संतानलाइ पक्रन पाइदैन. नपक्रनु.

तहविल मासन्या राषन दियाको मासन्या जिम्मावारि दियाको मासन्या धरवट् मासन्या द्वयम् चोरलाइ गर्न्या अैन -------

३२. तहविल मासन्या राषन दियाको मासन्या जिम्मावारि दियाको मासन्या धरवट् मासन्या षोज्याका वेलामा दिन नसकन्या एस्ले एति षायाको छ भनि पोलाहाले पोलन आयामा. मास्याको सावित ठहऱ्यो भन्या एस्ता चोरलाइ चोऱ्याको विगो र विगा वमोजिम दंड षडा गर्नालाइ चोऱ्याको धन षादा जति सगछन्. तिन्को र चोऱ्याको धन षाया पछि भिन्न हुन्या तिनहरूको स्मेत अैन वमोजिम्को अंस पर सर्दैन. नगद जिनिस् सुना चादि जवाहेर कसंतमन् लत्ता कपडा घरषेत चौपाया दुइपाया कमारा कमारि वाधा वधेत्यानि जो छ सवैतायदात गरि विगो र दंडलाइ चाहिदो लिलाम् गरि भर्ना गर्नु. अैन वमोजिम विगो र दंड भर्ना भया पछि वढता संपति ठहऱ्यो भन्या उसैलाइ फिर्ता गरि दिनु तेति गर्दा पनि विगो र दंड संपतिले पुगेन भन्या वाकि रहाका रूपैयामा ७ रूपैया मैन्हाका हिसावले कैद गर्नु. २४ वर्ष उधोमा कैदको म्याद पुग्यो भन्या म्याद पुग्याका दिन छोडि दिनु. २४ वर्षसम्म कैद गर्दा वाकि रूपैयाका हिसावले कैद पुगेन भन्या पनि कैद नगर्नु छोडिदिनु. कैद पऱ्याका वषत्मा त्यो मानिस कैदैमा मऱ्यो भन्या संग वस्याका भाइ छोरा स्मेतको संपतिले विगो र दंड वावतमा लिलाम् गरि अघि वाटै लियाको हुनाले कैदको म्याद पुगोस् नपुगोस् फेरि उस्का भाइ छोरा संतानलाइ पक्रन पाउदैन. नपक्रनु.

जगा जमिन षानि रकम कलमको आफुले सवाल पट्टारूक्का दस्षत् सनदलि कवुलियत् गऱ्यामा इजरा अमानत्को जगावाट भन्या तहसिल भयाको तेसमध्ये केहि श्री ५ सर्कारमा र आफ्ना मालिकलाइ जाहा वुझाउनु पर्न्या हो वाहा वुझाइ केहि आफुले षाइ किस्ता पुग्याको रूपैया मासन्यालाइ गर्न्या अैन - - - - - - - - - -

३३. जगा जमिन् षानि रकम्को सवाल पट्टा सनद लि कवुल गरि इजारा अमानत्को काज काम गऱ्यामा जगावाट भन्या असुल तहसिल भयाको तेसमध्ये केहि श्री ५ सर्कारमा र आफ्ना मालिकसंग जाहा दाषिल गर्नु पर्ऱ्या हो वाहा दाषिल गऱ्या केहि आफुले मासि किस्ता पुग्याको रूपैया तिर्न सकेन भन्या एस्ताले मास्याको विगो र विगा वमोजिम दंड षडा गर्नालाइ मास्याको धन षादा जतिसंगछन् तिन्को र मास्याको धन षाया पछि भिन्न हुन्या तिनहरूको स्मेत् अैन वमोजिमको अंसपर सर्दैन. नगद जिनिस् सुना चादि जवाहेर कसंतमन् लत्ता कपडा घर षेत चौपाया दुइपाया कमारा कमारि वाधा वधेत्यानि जो छ सवै तायदात गरि विगो र दंडलाइ चाहिदो लिलाम् गरि भर्ना गर्नु. अैन वमोजिम विगो र दंड भर्ना भया पछि वढता संपति ठहऱ्यो भन्या उसैलाइ फिर्ता गरि दिनु तेती गर्दा पनि विगो र दंड संपतिले पुगेन भन्या वाकि रहाका रूपैयामा ८ रूपैया मैन्हाका हिसावले कैद गर्नु. १८ वर्ष उधोमा कैदको म्याद पुग्यो भन्या म्याद पुग्याका दिन छोडि दिनु १८ वर्षसम्म कैद गर्दा वाकि रूपैयाका हिसावले कैद पुगेन भन्या पनि कैद नगर्नु छोडि दिनु कैद पऱ्या वषत्मा त्यो मानिस कैदैमा मऱ्यो भन्यासंग वस्याका भाइ छोरा स्मेतको संपतिले विगो र दंड वावत्मा लिलाम् गरि अघिवाट लियाको हुनाले कैदको म्याद पुगोस् नपुगोस् फेरि उस्का भाइ छोरा संतानलाइ पक्रन पाउदैन नपक्रनु.

> जगा जमिन षानि रकम् कलम्का इजारादार सवाल पट्टा लि कामकाज गर्दा जोउठयाको दाम श्री ५ सर्कारमा र आफ्ना मालिकसंग जाहा दाषिल गर्नु पर्ऱ्या हो वाहा दाषिल गऱ्याको छ मरि भागि जर्ता असिना गैह्र दैवागत् परि षानिहराइ असुल नभै ज्मै षडाभयेन सवाल पट्टा कवुलियेत् वमोजिम पुऱ्याउन सकेन कचा जाचदा पनिषायाको ठहरेन नोक्सानै पऱ्याको ठहर्ऱ्या भै नपुऱ्याउन्यालाइ गर्ऱ्या अैन.

३४. जगा जमिन् षानि रकम् कलम्को इजाराको सवाल पट्टालि कागजकाम गर्दा जो उठयाको दाम श्री ५ सर्कारमा र आफ्ना मालिकसंग जाहा दाषिल गर्नु पर्ऱ्या हो वाहा दाषिल गऱ्याको छ मरि भागि जर्ता परि असिना गैह्र दैवागत् परि षानि हराइ असुल नभै ज्मै षडा भयेन सवाल पट्टा कबुलियेत् वमोजिम. पुऱ्याउन सकेन भन्या एति रूपैया कवुल गऱ्याको हो मुलुकवाट उठ्याको एति रूपैया दाषिल गऱ्या अव येति रूपैया मुलुक्मा ज्मै षडा भयेन

येस्मा कच्चा जाचदा यकदाम विचमा मैले षायाको ठहर्‍यो भन्या. अैन वमोजिम सजाय गर्नु भनि मुचुल्का लेषाइ लिनु. नपुन्या कुरा कबुल गर्‍या बापत र. किफायेत् भया नफा षान्या हुनाले इन्का संग वस्याका भाइ छोराको अैन वमोजिमको अंस परसर्दैन नगद जिनिस् सुना चादि जवाहेर कसंतमन् लत्ता कपडा घर षेत चौपाया दुईपाया कमारा कमारि वाधा वधेत्यानि जो छ सवै तादात गरि. कवुल वमोजिम नपुग्याको रूपैया भर्ना गरि लि वढता ठहर्‍याको उसैलाइ फिर्ता गरि दिनु.संपतिका धनले वाकि रूपैया पुगेन भन्या पनि फेरि उस्लाइ.र उस्का संतान अंसियारलाइ धर पकड कैद नगर्नु फारषति गरि.दिनु ताहा पछि कचा जाच गर्दा अधिदेषायाको हिसाव भंदा केहि आफुले षाया मास्याको ठहर्‍यो भन्या जोषाया मास्याको छ उस्को दोचंदा लगाइ सो रूपैयामा ८ रूपैया मैन्हाका हिसावले कैद गर्नु १८ वर्ष उधोमा कैदको म्याद पुग्यो भन्या म्याद पुग्याका दिन छोडि दिनु १८ वर्षसम्म कैद गर्दा वाहि रूपैयाका हिसावले कैदको म्याद पुगेन भन्या पनि कैद नगर्नु. छोडि दिनु. कैदपर्‍याका वषतमा त्यो मानिस कैदैमा मर्‍यो भन्यासंग वस्याका भाइ छोराको स्मेत संपतिले वाकि रूपैया वावत्मा लिलाम् गरि अघिवाटै भर्ना भयाको हुनाले कैदको म्याद पुगोस् नपुगोस् फेरि उस्का भाइ छोरा संतान अंसियारलाइ पक्रन पाइदैन नपक्रनु.

दंड जिताउरि तिर्न नसिक कैद भयाका ----

३७. अंगभंग नभै कुट्पिट् र गालि गोफताको झगरा नगद जिनिस् सुना चादि जवाहेर कसंतमन् लत्ता कपडा घरषेत चौपाया दुइपाया कमारा कमारि वाधा वधेत्यानि वावत्को झगरा जारि जात संवंधिभात पानि संवंधि (भात पानि संवंधि) करणि सनवंधिको झगरामा दंड जिताउरि वक्साउनि दसौद विसौद तिर्न्या र विगो तिर्न्याले तिर्न नसकि कैद गर्नु पर्‍यालाइ ९ रूपैया मैन्हाका हिसावले कैद गर्नु १२ वर्ष देषि उधोमा कैदको म्याद पुग्यो भन्या जुन् दिन कैदको म्याद पुग्यो उसैदिन तुरंत छोडि दिनु.१२वर्षसम्म कैद गर्दा वाकि रूपैयाका हिसावले कैद पुगेन भन्या पनि कैद नगर्नु छोडीदिनु. यस्लाइ र यस्का संतान भाइ छोरा अंसीयार कसैलाइ नपक्रनु फारषति गरिदिनु.

# साटो कैद वस्छु भंन्याको

१. स्वास्नि मानिसले दामलहुन्या वाहेक अरू तक्सिर गऱ्यामा उस्का घर तर्फका भयो मावलि माइति तर्फका भयो नातादार कोहि लोग्न्यामानिस आइ इन्को साटो ईनले वस्नु पर्ऱ्या कैदमा हामि वसिदिंछौ इनलाइ छाडिदेउ भंन आया लोगन्यामानिस्को कागज लेषाइ लि अैन वमोजिम उन्ले बस्नु पर्ऱ्या कैदमा कवुल गर्न आउन्या लोग्न्यामानिसलाइ हालि स्वास्नीलाइ छोडि दिनु.

२. कसैका सधवा विधवा कंन्याहरूले ज्यान माऱ्याको षत करणि भात पानि संवंधका कुरा गऱ्या वाहेक अरू झै झगरा वावत् दंड हुन्या कुरामा लोग्न्या छोरा ससुरा वावु दाज्यू भाइ देवर ज्येठाज्यूहरूले एसलाइ हामि कचहरिमा ल्याउदौन जो गऱ्याको तक्सिर हामि वुझाउछौ भन्या. स्वास्निमानिसलाइ कचहरिमा नल्याउनु. हामि वुझाउछौ भंन आउन्या मानिसलाई अैन वमोजिम गर्नु. भंन आउन्या मानिसहरू वारिस कोहि आयानन्. उन्को लोग्न्या पनि पर्देस अंत गयाको रहेछ भन्या. एस्ता स्वास्निलाइ दंड गर्नु पर्दा ढुंगो नछुवाइ अैन वमोजिम ठाडि पटक गर्नु. ढुँगाको रूपैया नलिनु. रूपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु.

३. स्वास्नि मानिसहरुले दामल हुन्या कुरा गऱ्या वाहेक.अरू षद वात गऱ्यामा उस्कालोग्न्या छोरा देवर ज्येठाज्यू वावु दाज्यू भाइ मावलिहरु कसैले एस्को ज्मानि हामि हुंछौ एसलाइ पऱ्याको कुरो हामि वुझाउछौ भन्न आया भन्या. ज्मानि पस्न आउन्या लोग्न्या मानिसको कागज लेषाइ लि अैन वमोजिम तेसैलाइ गर्नु. स्वास्नि मानिसलाइ छोडिदिनु.ज्मानि पस्न्या लोग्न्या मानिस् कोहि आयानन्.भन्या. भया स्वास्नि प्यादा नभया लोग्न्या मानिस् प्यादा २ जना पठाइ डाकि ल्याउनु.नआइ अडि भन्या वैद्यले नारि हेर्न्या ठाउमा समाइ कचहरिमा ल्याइ कुरो हेरि निसाफ गर्नु. स्वास्नि मानिसलाइ पक्रन प्यादा पठाउदा लोग्न्या प्यादा एकलै नपठाउनु.

## दफे दंड कैद

जगा जमिन षानि रकम् कलम्को सवाल पट्टा सनद लि कवुल गरि इजारा अमानत्को काज काम गर्न्या इजारादार रकमिले वुझायाको लि आफूले षाइ किस्ता पुग्याको रुपैया मासन्या मालिकलाइ गर्न्या अैन ----- ----- ----- ----- ----- -----

३५. जगा जमिन षानि रकम् कलम्को सवाल पट्टा सनद लि कवुल गरि इजारा अमानत्को काम काज गर्न्या इजारादार. रकमिले वुझायाको रुपैया आफूले वुझि लि वुझाउनु पर्न्या ठाउ नवुझाइ षर्च गरि किस्ता पुग्याका रुपैया तिर्न सकेन भन्या एस्ताले मास्याको विगो र विगा वमोजिम दंड षडा गर्नालाइ मास्याको धन षादा जति सगछन तिन्को र मास्याको धनषायापछि भिन्न हुन्या तिनहरुको स्मेत् अैन वमोजिम्को अंस पर सर्दैन. नगद जिनिस् सुना चादि जवाहेर कसंतमन् लत्ता कपडा घर षेत चौपाया दुइपाया कमारा कमारि वाधा वधेत्यानि जोछ सवै तायदात गरि विगो र दंडलाइ चाहिदो लिलाम् गरि भर्ना गर्नु. अैन वमोजिम् विगो र दंड भर्ना भया पछि वढता ठहर्‍यो भन्या उसैलाइ फिर्ता गरिदिनु. तेति गर्दा पनि विगो र दंड संपतिले पुगेन भन्या वाकि रहाका रूपैयामा ८ रूपैया मैन्हाका हिसावले कैद गर्नु. २४ वर्ष उधोमा कैदको म्याद पुग्यो भन्या म्याद पुग्याका दिन छाडिदिनु २४ वर्षसम्म कैद गर्दा वाकि रूपैयाका हिसावले कैद पुगेन भन्या पनि कैद नगर्नु. छोडिदिनु. कैद पर्‍याका वषत्मा त्यो मानिस कैदैमा मर्‍यो भन्या संग वस्याका भाइ छोरा स्मेतको संपतिले विगो र दंड वावत्मा लिलाम् गरि अघिवाटै लियाको हुनाले कैदको म्याद पुगोस् नपुगोस् फेरि उस्का भाइ छोरा संतानलाइ पक्रन पाइदैन.

तहविल मासन्या राषन दियाको मासन्या जिम्मावारि दियाको मासन्या धरवट मासन्या जगा जमिन् षानि रकम् कलम्को सवाल पट्टा कवुलियेत् वमोजिम् किस्तामा नपुर्‍याइ मास्याको विगो र विगा वमोजिम्को दंड षडा गर्नालाइ सर्कारवाट पक्राउन हुदैन भागन्यालाइ गर्न्या अैन ----- ----- ----- ----- -----

३६. तहविल मासन्या राषन दियाको मासन्या जिम्मावारि दियाको मासन्या धरवट् मासन्या जगा जमिन षानि रकम् कलम्को सवाल पट्टा कवुलियेत् वमोजिम् किस्तामा नपुऱ्याइ मास्याको विगो र. विगा वमोजिम् दंड षडा गर्नालाइ सर्कारवाट पक्राउन हुदैन. भाग्याको रहेछ भन्या. मास्याको धन षादा जति संग छन्.तिन्को र मास्याको धन षाया पछि भिन्न हुन्याको स्मेत् अैन वमोजिम्को अंस पर सर्दैन. नगद जिनिस् सुना चादि जवाहेर कसंतमन् लत्ता कपडा घर षेत् चौपाया दुइपाया. कमारा कमारि वाधा वधेत्यानि जोछ सवै तायदात गरि विगो र दंडलाइ चाहिदो लिलाम् गरि भर्ना गर्नु अैन वमोजिम् विगो र दंड भर्ना भया पछि वढता संपति ठहऱ्यो भन्या उसैलाइ फीर्ता गरिदिनु तेति गर्दा पनि विगो र दंड संपतिले पुगेन भन्या वाकि रहाका रुपैयामा भाग्याका भाइ छोराहरुले रस्त किस्त पाया नोकरि चाकरि षेति कमाइ गरि तिरुंला भंछन् भन्या. दामासहिका दरले रकम् लिदा सग वस्याका जति जना छन् उति जनाका नाउमा भाषा तमसुक् गरि रस्त किस्त गरिलिनु. धन तिर्न सक्तौन भन्या वाकिमा रकम् लिदा सग वस्याका जति जना छन्. उति जनालाइ गरि ज्मा १२ वर्ष कैद गर्नु १२ वर्ष उधोमा कैद पुग्यो भन्या स्याद पुग्या पछि छाडिदिनु १२ वर्ष कैद गर्दा वाकि रुपैयाका हिसावले कैद पुगेन भन्या पनि कैद नगर्नु छाडिदिनु विगो र दंड वावत्मा सग वस्याका भाइ छोराहरूको स्मेत् लिलाम् भयाको हुनाले पछिवाट इन्लाइ र इन्का संतानलाइ पक्रन पाइदैन. नपक्रनु.

# सिधा दिन्या सडक षोदाउन्या

१. अदालत ठानाका मालिकले कैदमा पऱ्याका कैदिलाइ अैन वमोजीम सडक षोदायेनन्. पन्पक्ष गऱ्या भन्या २० रुपैया जरिवाना गरिलिनु. म्याद पुग्याकालाइ छोडिदियानन् भन्या पनि. म्याद पुग्याकालाइ नछाडि जति कैदमा जति रहाका छन्. उसै वमोजिम हिसाव जरि जरिवाना गर्नु.

२. अर्काको ज्यान मार्न्या र राजकाजमा पऱ्याका ज्यान माऱ्यो भंन्या कुराको वात लागी पक्रियाका औ ज्यान माऱ्या वावत्. दामल भयाका लोग्न्या मासनिलाइ सडक्मा र अरु काजमा न पठाउनु नेल हालि झेलषानाभित्रै कैद गरि राषनु. रोजको ४ पैसा षान दिनु. ज्यान माऱ्या वावत्. दामल भयाका स्वास्नि मानिसलाइ नेल हालि वारुदषाना पठाइ वारुद पिधाउनु. रोजको ६ पैसा षान दिनु. झेलषानामा रहाका स्वास्निलाइ रोजको चार पैसा षान दिनु. अरु गैह्र कुरामा दामल भयाका र. करणि वावत् चोरि वावत्. दंडमा विगामा कायेलनामामा सहि नहाल्दामा अैन वमोजिम कैद भयाका म्यादि कैदिहरुलाइ रोजको ६ पैसा षान दि सडक् र अरु काजमा लाउनु. आफ्नु षर्च षाइ झेलषानामै रहंछौ भंन्या लोग्न्या मानिसलाइ झेल षानामै राषनु. सडह् र अरु काजमा नपठाउनु. हुकुमा मर्जिले वढाइदिनु भंन्या भयाकालाइ सिधा वढाइदिनु. घटाइदिनु भंन्या भयाकालाइ घटाइदिनु. एकचोट कैदमा परि भागि गयाको पक्रि आयाकालाइ झेल षानावाट निकालनु पर्दा हुकुम मर्जिले पहरा चौकिको संभार पुग्न्या गरि मात्रै निकालनु हुंछ. उसै निकालन हुदैन.

३. झेल षाना वाहेक कचहरिमा षत वातले थुनियाका आफ्ना घरवाट षर्च ल्याइ षान नसक्न्या षतुकि पातकि चोर झगरिया गैह्र गरिव कंगाल्लाइ रोजको ४ पैसा सिधा कौसि तोसाषानावाट झिकि अदालतवालाले दिलाइदिनु.

४. अडा अदालत झेलषाना र जगा जगामा थुनियाका कैदि थुनूवा मध्ये मानिस्को ज्यान मार्न्या र. एम पटक् झेल षानावाट भागि गै पक्रियाका वाहेक. अरु सडक्मा काम गर्न जान्या म्यादि कैदि पातकी छितकि दामल गैह्र थुनुवाहरुमा तजविजले पट्टिवाधि ती कैदि मध्ये पट्टि पट्टिमा ४।४ नाइक्या गराइ पट्टिका ४ मध्ये २ जनालाइ रोजको नौ पैसा २ जनालाइ आठ पैसाका दरले सिधा दिनु तिन्हेरुले आफ्ना आफ्ना पट्टिका कैदिलाइ हेर विचार गरि भाग्न

उम्कन नदिनु. भाग्न लाग्याको थाहा पाया चौकिमा जाहेर गर्नु. घूस पेस षाइ उम्कायाको ठहऱ्या भागी जान्या कैदिको म्याद स्मेत् थप गरि भगाउन्यालाइ कैद गर्नु. गाफिलिले उमकायाको भया १०।१० वेत ठोकनु. कैदिलाइ काममा लैजान्या चप्रासि र पालामा रहन्या सिपाहि महान्याहरुले पनि गाफिल भै उमकाया १०।१० वेत ठोकनु घुस पेस षाइ उमकायाको ठहऱ्यो र कायेल भयो भन्या. भागि जान्याका म्याद वमोजिम कैद गरि छाडिदिनु.

५. दंड तिर्न नसकन्या कैदि वालि तिर्न नसक्न्या कैदि विगो दिन नसकन्या कैदिले आफ्ना षर्च षांछौ सडक षोददौन भन्या भ्केलषानाभित्र नेल ठोकि थुनि मात्र राषनु सडक नषोदाउनु. तिन्हेरुका घरवाट ल्यायाको षान्या पिन्या सराजाम दिदा पहरावालका सग गै दिनु. एकांतमा कुरा कहानि पनि गर्न नदिनु. पहरावालका सामान्य साफ षुलासा कुरा गर्न अह्राउनदिनु.

६. वडो हवस् छोटो हवस्. कैद गर्नु भनि अैन वमोजिम कैदमा पऱ्याकालाइ नेल ठोकि सडक षोदाउनु. साज सवेर आफ्ना घरको षर्च षान्यालाइ नेल मात्रै हालनु सडक नषोदाउनु. सर्कार्को षर्च षान्यालाइ सडक षोदाउनु.

७. भ्केलषानामा पऱ्याका स्वास्निमानिस र. वालष वौलाहा औ हुकुम मर्जि आज्ञाले सडकमा नपठाउनु. भ्केलषानामै कैद गरि राषनु भंन्या भयाका कैदिहरुलाइ सडक नषोदाउनु. भ्केलषानामा वसि रोजिन्दाको सिधा  षान दिनु. हुकुम मर्जि आज्ञाले वढाइदिनु भंन्या भयाकालाइ सिधा वढाइदिनु. घटाइदिनु भंन्या भयाकालाइ सिधा घटाइदिनु.

८. दामल हुन्या र ज्यू काटिन्या चोर ढाट राजकाजको सलतनत् विगार्न्या मतलवमा लाग्न्या कैदिलाइ हातमा र. गोडामा नेल ठोकि राषनु. षानालाइ सर्कारवाट दिनु. सडक षोदाउनु. उन्का घरवाट षानपिन ल्याइ दियाको पहरा चौकि वस्न्या मार्फतवाट दिलाइदिनु. ति पहरा चौकि वस्न्याले देषि देषि अरु मानिससँग एकांत एकलासमा कुरा कहानि गर्नदिया भन्या तेस पहरा वालको ताना वाना च्यातनु.

९. स्वास्नि मानिसले कैदका रुपैयादिन सक्यानन्भन्या तेस्ता स्वास्निलाइ स्वास्निमानिस् रहन्या कैद षानामा कैद गर्नु. म्याद पुग्या पछि छोडिदिनु. लोग्न्यामानीस र. स्वास्निमानिसलाइ एकै ठाउमा कैद नगर्नु. वेगला वेगलै कैद गरि राषनु.

१०. झेलषानामा रह्याका कैदि स्वास्निमानिस जोछन् तिनलाइ कुटन्या पिधन्या स्यून्या जौन काममा परिआउछ गर्न लाउनु. वाहिर गल्लिमा नडुलाउनु. षंन्या षोश्रन्या कामन लाउनु.

११. नेल ठोकि कैद भयाका गर्भिणि स्वास्नि मध्ये दामल भयाका र ज्यान सनवंधि का कुरामा कैद पऱ्याका वाहेक अरु वेहोराले कैद भयाका नेल ठोकियाका गर्भिणि स्वास्नि मानिसलाइ ६ मैन्हाको गर्भ भया पछि नेल कटाइ छोडिदिनु इनलाइ षत माफ हुंछ. झेलषानामै करणि गराइ पेट वोक्याका स्वास्निहरुलाइ सुत्क्यारि हुन्या वेलाका २ मैन्हा नेल षोलि नजरवंद गरि राषनु. सुत्क्यारि षर्च रोजको ४ पैसा सिधा तोसाषानावाट थप गराइदिनु. २ मैन्हा पुग्या पछि फेरि नेल ठोकि राषनु. थप सिधाका ४ पैसा पनि घटाइदिनु. जंम्याको वालष ६ मैन्हाको भया पछि तोसाषानाबाट अैन वमोजिम वालषलाइ पनि सिधा दिलाइदिनु.

# इलाज गर्न्याको

१. श्री ५ सर्कार लगायेत् दुनिञादार गैह्रले आफ्ना कसैलाइ वेराम भयो र इलाज गराउनु पर्दा. औषधि गर्न जांन्या पञ्ञाको हवस् वा नपञ्ञाको हवस्. मित्र जस्तालाइ ठहराइ औषधि गर्न लाउनु. इलाज गर्दैमा काल गतिले मर्न गयो र. मेरा फलानालाइ अम्का वैद्यले अनाहक्मा मारिदियो भनि कसैले कराउन आया भाइ छोरा स्वास्नीको अंस र छोरिको विहा षर्च पर सारि तेस्ता पोलाहाको अंस सर्वस्व गरि छाडिदिनु.

२. नसोधियाको काचो विष अजैपाल हर्ताल सोमल संष्या कृया पुगि नसोधियाको अरु वुटिहरु केहि नमिलाइ निराल वैद्यले कसैलाइ षुवाउदा मऱ्याको रहेछ भन्या फेरि तेहि औषधि मर्न्यालाइ षुवायै वमोजिमको मात्रा गरि उसै वैद्यलाइ षाुवाउन लाउनु र उपनि मऱ्यो भन्या तेस वैद्यले दगा गऱ्याको ठहर्छ. ज्यानको वदला ज्यान गयो. तेसलाइ केहि भयेन भन्या काल गतिले मऱ्याको ठहर्छ. षुवाउन्यालाइ वात लाग्दैन. व्राम्हण वैद्यले षुवाउदा मरेछभन्या उहि इलाज उत्रै मात्रा गरि कुकुर वाषालाइ षुवाउनु र. उमऱ्या भन्या दगा गऱ्याको ठहर्छ व्राम्हण वैद्यलाइ दामल गर्नु.

३. कृया पुगि सोधियाको विष अजैपाल हर्ताल सोमल संष्या पऱ्याको औषधी षुवाउदा मर्न गयो र. वैद्यले मारिदियो भनि कराउन आयामा. काल गतिले मऱ्याको ठहर्छ वैद्यलाइ वात लाग्दैन. पोलन आउन्यालाइ २० रुपैया दंड गर्नु.

४. भीरमा लडि षोलामा वगि रूष ढुंगो मुढाले मीचि वा लोटि ठक्कर लागी गोलि हतियारको चोट लागी हात गोडा अंगुला जषम भयाका षटिराहरु भयाका पत्थरि रोग भयाकालाइ फलानु दर्दछ एस्मा काटनु चिर्नु फोर्नु आरो हालनु जो पर्छ गरि आराम गराइदेउ भनि मदोरु वालष रहेछ र. उस्का वावु आमा दाजु काकाहरुले भन्यो भन्या र भदौरु जानकार रहेछ र. उहि मदौरुले पनि भनेछ उस्का स्वास्नि वावु आमा दाज्यू भाइ छोरा काकाहरुले पनि सल्लाह दिया भन्या उन्को ज्मान लि दर्द आराम गर्नाको लागि जषम भयाका हात गोडा अंगुला काट्तामा. पत्थरि भयामा चिर्दा षटिराहरु भयामा फोर्दा आरो हाल्दा वेरामि मर्न गयो भन्या पनि भवितव्य ठहर्छ लाउन्याहरुलाइ र इलाज गर्न्यालाइ षत वात लाग्दैन.

# सिठि जुभको

१. अव उप्रांत तिन सहर नेपाल षाल्डामा सिठि जुभ कसैले नषेलनु. अैन भया पछि कसैले सिठि जुभ षेल्यो भन्या षेलन्यालाइ जनहि २॥ रुपैया दंड गर्नु रुपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु.

२. पूर्व पश्चिम उत्तर दक्षिण चारोतर्फ देउमाडो र घटवारमा धनु काढ तरवार षुकुरिले र. ढुँगो भटारो घुग्यात्रोले हानाहान गरि जुभ षेलथ्या. अव उप्रांत उर्दि भया पछि कसैले षेल्यो भन्या षेलन्यालाइ २॥ रुपैया दंड गर्नु. रुपैया नतिऱ्या दिन १५ कैद गर्नु.

# कुट पिट ज्यू जषंम्

१. कोहि वडा आदमि धनी मर्महाजन् इज्जद्दार मानिसले इज्जद्दार वडा आदमि मर्मछाजन् धनिहरु कसैलाइ आफ्ना जियले हवस् अरुलाइ लगाइ हवस् लाठा ढुँगा लाति जुति गैह्रले हान्या कुटचाका मा आठ आनादेषि २० रुपैयासंमको भारि दंड हुन्या तक्सिरमा दंड गरि लिनाको र दंड नलि कैदमा हालनाको मुषत्यार र. अदालतका हाकिमका तजवीजले गर्नु. जश्ले अह्रायाको छ उसैलाइ दंड हुंछ अर्काले अह्राइकन कुटन्यालाइ ज्यान मार्‍या वाहेक. अरू कुरामा अह्राउन्यालाइ भयाका दंड कैदको आधि कैद गर्नु.

२. अर्काको नाक काटन्यालाइ ६ वर्ष. एक आषा फोर्न्यालाइ ६ वर्ष कैद गर्नु म्यादको डवल्का हिसावले दिया लि छाडि दिनु. २ आषा फोर्न्यालाइ अैन वमोजीमको अंससर्वस्व गरि तेसै आषा फुटचाकालाइ दिलाइ आषा फोर्न्यालाइ दामल गर्नु.

३. स्वास्नि स्वास्निका झगरामा भयो लोग्न्या लोग्न्याका झगरामा भयो. अथवा. लोग्न्या स्वस्निका झगरामा भयो नाक कानकोलोति चुडालिदियो अंगुल्ला टोकी छिनाई दियो र. षुन हुन्यालाई षुन गर्न्याले केहि दि चित्त वुझायो र मेरो चीत्त वुझ्यो भनि मनोमानसित छाडिदियो भन्या राजिनामा लेषाइ ली छाडिदिनु षुन हुन्याले मानेन छाडेन निसाफ गरिदेउ भन्यो भन्या. नाक को टुप्पो दातले टोकि चुडालन्यालाइ ३ वर्ष कान टोकि चुडालन्यालाइ २ वर्ष अंगुला टोकि चुडालन्यालाइ १ वर्ष कैद गर्नु. म्यादका रुपैया डवल् दिया लि छाडिदिनु अरु अंगमा दातले टोकि रगत काढन्यालाइ १० रुपैया दंड गर्नु.

४. कसैले कसैलाइ कुट्ता दात झरंजी कुटचो भनि फिराद गर्न आयो भन्या जति दात फुकल्याको छ दात पिछे ६०।६० रुपैयाका दरले दंड गर्नु. रुपैया नतिर्‍या मैन्हाका ५ रुपैयाका दरले कैद गर्नु.

५. करणि जात भातका कुरा बाहेक अरु कुराका झगरामा ठुला जातलाइ सानु जात होस् भनि गालि गर्न्यालाइ पनि ५।५ रुपैया दंड गर्नु.

६. कसैले गालि गरागरमा भयो अरु कुराका इविमा भयो अजापुत्र आफु सुषि मानिसलाइ तिन्हेरु कमारा कमारि हौ भन्यालाइ र अरु जातलाइ पाऱ्या घर्ति होस् भंन्यालाइ ५।५ रुपैया दंड गर्नु. रुपैया नतिऱ्या १।१ मैन्हा कैद गर्नु.

७. कसैले झगरामा कसैलाइ हात गोडाका अंगुला मर्काइ दियो र. हेर्दामा मर्क्या सुनियाको रहेछ भन्या १ अंगुला मर्काउन्यालाइ २० रुपैया दंड गर्नु. जति अंगुला मर्काइ दियाको छ उति हिसावसंग २०।२० रुपैयाका दरले दंड गर्नु. हात गोडा मर्काइदियो हेर्दामा मर्क्या र सुनियाको ठहऱ्यो भन्या मर्काइदिन्यालाइ ६० रुपैया दंड गर्नु. रुपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु.

८. हात गोडाका अंगुला छिनि २ टुक्रा गरिदिन्यालाइ ३ वर्ष कैद गर्नु एसै रितले जति अंगुला छिनिदियो. उति अंगुलाका ३।३ वर्षका हिसावले कैद गर्नु. म्यादका रुपैया डवल्का हिसावले दिया लि छाडिदिनु.

९. अरु अंगमा नसा काटिकन हात षुट्टा कंवर चलेन मंटो थर्थराउन लाग्यो षायाको वाहिर निस्कन लाग्यो भन्या र. हाड स्मेत् काटिंकन मऱ्यो भन्या ज्यानकोवदला ज्यान जांछ. वाच्यो भन्या अैन वमोजिमको अंस पर सारि तेस्को सर्वस्व गरि अदालतवाट दसौद लि उपर तेसै घाइत्यालाइ दिलाइ कुटन्यालाइ १० वर्ष कैद गर्नु. म्यादका रुपैया डवल्का हिसावले दिया लि छाडिदिनु.

१०. कसैले कसैलाइ कुट्ता हात गोडाका अंगुला भाचिदियो भनि फिराद गर्न आयो भन्या १ अंगुला भाच्या ५० रुपैया २ अंगुला भाच्या १०० रुपैया ३ अंगुला भाच्या १५० रुपैया एसै रितले जति अंगुला भाचिदियाको छ उति रुपैया जरिवाना गर्नु. दंडका रुपैया तिर्न सकेन भन्या अैन वमोजीम कैद गर्नु.

११. लोग्न्या मानिसले लोग्न्यै मानिसलाइ कुटपीट गर्दाहात षुट्टा भाचि हात डुडो गोडो लगडो गराइदियो र ईलाज गराउदा पनि सावुद भयेन काम नलाग्न्या भयो भनि कराउन आया वुझदा तहकित ठहऱ्यो भन्या जषम गर्न्यालाइ १० वर्ष कैद गर्नु म्यादका रुपैया दिया अैन वमोजिम लि छाडिदिनु इलाज गराउदा सावूद भयो भन्या २ वर्ष कैद गर्नु म्यादका रुपैया दिया लिनु.

१२. स्वास्निमानिसले स्वास्निमानिसमा पतिव्रता हवस् वेस्या हवस् चाकर जात हवस् कसैलाइ कुटपीट गर्दा हात षुट्टा भाचि हात डुडो गोडो लगडो गराइदियो र. इलाज गराउदा पनि सावुद भयेन. काम नचलन्या भयो भनि कराउन आया वुझदा तहकित ठहऱ्यो भन्या जषम गर्न्यालाइ ५ वर्ष कैद गर्नु. म्यादका रुपैया दिया लि छाडिदिनु.इलाज गराउदा सावुद भयाको ठहऱ्यो भन्या १ वर्ष कैद गर्नु.

१३. लोग्न्या मानिसले स्वास्नि मानिसलाइ कुटपीट गर्दा हात षुट्टा भाचि हात डुडो गोडो लगडो गराइदियो र इलाज गराउदा पनि सावुद भयेन काम नचलन्या भयो भनि कराउन आयो र वुझदा तहकित ठहऱ्यो भन्या जषम गर्न्यालाइ १२ वर्ष कैद गर्नु रुपैया तिऱ्या अैन वमोजिम लि छाडिदिनु. इलाज गराउदा सावुद भयाको ठहऱ्यो भन्या ३ वर्ष कैद गर्नु.

१४. हात हालाहाल कुटाकुट रगत पक्ष गर्न्या स्वास्नि मानिसहरुले कैदका रुपैया तिर्छौं भन्या अैन वमोजिम लि छोडिदिनु.

१५. चार्वर्ण छत्तिसै जात गैह्र दुनिआदारमा कोहि लोग्न्या लोग्न्याको हवस् लोग्न्यामानिस्को र स्वास्निमानिस्को हवस्. स्वास्नि स्वास्निको हवस्. झगर भै कुटाकुट गऱ्या रगत पक्ष गऱ्या. कुट्तामा अंगको भंग गऱ्या ज्यू भन्या मऱ्याको रहेनछ र. कुटाइमाग्न्याले कुटन्या मानिस्का नाउमा फिराद गर्न आयानन्भन्या अरु पोलाहाका मुषले पोलन आइकन अदालत ठाना अमालवाट एस्ता कुरा नसुँनु. कुटाइमाग्न्या मानिस् फिरा दगर्न आया कुरो हेरि अैन वमोजीम निसाफ गरि दिनु.

१६. कसैले कसैलाइ पाषुरा पिडौलामा हानि छिन्यो र त्यो घाउनथाकि तेसै वेथाले जतिसुकै मैन्हा पछि मऱ्या पनि हांन्याको ज्यानको वदला ज्यान लिनु. घाउथाकि निको भयो भन्या. हांन्याको अैन वमोजिमको अंस सर्वस्व गरि अदालत ठाना अमालवाट दसौद लि उपर तेहि घाइत्यालाइ दिलाइ हांन्यालाइ १२ वर्ष कैद गर्नु. म्यादको डवल दिया पनि नलिनु.

१७. कसैले कसैलाइ कुटपिट गर्दा करङ्को हाड फुटचो भनि कराउन आयो र जाचता वुझदा फुटचाको ठहऱ्यो र. पछि इलाज गराउदा सावुद भै काम काज गर्न सक्न्या भयाको ठहऱ्यो भन्या फुटचाकोछ भंन्याको मुचुल्का लेषाइ लि करंको हाड फुट्न्या गरि कुट्न्यालाइ ६० रुपैया दंड गर्नु. रुपैया तिर्न सकेन भन्या. अैन वमोजिम कैद गर्नु.

# गाली गरागरको

१. कसैले अर्कासित कुरा कहानि भनाभन हुदा तेरा वठमाथिका जुघा हुन्भन्या फलानु कुरो गर.जुघा होइनन् जाठा हुन्भन्या गर्न सकोइनस् भंन्यालाइ २॥ रुपैया दंड गर्नु.

२. लोग्न्या मानिसले लोग्न्यै मानिसलाइ भ्कै भ्कगरामा धोति फुकालि देषाइ दिन्यालाइ २ ॥ रुपैया दंड गर्नु.

३. लोग्न्या मानिसले सधवा विधवा कंन्यालाइ भ्कै भ्कगरामा धोति फुकालि देषाइ दिन्यालाइ २० ॥ रुपैया दंड गर्नु.

४. लोग्न्या मानिसले वेस्या स्वास्निलाइ र कमारिलाइ भ्कै भ्कगरामा धोति फुकालि देषाइ दिया २ रुपैया दंड गर्नु.

५. स्वास्निमानिसले स्वास्निमानिसलाइ भ्कै भ्कगरामा गुन्यू फुकालि देषाइदिया २ ॥ रुपैया दंड गर्नु.

६. स्वास्नि मानिसले लोग्न्या मानिसलाइ भ्कै भ्कगरामा गुन्यू फुकालि देषाइदिया २ ॥ रुपैया दंड गर्नु.

७. आफ्ना जहान परियार इष्टमित्र सधवा विधवा कंन्या छोरि वुहारि आमा वज्यूहरु वस्याका विचमा लोग्न्यामानिसलाइ भ्कै भ्कगरामा गुन्यू फर्काइ देषाइ दिन्या स्वास्नीलाइ १० रुपैया दंड गर्नु.

८. ढाक्र्या महाजन रैयत गैह्र मद षान्याले मद षाइ अर्कालाइ मुषले गालि गुफ्ता गर्न्या र हातले लठ्ठिले ढुँगाले हांन्या गल्लिमा लोटिरहन्या हिडदा ढनमनाउन्या लाइ ५ रुपैया दंड गर्नु. रुपैया नतिऱ्या १ मैन्हा कैद गरि छोडिदिनु.

९. जोगि जंगम संन्यासि ओघर कानफट्टाहरुले मद रक्सि षाइ गल्लिमा लोटिरहन्या हिडदा ढनमनान्यउया अर्कालाई गाली गुफ्ता गर्न्या हातले ढुंगा लट्ठिले हांन्यालाइ पक्रि आफ्ना नगीचका सिवानाकाषोलो कटाइ धपाइदिनु.

१०. कसैले कसैलाइ वेनिसाफ वेतक्सिरमा वाध्यो भनी कराउन आयो भन्या निरोपण गर्दा वेतक्सिरमा वाध्याकोठहर्‍यो भन्या त्यो वाधन्यालाई ४ मैन्हा नेल ठोकि कैद गर्नु रुपैया डवल दिया लि छोडिदिनु

११. कसैले लोग्न्या मानिस कसैलाइ दाह्रि जुघा र कपालका रौं वेहक्मा कत्रि दियो भन्या ५ रुपैया दंड गर्नु.

१२. कंन्या र सधवा विधवा स्वास्निलाइ बेहक्मा कपालका रौ कत्रि दिन्यालाइ ४० रूपैया दंड गर्नु. वेस्या जात र चाकर जातका स्वास्निका कपालका रौ कत्रि दिन्यालाइ २० रूपैया दंड गर्नु.भगुइ नसुइ काम नगर्न्या चोर्न्या कमारि र वधेत्यानिको मालिकले कपाल कत्रि दियामा षत लाग्दैन.

१३. लोग्न्या लोग्न्या हवस्. स्वास्नि स्वास्निले हवस् स्वास्निमानिसले लोग्न्या मानिसलाइ हवस्. कसैले अर्काका कपाल का रौ समाइ जगटचाउन्यालाइ ५ रूपैया दंड गर्नु. लोग्न्यामानिसले अर्काका स्वास्निमानिसलाइ जगटचाया भन्या १० रूपैया दंड गर्नु. रूपैया नतिर्‍या अैन वमोजिम कैद गर्नु.

१४. अर्कालाइ वेहक्मा गर्धनिलाउन्या र. लछार पछार गर्न्यालाइ ३ रूपैया जरिवाना गर्नु. रूपैया नतिर्‍या अैन वमोजिम कैद गर्नु.

१५. अर्काका सधवा विधवा कंन्यालाइ उनले हात नछाडि विना कसुरमा गलहत्ता लाउन्या लोग्न्या मानिसलाइ २० रूपैया दंड गर्नु. रूपैया नतिर्‍या अैन वमोजिम कैद गर्नु.

१६. आफ्ना षसमका सत्यमा नरहाका वेस्या भयाकालाइ वेहक्मा गलहत्ता लाउन्यालाइ २ ॥ रूपैया दंड गर्नु. रूपैया नतिर्‍या दिन १५ कैद गरि छाडिदिनु.

१७. कसैले कसैलाइ १ चोट हवस् २ चोट हवस् गाला ठोक्यो र मलाइ गाला ठोक्यो भनि फिऱ्याद गर्न आयो र वुझदाठहऱ्यो भन्या गाला ठोकन्यालाइ ४ रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु.

१८. पैल्हे योटाले गाााला ठोक्यो गर्धनी लायो.गाला ठोकाइ माग्न्या र गर्धनि लाइ माग्न्याले पछिवाट आमा चकारि गालि गऱ्यो भन्या गालि गर्न्यालाइ षतवात लाग्दैन. गाला ठोकन्यालाइ ४ गर्धनि लाइउन्यालाइ ३ रूपैया दंड गर्नु.

१९. कोहि मानिसले उसै वेहक्मा गालि गऱ्यो भनि फिऱ्याद गर्न आयो भन्या लोग्न्या मानिसलाइ आमाचकारि गालि गर्न्या र. स्वास्नि मानिसलाइ तेरा वावु कि जाइ भंन्यालाइ २ ॥ रूपैया अरू थोक गालि गर्न्यालाइ १ रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु.

२०. लोग्न्या मानिस कसैले अर्का लोग्न्यामानिस्का गुला लिंग जाठा र वेस्या स्वास्निका जाठा समाइ तान्यालाइ २५ रूपैया दंड गर्नु. आफ्ना जात धर्ममा रहाका कंन्या सधवा विधवा स्वास्निमानिस्का जाठा तान्या लोग्न्या मानिसलाइ ५० स्वास्निमानिसलाइ २५ रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु.

२१. कुला पधेरा कोलवन घास पात गैह्र सानातिना कुराका झगरामा अदालत ठाना अमालमा कुरा परि कायेलनामा भयो भन्या. अैन लेषियाकामा अैन वमोजिम दंड गर्नु. अैन नलेषियाका कुरामा १ रूपैया दंड गरि छाडि दिनु.

२२. भना भन गालि गरा गरको झगरा हुदा पैल्हे यौटाले आमा चकारि गालि गरेछ र पछिवाट उसलाइ हातले हतियार नझिकि मुठिले पनि नसमाति मुषले मात्र काटियेलास् भन्या को रहेछ भन्या तेस्तालाइ वात लाग्दैन.

# कुटपिटको

१. लाठा ढुँगा लट्ठिले हानि रगत पक्ष भयो अंगको भंग भन्या भयेन थलिन्या गरि कुट्याको पनि रहेनछ १।२ चोट हांदामा रगत आयो भन्या. १० रूपैया अंग भंग नगरी १५ दिनसंम थलिन्या गरि कुटन्यालाइ २० रुपैया दंड गर्नु. १५ दिनदेषि वढता ३० दिन संम थलिन्या गरि कुट्याको ठहऱ्या ४० रुपैया दंड गर्नु. जितन्यालाइ जिताउरि पर्दैन. दुवैले हानाहान गऱ्या भन्या पैल्हे हान्यालाइ १० पछिवाट हान्यालाइ ५ रुपैया दंड गर्नु.

२. कसैले कसैलाइ लात्तले हान्यो र. मलाइ लात्तले हान्यो भनि कराउन आयो भन्या लात्तले हांन्यालाइ १५ रुपैया दंड गर्नु. दुवैले हानाहान गऱ्याको रहेछ भन्या. पैल्हे हांन्यालाइ ६ पछिवाट हांन्यालाइ ३ रुपैया दंड गर्नु. रुपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु.

३. कसैले झगरा गर्दा जुत्ताले हान्यो जुत्ता लगाइ लात्तले हान्यो भनि फिराद गर्न आयो भन्या जुत्ताले हांन्या र. जुत्ता लगाइ लात्तले हांन्यालाइ २० रुपैया दंड गर्नु. दुवैले जुत्ताले हानाहान गऱ्या. दुवैले जुत्ता लगाइ लात्तले हानाहान गऱ्या भन्या. पैल्हे हांन्यालाइ १० पछिवाट हांन्यालाइ ५ रुपैया दंड गर्नु. रुपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु.

४. हात हालाहाल नङ्का कोराकोर गर्दा रगत आयो भन्या २ ॥ अर्कालाइ घुच्याटि भित्तामा दलि गर्धनि लगाइ ठकर लाग्दा नाथ्रो फुटि चोट लागि भयाका एस्ता साना तिना कुराका रगत पक्षका झगरामा रगत काढन्यालाइ ५ रुपैया दंड गर्नु. रुपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु.

५. अर्कालाइ १०।८ पटक् कुटि आगमा नील परि ओछ्यान्मा पऱ्याको छैन भन्या कुट्न्यालाइ २० रुपैया जरिवाना गर्नु नतिऱ्या अैन वमोजिम कैद गर्नु.

६. कसैको ज्यू धन जवाहेर नगद जिनिस् चौपाया अंन जगा जमिन् चोरियामा र करणि संवंधका कुरामा कसैमाथि संषा उठ्यो उस्वाट दसि भन्या केहि मिल्याको छैन भन्या.तिनलाइ कचहरिमा ल्याइ वरपर देषाइ हवकाइ दवकाइ साधपुछ गरि निसाफ हेर्नु. कुटपिट नगर्नु. १।२

कुराको दसि पाइयो भन्या तेस्ता सान्धिुवा चोरहरुलाइ ज्यू नमर्न्या अंनगभंग नहुन्या गरि संधि वचाइ कोर्रा वेत ठोकि निसाफ हेर्नु.

७. अंगको भंग नगरि. रगत पक्ष नगरि. लठ्ठिले १।२ चोट हान्याका कुरामा मलाइ कुट्यो भनि फिऱ्याद गर्न आयो र. कुट्याको ठहऱ्यो भन्या. ६ रुपैया दंड गर्नु.

८. कसैका सधवा विधवा कंन्या स्वास्नि स्वास्नि मानिस्को झगरा हुन लाग्याका वेलामा छुट्याउदा ज्येठाज्यूले हवस् वा अरु परचक्रि साना ठुला जात र. पानि नचलन्या जात गैह्रले हात हालि छुट्यायाका कुरामा मलाइ फलानाले हात हाल्यो भनि स्वास्निले भंन पाउदैनन्. आगमा समाइ छुट्याइ दिन्या मानिसलाइ झगरा गर्न्या स्वास्निका लोग्न्याले पनि षतवात लाउन पाउदैन. राजषत पनि लाग्दैन.

९. कसैले वेहक्मा सिश्नु लायो भनि कराउन आयो र वुझदा सिश्नु लायाको तहकित ठहऱ्यो भन्या १० रुपैया दंड गर्नु. रुपैया नतिऱ्या २ मैन्हा कैद गरि छाडिदिनु.

१०. म्यादि कैदि वाहेक अरु गैह्र कुटपिट हात हालाहालका कुरामा कुटपिट हात हालाहाल गऱ्यो भनि करायो. रोवकार गर्दा सावित गर्न सकेन भन्या तेस्ता पोलाहालाइ कुटपिटका अैनमा जौन कुरो पोल्याको छ. उसै अैनको आधि दंड गर्नु रुपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु.

११. पालो पहरा उर्दि कवायेत्मा जाड रक्सि षाइ वेहोससित वोलन्या धर धराइ हिडन्या पल्टनित्राको तानावाना च्याति जागीर षोसिदिनु.

१२. कसैले कसैलाइ वेहक्मा वाध्यो कोर्रा ठोक्यो भनि कराउन आयो र. वुझदा तहकित ठहऱ्यो भन्या. पाता नफर्काइ वाधन्यालाइ ४ मैन्हा कैद गर्नु. म्यादको डवल् दिया रुपैया लि छाडनु. कोर्रा ठोकन्यालाइ पनि जतिचोट् कोर्राले हान्याको छ. एकचोटको ४।४ रुपैयाका दरले दंड गर्नु. वेहक्मा अर्कालाइ नेल ठिगुरा चमौट् हालन्यालाइ जति दिनहाल्याको ठहर्छ हालन्यालाइ दिनको २।२ रुपैयाका दरले दंड गर्नु. रुपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु. वौल्हायाका मानिसलाइ औषधि निमित्त नेल ठिगुरा चमौट हाल्यामा षतवात लाग्दैन.

१३. कसैले कसैलाइ जगटचायेछ पनि गाडेछ पनि भन्या तेस्तालाइ ७ रुपैया दंड गर्नु रुपैया नतिऱ्या कैद गर्नु.

१४. कसैले कसैलाइ जगटचायेछ. गाला पनी ठोकेछ गाडेछ. पनि भन्या तेस्तालाइ २० रुपैया दंड गर्नु. नतिऱ्या कैद गर्नु.

१५. कसैले कसैलाइ जगटचायेछ. गाला ठोकेछ गाडेछ. लात्तले हानेछ भन्या तेस्तालाइ ३० रुपैया दंड गर्नु. नतिऱ्या कैद गर्नु.

१६. कसैले कसैलाइ जगटचाये छ गाला ठोकेछ गाडेछ लात्तले हानेछ जुत्ताले हानेछ भन्या तेस्तालाइ ४० रुपैया दंड गर्नु. रुपैया नतिऱ्या कैद गर्नु.

१७. कसैले कसैलाइ जगटचायेछ गाला ठोकेछ गाडेछ लात्तले हानेछ जुत्ताले षादेछ लट्ठिले स्मेत् हानेछ भन्या तेस्तालाइ ५० रुपैया दंद गर्नु रूपैया नतिऱ्या कैद गर्नु.

१८. कसैले कसैलाइ जगटचायेछ गाला ठोकेछ गाडेछ लात्तले हानेछ जुत्ताले हानेछ लट्ठिले हानेछ. सिस्नु स्मेत् लगायेछ भन्या तेस्तालाइ ६० रुपैया दंड गर्नु नतिऱ्या कैद गर्नु.

१९. लोग्न्या मानिस कसैले अर्काका सधवा विधवा स्वास्निलाइ जुतानलगाइ लात्तलेषादेछ भन्या ३० रूपैया जुत्ता लगाइ लाल्तले षादेछ भन्या. ४० रूपैया दंड गर्नु. रूपैया नतिऱ्यां अैन वमोजिम कैद गर्नु.

२०. कुट्पिट्का अैनमा लेषियाका सनहे र. दंड कैद लेषियाका कुरा वाहेकमा आफ्ना नाता लाग्न्या हवस् नलाग्न्या हवस्. स्वास्नि मानिस्लाइ लोग्न्या मानिस्कसैले कुट् पिट् गऱ्याका कुरामा लोग्न्या मानिसलाइ लोग्न्यै मानिसले कुट्पीट् गऱ्याका दंड सजायका अैन वमोजिम्को दोवरका हिसावले वढाइ दंड कैद गर्नु. हतियारको चोट लाग्याको रहेनछ हतियार मुठिले समात्याको झिक्याको मात्र रहेछ भन्या. अैन वमोजिम दंड गर्नु. विवाहिता हवस् ल्याइता

हवस् आफ्नि स्वास्निलाइ कुट्पिट् गैह्र षत लाग्न्या कुरो गऱ्यामा दोवर दंड नगर्नु. अैन वमोजिम मात्रै गर्नु.

२१. १२ वर्ष माथि १६ वर्ष सम्मका मानिसले अर्कालाइ कुट्पिट् गैह्र गऱ्यामा अरूले कुट्ताका दंड कैदका अैन वमोजिम.मा आधि घटाइ दंड कैद सजाय गर्नु.

२२. कसैले वेहक्मा अर्कालाइ सकस गरि षाडल्मा हालन्यालाइ २० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या कैद गर्नु.

२३. कसैले वेहक्मा अर्कालाइ सकस गरि चोक्यामा हालन्यालाइ २० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या कैद गर्नु.

२४. कसैले वेहक्मा अर्कालाइ सकस गरि ढुँगो मुढो चपरि वोकाउन्यालाइ ४० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या कैद गर्नु.

२५. कुट्पिट् हातहालाहालका झगरामा दुवै झगरियालाइ कुट्पिट् भै रगत पक्ष भयाको ठहऱ्यो भन्या.घाउ रगत पक्ष हेरि घाउ रगत अनुसार अैन वमोजिम दुवै झगरियालाइ दंड गर्नु. २ जनाले कुटपिट गरि घालाया रगत पक्ष गऱ्यामा एका झगरियालाइ छाडि एकालाइ मात्रै कायेलनामा गरि दंड गर्न्या अडा अदालत ठाना अमाल वाला गैह्रलाइ अैनले उसैलाइ हुनु पर्न्या दंड जरिवाना गर्नु

ज्यान मार्नाको मतलव नगऱ्याका हतियार षोसा षोस चला चल गरि घालाग्दा गर्न्या कुराको अैन ---३

२६. झगरा हुदा हानु भनि हतियारले हान्या घोच्याकोठहरेन हतियार षोसाषोस गर्दा घाउलागी रगत आयाको ठहऱ्या षोसन्या चाहिलाइ घाउ लागेछ भन्या दुवैलाइ दंड हुदैन. हतियार भिर्न्या चाहिलाइ घाउलाग्याकोभया अघिवाट हात हालि अर्काको हतियार षोसन्यालाइ आठ आना दंड गर्नु.

२७. वाटामा हिडदा षुकुरि तरवार गैह्र हतियारको टुप्पो म्यान दापवाट निस्क्याको रहेछ र. अर्कालाइ कोरेछ घोचेछ काटेछ र कोहि कराउन आयो भन्या त्यस्ता होस नराषी हतियार भिर्न्या वेकुफलाइ चार आना दंड गर्नु.

२८. चलाचल गर्दा षेल्दा हिडदा अर्काले हतियार गैह्र घाउलाग्न्या कुरालियाको कम्वरमा भिऱ्याको थाहा नपाइ अर्कालाइ समाउदा पक्रदा घालागी चोट लाग्यो रगत आयो भन्या. भवितव्य ठहर्छ वात लाग्दैन.

२९. वोलन नजाँन्या लाटाले मानिसलाइ कुटपिट गऱ्याका कुरामा ज्यू जष्म भयाको रहेनछ. रगत पक्षमात्र गरेछ भन्या ५ कोर्रा ठोकि छाडिदिनु. दंड हुदैन.

# बाबु छोराको कुटपिट

१. बाबु आमाले कुट्या भनि छोरा छोरि फिऱ्याद गर्न आया भन्या छोरा छोरिले विराव गर्दा हात गोडा नमर्कन्या आगमानील नपर्न्या रगत पक्ष नहुन्या गरि कुट्याको रहेछ भन्या. वावु आमालाई षत लाग्दैन. छोरा छोरिले विरायाको रहेनछ. वेहक्मा कुट्याको रगत पक्ष गऱ्याको रहेछ भन्या. अैन वमोजिम सजाय गर्नु.

२. वावु आमाले छोरा छोरिलाइ नकुट्नु केहि विराव गऱ्या. भन्याको मानेनन् सजाय गर्नु पऱ्यो भन्या अध्यारा कोठामा छेकनु थुन्नु हवकाउनु. अरू सजाय नगर्नु.

३. वावु आमा वाज्या वज्यू मंत्र सुनाउन्या गुरूर्मालाइ गालि गऱ्यो र फिऱ्याद गर्न. आया वुझ्दा गालि गऱ्याको सदर ठहऱ्यो भन्या. गालि गर्न्या छोरालाइ १ मैन्हा कैद गर्नु. म्यादका रूपैया दिया लिनु. वावु आमाले भंन आया छाडनु.

४. वावु आमा वाज्या वज्यू मंत्र सुनाउन्या गुरूगुर्मालाइ १।२ चोट लवटाले हांन्या छोरालाइ ३ मैन्हा कैद गर्नु. म्यादका रूपैया डवल दिया पनि नलिनु. वावु आमा वाज्या वज्यूले भंन आया डवल दिया लि छोडि दिनु.

५. वावु आमा वाज्या वज्यू मंत्र सुनाउन्या गुरू गुर्मालाइ लात्तले षाद्यो नील परेन भन्या पनि तेस्ता छोरालाइ १२ मैन्हा कैद गर्नु. म्यादको डवल दिया पनि नलिनु. वावु आमा वाज्या वज्यूले भंन आया डवललि छोडि दिनु.

६. वावुआमा वाज्या वज्यू मंत्र सुनाउन्या गुरू गुर्मालाइ आगमा नील परि लात्तले षाद्यो लठ्ठिले हान्यो भन्या तेस्ता छोरालाइ ३ वर्षकैद गर्नु म्यादका रूपैया डवल दिया पनि नलिनु वावु आमावाज्या वज्युले भन्न आया डवल लि छाडनु.

७. वावु आमा वाज्या वज्यू मंत्रसुनाउन्या गुरू गुर्मा लाइ कुट्ता नाकवाट रगत आयो भन्या १२ मैन्हा कैद गर्नु. अरू अंगवाट रगत काढन्यालाइ ३ वर्ष कैद गर्नु. म्यादको डवल्दीया पनि नलिनु. वावु आमा वाज्या वज्यूले भंन आया डवल दिया रूपैया लि छाडनु.

८. वावु आमा वाज्या वज्यू मंत्र सुनाउन्या गुरू गुर्मालाइ कुट्ता हात षुट्टा मर्कन्या दात झर्न्या गरि कुट्यो भन्या तेस्तालाइ ५ वर्ष कैद गर्नु. म्यादको डवल दिया पनि नलिनु. वावुआमा वाज्या वज्युले भंन आया डवल दिया रूपैया लि छाडनु.

९. वावु आमा वाज्या वज्यू मंत्र सुनाउन्या गुरू गुर्मालाइ कुट्ता हात गोडा भाचिन्या करंको हाड भाचिन्या गरी कुट्न्यालाइ १२ वर्ष कैद गर्नु. म्यादको डवल दिया पनि नलिनु. वावु आमा वाज्या वज्युले भन्न आया डवल दिया लि छाडनु.

१०. छोराले कुटचाको वावु आमाले सावित गर्न सकेन. पोल्याको ठहऱ्यो भन्या छोरालाइ जौन वमोजिमको कैद हुंछ. तेस्को आधिको हिसावले वावु आमालाइ जरिवाना गर्नु.

११. कसैका यौटै स्वास्नि छ उसै पट्टिको छोरोछ. उसै छोराले भांग अफिम सराफ षांछ आफ्ना घरको धनमाल चोरि पनि गर्छ जुवा पनि षेलछ भन्या तेस्ता छोरालाइ वावुले नेल ठिगुरा हाल्छु भन्या अदालत ठाना अमालमा साधनु पर्दैन. वावुले हालनु हुन्छ वात लाग्दैन.

१२. छोरिले आफुलाइ जन्माउन्या आमा लाइ र वुहारिले आफ्ना षसमलाइ जन्माउन्या सासुलाइ गालि गऱ्याको कुट पिट गऱ्याको र हात गोडा मर्कायाको रगत पक्ष गऱ्याको सजाय कैद छोरालाइ भया वमोजिम गर्नु. छोरि वुहारिका कैदका रूपैया दिया लि छाडि दिनु नदिया कैदै गरि राषनु म्याद पुग्या पछि छाडि दिनु. इन्हेरूलाइ म्यादको डवल हुदैन

१३. जस्का एक स्वास्नि देषि वढता स्वास्नि छन्. तेस्ताका छोराले भाँग अफिम सराफ षांछ. आफ्ना घरको धनमाल चोरि पनि गर्छ. जुवा पनि षेल्छ भन्या तेस्तालाइ वावुले नेल ठिगुरा हाल्छु भन्या अदालत ठाना अमालाट जाचि वेइमानि गऱ्याको ठहऱ्यो र कायल भयो भन्या नेल ठिगुरा हाल्न पाउछ रिसले हाल्न पाउदैन.

१४. लोग्न्याले आफ्ना स्वास्निसित झगरा गर्दा केहि नविराइ कुटपिट गर्दा रगत काढया भनि स्वास्निले फिऱ्याद गर्न आई भन्या ५ रूपैया दंड गर्नु रूपैया नतिऱ्या १ मैन्हा कैद गरि छाडी दिनु.स्वास्निले पनि पोइ हो भनि फिऱ्याद गर्न आइन. लोग्न्याले पनि स्वास्निको हो भनि फिऱ्याद गर्न आयेन भन्या षत लाग्दैन. प्रायश्चित पनि पर्दैन.

१५. स्वास्निले आफ्ना लोग्न्यासित झगरा गर्दा जानि जानि कोरकार गरि पोइलाइ रगत काढि दि र लोग्न्या फिऱ्याद गर्न आयो भन्या. टोकि रगत काढन्यालाइ ५ रूपैया दंड गर्नु. कोरकार गरि रगत काढन्यालाइ २ ॥. रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु. एस्ता कुराको अदालत ठाना अमालवाट षोजि नगर्नु.

१६. आफ्ना कमारा कमारी वाधावधेत्यानि दर्माहादार चाकर चाकर्णिले आफ्ना षसम् षस्मिनी साहेवलाइ कुटपीट गर्नाको हात पात मात्र गऱ्याको रहेछ भन्या १ मैन्हा कैद गर्नु. रगत पक्ष र अंगभंग गऱ्याको रहेछ भन्या. अरूका अैनमा भंदा डेढो बढता गरि कैद गुर्न म्याद पुग्यापछि जस्का कमारा कमारि वाधा दर्माहादार हुन् उसैलाइ सौपि दिनु. म्यादका रूपैया तिऱ्या अैन वमोजिम रूपैया लि छाडी दिनु.

१७. छोइ छिटो हालनु पर्न्या जातले आफु भंदा उपल्ला जातकालाइ कुटपिट गऱ्यो भन्या १ मैन्हा कैद गर्नु. अरू रगत पक्ष अंगभंग गैह्र गर्न्यालाइ अरूका सजाय भंदा डेढो वढता कैद गर्नु. म्यादका रूपैया तिर्छ भन्या रूपैया लि छाडी दिनु.

१८. आफ्ना चाकरले र छोया छिटो हालनु पर्न्या जात वाहेक. अरू स्वास्नि मानिसले झगरा गरि हात हालाहाल कुटाकुट रगत पक्ष गऱ्या भन्या लोग्न्याहरूलाइ लेष्याका अैन वमोजिमको आधि दंड गर्नु. सौता सौताका झगरा भै कुटपिट गऱ्याकामा लोग्न्यालाइ लेष्या वमोजिमको दंड जरिवाना गर्नु.

१९. छोइ छिटो हालनु पर्न्या जातले आफु मिल्दा जातमा र अरू कामि सार्कि गाइन्या हुर्क्या दमाइ वादि भाड कुसल्या कसाहि कुलुच्या हयाषलक् धोवि मुसलमान पोढचा गैह्र छोटा जातले आफु आफुमा कुटपिट रगत पक्ष अंगभंग गन्या भन्या दुनित्राका सजाय वमोजिम सजाय गर्नु.

२०. आफ्नि स्वास्निलाइ जन्माउन्या सासुलाइ कुटपिट गर्न्यालाइ वावु छोराका कुटपिटका अैन वमोजिम्का ३ षंडको २ षंड मात्रै दंड सजाय कैद गर्नु.

२१. आफ्नि छोरि गयाका जुवाञीलाइ कुटपिट गऱ्यो भन्या वावु छोराका कुटपिटका अैन वमोजिम्मा ३ षंडमा २ षंड मात्रै दंड सजाय कैद गर्नु.

# नाल नरक

१. कसैले अर्कालाइ वेहक्मा नालमा हाल्यो भन्या हालन्यालाइ २० रूपैया दंड गर्नु. रूपैया नतिन्या अैन वमोजिम्कैद गर्नु.

२. कसैले अर्कालाइ झैझगरा गैह्रमा गुहुमा गाडचो भन्या गाडन्यालाइ ५० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु.

३. कसैले स्वास्निको जारि गऱ्या वाहेक अरू कुराका झगरामा कसैलाइ चर्पिमा थुन्यो भन्या तेस्लाइ २० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु.

४. कसैले आफ्ना कमारा कमारिलाइ रिसले मुषमा नरक हालि दियो भन्या ति कमारा कमारि नरक हालि दिन्या धनिले पाउदैन. अदालत ठाना अमालले १० रूपैया कमारा कमारिवाट लि अम्लेष गराइ छाडि दिनु. तिनलाइ २ रूपैया लि धर्माधिकारवाट पतिया गराइ दिनु. वाधा वधेत्यानिलाइ मुषमा नरक हालि दियाको भया थैलि भुस गराइ अम्लेष गराइ २ रूपैया लि पतिया गराइ थैलिको दसौद वाधा वधेत्यानिवाट लि छाडि दिनु. मुषभित्र वाहेक् अरू अंगमा नरक हालि दिन्यालाइ षतवात लाग्दैन.

५. चोरिका कुरामा वोक्स्याराका कुरामा करणि जात संवंधका कुरामा आफ्ना नाता सनवंधमा वात लाउन्याले हवस् वा. वातलाइ माग्न्याले हवस्. कसैले मुष भित्र गुहु मुत हालि दियो भन्या.गुहु मुत हालि दिन्यालाइ २०० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु. जवरजस्ति गुहु मुत मुषमा हालि दियाको हुनाले मुषमा पऱ्याको जात जादैन. २ रूपैया गोदान धर्माधिकारले लि पतिया गराइ दिनु.

६. आफ्ना नाता सनवंधलाइ हवस्. अरू कसैलाइ हवस् जानि जानि वेहक्मा अर्काका मुषभित्र हगन्या मुतन्यालाइ र. गुहु मुत हालि दिन्यालाइ १००० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु. वेहक्मा हालि दियाको हुनाले गुहु मुत मुषमा पऱ्याको जात जादैन धर्माधिकारले २ रूपैया गोदान लि पतिया दिनु. मुष भित्र बाहेक अरू अंगमा गुहु मुत हालि घसि दिन्या र. हगि मुति दिन्यालाइ ५० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु अरू अंगमा गुहु मुत पऱ्यालाइ पतिया गर्नु पर्दैन.

७. कसैले मुषमा गुहु मुत हालि दियो भनि पोल्यो सावित गर्न सकेन भन्या तेस्तालाइ गुहु मुत षुवाउन्या मुषमा हालि दिन्या. अरू अंगमा हालि दिन्यालाइ लेषियाका दंडको आधि दंड गर्नु रूपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु

८. उपाध्या व्राम्हणले अर्का लोग्न्या स्वास्नि मानिसलाइ मुषभित्र लिंग हालि विर्य झार्‍यो वा झर्‍याको विर्य षुवायो भन्या र उपाध्यानि व्राम्हणिले रज षुवाइ छ भन्या. उपाध्यालाइ षुवाउन्यालाइ ५०० रजपूत जैसि जातलाइ षुवाउन्यालाइ ४५० तागाधारि क्षतृ जातलाई षुवाउन्यालाइ ४०० नमासिन्या मतवाली जातलाइ षुवाउन्यालाइ २५० मासिन्या मतवालि जातलाइ षुवाउन्यालाइ २०० पानि नचलन्या जातलाइ षुवाउन्यालाइ १५० छिटो हालनु पर्न्या जातलाइ षुवाउन्यालाइ १०० रूपैया दंड गर्नु. रूपैया नतिर्‍या अैन वमोजिम कैद गर्नु.

९. रजपूत जैसि जातले अर्का लोग्न्या स्वास्नि मानिसलाइ मुषभित्र लिंग हालि विर्य झार्‍यो वा झर्‍याको विर्य षुवायो भन्या र. रजपूतनि जैसिनि वाहुनिले रज षुवाइ छ भन्या. उपाध्यालाइ षुवाउन्यालाइ ५०० रजपूत जैसिलाइ षुवाउन्यालाइ ४५० तागाधारि क्षत्रीलाइ षुवाउन्यालाइ ४०० नमासिन्या मतवालि जातलाइ षुवाउन्यालाइ २५० मासिन्या मतवालि जातलाइ षुवाउन्यालाइ २०० पानि नचलन्या जातलाइ षुवाउन्यालाइ १५० छिटो हालनु पर्न्या जातलाइ षुवाउन्यालाइ १०० रूपैया दंड गर्नु रूपैया नतिर्‍या अैन वमोजिम कैद गर्नु.

१०. तागाधारि क्षतृ जातले अर्का लोग्न्या स्वास्नि मानिसलाइ मुष भित्र लिंग हालि विर्य झार्‍यो वा झर्‍याको विर्य षुवायो भन्या र. तागाधारि क्षतृनीले रज षुवाइ छ भन्या उपाध्या रजपूत जैसिलाइ षुवाउन्यालाइ ५०० तागाधारि क्षतृ जातलाइ षुवाउन्यालाइ ४०० नमासिन्या मतुवालि जातलाइ षुवाउन्यालाइ २५० मासिन्या मतवालि जातलाइ षुवाउन्यालाइ २०० पानि नचल्न्या जातलाइ १५० छिटो हालनु पर्न्या जातलाइ षुवाउन्यालाइ १०० रूपैया दंड गर्नु रूपैया नतिर्‍या अैन वमोजिम् कैद गर्नु.

११. नमासिन्या मतवालि जातले अर्का लोग्न्या स्वास्नि मानिस्लाइ मुषभित्र लिंग हालि विर्य झार्‍यो वा झर्‍याको विर्य षुवायो भन्या र. इनै नमासिन्या जातकि स्वास्निले रज षुवाइ छ भन्या. उपाध्या लगायेत् तागाधारि जात गैह्रलाइ षुवाउन्यालाइ ५०० नमासिन्या मतवालि जातलाइ षुवाउन्यालाइ २५० मासिन्या मतवालि जातलाइ षुवाउन्यालाइ २०० पानि नचलन्या जातलाइ षुवाउन्यालाइ १५० छिटो हालनु पर्न्या जातलाइ षुवाउन्यालाइ १०० रूपैया दंड गर्नु रूपैया नतिर्‍या अैन वमोजिम कैद गर्नु.

१२. मासिन्या मतवालि जातले अर्का लोग्न्या स्वास्नि मानिस्लाइ मुषभित्र लिंग हालि विर्य झार्‍यो वा झर्‍याको विर्य षुवायो भन्या र. इनै मासिन्या जातकि स्वास्निले रज षुवाइ भन्या. उपाध्या लगायेत् तागाधारि र नमासिन्या मतवालि संमका जातलाइ षुवाउन्यालाइ मासि दिनु. मासिन्या मतवालि जातलाइ षुवाउन्यालाइ २०० पानि नचलन्या जातलाइ षुवाउन्यालाइ १५०

छिटो हालनु पर्न्या जातलाइ रज षुवाउन्यालाइ १०० रूपैया दंड गर्नु रूपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु.

१३. पानि नचलन्यामा छिटो हालनु पर्न्या जातले अर्का लोग्न्या स्वास्नि मानिसलाइ मुषभित्र लिंग हालि विर्य झाऱ्यो वा झऱ्याको विर्य षुवायो भन्या र. इनै पानि नचलन्या जातका स्वास्निले रज षुवाइ छ भन्या. उपाध्या लगायेत् तागाधारि नमासिन्या मासिन्या गैह्र पानि चलन्या जातलाइ षुवाउन्यालाइ मासि दिनु. पानि नचलन्या छिटो हालनु नपर्न्यै नपर्न्या जातलाइ षुवाउन्यालाइ १५०  छिटो हालनु पर्न्या जातलाइ षुवाउन्यालाइ १०० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु.

१४. छोइ छिटो हालनु पर्न्या जातले अर्का लोग्न्या स्वास्नि मानिसलाइ मुषभित्र लिंग हालि विर्य झाऱ्यो वा झऱ्याको विर्य षुवायो भन्या र. इनै छिटो हालनु पर्न्या जातकि स्वास्निले रज षुवाइ छ भन्या. तागाधारि लगायेत् पानि नचलन्या छिटो हालनु नपर्न्या संमका गैह्र जातलाइ षुवाउन्यालाइ मासि दिनु. आफु मिल्दा छिटो हालनु पर्न्यै पर्न्या जातलाइ षुवाउन्यालाइ १०० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु.

१५. अर्का लोग्न्या स्वास्नि मानिस्को विर्य रज षान्या उपाध्या लगायत् चार्वर्ण छत्तिसै जातले जवरजस्ति परि षायाको रहेछ भन्या र १२ वर्ष मनिको वालक रहेछ भन्या जात जादैन. २ रूपैया गोदान लि धर्माधिकारले पतिया दिनु. षान्याले षुसि राजिले षायाको भया पतिया पाउदैन. तागाधारि जात नमासिन्या शुद्र जात हुंछ. नमासिन्या मतवालि जात मासिन्या जात हुंछ. मासिन्या पानि चलन्या नचलन्या गैह्र जात उस भंदा घटि मासिन्यै जात हुंछ.

# पादन्याको

१. तागाधारि लगायेत् चार्वर्ण छत्तिसै जात गैह्र कसैले आफु मिल्दा जातका र आफुभंदा घटि जातका मुषमा पाद्यो भन्या ५ रूपैया दंड गर्नु चार आना लि पतिया दिनु.

२. रजपूत लगायेत तागाधारि गैह्र जातले आफु भंदा ठुला जातका मुषमा पाद्यो भन्या ७ ॥ रूपैया दंड गरि धर्माधिकारले चार आना लि पतिया दिनु.

३. नमासिन्या मतवालि जात गैह्रले तागाधारि जातका मुषमा पाद्यो भन्या १० रूपैया दंड गर्नु. आठ आना लि धर्माधिकारले पतिया दिनु.

४. मासिन्या जात गैह्रले तागाधारिका मुषमा पाद्यो भन्या १५ रूपैया दंड गर्नु धर्माधिकारले १ रूपैया लि पतिया दिनु. नमासिन्या मतवालि जातका मुषमा पाद्यो भन्या ५ रूपैया दंड गरि. चार आना लि पतिया दिनु.

५. पानि नचलन्या जात र छिटो हालनु पर्न्या जात गैह्रले पानि चलन्या ठुला जातका मुषमा पाद्यो भन्या २० रूपैया दंड गर्नु. १॥ रूपैया लि धर्माधिकारले पतिया दिनु.

६. छिटो हालनु पर्न्या जातले छिटो हालनु नपर्न्या जातका मुषमा पाद्यो भन्या ५ रूपैया दंड गरि चार आना लि पतिया गराइ दिनु.

# थुकन्याको

१. व्राम्हणजातले रजपूत तागाधारि जातकामुष भित्र पारि थुक्या ५ रूपैया दंड गर्नु. नमासिन्या मतुवालि जातलाइ थुक्या २॥. रूपैया मासिन्या जातलाइ थुक्या १॥ रूपैया. पानि नचलन्या जातलाइ थुक्या ॥ दंड गर्नु. एस्ता वातको नलिस् नआया अदालत ठाना अमालवाट षोजि नगर्नु. अजानमा थुकि दिया मा कराउन आया पनि नसुँनु.

२. रजपूत तागाधारिले आफु भंद ठुला जातका मुषभित्र पारि थुक्या भन्या ७॥ रूपैया दंड गर्नु. छ आना लि धर्मा धिकारले पतिया दिनु. मुषभित्र वाहेक. अरूअंगमा थुक्न्यालाइ १ रूपैया दंड गर्नु स्नान गरि सुद्ध हुनु.

३. आफ्ना जात भात मिल्दा कसैले मुषभित्र पर्न्या गरि थुक्यो भन्या ५ रूपैया दंड गर्नु. चार आना लि धर्मा धिकार वाट पतिया दिनु. मुषभित्र वाहेक् अन्यत्र अंगमा थुक्यो भन्या आठ आना दंड गर्नु थुक्याइ माग्न्याले स्नान गरि शुद्ध हुनु.

४. मतवालि नमासिन्या जातले तागाधारि जातका मुषभित्र पारि थुक्यो भन्या १० रूपैया दंड गर्नु. आठ आना ली धर्मा धिकारले पतिया दिनु. मुष वाहेक् अरू अंगमा थुक्या १॥.रूपैया दंड गर्नु स्नान गरि शुद्ध हुनु.

५. मासिन्या मतवालि जातले तागाधारि जातलाइ मुषभित्र पारि थुक्या १५ रूपैया दंड गर्नु. १ रूपैया लि धर्मा धिकारवाट पतिया दिनु. मुषभित्र वाहेक् अरू अंगमा थुक्या २ रूपैया दंड गर्नु स्नान गरि शुद्ध हुनु.

६. मासिन्या मतवालि जातले नमासिन्या मतवालि जातलाइ मुषभित्र थुक्यो भन्या ५ रूपैया दंड गर्नु चार आना लि धर्मा धिकारवाट पतिया दिनु. मुषभित्र वाहेक् अरू अंगमा थुक्या १ रूपैया दंड गर्नु. स्नान गरि शुद्ध हुनु.

७. पानि नचलन्या जातले ठुला जातका मुषभित्र पारि थुक्या २० रूपैया दंड गर्नु १॥ रूपैया लि धर्मा धिकारवाट पतिया दिनु. मुषभित्र वाहेक् अंगमा थुक्या २॥ रूपैया दंड गर्नु. ॥ लि धर्मा धिकारवाट पतियादि प्रायश्चित गरि शुद्ध हुनु.

# काट्छु भनि हतियार झिकन्या

१. कसैले कसैलाइ मार्छु भनि षुकुरि तरवार षुडा कटारि भाला हातले मात्र समायो म्यान दापवाट झिकेन न्भया र. षालि वंदुक धनु मार्छु भनि हातमा मात्र लियो भन्या तेस्तालाइ २॥. दण्ड गर्नु. भ्यान दापवाट झिकि मार्छु भनि षुकुरि तरवार षुडा कटारि भाला र. भऱ्याको वंदुक तिर चढाइ धनुकमान सोभ्याउन्यालाइ २०। रूपैया दंड गर्नु.

२. ज्यान मार्नाको मतलव नगऱ्याका जगा जमिन्का झगरामा भयो मेला जात्रामा भयो कारेवार लिनदिनका झगरा भै भयो नगद जिनिस् कसन्तमन्. जवाहेर गैह्रका झगरामा भयो मेला पात कुला घासपात जादा भयो स्वास्नि धनमाल चौपाया गैह्रका झगरामा कुट्पिट् हुदा. कसैले लट्ठि ढुँगाले हान्यो. कसैले हतियार चलायो भन्या. लट्ठि ढुँगाले हाँन्यालाइ कुटपिटका अैन वमोजिम सजाय गुर्न. एति गैह्रका झगरामा हतियार चलाइ ज्यान मरेनछ घाउमात्रै लायो भन्या. हान्याका घाउको लमात्री रोप्याका घाउको गैह्रो नापि एक अंगुलको घा भया १ वर्ष. दुयि अंगुलको घा भया २ वर्ष एसै रितले जति अंगुलको घाउ लाग्योको छ उति वर्ष कैद गर्नु. म्यादका रूपैया तिऱ्या लिनु.

३. कसैले कसैलाइ मोरो भनि रात दिनका विचमा. भीर भीरका रस्ता पोषरि इनार षोला जघार. साघु झोलंगा रूष भ्याल कौसि छानावाट र गैह्रा षाडीमा घव्याटि गर्धनिलाइ षसाइ दियो. एकलासमा पक्रि घिच्रामा पासो लायो. मुषमा माटो षाद्यो कपडा झार पात गैह्रले वुजोलायो. सुत्याका वेलामा घोक्रो समाइ अठ्यायो पत्थर मुढाले थिच्यो. ज्यू वचाइ आत्रा भनि फिऱ्याद गर्न आयो र. जस्का नाउमा फिऱ्याद गऱ्यो तेसलाइ ल्याइ रोवकार गर्दा सावित गऱ्यो भन्या. तेस्ता अपराधिलाइ अैन वमोजिमको अंससर्वस्व गरि दामल गर्नु. कोहि सषलषइवि दसिको संका पाइ पोल्याको रहेछ भन्या. संका पुऱ्याइ षोजन्या पोलाह ठहर्दैन दंड जरिवान पनि केहि पर्दैन. ज्यू भन्या मऱ्याको रहेछ इवि दसि सषलषको संका नपुऱ्याइ रिसले अत्तोलाइ पोल्याको ठहेऱ्यो भन्या ५ वर्ष कैद गर्नु. इन्का म्यादका रूपैया नलिनु.ज्यू भन्या मऱ्मयाको रहेनछ अम्काले ज्यू मार्न लाग्यो भनि पोल्यो साविबत गर्न सकेन भन्या तेस्तालाइ २ ॥ वर्ष कैदगर्नु. म्यादका रूपैया लि छाडीदिनु. स्वास्निमानिसले एहि व्यहोरा गऱ्याको भया. लोग्न्यामानिसलाइ लेष्याका सजायको आधि कैद गर्नु.

४. उपाध्या व्राम्हण अरू गैह्न जात कसैले कोहि विराव नगर्‍या मानिसलाइ मारौ भनि हतियार चलाइ घा लायो भन्या त्यो घा लाउन्या उपाध्या हवस् वा अरू कोहि जात हवस्. तेस्ता घा लाउन्यालाइ घा लाइ माग्न्याले हानि ज्यान मार्‍यो भन्या पनि तेस्को ज्यान पनि जादैन षतवात पनि लाग्दैन.

५. निसाफले वेजात्री गर्न्यालाइ कुटपिट गर्नु पर्न्यै थियो ३।४ जनाले पक्रि कुटपिट गर्दा आफैले वेजात्री विद्दत गरि विराउन्या आफै हतियार चलाउन्या गर्‍याको रहेछ भन्या ज्यान मार्‍याको रहेछ भन्या ज्यानको वदला ज्यान्. ज्यान मार्‍याको रहेनछ भन्या. छर्‍याक् छुरूक् हतियार चलाइ घा लायामा आफुले कुटियाका वषत्मा हतियार चलायाको हुनाले हान्याका मा लमाइ रोप्याकामा गैह्रो नापि जति अंगुलको घाउछ उति वर्ष कैद गर्नु म्याद का रूपैया दिया लिनु.

६. कसैलाइ पाताफर्काइ वाधछान गर्‍यो तेसै पिरले थलापरि काममानलागी ५ दिन भित्रमा मर्‍यो भन्या. वाधन्या व्राम्हण रहेछ भन्या अैन वमोजिम अंस सर्वस्व गरि दामल गर्नु अरू जातले रहेछ भन्या. ज्यानको वदला ज्यान काटि मारिदिनु. घाउ पनि केहि देषियाको छैन. काममा पनि लागी ५ दिनमित्रैमा मर्‍याको रहेछ भन्या. तेस्का पिरले मर्‍याको ठहर्दैन षतवात कोहि लाग्दैन. नित्रा सित वाध्याको रहेछ भन्या पनि षत लाग्दैन. वेकसुरामा वाध्याको रहेछ भन्या वाधन्याको अैन वमोजिम सजाय गर्नु.

# ज्यानमाराको

१. उपाध्या व्राम्हण जैसि व्राम्हण र. तेह्रौत्या भट्ट गैह्र देसि व्राम्हण कसैले मानिस माऱ्या अैन वमोजिमको अंस सर्वस्व गरि दामल गर्नु.

२. रजपूत जातले आफ्ना हाड्नातामा र. आफुभंदा उपल्ला जातमा करणि र. चोरि गैह्र. कुरा गऱ्यामा अैन वमोजिम मुडीन्या. दामल हुन्या. कैद हुन्या. दंड हुन्या. सर्वस्व हुन्या हुंछ. ज्यान जांदैन. जार्‍ गऱ्यामा साधुको षुसि. जार काटचो भन्या साधुलाइ षत लाग्दैन. रजपूतले मानिस माऱ्यो भन्या ज्यानको बदला ज्यान काटिंछ.

३. उपाध्या व्राम्हण जोगि भयाका जैसि वाहुन्. जोगि भयाका. रजपूत जोगि भयाकामावलिको पत्ता नलाग्याका. जोगि भयाका र. कसैसित नविग्ऱ्याका उपाध्याका र. जैसिका विधुइ. दस नाम र जोगि जंगम से वडाले ल्याइ. जन्म्याका सतान्. औ वावु र. मावलिका पत्ता नलाग्याका र मताफकिर. कानचिऱ्याका कानफट्टा. यस्ताले ज्यान जान्या टक्तिर गऱ्या भन्या. ज्यानको वदला ज्यान नलिनु. अैन वमोजिमको अंस सर्वस्व गरि दामल गर्नु.

४. तागाधारि क्षत्रि गैह्रमतवालि शुद्र जात. इन्हेरूका संतान दस नाम जोगि जंगम सेवडासित मुडियाको र. इनैका कंन्या विधवा वेस्या दस नाम जोगि जंगम सेवडाले ल्याइ तिनैवाट जन्म्याका संतान मुडियाकाले ज्यान माऱ्यो भन्या ज्यानको वदला ज्यान लिनु.

५. सवै थोक थाहा पाउन्या चतुरो जाँन्या. मुषले वोलन नसकन्या. लाटाले हतियार लट्ठि ढुँगाले हानि मानिस माऱ्यो भन्या.ज्यानको वदला ज्यान लिनु. गर्न्या नगर्‍र्या कुरो थाहा नपाउन्या ग्वागाले मानिस माऱ्यो भन्या तेस्तालाई १२ वर्ष कैद गर्नु.

६. चार वर्ण छतिसै जात गैह्रका सधवा विधवा र. ११ वर्ष देषी माथिको कंन्याले मानिस माऱ्या भन्या. तेस्ता स्वास्निलाइ दामल गर्नु. सर्वस्व नगर्नु.

७. आफुले जन्मायाका छोराछोरि मार्न्या र. आफ्नु लोग्न्या मार्न्या चार वर्ण छतिस जातका स्वास्निलाइ दामल गरि. हात गोडामा नैल हाली.भ्कलषाना गोल घरमा रषी रोजको चार पैसा सिधा दिनु. वाहिर ननिकालनु.

८. कसैले आफ्ना जगा जमिन नगद जिनीस. चौपाय कमारा कमारि गैह्र मुद्दामा झगरा भै कसैलाइ ढेरै जनामिली ज्यान मार्‍याको रहेछ भन्या. मारौं भनी मतलव गर्न्या समतन्या एक हाँन्या १ मार भनी वचन दिन्या १ इ तिनजनाको ज्यानको वदला ज्यान लिनु. इन देषी वाहेक अरू छेकि छेकि कुटाइ मराउन्यालाइ दामल गर्नु अंन्यायमा अर्काको ज्यानमार्‍याको देषी नछुटचाइ हेरी रहन्यामा कुटन्या मार्न्या भंदा हेरी रहन्या ढेरै रहा छन्भन्या १६ वर्ष देषी माथिका ६५ वर्ष सम्मका जानकार. जवानलाइ जनही २०।२० रूपैया डंड गर्नु. कुटन्यामार्न्या भंदा देषन्या मानिस थोरै रहेछ भन्या जानकार. हउन् वा वुढा वालष हउन्. इन्हेरूलाइ षत वात लाग्दैन.

९. कोही लोग्न्या मानिसले. रात दिनका विचमा धनमालका लालचले भयो. अरू केही इविले भयो कसैलाइ मारूं भनी हतियारले हानी. रोपि जहर विष षुवाइ ज्यानमार्न्या भिरभिर्का रस्ता पोषरि गैह्राषाडी. इनार षोला जघार. साघु झोलागापुल पर्षाल् डु ं गा रूष झ्याल कौसि छानावट घच्याटी गर्धनी लगाइ षसाउन्या वगाउन्या. यकलास्मा पक्री पासो लाउन्या. मुषमा माटो कपडा झारपात गैह्रले वुजो लाउन्या गरि मानिस मार्‍याको रहेछ भन्या.इन्मा मार भनि वचन दिन्या मार्नालाइ समाति दिन्या जति जना छन्. तिन्हेरू हन्या र घच्याटि दिन्या जति जना छन् तिन्हेरू मार्न्या वेलामा संग गयाको भया पनि नगयाको भया पनि. मार्नाको पैल्हे मतलव को कुरो उठाइ मार भनि वचन दिन्या र. हतियार दिन्या. यतिका ज्यान्को वदला ज्यान लिनु. भागला भनी विकट वस्न्या मारोस भनी वरिपरिवाट छेकि दिन्याहरूको अैन वमोजिमको अंस सर्वस्व गरि दामल गर्नु.अरू मार्नाको मतलवमा पस्याका. मार्न्या ठाउमा पनी गयाका. हतियार नचलाउन्या. नछेकन्या. नसमान्तन्या. यस्ता यस्ता मतलविहरूलाइ अंस सर्वस्व गरि १२ वर्ष कैद गर्नु. मतलवमा यस्पाका मार्न्या ठाउमा नजान्याहरूलाइ सर्वस्व गरि ६ वर्ष कैद गर्नु. म्यादको डवल् दिया पनी रूपैया लीनछाडनु. यही विहोरा गरि स्वास्नि मानिसले ज्यान मार्‍याको रहेछ. भन्या दामल गर्नु. यसै अैन मा लोग्न्यामानिसलाइ दामल गर्नु भनी लेषियाको षत. स्वास्निमानिसले गर्‍याको रहेछ भन्या. १२ वर्ष कैद गर्नु. अरू कैद हुन्या

कुरामा स्वास्निमानिस्को सर्वस्व हुदैन. सर्वस्व नगरी लोग्न्या मानिसलाइ लेष्याका कैदको आधि कैद गर्नु. स्वास्नि का म्यादका रूपैया दिया लि छाडि दिनु.

१०. कोही लोग्न्या मानिसले. कसैलाइ मारौं भनी हतियार्ले हान्यो. जहर विष षुवायो भिर भिरका रस्ता गैह्राषाडी पोषरि इनार षोला जघार साघु झोलगा पुल पर्षाल्. डुँगा रूष झ्याल कौसि छानावाट घच्याटि षसायो. यकलास्मा पक्री पासो लायो. मुषमा माटो कपडा झारपात गैह्रके वुजो लायो र. त्यो मानिस मरेन दैव संजोगले वाच्यो वा. गुहारि पाई वाच्यो वा इलाजहरूले वाच्यो भन्या. इन्मा मार भनी वचन दिन्या मार्नालाइ समाति दिन्या जति छन्. तिन्हेरू हाँन्या र घच्याटन्या पनी जति छन्. तिन्हेरू उसवेलामा संग गयाको भया पनि. नगयाको भया पनी. पैल्हे मतलव कुरो उठाइ मार भनि वचन दिन्या. यतिको अैन वमोजिमको अंस सर्वस्व गरि दामल गर्नु. भाग्ला भनी विकट वस्न्या र. मारोस भनी वरिपरिवाट छेकन्याहरूलाइ अैन वमोजिमको अंस सर्वस्व गरि ६ वर्ष कैद गर्नु. अरू मतलवमा पस्याका मार्न्या ठाउमा पनी गयाका. हतियार नचलाउन्या. नछेकन्या. नसमातन्या. यस्ता मतलविलाइ सर्वस्व गरि ३ वर्ष कैद गर्नु. मतलव गरि मार्न्या ठाउमा नजान्यालाइ र. मतलव गऱ्या छन्. गर्न नपाइ जाहेर भयो भन्या. तेस्तालाइ सर्वस्व गरि १॥. वर्ष कैद गर्नु. म्यादका रूपैया नलिनु. यही वेहोरा स्वास्नि मानिसले गऱ्याको रहेछ भन्या. दामल हुन्या षत्मा स्वास्निमानिसलाइ १२ वर्ष कैद गर्नु. अरू विहोरामा स्वास्नि मानिस्को सर्वस्व हुदैन. सर्वस्व नलिनु. कैदमा लोग्न्यामानिसलाइ लेष्याका कैदको आधि कैद गर्नु. स्वास्निमानिस्को म्यादका रूपैया दिया लि छाडि दिनु.

११. विना हक्मा एक जाना माथि चार जना आइ लाग्यो र. लात्तले लट्ठिले कुट्पिट् गऱ्या तेसले ज्यू वचाउन निमित्त. हतियार काढि पन्साउदा. कोही मऱ्यो भन्या तेसलाइ षत वात लाग्दैन. एक जना माथि वेहक्मा ३ जना आइलाग्या. लात्तले लाठाले कुट्पिट् गऱ्या र. तेसले हतियार चलायो र. घाउ लाग्यो भन्या षत वात लाग्दैन.

१२. कोही लोग्न्यामानिसले वा. स्वास्नि मानिसले सुत्याका बेलामा वा. विउझामा लोग्न्यालाइ हवस्. स्वस्निलाइ हवस्. वालषलाइ हवस्. मारौं भनि. रेटेछ घोचेछ हानेछ. पत्थर मुढाले थिचेछ. पासो लायेछ. मुषमा वुजो लायेछ र. ज्यान मरेछ भन्या पनि. दैव संयोगले वाचेछ

भन्या पनी. वाहुन् र. अैन वमोजिमका भेषधारिलाइ. उस्को अंस सर्वस्व गरि स्वास्निलाइ सर्वस्व नगरि दामल गर्नु. अरू जातलाइ ज्यानको वदला ज्यान् मारी दिनु.

१३. कसैले सावुद मानिसलाइ. लट्ठि ढुँगाले हान्यो. हान्याका घाउ पाकी निको नभै तेसेका पीडाले. २२ दिनभित्र मऱ्यो भन्या तेसैका चोटले मऱ्याका ठहर्ना ले. काटिन्या जातको ज्यानको वदला ज्यान काटी मारी दिनु. नकाटिन्या जात भया. अैन वमोजिमको अंस सर्वस्व गरि दामल गर्नु. २२ दिनदेषी उप्रान्त. ३ मैन्हा भित्र मऱ्यो भन्या. सर्वस्व गरि दामल गर्नु. तेसै घाउको दर्द निको नभै. तेसै पिरले ३ मैन्हा उप्रान्त ६ मैन्हाभित्र मऱ्यो भन्या १०० रूपैया डंड गर्नु. रूपैया नतिऱ्या कैद गर्नु. ६ मैन्हा उप्रान्त. मऱ्याको भया र कुटयाको २२ दिनभित्रै छे रूवा विफर आडचा षवडचा लडि वगिलोटि दाँत हुन्याले टोकि मऱ्याको भया ज्यान माऱ्याको षत लाग्दैन. जाहासम्मको कुट्पिट् गऱ्याको हो उसै उसै अैन वमोजिम दंड कैद गरि छाडि दिनु

१४. कसैले मलाइ कुटपिट् गऱ्यो भनी. कुटीन्याले आइ फिराद गऱ्यो र. अैन वमोजिम् कुटन्यालाइ डंड भया पछि. कुटचाका पिरले २।४ दिन थलि निको भै आफ्ना काज काम गर्न हिड्न डुलन लाग्यो पछिवाट अरू वेथा लागि २२ दिनभित्रमा मऱ्यो भन्या निको भै काजकाम गर्नु र हिड्न डुलन लाग्याको हुनाले कुट्न्यालाइ फेरि षत वात लाग्दैन.

१५. कसैले लात्तले षांद्यो लट्ठि ढुँगाले हान्यो र थला परि हिड्न सकेन तेसै पीरले २२ दिनभित्रमा मऱ्यो भन्या. तेसैले माऱ्याको ठहर्छ. मार्न्याको ज्यानको वदला ज्यानलिनु. उठन नसकी तेसै पीरले २२ दिन नाघ्या पछि मऱ्यो भन्या. ज्यानको वदला ज्यान हुदैन. थला पर्न्या गरि कुटचा वावत् ६० रूपैञा दंड गर्नु. रूपैञा नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

१६. कसैले गाला ठोक्यो. हातले कुठाउमा १ चोट् देषी अर्घ्यालो हान्यो तेसैका पीरले थला परि उठन सकेन ७ दिनभित्रमा मऱ्यो भन्या तेस्को ज्यान मारिंछ. ७ दिनपछि मऱ्यो भन्या. ज्यानको बदला ज्यान हुदैन. कुटचाका षत वमोजिमको जरिवाना गर्नु. गाला ठोक्योका १।२ दिन थली. हिड्न डुलन काम गर्न लाग्या पछि ७ दिनभित्रमा मऱ्यो भन्या पनी. ज्यानको वदला ज्यान हुदैन. कुट्पीट्का अैन वमोजिम्. डंड गर्नु.

१७. ज्यान मारा चोर वापति षतुकी धनिको घर छाडी भाग्याका वाँधा कमारा कमारि कसैले यो यस्तो काम कुरो गर्न्या हो भनी पोल्दा. पक्री वाधी नेल ठिगुरा चमौट् गैह्र वंधनमा हाली ल्यायाका मानिस. नदिमा भीरमा षाडि भ्याल छाना इनार सांघु झोलंगा ढुँगावाट फाल हाली लडि वगि दौड्दा. इकर लागी मरोस्ता पनि थुनि राष्याका ठाउमा जहर विषषाइ भयो. सेरीइपासोलाइ मऱ्यो भन्या पनि पक्री ल्याउन्या थुन्न्यालाइ षतवात लाग्दैन.

१८. अर्कालाइ वेहक्मा मारौ भंन्या. मतलव गरि पक्रन्या वान्हामा काटिन्या जातलाइ काटिदिनु. नकाटिन्या जातकालाइ दामल गर्नु. हाकिमका मर्जि आज्ञा र. अडा अदालत अमालवाट पक्रन पठायाकालाइ पक्रील्याउन्दा. अर्काले विचमा चोट् छोडी मारेछ भन्या. मार्न्यालाइ अैन वमोजिमको सजाय गर्नु. पक्रन्यालाइ षतवात लाग्दैन.

१९. अडा अदालत अमालवाट र. हाकिम्का मर्जि आज्ञाले जगा जमिन्. नगद जिनिस् चौपाया कमारा कमारि लिन दिन गैह्र कुरामा. लिन.पक्रन पठायाकालाइ. प्यादा सिपाहिले पक्री ल्याउदा. विचमा पक्रियाका लाइ कसैले कुट्पिट् गरि ज्यान मरेछ भन्या. व्राम्हणले रहेछ भन्या. अैन वमोजिमको अंस सर्वस्व गरि दामल गर्नु. अरू जातले भया ज्यानको वदला ज्यान लिनु.पक्रन्या र पक्रि ल्याउन्या प्यादा सिपाहिलाइ षतवात लाग्दैन. हाकिम् अडा अदालत अमालले नभनी. पक्रि ल्यायाकालाइ अर्काले चोट् छाडि माऱ्याको रहेछ भन्या. जति जनाले चोट् छोडयाको छ. उति जनालाइ. काटि.न्या. जातकालाइ. ज्यानको वदला ज्यान लिनु. नकाटिन्या जातलाइ. अैन वमोजिम्को अंस सर्वस्व गरि दामल गर्नु. पक्रन्यार पक्रि ल्याउन्याको ज्यू जादैन. अैन वमोजिमको अंस सर्वस्व गरि ली. छोडि दिन

२०. अर्काको ज्यान मारीकोहि मानिस लङ्घा सिवाना नाघी. मध्येस भोट् तर्फ भागि गयो भन्या तेस्तालाइ मध्येस तिर गयाको भया रजिडंदसित भनी. भोट् तर्फ गयाको भया भोटका मोष्याकाजि सित भनी. ञाहा झिकाइ ज्यानको वदला ज्यान लिनु. विराना मुलुकमा गै ज्यान मार्न विराना मुलुकमा गै समाउन पनी हुदैन.

२१. कसैले मानिसलाइ मार्न लाग्यो र. साधुले गुहार देउ भनी. गुहार माग्दा षबर सुनी. गुहार नदीन्याहरूमा मानिस हेरी. औबल्लाइ २५ दोयेमलाइ २० सिमलाइ १५ चाहारलाइ १० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु.

२२. राजा वजिर. र. देस देसवाट आयाका उकिल् वकिल् सनवंधि कुरा वाहेक कसैले कसैको ज्यान माऱ्यो भन्या. ज्यान मार्‍र्या र. ज्यान मार्नाको मतवल गर्न्‍याहरूलाइ अैन वमोजिम सजाय गर्नु. ज्यान मार्नाका मतलवमा नपस्याका ज्यान मारिया पछि थाहा पाइ दवाउन्यामा. आफ्ना आमा वावु स्वस्नि सहादर दाज्यू भाइ दिदि वैन्हि छोरा छोरि सासु वुहारीले दवायामा यतिलाइ षतवात लाग्दैन. गाउका जान्कारद्वाऱ्या मुषिया थरि नाइक्या महान्याप्रधान मिझार ज्येठा वुढा गौरूं कटुवाल्याहरूले दवायाको भया अैन वमोजिमको अंस सर्वस्व गरि १ वर्ष कैद गरि छाडि दिनु. अरू गाउका दुनिञा रैतिले सुनि दवायाको भया अैन वमोजिमको अंस सर्वस्व गरि छाडि दिनु.

२३. कसैले कसैलाइ ज्यान मारूं भंन्या मतलव गऱ्याका छन्भन्न आयो र. उसले पोल्याकालाइ झिकाइ रोवकार गर्दा. मानिस मार्नाको मतलव गऱ्याको केही ठहरेन रीसले पोल्याको ठहऱ्यो भन्या. तेस्ता पोलाहा लोग्न्या मानिसलाइ सर्वस्व गरी २ वर्ष कैद गर्नु. म्यादका रूपैया दिया नलिनु. स्वस्नि मानिसलाइ २० रूपैञा दंड गर्नु. नतिऱ्या कैद गर्नु.

२४. सर्कारका देउढिमा पहरा वस्न्या. षजानामा पहरा वस्न्या. हुकुमले र कमानले अरू जगामा पालो पहरा वस्न्या. नगद जिनिस् चौपाया मानिस्को पहरा वस्न्या औ. रमन् विकटमा पालो वस्न्या मानिसलाइ कसैले वंदुक तिर हतियार चला यो र घाउलागी. पालो वस्न्याको ज्यान मरेछ भन्या पनि. मरेनछ भन्या पनी तेस्ता हतियार चलाउन्यालाइ काटी ज्यानमारी दिनु. रगतमात्रै आयाको भया पनी काटिदिनु. हतियार भन्या चलायेछ. रगत आयाको रहेनछ भन्या दामल गर्नु.

२५. लाल मोहोर दस्कतले अघि देषी वंद भयाका वाटामा जसले घुषषाइ षर्षुसामत्. माया मोलाहिजा पछि लागी. ज्यू मार्न्यामानिसलाइ उम्काउछ. उसलाइ दामल गर्नु. चोरि गरि आउन्यालाई उमका यो भन्या. जति चोरि गरि भाग्याको छ. उम्काउन्यावाट उति विगो लिनु.

चोर फेला पऱ्यो भन्या तेरो विगो यसैवाट उठाइले भनी सौपी दिनु. अरू कुररो गरि भाग्याकालाइ. उमकाउन्यालाइ भाग्न्यालाइ. जौन सजाय जौन विगो तिर्नु भनी लेषियको छ. सोही सजाय गर्नु.

२६. हुकुमले रह्याका चौकि पहरामा कसैले हतियार चलाइ. चौकिदारलाइ काटी मिची गयो भन्या. त्यो काटिन्या मानिस्. मरोस्त पनी घा मात्र लागी वाचोस्ता पनी. चौकिमा हतियार चलाउन्यालाइ. ज्यानको सजायमा दामल गर्ना जातलाइ दामल गर्नु. काटिन्या जातलाइ काटी मारी दिनु.

२७. हुकुमले पहरा चौकि वस्याका ठाउमा जान हुदैन भनी. चौकिदार पहरा वालले रोकदा. पहरावाल र. चौकिदार माथि हतियार झिक्यो वंदुक ताक्यो भन्या. तेसलाइ पहरावालले र. चौकिदारले काटि मारि दिनु. षतवात लाग्दैन.

२८. लोग्न्यामानिस कसैले कसैलाइ ज्यान मार्नाको मतलव गरि जहर षुवाउन तंयार हुन्या र. हतियार ली छिडि गौडा वथान्यालाइ पक्री सावित गर्दा. ज्यान लियाको रहेनछ. मतलव मात्र गऱ्याको रहेछ भन्या.मार्नाको मतलव गर्न्या सवैलाइ ९ वर्ष कैद गर्नु. हतियार चलाइ ज्यान वाच्याको रहेछ भन्या. हतियार चलाउन्यालाइ हान्याका घाको लमाइ नापी हतियार रोप्याका घा मा गैह्रो नापी जति अंगुल घा लाग्योकोछ छ. एक अंगुलको घा भया ७ वर्ष २ अंगुलको घा भया ८ वर्ष. जति अंगुलको घा छ. उसैरीतले वढाइ उति वर्ष कैद गर्नु. मतलवमा जान्या हतियार नचलाउन्यालाइ ६ वर्ष मात्रै कैद गर्नु. जहर भन्या षुवायेछ. ज्यान भन्या मरेनछ भन्या १२ वर्ष कैद गर्नु. इनहरूले कैदका रूपैञा डवलका हिसावले तिर्छु भन्या पनि तिरी जान पाउदैनन्.म्यादका रूपैञाली छोडचा भन्या ती छोड्न्या अदालत ठाना अमालका हाकिमलाइ. उहि षतुकीका कैद वमोजिम कैद गर्नु. सावित गर्दा ज्यान माऱ्याको रहेछ भन्या. मतलब दिन्या र. ज्यान मार्न्यालाइ ज्यानको बदला ज्यान मारी दिनु.

२९. स्वास्निमानिस कसैले कसैलाइ ज्यान मार्नाको मतलव गरि जहर षुवाउन तयार हुन्या र. हतियार ली छिडि गौडा वथान्यालाइ पक्री सावित गर्दा. ज्यान माऱ्याको रहेनछ. मार्नाको मतलवमात्र गऱ्याको रहेछ. भन्या. मतलव गर्न्या स्वास्निमानिस. सवैलाइ ३ वर्ष कैद गर्नु.

हतियार चलाइ ज्यान वाच्याको रहेछ भन्या. हतियार चलाउन्या लाइ. हान्याका घाको लमाइ नापी. हतियार रोप्याका घा मा गैह्रो नापी. जति अंगुला घा लाग्या को छ. एक अंगुलाको घा भया ४ वर्ष २ अंगुलको घा भया ५ वर्ष. जति अंगुलको घा छ. यसै रितले वढाइ. उति वर्ष कैद गर्नु. मतलव मा जान्या हतियार नचलाउन्यालाइ मतलवका ३ वर्ष मात्रै कैद गर्नु.जहर भन्या षुवाइछ. ज्यान भन्या मरेनछ भन्या. १२ वर्ष कैद गर्नु. इनहरूले कैदका रूपैञा डवलका हिसावले तिर्छु भन्या पनि तिरी जान पाउदैनन्. म्यादका रूपैञाली छोडचा भन्या ती छोड्न्या अदालत ठाना अमालका हाकिमलाइ उही षतुकीका कैद वमोजिम कैद गर्नु. सावित गर्दा ज्यान माऱ्याको रहेछ भन्या. मतलब दिन्या र. ज्यान मार्न्या स्वास्निमानिस लाइ दामल गर्नु.

३०. ज्यान जान्या तक्सीर गर्न्या षतुकीहरूको ज्यान् मार्नु पर्दा कि ज्यान काटिदिनु. किफासि दिनु. अरू थोक सजाय गरि ज्यान नमार्नु. यति २ कुरा देषी वाहेक अरू सजाय गराइ ज्यान मराउन्या वजिरलाइ १०००० रूपैञा जरिवाना गर्नु.

३१. कोही मानिस भीर पोषरि इनार षोला साँघु भ्कोलंगा रूष भ्याल कौसि छानावाट र. गैह्रा षाडिमा षसि लोटि वगी डुवीलडी मऱ्या. अथवा आफैले फाल हाली लडि डुविवगी मऱ्यो. अथवा आफैले पासोलाइ वा. हतियार चलाइ हत्या गरि मऱ्यो अथवा आफैले जहर विष षाइ वा. अमलला गुंचिजहरू षाइ वेहोस भै मऱ्यो. अथवा ठक्कर लागी लोटि भारिस्मेत लडी मऱ्यो. अथवा वन जाँदा ढुंगो लडचाको लागी मऱ्यो. अथवा अकस्मात केही वेथा र घाउ जाहेर नभै मऱ्यो. वा सुत्याको सुत्यै मऱ्यो. अर्का कसैले हतियार चलाइ काटी माऱ्यो. यस्ता गैह्र वेहोराले मऱ्याका मानिसलाइ रीसले अत्तोलाइ फलानाले माऱ्यो भनी पोलन आयो भन्या. जसलाइ पोल्याको हो. उसलाइ भ्किकाइ रोवकार गर्दा साछि गुहाइ देषाइसावित गर्न सकेन यहीलेषियाका वेहोराले कालले मऱ्याको र. आफै हत्या गरि मऱ्याको वा. अरूले माऱ्याको दैवागत परी अकस्मात मऱ्याको ठहऱ्यो वा. मऱ्यो भन्याको मानिस ज्यू दोरहेछ भन्या.तेस्ता पोलाहालाइ ५ वर्ष कैद गर्नु. म्यादका रूपैञा दोवर दिया पनि लिी. नछाडनु. कैद गर्नु स्वास्निमानिसले यही वेहोराको कुरो पोल्याको रहेछ. सावित गर्न सकीन भन्या. तेस्ता पोलाहा स्वास्निलाइ २॥ वर्ष कैद गर्नु. म्यादका रूपैञा दोवर दियाली छाडीदिनु.

३२. कसैले कसैलाइ लाठा ढुँगा लष्ठि हात लात गैह्रले कुटपिट गऱ्यो. कुटचा पछि केही दिन थली हिड्न डुलन काजकाम गर्न लाग्या पछि. अरू वेथा लागी २२ दिनभित्रमा मऱ्यो भन्या. आफ्ना कालले मऱ्याको ठहर्छ. कुट्न्यालाइ ज्यान माराको तक्सीर लाग्दैन. कुट्पिट्का अैन वमोजिम डंड सजाय गर्नु.

३३. कसैले कसैलाइ कुटपिट् गऱ्यो कुटिन्या मानिस थलियाको थियेन. वा थली निकोभै काममा लाग्याको थियो. कुटियाका २२ दिन नाघ्या पछि अरू वेथालागि मऱ्यो भन्या. पछि तैले कुटचाका पिरले २२ दिन भित्र मऱ्या भनी पोल्यो. रोवकार गर्दा २२ दिन नाघ्या पछि मऱ्याको ठहऱ्यो भन्या. अघि कुट्पिट् हुदा जाहासम्म भयाको हो. उति कुरो मात्र गरि पोलन्या पोलाहा लाइ १॥ वर्ष. अघि भयाका भंदा कुरो वढाइ रीसले पोलन्यान्लाइ २॥. वर्ष कैद गर्नु. म्यादको रूपैञा डवल दिया ली छाडी दिनु. स्वास्नि मानिसले भया यसैको आधि कैद गर्नु.

३४. दुइ जना मानिस मात्रै पर देस गाय वा. वन मेला गैह्रमा गयाका थिया. तेस्तैमा षोलो तर्दा भीरका रस्ता हिड्दा. पौडि षेल्दा ढुँगो मुढो लागी लडी बगि सगै भयामा हवस्. अघि पछि भयामा हवस्. येक जना मऱ्यो संग जान्याले मऱ्याका घरमा आइ यस्ता रीतले फलानु मऱ्यो भनी सुनायो. मन्याका जाहानले संका गरि यसैले दगा गरि हाम्रो फलानालाइ मारी दियो भनी कराउन आया. रोवकार गर्दा साछि गुहाइवाट भयो. अथवा २ जनाकेइविलाग पऱ्याको केही देषियेन. आफ्ना कालले मऱ्याको ठहऱ्यो भन्या. २ जनामात्रै भयाका संकामा पोल्याको रहेछ भन्या. घरका जाहानले रहेछ भन्या. षत लाग्दैन. अरूले रीसले पोल्याको रहेछ भन्या. यस्ता पोलाहालाइ २॥. वर्ष कैद गर्नु. म्यादका रूपैञा डवल दिया ली. छाडि दिनु. अरू स्वास्नि मानिस भया. १॥ वर्ष कैद गर्नु.

३५. जाँड् रक्सि अरक अफिम भांग धतुरो गेह्र लागु कुरो षाइ अर्कालाइ गालि गऱ्यो कुट्पिट् गऱ्यो अंग भंग गऱ्यो भन्या. कुट्पिट् अंग भंगका अैन वमोजिम डंड सजाय गर्नु. ज्यान मारेछ भन्या. मुडिन्याजात भया अैन वमोजिमको अंस सर्वस्व गरि दामल गर्नु. काटिन्या जात भया ज्यानको वदला ज्यान काटि मारि दिनु.

३६. कोही वौल्हायाका मानिसले मानिस माऱ्यो भन्या. त्यो वौल्हायाको मानिस. गर्ऱ्या नगर्ऱ्या. कुराको थाहा पनि पाउदो रहेनछ. जात जान्या अभक्ष गैह्र पनि षादो रहेछ. निर्वाण भै हिड्दो पनि रहेछ भन्या. अैन वमोजिमको अंस सर्वस्व गरि दामल गर्नु. गर्ऱ्या नगर्ऱ्या कुरो पनि थाहा पाउदो रहेछ. अभक्ष गैह्र पनि षादो रहेनछ. निर्वाण भै हिड्दो पर्ना रहेनछ भन्या. तेस्ता वौल्हाले मानिस माऱ्या. मुडिन्या जातलाइ अैन वमोजिम अंस सर्वस्व गरि दामल गर्नु. काटिन्या जातलाइ काटि मारि दिनु. अघि अभक्ष गैह्र षायाको रहेनछ. आफुले मानिस माऱ्या पछि. अभक्ष गेह्र दायाको ठहऱ्यो भन्या. तेसले ज्यू वचाउनाका लागि षायाको ठहर्छ. तेस्ता मुडिन्या जातलाइ. अैन वमोजिमको अंस सर्वस्व गरि दामल गर्नु. काटिन्या जातलाइ काटि मारि दिनु.

३७. कोही मानिस छेरूवा आँठचा षवटचा रोगले पक्रायको रहेछ वा. जरो अतिसार आउ रगत वाथ सुल वाकि र. अरू गैह्र वेथा लाग्याको रहेछ. लडि लोटि ठक्कर लागि वा. अघिवाट अर्का कसैले कुट्पिट गरि थलियाको रहेछ. एस्ता गैह्र रोगले काम गर्न. नसकन्या गरि. थलियाका रोगिलाइ कसैले कुट्पिट् गरि ज्यान मरेछ भन्या एकै चोटमात्र हान्याको भया पनि तेसले माऱ्याको ठहर्छ. रोगले मऱ्याको ठहर्दैन मार्ऱ्या मुडिन्या जात भया. अैन वमोजिमको अंस सर्वस्व गरि दामल गर्नु. काटिन्या जात भया ज्यानको वदला ज्यान काटि मारि दिनु. कुटिन्याको ज्यान मऱ्याको रहेछन भन्या. कुट्पिट्का अैन वमोजिममा दोवर वढाइ दंड कैद गर्नु.

३८. कोहि षटिरापटिरा भै. ओछ्यानमा पर्ऱ्या गरि थलियाका रोगिलाइ. कसैले कुट्पिट् गरि ज्यान मऱ्यो भन्या. यकैचोट मात्र हान्याको भया पनि तेसैले माऱ्याको ठहर्छ. रोगले मऱ्याको ठहर्दैन. मार्ऱ्या मुडिन्या जातलाइ अैन वमोजिमको अंस सर्वस्व गरि दामल गर्नु. काटिन्या जातलाइ ज्यानको वदला ज्यान काटि मारि दिनु. कुटिन्याको ज्यान मऱ्याको रहेनछ. भन्या. कुट्पिट्का अैन वमोजिम्मा दोवर वढाइ दंड कैद गर्नु.

३९. कसैलाइ अघि एकाले कुट्पिट् गऱ्याको रहेछ. कुटचाको दर्द निको नभै तेसै कुटिन्या मानिसलाइ. अघिल्लाले कुटचाका ८ घडि पछि देषी २२ दिनभित्र मा. अर्का कसैले कुट्पिट् गरि कुटिन्या मानिस मरेछ भन्या. अघिवाट कुट्न्यालाइ कुट्पिट् गऱ्यासम्मको षत लाग्छ.

कुट्पिट्का अैन वमोजिम दंड कैद गर्नु. पछिवाट कुट्न्यालाइ ज्यान मार्‍याको वात लाग्छ. मुडिन्या जात भया अैन वमोजिमको अंस सर्वस्व गरि दामल गर्नु. काटिन्या जात भया ज्यानको वदला ज्यान काटी मारी दिनु. ज्यान मर्‍याको रहेनछ. भन्या. कुट्पिट्का अैन वमोजिम्मा दोवर वढाइ दंड कैद गर्नु.

४०. फलानाले फलानालाइ ज्यान लिनाका लागी. फलानु कुरो गर्‍यो भनी कराउन आयो र. रोवकार गर्दा पोल्याको मात्र ठहर्‍यो भन्या ज्यान सनवंधका कुरामा पोलाहाले कचहरिमा कागज लेषी सहिस्मेत हाली दियाको भया. ज्यान संवंधका पोलाहालाइ लेष्याका अैन वमोजिम गर्नु. कागज लेषी सहि हाल्याको ररहेनछ वेडि कर्पन पनी पर्‍याको रहेनछ र. यस्ता कुरामा कायेल गराउन सक्तिन भन्यो भन्या. गालि गर्‍याको ठहर्छ. तेस्तालाइ ज्यान संवंधको कुरो भया २० दामल हुन्या कुरा भया १५ रूपैञा डंड गर्नु. रूपैया नतिर्‍या अैन वमोजिम कैद गर्नु.

४१. ज्यान मार्‍यो भन्या मुद्दामा अडा गौडा अदालत अमालमा पक्रि आइ कायेल भयाका मानिस इटाचपलिमा आउदा. इजहार लेषन्या देषन्या जाँन्या गुहाइ तेसरले लेष्याको जमान वंदि प्रमाण र. वा पतिले वक्याका कुराको मुषमिल्यो भन्या ति गुहाइ तेसर झिकाउनु पर्दैन. वा पतिलाइ अैन वमोजिम गर्नु. गुहाइ तेसरले लेष्याका जमान वंदि प्रमाणको वेहोरा र. वावतिले भन्याको कुरा मिलेन. फरक पर्‍यो भन्या. चाहिन्या मानिस प्रमाण झिकाइ रोवकार गरि जो ठहर्छ. अैन वमोजिम गर्नु.

# भवितव्यमा ज्यान मार्न्याको

१. कसैले १२ वर्ष देषीउभोका मानिसलाइ. ज्यान मर्न गयो भन्या भवितव्य ठहर्छ. वेहक्मा ज्यान मान्यावावत मार्न्याको अैन वमोजिमको अंस सर्वस्व गरि छोडि दिनु. अरू अंगमा हानेछ भन्या भवितव्य ठहर्दैन. १२ वर्ष देषी तलका लाइ १।२ चोट् हातले हान्दा मऱ्याको पनी भवितव्य ठहर्दैन. व्राम्हणले भया अैन वमोजिमको अंस सर्वस्व गरि दामल गर्नु. अरू जातले भया ज्यान को वदला ज्यान हुन्छ. कंठा पिढियामा यकै चोट् मुड्कीले हान्दा र. लवटाले गालमा यकै चोट् हान्दा.

२. अघि पछिको ज्यू जमिन् स्वास्नि धनमाल चोपाया गैह्र केहि कुरोको पनि आफुसित झै झगारइ विलाग केहीनपऱ्याका मानिसलाइ. रातका विचमा जनावरहरू केही हो भनी नचिन्ही हान्दा. कसैले मानिस मऱ्यो भन्या. भोर ठहर्छ. हांन्यालाइ षतवात लाग्दैन. तेसवाट मर्न्याको कृया षर्च ५० रूपैञा दिलाइ मार्न्यालाइ १ तिर्थ गराइ अवल्लाइ ५० दोयेम्लाइ २५ सिमलाइ १० चाहारालाइ ५ रूपैञा दर्ले गोदान ली. भोर्मा ज्यान मान्या वावत्को प्रायश्चित गराइ दिनु.

३. कसैले पशु पंक्षिलाइ हान्दा र. फलफुलहरू झार्दा. ढुँगाले लठ्ठिले झटाराले हान्दा अर्कालाइ लाग्यो र. जिउ मयो भन्या. मर्न्यालाइ कृया षर्चा हाँन्यावाट ५० रूपैञा दिलाइ दिनु. घा मात्र लाग्यो भन्या १० रूपैञा दिलाइ दिनु अरू सजाय पर्दैन.

४. जंगल्मा सिकार जादा. वनको मृगहो जनावरहो भनी तहकीत नवुझिवंदुक काढले हानी मानिस मर्न गयो भन्या. मर्न्याका भाइ छोरालाइ कृया षर्च मार्न्यावाट ५० रूपैञा दिलाइ दिनु. ज्यू मर्न गयेन घाउमात्र लाग्यो भन्या. घा लाग्न्यालाइ १० रूपैञा घाउलाउन्यावाट घा षर्च दिलाइ दिनु. अरू सजाय लाग्दैन.

५. वंदुक तिर हान्दा गोलितिर टपषायो मार हान्दा षुकुरि षुस्क्यो तरवार भांची उछिट्टि कसैको ज्यान मर्न गयो भन्या तेसलाइ षत लाग्दैन. प्रायश्चित गर्नु पर्छ. कृया षर्च ५० रूपैञा तेसैवाट दिलाइ दिनु. ज्यू मरेन भन्या घा षर्च १० रूपैञा तेसैवाट दिलाइ दिनु. ५ रूपैञा गोदान ली धर्मा धिकारले पतिया दिनु.

६. सहर भित्र सहरका नजीक्मानिस् हिड्न्या हुलन्या ठाउमा. मानिस् नहटाइ गोलिको टप्षान्या तजविज नराषी हाँदा. कसैलाइ गोलि लागी घा लाग्यो भन्या ५० रूपैञा. घा पुछ्याउनि दिलाइ दिनु. ज्यान मऱ्यो भन्या १०० रूपैञा कृया षर्च दिलाइ दिनु. अरू सजाय लाग्दैन.

७. कसैले लोग्न्या स्वास्नि केटाकेटीहरू कसैलाइ ली. षोला जघार तार्दा. तार्न्या कावलले नपुगी. षोलामा लोटीवगी. षोलो तार्न्याले थामन नसकी. मानिस हात आँग देषी षुस्की लडीवगी डुवी मऱ्यो भन्या तार्न्यालाइ षतवात लाग्दैन. प्रायश्चित पनी पर्दैन.

८. कसैले षोरियालो हस्या पोल्दा. सिकार षेल्दा. डढचालो लाउदा. वनमा मानिस चौपाया नदेषी. आगो लायो. तेसै आगाले मानिस चोपाया डढी मऱ्यो भन्या. भोर ठहर्छ. मानिस मरेछ भन्या डढेलोलाउन्यावाट मर्न्याको कृया षर्च २० रूपैञा दिलाइ दिनु. अरू षत्वात लाग्दैन.

९. कसैले काटचाको रूष ढली भयो. हागा काटता हागाषसी भयो. मुढागिड्दा मुढोढलींउछिट्टि भयो. काठ घिच्याउदा लडाउदा काठले मीची भयो. रूष ढाल्दा काठ घिच्याउदा. षोरिया वारी जोत्ता षंदा वाटो कुलो बनाउदा. ढुँगो डल्लो लडी. काठ थामन नसकीघर्की लडी मानिसलाइ लागी मिची ज्यू मऱ्यो भन्या र. चौपायालाइ लागी मिची मऱ्यो भन्या. भवितव्य ठहर्छ. लडा उन्यालाइ षत लाग्दैन. प्रायश्चित गर्नु पनी पर्दैन.

१०. कसैले रूष मुढा काट्ता वंचरो षुकुरि षुर्पा चुपि षुस्कि. कसैलाइ लागी ज्यू मऱ्यो भन्या. मार्न्यावाट मर्न्याको कृया षर्च २० रूपैञा दिलाइ. प्रायश्चित गराइ दिनु. घामात्र लाग्याको रहेछ भन्या. षर्च ५ रूपैञा दिलाइ दिनु.

११. नदि तर्दा लडी वगी मर्न्या. रूष भीर छाना भ्र्यालवाट लोटि मर्न्या सर्प्प चौपाया गैह्र जनावरले षाइ टोकी हानी मिची मार्न्या. वज्र परी आगा वारूदले पोली मर्न्या. ढुँगा मुढा रूष पैराले मिची मर्न्या. यस्ता दैवागत परी मर्न्या र. पानि नचल्न्या जातवाट मऱ्याका वाहेक अरू पानि चलन्या जातले भ्रुक्याइ. जहर विष षुवाइ भीर गंगा छाना भ्र्यालवाट घच्याटि हतियार चलाइ मर्न्या. चोरले काटि मर्न्या. जारिमा काटिन्या. इन्हे रूको दाह कृयागर्नलाइ पतिया प्रायश्चित गर्नु पर्दैन यस्तालाइ पतिया नगरि दाह कृया गर्न जान्यानौ भनी डंड गर्न्यालाइ. डंड गरि लियाको विगो फिर्ता गराइ. उसैले गऱ्याका पटक वमोजिम डंड गर्नु. हटना गरि दाह कृया अडकाउन्यालाइ ५ रूपैञा डंड गर्नु. रूपैञा नतिऱ्या अैन वमोजिम कैद गर्नु.

१२. वनका छेउमा घर गोठ वनाउन्याले. आफ्ना घरका वरिपरि डढेलाको वचाउ हुन्या गरि साफगरि राषनु. घर कटचारो वनाउन्याले सफागरि राषेनछ र. अर्काले वनमा लायाको डढोलो आइ घर कटचारो पोलि मानिस चौपाया धनमाल पऱ्यो भनि. कोहि कराउन आयो

भन्या भोर ठहर्छ. डढेलो लाउन्यावाट **देकुम मामा** १० रूपैया लि घर डढन्यालाई दिलाई दिनु. अरू विगो पनि दिनु पर्दैन. षत पनी लाग्दैन. प्रायश्चित पनी पर्दैन.

१३. अवउप्रान्त जंगलमा सिकार षेल्याले. गैडा कसैले नमार्नु. मारेछ भन्या गैडा मार्न्यालाइ ५० रूपैञा डंड गर्नु. अर्काले मार भंदा मार्‍याको ठहर्‍या. अह्राउन्यालाइ २५ मार्‍या लाइ २५ रूपैञा डंड गर्नु.

१४. जंगलका हातिलाइ. गोलिले हान्यालाइ २०० रूपैञा डंड गर्नु. अर्काले अह्राइ हान्याको भन्या. अह्राउन्यालाइ १०० हाँन्यालाइ १०० रूपैञा डंड गर्नु. गाउ घरमा आइ विद्दत गर्‍या र. मानिसलाइ जषम गर्‍या हातिलाइ गोलिले हांन्या मार्न्यालाइ वात लाग्दैन.

१५. जंगलका वाघ भालु वंदेल मार्न्यालाइ वात लाग्दैन.

१६. हुकुमले र सनदले सिकार नषेलनु. भनी वंद भयाका जंगलमा सिकार षेली. मृग चितल् जरायो चौगडा दम्सि गैह्रको सिकार षेली मार्‍यालाइ ५ रूपैञा दंड गर्नु.

१७. हुकुमले र सनदले सिकार नषेलनु. भनी वंद भया वाहेकका जंगलमा सिकार षेली मृगल चितल जरायो चौगडा दम्सि गैह्र मार्न्यालाइ षतवात लाग्दैन.

१८. आफ्नु वालि षान आयाका. मृग चितल जरायो चोगडा दम्सि गैह्र मार्‍याका कुरामा वात लाग्दैन.

१९. नेपाल षाल्डा भित्रमा पाल्याका. भागी गयाका जरायो मार्‍यालाइ ७० रूपैञा लगुना चितल् मार्‍यालाइ २० रूपैया मृग मार्न्यालाइ १० रूपैञा डंड गर्नु. ढेरै जना मिलि मार्‍याका रहा छन्भन्या. मार्‍या जति जना हुन्. उति जनावाट यही विगो उठाइ लिनु. मार्दामा सामेल नभयाका. मासुको विलो दिषान्यालाइ डंड पर्दैन.

# गोवध गर्न्या

१. जानि जानि गाइ मान्यो भन्या. तेस्तालाइ दामल गर्नु.

२. गाइलाइ कसैले जानिजानि हतियार चलायो. ज्यू मरेन भन्या. नमासिन्या जातलाइ अैन वमोजिम उस्को अंस सर्वस्व गरि छाडि दिनु. मासिन्या जात लाइ मासि दिनु.

३. कसैले गाइ फर्काउदा छेकता थुँदा ढुँगा लठ्ठिले हाँदा. गोरू सुवार्दा दाउदा. दाइ हाल्दा जोत्ता भवितव्य परि मऱ्यो भन्या. तेस्ता भोर्कालाइ १ रूपैञा डंड गरि. प्रायश्चित दिनु.

४. आफुले गाइ छेकता फर्काउदा. ढुंगोले दहले हांदा. कुठाउमा लागी गाइ गोरु मऱ्यो भन्या.हान्याले आहेर गर्न आयो भन्या अैन वमोजिम १ रूपैञा ली. नीति स्मृति गराइदिनु. अर्कालाइ तैले मारिस् भनी अत्तो लाया पछि आफुले मान्याको ठहऱ्यो भन्या. तेस्तालाइ १०० रूपैञा दंड गर्नु. आफै कालले मऱ्याकालाइ अर्काले मान्यो भनी पोल्यो. मान्याको ठहरेन. रीसले पोल्याको ठहऱ्यो भन्या. तेसलाइ ६० रूपैञा डंड गरि प्रायश्चित गराइदिनु. रुपैञा नतिऱ्या कैद गर्नु.

५. गाइ मान्याको देषी. जाहेर गर्न आयेन. दवाइराष्यो भन्या ५० रूपैञा जरिवाना गर्नु.

६. गाइलाइ हांदा रगत काढन्यालाइ २॥ रुपैञा डंड गर्नु. गाइ भैसिको गोडा भांचिदियो भन्या. धनिलाइ विगो पर सारि १० रुपैञा जरिवाना गर्नु. त्यो जषं भयाको वस्तु. जषं गर्न्यालाइ दिनु. गाइ षान्या जातले गाइको गोडा भांच्याको रहेछ भन्या. तेस्तालाइ गाइ नदिनु. गाइ पनि विगो पनि धनिको हुंछ.

७. कसैले भोर वाहेक जानि जानि गाइ गोरुलाइ मान्याको देषता. गाइ गोरु मार्न्यालाइ मारिदियो भन्या तेसलाइ षत लाग्दैन. भोरमा गाइ गोरु मार्न्या मानिसलाइ.कसै मानिसले मान्यो भन्या. मुडिन्या जातलाइ दामल गर्नु. काटिन्या जातलाइ ज्यानको बदला ज्यान लिनु.

८. गाइ गोरुका सिङ काट्नु पऱ्यामा. सिङ काट्ता षोऱ्याद भयामा. षुर पाना काट्ता घाउका किरा झिकदा धुदा घटिरामा र लोटि ठक्कर लाग्याका. पिडा भयाका ठाउमा फोर्नु पर्दा. डामनु पर्दामा र. रगत झिकनु पर्दा. गाइका उपकार निमित्तमा सवैले गर्नु हुंछ. उपकार गऱ्याका कुरामा षतवात लाग्दैन. अडा अदालत अमालमा साधनु पर्दैन.

९. गोर्षा राजभर मुलुक्मा. गाइ गोरु मार्न भनी. हतियार झिकी कसैले काटनालाई तयार भयाको देष्यो भन्या. मार्न हुदैन. नमार भनी मनाहि गर्नु. उति गर्दा पनि नमानी आफ्ना सामान्यमा. मान्यो भन्या. तेस्ता गोवध गर्न्या मानिसलाइ. उसै दिन उसै वेलामा उसै ठाउमा काटि मारि दिन्यालाइ. ज्यान मान्यौ भंन्या षतवात लाग्दैन.गोवध गऱ्याको उस वेलामा देषेन.

पछिवाट फलानाले माऱ्याको रहेछ भंन्या पत्ता लाग्यो भन्या. तेस्तालाइ पक्री नेल ठोकी अदालत ठानामा पुऱ्याइदिनु.

१०. गोर्षाराजभर मुलुक्मा चार वर्ण छत्तिसै जात गैह्रले. येकादसिका अंक लेषियाका दिन. कृष्ण जन्माष्टमिका दिन. सिवरात्रिका दिन. यतिमा परापुर्वदेषी चली आयाको नगरि नहुन्या पुजा गुठिमा वलिदान गर्ना वाहेक्. अरु पसु पंछि जल जंतु. गैह्र जीव काटमार नगर्नु. स्थल सिकार. जल सिकार पनि नगर्नु. इ लेषियाका दिनमा चौपाया पशु पंक्षि जल जंतु गैह्र ज्यू मार्न्यालाइ. जौन कुरो माऱ्याको छ उसैका मोल वमोजिम डंड गर्नु. कायेल नामा लेषियाका ज्यू जान्या षतका साइधुवाको यति लेषियाका दिनमा. ज्यू कटाउन्या अदालत ठानाका हाकिमलाइ २५ रुपैञा डंड गर्नु. रुपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु. यति दिनमा षान्याले. वासिमाछा मासु षान्यालाइ षत लाग्दैन. नषाया कर पनी छैन.

११. गाइ गोरु मार्नाको मतलव नगऱ्याका. वालि नालि षायो भनी धपाउनाका लागि लाठा ढुँगा लट्ठिले ३।४।५।७ पटक हांदा. गाइ गोरु मर्न गयो भन्या भवितव्य ठहर्छ. विगो भराइ विगै वमोजिम डंड गर्नु.

१२. भवितव्य परी गाइ मऱ्याको कसैलाइ नकही दवाउन्या र. अर्काले भवितव्य परि गाइ गोरु माऱ्याको देषी. सुनी कसैलाइ नकही दवाइ भात पानिमा वोर्न्या वोराउन्यालाइ करणिले स्मेत् भवितव्यको पतिया पाउन्या हुनाले. यस्तालाइ जनहि २० रुपैञा डंड गरि पतिया गराइदिनु. यस्ता कुरामा यसलाइ यति डंड गऱ्या. हामिलाइ क्या होला भनी अैन नहेरी नवुझी. अंनाजले डंड गर्न्या. अमालि द्वाराऱ्या गैह्रलाइ उसले डंड गरि लियाको विगो जस्को हो. उसैलाइ फिर्ता दिलाइ १० रुपैञा डंड गर्नु. वात लाग्न्यालाइ अैन भयाका कुरामा अैन वमोजिम्. अैन नभयाका कुरामा कौसल्मा जाहेर गरि अैन गरिदिया उसै अैन वमोजिम साधक गरि दिया साधक वमोजिम गरि छिन्नु.

१३. गोठमा वाध्याका गाइ गोरुहरु वाघले षाइ भयो. आगो लागी वज्र परि भयो. अथवा अरु वेथा लागी वा. वेथा रोग केही नलागी. अकस्मात परि वाध्याका दामलमा परि मऱ्या भन्या. भवितव्य ठहर्छ. अदालत अमालवाट २ आना दस्तुर ली पुर्जी गरि भोरको पतिया गराइदिनु.

१४. वोलन नजांन्या लाटाले गाइ गोरुलाइ हतियार लाठा ढुँगाले हानी घालागेछ. जषम भयाको रहेनछ भन्या १० कोर्राहानी छाडिदिनु. डंड हुदैन. पतिया गराइदिनु.

# षुर्सानिको

१. लोग्न्या मानिस कसैले मलाइ षुर्सानि हाली दियो भनी कोही कराउन आया भन्या जोरि पुर्पक्ष गर्दा. षुर्सानि हाल्यैको ठहऱ्यो भन्या. लोग्न्यालाइ हवस्. स्वास्नि मानिसलाइ हवस्. मुषमा कानमा षुर्सानि हालन्या दलन्यालाइ २० रुपैञा षुर्सानिको धुवा दिन्यालाइ ५० रुपैञा. आषामा षुर्सानि हालन्यालाइ ५० रुपैया गुदद्वारमा हालन्यालाइ १०० रुपैया लिंगमा षुर्सानि दलन्यालाइ २०० रुपैया भगमा षुर्सानि हालन्यालाइ ४०० रुपैञा डंड गर्नु. रुपैञा नतिऱ्या अैन वमोजिम कैद गर्नु.

२. स्वास्नि मानिसले कसैलाई षुर्सानि हाली भनि कोही कराउन आयो र. रोवकार गर्दा. हाल्यैको ठहऱ्यो. लोग्न्यालाइ हवस्. स्वास्निलाइ हवस्. मुषमा कानमा हालन्या दलन्यालाइ १० षुर्सानिको धुवा दिन्यालाइ २५ रुपैञा. आषामा षुर्सानि हालि दिन्यालाइ २५ रुपैया गुदद्वारमा हालन्यालाइ ५० लिंगमा दलन्यालाइ १०० भगमा हालन्यालाइ २०० रुपैञा डंड गर्नु. डंडको रुपैञा नतिऱ्या अैन वमोजिम कैद गर्नु.

३. स्वास्निमानिस कसैले. लोग्न्यामानिसलाइ हवस्. स्वास्नि मानिसलाइ हवस्. षुर्सानि हालिदियाको रहेछ भन्या आषामा हालन्यालाइ २५ गुदद्वारमा हालन्यालाइ ५० भगमा हालन्यालाइ २०० रुपैञा डंड गर्नु. रुपैञा नतिऱ्या अैन वमोजिम कैद गर्नु.

४. कसैका वांधा वधेत्यानि कमारा कमारिहरु हाम्रा षसम् षस्मिनीहरुले षुर्सानि हाली दियो भनी कराउन आया भन्या. रोवकार गर्दा षुर्सानिको धुवा दियाको र. आषामा षुर्सानि हाल्याको रहेछ भन्या. वाधा वधेत्यानिको तमसुक फराइ आफु षुसि गराइदिनु. कमारा कमारिलाइ तेसै आफु षुसि गराइदिनु मुषमा र. कानमा दल्याको रहेछ भन्या. लोग्न्याले भया १० स्वास्नि रहिछ भन्या ५ रुपैञा डंड गर्नु. अमलेष हुदैन. गुदद्वारमा र. लिंगमा हाल्या दल्याको रहेछ भन्या लोग्न्यालाइ १०० स्वास्निलाइ ५० रुपैञा डंड गरि अमलेष गराइदिनु. भगमा षुर्सानि हाल्याको रहेछ भन्या लोग्न्यालाइ २०० स्वास्निलाइ १०० रुपैञा डंड गरि आफु षुसि गराइदिन डंडका रुपैञा नतिऱ्या कैद गर्नु.

५. कसैले अर्काका अैनले जार हांन हुन्या सम्मका स्वास्निहरुलाइ भगमा र गुदद्वारमा कोहि लोग्न्या मानिसले. षुर्सानि हाली दियो. तेसै स्वास्निका लोग्न्याले. मेरि स्वास्निका इज्जत लिय पछि. यसलाइ काटि दिन्छु भन्यो भन्या उपाध्या र उइलिंगका जैसि आफ्ना हाड्गोत्र वाहेक्. अरुलाइ काटिदियो भन्या काटन्यालाइ राजषत लाग्दैन. स्वास्निलाइ जवरजस्तिसित षुर्सानि हाल्याको हुदा. र. करणिको संका नहुनाले. यस्ता स्वास्निको जात जादैन. प्रायश्चित पनी पर्दैन. अघि अदालतमा फिराद परि डंड भै छिन्या पछि ज्यू मार्‍यो भन्या. व्राम्हण रहेछ भन्या. अैन वमोजिमको अंस सर्वस्व गरि दामल गर्नु. अरु जात रहेछ भन्या ज्यान काटी मारी दिनु. ज्यू नकाटी कराउन आयो भन्या. षुर्सानि हालन्यालाइ उसै अैन वमोजिम डंड गर्नु.

६. कसैले मलाइ षुर्सानि हालिदियो भनि. पोलन आयो रोवकार गर्दा षुर्सानि हाल्याको ठहरेन वेहक्मा पोल्याको ठहर्‍यो भन्या र. लोग्न्या मानिसले पोल्याको रहेछ भन्या. मुषमा कानमा षुर्सानि हाल्यो दल्यो भंन्यालाइ १० रुपैया षुर्सानिको धुवा दियो. आषामा षुर्सानि हाल्यो भंन्यालाइ २५ गुदद्वारमा र.लिंगमा षुर्सानि हाल्यो दल्यो भंन्यालाइ १०० रुपैञा. भगमा षुर्सानि हाल्यो भन्यालाइ २०० रुपैञा डंड गर्नु. रुपैञा नतिर्‍या अैन वमोजिम कैद गर्नु.

७. कसैले मलाइ षुर्सानि हालिदियो भनी. पोलन आयो. रोवकार गर्दा षुर्सानि हाल्याको ठहरेन. वेहक्मा पोल्याको ठहर्‍यो भन्या र. स्वास्नि मानिसले पोल्याको रहेछ भन्या. मुषमा कानमा षुर्सानि हाल्यो भंन्यालाइ ५ रुपैया षुर्सानिको धुवा दियो आषामा षुर्सानि हाल्यो भंन्यालाइ १२॥. रुपैञा गुदद्वारमा र लिंगमा षुर्सानि हाल्यो दल्यो भंन्यालाइ ५० रुपैञा भगमा षुर्सानि हाल्यो भंन्यालाइ १०० रुपैञा डंड गर्नु. डंडका रुपैञा नतिर्‍या अैन वमोजिम कैद गर्नु.

८. लोग्न्या मानिसले कसैका आषामा षुर्सानि हाली दियो वा. षुर्सानिका धुवा दिदा. १ आषा फुटेछ भन्या ६ वर्ष कैद गर्नु. म्यादका डवलदिया ली छाडनु. २ आँषा फुटेछ भन्या. अैन वमोजिम उस्को अंस सर्वस्व गरि आषा फूटन्यालाइ दिलाइ. फोर्न्यालाइ दामल गर्नु.

९. स्वास्निमानिसले कसैका आषामा षुर्सानि हाल्दा वा. षुर्सानिका धुवा दिदा. १ आषा फुटेछ भन्या ३ वर्ष कैद गर्नु. म्यादका रुपैञा दिया ली छाडनु. २ आँषा फुट्याको भया १२ वर्ष कैद गर्नु. म्यादको रुपैञा दिया लिनु.

१०. लोग्न्यामानिसले कसैका आषामा षुर्सानि हाल्दा वा. षुर्सानिको धुवा दिदा वा. कुट्पिट् हुदा. फुलो परि आषा नदेषन्या भयेछ भन्या १ आषा नदेषन्या गरि फुलो परेछ भन्या ६ वर्ष कैद गर्नु. म्यादको डवल दिया ली छाड्नु. २ आँषा नदेषन्या गरि फुलो परेछ भन्या. सर्वस्व गरि तेसैलाइ दिलाइ. फुलो पार्न्यालाइ दामल गर्नु. आषा देषन्या रहेछ भन्या १ आषा भया ३ वर्ष कैद गर्नु. २ आषा भया ६ वर्ष कैद गर्नु. रुपैञा दिया ली छाडनु.

११. स्वास्निमानिसले कसैका आषामा षुर्सानि हाल्दा वा षुर्सानिको धुवा दिदा वा. कुट्पिट् गर्दा फुलो परेछ र. आषा भन्या देषतो रहेछ. भन्या १ आषामा फुलो पऱ्याको भया १॥. वर्ष २ आषामा फुलो पऱ्याको भया ३ वर्ष कैद गर्नु. म्यादको रुपैञा दिया ली छाडनु.

# चोरिको

१. पैल्हेको टापटिप्पा चोर रहेछ कसैको माल चोर्दा ४।५ थोक चोऱ्यामा १ थोकमालको.दसि.मा कायल भयो भन्या अरु थोक माल लियाको छैन. भनि अडियो भन्या तेस्ता चोरलाइ. चोरि लाउन्या मानिस. साचो रहेछ. चोरियाकै दिन. अरुहरुलाइ मेरो यति थोक माल. चोरियो भनि. सुनायाको रहेछ. चोरले भन्या यक थोक मालदेषि अरु लियाको छैन भनि अडिन्या चोरलाइ. हवकाइ दवकइ सोधपुछ गर्नु हवकाउदा. दवकाउदा फुल्याउदा पनि. केहि ठराउन सकियेन भन्या. श्री प्रायम् मिनिष्टरसित साधि. ज्यूनमर्न्या गरि कोर्रा ठोकि केरकार गर्नु कोर्रा लाउदामा चोर मऱ्यो भन्या अदालत ठाना. अमालका द्वाऱ्या विचारिलाइ. षतवात लाग्दैन.

२. चोरिको वात लागि आयाकालाइ केरकार गर्दा चोरिको सष लष पाइयो वा दसि पायो भन्या र अघि पनि १।२ पटकको चोर रहेछ भन्या तेस्ता चोरलाइ र वेहक्मा अर्काको ज्यान माऱ्याका मुद्दामा पक्रियाकालाई. सषलषले भेटायाको रहेछ वा. गुहाई तेसरवाट पनि. सषलषको विहोराले भेटायाको रहेछ भन्या तेस्तालाइ. श्री प्रायम मिनिष्टरसंग साधि मुनासिव माफिक कुट्पिट् गर्दा कोर्रा ठेकदा तेस्को ज्यान मऱ्यो भन्या पनि अदालत ठानाका हाकिम डिठा विचारिहरूलाई. षतवात लाग्दैन.

३. दसि नपाइ. मेरो माल यसैले लियो. हो भनि संकाले कुट्पिट् गरि ज्यान माऱ्यो भन्या मारन्यालाइ ज्यानको बदला ज्यान लिनु.

४. कसैले दसिन पाई चोरिको कुरो पोल्या चोरिलाइ माग्न्याले होइन भन्दै थियो कयेल भयाको थियेन तेस्तैमा पोलाहा मऱ्यो भन्या निसाव दैवैले छिन्यो चोरिको विगो भर्नु भराउनु पर्दैन. अदालत ठाना अमाल कचहरिवाट चोरिलाइ माग्न्या चोर ठहर्दैन. नहेर्नु छाडिदिनु.

५. अघि पनि १।२ फेरा चोरि गऱ्याको कायेलनामा भयाको छ फेरि पनि तेसैले चोर गर्न जादा वा धन पक्रनको औसर परेन आफ्ना भंदा चोरको ज्यादा जोर देषदा भयले चोर्न्या वेलामा. साधुले चोरलाईमाऱ्यो भन्दा वात लाग्दैन.

६. दल वाधि हुल गरि. भित्तो फोरि. हतियार वांधि. आउन्या पैल्हेको हवस् दोश्रो हवस्. तेस्ता घर चीर्न आउन्या. चोरलाइ मालका धनिले हतियार लाठो ढुँगो गरि हानि मार्‍यो भन्या तेसलाइ. दंड प्रायश्चित पर्दैन राजषत पनि लाग्दैन.

७. १२ वर्ष मनिका वालषले जतिसुकै पटक चोरि गर्‍या पनि चोरिन्याको विगो जाहा दिया वेच्याको छ. झिकि धनिवाट दसौद लि भराइदिनु. तेस्ता केटाकेटिसित रुपैया दि. माल लिन्याको थैलि भुस हुंछ तेस्ता केटाकेटीले. चोरि ल्यायाकोमाल वावु. आमा दाज्यू. जानकार इष्ट मित्र नाता गोता अरुले वेच्याको रहेछ भन्या जिनैवाट किंन्याको थैलि भराइ विगा वमोजिम दंड गर्नु १२ वर्षदेषी मनिका वालषलाइ दंड कैद केहि पर्दैन.

८. १२ वर्ष देषी माथि १६ वर्षसम्मका मानिसले १ फेरा चोरि गर्‍या विगो भराइ विगै वमोजिम. दोश्रा पटक्को चोर.भया पनि विगो भराइ विगै वमोजिम दंड गर्नु. तेश्रा पटक्को चोर.लाइ विगो भराइ. विगाको दोवर दंड गर्नु. चौथा पटक्का यस्ता चोरलाइ विगो भराइ ३ वर्ष. पाचौ पटककालाई विगो भराई ६ वर्ष कैद गर्नु. छैटा पटकको चोरलाइ विगो भराई १२ वर्ष कैद गर्नु. यस्तै रितका सात पटकदेषि उभोका चोरलाइ विगो भराइ अैन वमोजिमको अंस सर्वस्व गरि दामल गर्नु.

९. अर्काको धन माल अन्न चौपाया जिनिस गैह्र चोर्न्या पैल्हे पटकका चोरलाई जस्को माल चोरियाकोछ. उस्को विंगो भराई विगो वरोवर दंड गर्नु. विगो भर्न सकेन दंड पनि तिर्न सकेन भन्या विगो र दंडका रूपैयामा मैन्हाका ५ रुपैयाका दर्ले कैद गरि छाडिदिनु.

१०. दिन रात का विचमा आफ्ना घरभित्र पसि चोर्न्या आगमा लायाका गहना जवरजस्ति गरि. छिनाउन्या यकलास वनका विचमा.नगद जिनिसका भारि गैह्र लिजादा डाका मार्न्या लुटपिट् गर्न्या चोरलाई मालका धनिले. पक्रनाको वल नपुगि.हतियारचलाई चोरको ज्यान मार्‍यो भन्या तेस वेलामा चोर काटन्या साधुलाई. षतवात लाग्दैन.

११. १६ वर्षदेषि माथिका चोरले प्रथम पटक चोरोस्त पनि नाकको रोति कानको लोति चुडालि लाठाले कुट्पिट् रगत पक्ष गरि. निलो डाम वसाई कुटि ज्यू नमरोस्तपनि चोरि गर्न्याले थोरै चोरोस्. वाढे रै माल चोरोस तेस्ता चोरलाई विगो भराइ ६ वर्ष कैद गर्नु कैदवाट छुट्टि यहि

रितले चोरन्र्या षुनि चोर ठहर्नाले यस्ता दोश्रा पटकदेषिकाचोरलाई अैन वमोजिम अंस. सर्वस्व गरि दामल गर्नु.

१२. पैल्हा पटकका चोरलाई विगो र विगा वमोजिमका रूपैया दिया रूपैया लि छाडिदिनु. दियेंन भन्या विगो र जरिवानाका रूपैयाको ज्मा गरि. मैन्हाका ५ रूपैयाका दर्ले कट्टि होइनसकिंज्याल कैद गरि. म्याद पुग्या पछि छोडि दिनु.

१३. १६ वर्षदेषि माथिका चोरले गारो पनि नफोर्न्या तालचा साचो पनि षोलल छाना भ्यालवाट पनि. नपसन्या दिंन रातका विषेमा घर भित्र पनि नपसन्या घाट वाटा गोठमा २० रूपैया देषि मनिका नगद जिनिस वाहिर फेरा. राष्याका सुकायाका कपडा लुगा चोर्न्या भेडा वाष्रा हास कुषुरा गैह्र. पसु पंछि र वनमा चर्न्ह लायाका चौपाया गैह्र चोर्न्या पैल्हा पटकका चोरलाई. चोऱ्याका मालको विगो भर्ना गरि लि विगै वरावर दंड गर्नु. यहि रितका दोस्रा पटकका चोरलाई विगो भराई. विगोको दोवर दंड गर्नु. यहि रितका तेस्रा पटकका चोरलाई. विगो भराई विगाको तेवर दंड गर्नु. यहि रितका चौठा पटकका चोरलाई ३ वर्ष कैद गर्नु कैदवाट छुटचा पछि फेरि पनि यहि रितसित. पाचौ पटक चोऱ्यो भन्या ६ वर्ष कैद गर्नु कैदवाट छुटचा पछि फेरि पनि. यहि रितले छैटा पटक चोऱ्यो भन्या १२ वर्ष कैद गर्नु. सातौ पटक चोऱ्यो भन्या दामल गर्नु यो चोर थोरै मालको टापटिप्या ठहर्छ.. यस्ता वाहिर. फेरा टापटिप् गरि. चोर्न्याले. यका पटकमा २० रुपैयादेषि. घटिको माल. ढेरै फेरा चोरेछ र पक्रि विगो ज्मा गर्दा २० रूपैया देषि वढता ठहर्न गयो पऱ्या पनि पटक पटकको ज्मा गर्दा वढण गयाको हिसाव नगर्नु यका पटकमा २० रूपैयादेषि. घटि मात्रै चोऱ्याको रहेछ भन्या टाप्टिप्पा चोर ठर्नाले. यस्तो चोर जत्ति पटक् कायेलनामा भयाको छ उति पटक मात्र ठहर्छ. पटक् पटक्को ठहर्दैन २० रूपैया देषि वढताको ज्मा चोऱ्याको भया कायेलनामाको हिसाव हुदैन. जति फेरा चोऱ्याको छ उति पटकको ठहर्छ यसै अैन वमोजिम सजाय गर्नु.

१४. १६ वर्षदेषी माथिका चोरले गारो भित्तो फोर्न्या ढोका तालचा षोलि. घर भित्रको. माल चोर्न्या छाना भ्याल ढोका भित्र पसि घर पसलको माल चोर्न्या यस्मा पैल्हा पट्कका चोरलाई विगो भराइ विगै वमोजिम दंड गर्नु विगो र दंडका रूपैया तिर्छ भन्या लि छाडिदिनु. तिर्न सकेन भन्या. विगो र दंडका रूपैयामा कैद गर्नु. यहि रितका दोश्रा पटकको चोरलाइ विगो भराइ विगाको दोवर दंड गरि मैन्हाका ५ रूपैयाका दर्ले कैद गर्नु. म्यादका रूपैया मैन्हाका १०

रूपैयाका दर्ले दिया पनि नलिनु. यहि रितसित तेश्रा पटक चोऱ्यो भन्या ६ वर्ष कैद गर्नु चौथा पटककालाइ ९ वर्ष कैद गर्नु. पाँचौ पटक चोऱ्यो भन्या १२ वर्ष कैद गर्नु यस्ता चोरले छैठा पटक चोऱ्यो भन्या सर्वस्व गरि लि दामल गर्नु. यस्ता रितका चोरले यकै रात्मा चोरोस्तपनि पटक पटक गरि चोरोस्तपनि जति पट्क घर पसल चोऱ्याको छउटि पटकको चोर ठहर्छ चोऱ्याको हिसाव गरि उति सजाय गर्नु.

१५. यकै चोरले वाहिर फेराको माल टापटिप् गरि चोऱ्याको पनि रहेछ. घर भित्र पसिकन पनि. चोरेछ भन्या यकै कायल्नामा भयाको भया पनि २।३ कायलनामा भयाको भया पनि तेस्ता चोरलाइ घर भित्र पसि चोऱ्याको अैन र टापटिप्या चोरको अैन हेरि दुवै कुराको कैदको हिसाव गरि कैद गर्नु.

१६. वाहिर फेरा षला आगन्मा राष्या सुकायाका र. कुनिञ्युँ लाइ राष्या धान गहु गैह्र अन्न र पराल चोर्न्या चोरलाइ विगो भराइ विगाको दोवर दंड गर्नु. षेत वारिको अन्न र. फल गैह्र चोर्न्यालाई विगो भराइ विगाको तेवर दंड गर्नु. जागिऱ्या मानिसले चोऱ्याको भया विगो भराइ जागिर षोसिदिनु जागिर षोसिया पछि दंड कैद हुदैन.

१७. अफिम भांग धतुर. जायफल जायपत्रि विरौमाजुम मदिरा गैह्र लागु चिजनसा षुवाई. गफलत परि. कसैले कसैको धन चोरि लियो भन्या जस्को धन हो तेस धन्को दसौद लि धनका धनिको विगो फिर्ता गराइ. तेस्ता मतलबदिन्या र नसा षुवाई चोरि लैजान्याको अैन वमोजिम सर्वस्व गरि ६ वर्ष कैद गर्नु. म्यादका डवल दिया पनि नलिनु नसा षुवाइ चोर्न पायेन भन्या २ वर्ष कैद गर्नु म्यादका रूपैया दिया लिनु. स्वास्नि मानिस रहिछ भन्या. चोऱ्याको विगो भराइ विगै वमोजिम दंड गरी. ३ वर्ष कैद गर्नु. नसा षुवाई छ चोर्न पाइन भन्या १॥ वर्ष कैद गर्नु रूपैया तिऱ्या लि छाडिदिनु.

१८. यउटै चोरले ढेरै जनाको माल चोऱ्याको रहेछ चोर पक्रिया पछि तेस्का घरको तायदात गरि. निस्क्याका मालमा जस्को जस्को ठहर्छ चिन्हि पत्ता लाउन सक्याको उनै उनैलाइ. सौपाइ दिनु. नगद र. अरू पत्ता नलाग्याका मालमा जसले चोर. पक्रि ल्यायाको छ. उस्को विगो भर्ना नभै. अरू कसैले पाउदैनन्. पक्रि ल्याउन्याको विगो भर्ना गरि वाकि रहयाका धन

मालमा जस जस्को माल चोरियाको छ चोरलाइ कायेम गरि. सक्याको अरूलाइ अैन वमोजिम उस्का अंसमा दामासहि गराइदिनु. चोरका घरवाट विगो उठेन भन्या. चोर्को म्याद र. विगोमा अैन वमोजिम कैद गर्नु वीगो भराइ चोर्को धन वाकि रहन गयो भन्या अैन वमोजिम. चोर्को सर्वस्व गरिलिनु. चोर्को मतियार. जहानै रहयाछन् भन्या १२ वर्ष मनिका वालषहरूको अंस र छोरिको विहा षर्च वाहेक अरू सवैको सर्वस्व गरि लिनु चोर पक्रि केर्दा हाम्रो माल यति. चोरियाकोछ भनि सामेल भै सावित गर्न्याहरूलाइ दामासहिका भाग गरि दिलाइ दिनु अदालत अमाल ठानावाट दंड गरि सक्या पछि मेरो पनि चोर्‍याको हो भनि सामेल नहुन्याले पाउदैनन्.

१९. ढेरै जनाले मतो गरि अर्काको घर चोर्न भनि गै तेस्तैमा कसैले धन माल उठाइ लैगया कसैले संगिसित. मतलव नगरि. मानिस मार्‍यो भन्या मार्दामा जति जना सामेल भै मानिस मार्‍याका छन्. छेकन्या हान्न्या समात्तन्या मार भन्न्या लाइ ज्यानको वदला ज्यान लिनु. मानिस मार्नाको मतलवमा नपस्याका संगीहरूले मानिस मार्‍याको थाह पाइ दवाउन्याहरूको अैन वमोजिम अंस सर्वस्व गरि. ६।६ वर्ष कैद गर्नु. घा मात्रै लायाको थाहा पाई दवायको रहेछ भन्या ३ वर्ष कैद गर्नु. म्यादका रूपैया डवल दिया पनि नलिनु. स्वास्नि मानिसले दवायाको रहेछ भन्या यसैको आधि आधिका दर्ले कैद गर्नु स्वास्निका म्यादका रूपैया तिर्‍या लि छाडिदिनु.

२०. पाचजनादेषि माथिका जमात्भै घर भित्ता फोरि चोर्न्या जवरजस्ति गरि लुटपिट् गर्न्या जवर्जस्ति करणि लिन्या यस्मा चोर डाकुहरूमा मुष्य मुष्य को करणि लिन्याको ज्यान नमर्‍याको भया पनि. यस्ताको ज्यू काटि दिनु. इन्का फौजका अरूहरूमा दोयमलाई. सर्वस्व गरि. दामल गर्नु सिमलाइ १२ वर्ष कैद गर्नु चहारलाइ ६ वर्ष कैद गर्नु. चाहारदेषि मनिकालाई विराम्हेरि सर्वस्व गर्नालाई सर्वस्व गर्नु दंड गर्नालाई दंड गर्नु.

२१. २।४ जना चोरले कसैको धन माल चोर्‍याछन्. तिनै चोर मध्येमा कोहि भागि गयाछन् कोहि. पक्रिया भन्या तेस्तामा चोरियाका मालको विगो भराउनु पर्दा र पक्रियाको चोरवाट दामासहिका दर्ले ठहर्‍या वमोजिम उस्का फाटमा लाग्याको विगो भराउनु.कैद र दंड गर्दा जति ज्मा चोरियाको छ सवै चोरलाइ उसै विगा वमोजिम. जनहि दंड र कैद गर्नु कैद र दंडमा दामासहि हुदैन भाग्न्या चोर जैल्हे फेलापर्छ उसलाई उसै दिन अैन वमोजिम गर्नु

भाग्न्या चाहि चोर्का फाटको विगो. पैल्हे पक्रिन्याले तिर्नु पर्दैन. सवै चोर पक्रिया भन्या पनि दामासहिकै दर्ले विगो भराउनु दंड कैद जनहि ज्मा वमोजिम गर्नु.

२२. दुइ जना मात्र पर्देश गयाका रहयाछन् दुइ जनामा १ जनाको ज्यान मारि यकलै फर्कि आयेछ र हामि २ जना सगै पर्देश गएका हु सगिले मलाइ दगा गरि. मार्न लाग्दा मैले आफ्नु ज्यू धन वचाउनाका लागि मार्‍याको हो भंन आयो साछि कोहि रहयानछन् भन्या २ जनाका अघिको झगरा इवि पनि पर्‍याको रहेनछ भन्या दुवै जनाका गाउ घरका मानिस राषि अघिको पनि १।२ पटक्को चोर रहेछ भन्या पनि. काटन्यालाइ. षट लाग्दैन. अघिको चोर पनि रहेनछ मार्नामा साछि गुहाई पनि कोहि रहयानछन्. अघि पछिको केहि कुराको इवि झगरा पनि रहेनछ भन्या र. तालचा षोल्याको गारो भित्ता ढोका फोर्‍याको पनि रहेनछ भन्या तेस्तालाई मलाई मार्न लाग्दा मैले मार्‍याको हो भनिआफै भंन आयाको हुनाले चार वर्ण छत्तिसै जात गैह्रलाई अैन वमोजिमको अंस सर्वस्व गरि दामल गर्नु. मार्न्याले जाहेर गरेन षोजि गर्दा अरूवाट जाहेर भयेछ भन्या १।२ चोट्को चोर हो र मैले मार्‍याको हो भन्या कुराले छुट्टि पाउदैनन्. ज्यानको वदला ज्यान हुंछ.

२३. हुकुम मर्जि आज्ञा वाहेक् आफ्ना षुसिले तिर्थ. गर्न र वेपारलाइ जान्या हाम्रा मुलुकका मानिस.हरू कसैले सिवाना लङ्घा पार भोट् मध्येस. बिराना मुलुकमा गै विजाइ. विद्युत. चोरि गरि वाहावाट सजाया भयाको भया पनि सजाय नभै. उसै आयाको भया पनि. उसै मुलुकवाट फिरादि आयनन् भन्या तेस मानिसलाइ. उसै वातमा. फेरि ञाहावाट दंड सजाय नगर्नु चोरि ज्यान मारि षुन गरी आयाको रहेछ र. उस मुलुकवाट मागिपठाया भन्या. सर्कारमा. साधि अहद वमोजिम गर्नु भात पानि वाहेक हुन्या कुरो गरि. आयाको भया भात पानि वाहेक गरि दिनु दंड सजाय नगर्नु.

२४. छोटा वडा जागिरदार गैह्रले यक मोहरदेषि उभो आफ्ना जागिरले. षाम्याका जम्मासम्मको चोरि गर्‍यामा विगो भराई. जागिर षोसि चोर्‍या वावत्. वालि स्मेत जफत गरि लिनु दंड पर्दैन आफ्ना जागिरभंदा वढताको ज्मा चोर्‍याको भया. विगो भराइ दंडमा उस्का जागिरले षाम्याकासम्मको जागिर जफत् गरि लिनु. जागिरले नपुग्याको दंड उस्का घर घानावाट लिनु तिर्न सकेन भन्या अैन वमोजिम कैद गर्नु.

२५. सर्कारिया वहि वुझाइ फारषत् लिनु पर्न्या मानिसले आफ्ना जिम्माको माल मासेछ वहि वुझदा वुझाउन सकेन उसैले मास्याको ठहऱ्यो भन्या. मासियाको विगो र जति वर्ष जति मैन्हा भयाको छ. अैन वमोजिमको दसौद व्याज लि. सयकरा २॥ रूपैयाका दर्ले जरिवाना स्मेत् गरि लि छाडिदिनु. मास्याको ज्मा वुझाउन सकेन भन्या माल दाखिल भयाको सर्कारिया तहविल मास्या वावत्. काटिन्या जातलाइ ज्यू काटि मारिदिनु. मुडिन्या जातलाइ अैन वमोजिम सर्वस्व गरि दामल गर्नु.

२६. जागिरदार उमराव लगायेत् सिपाही पीपा षलासितक. कसैले सर्कारिया माल असवाव आफुले पहरा वस्दा जिम्मा लियाको माल चोरि गऱ्यो भन्या काटिन्या जातलाई. काटि मारिदिनु मुडिन्या जातलाइ. सर्वस्व गरि दामल गर्नु.

२७. पल्टनित्रा चाँद मात्रै हवस् वा. तोडा मात्रै हवस्. अथवा चाँद तोडा दुवै थोक हवस् कसैले लायाकैमा चोरोस् वा. राष्याका ठाउवाट चोरोस्. यस्ता चोर्लाइ विगो भराई हिरा मानिक. पन्ना पुष्पराज गैह्वजडाउको चोर्न्यालाई १० वर्ष सुनको चोर्न्यालाई ८ वर्ष चादिको चोर्न्यालाई ६ वर्ष कैद गर्नु यकै फेरा. ऐंजन् जडाउ गैह्व पनि सुनाको पनि चोऱ्याको भया जडाउको चोर्न्यालाई लेष्या वमोजिम कैद गर्नु. सुनाको पनि चादिको पनि चोरेछ भन्या सुनाको चोर्न्यालाई लेष्या वमोजिम कैद गर्नु. म्यादको डवल दिया पनि नलिनु.

२८. जागिरदारले आफुले लायाका चाद तोडा आफुले गाल्याको रहेछ भन्या विगो उठाइ विगोको ५ षंड वढता दंड गरि लि तानावाना च्याति वालि पनि लिलाम गरि लिनु. अरू कसैलाइ लगाइ गलायेछ भन्या गलाउन्यालाइ यसै वमोजिम गर्नु. चाड तोडा हो भनि जानि जानि. गालिदिन्यालाई पनि गालिदियाका विगाको ५ षण्ड वढता दंड गर्नु. थाहा नपाइ गाल्न्यालाइ षत लाग्दैन रूपैया नतिऱ्या मैन्हाका ५ रूपैयाका दर्ले कैद गर्नु.

२९. लडाइमा जादा भारि वोकाइ लैग्याका भरियाले भारि चोरि भारि छोडि भाग्यो भन्या. मासिन्या जातलाइ. मासि धनिवाट दसौद लि. सौपि दिनु. नमासिन्या जात रहेछ भन्या विगो भराइ २ वर्ष कैद गर्नु. म्यादका रूपैया दिया लि छाडिदिनु.

३०. सर्कारका सवारि सिकारमा र अरू सर्कारिया गैह्र काजमा जादा भारि वोकाई लैग्याका वाधाले भारि फालि वा भारि लि भागोस्. तेस्ता वाधालाई. मासि अदालतवाट दसौद लि वाधाका धनिलाइ सौपिदिनु.

३१. महाजनका भारि र. अरू मुसाफेर. गैह्रले भरिया तुल्याई लैग्याका भरियाले भारि माल चोऱ्यो टिपि भाग्यो भन्या तेस्तो चोर भरियालाई विगो भराइ विगाको दोवर दंड गर्नु दंडका रूपैया तिर्न सकेन भन्या मैन्हाका ५ रूपैयाका दर्ले कैद गर्नु.

३२. आफ्ना नाता गोत्र चाकरले ज्यू नमारि आफ्नु धन माल चोरि गऱ्यो धनिले आफ्नु धन माल षोजमेल गरि लियो अदालत अमाल मा फिराद गर्न आयानन् चोरलाइ छाडिदिया भन्या त्यो चोर अदालत अमालवाट पक्रन हुदैन.

३३. आफ्ना नाता गोत्र चाकरले चोरि गऱ्यो र अदालत अमालमा फिराद गऱ्यो अदालत अमालवाट चोर पक्रि धन माल षोजिसक्या पछि चोरलाइ छाडिदेउ भन्या. छोडिदैन अैन वमोजिम अदालत अमालवाट चोर्को सजाय गर्नु.

३४. कसैले चोरि गऱ्यो र धनिले आफ्ना घरमा चोऱ्याको पत्ता पाइ अदालत ठाना अमालमा नलगि घर्मा छोडिदियाको रहेछ भन्या पछि तेसै चोरले अर्का ठाउमा चोरि गरेछ र पक्रि केरकार गर्दा अघि चोरि गऱ्याको कुरोस्मेत पऱ्यो भन्या अदालत ठाना अमालमा नपरि धनिले आफ्नु मालमायामारि वा धन लि छोडोस्. धनिले छाडच्याका कुरामा अघिको स्मेत चोर हो भनि. पक्रन हुदैन. अघि आफ्ना घरवाट छोडच्याको हुनाले र अड्डा गौडा अदालत अमालमा नसौप्याको हुनाले अघिको चोर ठहर्दैन चोऱ्याका मालको तमसुक गरायाको रहेछ र. रुपैया दियेन भनि कराउन आया चोरिको कुरो ठहर्दैन साहु रिणिका रितले दिलाइ दिनु.

३५. अर्कालाइ चोरि लाया पछि पुर्पक्ष गर्दा चोऱ्याको ठहरेन भन्या चोरि ल्यायाका विगा वमोजिम दंड गर्नु दंडका रूपैया तिर्न सकेन भन्या मैन्हाका ५ रूपैयाका दर्ले कैद गर्नु म्यादका रूपैया दिया लिनु.

३६. गारो फोरि ढोका षोलि छाना झ्यालवाट चोर्न भनि भित्र पस्यो माल चोर्न नपाई पक्रियो भन्या. तेस्तो पैल्हो पटकको रहेछ भन्या १ वर्ष कैद गर्नु म्यादको रूपैया लिनु.

३७. चोर हो समातिदेउ भनि गुहार. माग्दा गुहार गयन भन्या. मानिस हेरि अवल्लाइ १२॥ दोयमलाइ १० सिमलाइ ७॥ चाहारलाइ ५ रूपैयाका दर्ले दंड गर्नु रूपैया नतिऱ्या कैद गर्नु.

३८. पानि नचल्न्या र. छिटो हालनु पर्न्या जातले पानि चल्न्या चोषा जातका घर पसलमा भित्र. पसि पैल्हे पटक चोऱ्यो भन्या कायेलनामा गराई चोरयाको विगो भराइमा मासिदिनु. जाड नसा षाइ वेहोस भयामा र वौल्हायामा पस्याको रहेछ भन्या छुन लाग्न्या चिजसम्मको विगो भराइ ५ रूपैया दंड गर्नु रूपैया तिर्न नसक्या १ मैन्हा कैद गरि छाडिदिनु.

३९. अर्काको छोराछोरि चोर्न्या र. चोर्नाको मतलव दिन्या मासिन्या जातका लोग्न्या स्वास्नि मानिसलाइ. मासिदिनु. नमासिन्या. जातले भया. लोग्न्या मानिसलाइ अैन वमोजिमको अंससर्वस्व गरि ३ वर्ष कैद गर्नु. स्वास्निमानिस भया सर्वस्व नगरि ३ वर्ष कैद गर्नु इन्हेहरूका म्यादका रूपैया डवल दिया लि छाडिदिनु. अर्काका छोराछोरि चोऱ्या लुकायाको थाहा पाई दवाउन्या लोग्न्या स्वास्नि मानिसलाइ ५० रूपैया डंड गर्नु रूपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु.

४०. चोरि भया मा पुर्व पश्छिम्. उत्तर दक्षिण चार दिसा तर्फका वाटामा अदालत ठाना अमालका मानिस राषि तलासि गर्नु. चोरि भयाका माल तलासि गर्दा निकल्यो भन्या. माल र. मानिस नउमकन्या गरि. पक्रिल्याइ अदालत ठाना अमालवाट अैन वमोजिम निसाफ हेर्नु.

४१. चोरि भयाको माल जानि जानि लिराषन्या अथवा जानि जानि किंन्या यस्ताका घर अदालत ठाना अमालवाट उतारि. राष्नु चोरि भयामा अदालत ठाना अमालवाट. त्यो चोरियाको मालहरू लिराषन्या र किंन्याका घरको तलासि गर्नु. फेरि पनि उस्का घरवाट. चोरि भयाको माल निस्क्यो भन्या चोरको मतियार ठहर्छ उस्का घर मा निस्क्याको माल लि उसै विगा वमोजिम डंड गर्नु.

४२. कोहिनचिन्हचाका संका लाग्याकामानिसले नगद जिनिस चौपाय जमिन वेचन ल्यायो भन्या. अदालतठाना अमालका मालिकलाइ. साछि राषि जचाइ किनि लियाको रहेछ. भन्या चोरले चोरि ल्यायाको रहेछ भन्या पनि किंन्याको सदर हुंछ अदालत ठाना अमाल साछि नराषि किनि लियाको माल पछि कसैको चोरि ल्यायाको रहेछ र. मालका धनिले मेरो चोरियाको माल हो भनी चोर पक्रि सावित गऱ्यो भन्या त्यो माल जस्को चोरियाको हो उसैले पाउछ तेस चोरलाइ चोरिका अैन वमोजिम सजाय गर्नु. सजाय परि सक्या पछि.. धनिले आफ्ना माल चोरवाट लिनु. चोरसित माल किंन्या धनिले यसवाट रूपैया उठदैन कैद गरि. देउ भन्यो भन्या विगामा मैन्हाका ५ रूपैयाका दर्ले कट्टि नहुंज्याल कैद गरि म्याद पुग्या पछि छाडि दिनु.

४३. कसैले. सुना चादि जवाहेर चौपाया कमारा कमारि भाडा कपडा गैह्र जिनिस माल किंदा आफुले नचिन्या नजान्याका मानिससित वेचन्यालाइ गर्ज पऱ्यो नपाऱ्याको पनि आफुले थाहा नपाइ. माल किंदा डेढोसम्म नाफा गरि लियाका भया माल फिर्ता गराइ दिनु. किंन्यालाइ षत लाग्दैन. डेढो देषि वढता नाफा गरि किन्यो र पछि त्यो माल वेचन्याले चोरि ल्यायाको ठहऱ्यो भन्या माल धनिलाइ फिर्ता गराइ दि किंन्यालाइ जति नाफा गरि. किंन्याकोछ उसै नाफाका विगा वमोजिम दंड गर्नु तेस्का रूपैया चोरको म्याद पुग्या पछि तेसै चोरसित उठाइ लिनु. मेरा रूपैया दियेन भनि कराउन आया विगो तिर्न सकन्या रहेछ भन्या तिराइ दिनु. सकेन भन्या र कैद गरि. देउभन्या मैन्हाका ५ रूपैयाका दर्ले कैद गराइ म्याद पुग्या पछि छाडि दिनु.

४४. कसैले अर्काका विर्ता घर षेत् जवाहेर. कमारा कमारि चौपाया हात हतियार. गैह्र. जिनिस माल मेरो हो भनि वेच्यो भन्या अर्काको माल मेरो हो भनि वेचन्या लुचो ठहर्छ.. तेस्ताले वेच्याको माल किंन्यावाट झिकि दसौद लि धनिलाइ भराइ दिनु. वेचन्यालाइ विगा वमोजिम दंड गर्नु. किंन्याले अर्काको माल हो भनि जानिजानि किन्याको रहेछ भन्या तेस्तो किंन्या लुच्चाको मतियार ठहर्छ. तेस्ता किंन्यालाइ पनि किन्याको विगा वमोजिम दंड गर्नु. यस्तो विहोराको हो भनि थाहा नपाइ. किंन्याको रहेछ भन्या किंन्यालाइ. षतलाग्दैन. जानि कीन्याको हवस् तापनि नजानि कीन्याको भया पनि वेचन्यासित. रूपैया लिन पाउछ. विगो तिर्न सकेन भन्या. आफु असामी वुझि लिंछ तापनि. कपालि तमसुक गराइ माग्छ तापनि. अैन वमोजिम. कैद गराउछ तापनि उस्को षुस्.

४५. कसैले सुना चादि जवाहेर कसन् तमन् नगद जिनिस लत्ता कपडा गैह्र हराको पायामा अदालत ठाना अमालमा जाहेर गराइ राषनु. पछि कसैले पत्ता पाई मेरो हो भन्न आयो भन्या हरायाको पाउन्यालाइ. सयकरा २० दिलाइ माल अदालत ठाना अमालवाट दसौद लि मालका धनिलाइ सौपाइ दिनु. हरायाको पाउन्यालाइ. विसौद लाग्दैन. नलिनु. मेरो हो भनिकोहि आयानन्भन्या जश्ले हरायाको. पायाको छ. उसैको हुंछ. दस्तुर दिनु पनि केहि पर्दैन पाउन्याले लिनु.

४६. हरायाको पाउन्याको अदालत ठाना अमालमा जनायेन. दवाइ राष्याको रहेछ र. धनिले मेरो माल हो भनि समात्यो रोवकार गर्दा उस्को ठहर्‍यो भन्या. त्यो लुच्चा ठहर्छ.. पायाका मालको सयकरा २० रूपैया जरिवाना गरि. मालका धनिवाट दसौद ली भराइ दिनु. तिरेन भन्या मैन्हाका ५ रूपैयाका दर्ले कैद गर्नु रूपैया तिर्‍या छोडि दिनु.

४७. हरायाको येकाको माल कसैले पायाकोछ विचमा अर्काले मेरो हो भनि भन्न आयो सावित गर्दा उस्को ठहरेन भन्या. तेस्ता लुच्चालाइ विगा वमोजिम दंड गर्नु. दंडका रूपैया तिरेन भन्या मैन्हाका ५ रूपैयाका दर्ले कैद गर्नु. म्यादका रूपैया दिया लिनु.

४८. कसैले फलानाले भन्याकोछ भनि केहि ढाटि लैग्यो कसैले भनिबाटकासन लाग्न्या चिजहालि माथिवाट मुषमा रूपैया पैसा अंत गैह्र देषाइ आषा छलि ढाटि लैजान्या एस्ता ठगलाइ विगो भराइ विगो वमोजिम जरिवाना गर्नु रूपैया तिरेन भन्या मैन्हाका ५ रूपैयाका दर्ले कैद गर्नु म्यादका रूपैया दिय. लिनु.

४९. लोग्न्या स्वास्नि मानिस कसैले.टक लाग्याको नगद र नत्रा कपडा अंन्नहरू वाहेक अरू जवाहेर सुना चादि भाडा वर्तन. तास किनषाप यस विना पुस्तक पत्रा हात हतियार.कमारा कमारि. चौपाया गैह्र माल फलाना काम लाइ चाहियो काम सक्या पछि ल्याइ दिउला भनि. मागि .लैग्याको माल काम चलाइ विर्ता गरिदियो भन्या षत लाग्दैन.झेलषेल गरि.अध्यायो माग्न जाँदा दीयनछ र अदालत ठाना अमालमा फिराद परि. पक्री ल्याउदा आफुले लेगयाको माल फिर्ता दियो भन्या दंड पर्दैन दसौद विसौद लि. माल धनिलाइ फिर्ता गराइ दिनु. मागिलग्याको माल वेचेछ उठायछ भन्या त्यो लुच्चो ठहर्छ लैग्याका मालको पच्च किर्ति मोल गरि विगो

भराइ विगै वमोजिम दंड गर्नु. एस्ता लुच्चाले जति सकै फैराठ गिढा दी लुच्चो गरि लैगयो भन्या पनि पटक पटकको हिसाव हुदैन. जति पटक लैजाँछ विगो भराइ विगै वमोजिम दंड गर्नु रूपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु.

५०. कसैका गहना लायाका छोरा छोरिलाइ चोरले काहि यकलासमा लैगि मारि गहना लियो अथवा घर फोरि मालहरू चोरि लियो वा फाट फुट मालहरू मात्र चोरि लियो भन्या चोरिन्याले तुरंतै अदालत ठाना अमालमा आई. मेरो माल यस्ता तरहको यति थोक चोरि यो भनि घटि वढी नपारि. तपसिरवारको कागज लेषि सहि छाप गरि दिनु. अदालत ठाना अमालवाट तिन सहर गाउँ गाउका महान्याहरूलाइ तप सिलवार. चोरियाको मालको फिरिष्ट उतारि पठाई घर घरमा यस्तो यस्तो माल चोरि भै रहेछ. भनि वाचि सुनाउनु सुनाया वमोजिमका. मालहरू कसैले घर दोगान् ज्यासलमा आइ वेचन धरोट् नासो राषन ल्यायो भन्या त्यो ल्याउन्या मानिसलाइ नउमकन्या गरि. माल स्मेत अदालत ठाना अमालमा ल्याइ सपुत गरि दिनु आफ्ना वलले भेटायेन भन्या महान्या छिम्याकिलाइ गुहारि. पक्रिल्याउनु चोरलाइ ल्याउन सकेन माल मात्रै फेला पारि ल्यायो भन्या तेस मानिसलाइ चोर उमकायो भनि केहि वातलाग्दैन भंन्या विहोराको उर्दि माहान्याहरूले आफ्ना आफ्ना टोल र फेराकार घर घर्मा सुनाइ दिनु.माल चोरियाको थौरै छ मेरो माल चोरियाको ढेरैछ भनि वढता लेषि दियामा चोरलाइ सावित गर्न सकेन वढता लेषायको ठहऱ्यो भन्या वढता लेषायाका विगा वमोजिम दंड गर्नु रूपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु.

५१. यहि उर्दि वमोजिम. ति महान्या कटुवाल्या ज्येठा वुढा गौरू नाइक्या गोडा इत्हरूले आफ्ना आफ्ना टोल र. फेराका घर घरमा गै फिरिस्त वमोजिमको उर्दि दियाको ठहरेन भन्या ति महान्याहरूलाइ अदालत ठाना अमालमा ल्याइ वदला गर्नु.

५२. यक जनाको ज्यान मार्नामा जति जना चोरले. सामेल भै समाति छेकि कोहि समाउन्या कोहि छेकन्या कोहि हाँन्या कोहि हान भनि आज्ञा दिन्या कोहि विकटवस्न्या गरि सहस्त्र चलाइ ज्यान पनि माऱ्याको रहेछ चोऱ्याको माल पनि वरावर गरि वाडि लियाको रहेछ भन्या १ जनालाइ मार्न ५ जना सम्म मुद्दा मुद्दा मिलि माऱ्याको रहेछ भन्या पाचै जनाको ज्यान जान्छ २ जनालाइ मार्न १० जना मिलि माऱ्याको रहेछ भन्या १० जनाको ज्यान जाँन्छ ३ जनालाइ मार्न १५ जना मिलि माऱ्याको रहेछ भन्या १५ जनाको ज्यान जाँछ पाचौ देषि वढता जोछन्

तिनलाइ दामल हुंछ. तेस्मा छेकन्या समाउन्या हान्या हान भनि आज्ञा दिन्या हतियार दिन्या मुद्दा पैल्याइ ५ जनाको ज्यान जाँछ विकट वस्न्या अलग वस्या दामल हुंछन्.

५३. सर्कारवाट हवस् अरू कसैले हवस्. स्थापना गर्‍याका देवता भया मालिक मुर्ति भया यस्तो किर्ति भंग गरि. मोडि चोर्न्या चोर व्राम्हण जात र व्राम्हण रजपुत जोगि भयाको मावलिको पत्ता नलाग्याका जोगि भयाका व्राम्हणका विधुइ दश नाम लेल्याइ. जन्म्याका कान चिन्याका कान फट्टा गैह्र मुडिन्या जातको अैन वमोजिमको अंस सर्वस्व गरि दामल गर्नु. अरू गैह्र काटिन्या जात भया ज्यान काटि मारि दिनु. भंगमात्र गरेछ चोर्‍याको रहेनछ भन्या २ वर्ष कैद गर्नु. म्यादको डवल दिया लि छाडि दिनु.

५४. कसैले तपसिल वमोजिमको माल चोर्‍यो भनि कसैलाइ पोल्यो उसले पोल्याका मानिसलाइ झिकाई रोवकार गर्दा सावित भयो भन्या चोरि गर्‍याको मालै भया माल भराई. माल दिन सकेन भन्या लेषिया वमोजिमका दर्ले विगाको रूपैया भराई. उसै विगा वमोजिम दंड गर्नु. इनै कुरा पोलाहाले पोल्यो सावित गर्न सकेन भन्या. तेस्ता पोलाहालाइ पनि सोहि वमोजिम दंड गर्नु. रूपैया नतिर्‍या अैन वमोजिम कैद गर्नु.

तपसिल

| | | | |
|---|---|---|---|
| सालिग्रामका लक्ष्मीनारान् – १ को रू १०० | | १ मुषिरूद्राक्ष दाना १ को रू–१ | |
| अरूसालग्राम को मतिचक्र | | | |
| सोण भद्रगणेश | १को रू२ | २।३।७।८।९।१०।११।१२।१३। | |
| ठुला वाणलिंङ्ग | १को रू५० | मुषिरूद्राक्ष दाना | १को रू५ |
| साना वाणलिंङ्ग | १को रू२ | ४।६ मुषिरूद्राक्ष दाना | १को रू॥ |
| दाहिंनासंष | १को रू१०० | ५ मुषिरूद्राक्ष दाना | १कोरू। |
| म्यालसिंधिंगौलोचनकुसग्रेथि | १को रू१ | १४मुषिदेषिकारूद्राक्ष दाना | १को रू१४ |
| | | गजमोति | १को रू॥ |

५५. पानि नचलन्या र छिटो हालनु पर्न्या जातले. पानी चलन्या चोषा जातका घर पसलमा भित्र पसि २।३ पटक चोरेछ भन्या अैन वमोजिम कैद गरि मासि दिनु.

५६. यो कुरो नगर्नु. यो काम नगर्नु. यो कुरो नवेचनु. यो कुरो कसैले वेचन ल्यायो भन्या नकिन्नु जाहेर गर्नु. यो कुरा गऱ्या ज्यू मारियेला सर्वस्व होला जरिवाना होला भनि झ्यालि पिटि चुइकि पिटि सहर सहर.मा इस्तिहार टासियाका कुरामा उर्दि नाघि ज्यू मारियेला भन्याको कुरो लोग्न्या मानिस कसैले गरेछ भन्या मुडिन्या जातले भन्या अैन वमोजिमको अंस. सर्वस्व गरि दामल गर्नु. काटिन्या जातले भया ज्यू काटि मारि दिनु. सर्वस्व होला भन्याको कुरा गऱ्याको रहेछ भन्या. अैन वमोजिम अंस सर्वस्व गरि छाडि दिनु. जरिवाना होला भंन्या कुरा गरेछ भन्या यति जरिवाना होला भंन्या भयाकोछ उति जरीवाना गर्नु. स्वास्नि मानिसले ज्यू मारियेला भन्याको कुरो गऱ्याको रहेछ भन्या दामल गर्नु. सर्वस्व होला भन्याको कुरा गऱ्या रहेछ भन्या १२० रूपैया दंड गर्नु.

५७. कसैले देवदेवताका स्थानमा अक्षर लेषिटास्याको कसैको किर्ति वंसावलि पुराना कुरा जगा जमिनको कुरा लेष्याको सनद पत्र लेष्याको गुठि गौचरका कुरा लेषियाकोदेवता पिठका नित्य नैमितिक वर्ष वंधनका कुरा र. गुठि भोज भोजनको कुरा लेषियाको. सदावर्तको कुरा लेषियाको देवदेवताका स्थानमा टासीया राष्याको हवस् वा धनी र गुठियारका घरमा रहाको हवस्. यस्तो लेषियाको सुना पत्र हवस्. चादिको पत्र हवस्. तावा पत्र हवस् मोलम्बा गऱ्याको पत्र हवस वा अरू धातुको पत्र हवस चोरि धर्म नस्ट गर्न्यालाइ विगो भराइ ४ वर्ष कैद गर्नु. म्यादको रूपैया दिया लि छाडि दिनु. चोरसित एस्तो कुरो जानिजानि किंन्या र जानि जानि गालन्यालाइ २।२ वर्ष कैद गर्नु. म्यादका रूपैया दिया लि छाडि दिनु इनै कुरा चोर्न भनि गयेछ. चोर्न नपाइ पक्रियो भन्या १ वर्ष कैद गर्नु म्यादको रूपैया दिया लि छाडि दिनु.

५८. कसैले देव देवताका स्थानमा अक्षर लेषी टास्याको कसैको किर्ति वंसावलि पुराना कुरा. जगा जमिन्को कुरा लेष्याको सनद पत्र लेषियाको गुठि गाउ घरका कुरालेष्याको देवता पितृका नित्य नैमितिक वर्ष वंधनका कुरा र गुठि भोज भोजन्को कुरा लेषियाको सदावर्तको कुरा लेषियाको देवदेवताका स्थानमा. टासिया राष्याको हवस् वा. धनि र गुठियारका घरमा रहाको हवस्. यस्तो लेषियाको लाल मोहरका कागज पत्र सिलापत्र तारपत्र दानपत्र को कागज गैह्र

हवस्. एस्तो सनद हरू चोरि धर्म नस्ट गर्न्यालाइ २ वर्ष कैद गर्नु. स्वास्नि मानिस्लाइ १ वर्ष कैद गर्नु म्यादका रूपैया दिया लि छाडि दिनु.

५९. कोही लुच्चा ठगले अर्काको जिनिस् ज्यू गैह्र माल ठगि अर्कालाइ वेच्या उठाया छन्भन्या माल जस्को हो उसैलाई दिलाइ दिनु. किंन्या लाइ तमसुक गराई माग्छ भन्याकपालि तमसुक गराइ दिनु. तमसुक गराइ माग दिन भन्यालिंछ तापनि छाडछ तापनि तेरो षुसि भनि छाडि दिनु. अर्काको माल ढाटि ल्याइ लुच्चाले वेच्या उठायाको सदर हुदैन.

६०. जंगो माल अरू. असवाब गैह्र चोर्न्या चोरलाइ दुनित्रादारको चोर्न्यालाइ लेष्या का अैन वमोजिम दंड कैद हुन्या कुरामा दोवर वढाइ दंड कैद गर्नु.ज्यू जान्या दामल हुन्या मासिन्या कुरा गऱ्यामा एक फेराको भया पनि ढेरै फेराको भया पनि सजाय ऐकै हुन्छ इ ३ कुरामा षत षापिदैन.

६१. सर्कारिया तहविल् सर्कारिया तोडाषजाना आयाको अदालत अदालतका तहविल अरू सर्कारिया कचहरि तहविल् चोर्न भनि गारो भित्ता फोरि हवस् छाना ट्टयाल ढोका कौसिवाट हवस् भित्र पस्यो. तैस्तैमा चोर्न नपाइ पक्रियो भन्या २ वर्ष कैद गर्नु म्यादको डवल दिया लिनु.

६२. कसैले आफ्नु माल हराया चोरयामा धामि झाक्रिकोहरो गैह्र गर्न जांन्या सित मेरो मालकश्ले लियेछ पुऱ्याइ देउ भंदा धामि झाक्रि कोहरो गैह्र गर्न्या ले विना दसि माल लिन्या फलानु हो भनि पुऱ्याई दियो र. उसले चोरि लियाको ठहरेन भन्या तेस्ता धामि झाक्रिकोहरो गैह्रगर्न्यालाई चोरि लायाको विगा वमोजिम् दंड गर्नु धामि झाक्रि कोहरो गैह्रले भन्या पछि मेरो माल तेसैले चोऱ्या लियाको रहेछ भनि. पक्रि छेक थुन् गरेछ भन्या उसलाइ पनि विगा वमोजिम दंड गर्नु. विना दसि धामी झाक्रि कोहरो गैह्रले भन्याको सहि हुदैन. भनि पक्रचा थुन्या छेक्याको रहेनछ भन्या धामि झाक्रि कोहरो गर्न लाउन्यालाइ वात लाग्दैन.

६३. कसैले अर्काको तमसुक वहिपत्र चोरि लैगि तेसै कागजले असामी उठाई लिये. छ भन्या विगो फिर्ता गराइ विगै वमोजिम दंड गर्नु. चोरे छ मात्रै असामि सित रूपैया उठाइ लियाको रहेनछ. भन्या चोऱ्याको तमसुक भया उसैका ज्माका सयकडा २० रूपैयाका दर्ले वहिपत्र

चोऱ्याको भया. उसैका ज्माको सयकरा १५ रूपैया का दरले दंड गर्नु. रूपैया नतिऱ्या. अैन वमोजिम् कैद गर्नु.

६४. कसैले सर्कारिया वंदुक चोऱ्यो भन्या ३ वर्ष चाप् संगिन् चोऱ्यो भन्या २।२ वर्ष चप्रास गजतोसदान् संगि.को लोता तोप् कुर्थि चुस्ता वलम् चोरेछ भन्या १।१ वर्ष कैद गर्नु. म्यादका रूपैया दिया लिनु.

६५. अैन नहुदै अघि चोरि वावत्मा परि अदालतवाट हात अंगुलो नाक कान काटि छोडयाका चोरले फेरि पनि चोरि गरेछ भन्या तेस्ता चोरलाइ ज्यान जान्या दामल हुन्या सर्वस्व हुन्या कुरा वाहेक अरू दंड कैद हुन्या कुरामा जति पटकको चोर ठहर्छ उसै उसै अैन वमोजिम दंड सजाय कैद गरि वढता २० रूपैया दंड गरि छाडी दिनु. रूपैया नतिऱ्या पछिल्ला दंड वावत्मा पनि अैन वमोजिम कैद गर्नु.

६६. कसैको चोरि भै चोर पक्रि अदालत ठाना अमालमा. सपुर्त गर्न ल्याउदा अदालत अमालवाट चोर पक्रि ल्याउन्या. सग तिम्रो मालको स्मेत पत्तालाइ षोजि दिनु पर्छ कि आफ्ना मालको पत्तालाई लि चोरिको मात्र सजाय गरि. देउ भछौं. भनि चोर पक्रि ल्याउन्या संग सोधनु र. मेरा मालको पत्ता लाग्यो वा मैले पाया चोरको मात्र सजाय गरि देउ भंछ भन्या सोइ वमोजिमको कागज लेषाइ लि चोर कायम् गरि जा भनि. छोडि दिनु. दसौद लाग्दैन. मेरोमाल स्मेत् षोजि देउ भन्यो भन्या अदालत अमालवाट षोजि भराई दियाको रूपैया माल गैह्रको दसौद्य लि चोरियाको माल मालवालालाइ भराइ दिनु.

६७. चोरि वापत् दामल भै कैद भयाका कोहि भागि गै फेरि चोरि गऱ्या भन्या. तेस्ता काटिन्या जात भया ज्यान काटि मारि दिनु. नकाटिन्या जात भया दामलै गर्नु.

६८. आजसम्म अड्डा अदालत ठाना अमालवाट चोरहरूलाई अैन वमोजिम कसैलाइ विगो र दंड तिऱ्या लि छाडि दिनु. तिर्न नसकन्या चोरलाई मैन्हाका ५ रूपैया का दर्ले कैद गरि म्याद कट्टि भया पछि छाडनु. कसैलाई विगो र दंड तिऱ्या पनि म्याद नपुगी नछाडनु. कैदै मात्र गर्नु. भंन्या थियो. चोर्को जमानि लि नछाडनु भंन्या थियेन. अव उप्रान्त विगो र दंड लि छाडना

चोरलाई हवस्. विगो दंड तिर्न नसक्ता कैद भयाका वा. विगो र दंड तिऱ्या पनि म्याद नपुगी नछाड्नु कैदै गर्नु भंन्या भन्याका चोरहरूलाई म्याद कैद पुग्यापछि छोडदा तिंन्को ज्मानि नगरि चोरलाइ नछोड्नु. जैल्है जमानि ल्याउछन्. उसै दिन जमानि लि छाडनु. जमानि हुन्या मानिस ल्याउन सकेन चोरि गर्न्या घर षेत् केहि नभयाका फकडा रहेछ भन्या तेस्ता गोर्षा भर मुलुकका लोग्न्या चोरलाई नेपालका मेगजिनमा लैगी रोजको=आना पैसा सिधा षाना दिनु लै स्मेत् मेगजिनको काम गराउनु स्वास्नी चोर भया नेपालैमा लैगि रोजको=आना पैसा सिधा षानदि वारूद पिन्हाउनु. जैल्है जमानि दिन सकछन् उसै दिन. ज्मानि लि नेल काटि छाडि दिनु.

६९. अर्काका वारी वगैचामा लायाको फुल चोर्न्यालाई १ भारि देषि घटि चोऱ्याको ठहऱ्या आठ आना. एक भारिदेषि वढता चोऱ्याको भया. विगाको अन्दाज गरि. एसै रितले वढाइ दंड गर्नु.

७०. अड्डा अदालत ठाना. अमाल गैह्रवाट चोरि षतमा पक्रियाका मानिस्लाई केरकार सोधषोज गर्दा. चोर वाट र. चोरले वेच्या उठायाका जगावाट तहकित. भै असुल भयाका नगद जिनिस् ज्यू गैह्र धनमालमा. धनि पत्ता लाग्या सम्मको. माल तहकित गरि. अैन वमोजम. धनिलाइ भराइ. भरायाका धनको. दसौद लि. धनि पत्ता नपायाका. धनमाललाइ. मैन्हा ३ सम्म धरोट स्याहामा दरी. रपोट्मा दिनु. आम्दानीका स्याहामा नदर्नु. म्यादसम्ममा भन्न. आया दसौद लि. माल सौपि दिनु. म्याद सम्ममा पनि धनि र धनिका. हकवाला. वारिसमा. माल षोजन लिन. कोहि आयानन्भन्या चोरवाट आयाको माल लिलाम गरि नगद पारि. आम्दानीका स्याहामा दरि. मुलुकि षाना वुझाइ रसिद लिनु.म्याद नाघ्या पछि. मेरो माल पाहुन्या हुं भंन्याले पाउदैन.

सर्कारिया माल चिन्हु भयाको अथवा चिन्हु नभयाको माल चोरि हुदा गर्न्या कामको अैन् --- --- --- --- --- --- --- ६

७१. ऐं जानि जानि किन्यावाट विगो भराइ विगा वमोजिम दंड गर्नु.

७२. ऐं चिन्हु नभयाको माल नजानि कींन्यालाइ. माल मात्र वुभि लिनु दंड पर्दैन. आफ्नै थैलि चोरवाट लिनु नलिनु किंन्याको षुसि. एस चोरवाट मेरो थैलि लिन सक्तिन भनि चोर सपुर्त गरि दिन्छ भन्या ५ रूपैयाका दर्ले कैद गरि दिनु.

७३. चिन्हु भयाको सर्कारिया माल लिया को रहेछ. भन्या मैले जानिकन लियाको होइन भंछ तापनि विगो वुभि लि उसै विगा वमोजिम दंड गर्नु.

७४. यहि सर्कारिया माल जति जनासित विक्रि भयाको छ उतिलाई विगा वमोजिम दंड गर्नु.

७५. विगो जससित पुग्याको छ उसैवाट लिनु सर्कारिया हुनाले दसौद लाग्दैन.

७६. साधुलाई थैलि भराउनु पऱ्यो भन्या थैलि पाउन्यावाट दसौद लिनु. किंन्यालाई दंड भया पछि विसौद लाग्दैन.

षान्या माल वेचन्या गैह्रले सद्य मालमा नाफाका लागी अरु थोक मिसि कपंट गरि वेचता गर्न्या कामको अैन -------------- ३

७७. किंन्याको माल पकाइ अथवा नपकाइ षादा षान्याको जात जान्या रहेछ भन्या कपट गरि मिसायाका विगाको दोवर दंड गर्नु. अज्ञानमा षायाको हुनाले षान्याहरू सर्व प्रायश्चितले शुद्ध हुंछ.

७८. किन्याको माल षादा षान्याको जात जान्या रहेछ भन्या कपट गरि मिसायाका विगा वमोजिम दंड गर्नु

७९. षान्या कुरा वाहेक अरू थोक मिसाइ कपट् गरि वेचन्यालाइ ५० रूपैया दंड गर्नु.

# नाशो धरोट

१. कसैले तेरा वावु वाज्यालाइ सुना चादि जवाहेर. भाडा वर्तन् नगद जिनिस्. घर षेत वाधा विर्ताका सनद पत्र गैह्र नाशो राषन दियाको थियो भनि कसैलाइ पक्रन आयो भन्या नासो राष्न दिदामा लेष्याका पत्र पात्र साछि सुर्ता रहाछन्भन्या तिन्हेरूलाइ ल्याइ सोधपुछ गर्दा र. सनद पत्र हेर्दा नाशो राषन दियो को तहकितै ठह-यो भन्या तेसवाट दसौद लि माल भराइ दिनु. राषन्यावाट विसौद लिनु. कागजपत्र पनि केहि रहेन छ साछि सुर्ता पनि कोहि रहान छन् माल लिन्या मानिस् पनि ज्यूदो रहेनछ भन्या मेरो नासो छ भनि समाउन्या लाइ विगा वमोजिम् दंड गरि छोडि दिनु. एस्ताले पोल्याकाले तिर्नु पर्दैन. एस्मा जिताउरि वक्साउनि केहि पर्दैन.

२. विर्ता वंधक् गुठि जगा नगद जिनिस् चौपाया गैह्र नाशो राषि गयाको पछि लिन पाउछ. साछिपत्र कागज देषाइ लिनु साछि कागज पत्र छैन भन्या पाउदैन.

३. कसैले अर्काको नगद जिनिस् जवाहेर सुना चादि कसन्तमन् अनाज गैह्र चौपाया धनमाल जिम्मा लि वाटामा जादा चोरले ज्यान् मारि लैगयामा र लाठ्ठीले कुटपिट गरि वाधि हतियार चलाइ घाईहत्या गराइ धनमाल लुटि चोरि लैगयो भन्या त्यो जिम्मा लिन्या र तेस्काभाइ छोरा परियारले तिर्नु पर्दैन.

४. अर्काका जिम्मा गरि नाशो धरौट् गरि राष्याको धन माल जिम्मा लिन्यावाट चोरि भयो भन्या त्यो धनमाल चोरि भयो भनि धरौट् राषन्याले भंन पाउदैन. नगद जीनिस् जवाहेर सुना चादि कसन् तमन् अनाज चौपाया गेह्र धरौट् राष्याका मालको दसौद विसौद लि राष्न दिन्यालाइ अदालत ठाना अमालवाट फिर्ता गरि भराइ दिनु.

५. कसैले अर्काको नगद जिनिस् जवाहेर सुना चादि कसन् तमन् अनाज चौपाया गैह्र नाशो धरोट् राष्याकामा आगो लाग्यो भन्या सो धरोट् भंदा धरोट् नाशो लिन्याको घरको मोल ज्यादा रहेछ भन्या घर जलन्याले तिर्नु पर्दैन. नाशो धरोट् राषन्याको घरमा आगो लागि जहान परेछ भन्या घर जलन्याले तिर्नु पर्दैन. नासो धरोट् भंदा नासो धरौटलि राषन्याका घरको मोल कम्

रहेछ भन्या मेरो घर पोलियो तेरो माल म तिर्दिनं. भंन पाउदैन अदालत् ठाना अमालवाट भराइ दिनु. घरपोलिन्याको कोठि विर्ता पसल्. असामि कमारा कमारि वाधा वधेत्यानि अंत गोठ पनि रहेनछ गाइ भैसि चौपाय गैह्र केहि रहेनछ उस्को दियो कुचो समेत् गरि पोलि यो धरौट नासो राष्याको पनि मर्‍यो केहि दवाया छपायाको ठहरेन भन्या तेसले तिर्नु पर्दैन.

६. अर्काको नगद जिनिस् गैह्र नाशो वोकिजादा गंगा तर्दा. डुगा घोपटि माल वगायो आफु पनि डुवि ज्यान मात्र वचायो भन्या तेसले तिर्नु. पर्दैन.

७. अर्काका कमाराकमारि चौपाया धरौट् राष्याको छ आगामा परि डढ्याको फिर्ता गर्नु पर्दैन.

८. कसैका चौपाया धरोट राष्याको हवस् कसैका गोठमा राष्याको हवस् त्यो वस्तुकालले मर्‍यो वाघले षायो भिरमा लडचो षोलाले वगायो भन्या तेसले तिर्नु. पर्दैन.

९. कसैले अर्काका कमारा कमारि वाधा वधित्यानि भयो हाति घोडा गाइ गोरु इ गैह्र चौपाया भयो मेरा काज निमित्त चाहियो भनि मागि लैग्याको धनिका जीम्मा नलाउदै भागि गयो भन्या तेस्को पर्चकिर्ति मोल धनिलाइ तिर्नु पर्छ. मागी लै गयको जिम्मा लाउन नपाउदैमा मर्‍याको भया तेस्को मोल तिर्नु पर्दैन.

१०. अर्काका कमारा कमारि चौपाया धरौट् राष्याको मर्‍यो भाग्यो भन्या राषि दिन्याले साटो तिर्नु पर्दैन. वढयाको राषन दिन्याको हुंछ.

लिन दियाको माल डाकु चोरले कुटपिट गरि षोस्याको

११. कसैले कसैलाइ सुना चादि जवाहेर लत्ता कपडा कसन्तमन् नगद जिनिस् वोकायाको रहेछ. लिन दियाको रहेछ उ वोकन्या मानिसले लि राष्याका वेलामा डाकु चोरले कुट्पिट् गरि षोस्याछन् गुहाइ तेसर पनि रहेछन् भन्या. यस्तो दैव गत् पर्‍यामा वोकन्या मानिस र उस्का संतानले तिर्नु पर्दैन.

वोक्याका वेलामा भिरवाट लडेछ वाघ भालुले षायछ
पानीमा डुवेछ वगेछ र मरेछ भन्या गर्न्या

१२. कसैले कसैलाइ सुना चादि जवाहेर लत्ता कपडा कसंतमन् नगद जिनिस् वोकायाको रहेछ. लिन दियाको रहेछ. उ वोकन्या मानिसले लि राष्याका. वेलामा त्यो मानिस भीरवाट लडेछ वाघले षायेछ. भालुले षायेछ पानिमा डुवेछ वगेछ मरेछ उस वषत्मा वोक्याको माल हरायेछ कसैले टिपि गयेछ भन्या. एस्तो माल षोजदा पाइयो भन्या. आफ्नु माल लिनु. षोज गर्दा पाइयेन भन्या. त्यो वोकन्या मानिस्. र तेस्का संतानलाइ पक्रन पाइदैन.

# हरायाको पाउन्या

१. चार षुट्या वस्तु अर्काले हरायाको पाइ गाउका अमालि द्वाऱ्या छिम्याकि लाइ जनाइ पालि राष्याको रहेछ भन्या धनिले ६ मैन्हा संम्ममा पत्ता लाइ आयो भन्या. जस्को हो उसैलाइ भराइदिनु पालन्यालाइ अनुसारको मोल गरि दसौद पनाउनिदिलाइ दिनु. चोऱ्याको ठहर्दै ६ मैन्हा नाघ्या पछि आउन्याले पाउदैन.

२. हरायाको अर्काको चौपाया पाइ अमालि द्वाऱ्या गाउल्यालाइ थाहा नदि दवाइ पालन्यालाइ विगा वरोवर दंड गरि. माल जस्को हो उसैलाइ सौपिदिनु. मालका धनिको पत्ता लागेन भन्या अदालत ठाना अमालिले लिनु.

३. कसैले हरायाको चौपाया यो मैले पायाको छ भनि गाउल्यालाइ जाहेर गरि पाल्याको रहेछ मालको धनि कोहि निस्केन भन्या जस्ले पायाको छ उसैले लिनु उसैको हुछ. यस्मा अदालत ठाना अमालि गुठियार विर्तावार गैह्रले पाउदैनन् नलिनु.

४. अर्काको चौपायाहरू हरायाको कसैले पायाको छ. उहि माल मेरो हो भनि कसै लवरचट्टाले भन्न आयो सावित् गर्दा उस्को ठहरेन भन्या त्यो लुचै ठहर्छ तेस्तालाइ जौन माल मेरो हो भंन आइरहेछ उसैका विगा वमोजिम् दंड गर्नु रूपैया नतिऱ्या विगा वमोजिम् का दडमा अैन वमोजिम् कैद गर्नु.

# चौपाया

१. जौल्याहा वाछा वाछिं पाउन्या गाइ सर्कारमा नल्याउनु जस्को हो उसैले राषनु षत लाग्दैन उसैको हुंछ.

२. वाषा भेडा रागा भैसि गाइले वालि षायो भंनि कसैले फिराद गर्न आयो भन्या वालिको विगो भराइ. विगै वमोजिम् दंड गर्नु. रूपैया नतिऱ्या कैद गर्नु.

३. कसैले वालि षाइदियो भनि भेडा वाषा रागा भैसिको कान काटिदियो भन्या वालिको विगो धनिले पाउदैन कान काटन्यालाइ षत वात लाग्दैन.

४. भेडा वाषाको वाहेक्मा कान काटन्यालाइ ॥ दंड गर्नु. रूपैया नतिऱ्या ३ दिन कैद गर्नु.

५. वालि नषान्या रागा भैसिको वेहक्मा कान काटन्यालाइ ५ रूपैया दंड गर्नु. रूपैया नतिऱ्या १ मैन्हा कैद गर्नु.

६. कसैको वालि नालि षान जादा वालिका धनिले वालि षायो भनि रिस्ले भैसि वाषा भेडा चौपाया काटचो माऱ्यो भन्या तेस मालको पचकिर्ति मोल मालका धनिलाइ दिलाइ विगा वरावर दंड गर्नु. काटियाको माल मोल तिर्न्यालाइ दिलाइ दिनु. वालि षायाको पंचकिर्ति विगो वालिका धनिलाइ दिलाइ दिनु.

७. गाइ गोरुले आफ्ना मालिकका जहान र. आफ्ना गोठालालाइ हानि लडाइ मिचि ज्यान माऱ्यो भन्या त्यो गाइ गोरू ज्याहो गाउ घरमा नराषनु गोठ भया आफ्ना गोठमा पठाइदिनु. लिलाम् नगर्नु. गोठ नभया धनिले वेचनु. चकुइ पर्दैन. धनिलाइ दंड पतिया पनि पर्दैन. रागा भैसिले हानि मानिस्को ज्यान माऱ्यो भन्या धनिले तेस्ता रागा भैसि ज्या हो मारि मासु वेचनु चकुइ पर्दैन.

८. अरू कसैलाइ रागा भैसिले हानि मानिस मार्‍यो भन्या त्यो रागा भैसि ज्या हो तेस्लाइ अदालत ठाना अमालवाट मारिदिनु. मासु पनि अदालत् ठाना अमालवाट लिलाम् गिरि लीनु.

९. सहरमा पाल्याका रागा भैसिले मानिसलाइ हानि रगत् काढ्यो भन्या लिलाम् गर्नु वाहीर फेरा गामल्मा पाल्याकाले हानि रगत् काढ्यो भन्या आधा मोल लिनु. वनमा र गोठमा राष्याकाले हानि रगत् काढ्यो भन्या षत लाग्दैन. धनिलाइ र . गोठालालाइ हान्यामा पनि केहि पर्दैन.

१०. चौपाया पशु पशुले चह्राउन्या ठाउमा र गोठमा हानाहान गरि मार्‍यामा चकुइ पर्दैन. हान्याका धनिलाइ दंड विगो पनि पर्दैन.

११. गाइ वाहेक् अरू चौपायहरूमा. कमलायाकालाइ कमलायाको जानि जानि कसैले काटेछ मारेछ भन्या त्यो मार्‍याको चौपाया आफ्नै भया भैसि मार्‍याको भया १ ज्यूको ५ रूपैया वाषॎ भेडाहरू मार्‍याको भया १ ज्यूको २ रूपैयाका दरले दंड गर्नु. अर्काको चौपायाहरू काटच्या मार्‍याको ठहर्‍या जौना जगाको हो उसै जगामा चल्याको जौना चौपाया मार्‍याको छ. उसैको पंचकृति मोल धनिलाइ दिलाइ विगै वमोजिम् दंड गर्नु. रूपैया नतिर्‍या मैन्हाका ५ रूपैयाका दरले कैद गर्नु.

१२. गाइ वाहेक्. कमलायाका चौपायाले मानिस् मार्‍यो भन्या. त्यो मानिस् मार्न्या चौपाया गाभीन हुनाले उस् वषत्मा नकटानु. वियायाको ६ मैन्हा पछि काटिमारि दिनु.

१३. लंवर षारेज.

१४. भैसि व£षॎ च्यांग्रि भेडि सुगुर्नि मार्न्यालाइ अैन वमोजिम दंड भया पछि अरू लाइ दंड पर्दैन. कसैले दंड गरेछ भन्या विगो फिर्ता गराइ उसै विगा वमोजिम् दंड गर्नु. मासु षान्यालाइ पनि दंड पर्दैन.

देव देवताको पूजा गर्दा हवस् आफूले मासु षाना वेचनाका लागि हवस्
स्वास्नी जात चौपाया मार्दा गर्न्या कुराको अैन् ६

१५. सावुद भैसि मार्न्यालाइ १० रूपैया दंड गर्नु.

१६. सावुद वाषि्र काग्या वरूवालका भेडि मार्न्यालाइ १॥ रूपैया दंड गर्नु.

१७. सावुद सुगुर्नि मार्न्यालाइ १ रूपैया दंड गर्नु.

१८. सावुद भैसि वाषि्र काग्या वरूवालका भेडि सुगुर्नि मार्दा २।३ जना मिलि मार्‍याको रहेछ भन्या जति जना मिलि मार्‍याको छ उति जनावाट दामासहिका दरले येहि विगो उठाइंलिनु.

१९. मार्दामा हेरि रहन्या र मासु षान्या अरूलाइ दंड पर्दैन.

२०. भिरवाट लडि षौला भडषारामा परि षुट्टा भाचियाका वा अरू कुरा भै रोगाइ उठन नसकि थला पर्‍याका सास रहाका मार्न्या मराउन्या वेचन्यालाइ र षान्या जातले इनैको मासु षाया भन्या वात लाग्दैन.

# सवारीको

१. हाति भर्क्यो चमक्यो र माहुत्याले अंकसा अध्यारि लाउदा पनि नमानि पेलि गै केहि षुन नोकसान गर्‍यो कसैको ज्यान मार्‍यो भन्या माहुत्यालाइ षत वात लाग्दैन.

२. मात्याका हातिले केहि षुन जषम् गर्‍यो भन्या माहुत्यालाइ षत वात लाग्दैन. मात्याको हाति नषोलनु. भंन्या भयाकामा हाति षोलि षतडा गर्‍यो भन्या अदालत्का हाकिम्ले तजवीज गरि निसाफ गर्नु.

३. मानिसका भिडले मेला यात्रामा हाति लैजादा मालिक्का हुकुम् मर्जि आज्ञाले लै गयामा र आफु मालिक्ले सवारि भै जादा मानिसलाइ कुलचायेछ मिचायेछ र घा मात्रै लागेछ भन्या घाइतालाइ २५ रूपैया घा षर्च दिलाइ २५ रूपैया दंड गर्नु. माहुत्याले लैगयामा कुलचया मिचायाको भया घा षर्च १० रूपैया दिलाइ १० रूपैया दंड गर्नु. रूपैया नतिर्‍या अैन वमोजिम् कैद गर्नु.

४. मानिसका भिड मेला यात्रामा माहुत्याले. आफ्ना षुसिले हाति लै गायामा मानिसलाइ कुलचाइ मिचाइ ज्यान मर्‍या भन्या. मर्न्याको कृया षर्च ५० रूपैया दिलाइ ५० रूपैया दंड गर्नु. मालिकका हुकुम् मर्जि अग्याले लै गायामा र. आफै मालिकले सवारि गरि जादामा मानिस् कुलचाइ मिचाइ ज्यान मरेछ भन्या मर्न्याको कृया षर्च १०० रूपैया दिलाइ १०० रूपैया दंड गर्नु. रूपैया नतिर्‍या अैन वमोजिम् कैद गर्नु.

५. माहुत्या चढि हाति डुलाउन पानि षुवाउन चह्राउन लैजादा थामन नसकी मानिसलाइ कुलचि हानि मानिस् मर्न गयो भन्या हाति थामन नसकन्या तेस्ता माहुन्त्यालाइ जागिर षोसिदिन अरू वात लाग्दैन.

६. एकातिरवाट हातिको एकातिरवाट घोडाको सवारि आयो अथवा दुवै तिरवाट हाति हाति वा घोडा घोडाको सवारि आइ दोहरो भिडियो भन्या सवारि गरी आउन्यामा ठुला दर्जाको जो छ उसलाइ कंम दर्जाकाले आफुले सवारि गर्‍याको हाति घोडा जो छ हटाइ वाटो छोडिदिनु वगि

आयो भन्या हातिले पनि घोडाले पनि वाटो छोडिदिनु. वाटो नछाडि तक्राज गऱ्यो भन्या अदालत्का हाकिम्ले तजवीज गरि अर्घ्यालि गर्न्यालाइ जरिवाना गर्नु.

७. वगिले टिपाइ लैजादा नदेषि मानिस् मिचाइ ज्यान मर्न गयो भन्या मर्न्याको कृया षर्च ५० रूपैया दिलाइ दिनु. वगिले टिपेन आफुले देषता षतै मिचाइ ज्यान मऱ्यो भन्या कौसल र. अदालतले तजवीज गरि निसाप गर्नु.

८. वगिका घोडाले टिपि जादा मानिस कुलचायो मिचायो भन्या घा लाग्न्यालाइ घा षर्च २५ रूपैया ज्यान मरेछ भन्या कृया षर्च ५० रूपैया दिलाइ दिनु. दंड पर्दैन.

९. वगिको सवारि गर्दा. मानिसलाइ मिचाइ जषं गऱ्यो भन्या घाइतालाइ घा षर्च २५ रूपैया दिलाइ २५ रूपैया दंड गर्नु. मिचि ज्यान मर्न गयो भन्या. मर्न्याको कृया षर्च ५० रूपैया दिलाइ ५० रूपैया दंड गर्नु. रूपैया नति.ऱ्या अैन वमोजिम् कैद गर्नु.

१०. वगिको सवारि आउदा. छाता वोढन्याले छाता वोह्नालि वाटो छोडिदिनु. वाटो छोडेन छाता वोह्नालेन र छाता देषि घोडा झस्कि वगिविग्रन गयो भन्या र. सवारीलाइ जषम भयो भन्या वगि सावुद गर्न लगाइ तेसलाइ ५० रूपैया जविाना गर्नु.

११. वगिको मुहुडा फिराउदा वगि थामन नसकि जस्का वगिले पुल्. पर्षाल भत्काउछ उसैले ५ दिनभित्रमा वनाइ दुरूस्त गर्नु पाच दिनमा वनायेन. भन्या वनाउन्या विगो तेसैवाट उठाइ लि ५ रूपैया जरिवाना गर्नु.

१२. साघुरा वाटामा वगिको सावारि आउदा. हातिका सवारले वाटो छोडिदिनु घोडाका सवारले वाञा किनारा लाइदिनु. हाति घोडाका सवारले वाटो नछोडि सवारलाइ. जषम गऱ्यो र. वगि विग्र्यो भन्या विग्र्याको वगि सावुद गर्न लगाइ ५०।५० रूपैया जरिवाना गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

१३. वगिको सवारि आउदा. वाटामा . हाति आयो भन्या माहुत्या र. सवारले ३० कदम् तफावत् गरि हाति हटाइ दिनु. हाति नहटाइ वगि विग्रन गयो र सवारलाइ जषम भयो भन्या हातिको तल् रहेछ भन्यामा माहुत्यालाइ ४० रूपैया सवारि भयाको रहेछ भन्या जस्को सवारि हो उस मालिकलाइ ५० रूपैया दंड गरि. वगि सावुद गर्न लाउनु.

१४. घोडाका सवारले गस्त्री वाटा जात्रा मेलामा होस् नराषि जादा मानिस् कुलचाइ ज्यान मरेछ भन्या मर्न्याको कृया षर्च.५० रूपैया दिलाइ ५० रूपैया दंड गर्नु. घोडाले मुष जोर गरि टिपतामा मानिस् कुलाचाइ मऱ्याको भया मर्न्याको कृया षर्च ५० रूपैयामात्रै दिलाइ दिनु दंड पर्दैन.

१५. घोडा चढि आउन्याले गस्त्रि वाटा यात्रा मेलामा होस्नराषि मानिस् कुलाचायो भन्या घा लाग्न्याला घा षर्च १० रूपैया दिलाइ १० रूपैया दंड गर्नु. घोडाले मुष जोर गरि टिप्तामा मानिस् कुलचायाको भया घाइतालाइ ५ रूपैया घाषर्च दिलाइ दिनु दंड पर्दैन.

१६. सवार लोटि उम्क्याको र सैसले थामन नसकि लगाम छिनि उम्क्याका घोडाले केहि षुन जषम गऱ्यो भन्या सवार. सैसलाइ षतवात लाग्दैन.

१७. घोडाले पछाडि हानि मानिस मरोस्. अथवा जषम हवस् तापनि तेस्तामा सवार सैस कसैलाइ पनि षतवात लाग्दैन.

१८. आफ्ना सोषले निस्कदा मा मानिसका गोलमा भिडमा घोडाको दौड छाडि मानिस मिचायेर ३ दिनभित्रमा मऱ्यो भन्या कौसल र. अदालतले तजवीज गरि निसाफ गर्नु.

१९. घोडा जात्रामा टुडिषेलमा घोडाको दौड हुंछ भनि सवैलाइ थाहै हुंछ तेस्तामा दौड छाडदा मानिस मिचि जषम भयो भन्या. अथवा ज्यान मरोस्तापनि तेस्मा सवारलाइ षतवात लाग्दैन.

२०. वाटामा गाइ भैसि ल्याउदा हाति घोडाका सवारले गाइ भैसि हटाउन भनि उर्दि दिदा दिदै गोठालाहरूले हटायानन् र हाति घोडा तर्स्यो भन्या गोठालालाइ १ रूपैया सवार लोटन गयो भन्या ५ रूपैया जरिवाना गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

२१. सवारि भयाका र सैसले डोऱ्याइ ल्यायाका घोडालाइ कसैका गाइ गोरुले हान्या १ रूपैया रागा भैसिले हान्या २ रूपैया दंड गर्नु.

# आगो लाउन्या

१. सर्कारिया ढुकुटि तहविलल् तोसाषाना मुलुकीषाना र. वहिपत्र तहविल रहन्या सदर दफदर दफदर कुमारिचोक् इटाचपलि अडा गौडाका तहवील र कागजपत्र रहन्या ठाउ औ सिलषाना जगा जागाका जंगिषजना. जंगि असवाव रहन्या. जगामा पहरामा होसियारसित वति मात्र वालनु. अरू आगो चिराक नलैजानु एति ठाउमा कसैले तमाषु पनि नषानु वारूद रहन्या ठाउमा वति नलैजानु. जुतालाइ पनिकसै नजानु अैन मिचि उर्दिनाधि वारूद रहन्या ठाउमा वति लैजान्या र जुतालाइ जान्यालाइ १० अरू उर्दिनभयाका जगामा आगो लैजान्या र. तमाषु षान्यालाइ २॥ रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

२. कसैले कसैका घरमा आगो लाया पछि घरमाल वाच्यो डढेन भन्या तेस्ता आगो लाउन्यालाइ र. आगोलाइदे भंन्यालाइ ६०।६० रूपैया दंड गर्नु. दंडका रूपैया नतिऱ्या कैद गर्नु.

३. कसैले अर्काको घर पोलनालाइ मतलव दियाको रहेछ घर पोलन्या ठाउमा आफु भन्या गयाको रहेनछ घर पोल्दा मानिस् पनि मऱ्या छन्. गाइ गोरू पनि पऱ्या छन् भन्या तेस्ता मतलविको अैन वमोजिम्को अंस सर्वस्व गरि दामल गर्नु. मानिस गाइ गोरु भन्या पऱ्याका रहानछन् धनमाल र. अरू चौपाया मात्र पऱ्याका रहाछन् भन्या पोलन्या र मतलव दिन्यावाट पोलिन्याको विगो भराइ आगो ला भनी वचन दिन्यालाइ ६ वर्ष कैद गर्नु. स्यादका रूपैया डवल् दिया लि छाडिदिनु.

४. कसैको घर कसैले पोल्यो गाइ गोरू र अरू चौपाया गैह्र आगामा परि मऱ्या भन्या घर पोलन्याको धनले पोलिन्याको विगो भराइ वाकि रहो भन्या अैन वमोजिम्को अंस परसारि सर्वस्व गर्नु. गाइ गोरू पऱ्याका रह्याछन्भन्या दामल गर्नु. अरू गैह्र चौपाया पऱ्याका रहाछन् भन्या ६ वर्ष कैद गर्नु. मासिन्या जात रहेछ भन्या मासि प्रायश्चित दिनु.

५. कसैले अर्काका घरमा आगो लाउदा ज्यान पनि मरेछ. धन पनि परेछ भन्या उस् वेलामा उस्का धनवाट धनिको विगो भराइ दिनु. धनले विगो पुगेन भन्या उस्को ज्यू काटिया मुडिया

दामल भया मासिया पछि नपुग्यको विगो उस्का भाइ छोरा नातिसित पल्हाय पछि लिउला भंन पाउदैन.

६. कसैले अर्काको घर पोल्यो र. मानिस् स्मेत् पऱ्यो भन्या पोलन्याका सर्वस्ववाट पोलिन्याको डढ्याको विगो वमोजिम् उस्लाइ दिलाइ. वढता भयाको फिर्ता गराइ. दिनु. वगो पुगेन भन्या नपुग्यको विगो पोलिन्याले पाउदैन. फलानाको घर पोल भनि आज्ञा दिन्यालाइ र. आगो लाउन्या लोग्न्या मानिस्लाइ ज्यानको वदला ज्यान हुंछ. मुडिन्या जातलाइ अैन वमोजिम्को अंस सर्वस्व गरि. लि दामल गर्नु. स्वास्नि मानिसलाइ पनि दामल गर्नु.

७. कसैले घर पोलिदियो र. मानिस् पनि मरेन. गाइ गोरू पनि मरेन. धन माल र. अरू गैह्र चौपाया मात्र पऱ्याको रहेछ घरका धनिले यससित मेरो विगो मउठाइलिउला भनि राजिनामा लेषिदियो भन्या आगो लाया वावत्. ६० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या कैद गर्नु धन लिनु नलिनु धनिको षुसि.

८. कसैले घर पोल्यो मानिस् र गाइ गो रू भन्या पऱ्याका रहानछन्. अरू चौपायाहरू र धनमाल मात्र पऱ्याको रहेछ. घर पोलन्या घर पनि षडा गरिदियो धन मालको विगो पनि भर्ना गरिदियो भन्या घर पोलन्यालाइ. ६० रूपैया दंड गर्नु.

९. फलानाले घरमा आगो लाइदियो भनि कोहि भंन्न आयो वुझदा उसले आगो लायाको ठहरेन भन्या तेस्ता पोलाहालाइ मानिस्को ज्यू स्मेत् पऱ्यो भंन आयाको भया ६ वर्ष गाइ गोरू पऱ्या भन्यालाइ ३ वर्ष कैद गर्नु. म्यादका रूपैया दिया लिनु. अरू चौपाय र. धनमाल पऱ्यो भंन आउन्या पोलाहालाई जति पऱ्यो भंछ उसै विगा वमोजिम धन मात्रै पोली दियो भंन आया २० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

# बोक्स्यारोको

१. जगा जमीन् नगद जिनिस्का झगरामा गाला गाल गर्दा कसैले वोक्सी भन्यो भनि कराउन आयो भन्याको ठहर्‍यो भन्या वोक्सी भन्यालाइ ५ रूपैया दंड गर्नु अघिवाट गालि गरि पछिवाट वोक्सि भन्याको रहेछ भन्या २॥ रूपैया दंड गर्नु रूपैया नतिर्‍या अैन वमोजिम कैद गर्नु.

२. कोहि लोग्न्या स्वास्निले मलाइ वोक्स्यारो लायो भनि फिराद गर्न आयो भन्या उसलाइ ल्याइ निरोपन गर्दा बोक्स्यारो लायाको ठहरेन भन्या. फिराद गर्न आउन्यालाइ २० रूपैया दंड गर्नु. रूपैया नतिर्‍या अैन वमोजिम् कैद गर्नु.

३. मदौरू लाइ डामदा. दामियाका र. मंत्रले नचाउदा नाचन्या मदौरूको कपाल षौरदा वोक्सीको कपाल षौरिन्या एस्ता वोक्करीलाइ गाउ देखि निकालि धपाइ दिनु. एस्ता वोक्सी निकालन्यालाइ षत लाग्दैन.

४. धामि गैह्रले न नचायाका र मडौरूलाइ दामदा वोक्सिलाइ चिन्ह नलायाका उसै नित्रा पसिहा.ऱ्याका वोक्स्यारोलाइ मार्न्याहरूको जात जान्दैन. पतिया पनि पर्दैन ति बोक्सी ठहर्दैनन्. तिनलाइ फेरि गाउ घरमा कसैले वोक्स्यारो लाइ घरवाट निकालन्यालाइ ६० रूपैया घरवाट निकालेन वोक्सी मात्र भने छ भन्या २० रूपैया दंड गर्नु.

५. बोक्स्याराका कुरामा.धामी गैह्रले चिन्ह नलायाका मंत्र तंत्रले ननचायाका स्वास्निलाइ अदालत ठाना अमाल बाटनित्रा हालदा कराहिमा हात हालन्या सहेल गाग्रि पोषरिमा डुवाउन्या आषामा रायो घसन्या फ्लाम् रूहन्या गैह्र नित्रा कसैले नदिनु. यस्ता नित्रा हलाउंदा स्वास्निले हारि भंन्या तेसले हार्‍याको ठहर्दैन. नित्रा दिन्याद्वार्‍या विचारि जो हो उस्लाइ ५० रूपैया दंड गर्नु. तेस स्वास्निलाइ जिताइदिनु.

६. धामो गैह्र कसैले वोक्सीलाइ डामि चिन्हलाइ दिंछ भनि मदोरूलाइ दामदा वोक्सीलाइ घा लागेन. मदौरूलाइ. घा लाग्यो भन्या तेस्ता धामि गैह्र जो हो उस्लाइ ३० रूपैया दंड गर्नु रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

७. धामिले भयो वा. अरू गैह्र कसैले भयो ढचाग्रो ठोकि गै लगायाका छाना ठठाइ लायाका चिन्ह नलायाका. ननचायाका मदौरूका मुषले मात्र वकि भनि वोक्सारोलाइ निकाल्याको वोक्सी ठहर्दैनन्.तेस्तालाइ नित्रा दिनु पनि पर्दैन. ती वोक्सी होइनन्. वोक्सचारो लाउन्या धामि गैह्रलाइ ८० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या कैद गर्नु. वोक्स्यारा लगाइ मागन्यालाइ पगरि वाधि पगरिको १ जिताउरिको २ ज्मा ३ रूपैया लिनु.

८. अर्कालाइ वोक्स्यारो लगाइ घरवाट निकालन्या. धामि हवस् वा. अरू गैह्र कोहि हवस् तेस्तालाइ ६० रूपैया दंड गर्नु घरवाट निकालेन. वोक्स्यारा मात्र लायो भन्या २० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या कैद गर्नु.

९. धामि गैह्र तल्ला जातका कसैले. इलाज गर्दा. आफु भंदा उपल्ला जातका लाइ पैतालो चटाउदा. व्राम्हण रजपुतलाइ. क्षत्रि जातले पैतालो चटायो भन्या ६० रूपैया दंड गर्नु. तागाधारि लाइ मतवालिले चटया ७० रूपैया पानि नचलन्या अछुति जातले चोषा जातलाइ पैतालो चटायो भन्या १०० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु. पैतालो चाटन्या मदौरूलाइ येक मोहोरको गोदान लि प्रायश्चित्त दिनु. पतिया पाउछ

१०. कसैका कन्या सधवा विधवा स्त्रिहरूलाइ झार फुक इलाज गर्छु भनि गानु झिकि. दिन्या आगमा मुषले चुसन्या धामि गैह्रलाइ २० रूपैया जरिवाना गर्नु. रूपैया नतिऱ्या कैद गर्नु.

११. स्वास्नि जातलाइ वेराम भयो र झारफुक इलाज गराउनु पऱ्यो भन्या लोग्न्या मानिसले टाढैवाट आमृसाका कुचाले चवरले. कपडाले कुशले झारफुक गर्नु नछुनु आग गैह्रमा भयाका षटिराहरू फोर्नु पर्दा फोर्दिन्या र. औषधिलाइ दिन्यालाइ षत वात केहि लाग्दैन. दंड पनि हुदैन.

१२. कोहि लोग्न्या मानिसले गुरौ धामि. झाक्रि वोक्स्यारो राकस्लाइ वैद्यै लायाको मैले हो मंत्र यंत्रले देवता उठाइ वोक्स्यारो गरि मानिस मार्‍याको मैले हो भनि आफ्ना मुषले कायेलपनि भयो मानिस पनि मार्‍याको ठहर्‍यो भन्या. मंत्र तंत्र गरि वा. वाघलाइ मानिस् मार्‍याको मैले हो. भंन्याले. येस्ता विहोराले मंत्र यंत्र वोक्स्यारो गरिरा कस्लाइ. मानिस् मार्न्या लोग्न्या मानिस्लाइ अैन वमोजिंम् सर्वस्व. गरि. देस नकाला गरि दिनु. स्वास्नि मानिस्ले एसै रितले मानिस् मार्‍याको मैले हो भनि आफ्ना मुषले कायेल भै भन्या. सर्वस्व गरि गाउवाट निकाला गरि दिनु.

१३. एसै रित वामोजिम् मंत्र यंत्र टुना गरि मानिस पनि षायाको मैले हो भनि आफ्ना मुषले कायेल भयो भन्या ५० रूपैाया दंड गरि. गाउवाट निकाला गरि दिनु.

१४. एसै रितले मंत्र यंत्र टुना गरि. चौपाया पशुपंछिलाइ. मैले मार्‍याको हो भंनि कायेल भयो भन्या. मार्‍याका मालको विगो र. विगा वमोजिम् दंड गर्नु. मार्‍याको त छैन दुषायाको मात्र छ मैले हो भनि. कायेल भयो भन्या. मालको आधा मोल दंड गरि लि गाउवाट निकालि दिनु.

१५. अर्कालाइ जादु टुना गर्न्या मोहनि वसिकरण गर्न्या गर्न लाउन्यालाइ ६० रूपैया दंड गर्नु. उच्चारन गर्न्या गर्न लाउन्यालाइ १२० रूपैया दंड गर्नु मारण गर्न्या गर्न लाउन्यालाइ. अैन वमोजिम्को अंस सर्वस्व गरि छोडि दिनु. एस कुरामा पोलाहाले पोलि सावित् गर्न सकेन भन्या जौन कुरा पोल्यो छ सोहि वमोजिम्को दंड सजाय गर्नु.

१६. अैनले वोक्सा वोक्सी नठहर्न्यालाइ.धामिले भयो वा अरू कसैले भयो वोक्स्यारो लगाइ धपाउदा तिन्का सग लागि गै सिस्नु लाउन्या स्याहुला केराका सुप्लाले हांन्याका चामटेंग्राले हांन्यालाइ ३०।३० रूपैया लाठा ढुँगाले हान्या हान्यालाइ. ४०।४० रूपैया दंड गर्नु ज्यान मरेछ भन्या अैन वमोजिम् ज्यानको वदला ज्यान् लिनु. वोक्सी धपायको हेर्न्या हात नछाडन्याहरूलाइ षत लाग्दैन.

१७. कसैलाइ वेथा लागी वेहोस भयाका वेलामा धामि झाक्रिले हवस् वा. अरू कसैले हवस्. इलाज झारफुक र. षगर्दा आफै मदौरूका मुषले फलाना वोकसा वोक्सीले दुषायाको हो भनि र. वुझदा मदौरूले वेथाका जोरमा भन्या को मात्र ठहर्‍यो धामि झाक्रि अरू इलाज गर्न्या

कसैले पनि त्यो वोक्सा वोक्सी हो भनि. समायाको रहेछ. मदौरूले वेथाका जोर. मावक्याको सुनि वोक्सा वोक्सी भन्यालाइ ५ रूपैया दंड गर्नु.रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु. मदौरूलाइ र. इलाज गर्न्या धामि झाक्रि गैह्रलाइ. षत लाग्दैन.

१८. पानि नचलन्या जातले हावोस्. छिटो हालनु पर्न्या जातले हवोस्. कसैले इलाज गर्दा पानि पऱ्याको औषधि उल्टा गरि. फुकि आफुले नछोइ थुकन पर्न्या गरि. टाढावाट मत्रि दियाकामा फुकन्यालाइ पनि. षान्यालाइ पनि. षत लाग्दैन. प्रायश्चित गर्नु. पनि पर्दैन.

१९. वेहक्मा अर्कालाइ विरूप गराइ कपडा रगाइ वेइज्जत् गरि गाउ सहर घुमाउन्यालाइ लोग्न्या मानिस्लाइ. घुमायाको भया २५ स्वास्नि मानिस्लाइ घुमायाको भया ५० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

# जुवाको

१.	जुवा फुक्याका दिन वाहेक अघि पछि. वर्जामा घरमा होड दिन्या र. होड हान्या दुवैलाइ विगाको दोवर दंड गर्नु रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

२.	षेलन्याले कहन आयानन् अरूले कहन आयो भन्या नगद राषि मुषले मात्र प्वाक वोल्यको. रूपैया जित्न्याले पनि लिन पाउदैन हार्न्याले पनि तिर्नु. पर्देन प्वाक् वोलि थापन्या र. प्वाक हान्या दुवैलाइ २०।२० रूपैया दंड गर्नु.

३.	मुषले प्वाक वोलि षेल्दा हार्न्या कराउन आयो प्वाक वोल्याको तिर्नु पर्दैन कहन आउन्यालाइ दंड पनि हुदैन. जितन्याले जित्याका रूपैया पाउदैन प्वाक षेल्या वावत् २० रूपैया दंड गर्नु जितन्याले प्वाक षेल्यामा एति जित्या भनिं कहन आयो भन्या जीत्याको रूपैया पाउदैन दंड पनि हुदैन.

४.	जुवा षेलनु भनि झाज पिटाइ. जुवा फुकयादेषि वंद नहुज्याल् जुवा षेल्याका षालमा र. जुवा षेलाउन्याका घर्मा. सुना चादि जवाहेर गैह्र वेच विषन् नगर्नु. किन्दा पनि कसैले नकिंनु कसैले वेच्यो भन्या जतिमा वेच्याको छ उहि थैलि लिलाम गरि लिनु. किंन्यावाट. कीन्याको उहि माल् लिलाम् गर्नु. वंधक् मात्र राष्याको भया वेचन्यावाट थैली लिनु. वंधक् लिन्यावाट वाधा लियाका थैलि वमोजिम्. दंड गरि लिनु. रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

५.	जुवाफुक्या पछि साहु वसि जुवा षेलायो हान्याले पनि कहन आयान जित्न्याले पनि कहन आयेन साहु वस्न्याले पनि कहन आयेन च्याप्या थाप्न्या र देषन्याले पनि कहन आयेन भन्या साहु वस्न्यालाइ अैन वमोजिम्को अेससर छोरिको विहा षर्च. परसारि उस्को अंस सर्वस्व गर्न. जुवाका असामिसितका लिनु ठहऱ्याका रूपैया पनि लिलाम् गर्नु. साहुका रूपैया लि षेलि जितन्याहरूसंग जित्याका रूपैया लिलाम् गरिलि २०।२० रूपैया पनि दंड गर्नु उसै षाल मध्येमा सापट् नलि आफ्ना गाठिका षेलन्याहरूलाइ २०।२० रूपैया दंड गर्नु. साहु वस्याको थाहा नपाइ च्याप्या थपन्या र. हेर्न्याहरूलाइ १०।१० रूपैया दंड गर्नु साहु वस्योको थाहा नपाइ च्याप्या थापन्या र. हेर्न्याहरूलाइ षतवात लाग्दैन. साहु वसि षेलायो भनि षेलन्या

वाहेक्. अरू कसैले अदालत्. ठाना अमाल्मा जाहेर गर्न आयो भन्या त्यो जाहेर गर्न आउन्यालाइ तेस षलमा. षेलन्याहरूवाट जुवा वत्मातहसिल् गर्न्याका आमडानि मध्ये सयकरा ५ रूपया दिलाइ दिनु.

६. वाह्र मास्या जुवा षेलन्या १२ वर्षदेषि तलका वालषलाइ दिन १० कैद गर्नु १२ वर्षदेषि माथिका १६ वर्षसमकालाइ १० रूपैया दंड गर्नु. जुवा षेलदा १६ वर्षदेषि माथिका षेलन्या र. षेलाउन्या च्याष्या थापन्या. जिमि जगा वंद वेपार षे-त पाति र. कम् रोजगार. भयाका इज्जत्दारले. षेल्या भन्या तेस्तालाइ अैन वमोजिम्. सर्वस्व दिनामा कवोल् गछ भन्या पनि. अढाइ वर्ष कैदमा रहछ भन्या पनि इज्जाद्दार. मानिस्को षुस्. जिमि जगा वंद वेपार. षेति पाति रकम् केहि नभयाका क्वकडाले षेल्यो भन्या. तेस्तालाइ अढाइ वर्ष कैद गर्नु. म्यादका रूपैया तिर्छ भन्या छोडिदिनु. अर्काका घरमा जुवा षेल्याको देषिकन. अदालत् ठाना अमाल्मा कहन. नआउन्यालाइ. २० रूपैया दंड गर्नु. दंडका रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु. अदालत् ठाना अमालमा कहन आउन्या. लाइ केहि पर्दैन.

७. अव उप्रान्त गोर्षाराजभरमुलुक्मा जुवा षल्दा कार्तिक वदि १३ रोजदेषि ऐ सुदि २ रोजसम्म जेम पंचक् दिन ५ मात्रै साल वसाल्. षेलन्याले जुवा षेलुनु. षतवात लाग्दैन. एति दिनदेषी वाहेक् अघि पछि कसैले नषेल्र्नु. अैनमा लेषियाक दिनदेषि वाहेक्. अघि पछि जुवा षेलन्यालाइ. अैन तावा पत्र वमोजिम् सजाय गर्नु.

८. जुवा षेलनु भनि भ्फाज पिटिइ. जुवा फुक्याका दिनदेषि वंद नहुज्याल् षेलन लाग्याका षालमा र. षेलाउन्याका घरमा. सरसापटि कसैले नदिनु. नलिनु सापटि दियोको ठहऱ्या अदालत ठाना अमाल्वाट साहुको थैलि लिलाम् गरि सापटि लिन्यालाइ. लियाका थैलिको विगा वमोजिम्. दंड गर्नु रूपैया नतिऱ्या. अैन वमोजिम्कैद गर्नु सापटि लि जुवा षेल्न्याले र. उसै षेलन्याले अदालत् ठाना अमाल्मा कहन आया. साहुको थैलि तिर्नु पर्दैन. कहन आउन्यालाइ षत लाग्दैन. जुवा षेलि जितन्याले. पनि अदालत् ठाना अमाल्मा जाहेर गऱ्यो भन्या जित्याको रूपैया उसैको हुंछ. षत पनि लाग्दैन. (कसैले छ.

९. जुवा षेल्दा असफि कलार. पटना मोहोर पैसा फुका दाम थापि षेलन्याले षेलनु एस्तो गरि. षेलदा हान्याले हान्याको जितन्याले जित्याको. सदर हुंछ गहना कपडा भाडा वतन्. जवाहेर.

हात हतियार गाई भैसि ज्यू गैह्न जिनिस्. थापि कसैले नषेल्नु. नगद वाहेक् टक नलाग्योको सुना चादि जवाहेर. गैह्र जिनसी माल जित्न्याले. फिर्ता गरिदिनु. जिनिस् जितन्यालाइ. जिनिस्का ज्माका सयकरा १० का हिसावले दंड गर्नु. विसौद लि माल फिराइ दि. टक नलाग्याको माल र जिनिस थापि षेलन्यालाइ. पनि सयाकरा १० का दरले दंड गरि दसैद लि माल फिराइ दिनु.

१०. थापाथलि पुल्देषि माथि पांचायण घाटमा कृष्ण जन्माष्टमिका २ दिन् २ रात् चैत्र शुदि १४ का दिन ढोकादेषि वाहिर. भर टुडिषेलमा २ दिन् २ रात्. जाग्रम निमित्त जवा षेलनु. त्यस्दिन्व्याहानै अदालत् ठानावाट जुवा फुन्या चुइकि लगाइदिनु. २ दिन् २ रात् पुग्याका व्याहानै. वंद गर्न्या चुइकि लाउनु. लेषियाका ठाउ वाहेक् सहर र. अरू जगामा षेल्न्यालाइ. जुवाका अैन र तावापत्र वमोजिम् सजाय गर्नु.

११. जुवा फुक्यामा षेलन्याले जुवा षेल्दा कपटिया पासा कौडि छरूवा वनाइ कसैले नषेलनु कपटि पासा कौडि छरूवा वनाइ षेल्याको ठहर्‍यो भन्या कपट गरि षेलि जित्याको ज्मा जस् जसको हो उसलाइ दिलाइ जितन्यालाइ उसै ज्माका विगा वमोजिम् दंड गर्नु भरायाका धनको दसौद लिनु धनि पत्ता न लाग्याको विगो जफ्त गरि लिनु. रूपैया नतिर्‍या अैन वमोजिम् कैद गर्नु.

१२. जुवा फुक्याका दिन वाहेक् अघि पछि ओषर. पांग्रा वसुपति च्यांग्रा पति जोर विजोर. गैह्र षेलि हारजीत् गरि पैसा दिन्या लिन्या गर्नाहरूमा. १६ वषउभोकाहरूलाइ जनहि ३० रूपैया १२ वर्ष उभोका १६ वर्षसंमकालाइ जनहि १० रूपैया दंड गर्नु १२ वर्ष मनिका वालषलाइ नषेलनु भनि हव्काइदवकाइ छाडिदिनु दंड हुदैन.

१३. जुवा फुक्याका दिन वाहेक्. अघि पछि कसले रंग गंजिफा पचिस् षेल्दा पैसा लिन्या दिन्या गरि नषेलनु. पैसा लिन्या दिन्या गरि षेल्यो भन्या जुवा षेल्याको ठहर्छ. वाह्रमास्या जुवा षेलन्यालाइ लेष्यका अैन वमोजिम् दंड सजाय गर्नु पैसा लिन्या दिन्या गरि षेल्याको रहेछ मुषले मात्र सरद गरि षेलन्य हरूलाइ. १०।१० रूपैया दंड गर्नु.

१४. गोर्षाराजभरमा घर जाहान गरी वस्याका वाहेक् भोटतर्फ विराना राजका कसैले जुवा फुक्याका दिन वाहेक. अघि पछि गोर्षाराजमा आइ जुवा षेल्या भन्या जित्याका रूपैया लिलाम् गरी २०।२० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

१५. मृगस्थलि विश्वरूप स्थाना गऱ्याका ठाउमा वर्षप्रति कार्तिकं वंदि ५ रोजका दिन भै भारादारहरूले आफ्ना सक्य इछा अनुसारको पूजा को सामग्री लैजान लगाइ विश्वरूपको पूजा गर्नु. एसै दिन व्याहानै चुत्रिकि लगाइ मृगस्थलि भरमा जुवा फोइदिनु. तेस दिन व्याहानैदेषि २ दिन २ रात् उतसव निमित्त षेलनाको इछा हुन्याले जुवा षेलनु कार्तिक वदि ७ रोजका व्याहानै वंद गरि दिनु.

१६. जुवा फुक्याका दिन वाहेक् १२ वर्ष नाघ्याका कसैले ओषर पांग्रा षेल्याके ठहऱ्यो भन्या आठ आना ॥ दंड गर्नु.

# घर वनाउन्याको

१. सहर्वाहिरमा र पवत्मा. छाप रैकर्का वाझा जगमा . जश्ले झिगटि घर्वनाउछ त्यो घर वनाउन्यालाइ घरका वल्यानिभित्रको जगा र. १० हात आगन् विर्ता हुन्छ सुक्रि विक्रि गरि वेचन हुन्छ सदर्दफदर षानावाट लालमोहर दस्तावेज गाज गरि दिनु अवादिमा वनायो छ भन्या तेस्को सट्टा आफ्ना अरू जगावाट. दियो भन्या सोहि नाप वमोजिम् सट्टा ली. घको सनद गरिदिनु सटा दिन सकेन भन्या. घर्र वनात्रा भनि अवादि जगा पाउदैन.

२. सहर्काठमाडौ पाटन् भादगाउ. का सर्कारिया घ हवउन्. दुनित्राका गुठि विर्ताका घ हउन् भत्कि पाताल्भयाकामा असार श्रावण भाद्र असौज. इ ४ मैन्हा वषामा वनिनसक्न्या हुनाले घर वनाउभंन्याउर्दि पुर्जि नटासनु वाहा उप्रान्त पैल्हे घरका धनिलाइ तेरो घर वना भनि ४ मैन्हाको षावा दिनु ताहासम्ममा धनिले वनाउन सकेन भन्या. ३५ दिन्को म्याद गरि उस्का छिम्याकि. लाइ वउ भनि उर्दि दिनु. म्याद भित्र माछिम्याकिहरूले पानि वनायानन्भन्या तेस पाताल्मा जश्ले घर्वनाउछु भन्न आउछ. अदालत् ठानावाछ उसैलाइ वना भन्नु. पाताल्भयाका अर्काका जिमिन्मा घर वनाया पछि. घर वनाउन्याको त्यो घर हुछ अदालत ठानामा जौन ठाउवाट पुर्जि टासियाको छ उसै जगावाट प्रमान्गीको रूक्का दस्षत्. मा पुछ्र्या छाप गरि. सदर दफर्दर्वाट मोहोर गराइदिनु. सुकृ विकृ आफ्ना षुस् गर्न पाउछ तेस् पाताल्का धनिले पाताल्को सट्टा. देउ म पनि. अर्कौ. जर्गामा घर्वनाउछु भन्न आया उस्का पाताल्का नापा वमोजिम् सहर्भित्र वाहिर जाहा भंछ सट्टा दिनु घर वनाया. सुक्रि विक्रि आफ्नु षुस् गर्नु भन्या सोहि विहोराको मोहोर गराइदिनु तेस्को विर्ता हुंछ.

३. घर्वारि भोग वंधक् लिन्या साहुले. आफूले चलन् गर्दा गर्दै घर्भत्कि पाताल्भयो भन्या वारि पाताल् साहुले चल् गर्न पाउछन्. घर्मात्रै वंधक् लेषियाको छ साहुकै चलन्मा. भत्कि पाताल्भो भन्या साहुको थैलि छुट्टि हुछ पाताल् समाउन पाउदैन. दाताको हुछ.

४. सर्कार लगायत्. उमराव भारदार. रैयत् गैह्रले जगा जमिन्. नेपाल्का घर्साटफेर गर्न देउ. म वेस् गरि अघिका भन्दा राम्रो गरि वनाउछु भन्दा जग्गाका धनिले मानेन भनि. कसैले कराउन

आयो भन्या. अदालत् ठानावाट उस्का मोलभन्दा वढर्ता सयकरा २० रूपैयाका दरले ठहऱ्याका रूपैया स्मेत् दिलाइ. अघिभन्दा राम्रो गरि वनाउन्यालाइ साट्फेर्गरिदिनु.

५. सहर्का कसैले आफ्ना जगामा घर्वनाउदा आफ्नु जमिन् नाघि. साध मिचि अर्काका जगामा. वनाउन हुदैन.आफ्ना जगामा घर्वनउादा वल्यानि अर्काका जगामा पऱ्या पनि. रोक्न पाउदैन. घर्वनाउन हुंछ.

६. तिन सहर गैह्रका गाउहरूमा झिगटि घर्वनाउदा साध सिवाना जोरीयाका कसैले अर्काका जमिन्मा आफ्नु जगाको हो भनि जग षनि. घर्वनायो. एक तला घर नवसंज्याल्. सम्ममा जगाका धनिले. मेरो जगामा घर्वनाउन हुदैन भनि हट्कदा मिच्याको ठहऱ्यो भन्या. मिचियाका जमिन् वमोजिम् मिचन्यालाइ दंड गर्नु जगाका धनिलाइ. जगा वेहोराइ दिनु. जगाका धनिले र उस्का जाहानले थाहा पाइ जग षन्यादेषि तला वसज्याल्. चुप लागि पछिवाट कहराउन आयो भन्या. उस्को विर्तै हो भन्या पनि उश्ले पाउदैन घर्वनाउन्यालाई सदर गरि विहोराइ दिनु जगाका धनिले र उस्का जाहानले थाहा नपाइ घर्सिद्धियाको रहेछ भन्या. पनि थाहा पाया पछि. कराउन आयो भन्या मिचियाका जमिन्को पंचकिर्ति मोल्भराइदिनु. जिमिन्को मोल लिन्न घर्को मोल दिन्छु भन्यो भन्या भनी उठायाका घर्को. पंचकृति मोल् गरि घर्वनाउन्या लाइ भराइ. जमिन्का धनिलाइ सिंगै घर्वेहोराइदिनु.

७. कसैले वेहक्मा अर्काको घर्भत्काइ दियो भन्या सहर्को घर्भत्कायाको रहेछ भन्या छेभडेल्कामानिस्ले ठहराया वमोजिम्. वाहिर फेरा पर्वत् गाम गैह्रका घर्भत्कायाको रहेछ भन्या उस्ठाउका पंच भला मानिस् राषि उन्हेहरूले ठहराया वमोजिमको मोल् विगो. भत्काउन्यावाट घर्का धनिलाइ. भराइदिनु. अर्काको घर्वेहक्मा भत्काउन्यालाइ. विगा वमोजिम्दंड गरि. अदालत् ठाना अमाल्वाट लिनु. रूपैया नतिऱ्या अैन वमोजिमम्कैद गर्नु.

८. वन्धक लियाको घर भत्कायो भन्या साहुले वनाउदा असामि राषि वनाउनु. असामि छैन भन्या उस्टोलको १।२ भला मानिस राषि वनाउनु. असामि ले थैलि तिर्न आयो भन्या घर्वनाउदा लाग्याको षर्च. स्मेत्. हिसाव गरि लिनु. असामिलाइ पनि राषेन. अरू साछि पनि कोहि रहेनछन् र. साहुले मात्रै यति षर्च लाग्याको छ भन्यको. साहुले पाउदैन.

९. पाटि पौवा सतल् धर्मसाला चौतारा. धारा कुवा इनार. साघु पुल वाटो वनायाको छ तेश्लाइ गुठ नरहि. भत्की विग्रि षराव भयो भन्या मोष्य जश्ले जस्का पूर्षालेवनायाको हो उसैले उसैका संतानले वनाउनु उन्ले वनाउन् ज्याल् अर्काले पाउदैनन्. संतान्छउस्ले वनाउन सकेन अथवा अघि वनाउन्याके निसतां भयाको रहे भन्या. तेस्ता जगामा. मर्जिणोद्धार गरि. वनाउछु भनि अडा अदालत्. ठाना अमाल्मा भन्न आयो भन्या. पछि वनाउछु भन्न आउन्यालाइ वनाउन दिनु.

१०. विर्ता रैकर्छाप गुठि. गैह्र अर्काका जगामा चार्दाम् ठेकि राषि. षर्पराल्का छाना गरि. वनायाका घर्मा. तिरो भरो गरि वसंज्याल्. पजनि गरि उठाउनु हुदैन आफै उठि वसै गयो भन्या र. तिरो भरो अड्कदा जगाका मालिक्ले उठाइदियो भन्या. ढिकि जातोद्धार भन्या गैह्र चल् वस्तु लि जना पाउछ घर्वेचन उठाइ लैजान पाउदैनन्. जस्को जगा हो उसैको हुछ.

११. जौन जौना सहर्का घर्को इठ काठपात हो उसै उसै सहर्मा लै गि घर्वनाउन हुंछ एका सहर्को अर्का सहर्मा लैगि. वनाउन र. सह वाहिर लैगि वनाउन हुदैन.

१२. काडमाडौ पाटन्भादगाउ तिन्सहर्का. दर्वारदेषि रैतितलकका विर्ता वंधक् दान पायाका र. रैकमी वनायाका आफ्ना घर. वेचनु. वंधक राषनु दान गर्नु. वकस् गर्नु धनिको षुस् आफ्ना मौसरले नपुगि घर्भत्काइ उसै घर्का काठपात इट लगाइ. ठुलाको सानु सानाको ठुलो गरि. वनाउन पनि धनिको षुस् सहर्को घेर्भत्काइ काठपात् इट्. सर्हर्वाहरी अंत लगि वनायाको ठहऱ्या सका रिया हुछ.

१३. रैकर्जगामा हवस् आफ्ना विर्ता वेषफिगढार मरौट माना चावल् छाप ज्यूनि पेटिया षर्च. गैह्र जगामा हवस्. कसैले झिगटिको छाना गरि देवालाय धर्मसाला पाटि पौवा र्घहरू वनाउदा अघि सर्कार वक्साइ. झिगटि लाउदा रहाछन्. अव उप्रान्त झिगटिको छाना लाउदा सर्कार वक्साउनु. पर्दैन दस्तुर पनि केहि दिनु पर्दैन.

१४. सह सहर्का घर्भत्क्या विग्ऱ्याका धनिले वनाउन नसक्ता अैन वमोजिम् म्यादको पुर्जि टसाइ. अर्काले वनाइसक्यापछि. फलानाले मेरो घमा पुर्जि टसाइ वनाइदियो मेरो घर्जान्या होइन भनि

कोहि कराउन आया भन्या. घर्भत्क्या विग्र्या पछि अर्काले पुजि टसाइ. वनाइ सक्यापछि म पाउन्या हु भन्न्याले त्यो घर पाउदैन. तेस्घरमा रहाका इट्काठपात् गैह्रको पंचकिर्ति मोल् घरका धनिले घंवनाउन्यावाट लिन पाउछ दिलाइ दिनु मेरो घर गयो तापनि तेस्घरका पाताल्वमोजिम् सट्टा पाया अर्कै ठाउमा घर्वनाउदा हुन्छ भनि भन्न आयो तेस्का घर्का पाताल् वमोजिम्को अर्कै पातल् सटादिलाइ दिनु. घर्वनाउछु भनि अर्का ठाउको पाताल् जमिन् सट्टा लिया पछि असार श्रावण भाद्र आश्विन इ ४ मैन्हा वर्षा हुनाले घर्वनायन भनी वात लाग्दैन. इ ४ मैन्हा वाहेक् अघि पछि सट्टा लियाका दिन् ३५ भित्र घर्वनाया विर्ताका लाल् मोहोर गराइदिनु सुकृ विकृ गरि वेचविषन्. गर्न हुछ ३५ दिनभित्रमा वनायेनछ र. तैसै पाताल्मा फेरि अर्को आइ फलानाले पायाको पाताल्मा घर्वनायेन म वनाउछु भन्यो भन्या पछि भंन आउन्याले घर वनाउन पाउछ अघिल्लाले पाउदैन.

१५. सह काठमाडौ पाट्न् भादगाउ सहर्गामल स्मेत्का सर्कारीया वा अरूका विर्ता गुठि गैह्रका घर. भत्कि पाताल् भयाका अदालत् ठानावाट जाचि घरका धनिलाइ. उर्दि दियाका. म्यादभित्र धनिले वनाउदा. अरूले मवनाउछु भनि आफ्ना नाउमा म्याद टसाइ घर वनाई सक्याका मा सनद गराइदिनुपर्दा जैना अडावाट पुर्जि टसी घर वन्याको छ. उसै अडाका हाकिम कारिन्दा. को एस् मितिमा पुर्जि टासि म्याद पुगि घर वनाउन्या फलानालाइ तेस् घरको विर्ताको सनद गराइदेउ भंन्या छाप लाग्याको कागज लि सदर दफदर्षानावाट मुक्त्यार साधि थर घर छेभडेल्का रकमि पठाइ साध सिबाना लगाइ विर्ताको लाल मोहोर. गराइदिनु. म्याद टासि वनायाका घरको मोहोर गराइ दिदा छेभडेल्वाट र. सदर दफदरषानावाट लिन्या दस्तुर. रूपैया ३ लेषौनि छपौनि रूपैया २ ज्मा रूपैया ५ मात्रै लिनु वढता नलिनु.

१६. सनद भै व्याङवाला वोसि घासिका रकम्मादरियाका राजगुठि रैकर सेरा गैह्र जगा रकमी सित नमागिवनाउन्याले इ जगामा घर. कसैले नवनाउनु. कसैले वनायेछ भन्या घर वनाउदा रकमिसित फलाना जगामा घर हाल्छु भनिविहोरा जनाइ. वनायाको रहेछ भन्या घर वन्या पछि रकिमिले कस्को जगा हो भनि उठाउन पाउदैन. जगा कमाउन्याले रकमिसित. घर वनाउछु न भनि उसै वनायोको रहेछ घर वन्न लाग्योको थाहा पाइ रकमिले यो जगा ता रकमको हो तलाइ कमाउन मात्र दियाको हो घर वनाउन हुदैन भनि हट्का गरेनछ भन्या वन्याका घरको पंचकिर्ति वा जमिन् मोल घर वनाउन्यालाइ दि जगा उठाउन पाउछ. रकमिले

घर वनाउन हुदैन भंदा भैदै जवरजस्ति गरि घर वनायोको ठहऱ्या घर वेची मोल लिन र. अचल इट् काठपात गैह्र केहि लि जान पाउदैन. जस्का नाउमा रकम दरियाको हो जगा उसैले लाग्याको तिरो भरो गरि कमाउन पाउछ. घर वनाउन्याले मैले घर वनात्रा भनि जवरजस्ती गरि वस्न पाउदैन.

# सोला थापन्या

१. वाघ भालु वदेल् गैह्रले चौपायया अंन वालिहरू केहि नषाइ. आफ्नू मुनासिवले कसैलाइ. थाहा उर्दि नदि. सोलागैह्र केहि थाप्या र. मानिस् पनि मऱ्यो भन्या. थापन्यालाइ दामल गर्नु. चौपाय गेह्र मऱ्योभन्या पुरो मोल्. धनिलाइ दिलाइ दिनु. मानिस्लाइ घा लागि षजाहा भयो भन्या ५० रूपैया घा मात्र लाग्यो भन्या १० रूपैया चौपाया गैह्र परि. षजाहा भयो भन्या. तेस्को पंचकिर्त्ति मोल्. धनिलाइ भराइदिनु.

२. वाघ भालु वदेल गैह्रले मानिस् चौपाया वालिहरू केहि. षायाको छैन सिकारका निमित्त. आफ्ना सोषले गाठ घर्मा पनि. उर्दि दि सोला गैह्र थापे छ र. तेस्मा मिानिस् परि मऱ्यो भन्या. थापन्यावाट मर्न्याको कृया षर्च ५० रूपैया दिलाइ दिनु. ज्यान मऱ्ये न षजाहा मात्र भयो भन्या. २० घा मात्रै लाग्यो भन्या २० रूपैया घा षर्च दिलाइ दिनु. चौपाया गैह्र परि मऱ्यो भन्या पंचकिर्त्ति मोल गरि. आधि माल् दिलाइ दिनु.

३. वाघ भालु वदेल् गैह्रले मानिस्. चौपाया अंन वालिहरू षायामा. गाउ घरमा उर्दि दि. सोलाहरू वाटा पधेरा. वारि करासामा थापेछ र. आफु विकट वस्याको रहेनछ र. तेस्मा मानिस् परि मऱ्यो भन्या थापन्यावाट १० रूपैया मऱ्याको कृया षर्च दिलाइ दिनु. ज्यान मरेन षजाहा भयो भन्या ५ घा मात्र लाग्यो भन्या २॥ रूपैया घा षर्च दिलाय दिनु.

४. वाघ भालु वदेलहरूले मानिस् चौपाया अंन गैह्र षायामा सोला गैह्र थापदा गाउ घरमा उर्दि केहि नदि थापेछ र. तेस्मा मानिस् परि मऱ्यो भन्या थापन्यावाट मर्न्याको कृया षर्च २५ रूपैया दिलाइ दिनु. चौपाया गैह्र परि मऱ्याको भया मऱ्याका वस्तुको. पंच कित्ति मोलको चौथाइ. मोल धनिलाइ भराइ दिनु. मानिस्को ज्यू भन्या मरेन षजाहा भयो भया. १० रूपैया घा मात्रै लाग्योको भया ५ रूपैया थापन्यावाट घा पुछाउनि घाइत्यालाइ दिनु.

५. वाघले मानिस् चौपायाहरू षादा र. भालु वदेल गैह्र मानिस् चौपाया अंन वालिषायामा. सोला फ्याङ सोला फट्क्या दर्जन् धराप गैह्र थापदा. गाउ घरमा उर्दि दि थाप्याको र तेस्मा मानिस्

चौपाया गैह्र परि मर्‍यो भन्या थापन लाउन्या थापन्या कसैलाइ षत लवात लाग्दैन. दंड पतिया केहि पर्दैन.

६. श्री ५ सर्कार. का हुकुमले. परापुर्व देषि. वंद भयाका. गौडा वाटामा र. गढि कील्लामा.थापियाकासोला फ्याङ सोला ट्क्या दर्जन् धराप गैह्रमा मानिस चौपाया गैह्र केहि परि. मर्‍यो भन्या थापन लाउन्या. कसैलाइ पनि षत वात केहि लाग्दैन. मर्‍याको कृया षर्च पनि दिनु पर्दैन. प्रायश्चित्त पनि पर्दैन.

# कल्याण धन्को

१. कसैले घर वाहेक् अरू रैकविर्ता गुठि वेष किपट् गैह्र जमिन्मा दवाइ राष्या गाडयाको. धनमाल पायो भन्या वुझदा. षतुकिहरूले दवायाको ठहऱ्या सर्कारको हुंछ. असामिले दवायाको ठहऱ्या तमसुक वमोजीम्. साहुको हुंछ धनिले दवायाको. ठहऱ्या धनि र धनिका सन्तान्को हुंछ फलानाको भनि पत्ता नपायाको. वारिस् नपायाको. धनमाल्भया सर्कार लाग्दैन. जश्ले पायो उसैको हुंछ उसैले लिनु.

२. घर सुकृ विकृ गरि वेचन्याले वेच्यो किंन्याले किनि सक्या पछि. घर भत्काउदा दवायाको धनमाल. निस्क्यो. भन्या वेचन्याले पाउदैन. किंन्याको हुंछ उसैले लिनु.

# गल्ली सफा

१. आफ्ना घरका लिग लगामा कोहि परचक्रि आइ हग्यो फोहऱ्यायो भन्या त्यो हग्न्या फोहऱ्याउन्यालाइ २ आना जरिवाना गरि लियापनि. घरका मालिकको षुसी. तेहि गुहु फोहोरमा. लटपटयाइ. स्वहोर्न लाउछ तापनि. घरका मालिक्को षुसि. एस्कुरामा धात् फिराद नसुन्नु.

२. दर्वारका वरिपरि लिग लगामा. सफा सुघर वदाउनालाइ द्वाऱ्याले लाउनु श्री मिनिष्टर. जनरल कर्णेल. वडा कप्तान्. काजि. कपर्दार. षजांचि. सर्दार. कप्तान लेफटेन्सुव्वा.सुवेदार.डिट्ठा षर्दार ज्मादार.दारोगा कोत्यामेजर.अजिटन्.गैह्व रैति माहाजन्का घर्का लिग लगामा घर्का मालीकलाइ सफा सुघर वनाउनलाइ लगाउनु. सफा गरेनन् भन्या. ढोका भऱ्यां फुकालि फोहोर्मा हालि सफ ागर्न लाउनु. तेति गर्दा पनि सफा गरेनन् भन्या. घर्का मालिकलाइ मानिस् हेरि. आठ आनादेषि ५ रूपैयासंम. अदालत्.ठाना.वाट जरिवाना गरि लि तेसै रूपैयाले सफा गराउनु.

३. मानिस् हिडन्या मुल गल्लिमा झ्याल्वाट पानि कसैले नफालनु. फाल्याको पानि वाटामा हिडन्या मानिस्कसैलाइ पऱ्यो र. कोही कराउन आया भन्या पानी फालन्यालाइ १ रूपैया दंड गर्नु.

४. गल्लि वाटामा हिडदा झ्याल् छाना कौसिवाट. गुहु मुत् वेहोस्मा फाल्दा. कसैलाइ पऱ्यो भन्या ५ रूपैया दंड गर्नु. जुठो फाल्दा पऱ्यो भनया २॥ रूपैया दंड गर्नु. वेहक्मा कराउन आयो सावित्. गर्न सकेन भन्या. गुहु मुत्. फाल्.न्या जुठो. फालन्यालाइ लेषियाका दंडको आधी दंड गर्नु.रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

# वाधा कमारा भगाउन्याको

१. कसैका कमारा कमारि कसैले भगाइ. मोगलाना पुऱ्यायो. भनि कोहि अदालत्. ठाना अमाल्मा फिराद गर्न आयो भन्या. रोवकार. गर्दा भगायाको ठहऱ्यो भन्या जस्ले भगायाको छ. तेस्लाइ झिकाउन लगाइ निम्याक् स्मेत् ज्यू. सौपाइ दिनु. धनिले फेला पारि झिकायो भन्या. लाग्याको षर्च र निम्याक स्मेत् भगाउन्यावाट भराइ दिनु. भिकाइ दिन नसक्या. भगाउन्यालाइ अैन वमोजीम ज्यूको वर्षको अैन वमोजीम्को. मोल धनिलाइ भराइ मोल्का विगा वमोजीम. दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजीम्कैद गर्नु.

२. कसैका कमारा. कमारि वाधा वधेत्यानि. आफुले भयो अरू कसैलाइ लाइ अह्राइ भयो चोरि भगाइ लैगि. आफ्ना घर्मा लुकाइ राष्यो. अथवा वाहिर कांहि लैगि लुकाइ राष्यो भन्या. तेसले राष्याका ठाउवाट मरि भागि गयाका भया पनि अैन वमोजीम्को उस्का घरवाट मऱ्या भाग्याका दिसंम्मको. निम्याक् र मोल् विगो भराइ दिनु. मरे भाग्याका रहाछन् भन्या. निम्याक र. ज्यूका जिवै फिर्ता गराइ. मोल् विगा वमोजीम्. दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजीम्कैद गर्नु.

३. एकाको कमारो एकाकी कमारी धनिले थाहा नपाइ आफु आफै मतो गरि भाग्याका रहाछन्भन्या. कमाराका धनिले पनि कमारिका. धनिलाइ. विगो भर्नु. पर्दैन. कमारिका धनिले पनि कमाराका धनिलाइ विगोभर्नु पर्दैन. आफ्ना आफ्ना ज्यू फेला पाऱ्याका लिनु. अडा अदालत् ठाना अमाल्. वाट पक्रयाको रहेछ भन्या पनि अरू कसैले पक्रि ल्याइ दियो भन्या पनि. पक्रि ल्याउन्यालाइ जिय १ को ५।५ रूपैयाका दर्ले पनाउनि दिलाइ. जस्का कमारा कमारी हुं सौपि दिनु.

४. कसैले अर्काका कमारा कमारि. वाधा वधेत्यानि भागि. आयाका आफ्ना घरमा आया भन्या. फलानाका हुन्भनि थाहा पाया. जस्का हुन् उस्लाइ जनाउ दि. सौपि दिनु. टाढा रहेछ भन्या. तेरा वाधा वधेत्यानि. कमारा कमारि. ञाहा हाम्रा घरमा छन्. लिन पठाइ देउ भनि चिठि षवर. पठाइ सौपी दिनु. लिन पठायेन भन्या आफ्ना घरवाट. मऱ्या भाग्या भन्या पनि. निम्याक् मोल् केहि दिनु पर्दैन. षत वात पनि लाग्दैन.

५. कसैका कमारा कमारि वाधा वधेत्यानिले भागि जात ढाटी अरू कसैका घरमा वस्न गयाका रहाछन्. राषन्याले पनि इ एस्ता वाधा कमारा भगुवा हुन्भनि थाहा नभै राष्याकामा धनिले पत्ता पाइ. पक्रन गयो भन्या. त्यो वासदि राषन्याले वाधा कमारा जो हो. उहि ज्यूसौ.पि दिया हुंछ थाहा नभै राष्याकाको निम्याक् तिर्नु पर्दैन. ज्यू मऱ्याको भया र उस्का घरवाट पनि भाग्याका भया. मोल पनि तिर्नु पर्दैन. दंड पनि हुदैन.

६. अर्काका कमारा कमारि मेरो हो भनि. वेचन्यालाइ वेच्याका कमारा कमारिको ज्मा थैलि लिन्यालाइ भराइ दसौद लि. वेच्याका थैलि वमोजीम्. दंड गरि. कमारा कमारि धनिंलाइ विहोराइ दिनु. अर्काको वाधा मेरो हो भनि. अन्तसारि रूपैया लीयाको भया. धनिलाइ वाधा दिलाइ किंन्याको थैलि भराइ दसौद लि अर्काको वाधा मेरो हो भनि सार्न्यालाइ. थैलिका विगा वमोजीम्. दंड गर्नु. रूपैया नतिऱ्या मैन्हाका रूपैया ५ का दर्ले कैद गर्नु.

७. कसैका कमारा कमारिले षसम्ले भन्याको मानेनन्कामकाजमा टेरेनन्. विराहाको काम काज गर्न्या गऱ्या र. षसम्ले नकुटि कैद गर्छु भन्यो भन्या. अदालत्. ठाना अमाल्मा साधनु. अदालत्. ठाना अमालवाट पनि आज्ञा वचन् दिनु. नेल ठिगुरा चमौट हालनु. भाग्याका कमारा कमारि पक्रियाकालाइ अदालत्. ठाना अमाल्मा साधनु. पर्दैन. धनिले नेल् ठिगुरा चमौट् हालनु. धनि लाइ षत वात् लाग्दैन.

८. ज्यू भोग वाधा लिदा दिदा. वाधाले रूपैया तिरि. अर्काका घर. सर्न लाग्यो भन्या तमसुकमा लेषीयाका मितिमा. रूपैया तिरि सर्नु. मिति नआइ. अघि पछि रूपैया. तिरी सर्न. पाउदैन. आफैले थैलि तिरि निषनिंन. लाग्यो भन्या. असार मैन्हा वाहेक जैल्हे रूपैया तिर्छ थैलि वुभि लि तमसुक फारि साहुले छोडि दिनु.

९. कसैका वाधा वधेत्यानि आफ्ना मुनासिवले भागी गयाका धनिले फेला पाऱ्यो र वाधा वधेत्यानिले रूपैया. तिर्न लाग्या भन्या. तेस्को निम्याक् भराउदा. थैलिको दोवर नहुंज्याल्.दिनको १ आना का दररले निम्याक् भराउनु. थैलिको दोवर्भय छ भन्या. निम्याक्को. हिसवा नगर्नु. थैलिको दोवर भराउनु.

१०. कमारा कमारि वाधा वाधेत्यानिको निम्याक् भराउनु पर्दा जना १ के रोजको २ आना मध्ये. षाना. लाइ १ आना दि वाकी १ आनाको हिसवाले भगाइ लैग्यादेषि उसक. घरमा रहासंममा. ठहऱ्याको निम्पाक्को ज्मा स्मेत् ज्यू फिर्ता गरि सौपाइ दिनु. मोल्. भराउनु. पर्दा पनि. एसै रीतेले. ठहऱ्याको निम्पाक्. स्मेत् गरि अैन वमोजिम्को वाधाको थैलि. कमारा. कमारीको. मोल् धनिलाइ भराइ दिनु. भगाइ लैग्यापछि धनिका जिम्मा नलाग्दै मऱ्या को रहेछ भन्या. मऱ्याका दिन्तक्को. निम्याक् र. अैन वमोजीम्को मोल्. भराइ दिनु.

११. कसैको वाधा भागी गयाको पक्रि आयो भन्या. धनिले नेल ठिगुरा  चमौट् हलाउछु भन्या भाग्याका दिनका. निम्पाक्को ज्मागरि तेतिसम्मा. अैन वमोजिम नेल हलाउन पाउछ. नेल ठिगुरा चमौट् हलायापछि निम्याक् लिन पाउदैन. नतिराउनु. नेल ठिगुरा चमौट् हलाउदीन्. भन्यो भन्या. हिसाव गरि भाग्याका दिनको अैन वमोजीम. निम्याक् लिन पाउछ दिन्छ भन्या भराइ दिनु. तिर्न सकेन भन्या तमसुकमा चढाइ दिनु.

# कमारा कमारी वेचताको

१. कसैका अंसनभै एकाघरमा संग वस्याका भाइमा अरू दाज्यू भाइसित. सल्लाह नगरि. एका भाइले कमारा कमारि. चौपाया. गैह्र वेचेछ र. अरू भाइले हाम्रो अंस यसले वेचि जान्या होइन भनि उजुर. गऱ्या भन्या जाहाना पाल्दा वेच्याको भया र. आफ्ना भागमा. आउन्या अंस जति वेच्याको भया सदर हुंछ आफ्ना भाग भन्दा वढता. भाइसित सल्लाह नगरि. वेच्याको रहेछ घरका जाहान. पालनालाइ वेच्याको पनि रहेनछ भन्या र. हामि एकै घर माथिञ्यूं. हामिसीत. सल्लाह नगरि. हाम्रो. भाग नराषि. एसले मात्रै वेचि जान्या होइन भनि. घरमा रहाका भाइले दिन ३५ भित्रमा र. पर्देस. जान्या. भाइले. घर आयाका दिन ३५ भित्रमा उजुर. गऱ्या भन्या वेचन्यावाट किंन्याको थैलि. फिर्ता गराइ माल भाइहरूलाइ दिलाइ दिनु. वेचन्यावाट थैलि उठेन भन्या. कपाली तमसुक गराइ दिनु. भराइ दियाका ज्माको दसौद विसौद लिनु.

२. कसैले कमारा कमारि चौपाया. दोहोरो वेच्यो वंधक् राष्यो भन्या. अैनवमोजीम्. अगाडिवाला साहुको सदर हुंछ. अगाडीवाला. लाइ विहोराइ दिनु. पछाडीवाला साहुको थैलि तिर्न सक्न्या रहेछ भन्या. विगो भराइ. थैली. तिर्न सक्न्या रहेनछ भन्या कपालि तमसुक गराइ दि. पछिल्ला साहुका. थैलीका विगा वमोजिम्. दंड गर्नु. रूपैया नतिऱ्या मैन्हाका ५ रूपैयाका दरले कैद गर्नु.

३. मासिन्या जातका छोराछोरि म मासि दिंछु नेल ठोकि देउ भनि वावु आमाले भन्या मासन हुदैन. अदालत ठाना अमाल्वाट नेल ठोक्न पनि हुदैन. कसैले नेल ठोकाइ दियो भन्या थैलि लिलाम्. गरि. वेचन्या र नेल ठोकाइ दिन्या दुवैलाइ १००।१०० रूपैया दंड गर्नु रूपैया नतिऱ्या. अैन वमोजिम्. कैद गर्नु. किन्न्याको थैलि भुसिंछ.

४. कसैले छोरो वाधा राष्ता साहुलाइ दिदा १६ वर्षदेषि माथिका ज्यूलाइ अदालत ठाना. अमाल्. मा ल्याइ दिन्याले दिनु. लिन्याले लिनु. अदालत् ठाना अमाल्वाट वाधा पस्न्या ज्यू जो छ उसलाइ वाधा पस्न राजि छस्कि भनि. सोधनु र. राजि छु भन्यो भन्या वाधा पस्यावाट. म वाधा पस्छु भन्या षुसिको मुचुल्का लेषाइ. लिनदिन गर्नुं दिनु उस्को सहि हलाइ. लिया

दियाको सदर हुंछ कर सित वावु आमाले पनी वाधा हालन हुदैन. वावु आमाले कर सित वाधा हलाइ दिया भनि. छोराछोरि कराउन आया. वावुका नाउमा कपालि तमसुक गराइ दि. वाधा लेषियाको ज्यू छाडी दिनु. वावु आमा मऱ्या पछि कराउन आयो भन्या उसैका नाउमा कपालि तमसुक गराइ दिनु.

५. कसैले वेहक्मा अजा पुत्र मास्यो भनि कसैका नाउमा कराउन आयो र. उसलाइ ल्याइ रोवकार गर्दा ज्यू मास्याको ठहरेन रीसले. पोल्याको मात्र ठहऱ्यो भन्या तेस्ता पोलाहा लोग्न्या मानिसलाइ १०० रूपैया दंड गर्नु स्वास्नि मानिसले भया ५० रूपैया दंड गर्नु. नतिऱ्या अैन वमोजीम् कैद गर्नु.

६. मासिन्या जात्का छोराछोरि. कसैलाइ मेरा कमारा कमारि भनि ढाटि छलि वेचन्या अजा पुत्र मासन्या ठहर्छ तेस्तालाइ ३६० रूपैया दंड गर्नु. नतिऱ्या मैन्हाका ५ रूपैयाका दरले. कट्टि नहुंज्याल् कैद गर्नु. नमासिन्या मतवाली जातकालाइ कमारा कमारि भनि वेच्याको भया ५४० रूपैया दंड गर्नु. तागाधारि जातका लाइ कमारा कमारि भनी वेच्याके भया ७२० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम्. कैद गर्नु.

७. कसैले आफ्ना अंसमा आयाका र. आफ्ना पौरषले कमायाका. कमारा कमारि वेचता. आफ्ना हकवाल अंसियार भाइलाइ मैले फलानु. कुरो वेचनलाग्या.तिम्हे रू लिंछौ भन्या देसिले दियाको थैलिदि तिमिलेउ तिमीहरू लीदौन भन्या अरूलाइ दिंछु भंनु र हकवाला अंसियार भाइले. लिंन्छ भन्या. इनले पाउछन्. देसिले पाउदैनन् अंसीयार. भाइ भन्या टाढा रहा छन् आफुलाइ गर्ज पर्दा वेचेछ भन्या. वेचन्याले अंसियार भाइलाइ लेषिपठाउनु. किन्याले पनि वेचन्याका हकवाला अंसियार. भाइलाइ लेषि पठाउनु र ३५ दिनभित्रमा निषन्न आयो भन्या. अलिपत्र भयाको भया पनि उस्को.परल्. रूपैया सौपि अंसियार भाइले निषनि लिन पाउछ. ३५ दिन संम मा थैलि तिर्न आयान भन्या. भाइ साछि वस्याका नभया पनि. गौरा त्री षायाको नभया पनि वेच्या किन्याको सदर हुंछ ३५ दिन नाघ्या पछि आउन्या भाइ ले निषन्न पाउदैन.

८. आफु हाकिमि भै कसैका कमारा कमारि. किन्दा वेचाउदा अैन वमोजिम्का मोलमा घटाइ किन्यो वेचयो भनि कमारा कमारीका धनि कराउन आया भन्या. घटायाको मोल्. हाकिमिवाट

धनिलाइ भराइ घटायाका विगा वमोजिम. हाकिमिलाइ दंड गर्नु. हाकिमिका मोलाहिजामा लागी अैन वमोजिम्का मोलमा घटाइ मोल पटक गर्‍या साछिहरूलाइ जति जनाछन् जनहि आधि आधिका दरले दंड गर्नु. दंड का रूपैया नतिऱ्या अैन. वमोजिम कैद गर्नु.

९. कसैका कमारा कमारी. वेचदाकिन्दा हाकिमि देषि वाहेक अरू रैतिले राजी षुसिसंग अैन वमोजिमका मोलमा घटी वढी मोल्. पटक गरी. साछि सुर्त्ता. राषिपरंभट्ट लेषिदियाको रहेछ भन्या. किंन्याको पाको. कराउन आउन्याको फिराद नसुन्नु. साछि सुर्त्ता राषि परंभट्ट लेषिदियाको रहेनछ भन्या. जवर जस्ति ठहर्छ जवर जस्तिका अैन. वमोजिम दंड गर्नु.

# ज्यू मासन्या बेचन्या

१. १४ साल देषि अघि मासन्या जातका वावु छोरा भयो अथवा.वावु छोरि भयो दाज्यू भाइ भयो दिदि वैन्हि दाज्यू वैन्ही दिदि भाइ भयो. कसैका घरमा वाधा वधेत्यानि भै वस्याका छन्. २ जनाका. सल्लाहले राजी षुसिसित. एक ज्यू मासि कमारा कमारि हुंछौ. एक ज्यू आफु सुषि हुन्छौं भनि अदालत. ठाना अमालमा गै. एक जनाले तेल ठोकी. गल्याका रहा छन् भन्या. अदालत. ठाना अमाल्मा गै तेल ठोकीयाको हुनाले. साहुलाइ र. गालि दिन्या वावुलाइ वात लाग्दैन. राजिसित तेल ठोकी गल्याको ज्यूमा. पऱ्याको थैलिमा तेहि ज्यू वाधा वधेत्यानि लेषाइ तमसुक गराइ दिनु. ज्यू नगालनु. भंन्या अैन भया. पछि. गालिदिन्या अदालत. ठाना अमालका हाकिमलाइ १०० रूपैया दंड गर्नु. अदालत. ठाना अमाल् नसाधि. तेलठोकाइ लियाको रहेछ भन्या साहुको त्यो थैलि हाकिमले लिनु. रूपैया षाइ गालि दिन्या. वावु आमालाइ १०० रूपैया दंड गर्नु. त्यो ज्यू. आफु सुषि हुंछ १६ वर्ष देषि उधोका वालष लाइ राजिनामा लेषाइ. अदालत. ठाना अमाल. वाट तेल. हलाइ गलाइ दियाको रहेछ भन्या पनि सदर हुदैन. साहुको थैलि भुसिंछ गालि दिन्या वारिस. लाइ र. गलाइ दिन्या हाकिम्लाइ १००।१०० रूपैया दंड गरि कागज फराइ आफु सुषी गराइ दिनु.

२. तागाधारि मतवाली जात गैह्र कसैले अर्काकि कमारि स्वास्नि तुल्याइ उसवाट छोरा छोरि पनि जन्म्याका छन्. कमारिका. षसमले इन्लाइ थैलि तिरिनिषनि लैजान दिदौन. वेचदौन. भन्या उस्का. वावु दाज्यू. भाइको कर लाग्दैन. धनिले अन्यत्र वेच्यो वेचन लाग्यो भन्या. उसवेलामा देसिले दियाको थैलि गनी वावु दाज्यू भाइले निषनि लैगि. अमलेष गराउछौ भया पाउछन्. देषिले पाउदैनन्. अैल्है थैलि पुऱ्याउन. सकीन. तमसुक भाषा गरि देउ भन्या. थैलि तिरिकन मात्रै आफु सुषि गराउन पाउछं. भाषा तमसुक हुदैन. धनिले वेचता उस्का वावु दाज्यू भाइ. टाढा रहाछन्. पछि थाहा पाइ. निषंन आया. देसिले दिया वमोजिम्को थैलि गनि छोरो भया जन्म घरावाट अन्त सऱ्या पछि जैल्हे सुकै पनि निषंन पाउछन्. छोरि रहिछ भन्या ११ वर्षको उमेर नहुंजि मात्रै निषंन पाउछ ११ वर्ष नाघ्या पछि निषंन पाउदैन. किंन्याले आफनु परल थैलि लि. वावु दाज्यू भाइलाइ निषंन दिनु. आमा वावु दाज्यू भाइहरूले हाम्रो भाइ छोरा हो भनि निषनि लैगि. अमलेष्. गराया पछि घरसारि अन्त वेचन पाउदैनन्. आफु सुषि हुन्छन्.

वेच्यो भन्या अजापुत्र मासन्या ठहर्छ तेस्तालाइ किंन्याको थैलि फिर्ता गराइ ३६० रूपैया दंड गर्नु.

३. कसैले दर्माहा दि चाकर राष्याको छ दिन मैन्हा वर्षको कवुल्. छैन भन्या. आफुले चाकरि गऱ्या सममको दर्मा हालि. छोडि जान पाउछ. वर्ष मैन्हा. दिनको. कवुल्. गरि चाकर राष्याको भया कवुल् वमोजिम्. चाकरि. गर्नु पर्छ छाडि जान पाउदैन. अरू ठाउमा वढता दर्माहा पाइन्छ भन्या पनि. जान पाउदैन. कवुल् पुग्या पछि छोडि जान पाउछ वोल् कवुल्. नपुग्दै भागि नाँसि गयो भन्या. जतिदिन काँम छोड्याको छ उत्तिको दर्माहा नदि तेसै चाकरि गराउनु. चाकरि गराउन्याले कवोल् वमोजिम्. मिति मितिको दर्माहा मजुरि. माग्दा. दियन र नालिस्. गर्न आयो भन्या. जति मैन्हाको दर्माहा वालि रहाको छ. उत्तिको कवुल्. भन्दा वढता मैन्हाको १ रूपैया स्मेत. थप गरि दिलाइ दिनु. पछि राजीले वस्छ भन्या पनि छाड्छ भन्या पनी वस्न्याको षुस.

४. कमारा कमारिका झगरामा. अदालत् ठाना अमाल्. वाट मोल् भराउनु पर्दा. ३ वर्ष देषि उधोका कमाराको २० कमारिको २५ तिं वर्ष देषि माथि ६ वर्ष संमका कमाराको ३० कमारिको ३५ छ वर्ष देषि माथि १२ वर्ष संमका कमाराको ५०कमारिको ५५ वाह्र वर्ष देषि माथि ४० वर्ष संमका कमाराको १०० कमारीको १२० चालिस्. वर्ष देषि माथि ५० वर्ष संमका कमारा कमारीको ६०।६० पचास् वर्ष देषि माथि ६० वर्ष संमकाको ५० रूपैयाका हिसावले भर्नु भराउनु गर्नु कसैले मेरा कमारा कमारी. हुं भनि. समायो. रोवकार गर्दा. सावित्. गर्न सकेन भन्या. एसै उमेरका दर वमोजिमले दंड गर्नु. दंडको चौथाइ जिताउरि लिनु.

५. कमारा कमारी नगद जिनिस् जवाहेर चौपाया अनाज गैह्रका झगरामा. कागज पत्र केहि निस्केन. देषन्या जांन्या साछि रहा छन्. अरू विहोराले छिनेन दुवै झगरियाले. साछिका सिरमा. दिया भन्या. सिर वंदि लेषाइ साछिलाइ हरि वंस भकाइ वक्या वमोजिम्. छिनि दिनु हार्न्यालाइ विगा वमोजिम दंड गर्नु. जितन्यावाट दंडको चौथाइ जिताउरि लिनु. दंडका रूपैया नतिऱ्या मैन्हाका ५ रूपैया का दर्ले कैद गर्नु जिताउरिका रूपैयालाइ जौन माल् जित्याको छ उसैवाट लिनु.

६. साहुले वाधा लिदा दिंदा. अदालत्. अमाल साछि गरि ज्यू वाधामात्र लेषि लिनु दिनु गर्नु. घर वाधा नलेषनु आफुले दृष्टि भोग वाधा लेष्याको ज्यू. साहुकाघर मर्‍यो. भन्या पनि असामीका घर. मर्‍यो भन्या पनि. उस्का अरू भाइ जहान पक्रि लिन पाउदैन. आफुले वाधा लेषि लियाको ज्यू. मर्‍या पछि उस्का अरू भाइ जहान्. पक्रचो भनि कराउन. आया. पक्रन्यालाइ पक्रचाका विगा वमोजिम. दंड गर्नु. रूपैया नतिर्‍या अैन वमोजिम्कैद गर्नु.

७. वाधा बस्न्या जातका कसैले वावु आमाले षायाका रिनमा छोरा पनि रहा छन्. छोरी पनि रहाछन्भन्या. छोरिले अंस नपाउन्या हुनाले अदालत अमाल्. साछि गरि कन पनी छोरि वाधा कसैले नलिनु. अदालत्. ठाना अमाल्. साछि राषि लियाको रहेछ भन्या साछि वस्न्या अदालत. अमाल्. वालालाइ १० रूपैया वाधा लिन्या दिन्या. साहु असामीलाइ ५।५ रूपैया दंड गरि. वाधाको तमसुक. फराइ वाधा दिन्या जो हो उसैका नाउमा कपालि तमसुक् गराइ दिनु. छोरि वैन्हि आफु सुषि हुंछन्.

८. कमाराले ज्यान जान्या तक्सीर. गर्‍यामा. ज्यान लिनु. दामल् हुन्या तक्सिर गर्‍यामा दामल् गर्नु दंड हुन्या कुरा गर्‍यामा कैद गर्नु. कैदका रूपैया तिर्‍या. अैन वमोजिम्. गर्नु. सर्वस्व हुन्या कुरा गर्‍यामा कमाराको सर्वस्व हुदैन. सर्वस्व नगर्नु.

९. वावु आमा पार भयाका छन्. छोरा एकै अम्वल्मा छन् वा. अर्कै अम्वल्मा छन्. आफु पार भया पछि कोहि छोरालाइ आफुले निषन्यो. कोहि छोरा करिया छन् र. वावु आमा मर्‍या भन्या. तीन्को धन पेवामा. काजकृया गरि रहाकामा. निषनिन्या चाहिका थैलिसंमको धन् कमारैमा रहाका छोराको भाग दि वढता भयाका धनमा. निषनियाकालाइ र. कमार्तनैमा रहाका छोराहरूलाइ वरावर वाडि दिनु.निषनिन्या चाहिका थैलि जति. पुगेन. भन्या त्यो धन आफु सुषि भयाको छोराले पाउदैन. कमार्तनैमा रहाका छोरा. हरूले पाउछन्. घर्ति भया पछि जन्म्याका छोरा रहाछन्भन्या. वावु आमाको. काज कृया गरि. रहाको कमारा हउन्. घर्ति हउन्. सवै छोराले वरोवर गरि षान पाउछन्.

१०. ढेरै जाहान हुन्या कसैले यौटाका नाउमा वाधाको तमसुक् गर्‍याको रहेछ. घरका सल्लाहले वाधाले वाधा लेषियाको चाहि. घरमा वसि अर्कै. ज्यू सट्टा गै. धनिको काम गर्‍या.को रहेछ

वा. आलो पालो गरि काम गर्दा. रहा छन्. तेस्तैमा धनिको काम गर्न्या. मरेछ भन्या. लेषियाको ज्यूलाइ साहुले काम लाउन. पाउछ. लेषियाको ज्यू मऱ्यो भन्या. आफ्नु वाधा लेषियाको ज्यू मऱ्या पछि. सट्टा काम गर्न. वस्याकालाइ र अरू जाहान्लाइ समाउन पाउदैन. समायो भन्या सयकरा १० रूपैयाका दरले दंड गर्नु.

११. कसैले अजापुत्रलाइ कमारा कमारि. हुन्भनि वेचता अजापु त्र हो भनि जानि जानि कमारा कमारि हो भनि कागज लेषि दिन्या र. अषत्यार भै वेचाउन्या साछि वस्न्याहरूलाइ १००।१०० रूपैया दंड गर्नु अजापुत्र भनि थाहा नपाउन्या. वेचता किन्दा कागज लेषि दिन्या साछि वस्न्याहरूलाइ जनहि २०।२० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम्कैद गर्नु. थाहा पाइ किंन्याको थैलि भुस् गराइ.उसै विगा वमोजिम्.दंड गर्नु. थाहा नपाइ किंन्याको थैलि तिर्न सक्न्या रहेछ भन्या. तिराइ दिनु. तिर्न सक्न्या रहेनछ भन्या उसैको नाउमा कपालि तमसुक् गराइ छाडि दिनु.

१२. १६ वर्ष मनिकालाइ वाधा लिन्या दिन्यालाइ १०।१० रूपैया दंड गर्नु. १६ वर्ष नाघ्याका. लाइ कर लगाइ अदालत् ठाना. अमाल् साछि नराषि वाधा लिन्या दिन्यालाइ पनि ५।५ रूपैया दंड गर्नु. १६ वर्ष मनिकालाइ वाधा हाल्दा साछि वस्न्या. अमालीलाइ ५ रूपैया दंड गर्नु.

१३. छोरा रहानछन्. छोरिमात्र रहाछन् र १६ वर्ष नाघ्याका छोरिले वावु आमाले षायाका रीनमा. षुसिराजीले हामी वाधा पस्तछौ भनि. अदालत ठाना अमाल्मा. राजिनामा लेषि. दिया भन्या. राजीनामा लेषाइ लि. वाधा लियाको सदर हुंछ १६ वर्ष नपुग्याकालाइ. राजीनामा लेषाइ. वाधा लियाको भया पनि सदर हुदैन. लेषाइ दिन्या अदालत ठाना अमाल वालालाइ ५ लिन्या दिन्या साहु असामीलाइ ५।५ रूपैया दंड गरि तमसुक् फराइ. आमा वावुकै नाउमा कपालि तमसुक् गराइ दिनु.

१४. कसैका कमारा कमारिले हामी अजापुत्र हुँ भनि अदालत ठाना अमालमा फिराद गर्न आया भन्या तिन्का माइतिमावलि कोहि आइ हाँम्रा एस्ता हुन्. अजापुत्र हुन्. इन्ले हाऱ्या दंड र. जित्या जिताउरि जो पऱ्याको. हामि वुझाउला भनि. तिन् लाइ ली कोहि. वारिस अघि सऱ्यो भन्या तिन्को दोहोरो कुरा सुनिनीसाफ गर्दा अजापुत्र ठहऱ्यो भन्या कमारा कमारि हुन्

भंन्यालाइ विगा वरावर. दंड गरि. तिन्वाट दंडको चौथाइ जिताउरि लि. छोडि दिनु. अजापुत्र ठहरेनन्. कमारा करीन्यै ठहऱ्यो भन्या. अजापुत्र हुंन्भन्यालाइ विगा वरावर. दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु अजापुत्र भंन्या अर्को वारिस्. वाला. उस्कामा वलि ससुरालि पुर्षा. दाज्यू भाइ. गैह्न नाता कोहि निस्केन उसैका घरमा कमारा कमारि आफैले. अजापुत्र हुँ भनि झगरा गर्न आयाका रहा छन् भन्या. अघि देखि आफुले भोग गरद्याका कमारा कमारी रह्याछन् भन्या अजापुत्र हुँ भनि. आफ्ना. षसम्का नाउमा फिराद गऱ्याको नसुन्नु. पनाउनीजियको. ५।५ रूपैया. वक्साउनी. लि षसम्का जिम्मा लाइ दिनु. भोग नगऱ्याकालाइ मेरा कमारा कमारिहुंन्भनी धनिले समातेछ र. हामी अजा पुत्रहुं भनि फिरा दगर्न आयाका रहद्याछन्. भन्या पत्रपात्र गाउघरका. साछि सुर्ता. राषि निसाफ हेरि. दिनु कमारा. कमारि. ठहऱ्या दंडको चौथाइ जिताउरि लि धनिका जिम्मा सौप दिनु. अजा पुत्र ठहऱ्या विगा वमोजिम दंड गर्नु .

१५. कसैका ढेरै भाइ रहद्याछन्. तिन्मा १६ वर्ष नाघ्याका एकालाइ वावु आमाले अदालत अमाल साछि गरि आफ्ना षुसिले वाधा वस्याको रहेछ तेस्लाइ वावु आमा दाज्यू भाइले साहुतिरि निषनि लैगया भन्या. एका घर संग छदाका. अरू साहु पनि भाग अनुसार. तेस्ले तिर्नुपर्छ आफ्नु पेवा कमाइले हवस् वा साहुरिझाइ हवस्. आफ्नु निषनिन्याले अरू साहु तिर्नु पर्दैन. आफ्नु अंस भन्या लिनपाउछ. अरू साहु जतिछन्. घर वस्न्या भाइले तिर्नु पर्छ निषनि गयाकालाइ अरू साहुले समाउन पाउदैन.

१६. कसैले कमारा कमारिलाइ पारगर्दा. हाडपार भयो. काम पार भयाको छैन भन्न्या विहोरा. गरि साछि सुर्त्ता राषि कागज पत्र भयाको रहेछ भन्या. कागज वमोजिम. कमारा कमारि ले. पनि काम छोडि अंत जान पाउदैनन्. षसमले. पनि विक्रि गरि रूपैया षान पाउदैनन्. एस्ता कुरामा. कसैले अदालत् ठाना अमालमा कराउन आया भन्या. वेचि षानत पाउदैनस. काम छोडन त पाउदैनस भनि ठोकि दिनु.

१७. व्राम्हण लगायत् तागाधारि जात गैऱ्हका कोहिमानिस. मासिन्या जात पानि नचलन्या जात छिटोहालनु. पर्न्या जातसित करणि भात पानीमा. भजि उहि जात भयाकाले षत वात गऱ्यामा ज्यू. पनि मासन हुदैन. वाधा लिनपीन हुदैन. ज्यूमासेछ भन्या अजापुत्र मासन्याका अैन वमोजीम् दंड सजाय गर्नु. वाधा लियेछ भन्या. थैलि भुस् गराइ उसै थैलिका विगा वमोजिम्.

दंड गर्नु. घटि जातमा मिलि घटि जातैका स्वास्नि राषि उन्वाट जन्म्याका संतान्ले षतवात गऱ्यामा. जौन जातका. आमावाट जन्म्याका छन्. उसै. जातलाइ लेष्याका अैन वमोजिम्. दंड सजाय गर्नु.

१८. अर्काका १२ वर्ष मनिका वालष छोरा छोरिहरूलाइ ललाइ फकाइ उन्का वारिस्वाला. वावु आमा दाज्यू. भाइ दिदि वैन्हि मावलि गैह्न लाइ थाहा नदि चाकरि गर्न भनी अर्कालाइ सौपि दियाको रहेछ उस्का वारिस्. वालाले सोध षोज गर्दा. आफुले. सौप्याको कुरो नकहि दवायाको. ठहऱ्यो भन्या तेस्तो लोग्न्या मानिस् भया ५० स्वास्नि मानिस् भया २५ रूपैया दंड गरि. वालष झिकाइ वारिस्वालका जिम्मा गरि दिनु.

१९. तागाधारि जात नमासिन्या जात कोहि अर्काकि कमारिसित वसि जन्म्याका छोराले अरू कसैको करणि गरेछ वा. अरू षतवात गरेछ  भन्या. उस्का वावु काका दाज्यू भाइ कसैले हाम्रो संतान हो भनि निषनि तागाधारिको छोरो भया जनै दियाको. नमासिन्या मतवाली जातको छोरो भया आफु सुषि गरायाको रहेछ भन्या. कमारो घर्ति ठहर्दैन. तेस्तालाइ जौन जात भयाको छ उसै जातलाइ लेष्याका अैन वमोजिम्. गर्नु. निषनि लैगयाको रहेनछ कमार्तनैमा रहेछ भन्या ठुला जातको विर्य होतापनि कमारै ठहर्छ कमारैका अैन वमोजीम्. गर्नु. अघि कमार्तन् छदैमा षतवात गरि कमाराका अैन वमोजीम्. गरि सक्याको रहेछ. पछि वावुकाका दाज्यू. भाइले निषनि लैगि तागाधारि को भया जनै दियेछ अरू जात भया आफु सुषि अम्लेष गरायाको रहेछ भन्या पनि अघि कमारो छदा. कमाराका अैन वमोजिम् को सजाय गर्न्या अडा अदालत् अमालवालालाइ वात लाग्दैन्.

# वालष र. आमा छुट्याइ बेचन्या

१. कसैका घरमा ११ वर्ष मनिका छोरा छोरि भयाकि. कमारि छ भाइ अंस गर्दा कसै भाइपट्टि आमा परि कसै भाइपट्टि ११ वर्ष मनिका छोरा छोरि. पर्न गया भन्या छोरा छोरि ११ वर्ष मनिका भया पनि आफ्ना आफ्ना अंसमा पऱ्याका ज्यू. छुटचाइ लैजानु हुंछ षत् लाग्दैन. छोरि वैन्हिहरूलाइ दाइजो दातव्य दियाका ज्यू ११ वर्ष नाघ्या पछि लैजानु षत लाग्दैन.

२. कसैका ११ वर्ष मनिका छोरा छोरी भयाकि कमारि. घरमा छ धनिले थामन नसकी ११ वर्ष मनिका छोरा छोरिलाइ हवस् वा. आमालाइ हवस्. छुटचाइ.साहुलाइ सौप्यो भन्या साहुले छोरा छोरिको ११ वर्षको उमेर नभै. आमा छोरा छोरि. छुटचाइ लैजान हुदैन छुटचाइ लैजान्या साहुलाइ र. षुसिले सौपन्या असामीलाइ १०।१० रूपैया दंड गर्नु तिन्को ११ वर्षको उमेर नाघ्या पछि आफुलाइ लेषि दियाका ज्यू लैजान हुंछ षतवात लाग्दैन.

३. कमारा कमारि दान वक्स पाउन्याले. कमारिका ११ वर्ष मनिका छोरा छोरि रहाछन्भन्या छोरा छो.रि पायाका भया पनि. आमा चाहि पायाकि भया पनि. छोरा छोरिका ११ वर्षको उमेर नहुंज्याल्. आमा छोरा छोरि छुटचाइ लैजान हुदैन. एस्ता छोरा छोरि छुटचाइ आमालाइ लै गयो वा आमाछुटचाइ छोरा छोरि लैगयो भन्या. दिन्या दातालाइ र पाइ लैजान्या दुवैलाइ ५।५ रूपैया दंड गरि. आमा छोरा छोरि. यकै ठाउमा रषाइ दिनु. छोरा छोरिको ११ वर्षको उमेर नाघ्या पछि आफुले पायाका ज्यू. छुटचाइ लैजान्यालाइ षत लाग्दैन.

४. कसैले कमारि वेचता कमारिका ११ वर्ष मनिका छोरा छोरि स्मेत रहाछन्भन्या एकै ठाउमा वेचनु हुंछ ११ वर्ष मनिका छोरा छोरि छुटचाइ आमा एकातिर वेच्यो वा. आमालाइ छुटचाइ एस्ता छोरा छोरि. मात्र यकातिर वेच्यो भन्या वेचन्यालाइ २० जानि जानि किंन्यालाइ १० रूपैयामा दंड गरि वेचन्याले वेच्याका ज्यूको थैलि फीर्ता ल्याउछ तापनि. किंन्याले अरू ज्यूको मोल्. स्मेत्. तिरि लिंछ तापनी ११ वर्ष मनिका छोरा छोरि र आमालाइ यकै घरमा रषाइदिनु.

# स्वास्नी बेचन्याको

१. तागाधारि जात कसैले आफ्ना अैनले जार हांन हुन्यासंमका स्वास्नि वेचि अर्कालाइ सौपेछ र तेस स्वास्निको जात भात गयाको रहेनछ भन्या प्रायश्चित्त गर्नु पर्दैन. स्वास्नि जातैमा रहंछे वेचन्याको अंस सर्वस्व गरि छाडि दिनु. वेच्यापछि स्वास्निको जात भात स्मेत् गयाको भया वेचन्या तागाधारि को जनै झिकि उस्को अंस सर्वस्व गरि जात वाहेक गरिछाडिदिनु. यस्ता स्वास्नि वेचन्याका हातको. भात चल्दैन. पानि मात्रै चल्छ. स्वास्नि तेसैसीत वस्छे भन्या पनि वस्तीन भन्या पनि अैन वमोजिम्. को आफ्नु अंस लि जान पाउछे अंत पोइल गै भन्या जार काटन पाउदैन. काटचा ज्यानको वदाला ज्यान हुंछ.

२. तागाधारि जात नमासिन्या मतुवालि जात पानी चलन्या मासिन्या जात गैह्र कसैले भातवाट विग्रि वेस्या भयाका र. मासिन्या नमासिन्या. जातका राष्याका स्वास्निलाइ कमारि भनि वेचन्या अजापुत्र मासन्या ठहर्छ तेस्ता तागाधारि जातका छोरी वेस्या भयाका र. नमासिन्या मतुवालि जातका छोरि.ल्यायाका स्वास्नि वेचन्यालाइ ५४० रूपैया मासिन्या जातका ल्यायाका स्वास्नि वेचन्यालाइ ३६० रूपैया दंड गर्नु. किंन्याले जानि जानि किन्याको ठहऱ्या त्यो मोलको थैलि अदालत अमालावाट लि जानि किंन्यालाइ. अजापुत्र बेचन्याका दंडको आधि दंड गर्नु. थाहा नपाइ किंन्यालाइ थैलि कपालि गराइ दिनु. जात वुझि किंन्या वेकुफ ठहर्छ यस्तालाइ २० रूपैया दंड गर्नु. स्वास्नि आफु षुसि हुंछे यस्ता स्वास्नि अर्कासीत पोइल गया जार हांन पाउदैनन्. काटचा ज्यानको. वदला ज्यान हुंछ मुसलमान् वाहेक अरू पानि नचलन्या जात र. छोइ छिटो हालनु पर्न्या जातले. स्वास्नि वेच्यो भन्या किंन्याले फलाना कि स्वास्नि हो भनि जानि जानि किनेछ भन्या थैलि लिलाम् गरि. किंन्या बेचन्या. दुवैलाइ मासिदिनु. थाहा नपाइ किनेछ भन्या. बेचन्याको ज्यू. मासिया पछि थैलि भुस हुंछ. स्वास्नि आफु सुषि हुंछे जात नवुझि किंन्या वेकुफ ठहर्छ यस्तालाइ ५ रूपैया दंड गर्नु मुसल्मान जातले स्वास्नि वेच्या अजापुत्र मासन्या ठहर्छ. तेस्तालाइ ३६० रूपैया दंड गर्नु.

३. तागाधारि जातका अैनले जार हांन हुन्यासंमका स्वास्नि जानि जानि किंन्यालाइ किन्याकि स्वास्निको करणि गराइ हवस्. भात षुवाइ हवस्. जात स्मेत्. लियेछ भन्या किंन्याको अंस सर्वस्व गरी. छाडी दिनु. स्वास्नि आफु सुषि हुंछे जानि जानि किनेछ जात भातमा विग्याकी

रहिनछ भन्या किंन्याको थैलि भुस गराइ १०० रूपैया दंड गर्नु. थाहा नपाइ कमारि हो भनी भोरमा. किनेछ स्वास्निले पनि म एस्ता जातकि हुं भनि जाहेर.गरीनछ र.स्वास्नि जात भात करणिमा विग्रिछ भन्या थैलि कपाली गराइदिनु. जात नवुझि किंन्या वेकुफ ठहर्छ एस्तालाइ २० रूपैया दंड गर्नु. स्वास्नि आफु सुषि हुछे.

४. कसैले आफ्ना स्वास्नि वेचतामा यो फलानाकी. स्वास्नि हो भनि जानि जानि साछि वस्न्या कागजलेषन्या गौराइ षान्यामा. तागाधारि जातका जार हांन हुन्यासंमका.स्वास्नि भया ३६० तागाधारि जातका वेस्या भयाका.स्वास्नि र. मासिन्या जातका स्वास्नि भया २७० पानि चलन्या मासिन्या जातका स्वास्नि भया १८० मुसल्मानका भया पनि १८० रूपैया.पानी नचलन्या र. छोइ छिटो हालनु पर्न्या जात भया २० रूपैया दंड गर्नु. फलानाकि स्वास्नि भनि. थाहा नपाइ. साछि वस्न्या कागज लेषन्या गौरात्री षान्यालाइ. नवुझि वस्याका हुनाले. तागाधारि. जातकी भया २० तागाधारि जातका वेस्या भयाका र. नमासिन्या. जातकी. भया १५ रूपैया. पानि चलन्या मासिन्या जातकी. भया १० पानी नचलन्या जात र. छोइ छिटो हालनु पर्न्या. जातकी भया ५ रूपैया दंड गर्नु.

५. नमासिन्या मतुवाली जातले आफ्ना स्वास्नि वेचि अर्कालाइ सौपेछ भन्या अजापुत्र मासन्या ठहर्छ तेसलाइ ५४० रूपैया दंड गर्नु. मासिन्या जातले भया ३६० रूपैया दंड गर्नु. किंन्याले जानी जानि किनेछ भन्या थैलि भुस गराइ उसै वमोजीम दंड गर्नु.थाहा नपाइ किंन्यालाइ थैलि कपाली गराइ. दिनु.दंड हुदैन.

# विरामी चाकर. निकाल्न्या

१. कसैका कमारा कमारि वाधा वधेत्यानिमा. रोग लाग्याकालाइ धनिले आफ्ना घरवाट निकालि कसेका. जिम्मा नगरि. घाट पाटि दोवाटोमा लैगी. फाल्याका वाचिआया भन्या. धनिले समाउन पाउदैन. आफु सुषी हुंछन् अदालत ठाना अमाल्. वाट छुट्टि भयो. कर लाग्दैन. भंन्या सनद गराइ अमलेष गराइदिनु. घरवाट निकालि षानपीन दि. सहिसम्भार. गऱ्याको रहेछ भन्या. ति कमारा कमारी वाधा वधेत्यानि छुट्टि हुदैनन्. धनिले लैगी कज्याउन पाउछ.

२. आफ्ना घरमा वास दि राष्याका लाइ वेराम भयाका वषत्मा.घरमा वस्नु हुदैन भनि कसैले ननिकालनु. वेरामि भयाकालाइ घरवाट निकालन्या घरका धनिलाइ १० रूपैया दंड गर्नु.

३. कसैका घरमा भतुवा राष्याको छ तेस्लाइ हैजा अठ्या विफर षवटचा रोग भयो. भनि रोग ल्याग्यामा. घरवाट निकालिदिन्या सम्हार संभार. नगरि अलपत्र फालन्यालाइ २० रूपैया दंड गर्नु.

४. कसैले कमारा कमारी. वाधा वधेत्यानिलाइ. भारी वोकाइ पर्देसलग्याको वाटमा. वेरामी भयो भन्या. तेश्लाइ षान्या पिन्या कुरो दि कसैका जिम्मा गरि. छोडि आयाको रहेछ. पछि वाचि आयो. भन्या. षसम्ले चलन् गर्नपाउछ. वेरामी हुदा. कसैका जिम्मा नगरि. षर्च नदि अलपत्रमा पारि. उसै छोडि आयाको पछि वाचि आयो भन्या. आफु सुषि हुंछ धनिको कर लाग्दैन. अदालत. ठाना अमाल्.वाट छुट्टि भयो कर लाग्दैन भंन्या. सनद गराइ अमलेष गराइ दिनु.

# मासिन्या ज्यू अमालिले लिनाको

१. मासिन्या जातका लोग्न्या स्वास्नि मानिस्कसैले मासिन्या षतवात गऱ्याको कुरो जाहेर भै भागी. अरू अम्वल्मा गै वस्याका रहाछन्. भन्या कायल्नामा भयाको भया जौना अम्वल्वाट विराव गरि भाग्याका छन्. उसै जगाका कायल्नामा लेषाउन्या अमालिले पाउछ. षत जाहेर भया पछि कायल्नामा हुन नपाइ भाग्याका रहाछन्. र पछि पत्ता लाग्यो भन्या उसै जगाका पछि पत्ता लगाइ पक्रन्या अमालिले पाउछ. भागि गै वस्याका. जगाका अमालिले कायल्नामा गरायाको भयापनि लिन पाउदैनन्. मासिन्या षतवात गऱ्याको कुरो प्रकास नहुदै उस् ठाउवाट अरू अम्वल्मा गै. वस्याका रहाछन् र. पछि कुरो जाहेर भयो भन्या जाहा गै वस्याका छन्. उसै ठाउका अमालिले लिन पाउछ षतवात जाहेर नभै. गयाका.मा.मेरा अम्वल्का कुरिया हुन्. म पाउन्या हुं भनि अघि ति वस्याका ठाउका अमाली द्वाऱ्याले लिन पाउदैनन् नलिनु.

२. गुठि विर्ता वितलव वेषमाना चावल् फिगढार मरौट् छाप जगाका मासीन्या षत्मा पऱ्याका चाक चकुइ उस ठाउवाट भागी गै. गुठि विर्ता वितलव गैह्र जगामा वस्याका रहाछन् भन्या जौना जगाका हुन. उसै जगाका धनिले पाउछन्. रैकर षुवा जगामा गै वस्याका रहाछन् भन्या विर्ता वितलव वालाहरूले अघि कायेल्नामा गऱ्याको भया उसैले पाउछन्. कायेलनामा गऱ्याको रहेनछ भन्या अदालत्को हुंछ.

३. स्वास्नि जातले पेट वोक्याको छ तेसै स्वास्निले चोरि गरि अर्का जातमा करणि गराइ मासि भन्या. गर्भ रहाको वालष पनि मासिंछ.गर्भवाट अघि जन्म्याको रहेछ भन्या आमाका षत्मा छोरा छोरि मासिदैनन्.

४. कमाराले भोटचा चेपाङ माझि दनुवार हायु दरै कुमाल्.पहरि गैह्र मासिन्या जातका छोरी वुहारिको करणि गऱ्यो भन्या गुठि विर्ता सर्वाक माफि जगा वेष छाप गैह्रका कागजका मालिक् र इजारा ठेकदार द्वाऱ्याका कमाराले करणि गरी. चाक चकुइ पऱ्याका दुवै ज्यू सर्कारिया हुंछन्. अदालत ठानावाट वुझि लिनु. दुनित्रा रैतिका कमाराले विरायामा. चकुइ पऱ्याको अमालि ठेक्दार द्वाऱ्या वेष विर्ता छाप सर्वाक माफि जगाका धनिले लिनु. पर्जाका

छोरि वुहारि विराउन्या कमारालाइ अदालत् ठाना अमालवाट अैन वमोजिम् कैद गर्नु. षसम्ले म्यादका रूपैया तिरि लैजांछ भन्या अैन वमोजीम्. रूपैया लि उसैका जिम्मा गरि छाडी दिनु.

५. हाड फोरा परि मासिन्या षत्मा र. चाक चकुइ परि दंड हुन्या षत्मा एका अम्वलको चाक एक अम्वलकि चकुइ पऱ्या भन्या जस् जस्का अवंल्मा पऱ्याका हुन्. उसै उसै अंवलवाट लिनु.

६. मासिन्या जात गैह्रका. जार काटि मासियाकि स्वास्नि जार भागी जादा अर्का अवलमा गै काटि डल्लो गल्यो भन्या. हाम्रा अम्वलमा डल्लो गल्यो भंन्या.ले पाउदैन. जहाका कुरिया हुन्. उसै अंवलकाले पाउछन्.

७. मासिन्या जातले १ फेरा मासिन्या षतगरि. अैन वमोजिम् मासिया पछि छुटि अकरीया भैरहाका मानिसले. फेरि मासिन्या षत गऱ्यो भन्या. फेरि पनि मासिदिनु.

८. जागीर्दार जागीर्दारका षुवा जागीरका दुवैतर्फका जगामा पऱ्याको झगराको मेरा जगा.वाट झगरा छिन्या पछि आम्दानि मेरो हुंछ भनि दियेन भनि. कोहि कराउन आया दुवै झगरिया आफ्ना अंवलका भया तिनको अैन वमोजीम्को. आम्दानि पनि. उसै जगाका अमालिको हुंछ उइतर्फका कुरिया रहाछन् र. एकापट्टिका अमालि द्वाऱ्याहरू मात्रै भै. झगरा छिन्याको. भया आम्दानीको छैटि लि उपर आम्दानी जौना अम्वल्का कुरीया हुन्. उसै अम्वलका अमालिलाइ सौपिदिनु.

# मदपान अछुती

१. पानि नचलन्या जातले जाड रक्सी षाइ.वौल्हायाका वेलामा आफुभंदा चोषा जातका घरभित्र पसि छोइदियो र. माल षराव भयो भन्या विग्र्याका मालको विगो भराइ ५ रूपैया दंड गर्नु रूपैया नतिऱ्या कैद गर्नु.

२. कृस्तान् मुसल्मान् कामि सार्की दमै गैह्र पानी नचलन्या जात र. छोइ छिटो स्मेत् हालनु पर्न्या जातले छोयाको अनाजमा उसिन्याको र. भुटचाको वाहेक अरू कुटचा पिऱ्हा छोडायाको अनाज गैह्र भयो. पानी. पऱ्या वाहेकको काचो माछा मासु भयो तमाषु भयो. अत्तरफुलेल गुलाफपानी गैह्र षुसवै आउन्या कुरो भयो. मसला गैह्र भयो. सुगधं आउन्या फल फुल चिज वस्तु. गैह्र छोयाको हवस् इन्का घर. भित्रराष्याको हवस्. विटुलो हुदैन. एति कुरा इन्हे रूले छोयाको इन्लाइ नछोइ अलग वसि षान हुंछ षान्यालाइ पतिया पनि गर्नु. पर्दैन दंड पनि हुदैन.

३. पानी नचलन्या जात र. छोया छिटो स्मेत् हालनु पर्न्या जातले छोयाका माटाका भाडामा पानि पऱ्याको विटुलो हुंछ. पानी नपऱ्याको माटाको भाडो विटुलो हुदैन. तेसै शुद्ध हुंछ. काठका भाडा चिनिञा भाडा वोतल्. सिसि छोयाका धोइ पषालि सुक्या पछि चोषो हुंछ.

४. तागाधारि जात गैह्रलाइ कसैले जाड कुषुरो गाइ भैसिको मासु गैह्र अभक्ष कुरो षायो भनि पोल्यो रोवकार गर्दा सावीत भयो भन्या षान्याले जानि षायाको रहेछ भन्या. भातवाहेक् गरिदिनू. भोरमा षान्यालाइ प्रायश्चित्त. गराइदिनु. पोलाहाले पोल्यो सावीत्. गर्नसकेन भन्या. तेस्ता पोलाहालाइ ११ मैन्हा कैद गर्नु. रूपैया तिर्छ भन्या अरूको दोवर मैन्हाका १० रूपैया लि छोडी दिनु.

५. पानी नचलन्या जात र. छोया छिटो हालनु पर्न्या जातका हातको उसिन्याको भुटचाको पोल्याको अंन गैह्र कसैले षायो भन्या. औवल्लाइ २ दोयम्लाइ १॥ सीम्लाइ १ चहारलाइ ॥. रूपैयाका दरले धर्माधिकारलाइ गोदान दिलाइ प्रायश्चित्त गराइदिनु.

६. कसैले पानि र. पानि पऱ्याको वस्तु पानी नचलन्या जात छोइ छिटो स्मेत् हालनु पर्न्या जात र. सुगुरले छोयाको देष्यो. कसैलाइ. नकहि दवाइ राष्यो र तागाधारि जातले तेहि वस्तु षाया पछि जाहेर. गऱ्यो भन्या. थाहा पाइ दवाइउन्यालाइ १० रूपैया दंड गरि लि भोरमा षान्यालाइ ॥ गोदान लि प्रायश्चित्त गराइदिनु. शुद्ध हुंछ.

७. पानी वाहेक भयाको र. पानी नचलन्या जात छोइ छिटो स्मेत् हालनु पर्न्या जात गैह्र कसैले आफ्ना हातको भात पानि षुवाइ. अर्कालाइ भोरमा पाऱ्यो भन्या. मासिन्या जात रहेछ भन्या मासिदिनु. नमासिन्या. जातले भया स्वास्नि भाइ छोराको अंस र. छोरि.को. विहा षर्च पर सारि उस्को. अंस सर्वस्व गरि वस्याका गाउ सहर. वाट निकाली दिनु.

८. कसैले तागाधारि जातका घरमा जवरजस्तिसित जाड कुषुरो सुगुर हुलिदियो र मेरा घर्मा फलानाले जाड कुषुरा सुगुर हुलिदियो भनि तागाधारि कसैले करायो भन्या. घरमा जाड कुषुरो हुलिदिन्यालाइ ५ रूपैया. सुगुर हुलिदिन्यालाइ १० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजीम्. कैद गर्नु. हुलिदिन्यैवाट १ रूपैया लि घर शुद्ध गर्नालाइ घरका धनिलाइ दिलाइ दिनु.

९. ज्यूका रक्षा निमित्त औषधीमा पऱ्याको वाहेक अम्वल गरि. भांग अफिम् चरस् षान्यालाइ १०।१० रूपैया दंड गर्नु. फेरि पनि षायो भन्या जतिपल्ट पक्रिंछ उति फेरा १०।१० रूपैया दंड गर्नु.

१०. चार वर्ण छतिसै जातका स्वास्निहरू सुत्क्यारि हुदा नाल काटन्या अरू स्वास्निहरू कोहि रहेनछन्. अठवा पऱ्यो भन्या पानि नचलन्या जातले पानि चलन्या. जात गैह्रका वालषको. नाल काटन हुंछ. छुत लाग्न्या कुरा नछुवाइ घरभित्र पसि नाल कटायामा षत. लाग्दैन प्रायश्चित्त पनि पर्दैन. घर चोष्याउन पनि पर्दैन नुवारानले शुद्ध हुंछ. उपल्ला जातले अछुति छोइ छिटो हालनु पर्न्या जातका वालषको.पनि नाल काटन हुंछ उपल्लाजातले.स्नान गरि शुद्ध हुंछ. दंड प्रायश्चित्त केहि पर्दैन. आफ्ना लोग्न्याले वालषको. नालकाटन हुंछ षत लाग्दैन. कोहि नभया आफै सुत्क्यारिले. पनि नाल काटनहुंछ.

११. सहर गाउहरूका टोलमा साल नाल स्मेतका वालष फाल्याको देषियो भन्या अदालत ठाना अमालवाट तेस टोलका विधवा स्त्रि र. लोग्न्या पर्देस गयाका सधवा स्त्रिहरूमा सुढचानिलाइ लैगी तेस्का तजवीजले अंग हेर्न लाउनु. अंग हेर्न षोजदा जौन स्त्रीले हेर्न नदि जवर जस्ति गर्न लागी भन्या तेस स्त्रिको अंग जवर जस्ति संग स्वास्निलाइ हेर्नलाइ छोडि दिनु. षत लाग्दैन.

१२. तागाधारि जात गैह्र कसैले आफुले घरमा वनाइ हवस् अंतवाट ल्याइ हवस् अंत गै हवस् जानि जानि जाड रक्सी षाइ आफ्ना भताहालाइ स्मेत्.भातमा वोरेछ भन्या. अैन वमोजिम्को. अंस सर्वस्व गरि जनै भिकि नमासिन्या मतवाली शुद्ध जातमा मिलाइ दिनु. भताहालाइ

भातमा वोऱ्याको रहेनछ भन्या. सर्वस्व हुदैन. जनै मात्र झिकि नमासिन्या मतवाली जातमा मिलाइ छोडि दिनु.

१३. तागाधारि लगायेत्. पानि चलन्या चोषा जातका षानु पिनु. गरि वस्याका छिडि भै घरमा र. अरू घरका तला चोटामा कसैले छोया छिटो हालनु पर्न्या जातलाइ लैगयेछ भन्या लै जान्यावाट छुत लाग्न्या वस्तुको विगो भराइ लैजान्या जान्या दुवै जनावाट ५।५ रूपैया दंड गरि घर चोष्याउनि पतिया गराइ दिनु.

१४. तागाधारि लगायेत्. पानि चलन्या गैह्र चोषा जातले षानु पिनु. गरि वस्याका छिडि भै घरमा र. अरू घरका तला चोटामा छोया छिटो हालनु पर्न्या जातले जानि जानि पसेछ भन्या छुत लाग्न्या वस्तुको विगो भराइ ५ रूपैया दंड गरि घर चोष्याउनि पतिया गराइ दिनु.

१५. तागाधारि जात र. नमासिन्या मतुवालि जात कसैले तागाधारि जात कसैलाइ. जानि जानि जवर जस्ति गरि वा. उसै जाड रक्सी गैह्र जात जान्या कुरो र. अभक्ष षुवायेछ भन्या अैन वमोजिम्को अंस सर्वस्व गरि १ वर्ष कैद गर्नु. म्यादका रूपैया दिया लि छाडि दिनु. मासिन्या जातले षुवायेछ भन्या सर्वस्व गरि मासि दिनु. भोरमा षान्या र जवर जस्ति परि. षान्यालाइ पतिया दिनु. षान्या तागाधारिले जात ढाटि षायेछ भन्या थाहा नपाइ षुवाउन्यालाइ वात लाग्दैन. षान्यालाइ जात पतित गरि नमासिन्या शुद्ध जातमा मिलाइ दिनु. पतिया पाउदैन.

१६. तागाधारि जात नमासिन्या मतवालि जात कसैले नमासिन्या मतवाली जातलाइ जानी जानी जवरजस्ती गरि वा. उसै जात जान्या कुरो र अभक्ष षुवायेछ भन्या ५० रूपैया दंड गर्नु रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु. मासिन्या जातले षुवायेछ भन्या मासिदिनु. भोरमा षान्या र. जवरजस्ति परि षान्यालाइ पतिया दिनु. षान्या नमासिन्या मतुवालि जातले जात ढाटि षायेछ भन्या. षुवाउन्यालाइ वात लाग्दैन. षान्यालाइ जात पतित गराइदिनु.

१७. तागाधारि जात नमासिन्या मतवालि जात मासिन्या मतुवाली जात कसैले मासिन्या मतुवालीलाइ जानि जानि जवरजस्ति गरि वा उसै जात जान्या कुरो र अभक्ष षुवायेछं भन्या २५ रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजीम् कैद गर्नु. भोरमा षान्या र जवरजस्ति परि षान्या जातका रीतको. पतिया गरि शुद्ध हुंछन्. षान्या.ले जात ढाटि षायेछ भन्या. षुवाउन्यालाइ वात लाग्दैन. षान्यालाइ जात पतित गराइदिनु.

१८. तागाधारि जात नमासिन्या मतुवालि जात. मासिन्या जात. छिटो हालनु पर्न्या जात. कसैले छिटो हालनु नपर्न्या. पानी नचलन्या जातलाइ जानि जानि जवरजस्ति गरि वा. उसै जात जान्या कुरो र. अभक्ष षुवायेछ भन्या १२॥. रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम्

कैद गर्नु. भोरमा षान्या र जवरजस्ति परि षान्याले जातको रीत गरि शुद्ध हुंछन्. षान्याले जात ढाटि षायेछ भन्या षुवाउन्यालाइ वात लाग्दैन षान्यालाइ जात पतित गराइदिनु.

१९. तागाधारि जात नमासिन्या मासिन्या मतुवालि जात. छिटो हालनु नपर्न्या जात. छिटो हालनु पर्न्या जात. कसैले छोया छिटो हालनु पर्न्या जातलाइ जानि जानि जवरजस्ति गरि वा. उसै जात जान्या कुरो र. अभक्ष षुवायेछ भन्या ६ा. रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजीम् कैद गर्नु. भोरमा षान्या र जवरजस्ति परि षान्या जातको. रीत गरि शुद्ध हुंछन्. षान्याले जात ढाटि षायेछ भन्या षुवाउन्यालाइ वात लाग्दैन. षान्यालाइ जात पतित गराइदिनु.

२०. छोइ छिटो हालनु पर्न्या पानि नचलन्या जातले तागाधारि जात र. नमासिन्या मतुवालि जातलाइ जानि जानि जवरजस्ति गरि वा उसै जात जान्या कुरो र. अभक्ष षुवायेछ भन्या षुवाउन्या लोग्न्या स्वास्नि मानिस् जो हो तेस्ता नमासिन्या जातले भया ३ वर्ष कैद गर्नु. म्यादका रूपैया डवल् दिया लि छाडनु. मासिन्या जातले भया १॥. वर्ष कैद गरि मासिदिनु. मासिन्या मतवालि जातलाइ षुवायाको भया षुवाउन्या नमासिन्या जातलाइ १॥. वर्ष कैद गर्नु म्यादको डवल् दिया लिनु. मासिन्या जातले भया मासी दिनु. भोरमा षान्यालाइ पतिया गराइदिनु. षान्याले जात ढाटि षायेछ भन्या जात पतित गराइदिनु. षुवाउन्यालाइ वात लाग्दैन.

२१. छोया छिटो हालनु पर्न्या जातले तागाधारि जात नमासिन्या मासिन्या. मतवालि जात गैह्रलाइ जानि जानि जवरजस्ति गरि वा उसै जात जान्या कुरो र. अभक्ष षुवायेछ भन्या. षुवाउन्या लोग्न्या स्वास्नि जो हो. तेस्तालाइ ३ वर्ष कैद गरि मासिदिनु. भोरमा षान्या र. जवरजस्ति परि षान्यालाइ पतिया दिनु. छिटो हालनु नपर्न्या जातकालाइ षुवायेछ भन्या २० रूपैया दंड गर्नु षान्याले जातको रीत गरि शुद्ध हुंछन्. षान्याले जात ढाटि षायेछ भन्या जात पतित गरीदिनु. षुवाउन्यालाइ वात लाग्दैन.

२२. अर्काका घरभित्र जात जान्या कुरो र. नषान्या अभक्ष लैगी कसैले राषेछ घरका मानीसले थाहा नषाइ भोरमा. षाया छन्भन्या जात जान्या कुरो घरभित्र राषन्यालाइ १० रूपैया दंड गर्नु थाहा नपाइ भोरमा षान्यालाइ पतिया गराइदिनु.

२३. तागाधारि लगायेत् पानि चलन्या चोषा जात कसैले पानि नचलन्या छिटो हालनु नपर्न्या जातसित जानि जानि हाल्याको हवस् पानी नहाल्याको हवस्. एका हुक्कामा तमाषु षायेछ भन्या २० रूपैया दंड गरि २॥ रूपैया गोदान लि पतिया दिनु. इनै जात.सित संग वसि पानि हाल्याको आफ्ना हुक्कामा तमाषु षान्यालाइ ५ रूपैया दंड गरि १ रूपैया गोदान लि पतिया

दिनु. भोरमा षान्यालाइ भोरको पतिया दिनु. पानी नहाल्याका आफ्ना हुक्कामा संग वसि षायेछ भन्या पतिया पर्दैन.

२४. फलानाले जात जान्या भक्ष षायो भनि कागज स्मेत्. लेषि दियो पछि सावित गर्न सकेन भन्या जात जान्या कुरो पोलन्याका अैन वमोजीम्. सजाय गर्नु. कागजलेष्याको रहेनछ भन्या. गालि गऱ्याको ठहर्छ तेस्तालाइ १० रूपैया दंड गर्नु.

२५. तागाधारि जात नमासिन्या मासिन्या गैह्र. पानि चलन्या. चोषा जातले कामि सार्कि दमै वादि गाईन्या गैह्र छोया छिटो हालनु. पर्न्या जातले. छोयाको मासु.मा. पोलि पानि नपऱ्याको मासु कसैले नषानु. षायेछ भन्या. षान्यालाइ ५ रूपैया दंड गरि २॥. रूपैया गोदान्. लि प्रायश्चित्त गराइदिनु. जात जादैन.

२६. छोया छिटो हालनु. पर्न्या जातले. छोयाका षायाका हुक्कामा. तागाधारि जात नमासिन्या मतवाली जात. मासिन्या जात. पानी नचलन्या जात कसैले भोरमा. तमाषु. षायेछ भन्या. भोरमा षान्यालाइ दंड पर्दैन १ रूपैया गोदान लि भोरको पतिया गराइदिनु. षुवाउन्याले. जानि जानि षुवायेछ भन्या. तागाधारि नमासिन्या. मासिन्या. मतवाली गैह्र पानि चलन्या चोषा जातलाइ षुवाउन्यालाइ २० रूपैया पानी नचलन्यामा. छिटो हालनु. नपर्न्या. जातलाइ षुवाउन्या. लाइ ५ रूपैया दंड गर्नु.

२७. तागाधारि लगायेत्. पानि चलन्या जात र. पानि नचलन्या जात छोया छिटो हालनु पर्न्या. जातले वारि वघैचाको हवस्. वनको हवस्. एकारूषका फल फुल टिपि षायामा. आफुले छातछुत नगरी. रूखमा चढी हवस्. भैवाट टिपि हवस्. एका हागामा. यौटाले. एका हागमा यौटाले. टिपि षायाको .ठहऱ्यो. भन्या दंड पनि हुदैन पतिया पनि गर्न पर्दैन.

२८. व्राम्हण लगायेत्. तागाधारि नमासिन्या मासिन्या गैह्र पानि चलन्या जात र पानि नचलन्या. छोया छिटो हालनु पर्न्या जातले साघु फट्क्या तर्दामा भयो डुंगा तर्दामा भयो. जमीन्मा टासियाका फलैचामा वस्ता भयो छातछुत नगरि अलग अलग हिडचा वस्या षायामा छुत लाग्दैन. पतिया गर्नु पर्दैन दंड पनि हुदैन.

२९. कसैले आफु भंदा घटि भात नचलन्या जातका हुक्कामा थाहा नपाइ भोर परि तमाषु षायेछ भन्या ॥. आठ आना लि भोरको पुर्जि गरिदिनु. धर्माधिकारले पनि आड आना ॥. लि नजीकको १ तिर्थ गराइ भोरको पतिया गरिदिनु.

३०. १९२२ साल ज्येष्ट वदि ६ रोज ३ देषि उप्रान्त. उपाध्या व्राम्हणले जाड रक्सि र दालचिनि सुँतला अम्वा आप कटहर. फल फुल जरिवुटि गैह्रको अरष स्मेत्. षाया भन्या र. भताहालाइ भात्मा वोरेछ भन्या उस्को अंस सर्वस्व गरि जनै झिकि भात वाहेक गरि मतवालि जात्मा मिलाइ छाडि दिनु. पानि चल्छ आफुले षाइ अरूलाइ वोरेको रहेनछ भन्या सर्वस्व हुदैन. जनै झिकि भात वाहेक गरि. मतवाली जातमा मिलाइ छाडि दिनु. पानि चल्छ. अंग्रेजी जात जातका सराफ षाइ अरूलाइ भात पानिमा वोरेछ भन्या उस्को अंस सर्वस्व गरि जनै झिकि भात पानि वाहेक गरि पानि नचलन्या जातमा मिलाइ छाडि दिनु. आफुले मात्र षायेछ अरूलाइ भात पानिमा वोर्‍याको रहेनछ भन्या सर्वस्व हुदैन. जनै झिकि भात पानि वाहेक गरि पानि नचलन्या जातमा मिलाइ दिनु.

३१. १९२२ साल ज्येष्ठ वदि ६ रोज देषि उप्रान्त. रजपूत जैसि क्षेत्री जातले जाड रक्सी षाइ भताहालाइ भात्मा वोरेछ भन्या उस्को अंस सर्वस्व गरि जनै झिकि भात वाहेक गरि मतवाली जात्मा मिलाइ छाडि दिनु. पानि चल्छ आफुले षाइ अरूलाइ वोर्‍याको रहेनछ भन्या. सर्वस्व हुदैन. जनै झिकि भात वाहेक् गरि. मतवालि जातमा मिलाइ छाडि दिनु. पानि चल्छ अंग्रेजी जातजातको सराफ षाइ अरूलाइभात पानिमा वोरेछ भन्या उस्को अंस सर्वस्व गरि जनै झिकि भात पानि वाहेक् गरि पानि नचलन्या जात्मा मिलाइ दिनु. आफुले मात्र षायेछ अरूलाइ भात पानिमा वोर्‍याको रहेनछ. भन्या सर्वस्व हुदैन. जनै झिकि भात पानि वाहेक् गरि. पानि नचलन्या जात्मा मिलाइ दिनु.

३२. १९२२ साल ज्येष्ठ वदि ६ रोज ३ देषि उप्रान्त. पानी चलन्या मतवाली जात गैह्रले अंग्रेजी जात जातको सराफ षाइ अरूलाइ भात पानिमा वोरेछ भन्या उस्को अंस सर्वस्व गरि. भात पानि वाहेक् गरि पानि नचलन्या जातमा मिलाइ दिनु. आफुले मात्र षायेछ अरूलाइ भात पानिमा वोर्‍याको रहेनछ भन्या सर्वस्व हुदैन. भात पानि वाहेक् गरि पानी नचलन्या जात्मा मिलाइ दिनु.

३३. १९२२ साल ज्येष्ठ वदि ६ रोज ३ देषा उप्रान्त. रजपूत जैसि क्षेत्री तागाधारि जातले दाल चिनि सुँतला अम्वा आप कटहर. फलफुल जरिवुटि गैह्रको अरषढाक्रचाले षायाको भया २० रूपैया दंड गर्नु. जागिर्‍याले षायाको भया जागीर षोसि वर्षास गरि दिनु. जात जादैनन्. भात पानि चल्छ.

३४. १९२२ साल ज्येष्ट वदि ६ रोज ३ देषि उप्रान्त. मतवालि जात गैह्रले आफ्ना मुलुकको पानी चलन्या जात गैह्रले वनायाको जाड रक्सि षान हुंछ. जागिऱ्याले जाड रक्सी षाइ गल्लि सडकमा. लोटचो भन्या तानावाना च्याति षोसि दिनु.

# फकिरसित मुडिन्या

१. जोगी संन्यासी वैरागी नानक उदासि जंगम सेवडा गैह्र भेषहरूले कसैका १२ वर्षदेषि उधोका कर्म चल्या नचल्याका. छोरा छोरिहरूलाइ फुल्याइ हवस् चोरि लैगी जवरजस्ति सित मुडेछ मुडिन्याका वावु दाज्यू भाइ काका मावली नजीकका नातादारहरूले अदालत्. ठाना अमाल्मा फिऱ्याद गर्न आया भन्या अर्काका छोरा छोरि लैगी मुड्न्यालाइ रमताले मुड्याको रहेछ भन्या मुडि देस निकाला गरिदिनु. मठधारिले मुडयाको रहेछ भन्या. तेस्को मठ षोसि अर्का महंतलाइ थापि ३ वर्ष कैद गर्नु. घर्वारिले मुडयाको रहेछ भन्या. सर्वस्व गरि ३ वर्ष कैद गर्नु. म्यादका रूपैया तिर्छ भन्यालि छाडि दिनु. सर्वस्व हुन्या उस्का इष्टमित्रहरूले म्यादका रूपैया तिरि दिंछं भन्या लि छाडिदिनु. कर्म नचल्याका लोग्न्यालाइ. मुडयाको भया पनि. पतिया गराइ आफ्ना जातमा आउछ विहा नभयाकि रजस्वर्ला नभयाकि करणिमा पनि नचुक्याकि रहिछ भन्या एस्ता स्वास्निलाइ पनि पतिया दि आफ्ना जातमा मिल्दा कुटुँवले विहा गर्नु हुंछ. भात षाजा चल्छ.

२. जोगी संन्यासि वैरागीहरू कसैले अर्काका विहा गरि ल्यायाका. दियो कलस पुजि ल्यायाका. मनोमानसंग ल्यायाका. स्वास्निहरूलाइ मुडया भन्या तेस्ता लाइ पक्री मुडी देस निकाला गरिदिनु. मुडियाका स्वास्निले मुडिया पछि अरूका हातको भात षायाकी रहिनछ अंत विग्र्याकि रहिनछ. भन्या पतिया प्रायश्चित्त गराइ जातमा लिनु. पोइल.गयाकी रहिछ भन्या पैल्हे करणि लिन्या जो हो ठहराइ जार हांन्या जातले जार हांनु. जार नहांन्या जातले अदालत्. ठाना अमालमा नालिस् गर्नु र. वाहावाट अैन वमोजीम् दंड गर्नु.

३. कसैका १६ वर्षदेषि मनिका कंन्या र. सधवा विधवा स्वास्निलाइ कोहि संन्यासि वैरागीहरूले ललाइ फकाइ मुडि गाउ सहरवाट निकाली देसतिर लैजान लाग्यो भन्या तेस स्वास्निका धनिले अदालत ठाना अमाल्मा जाहेर गर्नु. र वाहावाट तेस्ता जोगी संन्यासि वैरागीलाइ पक्रि १ वर्ष कैद गरि देस निकाला गरिदिनु १६ वर्ष नाघ्याका विधवा स्वास्नि आफ्ना षुसिराजि सित मुडियाका रहाछन् भन्या. षत लाग्दैन.

४. मुडिन्या स्वास्निले गुरुका हातको भात षायाको रहेछ भन्या जस दिन पोइल जाँछे तेस दिन आफ्नु जार ठहराइ हांनु फकिरैका धर्ममा रहाकी. पोइल पनि गयाकि छैन. यस्तै गरि जन्म गुमाउछु भनि वसी भन्या. स्वास्निको षुसि यस्ता स्वास्निको भात नषाइ करणि गर्छ भन्या पनि फकिर्नि भैछ. यस्को करणि लिंन भनि छाड्छ तापनि लोग्न्याको षुसि.

५. जोगी संन्यासी वैरागी नानक उदासि जंगम सेवडा गैह्र भेषहरूले कसैका ११ वर्ष उभोका १६ वर्षसंमका विहा व्रतवंध भयाका. छोरा छोरि लैगी मुडेछ र. तेस्का वावु आमा दाज्यू मावली नगीचका नातादार. कराउन आया भन्या कर्म नचल्याकालाइ मुड्याको रहेछ भन्या आफ्ना जातमा रहंछन् १२ वर्ष देषि उभो कर्म चल्याकाले मलाइ छेकि थुनि जवरजस्ति गरि मुड्यो गुरुका हातको भातषायाको छैन भनि ३५ दिनका म्यादभित्र कराउन आयो रोवकार गर्दा. भात षायाको ठहरेन भन्या. प्रायश्चित्त पाउछ १२ वर्ष उधोकि स्वास्निमानिसलाइ मुडि करणि पनि गऱ्याको रहेछ भन्या तेस्ता स्वास्निलाइ पतिया पाउदिन नदिनु १२ वर्ष उभोका लोग्न्या स्वास्निले आफु मुडि भात समेत्. षायाको रहेछ भन्या तेस्तालाइ भातको प्रायश्चित्त हुदैन. जौना जातमा मुडियाका हुन्. उहि जात हुंछन् पतिया दिनु. पर्न्यालाइ पतिया दिदा. औवल्लाइ ५ दोयम्लाइ ४ सिम्लाइ ३ चहारलाइ २ रूपैया गोदान ली धर्माधिकारले पतिया गरिदिनु.

# धर्माधिकार्को

१.	उपाध्या व्राम्हण. रजपुत जैसि क्षत्रि गैह्न तागाधारि जात नमासिन्या मतवालि गैह्नमासिन्या मतवालि गैह्न जात. इयुरोपियेन जात मुसल्मान् जात. छोइ छिटो हालनु नपर्न्या पानि नचलन्या गैह्न जात. छोया छिटो हालनु पर्न्या गैह्न जातले. गोर्षाराज भर्मुलुकमा गोवधगर्ना वाहेक. अरू आफ्ना कुलले गरि. आया वमोजिम आफ्ना आफ्ना मझ्फप्का. धर्म हुन्या काम कुरा सबैले गर्नु हुंछ. यस्कुरामा कसैले रिस नगर्नु. एस्ता कुरामा रिस राग झगडा भै कचहरिमा कराउन आया भन्या. अर्काका मझ्फप्लाई षलल् हुन्या कुरा गर्न्यालाई. १०० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम्कैद गर्नु. झगडा भै ज्यान मरेछ भन्या. मार्न्या काटिन्या जात भया. ज्यानको वदला ज्यान लिनु. नकाटिन्या जात भया अैन वमोजिम अंस सर्वस्व गरि दामल गर्नु.

२.	उपाध्या व्राम्हण लगायेत तागाधारि जात र. नमासिन्या मतवाली जात मासिन्या जात गैह्नका. सधवा विधवाका करणिको वेभिचारभै. भोरमा भात पानिमा पऱ्यामा. मोष्य पुर्जि लिन्यालाइ. अदालत ठाना अमालवाट भोर को पतिया गराई दिनु पर्दा. औवल्लाई २ दोयंमलाइ १॥ सिमलाई १ चहारलाइ ॥ का दर्ले दस्तुर लि धर्माधिकार. लाइ पुर्जि गरि दिनु.

३.	धर्माधिकार वाहेक्. अरू कसैले विचमा पतिया  दियो भन्या १॥ वर्ष कैद गर्नु. पतिया दिन्या मतलव मात्रै दिन्यालाइ. १ वर्ष कैद गर्नु. म्यादका रूपैया डवल्का हिसावले दिया लि छाडि दिनु.

४.	धर्माधिकारले पतिया दिदा भोरको मात्र पतिया दिनु. जानिजानि पर्न्यालाइ सर्कारको हुकुम र. मुषतियारको मर्जि. भयो भन्या र. अैन मा पतिया नदिनु भन्याकालाइ. हुकुम मर्जि भयो भन्या.  लाल मोहर दस्षत् गराई लि पतिया दिनु. जानिजानि पतिया नदिनालाइ विना लालमोहर दस्षत्ले पतिया दियो भन्या मोष्य धर्माधिकारलाई ५०० रूपैया दंड गरि धर्माधिकारिकाम झिकि दिनु. कारिंदाहरूले गऱ्याको रहेछ. भन्या कारिंदैलाई ५० रूपैया दंड गरि षोसि दिनु.

५. जात भात जान्या विराउ गर्न्यालाइ. अैनले पानिको पतिया दिनु भंन्या लेषियाका कुरामा. अैन वमोजिमको वापतिलाई सजाय सर्वस्व. जरिवाना नगरि कन पानिको पतिया दिन्या. मोष्य हाकिमलाइ ४० रूपैया जरिवाना गर्नु. वा पतियालाई. अैन वमोजिम सजाय गरि सक्या पछि मात्रै पानिको पतियादिनु भनि अैनमा लेषीयाकालाई पतिया दिनु.

६. अडा गौडा अदालत ठाना अमालका हाकिम डिठ्ठा विचारि अमालि द्वाऱ्या कसैले तागाधारि जातको. अघिका हाकिमले. भात नचलन्या ठहराई. भात वाहेक गऱ्याकालाई. जालसाज गरि वा. अघिका कायेलनामा. जमान्वंदी. दवाई. यस्को भात चलन्या रहेछ भन्या. भुट्टो कागज गरि सर्कार नसाधी. भात चलायाको रहेछ र. कुरो वुझदा. अघिका हाकिम गैह्रले. गरायाको कायेलनामा. जमानवंदी. सदर ठहऱ्यो. भात नचलन्यै ठहऱ्यो भन्या भात चलाउन्यामा. कचहरिका हाकिम द्वाऱ्या जो हो. उस्ले भात षायाको रहेनछ भन्या जात जादैन ५०० रूपैया दंड गरि. छाडि दिनु. भात चलाई आफुले स्मेत षायाको रहेछ भन्या. ५०० रूपैया डंड गरि. जनै भिकि जात वाहेक गरि. छाडि दिनु. रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

७. कोहि इज्जत्को थाहा नराषन्या. गर्न्या नगर्न्या. कुराको पनि विचार नभयाका षान्या नषान्या कुराको पनि. षवर. राषन नसकन्या. गरि वौल्हायाका मानिस्ले. अभक्ष कुरो केहि षायो भन्या र. अछुति जात कसैका हात्को र. आफु भंदा घटि जात कसैका हातको षायेछ भन्या. तेस्तालाई. वुद्धि ठेकान्मा आया पछि औवल्लाई ५ दोयम्लाई ४ सिमलाई ३ चहारलाई २ रूपैयाका दर्ले धर्माधिकारलाई गोदान दिलाई प्रायश्चित्त गराई दिनु.

८. आफ्ना मुनासिवले. दुषले विरहले मर्छुभनि फाल हालन्या. सेरन्या हतियार रोपन्या. पासो लाउन्या. विष गैह्र मरिन्या कुरो. आफैले षान्यालाई. औषधि गर्दा वाच्यो भन्या गक्षअनुसार. एक आना देषि माथि २ रूपैयासम्म. धर्माधिकारलाई गोदान दिनु. उनले पतिया प्रायश्चित्त. गराई दिनु. एस्ता लाई अमालिको षत लाग्दैन.

९. विरां गरि काटिन्या झुँडिन्या मर्छु भनि. अपहत्या गरि झुंडिन्या आफैले हतियार चलाई मर्न्या. गंगा भिर इनार. छाना षाडिमा. फाल हालन्या. जहर विष षान्या एस्ता अपहत्या गरि मर्न्या र. पानि नचलन्या जातका. हात वाट मर्न्याको धर्माधिकारको दस्तुर. औवल्लाई १ दोयमलाई

॥. सिमलाई र. चहारलाई ।. गोदान पर सारि. अमालिका जिम्मा दिलाई. छोरा भाई गोतियाहरूले कृया गर्नु.

१०. सर्कारवाट ज्यूको वदला ज्यान लि मारियाकालाई. उन्का भाई छोरा गोतियाहरूले सत गति गर्न पाउन्या हुं भनि. भन्न आया भन्या. अदालत ठाना अमालवाट. पुर्जि गराई. धर्माधिकारवाट पनि. प्रायश्चित्त पतिया. दि काजकृया गर्न दिनु. गक्ष अनुसार. एक आना देषि उभो. २ रूपैयासम्म लि पतिया गरि दिनु.

११. हाडनातामा आफु भन्दा घटि जातमा पानि नचलन्या जात्मा छिटो हालनु पर्न्या जात्मा करणि भै गयो भात पानि षाई भयो. जात भात पानि.वाट पतित भयाका कोहि मानिस्. मऱ्यार. उन्का भाई छोरा भतिजाहरूले पतिया पाया काजकृया गर्दा हुं भनि भंन आया भन्या. कृया शुद्ध भंन्या विहोराको. पतिया गराई दिनु.

१२. कसैले नाता गोत्र आफु भंदा कमजात छोया छिटो हालनु पर्न्या जातमा विग्रि भयो आफु भंदा घटि जातका हातको भात पानि षाई भयो. जात पतित भया का मानीस मऱ्या भन्या तेस्ताको कृया शुद्ध को. पतिया नगरि. कृया गर्न्यालाई र. गराउन्यालाई ५।५ रूपैया दंड गरि औवल्लाई. २ दोयमलाइ १ सिमलाई ॥. चहारलाई ।. लि धर्माधिकारवाट. भात पानिको पतिया दिनु.

१३. कोहि लोग्न्या स्वास्निले कसैको ज्यान्माऱ्याको र. जात्क्माऱ्याको रहेछ अघि थाहानपाई पछि जाहेर भयो भन्या तेस्ता पातकिका हातको. भोरमा षान्यालाई भताहा गैह्रलाई. अवल्लाई ३॥ दोयंमलाई १॥। सिमलाई ॥। चहारलाई ।३ का दर्ले गोदान लि धर्माधिकारले भात पानिको पतिया दिनु.

१४. दामल भयाका. काटियाका पतित भै. जनै फिकियाका. अछुति जातमा करणि गरि भात पानि वाहेक भयाका र. उसै जात्मा मिलायाका. मानिस मऱ्या भन्या उस्का भाई छोरा छोरि वंस कसैले. इन्को कृया शुद्धको पतिया. पायाकृया गर्दा हुं भन्न आया भन्या औवल्लाई ५ दोयंम्लाई

४ सीमलाई ३ चहारलाई २ रूपैया का दर्ले धर्मा धिकार्ले गोदान लि कृया सुद्धको पतिया गराई दिनु.

१५. अर्काको करणि भात पतरिको. वेहोरा नवुझि. भात पानि काढचो पछि संकाको वेहोरा नपुऱ्याई. रिसले पोल्याको ठहऱ्यो भन्या. पोलन्यालाई ११ मैन्हासम्म झेल षानामा कैद गर्नु. कैदका रूपैया तिर्छु भन्या पनि. एस्तालाई रूपैया लि नछाडनु. कैदै गर्नु. पोलन्याले भन्या संकाको वेहोरा. पुऱ्याई पोलेछ. रोवकार गर्दा करणिमा भन्या कायेल गर्न सकेन. भताहाले भात षान्या ठहऱ्यो भन्या पोलन्यालाई १० रूपैया दंड गर्नु. रूपैया तिरेन भन्या. अैन वमोजिम्कैद गर्नु. पोलाई माग्न्यालाई. प्रायश्चित्त पर्दैन. जातैमा मिल्छ.

१६. तागाधारि जात गैह्र कसैले मुडिन्या कर्म गरि. मुडि नमासिन्या शुद्र जातमा मिलाई पानिको पतिया दियाका मानिस्का विवाहिता स्वास्निवाट हवस्. अरू. स्वास्नि. ल्याई उस्वाट. जन्म्याका हवस्. एस्ताका संतांको नुवारान् पास्नि. विहा काज कृया गर्दामा. व्राम्हणले नमासिन्या शुद्र जातका सरहको कर्म गराई दिनु. पानिको पतिया नभयाकाको कर्म केहि नगराउनु. पानि नचल्न्याका हो कर्म गराउन्या व्राम्हणलाई र. कर्म गर्न्या जजमानलाई ५।५ रूपैया दंड गर्नु रूपैया नतिऱ्या १।१ मैन्हा कैद गरि. छाडि दिनु.

१७. पातकिहरूलाई पानिको पतिया दिदा अैनमा पानिको पतिया नदिनु भनि लेषियाका हाडनाता. का षत्मा र. छोइ छिटो हालनु पर्न्या जातसित करणि भै. इनैका हातको भात पानि षाई. उसै षत्मा मुडियाका. पातकिका हातको पानि चल्दैन. एतिलाई. पतिया नदिनु. एति कलम् वाहेक. अरू कुरामा मुडियाका मानिस पातकि शुद्र जात हुंछन्. पानि चल्छ. भातको पतिया पाउदैन. इन्लाई पानिको पतिया दिदा. औवल्लाई १० दोयम्लाई ८ सिमलाई ४ चहारलाई २ रूपैयाका दर्ले धर्माधिकार्ले गोदान् लि पानिको पतिया दिनु. एस्ता पातकिले व्राम्हणलाई. टिका लाउन हुदैन. दान दक्षिना दिन भन्या हुंछ. टिकानलाई दान दक्षिना दिनु. एस्ताका हातको टिको लाउन्या व्राम्हणलाई २॥. टिकालाई दिन्यालाई ५ रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम कैद गरि छाडि दिनु. थाहा नपाइ टिका लाउन्या व्राम्हणलाई षत वात लाग्दैन.

१८. स्वास्नि मानिस कसैले आफनु लोग्न्या भनि भोरमा हवस्. अथवा. दस इंद्रीय. चलन नसकन्या गरि लागु गैह्र षुवाई. वेहोस भयाका वेलामा हवस्. आफ्ना लोग्न्या वाहेक अरू व्राम्हण

लगायेत्. पोढ्यासम्म कसैसित करणि भयेछ र. भोरमा पऱ्या पतिया पाउ भनि. स्वास्नि कराउन आई भन्या. भोर्मा अर्का लोग्न्यासित करणि भयो भंन्या. स्वास्निले पतिया पाउदिन. स्वास्निको भोर ठहर्दैन. लोग्न्या मानिस भोर्मा पऱ्याको भया अैन वमोजिम प्रायश्चित्त पाउंछ.

१९. उपाध्या जैसि व्राम्हण गैह्र तागाधारि मतवालि जातका सधवा विधवा स्वास्नि र.कंन्या केटिको. करणि ली. सो करणि जाहेर नभै लोग्न्या चाहि भागि गै षोजदा फेला परेन भन्या र. मरि गयेछ भन्या. अरू कसैले जान्या सुन्याको रहेछ भन्या जाँन्या सुन्याको मुचुल्का लि. भोरमा पऱ्याका भताहालाई. प्रायश्चित्त गरि दिनु. जाँन्या सुन्या. मानिस्कोहि रहानछन् भन्या. तेस्ता बेभिचार्नि स्वास्निको ज्मानवंदि कायेलनामा जो गर्नु पर्छ. गरि भताहालाई. भात पानिको भोरको प्रायश्चित्त गराई दिनु.

२०. उपाध्या लगायेत्. चार वर्ण छतिसै जात. गैह्रका लोग्न्या मानिस् कसैले हाड नातामा र. पानि नचलन्या छोया छिटो हालनु. नपर्न्या जात गैह्रका स्वास्निको करणि गरि भात पानि षाई. आफ्ना स्वास्निलाई पनि करणि गरेछ. भात पानि स्मेत् षुवायेछ र. कचहरिवाट तेसलाई. तैले स्वास्नि सित कुरो. प्रकास् गरिस कि गऱ्याको छैन. भनि सोधन नपाउदैमा. लोग्न्या भागि गयेछ. स्वास्निले मेरा षसम्को.तेस्तासित करणि भयाको भात पानी षायाको मैले थाहा पायाको थियेन मैले षसम्लाई करणी भोरमा दियाको हो. भात पानि षायाको हो भनि कराउन आई र. लोग्न्या पक्रिया पछि. यो कुरो लोग्न्याले मलाई प्रकास गऱ्याको ठहऱ्यो भन्या मलाई जात पतित गरि दिनु. भंन्या मुचल्कालेषि दिया भन्या. कागज लेषाई लि पतिया गराई दिनु. गर्भको वालष स्मेत् आमाका पतियाले शुद्ध हुंछन्. लोग्न्या पक्रिया पछि. रोवकार गर्दा प्रकास गऱ्याको ठहऱ्यो भन्या. जात वाहेक गरि तेस्ताका हातको षान्यालाई पतिया गराई दिनु. जाहेर गऱ्याको ठहरेन भन्या. स्वास्नि सद्य ठहरि भात पानिमा चल्छे.

२१. अैनले षत लागि भात पानि जान्या. हाडनातामा करणि गर्न्या. लोग्न्याले करणि गऱ्याको जाहेर नभै आफ्ना विवाहिता र. भात षाजा चलन्या सम्मका अरू स्वास्नि.को करणि लियेछ. स्वास्निले थाहा नपाई भोरमा दियाको रहेछ भन्या. तेस्ता भोरमा पर्न्या स्वास्निलाई भात पानिको पतिया गराई दिनु. लोग्न्या विग्ऱ्या पछि करणि भै. गर्भ रहि छोरा छोरि स्मेत् जन्म्याका रहाछन् भन्या. पानि चल्छ. भात चल्दैन छोराछोरि. स्मेत् आमाका पतियाले शुद्ध

हुंछन्. स्वास्निले लोग्न्या विग्र्याको जानि. जानि करणि गराइछ भन्या विग्रन्या लोग्न्याको जौन जात भयाको छ. उसै जातमा मिल्छे. छोराछोरि पनि आमाकै जात्मा मिल्छ.

२२. पानि नचलन्या छीटो हालनु नपर्न्या जातका स्वास्किो जानि जानि करणि मात्र गर्न्या. भात पानि भन्या नषान्या लोग्न्या मानिसले आफु विग्र्याको जाहेर नगरि पतिया नभै अरू आफ्ना विवाहिता वा ल्याईता. वेस्या गैह्र स्वास्निको करणि गरेछ वा. आफ्ना हातको. भात पानि षुवायेछ र. पानि नचलन्या जातसित लोगन्या विग्र्याको. थाहा नपाई भोरमा. आफ्ना लोग्न्यालाई करणि दिन्या र. उस्का हातको भात पानि षान्या स्वास्निलाई तेस् लोग्न्याले पतिया गरि जात पाउन्या हुनाले. त्यो करणि दिन्या भात पानि षान्या. स्वास्नि र. गर्भका वा. पछि जन्म्याका संतान. स्मेत् तेसै स्वास्निका पतियाले शुद्ध हुंछन्. यस्ताकाहातको भात पानि चल्छ. भोरमा करणि दि. पतिया नभै आमा. मर्‍याकि रहिछ. संतानले पतिया माग्न आया. पतिया दिनु. आफ्ना लोग्न्याले येस्ता स्वास्निको करणि गर्‍याको थाहा पाई. आफुले करणि उस्का हातको. भात पानि वचाई लाज सर्मले. मात्र कुरा गर्न नसकि दवाई. भोरमा पारि. अरू भताहा भाई. भात पानिमा वोरियाका रहाछन् भन्या. आफुले कुरो थाहा पाया पछि दुनिया भात पानिमा. पर्न्या कुरो दवाया वावत्. स्वास्निलाई. २० रूपैया दंड गरि. भोर्मा पर्न्यालाई. भोरको पतिया गराई दिनु.

२३. छोई छिटो हालनु पर्न्या जातसित. जानि जानि विग्रन्या र. इन्का हातको भात पानि षान्या लोग्न्या मानिसले आफुले करणि गर्‍याको वा. भात पानि षायाको जाहेर नगरि. अरू आफ्ना विवाहिता वा ल्याईता. बेस्या गैह्र स्वास्निको करणि गरेछ वा आफ्ना हातको. भात पानि षुवायेछ र.लोग्न्याले. छिटो हालनु पर्न्या एस्ता जातको. करणि गर्‍याको वा. भात पानि षायाको थाहा नपाई भोरमा. आफ्ना लोग्न्यासित करणि गराउन्या वा. भात पानि षान्या. स्वास्निको गर्भ रह्याको रहेनछ भन्या. भात पानीको पतिया गराई दिनु. जात जादैन गर्भ रह्याको रहेछ भन्या. भात चल्दैन. पानिको मात्र पतिया दिनु. तेसवाट पछि जन्म्या का संतान्. का हातको पानि चल्छ. भात चल्दैन यस्ता व्राम्हण लगायेत्. तागाधारि जातका संतानले जनै पाउदैनन् नमासिन्या शुद्र जात हुंछन्. नमासिन्या मतवालि जातका संतान् मासिन्या मतवाली वात हुन्छन्. मासिन्या मतवालीका संतान्. उस् भंदा कम्. मासिन्यै जात हुंछन्. आफ्ना लोग्न्याले यस्ताको करणि समेत् गरि वा उसै भात पानि षायाको छ भंन्या.

कुरो थाहा पाई आफुले उस्का हातको. भात पानि करणि वचाई. लाज सर्मले. मात्रै कुरो जाहेर. गर्न नसकि दवाई. भताहा भात पानिमा वोरियाका रहाछन् भन्या. आफुले कुरो थाहा पाया पछि. दुनित्रा भात पानिमा पर्न्या कुरो दवाया वावत्. स्वास्निलाई २५ रूपैया दंड गरि. भोरमा पर्न्यालाइ भोरको पतिया गराई दिनु.

२४. मुडिन्या जात कसैले आफ्ना सर्कारको षलल् हुन्या. उत्तर दक्षिनका वादसाहा सित वेत्यास् पर्न्या. आफ्ना राजा. वजिर उमराव. भारादार. को ज्यान जान्या काम कुरो. केहि गर्‍याको रहेनछ. अर्काका स्वास्नि विगार्‍याको ज्यान मार्‍याको. पनि रहेनछ. अरू मुडिन्या षत् वात्हरू पनि केहि गर्‍याको रहेनछ. वजिर भारादारका रिस् रागमा परी मुडियाको रहेछ. र मुडिदामा. अभक्ष समेत् षुवायाको रहेछ भन्या. तेस्ताले भातको पतिया पाउदैनन् पानिको पाउछ पानिको मात्र पतिया दिनु. मुडियाको भन्या हुं अभक्ष षुवायाको होइन. पतिया पाउं भंन्यालाइ. अघि मुडिदा. अभक्ष षुवायाको रहेछ रहेनछ भनि भारादारहरूले तजविज गरि. अभक्ष षुवायाको ठहरेन भन्या. पतिया पाउंछ. मानिस् हेरि औवल्लाई २५ दोयंम्लाइ १२॥ सिम्लाई ६ चहारलाई ३ रूपैया का दर्ले गोदान लि धर्माधिकारले भात पानिको. पतिया गराई दिनु. प्रायश्चित्त. गरि जात भाईमा मिल्छन्.

२५. छोई छिटो हालनु पर्न्या जात वाहेक हाड गोत्र र. तल्लो छोइ छिटो हालनु नपर्न्या जातसंग भात पानि नषाई. करणि गर्न्या व्राम्हण रजपुत क्षत्रिय तागाधारिका महल् १ मासिन्या पानि नचलन्या. जातले उपल्लो व्राम्हणी सम्मको गोत्रि नाता गोतामा करणि गर्न्या. महल् २ आफ्ना प्रतिव्रता स्वास्निको उपाध्याजैसि व्राम्हणलाई जार हांन्या महल ३ राजकाजमा मुडिन्याको महल ४ एति चार तरहका तक्सिर.वालाहरू इनहरूका मुषमा दाग लाग्याको रहेनछ अक्षर षोदियाको रहेनछ. भन्या आफ्ना सर्कारको. परचक्रिसंग लागि पर्दा. सर्कारका काजमा लडि देहांन्त प्रायश्चित्त गरि मरौला भनि सस्त्र चल्याका. ठाउमा पुगि जुद्ध गरि. लडचा भन्या धर्माधिकारवाट पतिया दिनु ७ पुस्तासम्मका हाडमा पर्न्यालाई तक्सीरमाफ पानि चल्छ. भात चल्दैन. अरू थोकको तक्सीर गर्न्यालाई भात पानी चल्छ.

२६. छोई छिटो हालनु पर्न्या नपर्न्या साना जातसंग विरांभै मुषमा जातका अक्षर षोदियाका दामल्का. अक्षर. षोदीयाका छोइ छिटो हालनु पर्न्या जात र. पानि नचलन्या जातसित पानि

चलन्या जातले करणि गरि अैन वमोजिम अंस सर्वस्व गरि पानि वाहेक भयाका. पानि नचलन्या छोया छिटो हालनु पर्न्या नपर्न्या जातका हातको जानि जानि भात पानि षायाका यति तरहका दाग लाग्याकाले. जात भात पाउदैन. लडाञिमा सस्त्र चल्याका ठाउमा पुगि लडयामा. पनि जात भात पानि. पाउदैनन्. तक्सीर माफ.

२७. चार वर्ण छतिसै जातले दामल हुन्या तक्सीर गरि. मुषमा षोदि दामल भयाका लोग्न्या स्वास्नि कोहि भागि गै. तिनैवाट जन्म्याका संतान्. पातकि जात हुंछ तिनले पानि नचलन्या जातका हवन्.वा. छोया छिटो हालनु. पर्न्या जातका स्वास्नि हउन्. तिन्मा आफ्ना राजिवाजिसित उन्का भात पानि वचाई. लैगया भन्या. षत वात लाग्दैन. पानि चलन्या गैह्र जातका. स्वास्नि लैजान्यालाई. छिटो हालनु पर्न्या जातले लैगयामा जो सजाय हुन्छ सोहि वमोजिम सजाय गर्नु.

२८. चार वर्ण छतिसै जातका करणि सवंधी र. घटि जातको भात पानि षायाको कुरा देषि जानि उन्का हातको भात पानि. षायेछ. अरूलाई वोऱ्याको रहेनछ भन्या जौन जातका हातको भात पानि षायाको छ उसै जात्मा मिलाइ दिनु. दंड सर्वस्व हुदैन आफुले भात पानि षाई अरू दुनिञालाई पानिमा र. भताहालाई भातमा वोरेछ भन्या. अैन वमोजिमको अंस सर्वस्व गरि. उसै जात्मा मिलाई दिनु. उस्की स्वास्निले भोरमा करणि दिछ. छोरा परियारले भात पानि षायाका रहाछन् भन्या भोरको पतिया गराई दिनु स्वास्निले जानि जानि करणि गरायाको रहेछ भन्या र. अरूले जानि जानि तेस्का हातको. भात पानि षायामा १२ वर्ष उभोकालाई तेसै जात्मा मीलाई दिनु १२ वर्ष मनिका अजान वालषलाई. पतिया गराई. दिनु. घरका मुष्य कारणिको सर्वस्व भया पछि. अरू जाहान्को सर्वस्व हुदैन. मासिन्या जातले. आफुले. भात पानि षाई आफ्ना भताहालाई. भात्मा र. अरूलाई पानिमा वोऱ्याको रहेनछ भन्या. उसै जात्मा मिलाई दिनु. दंड सर्वस्व हुदैन भताहालाई. भातमा र. अरूलाई. पानिमा वोरेछ भन्या. जात वाहेक गरि. उसै जात्मा मिलाई मासि दिनु. स्वास्निले भोरमा करणि दिछ. छोरा परियारले भात पानि षाया छन्भन्या भोरको पतिया गराई दिनु. स्वास्निले जानि जानि करणि गराईछ. अरूले तेस्का हातको जानि भात पानि. षायेछन्भन्या. १२ वर्षदेषि उभोकालाई. तेसै जात्मा मिलाई दिनु १२ वर्ष मनिकालाई पतिया गराई दिनु. मुष्य कारणि मासिया पछि. अरू जहान्. मासिंदैनन्.

२९. तागाधारि लगायेत् चार वर्ण छतिसै जात गैह्र मानिसहरु देस पर्देस गयामा वेरामी भै घा लागि. लोटि जनावरले हानि. टोकि साह्रै थलि आफ्नु समर्थ. नचल्यामा र. असष. भयाका वेलामा. आफ्नु जात मिल्दो. कोहि नभयाका जगामा. परदेसमा आफु भन्दा घटि जातका हातको भात पानि नचलन्या जातका हातको पानि षायो समर्थ चल्या पछि. मलाई साह्रो वेराम भै असष भयामा फलानाका हातको. भात पानि षाञा भनि. आफैले जाहेर गर्न आयो भन्या. आफ्नु समर्थ नचल्न्याका वषत्मा र. जात मिल्दो कोहि नभयाका जगामा उपकार निमीत्त. षुवायाको हुनाले. षुवाउन्यालाई षत वात लाग्दैन. षान्यालाई प्रायश्चित्त दिनु असषमा षायाको. आफैले जाहेर गरेछ. प्रायश्चित्त. नभै मरेछन् भन्या. उस्का भाइ छोरा परियारले पनि प्रायश्चित्त पाउछन्. असष भयाकामा आफु भंदा कंम् जातका हातको. भात पानि षायो षान्या षुवाउन्या दुवैले जाहेर गऱ्यानन् दवायाका कुरा. अर्केवाट जाहेर भयो भन्या जाहेर नगऱ्याको हुनाले षुसिले षायाको ठहर्छ. षुवाउन्यालाई २० रूपैया दंड गर्नु. षान्याले पतिया पाउदैन नदिनु. आफुले षाई अरूलाई भातमा वोरेछ भन्या ४० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम्कैद गर्नु.

३०. कसैका वावु आमा पानि नचलन्या जात. छोइ छिटो हालनु पर्न्या जातसित करणि गरि भयो भात पानि षाई भयो पतित भै उसैका जात्मा. मिल्याका रहाछन् र. वावु आमा नविग्रदै. अघि जन्म्याका छोराछोरि पनि वावु आमासितसंग रहि भात पानि षायाका रहाछन् र. तेस्ता केटाकेटिका.मावली दाज्यू भाई. इष्टमीत्रले १२ वर्षसम्ममा. इ सद्य छदा जन्म्याका हुन्. इनलाई पतिया दिया भात पानि मालिन्छौ भनि भंन्न आया भन्या तिनलाई प्रायश्चित्त गराई दिनु. वारिस् कोहि रहेनछं भन्या १२ वर्ष देषि १६ वर्षसम्म ज्ञान पस्या पछि वावु. आमादेषि भात पानिमा. फरक रहि वस्याका र. हामि अज्ञान वालष थिञूं हामिलाई पालन्या कोहि ननिसकदा. वावु आमासित भजि. रहाका थिञ्यूं प्रायेश्चित्त पाउन्या हुं भनि कराउन आया भन्या ति अजान मा षान्या ठहर्छन्. एस्तालाई. अदालत ठाना अमालमा भंन्न आया भन्या पनि अथवा भंन आयानन्. अरूले थाहा पायाको भया पनी. तहकित गरि प्रायेश्चित्त गराई दिनु. १६ वर्ष नाघ्या पछि पनि भात पानिमा भजि रहाकाले पतिया पाउदैनन्. इ प्रायेश्चित्त पाउन्या हुं भनि विग्ऱ्याको वेहोरा जानि जानि पानि चलाउन्यामा पुर्जी गरि दिन्या मुष्य कारिंदा जोहो उस्को.अैन वमोजिमको अंस सर्वस्व गरि. तागाधारिको जनै झिकि. अरूलाई तैसै उसै. जात्मा

मिलाई दिनु. अरू पानि चल्न्या हो भंन्या. थरि मुषियालाई. २०।२० रूपैया कचहरिमा वस्न्या भलामानिसलाई ५।५ रूपैया दंड गर्नु. कचहरिमा नवस्याकालाई दंड केहि पर्दैन भात पानि षान्या भताहा र. तेहि पानि चलाउन्याका जहानलाई. हामिलाई पतिया हवस्. यस्ता सित मिल्दौन भनि. भन्या पतिया गराइ दिनु.

३१. उपाध्या व्राम्हणदेषि. तागाधारि. जात गैह्रले आफुलाई. जन्माउन्या आमा र. आफुले जन्मायाका छोरि वाहेक. आफ्ना हाडनाता. मा करणि गरि मुडियाका र. अरू राजकाजमा मुडियाका पतिया नभै इनै पातकिवाट जन्म्याका संतान्. ले पानिको पतिया पाउंछन्. नमासिन्या शुद्र जात हुंछन्.

३२. चार वर्ण छतिसै जात गैह्रका १२ वर्ष नाघ्याका लोग्न्या मानिसले छोइ छीटो हालनु पर्न्या जातमा र. पानि नचलन्या जातमा. आफ्ना हाड नातामा करणि गर्‍याको रहेछ. अभक्ष नरक गैह्र षायाको रहेछ. गाड मरायाको रहेछ. र त्यो कुरा जाहेर नभै. आफ्ना जातका कुटुम्वले छोरि वीहा गरेछ. विहाभै सकिया पछि येति गैह्रमा १।२ उपध्र. गर्‍याको जाहेर भयो भन्या. तेसकेटाले विहा गर्‍याकि स्वास्निले. म तेस लोग्न्यासित जाँन तेस्का हातको भात पानि पनि षांन भनिभन्या.छोराछोरि गर्भ रहेनछ भन्या भात पानिको पतिया पाउंछ. छोरा छोरि भयाका गर्भ रहाको रहेछ भन्या पानिको मात्रै पतिया पाउंछे. आमाका पतियाले छोरा छोरि स्मेत् को पानि चल्छ. यो स्वास्नि पछि अरुसित. विग्रि भन्या विवाहिता लोग्न्याले. जार काटन पाउदैन. काट्यो भन्या ज्यानको वदला ज्यान हुंछ.

३३. तागाधारि जातले भात नचलन्या कम जातका हातको वा. भांसाछोया पछि उसै भांसामा षिर वाहेक दाल भात जानिजानि षायेछ भन्या तेसले पतिया पाउंदैनन्. नदिनु. भात नचलन्या कमि जातका. हातको वा. घटि जातले छोयाका भांसामा दाल भात षाई. भताहालाई वोरेछ भन्या. अैन वमोजिम अंस सर्वस्व गरि जौना जातले छोयाको षायाकोछ. उसै जात्मा मिलाई दिनु. भातको पतिया पाउंदैन.

३४. उपाध्या व्राम्हण वाहेक. अरू तागाधारि र. मतवाली जात गैह्रले जात मिल्दा. भताहाका कंन्या ल्यायाको रहेछ भन्या. त्यो कंन्या. दिक्षा हुन्याले दिक्षामंत्र दिलाई. कंन्या ल्याउन्या र. कंन्या ल्याउन्याका दाज्यू भाईलाई. भात षानाको कर लाग्छ. षायानन् र. अदालत ठाना अमालमा

फिराद गर्न आया भन्या. अदालत ठाना अमालवाट १०।१० रूपैयाजरिवाना गर्नु तेस्ता कंन्याको हातको भात षान लाउनु. जात भात मिल्दा. भताहाका विधवा ल्यायाका र. जारि गरि ल्यायाका. स्वास्निका हातको भताहाले भात् षांन्नौ भन्या कर लाग्दैन. अंस गर्दा ५ षंडमा सद्यले ३ भाग षाया यस्तालाई २ भाग अंस दिनु.

३५. वांम्हण लगायेत्. तागाधारि जात र. दिक्षा लिन्या मतवालि जात गैह्रले. मंत्र सुन्दा आफ्ना पिता पुर्षादेषि चलि आया वमोजिम गुरूले दियाका मंत्र सुंनु. जपनु. आफ्ना पुर्षादेषि चलि आयाको. मंत्र नजपि. वौध मार्ग नास्तिक मत्. झंन्ना पंन्नाको मत् गैह्र लिन्यालाई ५० रूपैया दंड गर्नु. झन्ना पंनाको आफुले भात पाई. अरूलाई पनि वोऱ्याको रहेछ भन्या. अैन वमोजिमको अंस सर्वस्व गरि. जनै झिकि जात पतित गराई दिनु.

३६. व्राम्हण रजपुत तागाधारि. क्षत्रि जात गैह्र. गृहस्थ धर्ममा रहाकाले मंत्र. सुंदा गृहस्थ धर्म छोडयाका संन्यासि वैरागि नानक. कान फट्टा जोगि जंगमसेवडा गैह्र भेषधारि सित. गुरू मानि दिक्षा मंत्र नसुंनु. एस्ता भेषधारिलाई गुरू मानि दिक्ष्या मंत्र सुन्या. गृहस्तिलाई ५० रूपैया दंड गर्नु. भात स्मेत् षाई अरूलाई. वोऱ्याको रहेछ भन्या भातमा वोर्न्याका अैन वमोजिम सजाय गर्नु. गृहस्त धर्ममा नरहाका लोग्न्याले हवस्. स्वास्निले हवस्. भेषधारि सित मंत्र सुन्या वात लाग्दैन.

३७. जनै नपाउन्या जातले जात ढांटि ठुलो जात हुं भनि आफ्नै मुलुकमा छदा जनै लायेछ. भन्या पनि अथवा. विराना मुलुक्मा गै जनैलाई आयेछ. भन्या पनि जनैलाई भात्मा वोरेछ भन्या नमासिन्या जातले भया. अैन वमोजिम. को अंस विहा षर्च परसारि उस्को अंस सर्वस्व गरि लि जनै झिकि १ वर्ष कैद गरि छाडि दिनु. मासिन्या जात भया जनै झिकि मासि दिनु. भोरमा पर्न्यालाई पतिया गराई दिनु. आफ्नै मुलुक्मा वसि जनै मात्रै लायेछ. भातमा कसैलाई वोऱ्याको रहेनछ. भन्या ६० रूपैया दंड गर्नु. विराना मुलुक्मा गै. जनैलाई आयेछ. भातमा वोऱ्याको रहेनछ भन्या २० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या मैन्हाका ५ रूपैयाका दर्ले कैद गर्नु.

३८. मुसल्मान्नि म्लेछनि. कुसल्यानि कसाहिनि. कलवार्नि धोविनि कुलुर्नि गैह्र छोया छिटो हालनु नपर्न्या. पानि नचलन्या जातका स्वास्निसित. करणि भन्या भयाको पानि भन्या षायाको रहेनछ र. तेसैले आफ्ना स्वास्निसित गै जन्म्याका संतान्. रहा छन् भन्या वावुका पतियाले. शुद्ध हुंछन्.

३९. तागाधारि जात गैह्रका हाडमा र. नातामा करणि गराई. उसै षत्मा जात पतित गरि नमासिन्या शुद्र जातमा मिलायाका मानिस्का पातकि. स्वास्निका पतित भया पछि. उसै पातकि लोग्न्यावाट. जन्म्याका संतानले जनै पाउंदैनन्. नमासिन्या शुद्र जात हुंछन् पानि चल्छ.

४०. व्रांम्हण वाहेक तागाधारि जातले जात मिल्दाका कंन्या विधवा स्वास्निवाट जन्म्याका छोरिको गोडाधोई पानि षान हुंछ. भात षाजा नचलन्या जातका. स्वास्निवाट जन्म्याका छोरिको हात धोई पानि षान्यालाई षत लाग्दैन गोडाको पानि षान्याहरूलाई २॥ रूपैया दंड गरि आठ आना लि. प्रायश्चित्त गराई दिनु. तागाधारि मतवालिका वेस्या र नमासिन्या मासिन्या गैह्र पानि चलन्या जातका स्वास्निवाट जन्म्याका छोरिको गोडा धोई पानि षान्यालाई. ५ रूपैया दंड गर्नु. १ रूपैया गोदान लि पतिया गराइ दिनु.

४१. उपाध्या व्रांम्हणले उपाध्याका विधवा लगायेत् तागाधारि जातका छोरि कंन्या विधवा विहा गरिल्यायाका हउन्. उसै ल्यायाका हउन्. तिंन्वाट जन्म्याका छोरिको विहा गर्दा. वावु दाज्यू भाई. इष्ठ मित्रहरूले. दुलहा दुलहिका. हात सम्म धुनु हुंछ. हात धोई पानि षान्यालाई. षत लाग्दैन. गोडा. धोई पानि षान्यालाई २॥ रूपैया दंड गरि ॥ गोदान लि प्रायेश्चित्त गराई दिनु. तागाधारि मतवालि जातका वेस्या र. नमासिन्या मासिन्या गैह्र पानि चलन्या. जातका स्वास्नि पट्टि. जन्म्याका छोरिको गोडाधुई पानि षान्यालाई. ५ रूपैया दंड गर्नु १ रूपैया गोदान लि प्रायेश्चित्त गराइ दिनु.

४२. व्रांम्हण जातले तागाधारि लगायेत् पानि चलन्या. सम्मका गैह्र जातका हातको टिको लाउनर उनले संकल्प गरि दियाको वा. उसै दियाको सिधा दक्षिना गैह्र. लिन हुंछ लिन्या दिन्या गैह्रलाई वात लाग्दैन. पानि नचलन्या जात र. छोया छिटो हालनु पर्न्या जात गैह्रका हातको

टिको लाउन र. संकल्प गरि वा. पानि पारि दियाको सिधा दक्षिना गैह्र. केहि लिन हुदैन. यस्तो लिन्यालाई विगो समेत. जफत गरि २० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु. पानि नचलन्या गैह्र जातले. संकल्प नगरि दियाको र. पानि नपऱ्याको चोषो अंन्न. दक्षिना जगा जमिन्. ज्यू गैह्र चोषो कुरो. लिन्या र. दिन्यालाई षत वात लाग्दैन.

४३. पानि चलन्या जात गैह्रले पानि नचलन्या अछुति जातका. हातको टिको लायो भन्या टिका लाईदिन्या र. टिका लाईमाग्न्या दुवैलाई ५।५ रूपैया दंड गर्नु. टिको लाईमाग्न्या उपल्लो जातलाई ॥. गोदान ली पतिया गराई दिनु.

४४. उपाध्या भनि जात छपाई. अर्कालाई गोडाको पानि षुवाउन्या जैसिलाई ६ मैन्हा अरू जातलाई १८ मैन्हा कैद गर्नु. यस्तालाई म्यादका रूपैया दिया पनि कैद नपुऱ्याई नछाडनु. डवल दिया लि छाडि दिनु.

४५. उपाध्या भनि जात छपाई. टिकालाई पुजाउन्या जैसिलाई ४ मैन्हा अरू जातलाई १२ मैन्हा कैद गर्नु म्यादका रूपैया दिया अैन वमोजिम लि छाडि दिनु.

४६. तागाधारि जात गैह्र कसैले भान्सामा पकायाको. भात गैह्र व्याहान पकायाको रात पऱ्या पछि हवस्. राति पकायाको उज्यालो भया पछि हवस्. वा पकाउन्याले भान्सा कुह्नाको हवस् वा छोडयाको हवस्. त्यो भांसा भात नचलन्या. अरू कसैले छोयाको रहेनछ. भन्या भात षान्यालाई. पतिया पनि पर्दैन दंड पनि हुदैनन्. जातैमा रहंछन्.

४७. गोठमा पकाई ल्यायाको र. वासि षिर छोयो. षान नहुन्या जात गैह्रलाई. छुवाई आफ्ना मिल्दा जातले अलग पकाया ल्याया राष्याको. षान्यालाई पतिया पनी पर्दैन. दंड पनि हुदैन. जातैमा रहंछन्.

४८. तागाधारि जात गैह्रले छोयाको आफुले षान हुन्या जातले छाला वाहेक लवेदा सुरूवाल् लगाई. पकायाको भात षाया. पनि आफुले छाला. वाहेक लवेदा सुरूवाल् लगाई. षायो भन्या पनि. पकाउन्या षान्यालाई. पतिया पर्दैन दंड पनि हुदैन जातैमा रहंछन्.

४९. सम्वत् १९१७ साल पौष सुदि १ रोज ७ मा भयाको गोर्षा भरमुलुक मध्येस जिल्ला मोरंमा रहन्या. मेच्या जातले भैसि सुगुर कुषुरा. षान्या हुनाले. मोगलानियाहरूले पानि षादा रहयानछन्. र. हाम्रा मुलुक्मा पनि मेच्या जातको पानि षादां. रहयानछन्. अव इ मेच्या जातको. पानि चलन सकछ कि सक्दैन भनि भारादारि कौसलहुदा. हाम्रा मुलुक्मा भैसि सुगुर कुषुरा. गाई हातिको मासु षान्या. नेवार मगर गुरूँ भोटचा लापच्याका हातको पानि. हाम्रा मुलुक्मा चल्याको छ इ मेच्या जातको. ता अघि पनि चल्याको रहेछ. इनको छोराछोरि कमारा कमारि. भै दर्वारसम्म पनि. अघि पुग्याका रहया छन्. इनहरूले. पानि नचलन्या अछुति जातका हातको र मुसलमान् जातका हातको पानि पनि षादा रहयान छन्. देउता सिव मान्दा रहयाछन् इनहरू. सिव मार्गि. जात रहयाछन् भन्या इन्का हातको पानि चल्छ. भंन्या भारादारि. कौसलले ठहराउदा. आज देषि. मेच्या जातका हातको पानि चल्याकोछ. पर्वत्या थारू जातमा. जस्ले इ मेच्या जातको पानि षादैन तेस्लाई ५ रूपैया दंडगर्नु. रूपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु.

५०. अव उप्रान्त तागाधारि षस जातलाई क्षत्रि जात भन्या इलकाप वक्सी यो कागजपत्र हरूमा लेषनु पर्दा पैल्हे नाउ लेषि. उन्को थर लेषनु. वाहा पछि क्षत्रि भन्या इलकाप लेषनु.

५१. वेहक्मा मानिसको ज्यान माऱ्या वावत् दामल हुनु पर्न्या स्वास्निमानिस र नकाटिन्या जातका लोग्न्यामानिसलाई फलानाले फलानाको ज्यान माऱ्या कोछ भन्या कुरो अदालत ठाना अमाल कचहरिमा परि कायेल भै पानि वाहेक मात्र भयाको रहयाछन् अक्षर षोदीयाका रहेनछ. तेस्तालाई पतिया गराई दिन्या अदालत ठानाका हाकिम अडा गौडाका भारदार डिट्ठा विचारि अमालि द्वाऱ्या मुषिया. जिम्मावाल पतिया दिन्या धर्माधिकार. जो हो उसलाई. आफुले. तेस्ताका हातको भात पानि षायाको रहेनछ. भन्या ५० रूपैया दंड गरि छाडि दिनु. आफुले. पानिमात्र षायाको रहेछ भन्या. ६० रूपैया दंड गरि पानिको पतिया दिनु. आफुले भात. षायाको रहेछ भन्या. ५० रूपैया दंड गरि. जनै हुन्याको जनै झिकि जनै नहुन्या जातलाई. तेसै जात पतित गरि छाडि दिनु. आफुले भात षाई. अरू भताहालाई. भात्मा वोरेछ भन्या. अैन वमोजिमको अंस सर्वस्व गरि. जनै हुन्या जातको जनै झिकि. जनै नहुन्या जातलाई. तेसै जात पतित गरि छाडि दिनु. कचहरिमा वस्या मानिसहरूलाई. तेस्ताका हातको भात पानि.

जानिजानि. षायाका रहयाछन्. भन्या हाकिमले चलाउदा. षायाको हुनाले भात षायाको रहेछ भन्या ३० रूपैया पानि षायाको रहेछ भन्या २० रूपैया दंड गरि भात पानिको पतिया गराई दिनु. हाकिमले पतिया नदि जानिजानि आफु आफुले मात्रै पानि षायाको रहेछ भन्या. षान्यामा मुष्य जो हो. उसलाई ५० रूपैया अरूलाई २० रूपैया दंड गरि पानिको पतिया दिनु. भात षायाका रह्या छन् भन्या मुष्य जो हो उसलाई ५० रूपैया दंड गरि. जनै हुन्याको जनै झिकि. जनै नुहन्या जातलाई. तेसै जात पतित गरि छोडि दिनु. आफुले लेषाई. अरूलाई भात पानिमा वोरेछ भन्या. अैन वमोजिमको सर्वस्व गरि. जनै हुन्याको जनै झिकि जनै नहुंन्यालाई. तेसै जात पतित गरि छाडि दिनु. अरूले जानि जानि षायाको रहेछ भन्या. मुष्यको सजाय भया पछि. अरूको जात जादैन ३० रूपैया दंड गरि भातको पतिया गराई दिनु. भोरमा भात पानि षान्याहरूलाई. भात पानिको पतिया गराई दिनु. दामल हुनु पर्न्या मानिस पक्रिया पछि अैन वमोजिम दामल गरि दिनु.

५२. कसैले कसैलाई. जात भात जान्या कुरो. पोल्योवाट लाग्न्या मानिस कायेल भयाको थियेन. तेस्तैमा. कायल नहुन्याका हातको. भात पानि कसैले षायेछ र. पछिवाट उहि पोल्याका कुरामा कायेल भयो भन्या. कायेल भयाको छैन. भनि कायेलनामा नहुदै. षायाको हुनाले भात षान्यालाई. ३० रूपैया पानि षान्यालाई १० रूपैया दंड गरि. पतिया गराई दिनु.

५३. मुडिन्या तक्सीर गरि. मुडि भात पानि वाहेक भयाका कसैले धर्माधिकारको पतिया ढाटि लीफा चोरि. किर्त्या विहोरा गर्‍याको पतिया देषाउदा. थाह नपाई त्यो पतिया सद्य होला भंन्या ठहराई तेहि. पतिया देषता कसैले भात पानि षाया छन् भन्या. पतिया देषि वेहोरा नवुझि. षायाको ठहर्नाले जात जादैन. भात वाहेक. हुन्याका हातको भात षायेछ भन्या २० रूपैया. पानि वाहेक हुन्याका हातको पानि षायेछ भन्या १० रूपैया दंड गरि पतिया गराई दिनु.

५४. १२ वर्ष मनिका कर्मचल्याका तागाधारि. गैह्रका लोग्न्या स्वास्नि मानिस कसैले जात जान्या अभक्ष षाया वावत् भात वाहेक भै रहयाका जाया जन्मसमेत भयाका कोहि पतिया नभै मरेछ र. कृया शुद्धको पतिया गरि.काजकृया गर्‍याको रहेछ. पछि तिन्का संतान हउनु वा. उन्का. अरू आपस्त कोहि आई. फलानाकोता १२ वर्ष मनिका उमेरमा जात जान्या. फलानु कुरो

षांदा भात वाहेक भयाका हुन्. पतिया हुन नपाउदै.मा मर्न जांदा कृया शुद्धको पतिया गराई काजकृया भयाको.हो यतिका विहोरामा इन्का छोराछोरि. को जात जान्या होईन. भात चलन्या हो भनि कराउन आया. यो कुरो जांन्या तिन्का भताहा भलामानिस्. अमालिहरूले पनि इन्का वावु आमाले. १२ वर्ष मनिका वालषैका उमेरमा. षाया को हो. १२ वर्ष नाघ्या पछि षायाको होइन भनि. मुचुल्का लेषि दिया भन्या. मुचुल्कालि. ति वालषहरूलाई. आमा वावुको कृया शुद्ध. को पतिया भया पछि पतिया गर्नु पर्दैन जात विसेषको व्रतवंध विवाह. आदि कर्मले शुद्ध हुंछन्. एस्ताको जात जादैन भात चल्छ.

५५. अडा गौडा अदालत ठाना अमालका हाकिम डिट्ठा विचारि अमालि द्वाऱ्याले तागाधारि. लगायेत् पानि चलन्या सम्मका चोषा जात कसैले. पानि नचलन्या छोया छिटो हालनु पर्‍या. गैह्र जातका हातको. भात पानि षायाका र. करणि गराया वावत्. अघिका हाकिमले पानि नचलन्या ठहराई. पानि वाहेक गऱ्याकालाई. जाल साज गरि वा. अघिका कायेल नामा जमानवंदी. दवाई एस्को. पानि चलन्या रहेछ भंन्या झुट्ठा कुराको लाल मोहोर दस्षत्. पतिया चिट्ठि पुर्जि गराई. हवस् वा मैले. सनद गरायाको छ. मैले साधक गऱ्याको छ भनी. सर्कार नसाधि. उसै पानि चलायाको रहेछ र. पछि कुरो वुझदा. अघि कायेलनामा जमानवंदि गराउन्या हाकिम गैह्रले गरायाको कुरो सदर ठहऱ्यो पानि नचलन्यै ठहऱ्यो भन्या. पानि चलाउन्यामा. कचहरिका हाकिम. द्वाऱ्या जो हो उस्ले उसैका हातको. पानि आफुले षायाको रहेनछ भन्या जात जादैन. ५०० रूपैया मात्र दंड गरि छाडि दिनु. पानि चलाई आफुले स्मेत् उसैका हातको. पानि षायाको भन्या ५०० रूपैया दंड गरि जनै हुन्या जातको जनै झिकि. जनै नहुन्या जातलाई. तेसै भात पानि वाहेक गरि छाडि दिनु दंडका रूपैया नतिऱ्या मैन्हाका ५ रूपैयाका दर्ले कट्टि नहुंज्याल्. कैद गर्नु. पानि चलाउन्या हाकिमले. उसैका हातको. पानि षायाको रहेनछ.अरूका संसर्गवाट षायाको.ठहऱ्यो भन्या जात जादैन.पतिया दिनु.

५६. यो दामल भयाको हो. पानि नचलन्या. जातका हातको. पानि षुवाई जात वाहेक. गऱ्याको हो. पानि नचलन्या जातका हातको भात पानि षान्या र. करणि गर्न्या गराउन्या हो भनि. जानिजानि तेस्ताका हातको. भात पानि षान्या जो हो उसैले. आफ्ना हातवाट अरूलाई. स्मेत्वोरेछ भन्या. अैन वमोजिम अंस सर्वस्व गरि. अरूलाई वोऱ्याको नभया. सर्वस्व नगरि.

उसै जात्मा मिलाई छाडि दिनु. यस्ताका हातको भोरमा भात पानि षान्या भताहा दुनित्रालाई भोरको पतिया दिनु दंड पर्दैन.

५७. यो दामल भयाको हो पानि नचलन्या जातका हातको पानि षुवाँई जात वाहेक गऱ्याको हो पानि नचलन्या जातका हातको भात पानि षान्या र. करणि गर्न्या गराउन्या हो भनि जानिजानि पुर्जि पतिया गरि दिन्या. हाकिम अमाली धर्माधिकार जो हो. उसले पुर्जि पतिया गरि. गराईमात्र दियेछ. आफुले भन्या तेस्का हातको भात पानि. षायाको रहेनछ भन्या. जात जादैन. ५००रूपैया दंड गरि छाडि दिनु. आफुले पुर्जि पतिया गरि गराई दि. आफुले स्मेत् तेस्ताका हातको. भात पानि षाई. अरूलाई स्मेत् वोरेछ. भन्या अैन वमोजिम. सर्वस्व गरि. अरूलाई वोऱ्याको रहेनछ. भन्या सर्वस्व नगरि उसै जात्मा मिलाई छाडिदिनु. यस्ताका हातको भोरमा भात पानि षान्या भताहा दुनित्रालाई. भोरको पतिया गराई दिनु. दंड पर्दैन दामल पक्रिया पछि दामलै गरि दिनु.

५८. यो दामल भयाको हो भनि. पानि नचलन्या जातका हातको पानि षुवाई. जात वाहेक गऱ्याको हो पानि नचलन्या जातका हातको भात पानि षान्या करणि गर्न्या गराउन्या. हो यस्ताका हातको भात पानि षाया जातजांछ. भनि थाहा नपाई कसैले. भात पानि षायेछ भन्या. थाहा नपाई षान्या भोर ठहर्छ तेस्तालाई. भोरको पतिया गराई दिनु. दंड पर्दैन. भोर पारि भुक्याई. आफ्ना हातवाट. अर्कालाई भात पानि षुवाउन्या दामल पक्रिया पछि दामलै गरि दिनु.

५९. पानि नचलन्या छिटो हालनु नपर्न्याजातका. स्वास्निको जानिजानि करणि गरि भात पानि षान्या वा. उसै जानिजानि भात पानि. मात्रै षान्या लोग्न्या. मानिसले आफुले करणि स्मेत् गरि वा. उसै भात पानि षायाको जाहेर नगरि अरू आफ्ना विवाहता वा. ल्याईता वेस्या गैह्र. स्वास्निको करणि गरेछ वा. आफ्ना हातको भात पानि षुवायेछ र. पानि नचलन्या एस्ता. जातको लोग्न्याले करणि गरि वा. उसै भात पानि षायाको थाहा नपाई. भोर्मा आफ्ना लोग्न्यालाई करणि दिन्या वा भात पानि षान्या स्वास्निको गर्भ रहयाको रहेनछ भन्या. भात पानिको पतिया गराई दिनु. जात जादैन गर्भ रहयाको रहेछ भन्या भात चल्दैन. पानिको मात्रै पतिया दिनु. तेस्वाट पछि जन्म्याका संतान्का हातको पनि पानि मात्रै चल्छ. भात चल्दैन. येस्ता. व्रांम्हण लगायेत् तागाधारि. जात्का संतानले. जनै पाउंदैनन्. नमासिन्या शुद्र जात

हु.छन्. मासिन्या मतवालि जातका संतान्. मासिन्या मतवालि जात हुछन्. मासिन्या मतवालि जातका संतान् उस भंन्दा कम मासिन्या जात हुंछन्. आफ्ना लोग्न्याले. यस्ताको करणि स्मेत् गरि वा. उसै भात पानि षायाको छ भंन्या. कुरो थाहा पाई. आफुले उस्का हातको. भात पानि करणि वचाई लाज सर्मलेमात्र. कुरो जाहेर गर्न नसकि. दवाई भोर्मा पर्न्या. अरू भताहा. भात पानिमा वोरियाका. रहयाछन् भन्या. आफुले कुरो थाहा पायापछि दुनिया भातपानिमा पर्न्या कुरो दवाया वापत स्वास्नीलाइ २५ रूपैया दंड गरि. भोर्मा पर्न्यालाई. भोर्को पतिया गराई दिनु.

६०. तागाधारि लगायेत्. पानि चलन्यासम्मका चोषाजात्कसैले पानि नचलन्या र. छोया छिटो हालनु पर्न्या जात र. इनै जात्मा करणि. गरि गराई. भात पानि षाई जात वाहेक भै रहयाका मानिस्का हातको जानिजानि भात पानि षायाको वा करणि गरि गरायाको कुरो उठी कायेलनामा ज्मानवंदि. भै भात पानि वाहेक भयाका हउन्. वा. कुरो उठी. कायेलनामा ज्मानवंदि. हुन नपाई. हामिले फलाना लाई करणि गऱ्या गरायाकोछ. एस्ताका हातको भात पानि षायाको छ भनि आफ्ना मुषले कायेल भै. भात पानि वाहेक भयाका लोग्न्या स्वास्नि मानिस् जो हुन्. उस्लाई उसै ठाउका हउन् वा. इ भात पानि वाहेक भयाका छन्. भनि थाहा पाउन्या अंत जगाका आयाका. हउन्. येस्ता हाकिम डिठ्ठा विचारि. अमालिद्वारा ठेकदार. इजारादार. थरि मुषिया जिम्मावाल मिझाऱ्या गौरूं ज्येठा वुढा चौधरि मुकदम. थानि थरि भला मानिसहरू. मा कसैले अघि भयाका कायेल नामा ज्मानवंदि. नहेरि वा. कायेल मात्र भै भात पानिवाट वाहेक भै रहयाको वीहोरा नवुझि. निच मारि वा. मायामोलाहिजा पछि लागिं वा. जालसाज गरि. अघि भयाका. जमानवंदि कायेलनामा दवाई वा. झुट्टा कुराको लालमोहोर. दस्षत. पतिया चिठ्ठि पुर्जि गरि गराई. वा मैले सहि सनद गराई. ल्यायाको छु. भनि. वा. साधक गरि आयाको छु भनि सर्कार नसाधि वा. भोर हो भंन्या गराई पुर्जि पतिय ागरि गराई भात पानि चलायाको रहेछ. र. पछि कुरो उठि. कचहरिमा परि वुझदा. अघि भयाका ज्मानवंदि. कायलनामासदर ठहऱ्यो. वा. आफु मुष कायल भई. भात पानि वाहेक भई रह्याको कुरो सदर ठहऱ्यो. भात पानि नचलन्यै ठहऱ्यो भन्या पछि. भात पानि चलाउन्यामा पैल्हे चलाउन्यामा मोष्य. अषत्यार जो हुं. भात पानि चलाई. आफुले स्मेत्. एस्ताका हातको र. एस्ताका हातको षान्याका हातको भात पानि जानिजानि षाई. आफ्ना हातवाट. घरका जहानलाई र. अरू. भताहालाई वोरेछ भन्या. अैन वमोजिं सर्वस्व गरी जनै हुन्याको जनै

झिकि जनै नहुन्याजातलाई त्यसै भात पानि वाहेक गरि. उसै जातको १ अक्षर षोडि उसै जात्मा मिलाई छाडि दिनु. आफुले मात्र षायेछ घरका जहानलाई. र भताहालाई. वोऱ्याको रहेनछ भन्या. अक्षर षोदनु सर्वस्व गर्नु पर्दैन. जनै हुन्याको जनै झिकि जनै नहुन्या जातलाई. तेसै उसै जात्मा मिलाई छाडि दिनु.एस्ताका हातको र. एस्ताका हातको षान्याका हातको. भात पानि जानिजानि षायाको रहेनछ भन्या जनहि.५०० रूपैया दंड गर्नु. जात जादैन. दुनिञा भात पानिमा पर्न्या कुरामा अघिका हाकिम अमालिले चलायाठ्या तापनि आफुले सुन्या जान्या पछि. पक्रि जस्ताको तस्तो निसाफ गरि. भात पानि वाहेक गर्नु पर्न्या कुरामा निच मारि माया मोलाहिजा पछि लागि एकै मुद्दाका एस्तै अरूलाई पछिवाट भात पानि चलाउन्या अमालि हाकिम. जो हुँ उनलाई. अघिका हाकिम अमालीले चलायाको हुनाले. पछि भात पानि चलाई. भात पानिमा पर्न्या. जति जनाछन्. उनलाई जनहि २५० रूपैया दंड गरि पातिया दिनु. जात जादैन हाकिम अमालिहरूले. चलायाथ्या तापनि एस्ताका हातको. भात पानि चल्दैन भंनु पर्न्या.मा हाकिं अमालिको पुर्जि पतिया भया पछि. अघि भात पानि चल्याको थियेन. तापनि. हाकिमलाई क्या होला भंन्या ठहराई. इन्को भात पानि चल्छ. भनि ज्मानवंदि लेषन्या. षान्या. एस्ताको. भात पानि चल्छ भनि ज्मानवंदि लेषि. उसै भात पानि चलाउन्या. षान्या अरू थरि मुषिया. जिम्मावाल् भला मानिस्. गैह्र कचहरिमा वस्न्याहरूलाई. पतिया पुर्जि देषी इन्का हातको वा. इन्का हातको षान्याका हातको भात पानि षायाकामा जात जादैन. मुषिया जिम्मावाल् थरि मिझाऱ्या गौरूं ज्येठा वुढा चौधरि. महत्तौ ठेकदार. इजारादार थानि थरिहरूमा. भात पानि चल्छ भनि ज्मानवंदि लेषि सहि हालन्यालाई. जनहि १०० रूपैया भात पानि चल्छ भनि. मुषलेमात्र भनि. चलाया छन्. सहि हाल्याका रहया नछन्भन्या. जनहि. ५० रूपैया दंड गर्नु. मुषले मात्र भात पानि चल्छ. भंन्या जमानवंदि लेषन्या.हरूलाई जनहि १० रूपैया दंड गरि भात पानिको पतिया दिनु. जात जादैन. भात पानि संवंधका कुरामा जाल साज गरि. एस्ताका हातको भात पानि चल्छ भनि. कागज लेषि. सहि हाल्याका रहया छन्. भात पानि चलनपायाको रहेनछ. तेस्तैमा जाहेर भयो भन्या कागज लेषाउन्यालाई १०० रूपैया कागज लेषी दिन्यालाई ५० रूपैया अरू कचहरिमा वस्न्यालार्य जनहि १० रूपैया दंड गर्नु. विहोरा नवुझि भोरमा गरि भात पानि षान्यालाई भोरको पतिया. दिनु. दंड पर्दैन. दंड नतिर्न्यालाई. अैन वमोजिमकैद गर्नु.

६१. तागाधारि लगायेत्. पानि चलन्यासम्मका चोषा जात कसैले पानि नचलन्या र छिटो हालनु पर्न्या जात र. इनै जात्मा करणि गरि गराई. भात पानि षाई वा. करणि गरि गरायाको कुरो उठि. कायेलनामा जमानवंदि भै. भात पानि वाहेक भयाका हउन् वा. कुरो उठि कायेलनामा जमानवंदि. हुन नपाई हामिले फलानालाई करणि गरि गरायाको छ. वा यस्ताका हात्को. भात पानि षायाको छ. भनि आफ्ना मुषले. कायेल भै भात पानि वाहेक भै. रहयाका लोग्न्या स्वास्नि मानिस् कसैको उसै ठाउका हउन् वा. भात पानि वाहेक भयाका हुन्. भनि थाहा पाउन्या अंतका. आयाका हउन्. येस्ता हाकिम डिठा विचारि. अमालि द्वाऱ्या ठेकदार इजारादार. थरि मुषिया जिम्मावाल्. मीझाऱ्या गौरूं चौधरि. मुकदम्. थानि थरि. भला मानिसहरू कसैले अघि भयाका कायेलनामा ज्मानवंदि. नहेरि वा. कायेलनामा मात्र भै भात पानि वाहेक भै रहयाको विहोरा नवुझि घुस् रोस्षवत् षाई भोर हो भंन्या. गराई पुर्जि पतिया गरि. गराई. भात पानि चलायाको रहेछ र. पछि कुरो वुझ्दा. अघिको जमानवंदि कायेलनामा सदर ठहऱ्यो वा. आफुमुष कायल भै भात पानि. वाहेक भै रहयाको कुरो सदर ठहऱ्यो. भात पानि नचल्न्यै ठहऱ्यो भन्या. पछि घुस षाई. भात पानि चलाउन्यामा. पैल्हे चलाउन्या मोष्य जो जो हुन् उनलाई. भात पानि चलाई. आफुले स्मेत् एस्ताको हातको र. एस्ताका हातको षान्याका हातको भात पानि जानि जानि षाई आफ्ना हातवाट. घर्का जहानलाई र. अरू भताहालाई स्मेत् वोरेछ भन्या घुस्को. विगो जफत गरि. अैन वमोजिम अंस सर्वस्व गरि. जनै हुन्याको जनै झिकि जनै नहुन्यालाई. तेसै भात पानि वाहेक गरि. उसै जातको १ अक्षर. वाञा गालामा षोदि उसै जात्मा मिलाई छाडि दिनु. आफुले मात्रै षायेछ. घरका जहानलाई र. अरूलाई भात पानिमा वोऱ्याको रहेनछ. भन्या अक्षर षोदनु पर्दैन. सर्वस्व पनि हुंदैन. घुस्को विगो मात्र जफत. गरि जनै हुन्याको जनै झिकि जनै नहुन्या जातलाई तेसै. उसै जात्मा मिलाई छाडि दिनु. आफुले एस्ताका हातको र. एस्ताका हातको षान्याका हातको. भात पानि षायाको रहेनछ भन्या. घुस्को विगो जफत गरि जनहि ५०० रूपैया दंड गर्नु. जात जादैन. दुनिया भात पानिमा पर्न्या कुरामा अगी अमालिहरूले चलायाथ्या तापनि. आफुले सुन्या जान्यापछि. पक्रि जस्ताको तस्तो निसाफ गरि. भात पानि वाहेक गर्नु पर्न्या. कुरामा नीचमारि माया मोलाहिजा पछि लागि घुस षाई. यकै मुद्दाका यसै अरूलाई पछिवाट. भात पानि चलाउन्या. अमालि हाकिम जो हुन् उन्हेरूलाई. अघिका हाकिम अमालिले चलायाको हुनाले पछि वाट भात पानि चलाई. भात पानिमा पर्न्या जति जना छन्. उनलाई घुस्को विगो जफत गरि. २५० रूपैया दंड गरि पतिया दिनु. जात जादैन. हाकिम अमालिले चलायाथ्या तापनि.

एस्ताको भात पानि चल्दैन. भंनु पर्न्यामा अघि भात पानि चल्याको थियेन तापनि. हाकिम अमालीको पूर्जि पतिया भया पछि हामीलाई क्या होला भन्या ठहराई इंको भात पानि चल्छ भनि ज्मानवंदि लेषन्या. षान्या वा. येस्ताको भात पानि चल्छ भनि ज्मानवंदि नलेषि उसै भात पानि चलाउन्या. षान्या अरू थरि मुषिया. भला मानिस् गैह्र. कचहरिमा वस्न्याहरूलाई. पतिया पुर्जि देषी इन्का हातको वा इन्का हातको षान्याका हातको भात पानि षायाकामा जात जादैन. मुषिया जिम्मावाल थरि. मिझाऱ्या गौरूं चौधरि महत्तौ. ठेकदार इजारादार. थानि थरिहरूमा भात पानि चल्छ भनि. ज्मानवंदि लेषि सहि हालन्यालाई घुस्को विगो जफत गरी १०० रूपैया भात पानि चल्छ भनी. मुषले मात्र भनि चलाया छन्. ज्मानवंदि लेष्याको रहेनछ. भन्या घुस्को विगो जफत गरि. जनहि ५० रूपैया दंड गर्नु. कचहरिमा वस्याका. अरू मानिस्मा भात पानि चल्छ. भनी ज्मानवंदि लेषि सहि हालन्याहरूलाई. घुस्को विगो जफत गरि जनहि २५ रूपैया दंड गरि. भात पानिको पतिया दिनु. जात जादैन. भात पानि संवंधका कुरामा जालसाज गरि. घुस रोसवत षाई येस्ताका हातको भात पानिचल्छ भनि कागज पत्र लेषि सहि हलाई सक्याको रहेछ. भात पानि चलन पायाको रहेनछ. र. तेस्मा जाहेर भयो भन्या घुस षाई कागज लेषाउन्या. मुष्य जो हो उस्लाई. घुस्को विगो जफत गरि. १०० रूपैया. घुस षाई कागज लेषि दिन्यालाई. घुस्को विगो जफत गरि. ५० रूपैया दंड गर्नु. कचहरिमा वस्न्या अरूलाई घुस्को विगो जफत गरि जनहि १० रूपैया दंड गर्नु. विहोरा चालनपाई भोर्मा परि. भात पानि षान्यालाई. दंड पर्दैन. भोरको पतिया दिनु.

६२. तागाधारि लगायेत् चार वर्ण छत्तिसै जात गैह्रका. स्वास्नि मानिस्कोहि आफुभंदा घटि वढि जात्. आफु मिल्दा जात. पानि नचलन्या जात. छिटो हालनु पर्न्या जातसित करणिमा विग्न्या भनि मुषले. भनि भन्या. रोवकार गर्दा. करणि ठहरेन भन्या पनि वात लायाको मानिस्कायेलनभै मऱ्याको. रहेछ भन्या. पनि कचहरिमा फलानासित करणिमा विग्न्या भनि मुषले वकि कयेलनामा ज्मानवंदि स्मेत् लेषि दि भन्या. त्यो स्वास्नि मुष पतितका अैन वमोजिं मुष पतित ठहर्छे एस्ताका हातको. कचहरिमा कुरो नपर्दै. सम्ममा षान्या. भताहालाई. पतिया गर्नु पर्दैन. जातैमा रहन्छन्. अदालत् अमाल कचहरि.मा कुरा परि ज्मानवंदि कायेलनामा भयापछि एस्ता स्वास्निका हातको जानि जानि भात पानि षान्याले पतिया पाउदैनन्. उहि जात हुंछन्. भोरमा षान्यालाई भोरको पतिया दिनु.

६३. भात पानिमा पर्न्या. कुरामा कायेल मुकायेल भयाका मानिस्का हातको कसैले भात पानि षायाको रहेछ विराव गर्न्या पतिया गरि भात पानिमा चलन्या रहेछ भन्या कारणिले पतिया पाउन्या हुनाले. एस्ताका हातको जानि जानि भात षान्यालई ३० पानि षान्यालाई १० रूपैया दंड गरि भात पानिको पतिया गराई दिनु. विरांव गर्न्याले पतिया पाउन्या रहेनछ भन्या. एस्ताका हातको. जानि जानि षान्याले पतिया पाउदैन. उसै जात्मा मिलाई छाडि दिनु. थाहा नपाई भोर्मा षायाको भया भोर्को पतिया गराई दिनु. दंड पर्दैन.

६४. कोहि लोग्न्या स्वास्नि. मानिसले पानि नचलन्या जातसित जानि जानि करणि गऱ्या गरायाको. र. इनै जात्का हातको जानि जानि. भात पानि षायाको कुरा जाहेर. भै जात वाहेक गराई. भोरमा पर्न्यालाई. अैन वमोजिम प्रायश्चित्त भै सकिया पछि मोलाहिजा पछि लागि. तीनै भात पानि वाहेक भयाका मानिस्को. भात पानि चलाउन्याको मद्दत् गरि भात पानि चलाई. आफुले स्मेत्. उस्का हातको षायेछ भन्या. भात पानि चलाउन्या मोष्यलाई ५०० रूपैया दंड गरि जनै हुन्याको जनै झिकि जनै नहुन्यालाई. तेसै जात वाहेक गरि उसै जातमा मिलाई छाडि दिनु. आफुले षायाको रहेनछ. अरूलाई मात्रै वोराएछ भन्या ५०० रूपैया मात्रै दंड गर्नु. जात जादैन. हाकिम अमालिले चलाया पछि. हामिले एस्का हातको षान हुन्या रहेछ. भनि विहोरा चालनपाई. षायाको भया दंड पर्दैन भोरको पतिया दिनु. ज्मानवंदि कायेलनामा. गराई सहि स्मेत् हलाई सक्याको रहेछ भात पानि चलन पायाको रहेनछ. भन्या मोलाहिजा पछि लागि एस्तो भात पानि चलाउनाको. आसय गर्न्या हाकिम. अमालिलाई जनहि १०० रूपैया तेस कचहरिमा वस्न्या थरि मुषिया. जिम्मावाल्हरूलाई जनहि २५ रूपैया अरू भला मानिसलाई. जनहि २० रूपैया दंड गर्नु. अमालिले ज्मानवंदि मुचुल्का कागज पत्र मात्र गराई लियाका. भात पानि नचलल्याका मा यस्का भात पानि चलन्यै रहेछ भनि तहकित् नवुझि. भात पानि षान्या अरू दुनित्रालाई जनहि. १० रूपैया दंड गरि अैन वमोजिम पतिया दिनु. दंडका रूपैया नतिऱ्या. अैन वमोजिम कैद गर्नु.

६५. अक्षर षोदियाका हउन्. नषोदियाका हवन. दामल भयाका मानिस्का हातको कसैले. टिका लायो वा. पानि पारि संकल्प गरि. दियाको सिधा दक्षिना. गैह्र लिन्यालाई. लियाको विगो जफत गरि लि. २० रूपैया दंड गरि।. लि पतिया दिनु. संकल्प नगरि वा पानि नपारि. दियाको चोषो. अंन दक्षिना. ज्यू जमिन् गैह्र दियाको लिन्यालाई वात लाग्दैन.

६६. चार वर्ण छतिसै जात्का स्वास्नि मानिस् हाड नातामा र नाता केहि नलाग्न्या आफु भंदा उपल्ला आफु मिल्दा आफु भंदा घटि जात्मा करणि मा विग्रि भंन्या वात लागि. अडा अदालत ठाना अमालमा पक्रि आयाका स्वास्नि मानिस्लार्य कचहरिवाट षारषेर गर्दा मेरो पैल्हो करणि गर्न्या. फलानु हो भनिछ र. उस्ले पोल्याकालाई. पक्रि ल्याई रोवकार गर्दा कायेल भयो भन्या. ऐन वमोजिम गर्नु देश परदेश टाढा गयाकालाइ भनिछ भन्या आफ्ना मुलुक्मा भया दस्षत् पुर्जि चिठ्ठि मानिस पठाई झिकाई निसाफ गर्नु. आफ्ना मुलुकमा रहेनछ उस्का दाजू भाई नाता गैह्र. कसैले आई. फलाना सित फलाना जगामा. भेट भयोथ्यो. तलाई फलानि स्वास्नि.ले मेरो. पैल्हो करणि लिन्या फलानु हो भनि. तेरो नाउलेषाई रहिछ. तेरो करणि छैन भन्या जोरिन हिड् करणि हो भन्या. सोहि कुरो भंन र. तेरो नाउको. अैन वमोजिम. पतिया गर्छौ भनि. हामिले भंदा तेससित मेरो. करणि भयाको साचो हो. स्वास्निले पनि मलाई. पैल्हो भनि लेषाई भन्या. करणि भयाको छैन. भनि. म. तेससित जोरिन जान सक्तिन. मेरो घरद्वार. उहि छ. अैन वमोजिम. जो हुनु पर्न्या. वीहोरा गरि. हामिले भोर पारि. षुवाउदा पान्या जो जो छौ मेरो नाउको पतिया गर. म भन्या वहा जांन भनि भन्यो. हामिले यो कुरा साछि राषि सोध्याको छ वा. कागज लेषाई लियाको. छ. यो कुरो उस्ले भन्याको ठहरेन. झुट्टो कुरो कल्पि भंन आयाको ठहऱ्यो भन्या. अैन वमोजिम लाग्याको तक्सीर. हामि वुझाउला. भनि भाग्न्याका वारिस दाज्यू भाइभताहा कोहीआई कचहरीमा मुचुल्का लेषि दिया भन्या तिन्को मुचुल्का लि वात लाग्न्याको सर्वस्व गर्नु पर्न्या भया तिनैका हातवाट अैन वमोजिम् अंस सर्वस्व लि. भोर्मा पर्न्यालाई. तिनै वावतिका नाउको. भातपानिको पतिया जो गर्नु पर्न्या हो गराई दिनु. कदाचित्. वात लाग्न्या मानिस आई. फलानि स्वास्निको. मैले करणि लियाको छैन. फलानासित भेट हुदा ईकुरा. भयाका पनि होइनन्. अनाहक्मा. सर्वस्व लगाई मेरा नाउको पतिया गराया छन्. भनि उजुर गऱ्यो भन्या वारिस्भै कचहरिमा आई मुचुल्का लेषि दिन्यासित जोरि झुठो कुरो कल्पित भयाका कुरामा वारिस भै. कचहरिमा मुचुल्का लेषि. सर्वस्व लगाई दियाको पतिया गरायाको ठहऱ्यो भन्या तेस्ताको अैन वमोजिमको अंस सर्वस्व गरि २ वर्ष कैद गर्नु. म्यादका रूपैया दिया लिनु. जात जादैन. तेसै सर्वस्व मध्ये. अघिल्ला अनाहक्मा सर्वस्व हुन्येका. ज्मा वमोजिम उसलाई. फिर्ता गराई वढता भया सर्कार लगाई दिनु. नपुग्याको लिन पाउंदैन. सर्वस्व फिर्ता गराई दियाका मा दसौद विसौद वक्स्यौनि केहि नलिनु. येसो भंथ्यो भनि. कचहरिमा आई. मुचुल्का लेषि दिन्या ले भन्याको कुरो साचो ठहऱ्यो र. कायेल गरायो

भन्या. एस्ता झुट्टालाई. ३ वर्ष कैद गरि अैन वमोजिम्मा गर्नु रहयाको सजाय गरि. छोडि दिनु. म सित भेट् भै करणि भयाको छ भंथ्यो. भनि कचहरिमा आई ज्यानवंदि. लेषि दिन्या मऱ्या पछि उजुर गर्न आयो भन्या पनि तेस्ले अघि भन्या कै ठहर्छ. फेरि कुरो नहेर्नु. दंड हुन्या विहा षर्च लिन्या षत् रहेछ भन्या वात लाग्न्या पक्रि आयो भन्या. दंड विहा षर्च. जो पर्छ गरि छोडि दिनु. कारणि फेला नपरि. दंड पनि हुदैन. विहा षर्च पनि पाउंदैन. भोर्मा परि षान्यालाई पतिया दिनु.

६७. भात पानिका कुरामा. पक्रि आयाका मानिस्लाई. अडा अदालत ठाना अमालका हाकिम डिठा विचारी अमालि द्वाऱ्या मुषियाले एस्कुराको ठेगाना नहुंजि. तिमीहरूले भात पानि.मा कसैलाई नवोर्नु. अैल्हे फरक भै रहु भनि भात वाहेक गर्नालाई भात्को पानि स्मेत् वाहेक गर्नालाई. पानिको हट्क गरि वाहेक राषि निसाफ हेर्नु कुराको तहकित गर्दा. पतिया पाउन्या ठहऱ्यो वा. भोर्मा पर्न्या ठहऱ्यो भन्या. पतिया दिनु. पतिया नगर्न्या ठहऱ्यो भन्या पनि कुराको संका उठ्या पछि. तहकित नहुंजि.फरक भै रहनु. भनि हट्क्या कामा. उस्ले भात पानि षायाको ठहरेन भन्या पनि हटकन्यालाई. वात लाग्दैन. भात पानि हट्किन्या. एस्तालाई पतिया दिनु पनि पर्दैन. जातैमा रहंछ. कुरो वुझ्दा पतिया नपाउन्या ठहऱ्यो भन्या भात वाहेक हुन्या. भात वाहेक पानि वाहेक हुन्या पानि वाहेक हुंछ भात पानि मा पर्न्या कुराको संका उठ्यापछि. हटक नगरि. तिन्वाट भात पानि. मा अरु वोरिन गयाको ठहर्‍यो आफुले कुरो सुन्या पछि हटक नगरी भात पानिमा वोराउन्या. मा कचहरि कचहरिको मोष्य जो हो. तिन्मा भातको हटक नगर्न्यालाई १०० पानिको हटक नगर्न्यालाई ५० रूपैया दंड गरि कचहरिवाट हट्कियाको. नहुनाले एस्ताका हातको भात पानि षान्यालाई. पतिया दिनु. दंड पर्दैन.

६८. अैनले भात पानिको पतिया गरि. शुद्ध हुन्या ठहऱ्या पतिया नहुंजिभात पानिमा फरक रहनु. अरूलाई नवोर्नु भनि अडा अदालत ठाना अमाल धर्माधिकार. थरि मुषिया भताहा भला मानिसहरू.ले हटक गरि राष्याका. मानिसलाई अैन वमोजिम. पतिया नगराई हटक मिचि भातमा सरोवर गराउन्या. देवपितृ कार्य चलाउन्यालाई ५० पानि चलाउन्यालाई २५ रूपैया दंड गरि. हटक हुन्यालाई. अैन वमोजिम पतिया दिनु. जात जादैन. हटक भै. भात पानि वाहेक भयाकाले पतिया नगरि अरूलाई. भात्मा वोऱ्यो देव पीतृ कार्य गरेछ भन्या ५० पानिमा वोरेछ भन्या २५ रूपैया दंड गरि पतिया गराई दिनु.

६९. जैसि वाहुन गैह्रले आफ्ना भात मिल्दा. जैसिलाई मात्रै चलि आया वमोजिम गायत्रि. दिक्षा मंत्र सुनाउन हुंछ. सु ंन्या सुनाउन्या. दुवैलाई वात लाग्दैन. अरू तागाधारि. जात. र आफु भंदा उपल्ला जैसिलाई मंत्र सुनाउन हुदैन. कसैले सुनायेछ भन्या उपाध्या व्रांम्हणलाई सुनाउन्यालार्य ५० रूपैया रजपुत जातलाई सुनाउन्यालाई ४० रूपैया तागाधारि क्षतृ जातलाई सुनाउन्यालाई ३० रूपैया आफु भंदा उपल्ला जातका जैसिलाई सुनाउन्यालाई २० रूपैया दंड गर्नु. जैसिवाट मंत्र सु ंन्या उपाध्या रजपुत क्षतृ जात र. घटि जातका जैसिवाट मंत्र सुन्या. उपल्ला जातका जैसि जात्मा १६ वर्ष नाघ्याको भया मंत्र सुन्यैलाई मंत्र सु ंन्या १६ वर्ष मनिको रहेछ भन्या. आफु अषत्यार भै मंत्र सु ंन लाउन्या मुष्य जो हो उस्लाई. एसै अैनको आधि आधिका दर्ले दंड गर्नु दंड भया पछि उपाध्या रजपुत क्षत्रिले फेरि उपाध्यै व्रांम्हणैवाट र. जैसि वाहुनले उपाध्या आफु भंदा. उपल्ला जातका जैसि. आफु मिल्दा जैसिवाट जात अनुसार.को गायत्रि दिक्ष्या सुन्यापछि. आफ्ना जातमा चल्छ.

७०. १९२२ साल वैसाष वदि १ रोज देषि उप्रांन्त. अग्रेजका. कम्पनिमा भर्ति भयाका व्रांम्हण रजपुत क्षत्रि. वैश्य शुद्र गैह्र पानि चलन्या चार वर्ण छतिसै जात कोहि आया भन्या पानि नचलन्या दमै कामिसित एकै तम्वुमा सुतन्या रक्सि षान्या गर्छन्भंन्या कुरो सु ं नाले तिन्का हातको भात पानि विना हुकुंम चल्दैन. कसैले नषानु.

विराना राजको तलप दर्माहा षाई आउन्यालाई पानिको पतियादिनाको अैन् --- --- ------

७१. भोट् मध्येस. तर्फ विराना राजमा गै उहाको नोकरि. पिपा कुल्लिमा भर्ति भै तलव. दर्माहा षाई आउन्या मानिसहरूले पानि नचलन्या जातसित येकै तम्वुमा सुतन्या वस्न्या. तमाषु गैह्र षान्या गर्छन् भंन्या. संषा हुनाले. पानिको पतिया नगरि. एस्ताका हातको. पानि कसैले नषानु. अदालत. अमालवाट.।. पुर्जिको दस्तुर लि. पतियाको पुर्जि गरि दिनु. धर्माधिकारले ।. लि पतिया दिनु. यस्ता पतिया नगर्न्याका हातको जानि जानि षान्यालाई पनि निति स्मृति गराउनु.

भात पानिको कुरो परि आयामा. कुरो छिंनालाई ढिलो हुदा भोर्मा पर्न्यालाई भात पानिको. पतिया दिनाको अैन् ---

७२. चार वर्ण छतिसै जात्का. कसैका छोराछोरि. दिदि वैन्हि छोरि वुहारि आमा वज्यू. फुपु माइज्यू. नाता संवंधि. गैह्र र. कुटुम्व गैह्र भात पानि. करणि गैह्रमा परेछन् भन्या लाग वादि र. प्रतिवादि इदुवैलाई. झगरा नटुटि. पानि नचलन्याको पानि चलदैन. भात न चलन्याको भात चल्दैन. करणि. र. भात पानि दवाउन्याको र. सुनि कन भात पानि षान्याको मामिला टुटद्या पछि. अैनले पाउन्या पाउनन्. नपाउन्या पावैनन्. तिन्देषि वाहेक. अरू भोरमा पर्न्यालाई. जसलाई वात लाग्याको छ. हाऱ्यो हारि भन्या तेस्की र. तेस्को. को नाउको पतिया जिति भन्या देह शुद्धको. पतिया भनि अदालत ठाना अमाल गैह्रले पुर्जि गरि दिनु. धर्माधिकारवाट पनि दोह्रोरा वेहोराको पतिया गरि दिनु. कायेल नामा भै. मामिला छिनीया का झगरा जस्लाई षतवात लाग्याको छ. अघिल्ला अैन वमोजिम वापतिका नाउको. पतिया गरि दिनु.

# भातमा बोर्न्याको

१. तागाधारि क्षत् जात गैह्रका कुद्रंवका विधवा र ११ वर्ष देषि माथिका कंन्यालाइ भात षजा नचलन्या कम् तागाधारि जात गैह्रले राजिषुसि सित करणि गरि भातमा पार्‍या ५० रूपैया दंड गरी भताहालाइ भातको पतिया गराइ दिनु.

२. तागाधारि जातका गैह्रका विधवा र ११ वर्षदेषि माथिका कंन्याको भात षजा नचलन्या जातका ल्यायाका स्वास्निवाट जन्म्याका संतान्मा जनै नपायाकाले करणि भात पार्‍यो भन्या १२० रूपैया दंड गरि भताहालाइ भातको पतिया गराइ दिनु.

३. तागाधारि जात कसैले जानि जानि आफु भंदा घटि तागाधारि लगायेत् पानि चलन्यासम्मका जात्का हात्को भात र. पानि नचलन्या र छोया छिटो हाल्नु पर्न्या जातका हात्को भात्पानि षाद्र आफ्ना भताहालाइ वोर्‍याको रहेनछ भन्या. दंड पर्दैन. जौना जात्का हातको भात षायाको छ. उहि जात हुंछ. उसै जातमा मिलाइ दिनु. षत वात लाग्दैन. आफु भंदा घटि जनै लाउन्या जातका हातको भाता षाइ भताहालाइ वोरेछ भन्या ५० रूपैया दंड गरि उसै जातमा मिलाइ दिनु. जनै जादैन. नमासिन्या मासिन्या मतुवालि गैह्र पानि चलन्या जातका हातको भात षाइ भताहालाइ वोरेछ भन्या १०० रूपैया दंड गरि जनै झिकि उसै जात्मा मिलाइ छाडि दिनु. पानि नचलन्या र. छोया छीटो हालनु पर्न्या. जातका हातको भात पानि षाइ भताहालाइ भात र अरूलाइ पानिमा वोरेछ भन्या. अैन वमोजिम् अंस सर्वस्व गरि उसै जात्को १ अक्षर षोदि भातपानि वाहेक गरि उसै जातमा मिलाइ छोडि दिनु.

४. नमासिन्या मतुवालि जात कसैले जानि जानि आफु भंदा घटि नमासिन्या लगायेत् पानि चलन्यासम्मका जातका हातको भात र. पानि नचलन्या र छोया छिटो हालनु पर्न्या जातका हातको भात पानि षाइ आफ्ना भताहालाइ वोर्‍याको रहेनछ भन्या दंड पर्दैन. जौना जात का हात्को भात षायाको छ उहि जात हुंछ. उसै जातमा मिलाइ दिनु. षत वात लाग्दैन. आफु भंदा घटि नमासिन्यौ मतुवालि जातका हातको भात षाइ भताहालाइ वोरेछ भनया १० रूपैया दंड गरि पतिया गराइ दिनु. मासिन्या मतुवालि गैह्र पानि चलन्या जातका हातको भात षाइ भताहालाइ वोरेछ भन्या. २० रूपैया दंड गरि भताहाले भात्मा लिंछौ भन्या. पतिया गराइ

दिनु. भात्मा लिदौन भन्या. जौना जातका हातको भात षायाको छ. उसै जात्मा मिलाइ छाडि दिनु. पानि नचलन्या र छोया छिटो हालनु पर्न्या जातका हातको भात पानि षाइ भताहालाइ भातमा र अरूलाइ पानिमा वोरेछ भन्या अैन वमोजिम्को अंस सर्वस्व गरि. उसै जातको १ अक्षर षोदि भात पानि वाहेक गरि उसै जात्मा मिलाइ छाडि दिनु.

५. मासिन्या मतुवालि जात् कसैले जानि जानि आफु भंदा घटि मासिन्यामा पानि चलन्यासम्मका जातका हातको भात र पानि नचलन्या र छोया छिटो हालनु पर्न्या जातका हातको भात पानि षाइ आफ्ना भताहालाइ वोऱ्याको रहेनछ भन्या. दंड पर्दैन. जौना जातका हातको भात षायाको छ उहि जात हुंछ. उसै जातमा मिलाइ दिनु षत वात लाग्दैन आफु भंदा घटि मासिन्यै जातका हातको भात षाइ वोरेछ भन्या ५ रूपैया दंड गरि प्रायश्चित्त गराइ दिनु. पानि नचलन्या र. छोया छिटो हालनु पर्न्या जातका हातको भात पानि षाइ भताहालाइ भातमा र अरूलाइ पानिमा वोरेछ भन्या अैन वमोजिम्को अंस सर्वस्व गरि उसै जातको १ अक्षर षोदि भात पानि वाहेक गरि उसै जातमा मिलाइ छाडि दिनु.

६. पानि नचलन्या छिटो हालनु नपर्न्या जात कसैले जानि जानि आफु भंद घटि पानि नचलन्या र छोइ छिटो हालनु पर्न्या जातका हातको भात पानि षाइ आफ्ना भताहालाइ वोऱ्याको रहेनछ भन्या दंड पर्दैन. जौना जातका हातको भात षायाको छ उहि जात हुंछ. उसै जात्मा मिलाइ दिनु. षतवात लाग्दैन. आफु भंदा घटि पानि नचलन्यै जातका हातको भात षाइ भताहालाइ वोरेछ भन्या ५ रूपैया दंड गरि भताहाले भातमा लिंछन् भन्या जातको रीत गराइ दिनु. भताहाले भातमा लिदौन भन्या जौना जातका हातको भात षायाको छ उसै जातमा मिलाइ छाडि दिनु.

७. छोइ छिटो हालनु पर्न्या जात कसैले जानि जानि आफु भंदा घटि पानि नचलन्या र छिटो हालनु पर्न्या जातका हातको भातपानि षाइ अरूलाइ वोऱ्याको रहेन छ भन्या दंड पर्दैन जौना जातका हातको षायाको छ उहि जात हुंछ. उसै जातमा मिलाइ दिनु. षत वात लाग्दैन. आफुले भात षाइ भताहालाइ वोरेछ भन्या २॥ रूपैया दंड गरि भताहाले भातमा लिंछन् भन्या पतिया गराइ दिनु. भताहाले भातमा लिदौन भन्या जौना जातका हातको भात षायाको छ उसै जातमा मिलाइ दिनु.

८. तागाधारि जात कसैले आफु भंदा घटि भात नचलन्या तागाधारि जातका हातको भात गैह्र जात जान्या कुरो षायेछ षुवाउन्याले आफु भंदा ठुलो तागाधारि जात हो भंन्या थाहा नपाइ षुवायेछ भन्या. षानदिन्यालाइ षत वात लाग्दैन. आफु भंदा ठुलो तागाधारि जात हो भनि थाहा पायाका मनिस्लाइ तेरा हातको षांछु भंदा जानि जानि आफ्ना हातको भात लगायेत्. जात जान्या कुरो षान दियेछ आफुले षुवायाको कुरो उस्का भताहालाइ नवोरिदै जाहेर गरेछ भन्या पनि वात लाग्दैन आफ्ना हातको षान दियाको जाहेर नगरि दवाइ अरू भताहालाइ भातमा वोरायेछ वा. वोराइ छ भन्या मेरा हातको षाया जात जांछ. भनि षान नदिनु पर्न्या कुरामा षुवाया वावत् २५ रूपैया दंड गर्नु रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु. भोरमा षान्यालाइ पतिया गराइ दिनु.

९. तागाधारि जात कसैले नमासिन्या मतुवालि जातका हातको भात गैह्र जात जान्या कुरो षायेछ षुवाउन्याले आफु भंदा ठुलो तागाधारि जात हो भंन्या थाहा नपाइ षुवायेछ भन्या. षान दिन्यालाइ षत वात लाग्दैन. आफु भंदा ठुलो तागाधारि जात हो भनि थाहा पायाका मनिस्लाइ तेरा हातको षांछु भन्दा जानि जानि आफ्ना हातको भात लगायेत् जात जान्या कुरो षान दियेछ आफुले षुवायाको कुरो उस्का भताहालाइ भात्मा नवोरिदै जाहेर गऱ्यो भन्या पनि वात लाग्दैन. आफ्ना हातको षान दियाको जाहेर नगरि दवाइ अरू भताहालाइ भातमा वोरेछ वा. वोराइ छ भन्या मेरा हातको षाया जात जांछ भनि षान नदिनु पर्न्या कुरामा षुवाया वावत् ५० रूपैया दंड गर्नु रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु भोरमा षान्यालाइ पतिया गराइ दिनु.

१०. तागाधारि जात नमासिन्या मतुवालि जात कसैले मासिन्या मतुवालि जातका हातको भात गैह्र जात जान्या कुरो षायेछ षुवाउन्याले आफु भंदा ठुलो जात हो भनि थाहा नपाइ षुवायेछ भन्या षान दिन्यालाइ षत वात लाग्दैन. आफु भंदा ठुलो तागाधारि जात नमासिन्या जात हो भनि थाहा पायाका मनिसलाइ तेरा हातको षांछु भंदा जानि जानि आफ्ना हातको भात लगायेत् जात जान्या कुरो षान दियेछ आफुले षुवायाको कुरो भातमानवोरिदै उस्का भताहालाइ जाहेर गऱ्याको भया पनि वात लाग्दैन. आफुले षुवायाको कुरो जाहेर नगरि दवाइ भताहालाइ भात्मा वोरेछ. वा वोराइ छ भन्या आफ्ना हातको षुवााया जात जांछ भनि षान

नदिनु पर्न्या कुरामा षुवाया वावत् तागाधारि जातलाइ षुवायेछ भन्या मासि दिनु. नमासिन्या मतुवालि जातलाइ षुवायाको रहेछ भन्या १० रूपैया दंड गरि षान्यालाइ उस्का जातले भातमा लिंछन् भन्या पतिया गराइ दिनु. भातमा लियानन् भन्या. जौना जनतका हातको षायाको छ उसै जातमा मिलाइ छाडि दिनु. भोरमा षान्यालाइ पतिया गराइ दिनु.

११. तागाधारि जातलगायेत् पानि चलन्यासम्मका जातले तेरा जात मिल्दो हुं भनि पानि नचलन्या जात र छोया छिटो हालनु पर्न्या जातको हातको भात पानि र. जात जान्या कुरो षायेछ. षुवाउन्याले आफु भंदा ठुलो जात हो भनि थाहा नपाइ षुवायेछ भन्या षत वात लाग्दैन. आफु भंदा ठुलो जात हो भनि थाहा पायाका मनिस्लाइ तेरा हातको षांछु भन्दा जानि जानि आफ्ना हातको भात पानि लगायेत् जात जान्या कुरो षान दियेछ आफुले षुवायाको कुरो उस्का भताहालाइ भात पानिमा नवोरिदै जाहेर गऱ्याको भया पनि वात लाग्दैन. आफुले षुवायाको कुरो जाहेर नगरि दवाइ भताहालाइ भात्मा र. अरूलाइ पानिमा वोरेछ. वा. वोराइ छ भन्या मेरा हातको षुवाया जात जांछ भनि षान नदिनु पर्न्या कुरामा षुवाया वावत् मासि दिनु. भोरमा पर्न्यालाइ पतिया गराइ दिनु.

१२. पानि नचलन्या छिटो हालनु नपर्न्या जातले तेरा जात मिल्दो हुं भनि आफु भन्दा कमि भात नमिल्न्या जातका हातको भात पानि षायेछ. षुवाउन्याले आफु भंदा ठुलो जात हो भनि थाहा नपाइ षुवायेछ भन्या. षतवात लाग्दैन. आफु भंदा ठुलो जात हो भनि थाहा पायाका लाइ तेरा हातको षांछु भंदा जानि जानि षुवायेछ भन्या षान्यालाइ उस्का जातले आफ्ना जातको रीत गरि भात पानिमा लिन्या रहेछन् भन्या २॥. रूपैया जात मा लिन्या रहेनछन् भन्या ५ रूपैया दंड गरि उसै जात्मा मिलाइ दिनु.

१३. छोया छिटो हालनु पर्न्या जातले तेरा जात मिल्दो हुं भनि आफु भन्दा कमि भात नमिल्न्या जात्का हातको भात पानि षायेछ. षुवाउन्याले आफु भंदा ठुलो जात हो भनि थाहा नपाइ षुवायेछ भन्या षत वात लाग्दैन. आफु भंदा ठुलो जात हो भनि थाहा पायाकालाइ तेरा हातको षांछु भंदा जानि जानि षुवायेछ. भन्या षान्यालाइ. उस्का जातले आफ्ना जातको रीत गरि भात पानिमा लिन्या रहेछन् भन्या २॥. रूपैया जातमा लिन्या रहेनछं भंन्या ५ रूपैया दंड गरि उसै जातमा मिलाइ दिनु.

१४. उपाध्या रजपूत जैसि क्षत्रि नमासिन्या मतुवालि मासिन्या मतुवालि गैह्र जात पतित् भै भात वाहेक् भयाका पानि मात्रचल्याका कसैले हामि सद्य छौ हाम्रो भात चल्छ भनि आफ्ना भताहालाइ भातमा वोऱ्या भन्या. ५० रूपैया पानिमा स्मेत् वाहेक् भयाकाले भातमा वोऱ्याको भया १०० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या मैन्हाका ५ रूपैयाका दर्ले कैद गर्नु. भोरमा पर्न्यालाइ पतिया गराइ दिनु.

१५. उपाध्यानि जैसिनि क्षतृनि गैह्र तागाधारि जात र. अरू नमासिन्या जात गैह्रका अर्का सित विग्रि वेस्या भयाका स्वास्निले पछि अरूलाइ सद्य छौ हामि विग्ऱ्याका छैनौ भनि अर्कालाइ भातमा वोऱ्या भन्या. तेस्ता स्वास्निलाइ ५० रूपैया दंड गरि भोरमा षान्यालाइ पतिया गराइ दिनु. रूपैया नतिऱ्या मैन्हाका ५ रूपैयाका दर्ले कैद गर्नु.

१६. मासिन्या जातका लोग्न्या स्वास्नि मानिसले आफु भंदा ठुला नमासिन्या जातका कसैलाइ जात दवाइ भातमा पाऱ्या मासि दिनु. आफ्नु जात जनायेछ षान्याले जानि षायाको भया. षुवाउन्यलाइ दंड पनि हुदैन. मासिदा पनि मासिंदैन.

१७. मुडिन्या जातले हाडमा र नात गैह्रमा करणि गरि मुडिया पछि जन्म्याका संतान नमासिन्या पानि चलन्या शुद्र जात हुंछन् एस्ताको ११ वर्षदेषि उभोका कंन्या र विधवालाइ राजिषुसिले करणि गर्न्या मानिसन्या जातलाइ मासि दिनु. कमाराले करणि गरेछ भन्या. तेस्ता कमारालाइ ३ वर्ष कैद गर्नु. षसम्ले रूपैया तिरि लैजांछु भन्या अैन वमोजिम्का रूपैया लि छाडि दिनु.

१८. पानि नचलन्या जातले पानि मापाऱ्यो भन्या त्यो पानिमा पार्न्या आफु सुषि पौनिजातहो भन्या मासि दिनु. अगावै मासियाको रहेछ भन्या र. अछुति जातका कमारा कमारि रहयाछन्भन्या २ वर्ष कैद गरि छाडि दिनु. कमारा कमारि षसम्का हुंछन्.

१९. पानि नचलन्या जात छोया छिटो हालनु पर्न्या जात गैह्रले छोयाको सिन्कि गुँद्रुक अमिल्यायाका तामा काटचा छोडाया फुटचाका फलफुल गैह्रनषानु. कसैले षायेछ भन्या अनाचार गऱ्या वावत् चार पैसा दंड गर्नु जात जादैन.

२०. ब्राम्हण लगायेत् तागाधारि जात गैह्रले आफु भंदा घटि तागाधारि जात र नमासिन्या मासिन्या गैह्र पानि चलन्या जातले माटाका धातुका भाडामा पानि नपारि भुटचा पकायाको सागपात गैह्र नुन हाल्याको भया पनि षान्याको जात जादैन. पतिया पनि गर्नु पर्दैन. नुन हाल्याको हवस् नहवस् पानि हालि पकायाको सागपात गैह्र षान्यालाइ १० रूपैया दंड गरि पतिया दिनु.

२१. जैसि वाहुन्ले उपाध्या र आफु भंदा ठुला जातलाइ आफुले दहि च्युरा मुछ्याको षुवायेछ भन्या. षुवाउन्यालाइ २० जानि जानि षान्यालाइ १० रूपैया दंड गरि पतिया गराइ दिनु.

२२. दनवार कुम्हाल् माझि दरै ढोक्रचा डाल हटचाहरूलाइ तागाधारि जात गैह्रले उनले पकायाका ठाउमा गै दाल भात जवरजस्ति गरि छोइ दि षुवायेछ भन्या. छोइ दियाको विगो भराइदि विगै वमोजिम् दंड गर्नु. छोइ दिन्यालाइ दंड भया पछि षान्याको जात जादैन. षुसि राजिले षायाको भया षान्याको जात पनि जादैन. षुवाउन्यालाइ वात पनि लाग्दैन.

२३. उपाध्या वांम्हणले जानि जानि हासको मासु षायेछ भन्या ॥. दंड गरि पतियाको पुर्जी गरि दिनु धर्माधिकारले ॥. लि पतिया दिनु.

# जनै दिन्याको

१. जनै नपाउन्या जातका लाइ जनै लाउन्या जातको छोरो हो भनि सर्कारका हुकुम वाहेक अरू कसैले जनै दियेछ भन्या जनैलाउन्याको जनै भिकि उसै जातमा मिलाइ दिनु. जनै दिन्यामा मुष्य जो हो उसैलाइ ६० रूपैया व्रतवंध गराउन्या प्रोहितलाइ र. मंत्र सुनाउन्या गुरूलाइ ५।५ रूपैया दंड गर्नु. नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

२. तागाधारि जात कसैले आफ्ना घरकिकमारि पार गरि स्वास्नि तुल्याया कि हवस् वा पार नगर्दै घरका जाहानालाइ थाहा भै राषि छोरा छोरि जन्म्याका हवस् षसमले राषता अर्कासित पोइल गयाकि रहिनछ र षसम्का वीर्यले छोराछोरि भयाका रहया छन् भन्या तेस्ता कमारीपट्टिका छोरालाइ जनै दिदा आमालाइ पार गरि वावु दाज्यू भाइ इष्टमित्रले छोरालाइ जनै दिन र. छोरिको विहा गरि दिन हुंछ अर्काकि कमारि राष्या पट्टि जन्म्याका छोरा छोरिलाइ आमा पार नभया पनि धनिको षुसि राजिले निषनि ल्याइ छोरालाइ जनै दिन र. छोरिको विहा गरि दिन हुंछ जनै दिन्यालाइ षत लाग्दैन.

३. तागाधारि जातले नमासिन्या मतुवालि जातका स्वास्नि ल्याइ उन्वाट जन्म्याका छोरालाइ जन्माउन्या वावुले भयो वावुमऱ्या पछि उस्का दाज्यू भाइ इष्टमित्र कसैले भयो एस्तालाइ जनै दिंछौ भन्या व्रतवंध गरि जनै दिन हुंछ व्रतवंध गरचाउन्या जनै दिन्यालाइ वात लाग्दैन. एस्लाइ जनै दिन हुंदैन भनि कसैले रोक्यो भन्या रोकन्यालाइ ५ रूपैया दंड गर्नु दंड स्मेत् गरेछ भन्या दंड फिर्ता गराइ दि उसले गऱ्याका पटक वमोजिम् दंड गर्नु रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

४. तागाधारि जात कसैले मासिन्या मतुवालि जातका स्वास्नि राषि भयो वधेत्यानि स्वास्नि राषि भयो उन्वाट जम्न्याका छोरालाइ वावु ज्यूदो भया वावुले वावु नभया उस्का दाज्यू भाइ इष्ट मित्रहरूले व्रतवंध गरि जनै दिन हुंछ. आफ्ना जियले जनै हाल्छु भन्या पनि व्रतवंध गरि जनै लाउन पाउछ. जनै दिन्या व्रतवंध गराउन्यालाइ वात लाग्दैन.

५.	तागाधारि तागाधारि जातको हवस् वा तागाधारि जात र अरू जातको हवस् झगरा हुदा जनै चुडिन गयेछ भन्या. जनै चुडालि दिन्यालाइ ५ रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

६.	वेहक्मा अर्काको जनै झिकि दिन्यालाइ १०० रूपैया दंड गर्नु रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

७.	अदालत अडा गौडाका हाकिंम् डिठ्ठा विचारि अमाल्का अमालि द्वाऱ्या थरि मुषिया ठेक इजरादार गैह्र कसैले तागाधारि जात गैह्रको जनै नजान्या कुरामा जनै झिकन लायेछ. भन्या. झिकन लाउन्या झिकन हुंछ भनि मतलव दिन्याहरूलाइ १००।१०० रूपैया उस् कचहरिमा वस्याका थरि मुषिया जिम्मावालहरूले पनि वेहक्मा जनै झिपिन लायाको देष्या पछि झिकन हुंदैन भनि हटक गर्नु पर्न्या कुरामा केहि नभनि हेरि रहयाका रहयाछन् भन्या तिन्हेरूलाइ ५०।५० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

८.	तागाधारि जातको कसैले वेहक्मा जनै झिक्याको चुडाल्याको रहेछ भन्या वेहक्मा झिकियाको चुडियाको हुनाले वेहक्मा झिकिन्या चुडिन्याको जात जादैन. प्रायश्चित्त गरि जनै लाउनु. अदालत् अमालवाट पुर्जि गरि जनै दिलाइ दिनु.

# वालषको तक्सीर

१. १२ वर्षदेषि उधोका केटाकेटिका वावु आमा दाज्यू कोहि रहनेछन् टुहुरो रहेछ भन्या तेसलाइ षानाको केहि गर्ज परेछ र वस्तु भाउ चाकरहरू थामन सकेन भन्या सहरमा रहेछ भन्या अदालत ठानाले साछि वसि वाहिर फेरा गाउमा रहेछ भन्या अमालि थरीले साछि वसि वा जवि पंचकृतिमोल गराइ किंनु वेचनु गराइ दिनु. मोल तौल गराइ दिन्या हाकिमले तेस्ताले वेच्याको माल केहि नलिनु. लिन्या हाकिम्लाइ विगाको आधि दंड गरि माल धनिलाइ फिर्ता गर्नु अदालत ठाना अमाल वसि दुनिञाको आधि दंड गरि १२ वर्ष मनिका केटाकेटिहरू सित किन्या वेच्याको सदर हुंछ. एस्तामा अदालत ठाना अमालको दस्तुर दसौद विसौद केहि लाग्दैन नलिनु.

२. आमा वावु दाज्यूलाइ नराषि १६ वर्षदेषि उधोका केटाकेटिसित तमसुक लेषि नगद जिनिस् अनाज गैह्र कर्जा लिन्यालाइ घरका मोष्य मालिक्सित नभनि तमसुक गरि लियाको हुनाले विगो फिर्ता गराइ सयकरा २० रूपैया दंड गर्नु. फिर्ता पाउन्यावाट दसौद लिनु. तमसुक नलेषि केटाकेटिलाइ फुल्याइ फकाइ लुच्याइ गरि लियाको रहेछ भन्या विगो फिर्ता गराइ विगा वमोजिम् दंड गर्नु फिर्ता पाउन्यावाट दसौद लिनु.

३. आमा वावु दाज्यूका विसल्लाहले १६ वर्षदेषि उधोका केटाकेटिलाइ रूपैया दि तमसुक लेषि लिन्याको थैलि भुसिंछ. केटाकेटिसित लिन पाउदैन तमसुक कचहरिवाट फराइ दिनु. दंड जिताउरि पर्दैन. ति रूपैया वावु आमाले षर्च गर्‍याको भया र वावु आमा दाज्यू हरूले अह्राइ रूपैया ल्यायाको रहेछ भन्या. थैलि भराइ कचहरिवाट दसौद विसौद लि तमसुक फराइ दिनु.

४. आमा वावु दाज्यूहरूले थाहा नपाइ १६ वर्ष मनिकावालष केटाकेटिले आफ्ना घरको नगद जिनिस् कमारा कमारि चौपाया गैह्र माल वेच्यो र. एस्ता वालष सितलियेछ भनि कोहि कराउन आयो भन्या किंन्याको थैलि भुस हुंछ दसौद लि माल फिर्ता गरि दिनु. वेचन्या किंन्यालाइ दंड जिताउरि हुदैन. वावु आमा दाज्यूले चाल पाइ भयो. अह्राइ भयो केटाकेटिवाट माल वेचायाको रहेछ पछि केटाकेटिवाट फलानाले माल लियेछ भनि कराउन आया भन्या वुभ्दा आफुले चाल पाइ अह्राइ वेचायाको रहेछ भन्या माल किंन्यावाट फिर्ता हुदैन. अघि

केटाकेटिवाट माल वेचाउन्यापछि फिराद गर्न आउन्या जालसाजि गर्न्या ठहर्छ. तेसलाइ समायाका विगा वमोजिम् दंड गर्नु.

५. कोहि वालष छोराछोरि हुन्या स्वास्नि अर्कासित पोइल गया भन्या धाइ राषि संभार गर्न सक्न्या वावुले धाइ षोजि आफैले राषि संभार गर्नु. धाइ षोजि राषनाको समर्थ नहुन्याले स्वास्नि पोइल गै भंन्या रीसले छोराछोरिलाइ आमाको काष छुटचाइ दिन धाइ मार्न हुदैन. तसर्थ पोइल गै तापनि ७ वर्ष नपुग्यासम्म वालषलाइ आमाको काष छुटचाइ नल्याउनु. तेसैलाइ पालन दिनु. दुद छाडचा पछि वालषका षुसिले आमासित वस्छु भन्या पनि जेठा कांछा वावु दाज्यू भाइसित वस्छु भन्या पनि वालषको षुसि आमासित वस्तिन भनि भन्या दाज्यूकाकाहरूले ल्याइ संभार गर्नु आमाको काषवाट छुटचाइ ल्याइ संभार नगरि वालष मऱ्यो भन्या. वालष छुटचाइ ल्याउन्यालाइ ५० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

६. व्राम्हण रजपूत तागाधारि जातमा १२ वर्षदेषि उधोका लोग्न्या स्वास्निहरूले झारा फिरि नधोइ आफुले पनि भात षायाछन्. भोरमा भताहाहरूलाइ पनि भात षुवाया छन् भन्या. भोरमा षाया वावत्. भताहाले पतिया पाउछन्. वालष वुद्धि छिपियाको नहुनाले गुहु नधोइ भात षान्या केटाकेटिलाइ षत वात लाग्दैन. दंड पर्दैन. पतिय दिनु. पतिया दिदा औवल्लाइ २॥ दोयम्लाइ २ सिम्लाइ १ चाहारलाइ ॥. रूपैया गोदान धर्माधिकारले लि पतिया दिनु १२ वर्षदेषि उभोकालाइ ५ रूपैया दंड गरि पतीया दिनु पतिया दिदा सोहि वमोजिम् धर्माधिकारवाट गोदान लि पतिया दिनु.

७. चार वर्ण छतिसै जात्मा १२ वर्ष देषि उधोका उमेरका केटाकेटीहरू ले अभक्ष कुरो र आफु भन्दा कम जातका हातको भात पनि षान्यालाइ प्रायश्चितको पतिया दिनु.

८. तागा धारि जातका ११ वर्ष देषि उधोका वालष केटो र १० वषै उभोकि केटीको अगम्यागमन करणि भयो भन्या केटिले प्रायश्चित पाउदिन. जात वाहेक रहंछे केटालाइ  राज दंड प्रायश्चित पर्दैन.

९. १२ वर्षदेषि उधोका वालषले सानातिना कुरादेषि ज्यान मार्‍या ज्यान्को तक्सिर गर्‍या तिन्लाइ षतवात लाग्दैन. ज्यू मार्‍याको रहेछ भन्या तेस्लाइ अदालत ठाना अमालका पंच भला मानिस् राषि फुल्याइकन सोधपुछ गर्नु. नहवकाउनु. अम्काले अह्रायोथ्यो र मैले गर्‍याको हो भन्यो भन्या. मार्न सीकाउन्या मानिस्को र. मर्न्याको अघि पछिको केहि कुराको इवि पर्‍याको रहेछ कि रहेनछ तहकित गरि ठहराउदा अरायाको साचैं ठहरचो सिकाउन्या कायल भयो भन्या कायेलनामा लेषाइ सिकाइ मराउन्या चाहिको ज्यान लिनु. मार्न्या केटाकेटिलाइ १ मैन्हा कैद गरि प्रायश्चित दिलाइ छाडि दिनु.

१०. ११ वर्ष मनिको केटो र १० वर्ष मनिकि केटिले करणि गर्‍या भन्या करणि हुन्या उमेर भयाको नहुनाले योनि छेदन भयाको ठहर्दैन. जातैमा रहंछन्. प्रायश्चित गर्नु पर्दैन. तेस्ता केटाकेटिलाइ हव्काइ दवकाइ छाडि दिनु. दंड जिताउरि पर्दैन.

# गरीव कंगाल

१. कोहि साल नाल नकाटियाका र दात नआयाका वालष केटाकेटि फाल्याका पाइ ल्याइ पाल्याकाहरूमा वावु आमाको पत्ता नलाग्याकालाइ कसैले पालि राष्याको रहेछ पछि वावु आमाको पत्ता लाग्यो भन्या अजान वालषलाइ निर्माया गरि फाल्या वावत् वावु आमाको अैन वमोजिम्को अंस सर्वस्व गरि पालन्यालाइ अदालत ठाना अमाल्वाट सौपि दिनु. जार पुत्र रहेछ भन्या आमाको दाइजो र जारि गर्न्या वावुको सर्वस्व गरि पालन्यालाइ दिनु. पानि नचलन्या र छोइ छिटो हालनु पर्न्या जातका वालष ल्याइ पाल्याका रहयाछन् भन्या वावु आमाको सर्वस्व गरि पालन्यालाइ दिनु.वालष जात मिल्दालाइ पालन दिनु.तागाधारि जात गैह्रले पानि नचलन्या र छोया छिटो हालनु पर्न्या जातका वालष ल्याइ पाल्याको रहेछ भन्या.लि पालन्या र. भताहा भाइहरूवाट धर्माधिकारलाइ ॥ गोदान दिलाइ भोरको प्रायश्चित्त गराइ दिनु.

२. वावु आमा कोहि नहुन्या वालष केटाकेटिको जगा जमिन् चौपाया नगद जिनिस् गैह्र जो भयाको धनमाल् उस् ठाउका पंच भला मानिस् राषि तादात् गरि दोहरो कागज लेषि मातवर भला मानिस्का जिम्मा धन माल र. तादात्को १ कागज राषि १ कागज अमालिका जिम्मा राषि तेसै आम्दानिवाट मुनासिव माफिकको षर्च गरि वालषलाइ पालि सहचार गर्नु. त्यो वालष जांन्या सामर्थ भयापछि पुराना धनमाल्मा पुरानु तादात्का कागज हेरि मुनासिव माफिक् क्या षर्च भयेछ हेरि वाकि रहयाको धनमाल् गाउका भल मानिस् राषि तेसैका जिम्मा गरि दिनु.

३. वावु आमा मरि पालन्या वारिस् नभै ल्याइ पाल्याका र वावु आमाको ठेगाना नलाग्याका षान लाउन नपाइ अलपत्र पऱ्याकालाइ सर्कारवाट षान लाउन दि पाल्याका कंन्याहरूको विवाह गर्न्या उमेर भया पछि अदालत ठानावाट कौसि तोसाषानामा रहन्या भारादार सित गै जात अनुसार. मुनासिव माफिकको षर्च मागी लि जात मिल्दामा विहा गरि दिनु.

४. महारोग भयाका लोग्न्या मानिसहरूलाइ सहर भित्र नआउनु भंन्या हुनाले सहर वाहिरै राषि गुठि कचहरिका कारिंदाहरूले षानलाइ जनहि रोजिंदा हंडि र. गुठिकै आम्दानिवाट वर्षका २

जोर षाडि सर्डूका कपडा पुऱ्याइ दिनु. षान लाउन पायानौ भनि कसैले करायो भन्या गुठि कचहरिका कारिंदालाइ १० रूपैया दंड गर्नु.

५. आफ्ना देसका काना षोरंडा लुला लगडा अंधा कुजा जियमा रोग लागि षेति पाति गर्न नसक्न्या र. वुढावुढि एस्काता घर षेत जगा जमिन् असामि लहना गहना हाडो भाडो पनि रहेनछ छोराछोरी भाइ भतिजा पनि रहयानछन्. साज सवेर षानाको मौसर पनि रहेनछ भन्या. एस्तालाइ पनि अदालत् ठानावाट वंदोवस्त गरि सदावर्तको हंडी र १ वर्षलाइ षाडि सडू्र्का २ जोर कपडा दिलाइ दिनु. हाजिरि लेषी जगा जगामा पालि राषनु.

६. १२ वर्षदेषि मनिका वालष र ६० वर्ष नाघ्याका वुढावुढि औ डुलफिर गर्न नसक्न्या अचल भयाका वुढावुढि वावु आमा छोराछोरि जुवात्रि दिदि वैन्ही फुपु गैह्रले नपाल्याका नाता संवंध कोहि नभयाका घर षेत जगा जमिन् असामि हाडो भाडो केहि नभयाका साज सवेर षानापिनाको मौसर पनि केहि नभयाकालाइ षोज षवर गरि अदालत ठानावाट ल्यायाका र उर्दिपाइ आफै आयाकालाइ अदालत ठानाका हाकिमले जाच वुझ गरि अैन वमोजिम् साज सवेरका सिधा निमित्त सदावर्तका हंडा दिलाइ दियेन काजमा लायेन र कसैले श्री मिनिष्टरसित र कौसल्मा नालिस गऱ्यो भन्या अदालत ठानाका हाकिम्लाइ २० रूपैया जरिवाना गर्नु अदालत ठानावाट उर्दि दिया पछि गुठि जाच कचहरिका मालिक्ले सिधा कपडा दियेनछ भन्या उसलाइ १० रूपैया दंड गर्नु रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

७. वाटो सडक् दोवाटोमा साल नाल स्मेत् फाल्याका ज्यूदा वालषलाइ अदालत ठानावाट ल्याइ दुद षुवाउन्या धाइ षोजि साज विहान षान्या सिधा र. वर्षका २ जोर कपडा सदावर्तवाट दिलाइ पालन लाउनु १६ वर्षको उमेर नहुंज्याल् वालषलाई पनि सदावर्तवाट साज बिहान षानालाइ सिधा र लाउननालाइ कपडा समेत् दिलाइ दिनु १६ वर्षको उमेर पुग्यापछि वुद्धि अनुसार सर्कारको रोजि लगाइ दिनु.

८. सहर गाउ पर्वतका गाहरूमा हैजा आठाचा षवट्या विफर इ रोग लागी वावु आमा मऱ्यावालष छोरा छोरि रहयाछं तिन्को सहि संभार गर्न्या दाज्यू भाइ मावली आपस्त कोहि पनि रहयाछन् भन्या तेस् गाउका द्वाऱ्या थरि मुषिया कटुवाल्या प्रधान नाइक्याले लैगी सहि

संभार गरि पालनु उन्का वावुको केहि धन रहेछ भन्या. तेहि धन षर्च गरि पालनु. केहि रहेनछ भन्या. तेसै जगाका आम्दानिले जो लाग्याको षर्च षुवाइ २ मैन्हा सम्ममा अदालतमा पुऱ्याइ दिनु. अदालत्मा ल्याइ पुऱ्याउदासम्ममा लाग्याको षर्च जगाका धनिले ठेकदार द्वाऱ्यालाइ मिन्हा गराइ दिनु तिन्लाइ षुवायाको विर्ता गुठि रैकर षुवा गैह्र जगाको पैदावार जस्ले षांछ तेसले मिन्हा दिनु. इजारा अमानत्का जगामा इजारा अमानत्.वालैले पालनु. सुनि जानि देषि संभार नगरि षाना नपाइ वालष मऱ्या भन्या. तेस जगाका द्वाऱ्या ठेकदार गाउका मोष्य जो हो तेस्को अैन वमोजिम् सर्वस्व गर्नु ज्यू भन्या मऱ्याको छैन संभार नगराइ अलपत्र पाऱ्याका रहयाछन् भन्या. तेस्ता द्वाऱ्यालाइ २० रूपैया थरिलाइ १० रूपया दंड गर्नु.

# सति जान्याको

१. कसैका विवाहिता वा भात षाजा चलन्या नचलन्या जात्का कंन्या ल्यायाका स्वास्निले सति जांछौ भन्या १६ वर्ष मनिकालाइ जान नदिनु.

२. विहा गऱ्याका र भात षाजा चलन्या नचलन्या जात्का कंन्या ल्यायाका स्वास्निमा १६ वर्ष नाघ्याकाले सति जांछौ भन्या कांछो छोरो १६ वर्ष पुग्याको रहेनछ भन्या सति जान नदिनु.

३. विहा गऱ्याका र भात षाजा चलन्या नचलन्या जात्का कंन्या ल्यायाका १६ वर्ष नाघ्या कि स्वास्निले सति जांछौ भन्या छोरि ५ वर्ष नपुग्याकी रहिछ भन्या सति जान नदीनु.

४. दोश्रो पोइ भयाका वा दोश्रोदेषि वढ्ता पोइ भयाका स्वास्निले सति जांछौ भन्या जान नदिनु.

५. गद्दिनसीद महाराजका रानि श्वर्गे हुदा र. उमराव भारादार रैयत गैह्रका स्वास्निहरू मर्दा सति जांछौ भन्या चाकर केटि कमारि गैह्रलाइ सति जान नदिनु. एस्तालाइ सति जा भनि वचन दि पोलाउन्या मोष्यलाइ ५०० रूपैया पोलन्या अरू मल्हामिलाइ जनहि २५० रूपैया दंड गर्नु.

६. वालष गर्भमा छदा लोग्न्या मर्न्या स्वास्निले र्गभ पैदा भयापछि सति जांछौ भन्या. जान नदिनु.

७. गर्भिणि स्वास्निले गर्भ रहयाको थाहा भया पछि १ मैन्हाको मात्रै गर्भ भया पनि गर्भिणि स्वास्निलाइ सति जान नदिनु.

८. आफ्नु छोरो मर्दा कुम्को सिडुर भनि छोराको सति जान नदिनु. छोराको सति जान हुंछ भनि वचन् दि पोलाउन्या मुडिन्या जात भया अैन वमोजिम् अंस सर्वस्व गरि दामल गर्नु. अरू जात भया काटि मारि दिनु. जानि जानि पोलन्या मल्हामिहरूलाइ अैन वमोजिम् सर्वस्व गरि छाडि दिनु.

९. विहा गऱ्याका र. भात चलन्या नचलन्या जात्का कंन्या ल्यायाका स्वास्निमा १६ वर्ष नाघ्याकिले आफ्ना षुसि राजिले षसंका सति जांछु भन्या. कांछो छोरोसंग वस्याको हवस् वेगल् वस्याको हवस्. उस्को १६ वर्षको उमेर भयाको रहेछ भन्या भरसष सम्झाउनु वुझाउनु गरि थामनु. थामन नसकियेन हटक गर्न लागी भन्या एस्तालाइ सति जान दिनु. आगो दिन्या पोलन्यालाइ वात लाग्दैन.

१०. विहा गऱ्याका र भात चलन्या नचलन्या जात्का कंन्या ल्यायाका स्वास्निमा १६ वर्ष नाघ्याकिले आफ्ना षुसि राजिले षसम्को सति जांछु भन्या उस्की छोरि ५ वर्षेनाघ्याकि रहिछ भन्या. भरसष सम्झाउनु वुझाउनु गरि थामनु. थामन सकियेन भन्या सति जान दिनु. आगो दिन्या पोलन्यालाइ षात लाग्दैन.

११. लोग्न्या लडाञिमा गै मर्न्या र राजकाजमा भयो वा आफ्ना सोषले देस पर्देस टाढा गै मर्न्याका स्वास्निले सति जांछौ भन्या. अैनमा सति जान हुंछ भनि लेषियाका स्वास्निमा व्राम्हण वाहेक अरू जात्का स्वास्निले आफ्ना षुसिले सति जांछु भंन्यालाई सति जान दिनु. व्राम्हणका मुर्दा जलायापछि २ चिता हुदैन नगर्नु.

१२. आफ्ना घरकि कमारि कंन्या देषि षसम्ले स्वास्नि तुल्याइ राष्यकी १६ वर्ष नाघ्याकि रहिछ भन्या उस्को छोरो १६ वर्ष पुग्याको रहेछ भन्या र. छोरि ५ वर्ष पुग्याकि रहिछ भन्या षुसि राजिले षसम्का सति जांछु भन्या कमारि स्वास्नि भया पनि जान दिनु.

१३. अैनले सति जान भन्या पाउन्या भात चलन्या जातकि सति पोलदा एकै सलो गरि नपोलनु वेगला वेग्लै सलो गरि पोलनु.

१४. आफ्ना लोग्न्या मर्दा अैनले सति जान पाउन्या स्वास्निले सति जांछु भनि पानि षान्याइ सोलमा चढि सागरमा पुगि उस् ठाउमा गर्नु पर्न्या गौरी पुजा गैह्र जातको विधि गरिसक्या पछि अैन वमोजिम प्रायश्चित्त दिलाइ भात पानिमा चलाइदिनु थामिइन भन्या. पनि तेस् सतिलाइ अझ पनि तिमि वस्छौ कि जांछौ आट भनि सम्झाउनु थामि भंन्याँ अैनले जान पाउन्या सति पोल्याका कुरामा वात लाग्दैन.

१५. सति जांछु भनि पानि षन्याइ सोलामा चढि आगो स्मेत् लाइ सक्यापछि सोलावाट षसि वल गरि उठि भागि गयाका सतिलाइ लाठा ढुँगाले नहानी जवरजस्ति नगरि कसैले नसमाति तिमी आफ्ना षुसिले सति जांछौ भन्या मात्रै हामि पोलछौ जांनौ भन्या सहि संभार गरि इलाज गराइ पतिया दिलाइ घरमा राषछौ भनुं र षुसिले सति जांछु मलाइ पोल भन्या. साछि गुहाइ राषि सतिको मुचुल्का लेषाइ लि पोलनु. वात लाग्दैन. साछि गुहाइ नराषि मुचुल्का नलेषाइ पोल्याको ठहऱ्या आगो दिन्या पोलन्यालाइ अैन वमोजिम् सजाय गर्नु. सति जांन भन्या इलाज गराइ सहि संभार गरि पानिको मात्रै पतिया पाउछे आगो लागी वाच्याकी हुनाले भातको पतिया पाउदीन.

१६. सति जांछु भनि पानि षन्याइ सोलामा चढि आगो नदिदासम्ममा सति जांन भनि वा वल गरि सोलावाट षसि भागी जान्या स्वास्निलाइ कसैले मारौ भनि लाठा ढुँगाले हानि पक्रि पोल्या माऱ्या भन्या मार भनि पैल्हे वचन् दिन्या १ पैल्हे हांन्या १ पैल्हे समाउन्या १ इ तिन्को अैन वमोजिम्को अंस सर्वस्व गरि दामल गर्नु. इन्देषि वाहेक् अरू जान्या समाउन्यालाइ औवललाइ २० दोयम्लाइ १५ सिम्लाइ १० चहारलाइ ५ रूपैयाका दर्ले दंड गर्नु.

१७. सति जान्या स्वास्निले सति जांछु. भनि षन्याइ सोलामा चढि आगो नदिदासम्ममा सोलावाट षसि लडि वगि वल गरि उठि भागि वा मलाइ नपोल डर लाग्यो भनि भन्या तेस्तालाइ नपोलनु. अैन वमोजिम् भात पानिको पतिया दिलाइ दिनु.

१८. १६ वर्ष मनिका स्वास्निलाइ हवस् वा. अैनले सति जान नदिनु. भंन्या लेषियाका १६ वर्ष नाघ्याका स्वास्निलाइ कसैले नसा अम्वल लागु षुवाइ हवस् फुल्याइ फकाइ हवस् अथवा आफ्नै षुसिले जांछु भनि हवस् पानि षन्याइ सति वस्याका स्वास्निलाइ सति जान नदिनु.

१९. सति जांछु भनि पानि षन्याइ सोलामा चढि आगो नदिदासम्ममा सोलावाट षसि लडि वगि वल गरि उठि भागि जान्या वा.मलाइ नपोल डर्लाग्यो भनि वाच्याका स्वास्निलाइ भात्को र सोलामा पुगि आगोलाइ सक्या पछि वाच्याका स्वास्निलाइ पानिको पतिया दिदा औवल्लाइ ५

दोयम्लाइ ३ सिम्लाइ २ चहारलाइ १ रूपैया गोदान् धर्माधिकारलाइ दिलाइ पतिया दिलाइ दिनु.

२०. अैनले सति जान पाउन्या स्वास्निलाइ जवर जस्ति गरि कर्लगाइ भयो वा लागु षुवाइ फुल्याइ भयो स्वास्निका मुषवाट. सति जांछु भनाइ कसैले पोलेछ भन्या. पोलन्या र पोलन लाउन्यालाइ अैन वमोजिम् दंड गरि अपुतालिको भाग आफु पाउन्या रहेछ भन्या उश्ले पाउन्या जति अपुतालि रैकर जगाको भया अदालत अमालवाट लिनु गुठि विर्ता वेषफिगढार मरौट्माना चावल् छापज्यूनि पेटिया षर्च गैह्र जगाको धनिले पाउछ उस्ठाउमा सामेल नहुन्या भाइले आफ्नु भाग अपुतालि षान पाउछ.

२१. अैनले सति जान पाउन्या स्वास्निलाइ लागु षुवाइ फुल्याइ उस्का मुषले सति जांछु भनाइ सति पोलेछ भन्या. आगो दिन्या उसैले जन्मायाको छोरो रहेछ भन्या ४० रूपैया सौतिन्या छोरा र अरूले भया १०० रूपैया वोकि लैजान्या र मल्हामिलाइ २० रूपैया दंड गर्नु.

२२. अैनले सति जान पाउन्या स्वास्निलाइ कसैले लागु षुवाइ जवर जस्ति गरि सति पोलेछ भन्या तेसैले जन्मायाका छोराले पोल्याको भया उस्का वावु आमाका अंसज्यूनिमा उश्ले पाउन्या अंस सर्वस्व गरि ६ वर्ष कैद गर्नु. म्यादको डवल् दिया लिनु. अरूले पोल्याको भया पैल्हे आगो दिन्या मुडिन्या जात भया अैन वमोजिम् अंस सर्वस्व गरि दामल गर्नु. काटिन्या जातलाइ काटि मारि दिनु. अरू मल्हामिमा अवल्लाइ २० दोयम्लाइ १५ सीम्लाइ १० चहारलाइ ५ रूपैयाका दर्ले दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु. सौतिन्या छोराले पोल्याको भया उश्ले पाउन्या ९ भाग जतिमात्रै सर्वस्व गरि लि छाडि दिनु.

२३. सति जांछु भनि पानि षन्याइ सोलामा चढि आगो नदिदासम्ममा सोलावाट षसि लडि वगि वल् गरि उठि भागि जान्या वा मलाइ नपोल डर्लाग्यो भंन्या स्वास्निलाइ अैन वमोजिम् भात पानिको पतिया भया पछि षांनौ भनी भात पानि नषान्या भताहा गैह्रलाइ जनहि ५ रूपैया दंड गर्नु.

२४. सति जांछु भनि सोलामा पुगि आगोलाइ सक्या पछि उम्कि वाच्याका स्वास्निको पानिको पतिया भया पछि पानि षांनौ भंन्यालाइ जनहि ५ रूपैया दंड गर्नु. एस्ता स्वास्निको भात भन्या चल्दैन.

२५. कसैको लोग्न्या मर्‍यो स्वास्निले सतिं जांन भनि चुरा फोरि जुठो वार्‍या पछि तेहि चुरा फोरी जुठो वार्न्या स्वास्नि सति जांछु भनि पानि षन्याइ भन्या र तेस्तालाइ कसैले पोलि दियो भन्या १२ वर्ष उभोका छोराले रहेछ भन्या षत वात लाग्दैन १२ वर्ष देषि माथिको छोरा भया पनि अरू भया पनि मोष्य पोलन्या र. पोलन हुंछ भनिवचन् दिन्याको अैन वमोजिम्को अंस सर्वस्व गर्नु. अरू मल्हामिलाइ औवल्के १० दोयम्के ७ा. सिम्के ५ चहार्के २ा रूपैया दंड गर्नु त्यो सति पोलि अपुतालि पर्न्या रहेछ र अपुतालि षान्या मोष्य भै पोल्याको रहेछ भन्या तेसले षान पाउन्या अपुतालि र तेस्को अैन वमोजिम को अंस सर्वस्व पनि गर्नु. अपुतालि षान्या भाइ मोष्य पोलन्या रहेनछ भन्या. अपुतालि सर्कार लाग्दैन दाइयावालाले पाउछ.

२६. कसैको लोग्न्या मर्‍यो स्वास्निले मर्‍याका आफ्ना लोग्न्याका गोडा धोइ पानि उसै दिन षाइछ भन्या पनि तेहि पानि पछि षादि रहिछ भन्या पनि स्वास्निलाइ षतवात लाग्दैन. पतिया प्रायश्चित्त पनि गर्नु पर्दैन.

२७. अैनमा सति जान नदिनु भंन्या लेषियाका स्वास्निमा कसैले षुसिराजि सित सति जांछु भनि पानि षन्याया पनि सति जान नदिनु. अैन वमोजिम् पतिया गराइ दिनु. आफ्ना षुसिले सति जांछु भनि पानि षन्याया पछि हामिलाइ क्या होला भनि एस्ता सति कसैले पोलेछ भन्या १२ वर्ष देषि मनिको छोराले रहेछ भन्या षतवात लाग्दैन. १२ वर्ष देषि माथिको छोरो भया पनि अरू भया पनि मोष्य पोलन्या र पोलन हुंछ भनि वचन दिन्याको अैन वमोजिम्को अंस सर्वस्व गर्नु. अरू मल्हामिमा अवल्के १० दोयम्के ७ा. सिम्के ५ चहार्के २ा. रूपैयाका दर्ले दंड गर्नु.

२८. सतिलाइ अैन वमोजिम् पतिया गर्नु. पर्न्यामा पतिया नगरि भात पानिमा सरोवर हुन्या सतिलाइ र सरोवर गर्न्यालाइ ५।५ रूपैया दंड गरि पतिया गराइ भात पानिमा अैन वमोजिम् चलाउनु.

२९. स्वास्नि मानिस कसैले अर्का कोहि मऱ्याको देषि मेरै लोग्न्या मरेछन् भंन्या ठहराइ नवुझि सति जांछु भनि पानि षन्याइछ पछि तहकित गर्दा उस्को लोग्न्या मऱ्याको रहेनछ ज्यूदै ठहऱ्यो भन्या तहकित नगरि मऱ्याको मेरै लोग्न्या हो सति जांन्छु भनी पानि षन्याउन्या एस्ता वेकुफ स्वास्निलाइ २० रूपैया दंड गरि पतिया गराइ दिनु. दंडका रूपैया नतिऱ्या मैन्हाका ५ रूपैयाका दर्ले कैद गर्नु.

# मुर्दा उठाउन्या

१. ब्राम्हण रजपुत क्षत्‍ गैह्र तागाधारि जात कोहि मर्न गयो मुर्दा उठाउनालाइ जात मिल्दो कोहि निस्केन भन्या तागाधारि तागाधारि जात्मा उपल्ला जातको मुर्दा तल्ला जातले तल्लाजातको मुर्दा उपल्ला जातले छुन उठाइ लैजान हुंछ तागाधारि जात नभया पानि चलन्या मतुवालि जातकाले पनि उठाउन हुंछ तागाधारि जातको मुर्दा पानि चलन्या मतुवालि जातले छोया उठायामा कृया गर्न्याले तेसै मर्न्याका नाउमा पाच आना देषि उभो पाच रूपैया सम्म गक्ष अनुसारको ब्राम्हणलाइ गोदान दिया गर्नु पतिया प्रायश्‍चित्त पर्दैन.

२. कोहि धन संपति नभयाको गरिव कंगाल मानिस् मर्न गयो मुर्दा उठाउन्या उस्को काजकृया गर्न्या कोहि निस्केन भन्या तेस्तालाइ जौन अमाल गाउमा मऱ्याको छ उसै ठाउका अमाली थरि द्वाऱ्या मुषिया ठेकइजारादारले तेसै गाउका आम्दानिमध्ये २॥ रूपैया षर्च लगाइ मुर्दा उठाइ काजकृया गराइ दिनु. मुर्दा नउठि २।३ दिन देषि वढता गावैमा रहयाको ठहऱ्या अमालि थरिलाइ २॥ रूपैया दंड गर्नु. रूपैया नतिऱ्या दिन १५ कैद गरि छाडि दिनु. मुर्दा उठाउदा लाग्याको षर्च सर्कारीया जगा भया सर्कारवाट जागीरेको जगा भया जागिरदारवाट विर्ता वेषछाप् गैह्रमाफि जगा भया धनिले ठेकदारलाइ मिन्हा दिनु.

३. आफ्ना गाउमा मऱ्याका मुर्दा उठाउनालाइ मानिस् षटाइ नदिन्या अमालिलाइ ५ रूपैया अमालिले षटाइ दिया पछि नजान्या रैयत्‌लाइपनि २॥.. रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

४. कोहि परचक्रि कसैले नचिन्हा नजान्याको मानिस् आइ जस्का गाउमा मर्छ वहाका अमालि थरिले त्यो मुर्दा उठाउन लाउनु मऱ्याको मुर्दा नउठाई २।३ दिनसम्म गाउ मै रहन गयो भन्या अमालिलाइ ५ थरिलाइ २॥ रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु. मर्न्याको वारिस् कोहि ठहरेन तेस्का कंवरमा कोहि धनमाल रहेछ भन्या. हाम्रा मुलुकको वासिंदा रहेछ भन्या तेस्का धनवाट सतगति गराइ रहयाको अमालिको हुंछ. वारिस निस्क्यो भन्या. तहकित गरि सतगति गराइ रहयाको जस्को हो उसैका जिम्मा गरि दिनु. आफ्ना मुलुक देषि वाहेक्‌का

देसि मुसाफेरको रहेछ भन्या काजकृया सतगति गराइ रहयाकी सर्कारको हुंछ अदालतमा पुऱ्याइ दिनु.

५. नेपालका गामल् वाहेक् तिन सहर्का निजामत् अरू गैह्र दुनिञाका लोग्न्या स्वास्निहरूमा कोहि मरि उठाउन्या गोष्ठि गोतिया कोहि नभै सहर्मा मुर्दा रहन गयो भन्या अदालत ठानावाट मुर्दा उठाउना निमित्त षटाया पछि षटियाका मानिश्ले मुर्दा नउठाइ सहर्मा मुर्दा २।३ दिन रहयो भन्या तेस्तालाइ २० रूपैया जरिवाना गर्नु. दंडका रूपैया नतिऱ्या कैद गर्नु.

६. कसैका गाउ घर छिम्याक्मा पानि नचलन्या मतवालि अछुति जात कोहि मर्न गयो भन्या मोष्य पाउंज्याल्. जात मिल्दो लगाइ मुर्दा उठाउनलाउनु. जात मिल्दो पाइयेन भन्या पानि चलन्या व्रांम्हण रजपूत क्षतृ मगर गुरूँ गैह्रले पनि मुर्दा उठाइ घाटमा पुऱ्याइ दिनु. अछुति जात का मुर्दा छोयामा व्राम्हणले स्नानगरि क्षत्रोपवास् गरि शुद्ध हुंछ तागाधारि गैह्र अरूले स्नान गरि शुद्ध हुंछ.

७. तागाधारि जात गैह्रका देस पर्देस गयाको भयो पानिमा वगि वनमा वाघ जनावरले षाइ भीर पोषरी इनार झोलंगा साघुषाडि गैह्रमा फालहालि कोहि मरेछ आफु भंदा घटि कोहि शुद्र जात पानि नचलन्या जात छोया छिटो हालनु पर्न्या जातले मुर्दा छोयेछ. आफ्ना भाइ छोराहरूले मुर्दा फेला पाऱ्या भन्या दाग वत्ति दिनु. पछि कृया शुद्धको पतिया गराइ काजकृया गर्नु. मऱ्यो भंन्या निश्चय पाया मुर्दा फेला परेन भन्या तेस्का भाइ छोराहरूले नारायन वलि गरि काजकृया गर्नु प्रायश्चित गर्नु पर्दैन.

# मऱ्यो भनी सुन्याउन्या

१. कोहि पर्देस गयाका मानिस्लाइ कसैले घरमा आइ फलानुता मऱ्यो भनि सुनायो र उसै षवरमा स्वास्नि सति पनि गैछ पछि त्यो मऱ्यो भन्याको मानिस ज्यूदै आयो भन्या त्यो सुनाउन आउन्या मानिस्लाइ काटिन्या जातलाइ ज्यानको वदला ज्यान लिनु. व्राम्हण जातलाइ अैन वमोजिम्को अंस सर्वस्व गरि दामल गर्नु.

२. पर्देस गयाका मानिस्लाइ कसैले फलानु त मऱ्यो भनि सुनायो काजकृया हुन नपाउदै आइ पुग्यो भन्या. मऱ्यो भनि सुनाउन्यालाइ १०० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु. मऱ्यो भन्याकालाइ केहि पर्दैन.

३. कोहि पर्देस गयाकोछ उस्लाइ कसैले घरमा आइ फलानु ता मऱ्यो भनि सुनाई दियो र घरका परियारले जुठो वाऱ्या छन् काजकृया गऱ्याछन् पछि त्यो मऱ्यो भनि सुनायाको मानिस् मऱ्याको रहेनछ र. जिउदै घरमा आयो भन्या मऱ्यो भनि सुनाउन्या मानिस् जो हो उस्लाइ १५० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु. पर्देसवाट घर आउन्या मानिश्ले प्रायश्चित गर्नु पर्दैन तिर्थ्या भोजले शुद्ध हुंछ. तिर्थ्या भोज गरि घरमा वस्नु.

४. कोहि मानिश्ले आगा डढचालाले पोलि भयो पानिमा लडि वगि भयो रूष भीर छाना झ्यालवाट षसी भयो चौपाया गैह्रले हानि मिचि भयो ढुँगा मुढो लागी भयो वा अरू कुराले वेरामि भै थलियाकालाइ फलानु ता छुट्टि भयेछ भनि कुरा गऱ्याकामा सुँन्या चाहिका वुद्धिले नपुगी मनले मरेछ भंन्या ठहराइ उस्का दाज्यू भाइ गैह्रलाइ फलानु ता मऱ्यो भनि सुनायेछ र. तेसै खवरमा सुन्याले जुठो स्मेत बारचाछन् भन्या अर्कोले भन्याको कुरो सुनी नवुझि भन्याको ठहर्न्याले मऱ्यो भंन्यालाइ २० रूपैया दंड गर्नु. जुठो वाऱ्याको रहेनछ भन्या १० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

# आसौच वार्न्याको

१. अव उप्रांत गद्दि नसीद महाराजाको र. गद्दि नसीदा राजाका पट्ट वंधा रानिको गद्दिमा पछि वस्न्या साहेव ज्यादाको आसौच वार्नु पर्दा उपाध्या र. जैसी व्राम्हणले जुघा जाहेक् मुँडन् गरि ३ दिन आसौच वार्नु वर्षि नवार्नु. अरू गैह्र जातले १३ दिन आसौच वार्नु जुघा स्मेत् मुँडन् गर्नु टोपि पगरि नलाउनु. वर्षि वार्दा दिन ४५ वर्षि वार्नु. एक रंगा रातो नलाउनु. छिटाछिटि को दोस छैन. पान नषानु रातो छाता नवोढनु छालाका जुत्ता नलाउनु. देव देवताको पुजा गर्दा ३ दिन संम वाजा नवजाइ कोरो पुजा गर्नु. चौथा दिन देषि वाजा वजाउनु. भजन गाउनु. चलि आया वमोजिमको पूजा गर्नु. जन्मदा छैटि नुवारन् पास्नि विहा व्रतवंध गर्दा वाजा नवजाइ मागल नगाइ कर्म चलाउनु. दसै तिहारहरू गर्नु. पाटि पौवा घर वनाउनु छाउन दिन १३ सम्म हुदैन. वाहा देषि हुंछ ४५ दिन भित्रमा एस् वमोजिम्, सुनि कन जस्ले मांदैन उस्लाइ १० रूपैया अदालत् ठाना अमालवाट. दंड गरि लिनु. रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु. ४५ दिन देषि उप्रांत रातो लाउन षान वाजा मंगल अघि देषि चलि आया वमोजिम्को सवै चल्छ केहि वार्नु पर्दैन.

२. कंपू पल्टन् कंपनिका जागीर्दार दर्वारिया निजामति मानिस कसैका आमा वावु वाहेक् अरू हाड गोत्र नाताका कोहि मऱ्या भन्या. जुघा जुल्फि षौरनालाइ एक आना देषि ५ रूपैया सम्ममा आफ्नु जो सक्यछ सोमाफिक मर्न्याका नाउमा गोदान् गरि दिनु. जुघा जुल्फि फालनु पर्दैन. आफैले कृया गरि दिनु पऱ्यो भन्या कृया गर्न्याले जुघा जुल्फि फालि कृया वस्नु दर्वारीया निजामति मानिस्मा कसैले जुघा जुल्फि फाल्यो भन्या षत लाग्दैन.

३. तागाधारि जातमा वाज्या वावु दाज्यू भाइ छोरा नातिले राष्याका वेस्या कमारि भोट्यानि नेवार्नि घर्मा ल्याइ अंस दि राष्या कि स्वास्नि कोहि मऱ्या भन्या षचर दाज्यू भाइ कोहि छन् भन्या. षचर दाज्यू भाइलाइ कृया गर्न लाउनु. षचर दाज्यू भाइकोहि नभया तेस्को संपति षान्याले आफैले कृया गर्नु.

४. सहर गाउ पर्देसमा आफुलाइ जन्माउन्या आमा वावु र. वाज्या वज्यू काका कांछि आमा सानि आमा दाज्यू भाइ भाउज्यू वुहारीहरूमा. कोहि मर्दा इन्का काजकृया गर्नु पर्न्या अधिकारवाला

छोरा नाति भतिजा दाज्यू भाइहरू भै कृया गरेनन् भन्या तेस्लाइता अदालत ठाना अमालवाट ल्याइ २० रूपैया दंड गरि काजकृया गर्न लाउनु. आफु भंदा कम जातकि स्वास्नि राष्यामा जात मिल्दामा ल्याइ काजकृया गराउनु उस्ता त पायेन भन्या आफुले गर्नु. तेस्मा षतवात लाग्दैन. अपुतालि पर्न गया धर्म वोटि काजकृया गरि दिंछु भंन्या दाज्यू भाइलाइ अपुतालि षानु पर्छ भंन्या कर लाग्दैन. साहु तिर्नाको कर पनि लाग्दैन. तैले कृया गऱ्या पछि मेरा रूपैया दे भनि साहुले धर पकर गरि लियेछ भन्या विगो फिराइ विगै वमोजिम् दंड गर्नु. धर पकर मात्र गरेछ रूपैया लियाको रहेनछ भन्या समात्याका जंमाका सयकरा ५ रूपैया दंड गरी समाउन पाउदैनस् भनि ठोकि दिनु.

५. कसैका अंस लि छुट्टियाको दाज्यू भाइ कोहि मऱ्यो र. उन्को काजकृया गरि अपुतालि षानु पर्न्याले काजकृया गऱ्यानन् भन्या. उसै गाउका अमालि थरिले मर्न्यैका धन मध्ये उस् जगाका भला मानिस्का तजवीजले ठहरायाको षर्च लगाइ काजकृया गराइ दिनु. वाकि धनमा उस्का साहु भया पुग्यासम्म दामासहि गरि वाडि दिनु. साहु रह्यानछन् भन्या पनि साहु तिरि वाकि रहन गयो भन्या पनि मर्न्याको अंस अपुतालि सर्कार अमालवाट काजकृया गराया पछि सर्कार अमालवाट लिनु.

६. कोहि मानिस मऱ्यो उस्का अपुतालि षान्या दाइया दार नजिकमा कोहि रहयान छन् र. गोतिया दाज्यू भाइ इष्टमित्र लगाइ मुर्दा उठाउनु काजकृया गराउनु पऱ्यो भन्या. मर्न्याका धनवाट कृया षर्च गरि रहयाका धनमा औवल्वाट २० दोयम्वाट १५ सीम्वाट १० चहारवाट ५ रूपैयाका दर्ले कृया गर्न्यालाइ षर्च दिलाइ रहयाको वाकि धन अैनले अपुतालि पाउन्या दाइयादारले मर्न्याको साहु तिरि षान पाउछन्.

७. नेवारहरू मर्दा मऱ्याका ठाउमा विचार गर्न जादा. नेवार्निहरूले वाटामा रूदैनजानु मऱ्याका ठाउमा पुग्या पछि रून्या गर्नु गल्लिमा हिडदा रून्या स्वास्निलाइ जनहि आठ आठ आना दंड गर्नु रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

८. आफ्ना हाडनाता कसैले आफुलाइ मार्नाको मतलव गऱ्यो ज्यान मार्नाका लागी कृत्या प्रयोगहरू गऱ्यो भन्या र. आफ्ना विवाता ल्याईता स्वास्नि विगरिदियो भन्या. तेस्तालाइ

हाडनात को हो त पनि एस्तो कर्म गर्न्याको काजकृया गर्दिन जुठो सुतक पनि वार्दिन भंन्यालाइ षतवात लाग्दैन.

९. कसैले आफ्ना विवाहिता स्वास्निलाइ मेरो दिदि वैन्हि छोरि आमा जतिकि भैस् भनि छोड्यो भन्या. तेस्वाट अैन वमोजिमको अंस स्वास्निलाइ दिलाइ दिनु. लोग्न्याले एस्ता तरहले छोड्याका स्वास्नि अरू कसैसित विग्रचा भन्या षतवात लाग्दैन एस्ताको जार काटन पनि पाउदैन. काटचा ज्यानको वदला ज्यान हुंछ एस्ता वेगल वस्याका अैनले जार हाँन हुन्यासम्मका स्वास्निको करणि गऱ्यो भन्या ३० रूपैया दंड गर्नु.प्रायश्चित्त पर्दैन. फेरि लोग्न्या स्वास्नि मिलि वस्या पछि त्यो स्वास्नि अर्कासित पोइल गै भन्या. अैन वमोजिम्. जार हाँन र सजाय गर्न पाउछ मुषले दिदि वैन्हि छोरि आमा जतिकि छस् भन्या करणि पनि गर्दै रहन्यालाइ २० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु. ल्याइता स्वास्निलाइ दिदि वैन्हि छोरि आमा जतिकि भैस् भंन्या करणि पनि गर्दै रहन्यालाइ १० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

१०. आफ्ना वावु छोरा दाज्यू भाइ हाडका नातामा कसैसित झगरा भै मेरि लेषा त मरिस् तेरो जुठो पिंड छुटचो भनि पानि षन्याइ षल्को हालन्यालाइ १० रूपैया दंड गरि पतिया गराइ दिनु. पछि जन्म्या मऱ्यामा जुठो सुतक् वार्न र काजकृया गर्नु पर्न्यामा गराइ दिनु.

११. गर्भ रहयाका ३ मैन्हा देषि ६ मैन्हासम्मको गर्भ पतन् भयामा जति मैन्हाको गर्भ गिऱ्याको छ. मैन्हाका १।१ दिनका हिसावले उत्ति दिन आमालाइ सुतक् लाग्छ वावु स्नान मात्रले शुद्ध हुंछ. अरू दसाहा भाइलाइ एस्तो सुतक् लाग्दैन. ७ मैन्हा देषि उभोको जातक् जिउदो जन्मोस् वा मऱ्याको जन्मोस् आमा वावु दसाहा भाइलाइ १० दिन सुतक् लाग्छ.

१२. जन्म्याको वालष नुवारान् नहुदै मऱ्याका दाहा नगर्नु षनन् गरि गाडनु. आमा वावुलाइ ३ दिन जुठो लाग्छ जन्म निमित्तको ता १० दिन नहुंज्याल्सम्म सुतक् रहंछ. अरू दसाहा भाइलाइ जुठाको स्नान मात्र लाग्छ सुतक् भन्या १० दिन वार्नु पर्छ.

१३. स्वास्नि सुत्क्यारि हुदा छोरो जन्मोस् छोरि जन्मोस् लोग्न्याले स्नान नगरूं ज्याल् अरूले छुन हुदैन. सुत्क्यारिलाइ १० दिन छुन हुदैन. एसैभित्र वेरामि भै इलाज गर्ना निमित्त छुनु पऱ्यो भन्या र. भ्रुक्कि कसैले छोयेछ भन्या. छुन्याले तागाधारिले स्नान गरि पंच गव्य षाइ शुद्ध हुंछ.

१४. सुतक् वार्दा जात मिल्दाको दसाहा भाइले १० दिन वार्नु ३ दिन्या ज्ञाति भाइको ३ दिन वार्नु. सुतक् वार्दा लेषियाका दिनभित्र सुन्या वाकि दिन वाऱ्या हुंछ भात नचलन्या स्वास्निवाट जन्म्याकाको जन्माउन्या वावुले ३ दिन वार्नु अरू दसाहा भाइले पनि ३ दिनवार्नु लेषियाका दिनवित्या पछि सुन्या सुतक् वार्नु पर्दैन. सुतक्मा अतिक्रांत हुदैन.

१५. सुत्क्यारि हुन्या स्वास्निका हातको तागाधारि जातलाइ २० दिन भयापछि पानि मैन्हा दिन भया पछि भात चल्छ. अरू जात गैह्रका २० दिन देषि भात पानि चल्छ. मैन्हा नपुग्याको गर्भ पतन् भयामा ११ दिन देषि भात पानि चल्छ.

१६. वालष जन्म्या पछि वालषको नाल नवेढाउन्जी सम्म र छैटिका दिन राहुवेध नहुदासम्म सुतक् लाग्दैन. व्राम्हणहरूलाइ दान दक्षिणा गर्न भोज गराउन हुंछ तेस वेलामा दान दिन्या लिन्या षान्याहरूलाई दोस छैन. इदिन वाहेक सुतक लाग्छ.

१७. नुवारन् भया पछि ७ मैन्हाभित्रमा वालष मऱ्यो भन्या दाहा नगर्नु. षनन् गरि गाडनु ७ मैन्हा देषि उभोका वालष मऱ्या आफ्ना संप्रदाय माफिक् षनन् गर्न्याले षनन् गरि गाडनु दाहा गर्न्याले दाहा गर्नु हुंछ. आमा वावुलाइ ३ दिन अरू दसाहा भाइलाइ १ दिन जुठो लाग्छ.

१८. ३ वर्ष देषि उभो छोराको व्रतवंध छोरिको विहा नहुदैमा मऱ्या भन्या. आमा वावुलाइ पनि दसाहा भाइलाइ पनि ३ दिन जुठो लाग्छ ३ दिन नाघि सुन्या आमा वावुलाइ १ दिन जुठो लाग्छ अरू दसाहा भाइलाइ स्नानमात्र लाग्छ.

१९. तागाधारि जातका व्रतवंध भया पछि मर्न्याको पुरो जुठो लाग्छ ७ पुस्तासम्मका दसाहा भाइलाइ १० दिन जुठो लाग्छ १० दिन वित्या पछि सुन्या ३ दिन मात्र लाग्छ ८ पुस्ता देषि

१४ पुस्तासम्मका जाति भाइ मऱ्यामा ३ दिन जुठो लाग्छ. ३ दिन पछि सुन्या १ दिन वाऱ्या हुंछ. १४ पुस्ता देषि २१ पुस्तासम्मका गोतिया भाइ मऱ्यामा १ दिन जुठो लाग्छ. तेति वित्या पछि सुन्या स्नानमात्र गरि शुद्ध हुंछ.

२०. आफ्ना वावु आमा मऱ्या मा ढिकुरो नफुटि १० दिनभित्र छोराले सुन्यो भन्या वाकि रह्याका दिन वारि आफ्ना पुर्षा देषि चलि आयाको जातको रीत गरि शुद्ध हुंछ ढिकुरो फुटचा पछि सुन्यो भन्या. वावु आमाको जुठो छोरोले वार्दा. अघि काजकृया भै सकियाको रहेछ भन्या. मुँडन् गरि १० दिन संम हविष्य १।१ छाकमात्र षाइ आसौचका अंत्यामा गोदान व्राम्हणलाइ सिधा दक्षिणा गरि शुद्ध हुंछ जश्ले सपिंड गर्नु पर्न्या हो त्यो उस् ठाउमा रहेनछ भन्या कृया गर्न्याले सपिंड स्मेत् गरि काम सिद्ध गर्नु. सपिंड गर्नु पर्न्या छोराले फेरि सपिंड गर्दा प्रेत पिड गर्नु पर्दैन. पंचगव्य षाइ ३ पिंड वनाइ पार्वणका विधिले श्राद्ध गरि गोदान व्राम्हण भोजन् गराइ शुद्ध हुंछ अघि कृया भयाको रहनेछ भन्या. आफ्ना जातमा चलि आया वमोजिम् काजकृया गर्नु.

२१. जात मिल्दा सौतिन्या आमाको जुठो मऱ्याका १० दिनभित्र सुन्या वाकि दिन मात्रै वार्नु १० दिन नाघि सुन्या ३ दिन लाग्छ. भात नमिल्न्या कम् जातका सौतिन्या आमा मऱ्याको १० दिनभित्र सुन्या ३ दिन जुठो लाग्छ १० दिन पछि सुन्या १ दिन वारि शुद्ध हुंछ.

२२. विवाह भयाका आफ्ना छोरि आफ्ना एका जातका दिदि वैन्हि सहोदर फुपु मामा माइज्यू भानिज छोरिका छोरि आफुलाइ मंत्र सुनाउन्या गुरू गुर्मा आफ्नि आमाका एका आतका दिदि वैन्हि सानि ठुलि आफ्नि आमाका वावु आमा आफ्ना सासु ससुराको जुठो र छोरिले वावु आमाको जुठो ३ दिन वार्नु ३ दिन नाघि सुन्या १ दिन वार्नु.

२३. आफ्ना वावुवाट जन्म्याका जात मिल्दा सौतिन्या दिदि वैन्हि सौतिन्या फुपु सौतिन्या मामा सौतिन्या सानिठुलि आमा आफ्नी छोरि दियाको जवाइ एतिको १ दिन जुठो लाग्छ १ दिन पछि सुन्या स्नान गरि शुद्ध हुंछन्.

२४. जात मिल्दा विवाहिता स्वास्निको लोग्न्यालाइ लोग्न्याको स्वास्निलाइ काजकृया भयाको रहेछ भन्या पनि जुठो जादैन. जैल्हे सुन्या पनि १० दिन पुरो वार्नु पर्छ ११ दिनमा पंचगव्य षाइ गोदान गरि व्राम्हण भोजन् गराइ शुद्ध हुंछन्.

२५. भात नचलन्या जातका कंन्या विधवा ल्यायाका जारि गरि ल्यायाका स्वास्निको जात मिल्दो कृया गर्न्या अर्कोछ भन्या लोग्न्यालाइ ३ दिन जुठो लाग्छ कृया गर्न्या अर्को नभया स्वास्निको कृया लोग्न्याले गर्नु पुरो जुठो लाग्छ. कृया सकिया पछि गोदान गर्नु. व्राम्हण भोजन गरि शुद्ध हुंछ. तेस्ता ल्याइता स्वास्निको लोग्न्या रहेनछ भन्या र. उसै लोग्न्याका सत्यमा वसि रहयाकि मरि भन्या अपुतालि षान्या भाइले जात मिल्दो लगाइ क्रिया गराइ दिनु. जात मिल्दो कृया गर्न्या पाइयेन भन्या सतगति दसौ दिनका दिन यथा सक्ति गोदान व्राम्हण भोजन् गरि शुद्ध हुंछन्.

२६. भात नचलन्या जातका कंन्या विधवा ल्यायाका जारि गरि ल्यायाका स्वास्निवाट जन्म्याका छोरा छोरि जन्मदा मर्दा जन्माउन्या वावुलाइ सुतक जुठो ३ दिन लाग्छ. आमालाइ पुरो लाग्छ. अरू दाज्यू भाइ दसाहा गैह्रलाइ ३ दिन जुठो लाग्छ. काजकृया गर्न्या कोहि रहेनछन् भन्या. दसाहा दाज्यू भाइले कृया गर्नु. कृया सक्यापछि गोदान गरि व्राम्हण भोजन् गराई शुद्ध हुंछ. भाइहरूले कृया गरेनन् भन्या अपुतालि षान्या हकवालालाइ १० रूपैया दंड गरी कृया गर्न लाउनु. भात नचलन्या ल्यायाका स्वास्नि र इनैवाट जन्म्याका छोराले सद्य दाज्यू भाइ दसाहाको सुतक जुठो भन्या पुरो वार्नु पर्छ.

२७. आफ्ना पुरोहित विद्या पढाउन्या गुरू मित आफ्नु सिष्य सिष्यानि आफ्ना दाज्यू भाइका छोरि छोराका छोरि नातिनी जेठा कांछा वावुका छोरि आफ्ना सहोदर दिदि वैन्हिदियाका भिनाज्यू जुवात्रि आफ्ना वावुले जन्मायाका विमात्रि भात नमिल्न्या दिदि वैन्हि आफ्ना छोराले ल्यायाका भात नमिल्न्या स्वास्निवाट जन्म्याका नातिनिहरूको १ दिन जुठो वार्नु १ दिनपछि सुन्या स्नान मात्रै गर्नु.

२८. कसैले अैन वमोजिम् जन्माउन्या वावु आमासित मागि हवस् धन दि हवस् आफुले ल्याइ कागजपत्र गरी राष्याको धर्म पुत्र मर्‍यो भन्या तेस् धर्म पुत्रको धर्म पुत्र राषन्या वावु आमा

लाइ र. आमा वावुको धर्म पुत्रलाइ पुरो जुठो सुतक लाग्छ. आफ्ना हाडको धर्म पुत्र भन्या दसाहालाइ पनि पुरो जुठो सुतक लाग्छ अरू गोत्रको ल्यायाको रहेछ भन्या धर्म पुत्र राषन्या वावु आमालाइ पुरो लाग्छ दसाह भाइलाइ ३ दिन जुठो लाग्छ. धर्मपुत्रका संतान्को दसाहा भाइलाइ दसाहाको धर्म पुत्रका संतान्लाइ पुरो सुतक जुठो लाग्छ. भात नमिल्न्या घटि जातको धर्मपुत्र भया. धर्म पुत्र राषन्या वावु आमालाइ ३ दिन दसाहा भाइलाइ १ दिन जुठो सुतक लाग्छ. एस्ता धर्मपुत्रले धर्मपुत्र राषन्या वावु आमालाइ र दसाहा भाइको पुरो जुठो सुतक वार्नु

२९. कसैका एकै आमाका २।३ वावुवाट जन्म्याका छोरा रहयाछन् भन्या तेस्ताको एका ओदरवाट जन्म्याका हुनाले मर्दामा परस्पर ३।३ दिन जुठो वार्नु.

३०. आफ्ना षसम्. षस्मिनिहरू मरि घरमा जुठो पऱ्यो भन्या किरीया चाकर षवास्या केटि कमारा कमारिहरूलाइ पुरो जुठो लाग्छ. दर्माहादार चाकर वाधा वधेत्यानि मानु षाइ चाकरि गरि वस्न्या एस्ता चाकरहरूलाइ ३ दिन जुठो लाग्छ. आफ्ना घरका षसम् षस्मिनि वाहेक षसंका अरू दसाहा भाइ मऱ्यामा चाकरलाइ जुठो लाग्दैन.

३१. कसैका वावु आमा मऱ्या काजकृया गर्न्या जात मिल्दा दाज्यू भाइ कोहि छैनन् कर्म नचल्याका छोरा छोरि छन् भन्या तिन्का वारिस् इष्टमित्रले तेस वालषले सकन्या रहेछ भन्या मऱ्यैका दिनदेषि हविष्य षुवाइ राषनु. सकन्या रहेनछ भन्या ९ दिनमा हविष्य षुवाइ १० दिनका दिन तेसै वालष छोराछोरिका हातवाट चावलका हवस् जौका हवस् १० पिंड दिलाइ गोदान गराइ पंचगव्य षुवाइ व्राम्हण भोजन् गराइ शुद्ध हुंछ.

३२. आफु मिल्दा जातको हवस्. आफु भंदा घटि वढि जातको हवस् दाज्यू भाइ इष्ट मित्र कोहि नभयाका मानिस् मऱ्यामा मर्न्याको धनमाल केहि नलि धर्म निमित्त मुर्दा वोकि लैगी सेलाउन्या पोलन्या मट्टि दिन्याहरूलाइ ठुलो जज्ञ गऱ्याको फल मिल्छ. सत गति गरि दिन्याहरू स्नान गरि अग्नि छोइ धुप हालि शुद्ध हुंछन् जुठो लाग्दैन.

३३. व्रम्हाचारि वान प्रस्थ संन्यासि गैह्न भेषधारि भयाका मऱ्यामा दसाहा दाज्यू भाइ स्नानले शुद्ध हुंछन् दसाहा मऱ्यामा भेषधारि गैह्न पनि स्नान मात्रले शुद्ध हुंछन् वावु भेषधारि भयाको भन्या पनि छोरा स्वास्निलाइ १० दिन जुठो लाग्छ छोरो भेषधारि भयाको छ वावु आमा मऱ्या भन्या तेस्ले १० दिन जुठो वार्नु पर्छ.

३४. दसाहा भाइमा अघि सुतक पऱ्याको नुवारन नहुदै अरू वृद्धि सुतक पर्न गयो भन्या सुतक पऱ्याको घर र दसाहा भाइ स्मेत् अघिल्लै सुतकले शुद्ध हुंछन् पछि जसजस्का घरमा सुतक पऱ्याको छ तिन्का घरलाइ मात्रै. सुतक लाग्छ १० दिन पुग्या पछि शुद्ध हुंछन्. अघिवाट ३ दिन वार्नु पर्न्या सुतक पऱ्याको छ पछि १० दिन वार्नु पर्न्या सुतक पऱ्यो भन्या दसाहाले दसै दिन सुतक वार्नु पर्छ अघिल्लाले जादैन.

३५. अघिवृद्धि शुतक पऱ्याको छ पछिवाट दसाहा भाइमा कोहि मरि जुठो पऱ्या भन्या वृद्धि सुतकले मृत्यु सुतक जादैन. जुठाको १० दिन भया पछि नुवारान् गरि शुद्ध हुंछ.

३६. आफ्ना दसाहा दाज्यू भाइमा कोहि मरि जुठो पऱ्याको छ तेस्का दस् दिनभित्र फेरि अर्को मरि जुठो पऱ्यो भन्या. अघिको कृया पुत्री र दसाहा भाइ अघिल्लै जुठाले शुद्ध हुंछन् पछिवाट जस्का घरमा मऱ्याको छ त्यो घर र. वेगल घर गरि वस्याका छोरालाइ मात्रै जुठो रहंछ पछिल्ला जुठो भित्र अर्को दसाहा कोही मरि जुठो पऱ्यो भन्या. अघिल्ला जुठाले शुद्ध नभै रहयाका तेसै जुठाका १० दिनले शुद्ध हुंछन्. पैल्हेका जुठाले शुद्ध हुन्याहरूले दसै दिन जुठो वार्नु पर्छ.

३७. कसैका दसाहा भाइ भित्रमा २।३ जना मऱ्यामा कोहि उसैदिन मऱ्याका रहयाछन् कसैका ९ दिन वा ७।८ दिन भयाका रहयाछन् जुठो सुंदा सवैको एकै दिन सुन्यो भन्या. पैल्हे जुन चाहिंको जुठो सुन्याको छ उस्का १० दिन सम्म वार्नु पछि सुन्याकाको तेसै जुठाले जांछ वढता दिन वार्नु पर्दैन.

३८. पैल्हे ३ दिन वार्नु पर्न्या जुठो सुन्याको छ तेसै दिनभित्र १० दिन वार्नु पर्न्या जुठो सुन्यो भन्या अघि सुन्याका ३ दिनका जुठाले १० दिन लाग्न्या जुठो जादैन. पुरो वार्नु पर्छ. अघि १० दिन्या

जुठो सुन्याको छ तेसैभित्र ३ दिन्या सुन्यो भन्या अघिल्ला १० दिन्या जुठाले तिन् दिन्या जुठो जांछ.

३९. अघि जुठो सुन्याको छ तेस्तैमा सुतक पऱ्यो भन्या जातकर्मसम्म गर्नु हुंछ जुठो नसकि नुवारान् गर्न हुदैन. जुठो गै सकिया पछि नुवारान् गर्नु.

४०. शुद्ध मैन्हामा मऱ्याका मानिस्को वर्षि मलमासमा पऱ्यो भन्या मलमासैमा गर्नु अरू वर्ष दिनमा नगरिन्या क्षयाह श्राद्ध भन्या. मलमास पऱ्याका वर्ष शुद्ध मैन्हामा गर्नु. मलमास पऱ्याकाको वर्षि वर्षदिन जैल्हे पुग्छ उसैदिन गर्नु. अरू पछिका श्राद्ध भन्या मलमास पऱ्याका वर्ष मलमासैमा गर्नु.

४१. कसैका जात मिल्दा छोरा स्वास्नि दाज्यू भाइ कोहि छैनन् भात नमिल्न्या छोरा स्वास्नि मात्रै रहयाछन् वावु मऱ्यो भन्या. पाउंज्याल् जात मिल्दो षोजि काजकृया गराउनु. जात मिल्दो कोहि पाइयेन् भन्या तिनै स्वास्नि छोराछोरिले ९ दिन हविष्य १ छाक षाइ १० दिनमा ढिकुरो नउठाइ जौका १० पिंड गरि एघारौ दिनदेषिको आफ्ना हातले गर्न्यासम्मको कर्म गरि गोदान व्राम्हण भोजन् गरि शुद्ध हुंछ.

४२. शुद्र जात गैह्रका १० वर्ष उधोका वालष जन्म्या मऱ्यामा वालषका अैन वमोजिम् जन्म्याकाको सुतक मऱ्याकाको जुठो वार्नु १० वर्षदेषि उभो पुरो जुठो सुतक लाग्छ आफ्ना जातमा चल्याका रीत वमोजिम् जति जति दिन वारी आयाको छ दसाह भाइले र. आमा वावु छोराछोरिले उति दिन पुरो जुठो वार्नु.

४३. राजा र मंत्रिले देस देसावरको काम र आफ्ना राज्यको स्थिति वंदोवस्त गर्नु पर्न्या हुनाले आसौच हुदैन.

४४. लडाइमा जानाको निश्चय भयापछि जुठो सुतक पऱ्यो भन्या पनि निश्चय गऱ्या का दिनमा गै युद्ध गर्न हुंछ जुठो सुतकले छेक्तैन.

४५. लडाजीमा सन्मुष भै वैरीका हातवाट मर्न्या वीरको जुठो छोरा स्वास्नि वाहेक अरू दसाहा भाइ सवैलाइ स्नान मात्रैले शुद्ध हुंछ छोरा स्वास्नि छैनन् भन्या औद्ध देहिक कृया पनि १ दिनमा सवै गर्नु हुंछ. छोरा स्वास्निलाइ भन्या चलि  आयाको हुनाले दसै दिन जुठो लाग्छ. लडाजी गर्दा घा लागी रणभूमिमा गिऱ्याको तेसै घाउका पीरले पछि प्राण छाडन्या र गाइ व्राम्हण वालष स्वास्नि मानिस् एतिका गुहार निमित्त जादा मर्न्याका दसाहालाइ १ दिन जुठो लाग्छ.

४६. वैद्यले वैदांगको काम गर्दा. कर्मिले आफ्नु काम गर्दा धोविले कपडा धुदा कमारा कमारि चाकरहरूले कामकाज गर्नालाइ आफ्ना जुठा सुतकले छेकदैन आफु आफुले गर्न्या काम इलम् गर्नु हुंछ.

४७. कोहि मानिस् लोटि भयो जलमा वगी भयो जनावरले षाइभयो पशुले हानि मऱ्याका आगामा डढी मऱ्याका ढुगो मुढो लागी पैराले मिचि वज्र परि मऱ्याका मानिस्को दाह गर्न कृया गर्न हुंछ. प्रायश्चित्त पर्दैन. मर्छु भनि फाल हालि मर्न्या हतियार चलाइ आफै सेरि रोषि मर्न्या पासो लगाइ झुंडि मर्न्या विष षाइ आगामा फाल हालि मर्न्याको सतगति गर्न हुंछ. क्रिया गर्नालाइ पाच आना पैसा धर्माधिकारको दस्तुर गोदान अमालिका जिम्मा दि आफ्ना जातका रीतको काजकृया गर्नु.

४८. कोहि मानिस जलमा वग्यो जनावरले षायो उस्का संगमा रहयाका मानिस्ले देष्या मऱ्याको भन्या तहकित भयो मुर्दा भन्या पाइयेन भन्या तेस्ताको १० दिन भित्र जौन दिन नारायण वलि गर्छन्. उसै दिनदेषि जुठो वार्नु मऱ्याका दिन देषिको हिसाव गरि १० दिन पुग्यापछि आफ्ना जातको रीत गरि शुद्ध हुंछ. १० दिन नाघ्या पछि सुनि नारायण वलि गऱ्या दसाहालाइ ३ दिन कर्त्तालाइ १० दिन जुठो लाग्छ.

४९. सितला हैजा ज्वरादि महारोग आयामा जुठो सुतक पऱ्यो भन्या एस्ता आपत्ति पऱ्यामा र अथवा आसौच पऱ्याको भयो क्रियामा वस्याको एस्ता रोग लागी प्राण संधि भयाका मानिसले. म. जपपाठ पूजा लाउछु. दान पुण्य गर्छु भन्या गर्न हुंछ. गर्न्या गराउन्यालाइ प्रत्यवाय लाग्दैन. एति वाहेक. अरू देव पितृ कार्य सुतक जुठो छंज्याल् केहि गर्न हुदैन.

५०. तागाधारि जातका रजस्वला भयाका स्वास्निलाइ वेरामि भयाकामा इलाज गर्ना निमित्त घाट लैजादा कसैले छोयो भन्या र. भुक्किकन छोयो भन्या. स्नान गरि जनै फेरि शुद्ध हुंछ.

५१. विहा नभै माइतिका घरमा रहयाका छोरि रजस्वाला भया पछि माइतिकै घरमा मऱ्या भन्या वावु आमा हुन्याको वावु आमालाइ नभया संग रहयाका दाज्यू भाइलाइ १० दिन जुठो लाग्छ १० दिनका दिन जौका वा चावलका १० पिंड गरि एघारौ दिन पंचगव्य षाइ गोदान व्राम्हण भोजन् गरि शुद्ध हुंछ.

५२. कोहि पेट वोक्याका स्वास्नि वालष पैदा नभै मऱ्यामा ३ मैन्हादेषि वढिको गर्भ रहेछ भन्या. तेस् स्वास्निलाइ दाह गर्दा लोग्न्या रहेछ भन्या लोग्न्याले लोग्न्या नभया लोग्न्याका दाज्यू भाइ दसाहा भाइहरूले पेटको जातक झिकि गाडि स्वास्निलाइ माटो गोवर भस्म लगाइ पंचगव्य कुशको पानी तिर्थको जलस्मेत् गरि नाङ्गलाका जलले नुहाइ गोदान गराइ शुद्ध कपडा लगाइदि दाहा गरि काज कृया गर्नु.

५३. कोहि देस पर्देस् गयाको मानिस् मऱ्याको षवर केहि पायाको छैन उस्का वारिस् वालाले फलानु पर्देस् गयाको ढेरै भयो आजसंम मऱ्यो ज्यूदो केहि पत्ता छैन. उमेर पनि ढेरैको भयो तेस्को काजकृया गर्छु भनि भन्यो भन्या घरवाट जादाको उमेर र. पर्देस गयापछिका वर्ष ज्मा गरि १०० वर्षको उमेर नाघ्यापछि पणंसर नारायण वली गरि काज कृया गर्नु. कदाचित् मऱ्याको रहेनछ र. फर्कि आयो भन्या १०० वर्ष नाघ्याको कृया गर्न्यालाइ षत लाग्दैन. फर्कि आउन्याको जात जादैन. तिर्थ्या भोजले शुद्ध भै आफ्ना जातमा रहंछ १०० वर्ष नपुगी अपुतालिका आसाले काज कृया गरेछ पछि जिउदो फर्कि आयो भन्या. कृया गर्न्यालाइ उसैले पाउन्या अपुतालि वमोजिम् दंड गर्नु. फर्कि आउन्यालाइ तिर्थ्या भोजले शुद्ध हुंछ.

५४. संकल्प गरि प्रायश्चित्त गर्न लाग्याका जप पाठ होमको संकल्प गरि कामगर्न लाग्याकालाइ निमतालि श्राद्धका काजमा लाग्यका व्राम्हणलाई श्राद्ध निमित्तको पाक सिद्ध भया पछि कर्त्तालाइ यज्ञादिका निमित्त वरण भयाका. व्राम्हणलाइ अन्नको सदावर्त चलाउन्या

कामगर्न्यालाइ नांदि श्राद्ध भयापछि विवाह व्रतवंध यज्ञादिहरू गर्न्यालाइ काम गर्न हुंछ. जुठासुत्तकले छेकतैन.

५५. कसैले व्राम्हण भोजन गराउदा व्राम्हणले षानलाग्याका वेलामा तेसै जजमान्को घरैमा कोहि मरी जुठो पर्‍यो भन्या षानलाग्याका व्राम्हणले जति षायाकोछ उसै छोडि दिनु. फेरि नषानु. घरमा रहेनछ अरू दसाहा भाइको जुठो सुनियो भन्या जजमानहरूलाइ छुन नदि भान्सावाट वाहेक गरि जुठो नसुदै पाक भयाको हुनाले व्राम्हणहरूले षान हुंछ.

५६. जुठोपरि आसौच वार्‍याका मानिस्का हातको पाक जानि जानि षान्यालाइ जति दिन उस्को जुठो वाकि रहंछ तेति दिन षान्यालाइ पनि जुठो लाग्छ. चाल नपाइ भोरमा षायेछ भन्या १ दिन जुठो लाग्छ. गोदान गरि शुद्ध हुंछ. आपत्ति पर्‍याका ले षायेछभन्या. जति दिन षायाको छ. उति दिन जुठो लाग्छ. गोदान गर्नु पर्दैन. जुठो पर्न्याका हातको पाक कसैले नषानु जानिजानि षान्यालाइ पातक लाग्छ.

५७. जुठो पर्न्याका घरको नुन् तेल घ्यू. मह. सषर. चिनीषुदो मासु फलफुल जरि वुटि औषधिकाठका भाडा पातमाटो दहि दुद सुक्याको छाला काचो अंन धातु जातिनछोयाको पानि कपडा चौपाया सुर्ति तमाषु मसला गैह्र यति वस्तु लिदा षान्या कुरो छोयाको नलिनु. जुठो पर्न्या कर्ताका हातले नछोइ अरूका हातले दियाको लिन हुंछ.

५८. रात्रिमा जन्म्या मर्‍याका दिन गंनु पर्दा अरूणोदय देषि अघि मर्‍याकालाइ अघिल्लै दिनको हिसाव गर्नु. पछि मर्‍याकालाइ पछिल्लै दिनदेषि को हिसाव गर्नु जन्म्यामा घडि नथापंज्याल अघिल्ला दिनको हिसाव गर्नु. घडि थापिया पछिको पल्ला दिनको हिसाव गर्नु.

५९. आफ्ना घरको हवस् दसाहा भाइका घरको हवस. जुठो सुतक पर्‍यामा आफुले गरि आयाको गायत्री जपहरू गर्दा. मुषले उच्चारण नगर्नु. मनले मात्र स्मरण गर्नु. मंत्र स्मेत् प्राणयाम् गरी सूर्यलाइ अंजलि दिनु. अरू विधि गर्नु पर्दैन.

६०. आफुलाइ जन्म्याउन्या वावु आमा मऱ्याको सुन्यापछि काजकृया नगर्न्या र. जुठो नवार्न्या छोरालाइ २० रूपैया दंड गरी जुठो वार्न काजकृया लाउनु वावु आमा वाहेक अैनले जुठो वार्नु पर्न्या हाडका कोहि मऱ्यामा जुठो नवार्न्यालाइ ५ रूपैया आफ्ना मावलि ससुरालिका नातामा र आफ्नुमित गुरू गुर्मा गैह्र अैनमा जुठो वार्नु भनि लेषियाकाको जुठो नवार्न्यालाइ २॥ रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

६१. जुठो पऱ्यामा कृया पुत्रि लगायेत् जुठो वार्न्याले भात जौ गहु मकै केराउ रहर. मुगी सिधो नुन् अदुवा. डुद दहि घ्यू उषुवाट हुन्या गुलियो सागपात कंदमुल गैह्र तर्कारि षान हुंछ. आफ्ना षुसिले षान्नौ भंन्यालाइ षत पनि लाग्दैन.

६२. जुठो पऱ्यामा कृया पुत्रि लगायेत् जुठो वार्न्याले माछा मासु कोदो मासको दाल तेल मदिरा अरकल्हसुन् छचापि कृश्नभट्ट प्याज च्याउ षान हुदैन कसैले षायेछ भन्या १ रूपैया दंड गर्नु.

६३. तागाधारि लगायेत् पानि चलन्यासम्मका गैह्र जातको लोग्न्या स्वास्नि मानिश्ले धर्म निमित्त वृषोत्सर्ग गर्न हुंछ. वृषोत्सर्ग गर्न्या लोग्न्या स्वास्नी मानिस्लाइ षत वात लाग्दैन.

६४. तागाधारि लगायेत् नमासिन्या मासिन्या मतुवालिसम्मका कोहि मानिस मऱ्याछन् . तिन्को केहि अटकाउ नभै हकवालाले काजकृया गरेनछन् भन्या २० रूपैया दंड गरि कृया गर्न लाउनु अटकाउ भै कृया नगर्न्यालाइ दंड पर्दैन. अरू दसाहा भाइ गैह्रले आफुले मऱ्याको सुन्या पछि आफ्ना जातका संप्रदाय माफिक जति दिन वार्नु पर्न्या हो उति दिन जुठो वारी शुद्ध हुंछन्. विवाह आदि कर्म गर्नु हुंछ. कृया भयाको छैन भनि अटकाउ हुदैन. पछि कृया गर्दा पनि अरू १० दिन्या लगायेत् जाति भाइहरूले जुठो वार्नु पर्दैन. मर्न्याका घरकाले भन्या कृया गर्दा जुठो वारि शुद्ध हुनु.

६५. पेट वोक्याको थाहा भयापछि गर्भिणि स्वास्निहरू कोहि मऱ्या भन्या अैन वमोजिम् पेट चिरि गर्भ झिकि वालष गाडि मुर्दा पोलनु. गर्भ भयाको जानि जानि गर्भको वालष नझिकि गर्भिणि स्वास्निलाइ पोलेछन् भन्या. जानकार मानिश्ले पोल्याको भया आगो दिन्या मोष्यलाइ १० रूपैया दंड गरि २॥ रूपैया गोदान दिलाइ. पतिया दिनु. गर्भको वालष झिकि पोलनु पर्छ

भंन्या थाहा नपाउन्या अदनाले गर्भ नझिकि पोल्याको ठहऱ्या पोलन्यालाइ २ रूपैया दंड गरि ॥. गोदान दिलाइ पतिया गराइ दिनु गर्भ रहया नरहयाको थाहा नपाइ पोल्याको भया षत वात लाग्दैन. मल्हामिलाइ पनि दंड पतिया पर्दैन.

६६. स्वास्नि मानिस कसैले आफ्नु लोग्न्या छाडि अर्कासित पोइल गयापछि पैल्हे को लोग्न्या मरेछ र उस्को काजकृया गरि छ भन्या २० रूपैया दंड गर्नु. अर्कासित पोइल गयाको जानि जानि अघिल्लाको काज कृया गर्न हुंछ गर भनि कसैले भनि कृया गऱ्याको रहेछ भन्या कृया गर्न लाउन्यालाइ १० रूपैया स्मेत् दंड गर्नु. पोइल गयापछि गऱ्याकाले अघिल्ला पोइको कृया हुदैन. अर्कासित पोइल गया पछि फेरि अघिल्लै लोग्न्याले घर लैगि स्वास्नि तुल्याइ राष्याको रहेछ र भात स्मेत् षायाको रहेछभन्या जातका रीतको भात षायाको रहेनछ भन्या ल्याइतिले गर्न्या रितसम्मको काजकृया गर्न हुंछ वात लाग्दैन.

६७. (षारेज) वृषोत्सर्ग गरी वा अरू वेहोरा ले छाढयाका साढ्यालाइ अव उप्रान्त दिन ७ संममा चषेल गोठमा पुऱ्याइ गोठालाका जिम्मा लगाइ भर्पाईलि आउनु. चषेल मा पुऱ्यायेन भन्या दुनित्रा को वालि षान्छ. तेस निमत्त साढ्या छाडन्या जो हो उसलाइ ठाना वाट ४ रूपैया दंड गरी तिनै रूपैयाको नुन षरिद गरी गोठालाका जिम्मा दिलाइ तिनै साढ्यालाइ नुन षुवाउनु. साढ्याको संभर गर्नालाइ चषेल गाउले गोठ वनाई दिनु सर्कार वाट गोठाला ४ के दर्माहा मोहरू २०० सालडुरजंका सिपाहि २ ज्मा जना ६ मध्येलेषन जांन्या १ गोठाला ५ राषि ति गोठालाले दुनिया वाट आयाका साढ्या वुझिलि रसिद दिनु. घास पानि नुन षुवाइ सम्भार गरी पालनु भागन नदिनु. भागी गै दुनित्राको वालि षाया भन्या साढ्या छाडन्या लाइ वात लाग्दैन.

६८. कसैले आफ्ना चलि आया वमोजिम् आफुले वार्नु पर्न्या जुठो सुतक्को दिन नपुगी सुद्ध सांति नुवारान् गरि पानि चलाउन्यालाइ ५ रूपैया जानि जानि कर्म गराउन्या प्रोहितलाइ २॥ रूपैया दंड गरि प्रायश्चित्त दिनु.

# ढोग भेटको

१. ढोग भेट गर्दा चार वर्ण छतिसै जातले आफ्नु जन्म दिन्या वावु वाज्या ज्यूज्यू जन्म दिन्या आमा वज्यू वुढि वज्यू आफ्नि आमा कि आमा वावु गुरू गुर्मा एतिलाइ पाउमा आफुले सिर राषि दंडवत् गरि ढोग दिनु. अरू आफ्ना सहोदर दाज्यू दिदि प्रभृति सवैलाइ ताढैवाट ढोग दिनु. एति नाता वाहेक अरू नजिकका नाता लाग्न्यालाइ आफ्ना षुसिले गोडामा सिर राषि ढोग दिन्यालाइ षत लाग्दैन.

२. स्वास्नि मानिसले आफ्ना षसम् सासु गुर्मा वज्यू जिज्यू वज्यूलाइ गोडामा ढोग दिनु. अरू कसैलाइ पनि गोडामा ढोग नदिनु. टाढैवाट ढोग भेट् गर्नु. सलाम चल्याका घरकाले सलामै गर्नु.

३. रजपूत उमरावहरूलाइ ढोग दिदा जदो भनि कसैले नकराउनु जदो नभनि उसै हात उठाइ ढोग दिनु. आफुले हात उठाइ ढोग दिदा हात नउठाउन्यालाइ एकोहरा सलाम गर्न्या नामर्द ठहर्छ.

४. कसैले आफ्ना विवाहिता ल्याइता स्वास्निलाइ आफैले विधिपूर्वकदिक्षा मंत्र सुनायो भन्या. स्वास्निलाइ केहि पर्दैन. मंत्र सुनाउन्या लोग्न्यालाइ २० रूपैया दंड गर्नु प्रायश्चित गर्नु पर्दैन. लोग्न्या स्वास्नि छुटिनु पर्दैन. अरूलेषनपढन गैह्र इलम् आफ्ना जियले सिकायाकामा षत लाग्दैन.

५. अव उप्रांत चारवर्ण छतिसै जातका स्वास्नि मानिसहरूले मंत्र सुँदामा स्वास्नि मानिसैवाट सुँनु. लोग्न्या मानिसवाट स्वास्नि जातले मंत्र नसुँनु. लोग्न्या मानिस कसैले स्वास्नि मानिसलाइ मंत्र सुनायो भन्या २० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम् कैद गरि छोडि दिनु.

# विहावारीको

१. आफ्ना हाड नातामा करणि गऱ्याका कुराके पुस्ता गंनुपर्दा एकापट्टिवाट अैनले षत वात लाग्न्या पुस्ता नाघ्यो एकापट्टिवाट नाघेनभन्या. कम् भयापट्टिका पुस्ताको हिसाव नगर्नु. नाघ्यापट्टिका पुस्ताको हिसाव गरि कुरो छिंनु षत लाग्दैन.

२. मूल पुस्तादेषि ७ पुस्तासम्म सापिंड्या रहंछ ७ पुस्तादेषि उभो सापिडचानिवृत्ति हुंछ. पुस्ता गंनु पर्दा जाहादेषि पुस्ता काटि आयाको छ आफ्ना जियदेषि मूल पुरूषसम्म गनि पुस्ता मिलाउनु.

३. १२ वर्ष माथिका मामा कि छोरि दाल भात मिल्दामा कंन्या मनोमानसंग ल्यायो भन्या दिक्षा मंत्र दि तिन्को भात षान हुंछ. विहाइता वमोजिम् अंस लाग्छ.

४. मामा कि छोरि जात मिल्दा कि विधवा ल्यायो भन्या षत वात लाग्दैन. सधवा भया साधुको षुसि.

५. शास्त्रमा लेष्याको हुनाले चार वर्ण छत्तिस जातले साली र जेठि सासु विहा गर्नु हुंछ पातक् लाग्दैन. राजाको षत वात लाग्दैन.

६. तागाधारि गैह्र जातका छोरि विहा गर्दा ५ वर्ष मनिका कंन्या कसैले विहा गर्नु हुदैन तिन्मा पनि ३० मैन्हा नपुग्याका कंन्या विहा गरि दिन्याको अैन वमोजिम्को अंस सर्वस्व गरि दसौदलि उपर तेसै कन्यालाइ दाइजो दि छाडि दिनु. जानिजानि ३० मैन्हा मनिका कंन्या मागि विहा गर्न्यामा दुलहा पट्टिको मुष्य अषत्यार रहेछ भन्या र उस्को आफै जानका र दुलहो रहेछ र. आफै अषत्यार भै विहा गऱ्याको रहेछ भन्या उसै दुलहाको अंस सर्वस्व गरि लि छाडि दिनु दुलहि विहा गर्न्या कि हुंछे ३० मैन्हा नपुग्याका कंन्यालाइ ३० मैन्हा नाघ्याकि हो भनि झुक्याइ विहा गरि दियाको रहेछ भन्या विहा गर्न्या दुलहा पट्टिका मुष्य अषत्यार भै विहा गराउन्याको र.मुष्य अषत्यार. भै विहा गर्न्या दुलहाको सर्वस्व नगर्नु २० रूपैया दंड गर्नु ३०

मैन्हा नपुग्याका कंन्या विहा गराउन्या पुरोहितलाइ १० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु.

७. तागाधारि जातका ३० मैन्हा नाघ्याका ५ वर्ष मनिका कंन्या विहा गरि दिन्यालाइ २० रूपैया दंड गर्नु ५ वर्ष नाघ्याकि हो भनि ढांटि दियाको रहेछ भन्या दुलहा पट्टिकोलाइ दंड पर्दैन ५ वर्ष मनिका कंन्या जानिजानि विहा गऱ्याको रहेछ भन्या दुलहा पट्टिका मोष्य अषत्यारको र आफु अषत्यार भै विहा गऱ्या दुलहालाई २० रूपैया दंड गर्नु ५ वर्ष नाघ्याका कंन्या विहा गरि दिन्या र विहा गर्न्या दुवैलाइ षतवात लाग्दैन.

८. तागाधारि जात र. नमासिन्या मतुवालि जातका विधवा दिदि वैन्हि छोरि वुहारि नातिनि भांजि गैह्रलाइ विधवाका राजिषुसिसित माइति नातादारले आफु भंदा ठुला जात र. आफु मिल्दा जात्का कसैलाइ दिया भन्या. म फलानासित जांछु भंन्या ११ वर्ष नाघ्याका विधवा अर्कालाइ सौपन्यालाइ षत वात लाग्दैन. विधवाले म आफ्ना षसम्का सत्यामा वस्छु अर्कासित जांन भंदा भंदै कर लगाइ अर्कालाइ सौम्प्या छन् लोग्न्याले लैजान नपाउदै विधवा कराउन आइ भन्या. दिन्या तागाधारि जात भया १०० रूपैया नमासिन्या मतवालि जात भया ५० रूपैया दंड गर्नु. मासिन्या मतुवालिलाई १५ पानि नचलन्या छोइ छिटो हालनु नपर्न्या जातकालाइ १० छोइ छिटो हालनु पर्न्या जातलाइ ८ रूपैया दंड गर्नु. माइति नातादारले दि लै जान्यावाट षतवात लाग्दैन. त्यो स्वास्नि तेस्सित वस्या पनि नवस्या पनि स्वास्निको षुस् एस्ता स्वास्नि अर्कासित विग्रि भन्या जार काट्न हुदैन. काटद्या ज्यानको वदला ज्यान जांछ. आफ्ना षसम्को सत्यमा वस्छु अर्कासित जांन भंन्या विधवालाइ अर्कालाइ सौपी करणि चुकाइ दियेछ भन्या. तेस्को अैन वमोजिम्को अंस सर्वस्व गरि तेसै स्वास्निलाइ दिलाइ भरायाका धनको दसौद लि विधवा सौपन्यालाइ १ वर्ष कैद गर्नु. म्यादको डवल् दिया लि छाडि दिनु.

९. उपाध्या व्राम्हणले भात मिल्दा छोरि दिदा भात मिल्दा कुटुँवलाइ दि विहा गर्नु आफु भंदा कमि भात नमिल्न्या जातकालाइ षुसि राजिले छोरि दिन्याको अैन वमोजिम्को अंस सर्वस्व गरि आधि तेसै छोरिलाइ दिलाइ आधि इटाचपलि पुऱ्याइ दिनु. आफु भात नचलन्या कम जात भै उपाध्याका छोरि विहा गर्न्यालाइ उपाध्याका कंन्याको करणि गर्न्याका अैन वमोजिम् सजाय

गरि लोग्न्या स्वास्नि छुटचाइ दिनु जार हांन पाउदैन. हान्या सर्वस्व गरि दामल गर्नु स्वास्नि जौना जातकाले विहा गऱ्याको हो उसै जातकि हुंछे.

१०. चार वर्ण छतिसै जात कसैले केटि मागी विहा समेत् भै सकिया पछि केटो नपुँसक लिंग हिन भयाको कोही रहेछ र स्वास्नि हाडनाता वाहेक जात मिलदामा भातमा नपारि अर्कासित पोइल गै भन्या. व्राम्हण जातका व्राम्हणसित गया षत लाग्दैन. जार काटन्या जातका जार काटन पाउदैनन्. जार नकाटन्या जातका लाइ दंड जरिवाना पनि हुदैन. मासिन्या जात मासन पनि हुदैन. कसैले जार काटचो भन्या व्राम्हणले भया अैन वमोजिम् अंस सर्वस्व गरि दामल गर्नु अरू जातको ज्यानको वदला ज्यान काटि मारि दिनु.

११. चार वर्ण छतिसै जातका १४ वर्षदेषि माथितिरका छोरि भतिजी वैन्हि नातिनि भांजि पाल्याका कंन्यालाइ कुटुँवले मागी कंन्याले नमानि जनै सुपारी दि सक्यापछि र मतुवालि र मासिन्या जातका छांग्रारीत षुवाया पछि त्यो कंन्याले तेस दुलहासंग मलाइ विहा गरि नदेउ मजांन भनि भन्या जनै सुपारी भयाको छ. छांग्रारीत षुवायाको छ भनि कर लाग्दैन. कंन्याको षुसि जात मिल्दा कुटुँवमा कंन्याले ठहरायाका ठाउ विहा गरि दिनु.

१२. चार वर्ण छतिसै जात्का कंन्याका वावु आमा दाज्यू भाइ कसैले नदिकन यो कंन्या मलाइ दियाको छ भनि कसैले अदालत ठाना अमाल्मा फरेव गरि कराउन आयो वुझ्दा वावु आमा दाज्यू भाइ कसैले रीत पुऱ्याइकन भयो मुषले मात्र भनि भयो केटि दियाको ठहरेन एस्ता नदियाका कुरामा फरेव गर्न आयाको झुट्टो ठहऱ्यो भन्या तेस्ता फरेवि तागाधारि जातको भया १०० रूपैया नमासिन्या जार हांन्या मतुवालि जातको भया ५० रूपैया नमासिन्या जार नहांन्या मतुवालि जातको भया १० रूपैया मासिन्या जार हान्या जातको भया १० मासिन्या जार नहांन्या जातको भया ५ रूपैया पानि नचलन्या छिटो हालनु नपर्न्या जात भया २॥ छिटो हालनु पर्न्या जात भया १॥. रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम्कैद गर्नु.

१३. चार वर्ण छतिसै जातका विहा गर्न भनि केटि माग्दा मुषले मात्र दिञा भन्याको रहेछ जनै सुपारि साहिपाटा छांग्रा आफ्ना जातको रीत दस्तुर भै सकियाको रहेनछ फलानाले दिया कि केटि आज दिंन भंछ भनि कोहि कराउन आयो भन्या रीत नपुऱ्याइ मुषले मात्र दियाको हो

भंन आउन्याको कुरो अदालत ठाना अमालवाट नसुँनु रीत नपुऱ्याइ मुषले मात्र दिउला भन्याका कुराले केटाको कर लाग्दैन वावु आमाले केटि अन्यत्र दिया पनि षत वात लाग्दैन. अदालत अमालवाट रीत नपुग्याकि के केटी त पाउदैनस् भनि जवाफ दिया पछि दंगा गऱ्यो र. फिराद पऱ्यो भंन्या दंगा गर्न्या तागाधारि जात र नमासिन्या मतुवालि जातलाइ २० रूपैया मासिन्या जात पानि नचलन्या जात छिटो हालनु पर्न्या जातलाइ १० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

१४. जनै सुपारि गऱ्या कि केटिले विहा गरेन भन्या ५० रूपैया दंड गर्नु. त्यो केटि वावु आमाले जात मिल्दामा फेरि विहा गरि दिनु. महारोग भया कि आषा फुटचाकि फुकौनि निस्क्याकि लाटी छाऱ्या रोग भया कि हिजडा रहिछ हाट षुट्टा भांचियाकि रहिछ भिरंगि भयाकि रहिछ र. पछि केटाले थाहा पाइ विहा गर्दिन भन्या विहा गर्नाकन केटालाइ कर लाग्दैन. आफ्नु पऱ्याको दस्तुर छांग्या चार दाम फिर्ता गरि कंन्या छाडन पाउछ. केटालाइ कर लाग्दैन. षत पनि लाग्दैन.

१५. कसैले विहा गर्न भनि कसैका छोरि मागि जनैसुपारि आफ्ना जातको रीत दस्तुर गरि सक्या पछि केटा तर्फ हवस् वा. कन्या तर्फ हवस् वा केहि अटका उ भै विहा हुन नपाइ रहन गयो वा. केटालाइ राजकाजमा टाढा जानु पर्दा रहयाको वाहेक कंन्या विहा गर्न आउ भनि माइतिले भंदा वर्ष दिन भित्रमा आइ विहा गर्न आयेन भन्या र आफ्ना काजले देस पर्देस टाढा गै वर्ष दिन भित्रमा आइ विहा गर्न आएन भन्या. आफना काजले देस पर्देस टाढा गै वर्ष दिन भित्रमा आई विहा गरेन भन्या त्यो केटि वावु आमा माइतिहरूले जस्लाइ दिन मन पर्छ दिनु. वर्ष दिन नाघ्यापछि त्यो केटिमलाइ दियाको हो भनि झगरा गर्न आउन्यालाइ १० रूपैया दंड गर्नु. एस्तामा जार काटचा ज्यानको वदला ज्यान जांछ.

१६. आफ्ना विवाहिता स्वास्नि अर्कालाइ दि अर्काका विवाहित स्वास्नि साटासाट गर्न्याले आफु मिल्दा जात रहेछ भन्या र. अरूलाइ भात्मा वोऱ्याको रहेनछ भन्या षत लाग्दैन. जार काटन पाउदैन जार काटचा ज्यानको वदला ज्यान जांछ. एस्ता नामर्दका हातको भात चल्दैन. भताहाले भात नषानु. तागाधारि जात लगायेत् पानि चलन्यासम्मका जातले आफु भंदा घटि

वढि जात्मा स्वास्नि साटासाट गऱ्याको भया दुवैको अैन वमोजिम्को अंस सर्वस्व गरि भात वाहेक गरि छाडि दिनु.

१७. उपाध्या व्राम्हण जैसि वाहुन् रजपूत तागाधारि क्षत्रि जात नमासिन्या मतुवालि जात मासिन्या मतुवालि जात पानि नचलन्या जात छोया छिटो हालनु पर्न्या जात गैह्र चार वर्ण छतिसै जातले आफ्नि आमाका एका वावुवाट जन्म्याका मामा सानि ठुली आमाका छोरि विहा गर्न्यालाइ षतवात लाग्दैन. विहा गर्न्याका हातको भात षांन्नौ भंन्या जात मिल्दा भताहालाइ अडा अदालत अमालवाट १० रूपैया दंड गरि तेसैका हातको भात षुवाइ छाडि दिनु. जात मिल्दो नभया विहा गर्न हुंछ भात षानाको कर लाग्दैन.

१८. अघि पिता पुर्षादेषि फुपुका छोरि विहा गर्न्या रीत चलि आयाका जातले आफ्ना एका वाज्यावाट जन्म्याका फुपुका छोरि विहा गर्न हुंछ षत लाग्दैन. परापूर्व देषि नचल्याका जातले विहा गऱ्या अैन वमोजिम सजाय गर्नु.

१९. केटाको जात सानु छ जात ढाटि ठुला जातका केटि मागी जनै सुपारि भयाको भया पनि केटिका वावुले तेरो जात सानु रहेछ. केटि दिंन भन्या. षत वात लाग्दैन. केटाले जवरजस्ति गरि विहा गर्न षोजन्यालाइ २० रूपैया दंड गर्नु. कंन्या वावु आमाले षुस् पऱ्याका ठाउ विहा गरि दिनु.

२०. तागाधारि जातका कसैले जानि जानि आफु भंदा घटि पानि चलन्या जातका छोरि विहा गरि केटिका हातको आफुले भात षाइ भताहालाइ स्मेत् भातमा वोरेछ भन्या १०० रूपैया दंड गरि तेसै केटिका माइतिका जातमा मिलाइ दिनु. आफुले भन्या षायेछ अरूलाइ वोऱ्याको रहेनछ भन्या दंड हुदैन. उसै जात्मा मात्रै मिलाइ दिनु रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु प्रायश्चित्त माग्या जानि जानि षान्याले भातको पतिया पाउदैन.

२१. नमासिन्या मतुवालि जातले आफु भंदा घटि भात नचलन्या जातका छोरी विहा गरि केटिका हातको भात षाइ भताहालाइ स्मेत् वोऱ्यो भन्या. ४० रूपैया दंड गरि तेसै केटिका माइतिका

जात्मा मिलाइ दिनु. आफुले भन्या षायेछ. अरूलाइ वोऱ्याको रहेनछ भन्या दंड हुदैन. उसै जातमा मिल्छ. रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

२२. मासिन्या जातले आफु भंदा घटि भात नचलन्या जातका छोरि विहा गरि केटिका हातको भात षाइ भताहालाइ स्मेत् वोऱ्यो भन्या १० रूपैया दंड गरि तेसै केटिका माइतिका जातमा मिलाइ दिनु. आफुले भात षाइ अरूलाइ वोऱ्याको रहेनछ भन्या दंड हुदैन उसै जातमा मात्रै मिल्छ.

२३. पानि नचलन्या र छोइ छिटो हालनु पर्न्या जातले आफु भंदा घटि भात नचलन्या जातका छोरि विहा गरि केटिका हातको भात षाइ भताहालाइ स्मेत् वोरेछ भन्या ५ रूपैया दंड गरि तेसै केटिका माइतिका जातमा मिलाइ दिनु. भात षाइ अरूलाइ वोऱ्याको नभया दंड हुदैन. उसै जातमा मात्रै मिल्छ.

२४. कंन्याको जात सानु छ झुकिकन जात वरोवरैको भनि ठानि निजले नै सुपारि गरि सक्या पछि सानु जात रहेछ भनि थाहा पायो र. केटि विहा गर्दिन भन्यो भन्या र झुक्कि जनै सुपारि भयाको रहेछ भन्या पनि केटालाइ विहा गर्नाको कर लाग्दैन. छोरि वावु आमाले जात मिल्दा अर्कैलाइ दि विहा गरि दिन हुंछ. विहा गरि सक्याको भया स्वास्नि छाडन पाउदैन. भात षानाको कर लाग्दैन. विहा भै भात पनि षायेछ पछि थाहा पायो र भोरमा पऱ्या अव तेस्का हातको भात षांन भनि पतिया माग्यो भन्या प्रायश्चित दिनु.

२५. कसैले आफुलाइ विहा गर्न भनि. कसैका छोरि माग्यो छोरिका वावु आमाले हवस् दाज्यू भाइ ज्येठा कांछा वावुले हवस्. छोरि दियेछन् केटाले रूपैया स्मेत् राषि पिछा पऱ्याको रहेछ भन्या. त्यो कंन्या विहा गर्न पाउछ.

२६. आफुले जन्मायाका छोराका साछचात् ज्येठि सासु र सालि ल्याउन्या विहा गर्न्यालाइ षत लाग्दैन.

२७. उपाध्या लगायेत् रजपूत जैसि तागाधारि क्षतृ नमासिन्या मासिन्या मतुवालि जात पानि नचलन्या जात र छिटो हालनु पर्न्या जात गैह्रका लोग्न्या मानिस् हवस् वा. स्वास्नि मानिस् हवस्. कसैले भात नमिलन्या कम जातका कन्या विधवा स्वास्निलाइ तिम्रा जात मिल्दा हो भनि ढाटि उपाध्या व्राम्हणलाइ विहा गरि गराइ दि हवस् वा अरू विहोराले जात ढाटि दि दिलाइ तेसै स्वास्निवाट उपाध्याका भातमा वोरेछ भन्या रजपूत जैसिका छोरि दि भात्मा वोराउन्यालाइ २०० तागाधारि क्षतृजातका छोरि दि भात्मा वोराउन्यालाइ २१० नमासिन्या मतुवालि जातका छोरि दि भात्मा वोराउन्यालाइ २२० मासिन्या मतुवालि जातका छोरि दि भातमा वोराउन्यालाइ २३० रूपैया दंड गर्नु रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु. विहा गरि गराइ मात्र दियेछ. भात्मा वोरायाको रहेनछ भन्या जात ढाटि विहा गरिया वापत् जौना जातका छोरि दि दिलाइ ढाटि विहा गरायाको छ. एसै अैनको आधि आधिका दर्ले दंड गर्नु. भात नमिल्दा कमि जातका छोरि दि दिलाइ भातमा वोराया पछि कंन्याका हात्को र कंन्याका हात्को षान्याकाहात्को जानि जानि भात षाइ पतिया गर्नु पर्न्या जातले पतिया नगरि आफ्ना हातवाट अरू भताहालाइ वोरेछ भन्या लोग्न्या मानिस भया अैन वमोजिम् सर्वस्व गरि स्वास्नि मानिस भया सर्वस्व नगरि उसै जात्मा मिलाइ छाडि दिनु. आफुले भात षायेछ भताहालाइ वोऱ्याको रहेनछ भन्या सर्वस्व नगरि एसै अैन वमोजिम् दंड गरि उसै जात्मा मिलाइ छाडि दिनु. भोरमा परि भात षान्या दुलहा र भताहा स्मेत्लाइ भोरको पतिया गराइ दिनु. विहाको विधि पुगि सक्याको हुनाले स्वास्नि छाडछु भनि छाडन पाउदैन. भात नषाइ राषनु.

२८. उपाध्या लगायेत् रजपूत जैसि तागाधारि क्षतृ नमासिन्या. मासिन्या मतुवालि जात पानि चलन्या जात र छिटो हालनु पर्न्या जात गैह्रका लोग्न्या स्वास्नि मानिस कसैले भात नमिल्न्या कम जातका कंन्या विधवा स्वास्निलाइ तिम्रा जात भात मिल्दो हो भनि रजपूत जैसि जातलाइ विहा गरि गराइ दि हवस् वा. अरू विहोराले जात ढाटि दि दिलाइ तेसै स्वास्निवाट भात्मा वोरायाको रहेछ भन्या रजपूतका छोरि जैसिलाइ जैसिका छोरि रजपूतलाइ दि भात्मा वोराउन्यालाइ ६०।६० रूपैया. तागाधारि क्षतृ जातका छोरि दि रजपूत जैसिका भात्मा वोराउन्यालाइ २०० नमासिन्या मतुवालि जातका छोरि दि भात्मा वोराउन्यालाइ २१० मासिन्या मतुवालि जातका छोरि दि भात्मा वोराउन्यालाइ २२० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु. विहा गरि गराइमात्र दियेछ भात्मा वोरायाको रहेनछ भन्या जात ढाटि विहा गराया वावत् जौना जातका छोरि दि दिलाइढाटि विहा गरायाको छ एसै अैन

को आधि आधिका दर्ले दंड गर्नु. भातमा नमिल्न्या कमि जातका छोरि दि दिलाइ भात्मा वोराया पछि कंन्याका हातको र कंन्याका हात्को षान्याका हात्को जानिजानि भात षाइ पतिया गर्नु पर्न्या जातले पतिया नगरि आफ्ना हातवाट भताहालाइ वोरेछ भन्या लोग्न्या मानिस भया अैन वमोजिम् सर्वस्व गरि. स्वास्नि मानिस् भया सर्वस्व नगरि उसै जात्मा मिलाइ छाडि दिनु. आफुले मात्र षायेछ अरू भताहालाइ वोऱ्याको रहेनछ भन्या सर्वस्व नगरि एसै अैन वमोजिम् दंड गरि उसै जात्मा मिलाइ छाडि दिनु. भोरमा परि विहा गर्न्या र. भात्मा पर्न्याहरूलाइ भोरको पतिया गराइ दिनु. विहाको विधि पुगि सक्याकि हुनाले स्वास्नि छाडछु भनि छाडन पाउदैन. भात नषाइ राषनु.

२९. उपाध्या लगायेत् रजपूत जैसि तागाधारि क्षतृ नमासिन्या मासिन्या मतुवालि जात पानि नचलन्या जात र छिटो हालनु. पर्न्या जात गैह्रका लोग्न्या स्वास्नि मानिस कसैले भात नमिल्न्या कम जातका कन्या विधवा स्वास्निलाइ तिम्रा जात भात मिल्दो हो भनि तागाधारि क्षतृजातलाइ विहा गरि गराइ वा. अरू विहोराले जात ढाटि दि दिलाइ तेसै स्वास्निवाट तागाधारि क्षतृ जातका भातमा वोरायेछ भन्या नमासिन्या मतुवालि जातका छोरि दि भात्मा वोराउन्यालाइ २०० रूपैया मासिन्या मतुवालि जातका छोरि दि भात्मा वोराउन्यालाइ २१० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु. विहा गरि गराइमात्र दियेछ भातमा वोरायाको रहेनछ भन्या जात ढाटि विहा गराया वावत्. जौना जातका छोरि दि दिलाइ विहा गरायाको छ. एसै अैनको आधि आधिका दर्ले दंड गर्नु. भात नमिल्न्या कमि जातका छोरि दि दिलाइ भात्मा वोराया पछि कंन्याका हात्को र कंन्याका हात्को षान्याका हात्को जानि जानि भात षाइ पतिया गर्नु पर्न्या जातले पतिया नगरि आफ्ना हातवाट भताहालाइ वोरेछ भन्या. लोग्न्या मानिस भया अैन वमोजिम्. सर्वस्व गरि स्वास्नि मानिस भया सर्वस्व नगरि उसै जात्मा मिलाइ छाडि दिनु. आफुलेमात्र षायेछ भताहालाइ वोऱ्याको रहेनछ भन्या सर्वस्व नगरि एसै अैन वमोजिम् दंड गरि उसै जात्मा मिलाइ छाडि दिनु. भोरमा परि विहा गर्न्या र भात्मा पर्न्याहरूलाइ भोरको पतिया गराइ दिनु. विहाको विधि पुगि सक्याको हुनाले स्वास्नि छाडछु भनि छाडन पाउदैन भात नषाइ राषनु.

३०. उपाध्या लगायेत् रजपूत जैसि तागाधारि क्षतृ नमासिन्या मासिन्या मतुवालि जात पानि नचलन्या जात र छिटो हालनु पर्न्या जात गैह्रका लोग्न्या स्वास्नि मानिस् कसैले भात

नमिल्न्या कम जातका कंन्या विधवा स्वास्निलाइ तिम्रा जात भात मिल्दो हो भनि नमासिन्या मतुवालि जातलाइ विहा गरि गराइ दि हवस् वा. अरू विहोराले जात ढाटि दि दिलाइ. तेसै स्वास्निवाट भात्मा वोरायेछ भन्या मासिन्या मतुवालि जातका छोरि दि दिलाइ भात्मा वोराउन्यालाइ २०० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु. विहा गरि गराइमात्र दियेछ भात्मा वोरायाको रहेनछ भन्या. जात ढाटि विहा गराया वावत् एसै अैनको आधिका दरले दंड गर्नु. भात नमिल्न्या कमि जातका छोरि दि दिलाइ भात्मा वोराया पछि कंन्याका हात्को र कंन्याका हात्को षान्याका हात्को जानिजानि भात षाइ पतिया गर्नु पर्न्या जातले पतिया नगरि आफ्ना हातवाट भताहालाइ वोरेछ भन्या. लोग्न्या मानिस् भया अैन वमोजिम् सर्वस्व गरि स्वास्नि मानिस् भया सर्वस्व नगरि उसै जात्मा मिलाइ छाडि दिनु. आफुले भात षायेछ भताहालाइ वोऱ्याको रहेनछ भन्या. सर्वस्व नगरि एसै अैन वमोजिम् दंड गरि उसै जात्मा मिलाइ छाडि दिनु. भोरमा परि विहा गर्न्या र. भात्मा पर्न्याहरूलाइ भोरको पतिया गराइ दिनु. विहाको विधि पुगि सक्याको हुनाले स्वास्नि छाडछु भनि छाडन पाउदैन. भात नषाइ राषनु.

३१. तागाधारि जात र नमासिन्या मासिन्या मतुवालि जात पानि नचलन्या जात र छिटो हालनु पर्न्या जात गैह्रका लोग्न्या स्वास्नि मानिस् कसैले भात नमिल्न्या आफु आफुमा घटि वढि जातका कंन्या विधवा भात मिल्दो हो भनि जात ढाटि विहा गरि गराइ वा. अरू विहोराले दि दिलाइ भातमा वोराइ दियो भनि कोहि कराउन आयो भन्या श्री प्राइम् मिनिष्टर र. अदालतका हाकिमले तजवीज गरि दंड सजाय गर्नु.

३२. तागाधारि लगायेत चार वर्ण छतिसै जातका लोग्न्या स्वास्नि मानिस कसैले उपाध्या व्राम्हणका भात मिल्दा कंन्या विधवा भात नमिल्न्या कम जातका लोग्न्या मानिस्लाइ विहा गरि गराइ जात ढाटि दियेछ भन्या कंन्याको जात जान्या हुनाले कंन्याका माइति र उन्का भताहालाइ भातमा स्मेत् वोरायेछ भन्या जैसि रजपूत तागाधारि क्षतृ जातलाइ दिन्यालाइ ६ वर्ष नमासिन्या मतुवालि जातलाइ दिन्यालाइ ९ वर्ष मासिन्या मतुवालि जातलाइ दिन्यालाइ १२ वर्ष कैद गर्नु.विहा गरि गराइ वा अरू विहोराले दि दिलाइ भातमा वोरायाको रहेनछ भन्या एसै अैनको आधिआधीका दरले कैद गर्नु. म्यादको डवल् दिया लि छाडनु. अर्काले जात मिल्दो हो भनि ढाटि दिदा थाहा नपाइ विहा गर्न्या केटालाइ वात लाग्दैन. केटि विहा गर्न्या कि हुंछे.

३३. तागाधारि लगायेत चारवर्ण छतिसै जातका लोग्न्या स्वास्नि मानिस कसैले रजपूत जैसिका भातमिल्दा कंन्या विधवा भात नमिल्न्या कम जातका लोग्न्या मानिसलाइ विहागरि गराइ जात ढाटि दियेछ भन्या कंन्याको जात जान्या हुनाले कंन्याका माइति र उन्का भताहालाइ भातमा वोरायेछ भन्या रजपूत जातका छोरि जैसिलाइ जैसि जातका छोरि रजपूतलाइ दिन्यालाइ १॥. १॥ वर्ष तागाधारि क्षतृ जातलाइ दिन्यालाइ ६ वर्ष नमासिन्या मतुवालि जातलाइ दिन्यालाइ ९ वर्ष मासिन्या मतुवालि जातलाइ दिन्यालाइ १२ वर्ष कैद गर्नु विहा गरि गराइ वा. अरू विहोराले दि दिलाइ भात्मा वोरायाको रहेनछ भन्या एसै अैनको आधि आधि का दर्ले कैद गर्नु. म्यादको डवल दिया लिनु. अर्काले जात मिल्दो हो भनि ढाटि दिदा थाहा नपाइ विहा गर्न्या केटालाइ वात लाग्दैन. केटि विहा गर्न्या कि हुंछे.

३४. तागाधारि लगायेत् चार वर्ण छतिसै जातका लोग्न्या स्वास्नि मानिस कसैले तागाधारि क्षतृ जातका भात मिल्न्या कन्या विधवा भात नमिल्न्या कम जातका लोग्न्या मानिसलाइ विहा गरि गराइ जात ढाटि दिएछ भन्या कंन्याको जात जान्या हुनाले कंन्याका माइति र उन्का भताहालाइ भातमा स्मेत् वोरायेछ भन्या. नमासिन्या मतुवालि जातलाइ दिन्यालाइ ९ वर्ष मासिन्या मतुवालि जातलाइ दिन्यालाइ १२ वर्ष ि कैद गर्नु.विहा गरि गराइ वा. अरू विहोराले दि दिलाइ भातमा वोरायाको रहेनछ भन्या एसै अैनको आधि आधिका दरले कैद गर्नु. म्यादको डवल् दिया लिनु. अर्काले जात मिल्दो हो भनि ढाटि दिदा थाहा नपाइ विहा गर्न्या केटालाइ वात लाग्दैन. केटि विहा गर्न्या कि हुंछे.

३५. तागाधारि लगायेत् चार वर्ण छतिसै जातका लोग्न्या स्वास्नि मानिस कसैले नमासिन्या मतुवालि जताका भात मिल्दा कंन्या विधवा भात नमिल्न्या कम जातका लोग्न्या मानिस्लाइ विहा गरि गराइ जात ढाटि दियेछ भन्या. कंन्याको जात जान्या हुनाले कंन्याका माइति र उन्का भताहालाइ भातमा स्मेत् वोरायेछ भन्या मासिन्या मतुवालि जातलाइ दिन्यालाइ ३ वर्ष कैद गर्नु. विहा गरि गराइ वा. अरू विहोराले दि दिलाइ भात्मा वोरायाको रहेनछ भन्या. एसै अैनको आधि आधिका दरले कैद गर्नु. म्यादको डवल् दिया लिनु. अर्काले जात मिल्दो हो भनि ढाटि दिदा थाहा नपाइ विहा गर्न्या केटालाइ वात लाग्दैन. केटि विहा गर्न्या कि हुंछे.

३६. तागाधारि जातका छोरि नमासिन्या मतुवालि जात नेवार जात मासिन्या मतुवालि जातले जात ढाटि कंन्या विहा गरेछ भन्या. तेस्को अैन वमोजिम्को अंस सर्वस्व गरि दामल गर्नु जात ढाटि आउन्यालाइ थाहा नपाइ छोरि दियाकामा षत लाग्दैन तागाधारि जातले जनै नलाउन्या मतुवालि जातलाइ घटि जात हो भनि जानि जानि वावु आमाले दियाछन् भन्या छोरि दिन्यालाइ ३ वर्ष कैद गर्नु. म्यादका रूपैया लि छाडिदिनु. वावुले जानि जानि दियाको हवस् वा नजानि दियको हवस्. त्यो केटि तेश्ले राषन पाउदैन छुट्याइ दिनु.

३७. नमासिन्या मतुवालि जातका छोरि नेवार जातले जात ढाटि विहा गर्‍याको रहेछ भन्या नमासिन्या नेवारजातलाइ १॥ वर्ष कैद गर्नु. म्यादका रूपैया दिया लि छाडि दिनु. मासिन्या जातले रहेछ भन्या. लोग्न्यालाइ मासि दिनु. जात ढाटि आउन्यालाइ थाहा नपाइ छोरि दियाकामा षत लाग्दैन. वावुआमाले जानिजानि छोरि दि विहा गर्‍याको रहेछ भन्या नमासिन्या जात रहेछ भन्या केटालाइ २० छोरि दिन्यालाइ ३० रूपैया दंड गर्नु. मासिन्या जात रहेछ भन्या केटालाइ ४० छोरि दिन्यालाइ ६० रूपैया दंड गर्नु. रूपैया नतिर्‍या अैन वमोजिम् कैद गर्नु. जाजिानि दियाको हवस् नजानि दियाको हवस्. त्यो केटि तेश्ले राषन पाउदैन. छुट्याइ दिनु.

३८. गोर्षा राज भर मुलुकका भातमा सरोवर चल्याका गुरूं नाम गैह्र जातका ११ वर्ष मनिका हउन् ११ वर्ष नाघ्याका हउन् कंन्या विधवाका जवर जस्ति करणि गर्न्या नमासिन्या मतुवालि जातलाइ लेष्याका अैन वमोजिम् दंड कैद गर्नु. जवान् भयाक कंन्या विधवाको राजि षुसिले करणि गर्न्यालाइ भात्मा वोर्‍याको भया पनि नभया पनि गुरुं नाम गैह्रकोजात एकै हुनाले र. भात्मा पनि आजसम्म सरोवर चलाइ आयाको हुनाले करणि गर्न्या गराउन्या दुवैलाइ षतवात लाग्दैन. सधवा गुरूंस्यानिको जारि गरेछ भन्या अैन वमोजिम् साधुको षुसि गुरूं नाम गैह्रका छोरि गुरूं नामले विहा गर्न भनि कंन्याका दाइयादारसित मागी विहा गरेछ भन्या. दिन्या लिन्याको जात जादैन. आफ्नै जातमा रहंछन्. फलानाकि छोरि विहा गर्दौन भन्यो वा. फलानालाइ छोरि दिंनौ भन्या छोरि दिदा लिदा. आफ्नु षुसि हुंछ. कर लाग्दैन. गुरूं गुरूं जातमा हाम्रो जात ठुलो हो तस्को जात सानु हो भन्या र.भात काढन्यालाइ २०।२० रूपैया दंड गर्नु. जिताऱ्यालाइ जिताउरि पर्दैन.

# कन्या चोरी विहागर्न्या

१. जनै लाउन्या जातले भात मिल्न्य जात्मा कसैका छोरि चोरी जवरजस्ति गरि आफुले विहा गऱ्यो भन्या तेस्का भाइ छोरा स्वास्निको अंस र छोरिको विहा षर्च पर सारि सर्वस्व गर्नु. चोरि विहा गऱ्या कि केटि तेस्ले पाउदैन.वावुआमाले जस्लाइ दिंछन् उनैको षुसि भात षानाको कर लाग्दैन. एस्ताको जार काटचो भन्या.व्राम्हणले भया. अैन वमोजिम्को अंस सर्वस्व गरि दामल गर्नु. अरू जातलाइ ज्यानको वदला ज्यान काटि मारि दिनु. केटिका वावु आमाले फिराद गऱ्याको कुरो सुंनु.वावु आमाले फिराद गरेनन् भन्या एस्ता कुरा नसुंनु. केटिका वावु आमा मऱ्याका रहया छन् भन्या अदालत ठानावाट षोजि वुझि एसै अैन वमोजिम् निसाफ गर्नु १२ वर्ष नाघ्याका कंन्यालाइ जात मिल्दाले राजि षुसिसित चोरि लैगी विहा गऱ्याको भया षत लाग्दैन जात भात जादैन.

२. जनै नलाउन्या जातले जात मिल्दाका कंन्या चोरि जवर जस्ति गरि विहा गऱ्यो भन्या केटिका वावु आमा कराउन आया विहा गर्न्यालाइ २० रूपैया दंड गर्नु केटि दिनु. नदिनु वावु आमाको षुसि जवान् भयाकी कंन्या षुसि राजिसित फकाइ लैगि विहा गर्न्यालाइ षतवात लाग्दैन. केटि फर्काउन पनि पाउदैन.

३. दुनिञामा अर्काकि कंन्या चोरि ल्याइ वावु आमा सहोदर दाज्यू भाइहरू संग नमागि चोरि लैगि जात भातका कुटुँम्वलाइ दि कसैले कंन्या दान गऱ्यो भन्या तेस्को जो भयाको संपतिमा अैन वमोजिम्को अंस परसारि कंन्यादान दिन्याको अंस सर्वस्व गरि दसौद लि उपर तेसै केटिलाइ दाइजो दिलाइ दिनु. कंन्या चोरि घटि जातलाइ दियाको भया. सर्वस्व सर्कारवाट लिनु. त्यो केटी चोरि लैगि विहा गरि दियाका कि सदर हुंन वावु आमाले जस्लाइ दिंछन् उसैको हुंछ वावु आमाले पछि अर्कालाइ दियो भन्या तेसले जार हाँन्न पाउदैन. जार हान्या व्राम्हणले भया अैन वामेजिम्को अंस सर्वस्व गरि दामल गर्नु. अरू जातलाइ ज्यानको वदला ज्यान काटि मारि दिनु. पछि विहा गर्न्यालाइ भात षानाको कर लाग्दैन.

४. उपाध्या व्राम्हण वाहेक् अरू तागाधारि जातमा भात षाजा नचलन्या जनै लाउन्या कम जातका छोरि १२ वर्ष नपुग्या कि सद्य जातकाले चोरि विहा गऱ्यो भन्या. तेसले चोरि लैगया

वावत् तेसकेटिका हातको भात षानु पर्छ्ह अरू भताहालाइ भातको कर लाग्दैन १२ वर्ष नाघ्या कि जवान् भयाकि कंन्या राजि वाजि सित लैजान्यालाइ षत वात लाग्दैन. भात षाना नषानाको उस्को षुसि.

५. कसैले अर्काका कंन्या चोरि ल्याइ दाज्यू भाइ इष्टमित्र कसैलाइ दि विहा गरायो भन्या तेस्को अैन वमोजिम्को अंस सर्वस्व गरि दसौद लि तेसै केटिलाइ दाइजो गरि दिलाइ दिनु. केटि चोर्दासंग जान्याहरूलाइ जनहि २०।२० रूपैया दंडगर्नु. अर्काले चोरि ल्यायाकी हो भनि जानि जानि कंन्या दान दिन्यालाइ विहा गराउन्या प्रोहितलाइ २०।२० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

६. कसैले अर्काकि छोरि विहा गर्न भनि चोरि लैगयो विहा हुन नपाउदै माइतिहरूले आफ्नि कंन्या षोसिल्याइ कराउन आया भन्या मोष्य चोर्न्या जो हो उस्लाइ १०० रूपैया अरू कंन्या चोर्न जादा संग जान्यामा औवल्लाइ २० दोयंलाइ १० सिम्लाइ ५ चाहारलाइ २॥ रूपैयाका दरले दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

# कन्या दोहोरो दिन्या

१. तागाधारि जात गैह्रले जनै सुपारि गरि एकालाइ दिया कि कंन्या फेरि जनै सुपारि लि अर्का केटालाइ दियेछ र अघिल्लो केटो कराउन आयो भन्या पछिल्लासित विहा हुन पायाको रहेनछ भन्या. केटि अघिल्लाकि हुंछे एउटि कंन्या दुइ तिर दिन्यालाइ ५० रूपैया पछिल्लाले कंन्या विहा गरेछ भन्या १०० रूपैया दंड गर्नु. अघिल्लाले कंन्या मागि जनै सुपारि गऱ्याको थाहा पाइ पछिल्लाले मागि जनै सुपारि गरेछ विहा गर्न पायाको रहेनछ भन्या. २० रूपैया विहा स्मेत् गरेछ भन्या. ४० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु. विहा भयाको हुंनाले केटि पछिल्लाकि हुंछे अर्काले जनै सुपारि गऱ्याको थाहा नपाइ मागि विहा गर्न्यालाइ षतवात लाग्दैन.

२. नमासिन्या मतुवालि जातका आफ्ना जातको रीत दस्तुर लिएका लाइ दिया कि कंन्या फेरि अर्काको रीत दस्तुर षाइ अर्का केटालाइ दियेछ र. अघिल्लो दस्तुर दिन्या कराउन आयो भन्या पछिल्लासित विहा हुन पायाको रहेनछ भन्या. अघिल्लाकि हुंछे. एउटि कंन्या २ तिर दिन्यालाइ २० रूपैया केटि पछिल्लाले विहा गरेछ भन्या ३० रूपैया दंड गर्नु. अघिल्लाले मागि दस्तुर. जातको रीत छांग्राहरू गैह्रलायाको थाहा पाइ पछिल्लाले मागि दस्तुर छांग्रालाइ विहागर्न पायाको रहेनछ भन्या २० रूपैया विहा स्मेत् गरेछ भन्या ४० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु. विहा भयाको हुनाले केटि पछिल्ला कि हुंछे अर्काको रित षुवायाको थाहा नपाइ विहा गर्न्यालाइ षत लाग्दैन.

३. मासिन्या मतुवालि जातका आफ्ना जातको रीत छांग्रा ४ दाम दस्तुर दिएकालाइ दियाकि कंन्या फेरि अर्काको रित दस्तुर षाइ अर्का केटालाइ दियेछ र. अघिल्लो दस्तुर दिन्या. कराउन आयो भन्या. पछिल्लासित विहा हुन पायाको रहेनछ भन्या. केटि अघिल्लाकि हुंछे.यौटि कंन्या दुइतिर दिन्यालाइ ६ रूपैया केटि पछिल्लाले विहा गरेछ भन्या १२ रूपैया दंड गर्नु. अघिल्लाले मागि दस्तुर लायाको थाहा पाइ पछिल्लाले मागि दस्तुरलाइ विहा विहा गर्न पायाको रहेनछ भन्या १० विहा स्मेत गरेछ भन्या २० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु. अर्काले रीत षुवायाको थाहा नपाइ विहा गर्न्यालाइ वात लाग्दैन. विहा भयाकि हुनाले केटि पछिल्लाकि हुंछे.

४. पानि नचलन्याको छोइ छिटो हालनु नपर्न्या गैह्न जातका आफ्ना जातको रित दस्तुर लिएकालाइ दियाकि कंन्या फेरि अर्काको रीतदस्तुर षाइ अर्का केटालाइ दियेछ र अघिल्लो दस्तुर दिन्या कराउन आयो भन्या. पछिल्लासित विहा हुन पायाको रहेनछ भन्या केटि अघिल्लाकि हुंछे एउटि केटि दुइतिर दिन्यालाइ ४ रूपैया केटि पछिल्लाले विहा गरेछ भन्या ८ रूपैया दंड गर्नु. अघिल्लाले केटि मागि दस्तुर लायाको थाहा पाइ पछिल्लाले मागीदस्तुरलाइ विहागर्न पायाको रहेनछ भन्या ५ रूपैया विहा स्मेत् गरेछ भन्या १० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु. विहा गऱ्याको हुनाले केटि पछिल्लाकि हुंछे अर्काले रीत षुवायाको थाहा नपाइ मागी विहा गर्न्यालाइ षत लाग्दैन.

५. छोइ छिटो हालनु पर्न्या गैह्न जातका आफ्ना जातको रीत दस्तुर लिएकालाइ दियाकि कंन्या फेरि अर्काको रीत दस्तुर षाइ अर्का केटालाइ दियेछ  अघिल्लो दस्तुर दिन्या कराउन आयो भन्या पछिल्लासित विहा हुन पायाको रहेनछ भन्या केटि अघिल्लाकि हुंछे. यौटि केटि दुइतिर दिन्यालाइ २ रूपैया केटि पछिल्लाले विहा गरेछ भन्या ४ रूपैया दंड गर्नु. अघिल्लाले केटि मागि दस्तुर. लायाको थाहा पाइ पछिल्लाले मागी दस्तुर लाइ विहा गर्न पायाको रहेनछ भन्या २॥ रूपैया विहा स्मेत् गरेछ भन्या ५ रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु. विहा गऱ्याको हुनाले केटि पछिल्लाकि हुंछे. अर्काले रीत षुवायाको थाहा नपाइ मागी विहा गर्न्यालाइ षत लाग्दैन.

६. कसैले छोरि दिदा कंन्याका वावु आमा दाज्यू भाइ एका घरमा. मानु नछुटयाइ संगै वस्याका रहयाछन् भन्या. वावुले दियाको सदर हुंछ. वावु नभया आमाले दियाको सदर हुंछ वावु आमा पनि रहयानछन्भन्या ज्येठा दाज्यू भाइमा जुन् ज्येठो छ उसैले दियाको सदर हुंछ. उस्ता पनि नभया ज्येठा कांछा वावुहरूले दियाको सदर हुंछ. अैनमा लेषियाका पैल्हा रोलवाला छंज्याल् पछिल्ला रोलवालाले दियाको सदर हुदैन. अघिल्ला रोलवालाले जात भात नमिल्दामा र अैनमा रोकियाकालाइ दियेछ भन्या अघिल्ला रोलवालाले दियाको सदर हुदैन. पछिल्ला रोलवालाले दियाको सदर हुंछ.

७. वावुले विवाहित वा ल्याइत ज्येठि कांछि स्वास्निमा एउटि स्वास्नितिर लागी वस्याको रहेछ यौटिलाइ षान लाउन नदि निकालेछ वा. वेगल राष्याको रहेछ र. छोरि पनि आमासितै वस्याकि रहिछ भन्या. त्यो छोरि जात भात मिल्दामा र. अैनले नरोकियाकालाइ दिंछ भन्या. आमाले उठायाको सदर हुंछ. उसैलाइ विहा गरि दिनु.वावुले उठायाको सदर हुदैन.

८. कंन्याकि आमा मरिछ र. वावु दाज्यूले संभार गर्न नसकि अर्का कसैलाइ पालन दिदा षान लाउन दि हेरविचार गर्दै गऱ्याको रहेछ भन्या अैन वमोजिम् वावु दाज्यूले. उठायाको सदर हुंछ. वावु दाज्यूले हेरविचार षान लाउन केहि नदि माया मारि सौप्याको रहेछ भन्या. वालषदेषि सहिसंभार गरि पालन्याले उठायाको सदर हुंछ.

९. कंन्याका वावु आमा रहयानछन् र कंन्याका दाज्यू भाइ भाउज्यू मावलि फुपु दिदि जेठा कांछा वावु ज्येठि कांछि आमा गैह्र कसैले पाल्याको रहेछ भन्या. तेस् कंन्यालाइ वालषदेषि सहिसंभार गरि जस्ले पाल्याको छ उसैले कंन्या विहा गरि दिनु. वालषदेषि सहि संभार नगर्न्याले कंन्यादान म गर्छु वा. कंन्या म दिंछु भनि उजुर गर्न पाउदैन पालन्याले जात भात नमिल्दमा र. अैनले रोकीयाकालाइ दियेछ भन्या सदर हुदैन. अैनमा लेषियाका रोलवालाले दियाको सदर हुंछ.

# रोगिलाइ कंन्यादिंन भंन्या.

१. तागाधारि जात गैह्रका विहा गर्दा. वर वक्क लाटो महारोगी लुलो कुजो दुवै आषाको अंधो लिंगहिन भयाको नपुँसक हात गोडा भाचि सावुद नभयाको वौल्हा छाऱ्या रोग भयाको रहेछ र. एस्ता केटालाइ सद्य छ भनि ढाटि केटि मागी. जनै सुपारि गरि वरियात आया पछि एति कुरामा एक कुराको मात्रै षुन रहेछ र. कंन्यादान नहुदै कंन्याका वावु आमा दाज्यू भाइले थाहा पाइ दिन्नौ भन्या केटाको कर लाग्दैन. कंन्याका वावु आमालाइ षत लाग्दैन. षुनिलाइ सद्यै हो भनि ढाटि कंन्या मागि दिन्यालाइ ५० रूपैया दंड गर्नु. रुपैया नतिऱ्या अैन वमोजिम्. कैद गर्नु. त्यो केटि माइतिले जस्लाइ दिंछन् उन्को षुसिं कंन्या विटुलि ठहर्दैनन्. जातैमा रहंछे. जात मिल्दामा विहा गरि दिनु. भातमा चल्छे कंन्या माग्न्याले एस्तो षुन छ भनि जाहेर गरि माघ्याको रहेछ भन्या कंन्या माग्न्यालाइ वात लाग्दैन. कंन्याको जन्मभर दुष हुन्या हुनाले षुन जनाइ माग्याको भया पनि कंन्यालाइ केटाको कर लाग्दैन.

२. नमासिन्या मतुवालि जात गैह्रका केटो वक्क लाटो महारोगि कुजो लुलो दुवै आषाको अंधो लिंगहिन भयाको नपुँसक हात गोडा भाचि सावुद नभयाको वौल्हा छाऱ्या रोग भयाको रहेछ र. एस्ता केटालाइ सद्य छ भनि ढाटि कंन्या मागी आफ्ना जातको छांग्रा रित दस्तुर गरि वरिआत आया पछि एति कुरामा एक कुराको मात्रै षुन रहेछ र. कंन्यादान नहुदै कंन्याका वावु आमा दाज्यू भाइले थाहा पाइ दिन्नौ भन्या. केटाको कर लाग्दैन. कंन्याका वावु आमालाइ षत लाग्दैन. षुनि केटालाइ सद्य छ भनि ढाटि कंन्या मागि दिन्यालाइ २५ रूपैया दंड गर्नु. रुपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु. कंन्या माइतिले षुस् पऱ्याका ठाउमा विहा गरिदिनु. जातभातमा चल्छे केटि माग्न्याले एस्तो षुन्छ भनि जाहेर गरि माघ्याको रहेछ. भन्या. केटि माग्न्यालाइ वात लाग्दैन केटिको जन्मभर दुष हुन्या हुनाले षुन जनाइ माग्याको भया पनि केटिलाइ केटाको कर लाग्दैन.

३. मासिन्या मतुवालि जात गैह्रका केटो वक्क लाटो महारोगि लुलो कुजो दुवै आषाको अंधो लिंगहिन भयाको नपुँसक हात गोडा भांचि सावुद नभयाको वौल्हा छाऱ्या रोग भयाको रहेछ र. एस्ता केटालाइ ढाटि कंन्या मागी आफ्ना जातको छांग्रा रित दस्तुर गरि वरिआत आया पछि एति कुरामा एक कुराको मात्रै षुन रहेछ र. कंन्यादान नहुदै कंन्याका वावु आमा दाज्यू

भाइले थाहा पाइ दिन्नौ भन्या केटाको कर लाग्दैन. कंन्याका वावु आमालाइ षत लाग्दैन. षुनि केटालाइ सद्य भनि ढाटि कंन्या मागि दिन्यालाइ ५ रूपैया दंड गर्नु. रुपैया नतिऱ्या अैनवमोजिम् कैद गर्नु. कंन्या माइतिले षुस पऱ्याका ठाउमा विहा गरिदिनु जात भात्मा चल्छे केटिमाग्न्याले एस्तो षुन छ भनि जाहेर गरि माग्याको रहेछ भन्या. केटि माग्न्यालाइ वात लाग्दैन. केटिको जन्मभर दुष हुन्या हुनाले षुन जनाइमाग्याको भया पनि केटिलाइ केटाको कर लाग्दैन.

४. छोइ छिटो हालनु पर्न्या पानि नचलन्या जात गैह्रको केटो वक्क लाटो महारोगि लुलो कुजो दुवै आषाको अंधो लिंगहिन भयाको नपुंसक हात गोडा भांचि सावुद नभया. को वौल्हा छाऱ्या रोग भयाको रहेछ र एस्ता केटालाइ सचै छ भनि ढाटि कंन्या मागि आफ्ना जातको छांग्रा रीत दस्तुर गरि वरिञात आया पछि एति कुरामा एक कुराको मात्रै षुन रहेछ र. कंन्यादान नहुदै. कंन्याका वावु आमा दाज्यू भाइले थाहा पाइ दिन्नौ भन्या केटाको कर लाग्दैन. कंन्याका वावु आमालाइ षत लाग्दैन. षुनि केटालाइ सद्य छ भनि ढाटि कंन्या मागि दिन्यालाइ २॥. रूपैया दंड गर्नु. कंन्या माइतिले षुस पऱ्याका ठाउमा विहा गरिदिनु. जात भातमा चल्छे केटि माग्न्याले एस्तो षुन छ भनि जाहेर गरि माग्याको रहेछ भन्या. केटि माग्न्यालाइ वात लाग्दैन. केटिको जन्मभर दुष हुन्या हुनाले षुन जनाइ माग्याको भया पनि केटिलाइ केटाको कर लाग्दैन.

५. छोइ छिटो हालनु पर्न्या. जात गैह्रका केटो वक्क लाटो महारोगि लुलो कुजो दुवै आषाको अंधो लिंगहिन भयाको नपुंसक. हात गोडा भांचि सावुद नभया. को वौल्हा छाऱ्या रोग भयाको रहेछ र. एस्ता केटालाइ सद्यै छ भनि ढाटि केटि मागि आफ्ना जातको छांग्रा रित दस्तुर गरि विहा गर्न आया पछि एति कुरामा एक कुराको मात्र षुन रहेछ र विहा नहुदै केटिका वावु आमा दाज्यू भाइले थाहा पाइ केटी दिदौन भन्या. केटाको कर लाग्दैन केटिका वावु आमालाइ वात लाग्दैन. षुन भयाको केटालाइ सद्यै छ भनि ढाटि केटि मागि दिन्यालाइ १॥. रूपैया दंड गर्नु. केटिलाइ माइतिले षुस पऱ्याका केटालाइ विहा गरिदिनु. जात भातमा चल्छे. केटि माग्न्याले एस्तो षुन छ भनि जाहेर गरि माग्याको रहेछ भन्या. केटि माग्न्यालाइ वात लाग्दैन. केटिको जन्मभर दुष हुन्या हुनाले षुन जनाइ माग्याको भया पनि केटिलाइ केटाको कर लाग्दैन.

# माग्याकि कंन्या विहा गर्दिन भंन्या

१. तागाधारि जात गैह्रले विहा गर्न भनि माग्याकि कंन्या जनै सुपारि आफ्ना जातको रित भै सकियाको रहेछ भन्या पनि महारोग भयाकि आषा फुटचाकि लाटि छाऱ्या रोग भिरिंगि भयाकि हात षुट्टा भाचि विकंवा भयाकि फुकौनि निस्क्याकि हिजडा रहिछ जन्मदै देषि कि लुलि रहिछ. वौल्हायाकि रहिछ भन्या पछि थाहा पाइ विहा गर्दिन भन्या केटालाइ विहा गर्नाको कर लाग्दैन. आफ्नु पऱ्याको दस्तुर फिर्ता गराइ कंन्या छोडन पाउछ. एति रोग भयाका वाहेकका कंन्या मागि जनै सुपारि गरि सक्या पछि विहा गर्दिन भनि छाडन्या लाइ ५० रूपैया दंड गर्नु. कंन्या वावु आमाले जात मिल्दा अर्कैलाइ विहा गरि दिनु हुंछ.

२. नमासिन्या मतुवालि जात गैह्रले विहा गर्न भनि माग्याकि कंन्या आफ्ना जातको दस्तुर छांग्रा रित भै सकियाकि रहिछ भन्या पनि महारोग भयाकि आषा फुटचाकि लाटि छाऱ्या रोग भिरंगि भयाकि हात षुट्टा भाचि विकंवा भयाकि फुकौनि निस्क्याकि हिजडा रहीछ. जन्मदै देषि लुलि रहिछ. वौल्हा याकि रहिछ. भन्या. पछि थाहा पाइ विहा गर्दिन भन्या. केटालाइ विहा गर्नाको कर लाग्दैन. आफ्नु पऱ्याको दस्तुर फिर्ता गराइ. कंन्या छोडन पाउछ. एति रोग भया वाहेकका कंन्या मागि आफ्ना जातको दस्तुर छांग्रा रित गरि सक्या पछि विहा गर्दिन भनी छाडन्यालाइ २५ रूपैया दंड गर्नु. कंन्या वावु आमाले जात मिल्दा अर्कैलाइ विहा गरि दिनु हुंछ.

३. मासिन्या मतुवालि जात गैह्रले विहा गर्न माग्याकि कंन्या आफ्ना जातको दस्तुर छांग्रा रित भैसकियाको रहेछ भन्या पनि महारोग भयाकि आषा फुटचाकि लाटि छाऱ्या रोग भयाकि भिरंगि भयाकि हात षुट्टा भाचि वीकंवा भयाकि फुकौनि निस्क्याकि हिजडा रहिछ. जन्मदै देषि कि लुलि रहिछ. वौल्हायाकि रहिछ भन्या. पछि थाहा पाइ विहा गर्दिन भन्या केटालाइ विहा गर्नाको कर लाग्दैन. आफ्नु पऱ्याको दस्तुर फिर्ता गराइ कंन्या छोडन पाउछ. एति रोग भया वाहेकका कंन्या मागि आफ्ना जातको रीत दस्तुर छांग्रा गरि सक्या पछि. विहा गर्दिन भनि छाडन्यालाइ ५ रूपैया दंड गर्नु. कंन्याका वावु आमाले जात मिल्दामा अर्कैलाइ विहा गरि दिनु हुंछ.

४. पानि नचलन्या छोइ छिटो हालनु नपर्न्या जात गैह्रले विहा गर्न भनि माग्याकि कंन्या. आफ्ना जातको दस्तुर छांग्रा रित भै सकियाको रहेछ भन्या पनि महारोग भयाकि आषा फुटचाकि लाटि छान्या रोग भिरंगि भयाकि हात षुट्टा भाचि विकंवा भयाकि फुकौनि निस्क्याकि हिजडा रहिछ जन्मदै देषिकि लूलि रहिछ.. वौल्हायाकि रहिछ भन्या पछि थाहा पाइ विहा गर्दिन भन्या. केटालाइ विहा गर्नाको कर लाग्दैन. आफ्नु पऱ्याको दस्तुर फिर्ता गराइ कंन्या छोडन पाउछ. एति रोग भया वाहेकका कंन्या मागि आफ्ना जातको दस्तुर छांग्रा रित गरि सक्या पछि. विहा गर्दिन भनि छाडन्यालाइ २॥. रूपैया दंड गर्नु. कंन्या वावु आमाले जात मिल्दा अर्कैलाइ विहा गरि दिनु हुंछ.

५. छोया छिटो हालनु पर्न्या जात गैह्रले विहा गर्न भनि माग्याकि कंन्या आफ्ना जातको दस्तुर छांग्रा रित भै सकियाको रहेछ भन्या पनि महारोग भयाकि आषा फुटचाकि लाटि छाऱ्या रोग भिरंगि भयाकि हात षुट्टा भाचि विकंवा भयाकि फुकौनि निस्क्याकि हिजडा रहिछ जन्मदै देषिकि लुलि रहिछ.. वौल्हायाकि रहिछ भन्या. पछि थाहा पाइ विहा गर्दिन भन्या केटालाइ विहा गर्नाको कर लाग्दैन. आफ्नु पऱ्याको दस्तुर फिर्ता गराइ कंन्या छोडन पाउछ. एति रोग भया वाहेकका कंन्यामागि आफ्ना जातको रीत दस्तुर छांग्रारित गरिसक्या पछि. विहा गर्दिन भनि छाडन्यालाइ १॥. रूपैया दंड गर्नु. कंन्या वावु आमाले जात मिल्दा अर्कैलाइ विहा गरि दिनु हुंछ.

# जातको रीत भया पछि विहा नहुदै अघि विग्रन्या

१. सिंदुर नपरंजि तागाधारि जातका जनै सुपारि मतुवालि जातका छांग्रा रितको दस्तुर दि आफ्ना जातको विहा भंदा अघि हुन्या रित कर्म भै सकिया पछि ११ वर्ष नाघ्याका कंन्या वावु आमाले नदि आफ्ना षुसिले अन्ेत्र विगऱ्या भन्या करणि गर्न्यालाइ आफुभंदा तल्ला जातमा विग्रया घटि वढि जात्मा करणि गर्न्याका अैन वमोजिम् सजाय गर्नु मिल्दो जातमा विग्र्याकि भया तागाधारिका १०० नमासिन्या मतुवालीको ५० मासिन्या जातकालाइ ८ छोइ छिटो हालनु नपर्न्या पानि नचलन्यालाइ ४ छोइ छिटो हालनु पर्न्यालाइ २ रूपैया दंड गर्नु. जार हांन पाउदैन हान्यो भन्या ज्यानको बदला ज्यान हुंछ.

२. तागाधारि जातका एकाले ११ वर्ष नाघ्याका कंन्या विहा गर्न भनि मागि जनै सुपारि भया पछि सिंदुर नपर्दासंममा वावु आमाले नदि कंन्या आफ्ना षुसि राजिले अर्कासित विग्रिछ भन्या विहा भै सकियाको हुनाले जार काट्न पाउदैन काट्न्याको ज्यानको वदला ज्यान हुंछ. करणि गर्न्यालाइ आफुभंदा घटि वढि जात्मा करणि गरेछ भन्या. घटि वढि जात्मा करणि गर्न्याका अैन वमोजिम् सजाय गर्नु. आफु मिल्दो जात भया १०० रूपैया दंड गर्नु.

३. नमासिन्या मतुवालि जातका ११ वर्ष नाघ्याका कंन्या एकाले विहा गर्न भनि मागी आफ्ना जातको रित छांग्रा दस्तुर षाया पछि विहा नहुदासंममा वावु आमाले नदि आफ्ना षुसि राजिले अर्कासित विग्रिछ भन्या विहा भै सकियाको नहुनाले जारकाटन्या जातले जारकाटन पाउदैन. काटऱ्या ज्यानको वदला ज्यान हुंछ करणि गर्न्यालाइ आफुभंदा घटि वढि जातको भया घटि वढि जातमा करणि गर्न्याका अैन वमोजिम् सजाय गर्नु. आफु मिल्दो भया ५० रूपीया दंड गर्नु.

४. मासिन्या मतुवालि जातका ११ वर्ष नाघ्याका कंन्या एकाले विहा गर्न भनि मागि आफ्ना जातको रित छांग्रा दस्तुर षाया पछि विहा नहुदासंममा वावु आमाले नदि आफ्ना षुसि राजिले अर्कासित विग्रिछ भन्या. विहा भै सकियाको नहुनाले जार काट्न्या जातले जार काट्न पाउदैन

काटचा ज्यानको वदला ज्यान हुंछ करणि गर्न्यालाइ आफुभंदा घटि वढि जातको भया घटि वढि जात्मा करणि गर्न्याका अैन वमोजिम् सजाय गर्नु. आफु मिल्दो भया ८ रूपैया दंड गर्नु.

५. पानि नचलन्या छोया छिटो हालनु नपर्न्या जातका ११ वर्ष नाघ्याका कंन्या एकाले विहा गर्न भनि मागि आफ्ना जातको रित छांग्रा दस्तुर भया पछि विहा नहुदासंममा वावु आमाले नदि आफ्ना षुसि राजिले अर्कासित विग्रिछ भन्या विहा भैसकियाको नहुनाले जार काट्न्या जातले जार काट्न पाउदैन. काटचा ज्यानको वदला ज्यान हुंछ करणि गर्न्यालाइ आफुभंदा घटि वढि जातको भया घटि वढि जात्मा करणि गर्न्याका अैन वमोजिम् सजाय गर्नु. आफु मिल्दो भया ४ रूपैया दंड गर्नु.

६. छोया छिटो हालनु पर्न्या जातका ११ वर्ष नाघ्याका कंन्या एकाले विहा गर्न भनि मागी आफ्ना जातको रीत छांग्रा दस्तुर भया पछि विहा नहुदासम्ममा वावु आमाले नदि आफ्ना षुसि राजिले अर्कासित विग्रिछ भन्या विहा भै सकियाको नहुनाले जार काट्न्या जातले जार काट्न पाउदैन. काटचा ज्यानको वदला ज्यान हुंछ. करणि गर्न्यालाइ आफुभंदा घटि वढि जातको भया. घटि वढि जातमा करणि गर्न्याका अैन वमोजिम् सजाय गर्नु. आफुमिल्दो भया २ रूपैया दंड गर्नु.

# विहा नहुदै अघि विग्रन्या

१. उपाध्या व्राम्हणका ११ वर्ष नाघ्याका कंन्याको विहा नहुदै अघि उपाध्या व्राम्हणले करणि गर्‍याको रहेछ अघि करणि गर्न्याले जाहेर पनि गरेनछ. करणि जाहेर नभै जात मिल्दा कसैले विहा गरेछ. विहा भै सकिया पछि अघिको करणि जाहेर भयो भन्या अघिका करणि गर्न्यावाट १०० रुपैया विहा षर्च भराइ १०० रुपैया दण्ड गर्नु.भोरमा भात षान्यालाइ पतिया गराइदिनु. विहा नहुदै अघि आफुले करणि गरि मैले करणि गर्‍याको छ भनि जाहेर गर्न्यालाइ षत वात लाग्दैन.

२. उपाध्या व्राम्हणका ११ वर्ष नाघ्याका कंन्याको विहा नहुदै अघि रजपूत जैसि तागाधारि जातले करणि गर्‍याको रहेछ अघि करणि गर्न्याले जाहेर पनि गरेनछ करणि जाहेर नभै जात मिल्दा कसैले विहा गरेछ विहा भै सकिया पछि अघिको करणि जाहेर भयो भन्या. अघि करणि गर्न्यावाट १०० रुपैया विहा षर्च भराइ ६ वर्ष कैद गर्नु. विहा नहुदै अघि आफुले करणि गरि मैले करणि गर्‍याको छ भनि जाहेर गर्न्यालाइ ३ वर्ष कैद गर्नु. म्यादको डवल् दिया लिनु. भोरमा भात षान्यालाइ पतिया गराइ दिनु.

३. उपाध्या व्राम्हणका ११ वर्ष नाघ्याका कंन्याको देवी भट्ट देव भाजु तेह्रौत्या मधिस्या देसि व्राम्हण दसनाम जोगि जंगम संन्यासि सेवडा वैरागि गैह्र भेषधारि ३ लिंगदेषिका जैसि जात गैह्रले विहा नहुदै अघि करणि गर्‍याको रहेछ. अघि करणि गर्न्याले जाहेर पनि गरेनछ करणि जाहेर नभै जात मिल्दा कसैले विहा गरेछ विहा भै सकिया पछि अघिको करणि जाहेर भयो भन्या. अघि करणि गर्न्यावाट १०० रुपैया विहा षर्च भराइ ६ वर्ष कैद गर्नु. विहा नहुदै अघि आफुले करणिगरि मैले करणि गर्‍याको छ भनि जाहेर गर्न्यालाइ ३ वर्ष कैद गर्नु. म्यादको डवल् दिया लिनु. भोरमा पर्न्यालाइ पतिया गराइ दिनु.

४. उपाध्या व्राम्हणका ११ वर्ष नाघ्याका कंन्याको नमासिन्या मतुवालि जात र जनै लाउन्या नलाउन्या नमासिन्या नेवार जातले विहा नहुदै अघि करणि गर्‍याको रहेछ अघि करणि गर्न्याले जाहेर पनि गरेनछ करणि जाहेर नभै जात मिल्दा कसैले विहा गरेछ विहा भै सकिया पछि अघिको करणि जाहेर भयो भन्या. अघि करणि गर्न्यावाट १०० रुपैया विहाषर्च भराइ ८ वर्ष

कैद गर्नु. विहानहुदै अघि आफुले करणि गरि मैले करणि गऱ्याको छ भनि जाहेर गर्न्यालाइ ४ वर्ष कैद गर्नु. म्यादको डवल् दिया लिनु. भोरमा पर्न्यालाइ पतिया गराइदिनु.

५. उपाध्या व्राम्हण रजपूत जैसि तागाधारि जातका ११ वर्ष नाघ्याका कंन्याको विहा नहुदै अघि मासिन्या पर्जा जातले करणि गऱ्याको रहेछ. अघि करणि गर्न्याले जाहेर पनि गरेनछ करणि जाहेर नभै जात मिल्दा कसैले विहा गरेछ. विहा भै सकिया पछि अघिको करणि जाहेर भयो भन्या अघि करणि गर्न्यालाइ ४ वर्ष कैद गरि मासिदिनु. विहा नहुदै अघि आफुले करणि गऱ्याको छ भनि जाहेर गर्न्यालाइ २ वर्ष कैद गरि मासिदिनु. भोरमा भात षान्यालाइ पतिया गराइदिनु.

६. रजपूत जैसि तागाधारि जातका ११ वर्ष नाघ्याका कंन्याको विहा नहुदै अघि उपाध्या व्राम्हणले करणि गऱ्याको रहेछ अघि करणि गर्न्याले जाहेर पनि गरेनछ. करणि जाहेर नभै जात मिल्दा. कसैले विहा गरेछ विहा भै सकिया पछि अघिको करणि जाहेर भयो भन्या. अघि करणि गर्न्यावाट १०० रुपैया विहा षर्च भराइ ३० रुपैया दंड गर्नु. रुपैया नतिऱ्या कैद गर्नु.विहा नहुदै अघि आफुले करणि गरि. मैले करिण गऱ्याको छ भनि जाहेर गर्न्यालाइ षतवात लाग्दैन. भोरमा षान्यालाइ पतिया गराई दिनु.

७. जैसि व्राम्हणका रजपूतले रजपूतका जैसिले ११ वर्ष नाघ्याका कंन्याको विहा नहुदै अघि करणि गऱ्याको रहेछ अघि करणि गर्न्याले जाहेर पनि गरेनछ करणि जाहेर नभैजात मिल्दा कसैले विहा गरेछ विहा भै सकिया पछि अघिको करणि जाहेर भयो भन्या अघि करणि गर्न्यावाट १०० रुपैया विहा षर्च भराइ ३० रुपैया दंड गर्नु. विहा नहुदै अघि आफुले करणि गरि मैले करिण गऱ्याको छ भनि जाहेर गर्न्यालाइ २० रुपैया दंड गर्नु. रुपैया नतिऱ्या कैद गर्नु. भोरमा पार्न्यालाइ पतिया गराई दिनु.

८. जैसि व्राम्हणका ११ वर्ष नाघ्याका कंन्याको विहा नहुदै अघि जैसि जातले करणि गऱ्याको रहेछ अघि करणि गर्न्याले जाहेर पनि गरेनछ करणि जाहेर नभै जात मिल्दा कसैले विहा गरेछ विहा भै सकिया पछि अघिको करणि जाहेर भयो भन्या अघि करणि गर्न्यावाट १०० रुपैया विहा षर्च भराइ ३० रुपैया दंड गर्नु. रुपैया नतिऱ्या कैद गर्नु. विहा नहुदै अघि आफुले करणि

गरि मैले करिण गऱ्याको छ भनि जाहेर गर्न्यालाइ षतवात लाग्दैन. भोरमा पर्न्या लाइ पतिया गराइ दिनु.

९. रजपूतका र जैसिका ११ वर्ष नाघ्याका कंन्याको विहा नहुदै अघि तागाधारि क्षतृ जात गैह्रले करणि गऱ्याको रहेछ. अघि करणि गर्न्याले जाहेर पनि गरेनछ करणि जाहेर नभै जात मिल्दा कसैले विहा गरेछ विहा भै सकिया पछि अघिको करणि जाहेर भयो भन्या करणि गर्न्यावाट १०० रुपैया विहा षर्च भराइ ४ वर्ष कैद गर्नु. विहा नहुदै अघि आफुले करणि गरि मैले करणि गऱ्याको छ. भनि जाहेर गर्न्यालाइ २ वर्ष कैद गर्नु. म्यादको डवल दिया लिनु. भोरमा पर्न्यालाइ पतिया गराइदिनु.

१०. रजपूत जैसि ब्राम्हण तागाधारि जात गैह्रका ११ वर्ष नाघ्याका कंन्याको विहा नहुदै अघि नमासिन्या मतुवालि जात र. जनै लाउन्या नलाउन्या. नमासिन्या नेवार जात गैह्रले करणि गऱ्याको रहेछ अघि करणि गर्न्याले जाहेर पनि गरेनछ करणि जाहेर नभै जात मिल्दा कसैले विहा गरेछ विहा भै सकिया पछि अघिको करणि जाहेर भयो भन्या करणि गर्न्यावाट १०० रुपैया विहा षर्च भराइ ६ वर्ष कैद गर्नु. विहा नहुदै अघि आफुले करणि गरि मैले करिण गऱ्याको छ भनि जाहेर गर्न्यालाइ ३ वर्ष कैद गर्नु. म्यादको डवल् दिया लिनु भोरमा पर्न्यालाइ पतिया गराइदिनु.

११. तागाधारि जात गैह्रका ११ वर्ष नाघ्याका कंन्याको विहा नहुदै अघि उपाध्या जैसि रजपूत जातले करणि गऱ्याको रहेछ अघि करणि गर्न्याले जाहेर पनि गरेनछ. करणि जाहेर नभै जात मिल्दा कसैले विहा गरेछ. विहा भै सकिया पछि अघिको करणि जाहेर भयो भन्या. अघि करणि गर्न्यावाट १०० रुपैया विहा षर्च भराइ ३० रुपैया दंड गर्नु. रुपैया नतिऱ्या कैद गर्नु. विहा नहुदै अघि आफुले करणि गरि मैले करिण गऱ्याको छ भनि जाहेर गर्न्यालाइ षतवात लाग्दैन. भोरमा पर्न्यालाइ पतिया गराइदिनु.

१२. तागाधारि जात गैह्रका ११ वर्ष नाघ्याका कंन्याको विहा नहुदै अघि तागाधारि जात गैह्रले करणि गऱ्याको रहेछ अघि करणि गर्न्याले जाहेर पनि गरेनछ करणि जाहेर नभै जात मिल्दा कसैले विहा गरेछ विहा भै सकिया पछि अघिको करणि जाहेर भयो भन्या अघि करणि

गर्न्यावाट १०० रुपैया विहा षर्च भराइ ३० रुपैया दंड गर्नु. रुपैया नतिऱ्या कैद गर्नु विहा नहुदै अघि आफुले करणि गरि मैले करिण गऱ्याको छ भनि जाहेर गर्न्यालाइ षतवात लाग्दैन. भोरमा पर्न्यालाइ पतिया गराइदिनु.

१३. नमासिन्या मतुवालि जात गैह्रका ११ वर्ष नाघ्याका कंन्याको विहा नहुदै अघि उपाध्या व्राम्हण रजपूत जैसि तागाधारि जात गैह्रले करणि गऱ्याको रहेछ अघि करणि गर्न्याले जाहेर पनि गरेनछ करणि जाहेर नभै जात मिल्दा कसैले विहा गरेछ विहा भै सकिया पछि अघिको करणि जाहेर भयो भन्या अघि करणि गर्न्यावाट ६० रुपैया विहा षर्च भराइ २० रुपैया दंड गर्नु. रुपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु. विहा नहुदै अघि आफुले करणि गरि मैले करणि गरेको छ भनी जाहेर गर्न्यालाइ षतवात लाग्दैन.

१४. नमासिन्या मतुवालि जात गैह्रका ११ वर्ष नाघ्याका कंन्याको विहा नहुदै अघि नमासिन्या मतुवालि र जनै लाउन्या नलाउन्या. नमासिन्या नेवार जातले करणि गऱ्याको रहेछ अघि करणि गर्न्याले जाहेर पनि गरेनछ करणि जाहेर नभै जात मिल्दा कसैले विहा गरेछ विहा भै सकिया पछि अघिको करणि जाहेर भयो भन्या. अघि करणि गर्न्यावाट ६० रुपैया विहा षर्च भराइ ६० रुपैया दंड गर्नु. विहा नहुदै अघि आफुले करणि गऱ्याको छ भनि जाहेर गर्न्यालाइ षतवात लाग्दैन.

१५. नमासिन्या मतुवालि जात गैह्रका ११ वर्ष नाघ्याका कंन्याको विहा नहुदै अघि मासिन्या पर्जा जात गैह्रले करणि गऱ्याको रहेछ अघि करणि गर्न्याले जाहेर पनि गरेनछ करणि जाहेर नभै जात मिल्दा कसैले विहा गरेछ विहा भै सकिया पछि अघिको करणि जाहेर भयो भन्या करणि गर्न्यालाइ १ वर्ष कैद गर्नु. म्यादको डवल् दिया लि छाडिदिनु. विहा नहुदै अघि आफुले करणि गरि मैले करणि गऱ्याको छ भनि जाहेर गर्न्यालाइ स्वास्नि जातमा आउन्या रहिछ भन्या ६० रुपैया दंड गर्नु. जातमा आउन्या रहिनछ भन्या मासिदिनु.

१६. मासिन्या मतुवालि जात गैह्रका ११ वर्ष नाघ्याका कंन्याको विहा नहुदै अघि उपाध्या व्राम्हण रजपूत जैसि तागाधारि नमासिन्या मतुवालि जात गैह्रले करणि गऱ्याको रहेछ अघि करणि गर्न्याले जाहेर पनि गरेनछ. करणि जाहेर नभै जात मिल्दा कसैले विहा गरेछ. विहा भै सकिया

पछि अघिको करणि जाहेर भयो भन्या. अघि करणि गर्न्यावाट २० रुपैया विहा षर्च भराइ १० रुपैया दंड गर्नु. विहा नहुदै अघि आफुले करणि गरि मैले करणि गऱ्याको छ भनि जाहेर गर्न्यालाइ षतवात लाग्दैन.

१७. मासिन्या मतुवालि जात गैह्रका ११ वर्ष नाघ्याका कंन्याको विहा नहुदै अघि मासिन्या पर्ज्या जात गैह्रले करणि गऱ्याको रहेछ र. अघि करणि गर्न्याले जाहेर पनि गरेनछ करणि जाहेर नभै जात मिल्दा कसैले विहा गरेछ विहा भै सकिया पछि अघिको करणि जाहेर भयो भन्या अघि करणि गर्न्यावाट २० रुपैया विहा षर्च भराइ १० रुपैया दंड गर्नु. विहानहुदै अघि आफुले करणि गरि मैले करणि गऱ्याको छ भनि. जाहेर गऱ्यो भन्या. हाम्रा भातमा पारिदियो भनि कराउन आया ५ रूपैया दंडगर्नु. कराउन आयानन् भन्या षतवात लाग्दैन.

१८. पानि नचलन्या छिटो हालनु नपर्न्यै नपर्न्या जात्मा पानि चलन्या जातका एका जातका ११ वर्ष नाघ्याका कंन्याको विहा नहुदै अघि कसैले करणि गऱ्याको रहेछ करणि भयाको थाहा पाइ तेहि कंन्या अर्काले मागी विहागरेछ विहा भै सकिया पछि अघिको करणि जाहेर भयो भन्या अघि करणि गर्न्यावाट १५ रूपैया विहा षर्च भराई १५ रूपैया दंड गर्नु. विहा नहुदै अघि आफुले करणि गरि मैले करणि गऱ्याको छ भनि जाहेर गर्न्यालाइ जात मिल्दामा र. घटि जातमा करणि गर्न्यालाइ षत लाग्दैन आफुभंदा ठुला जातका कंन्याको करणि गरि भात पानिमा पाऱ्या १० रूपैया दंड गर्नु. इनै जात्मा उपल्ला जातले आफुभंदा कम् पानि नचलन्या जातका कंन्याको करणि गरि आफ्ना जातलाइ भात पानिमा वोरेछ भन्या १० रूपैया दंडगर्नु. रूपैया नतिऱ्या अैन वमोजिम् कैद गरि जातका रितले शुद्ध हुंछ.

१९. छोया छिटो हालनु पर्न्या जातका ११ वर्ष नाघ्याका कंन्याको विहानहुदै अघि छोयाछिटो हालनु नपर्न्या पानि नचलन्या जातले करणि गऱ्याको रहेछ करणि भयाको थाहा नपाइ तेहि कंन्या कसैले मागि विहा गरेछ विहाभै सकिया पछि अघिको करणि जाहेर भयो भन्या अघि करणि गर्न्याको अंससर्वस्वगरि उसै जातको १ अक्षर षोदि उसै जातमा मिलाइ दिनु. विहा नहुदै अघि आफुले करणि गरि मैले करणि गऱ्याको छ भनि कसैलाइ पानिमानपारि जाहेर गर्न्यालाइ षतवात लाग्दैन.

२०. छोइ छिटो हालनु पर्न्यै पर्न्या जात्मा पानि चलन्या एका जातका ११ वर्ष नाघ्याका कंन्याको विहा नहुदै अघि छोइ छिटो हालनु पर्न्या जातले करणी गऱ्याको रहेछ अघि करणि गर्न्याले जाहेर पनि गरेनछ करणि जाहेर नभै जात मिल्दा कसैले विहा गरेछ. विहाभै सकिया पछि अघिको करणि जाहेर भयो भन्या अघि करणि गर्न्यावाट १५ रूपैया विहा. षर्च भराइ १५ रूपैया दंड गर्नु. अघि जाहेर गरेछ भन्या जातमिल्दामा र आफु भंदा घटि जातमा कसैलाइ पानीमा नपारी करणि गर्नालाइ षत लाग्दैन. आफु भन्दा ठुला जातका कंन्याको करणि गरि भात पानिमा पाऱ्या १० रूपैया दंड गर्नु. इनै जातका उपल्लाजातले पानि नचल्न्या अरू कम् जातका कंन्याको करणि गरि आफ्ना जातलाइ भात पानिमा पारेछ भन्या १० रूपैया दंडगर्नु. रूपैया नतिऱ्या अैनवमोजिम कैद गरि उसैजातमा मिलाइ दिनु.

# आसय करणि.

१. रजस्वला नभयाकि स्वास्नि वाहेक उमेर पुग्याका विवाहिता स्वास्नि दिनरात मा घरका मालिकमा एक जना संग नभनि विदा नमागि साथि नलि एकलै गै र. अन्यत्रका घर रात वसि लोग्न्यालाइ संका पऱ्यो भन्या. सोध पुछ गर्दा करणिको पत्तालागेन भन्या भताहा भाइ र माइति बसी भात खान्छन भन्या. भात चल्छ. खादैनन् भन्या कर लाग्दैन भात नषाइ राषनु.

२. स्वास्नि मानिस कसैले आफुलाइ करणिका आसयले अर्काले हातपात गऱ्यामा करणि वचाइ उसै वषत कुरो जाहेर गर्न्या स्वास्नि जातभात वाहेक हुंन. जातैमा रहिंछ पतिया प्रायश्चित्त केहि पर्दैन.

३. अर्काकि प्रति व्रता कंन्या विधवा स्वास्नि मलाइ फकाइ दे भनि भंदा मोहनि गरि दिन्यालाइ ६० रूपैया मोहनि गर्न लाउन्यालाइ १२० वेस्या स्वास्निलाइ मोहनि गर्न लाउन्यालाइ ४० गरि दिन्यालाइ २० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैनवमोजिम् कैद गर्नु.

४. अरू कसैका कमारा कमारिले कोहि वडा उमरावका छोरि वुहारि स्वास्नि फकाइ करणि चुकाइ दियाको रहेछ भन्या १॥ वर्ष कैद गरि जस्का कमारा कमारि हो उसै धनिलाइ सौपिदिनु म्यादका रूपैया चौवरका हिसावले दिया लिनु. वाधा वधेत्यानिले रहेछ भन्या धनिको थैलि परसारि अदालत ठाना अमालबाट मासिदिनु.

५. मुडन्या र जार काटिन्या जातका सधवा स्वास्निलाइ यो विवाहिता हो वेस्या हो भनि ढाटि अर्का लोग्न्या नाठासंग लैगि करणि चुकाइदिन्या लोग्न्या स्वास्नि जो हो तेस्ता मासिन्या जातलाइ मासिदिनु. नमासिन्या जातका लोग्न्यालाइ ६ वर्ष स्वास्नि मानिसलाइ ३ वर्ष कैद गरि छाडिदिनु. एस्तालाइ म्यादका रूपैया नलिनु डवल् दिया लि छाडिदिनु.

६. उपाध्या व्राम्हण लगायेत् तागाधारि जात कसैले आफ्नाछोरा पट्टिमा ७ पुस्ता छोरिपट्टिमा ३ पुस्तासम्मका ११ वर्ष उभोका स्वास्निमानिसलाइ करणिका आसयले फकाउन्यालाइ ४० रूपैया मुषले पनि फकाउन्या. हातमा पनि समाउन्यालाइ ८० रूपैया चुम्वन स्मेत् गर्न्यालाइ

१०० रूपैया दुद समाउन्यालाइ १५० रूपैया स्वास्निलाइ लोटाइ गोडा स्मेत् समाउन्यालाइ ५०० रूपैयाका दरले दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम् कैद गरि औवल्लाइ ५ दोम्लाइ ४ सिम्लाइ ३ चाहारलाइ २ रुपैयाका दरले धर्माधिकारलाइ गोदान दिलाइ पतिया गराइ दिनु.

७. कसैले फलानि स्वास्निलाइ फकाइदे भंदा फकाउन जान्यामा उस्ले फकायेछ करणि हुन पायाको रहेनछ भन्या. तागाधारि जातका कंन्या सधवा विधवा स्वास्नि फकाउन जान्या लमिलाइ २० रुपैया दंड गर्नु.

८. कसैले फलानि स्वास्नि मलाइ फकाइदे भंदा फकाउन जान्यामा उस्ले फकाये छ करणि हुन पायाको रहेनछ भन्या. नमासिन्या मतुवालि जातका कंन्या सधवा विधवा. स्वास्नि फकाउन जान्या लमिलाइ १० रुपैया दंड गर्नु.

९. कसैले फलानि स्वास्नि मलाइ फकाइदे भंदा फकाउन जान्यामा उस्ले फकाये छ करणि हुन पायाको रहेनछ भन्या मासिन्या मतुवालि जातका कंन्या सधवा विधवा स्वास्नि फकाउन जान्या लमिलाइ ५ रुपैया दंड गर्नु.

१०. कसैले फलानि स्वास्नि मलाइ फकाइदे भंदा फकाउन जान्यामा उस्ले फकाये छ करणि हुन पायाको रहेनछ भन्या. छोइ छिटो हालनु नपर्न्या जातका कंन्या सधवा विधवा स्वास्नि फकाउन जान्या लमिलाइ २॥ रुपैया दंड गर्नु.

११. कसैले फलानि स्वास्नि मलाइ फकाइदे भंदा फकाउन जान्यामा उस्ले फकाये छ करणि हुनपायाको रहेनछ भन्या. छोइ छिटो हालनु पर्न्या. जातका कंन्या सधवा विधवा स्वास्नि फकाउन जान्या लमिलाइ १। रुपैया दंड गर्नु.

१२. तागाधारि जातका ११ वर्ष नाघ्याका कंन्या सधवा विधवा स्वास्निले घरका जहान परियार भयाका ठाउमा आफ्ना नाता गोताका १२ वर्ष नाघ्याका लोग्न्या मानिस्का कपालका जौरा माऱ्यामा. जौरा मारिदिन्या र. मारि माग्न्या. दुवैलाइ षतवात लाग्दैन.

१३. तागाधारि जातका ११ वर्ष नाघ्याका सधवा विधवा कंन्या स्वास्नि मानिस्ले आफु मिल्दा कुटुम्व र. आफुभंदा घटि वढि जातका १२ वर्ष नाघ्याका लोग्न्या मानिस्लाइ हवस् वा लोग्न्या मानिस्ले स्वास्नि मानिस्लाइ हवस्. अरु मानिसहरू भयाका ठाउमा जौरा मार्‍या भन्या करणिको संका निस्क्या वुझि अैन वमोजिम् निसाफ गर्नु. करणिको संका देषियेन. जौरा मार्‍याको मात्रै ठहर्‍यो भन्या. जौरा मार्न्या मराउन्या दुवैलाइ २०।२० रुपैया दंड गर्नु. जात जादैन.

१४. नमासिन्या मतुवालि जात गैह्र कसैले आफ्ना छोरापट्टिमा ७ पुस्ता छोरिपट्टिमा ३ पुस्ता सम्मका ११ वर्ष नाघ्याका स्वास्नि मानिस्लाइ करणिका आसयले फकाउन्यालाइ २० रूपैया मुषले पनि फकाउन्या हातमा पनि समाउन्यालाइ ४० रूपैया चुम्वन स्मेत् गर्न्यालाइ ५० दुद समाउन्यालाइ ७५ रूपैया स्वास्निलाइ लोटाइ गोडा स्मेत् समाउन्यालाइ २५० रूपैयाका दरले दंड गर्नु. रूपैया नतिर्‍या अैन वमोजिम् कैद गरि औवल्लाइ २॥ दोयम्लाइ २ सिम्लाइ १॥ चहारलाइ १ रुपैया धर्माधिकारलाइ गोदान दिलाई पतिया गराइदिनु.

१५. मासिन्या मतुवालि जात गैह्र कसैले आफ्ना छोरापट्टिमा ५ पुस्ता छोरि पट्टिमा ३ पुस्ता सम्मका ११ वर्ष नाघ्याका स्वास्नि मानिस्लाइ करणिका आसयले फकाउन्यालाइ १० रूपैया मुषले पनि फकाउन्या हातमा पनि समाउन्यालाइ २० रूपैया चुम्वन स्मेत् गर्न्यालाइ २५ रूपैया दुद समाउन्यालाइ ३७॥. रूपैया स्वास्निलाइ लोटाइ गोडा स्मेत् समाउन्यालाइ १२५ रूपैयाका दर्ले दंड गर्नु रूपैया नतिर्‍या अैन वमोजिम् कैद गर्नु.

१६. पानि नचलन्या जात र छिटो हालनु पर्न्या जात गैह्र कसैले आफ्ना छोरा पट्टिमा ४ पुस्ताका छोरिपट्टिमा ३ पुस्ता सम्मका ११ वर्ष नाघ्याका स्वास्नि मानिसलाइ करणिका आसयले फकाउन्यालाइ ५ रूपैया मुषले पनि फकाउन्या हातमा पनि समाउन्यालाइ १० रूपैया चुम्वनस्मेत् गर्न्यालाइ १२॥ रुपैया दुद समाउन्यालाइ १८॥। रूपैया स्वास्निलाइ लोटाइ गोडा स्मेत् समाउन्यालाइ ६२॥. रूपैयाका दर्ले दंड गर्नु रूपैया नतिर्‍या अैन वमोजिम् कैद गर्नु.

१७. अर्काका सधवा विधवा कंन्या कसैसित विग्र्‍याका विग्र्‍याको जाहेर नभै सद्यै छन् भंन्या ठहराइ अर्का लोग्न्यालाइ फकाइदियो रोवकार गर्दा. अघिवाट अरुसित विग्र्‍याकि ठहर्‍यो भन्या एस्ता गुप्ति वेस्या फकाइ दिन्यामा करणि चुक्याको रहेनछ भन्या. तागाधारि जातका सधवा विधवा कंन्या फकाइ दिन्यालाइ ८ रुपैया नमासिन्या मतुवालि जातका फकाइ दिन्यालाइ ४ मासिन्या

मतुवालि जातका फकाइदिन्यालाइ २ पानि नचलन्यामा छोया छिटो हालनु नपर्न्या जातका फकाइदिन्यालाइ १ छोया छिटो हालनु पर्न्या जातका फकाइदिन्यालाइ ॥. रुपैया दंड गर्नु.

१८. कसैले फलानि स्वास्नि मलाइ फकाइदे भंदा तागाधारि जातका ११ वर्ष नाघ्याका कंन्या सधवा विधवा स्वास्नि फकाइ तागाधारि जातसित करणि चुकाइ दिन्यालाइ ४० रुपैया नमासिन्या जातसित करणि चुकाइ दिन्यालाइ ६० मासिन्या जातसित करणि चुकाइ दिन्यालाइ ८० रुपैया दंड गर्नु. रुपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु. पानि नचलन्यामा छोया छिटो हालनु नपर्न्या जातसित करणि चुकाइदिन्या मासिन्या जात भया २ वर्ष कैद गरि मासिदिनु. नमासिन्या जात भया ४ वर्ष कैद गर्नु. छोया छिटो हालनु पर्न्या जातसित करणि चुकाइदिन्यामा. मासिन्या जात भया ४ वर्ष कैद गरि मासिदिनु. नमासिन्या जात भया ८ वर्ष कैद गर्नु. म्यादको डवल् दिया लिनु.

१९. कसैले फलानि स्वास्नि मलाइ फकाइदे भंदा मासिन्या मतुवालि जातका ११ वर्ष नाघ्याका कंन्या सधवा विधवा स्वास्निलाइ फकाइ तागाधारि जात नमासिन्या मतुवालि जातसित करणि चुकाइ दिन्यालाइ ३० रुपैया मासिन्या जातसित करणि चुकाइ दिन्यालाइ ४० रुपैया दंड गर्नु. रुपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु. पानि नचलन्या जातमा छोया छिटो हालनु नपर्न्या जातसित करणि चुकाइ दिन्यामा मासिन्या जात भया १ वर्ष कैद गरि मासिदिनु. नमासिन्या जात भया २ वर्ष कैद गर्नु छोया छिटो हालनु पर्न्या जातसित करणि चुकाइ दिन्यामा. मासिन्या जात भया २ वर्ष कैद गरि मासिदिनु. नमासिन्या जात भया ४ वर्ष कैद गर्नु. म्यादको डवल् दिया लि छाडिदिनु.

२०. कसैले फलानि स्वास्नि मलाइ फकाइदे भंदा मासिन्या मतुवालि जातका ११ वर्ष नाघ्याका कंन्या सधवा विधवा स्वास्निलाइ फकाइ तागाधारि जात नमासिन्या मतुवालि जात मासिन्या मतुवालि जातसित करणि चुकाइ दिन्यालाइ १० रुपैया दंड गर्नु. रुपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु. पानि नचलन्यामा छोया छिटो हालनु नपर्न्या जातसित करणि चुकाईदिन्यामा मासिन्या जात भया ६ महिना कैद गरि मासिदिनु. नमासिन्या जात भया १ वर्ष कैद गर्नु. छिटो हालनु पर्न्या जातसित करणि चुकाइ दिन्यामा मासिन्या जात भया १ वर्ष कैद गरि मासिदिनु. नमासिन्या जात भया २ वर्ष कैद गर्नु. म्यादको डवल् दिया लिनु.

२१. कसैले फलानि स्वास्नि मलाइ फकाइदे भंदा पानि नचलन्यामा छोया छिटो हालनु नपर्न्या. जातका ११ वर्ष नाघ्याका सधवा विधवा कंन्यालाइ फकाइ तागाधारि जातसित करणि चुकाइ दिन्यालाइ ५० नमासिन्या मतुवालि जातसित करणि चुकाइ दिन्यालाइ २५ रुपैया मासिन्या मतुवालि जातसित करणि चुकाइ दिन्यालाइ १२॥. पानि नचलन्यामा छोइ छिटो हालनु नपर्न्यै जातसित करणि चुकाइ दिन्यालाइ २॥. छोइ छिटो हालनु पर्न्या जातसित करणि चुकाइ दिन्यालाइ १० रुपैया दंड गर्नु. रुपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

२२. दमाइ गाइन्या वादिले फलानि स्वास्नि मलाइ फकाइदे भंदा कामि सार्कि कडाराका ११ वर्ष नाघ्याका कंन्या सधवा विधवा स्वास्नि फकाइ करणि चुकाइ दियेछ भन्या ५ रुपैया दंड गर्नु.

२३. कसैले फलानि स्वास्नि मलाइ फकाइदे भंदा छोइ छिटो हालनु पर्न्या जातका ११ वर्ष नाघ्याका सधवा विधवा कंन्या फकाइ तागाधारि जातसित करणि चुकाइ दिन्यालाइ ८० नमासिन्या मतुवालि जातसित करणि चुकाइ दिन्यालाइ ६० मासिन्या मतुवालि जातसित करणि चुकाइदिन्यालाइ ४० पानि नचलन्यामा छोइ छिटो हालनु नपर्न्या जातसित करणि चुकाइ दिन्यालाइ १० छोइ छिटो हालनु पर्न्यै जातसित करणि चुकाइ दिन्यालाइ १॥ रुपैया दंड गर्नु. रुपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

२४. चारवर्ण छतिसै जात गैह्र कसैले सधवा विधवा कंन्या फकाइ करणि चुकाइ दि आफुले पानि नचलन्यासम्मका जातसित करणि चुकाइ दियाका लोग्न्या स्वास्निका हातको भात पानि नचलन्या छिटो हालनू पर्न्या जातसित करणि चुकाइ दियाका लोग्न्या स्वास्निका हातको भात पानि षायाको रहेनछ भन्या. करणि चुकाइ दिन्यालाइ अैन वमोजिम्को दंड कैद मात्र हुंछ. जात जादैन. करणि गर्न्या गराउन्या. लोग्न्या स्वास्निका हातको आफुले भात पानि षायेछ भन्या पानि चलन्या जातसित करणि चुकाइ दि उस्का हातको भात षान्यालाइ अैन वमोजिम् दंड कैद गरि उसै जातमा मिलाइ छाडिदिनु. पानि नचलन्या र. छिटो हालनु. पर्न्या जातसित करणि चुकाइ दि उस्का हातको भात पानि षान्यालाइ अैन वमोजिम् दंड कैद गरि उसै जातको १ अक्षर वात्रा गालामा षोदि उसै जातमा मिलाइ छाडिदिनु. विग्रन्या लोग्न्या स्वास्निका हातको भात पानि षाइ अरूलाइ स्मेत् वोरेछ भन्या. अैन वमोजिम्को अंस स्मेत् सर्वस्व गरि सोहि वमोजिम् सजाय गरि छाडिदिनु.

२५. आफुले चाकरी गऱ्याका तागाधारि जातका मालिकका ११ वर्ष नाघ्याका स्वास्नि छोरि वुहारि फकाइ तागाधारि जातसित करणिचुकाइ दिन्यालाइ १॥. वर्ष नमासिन्या मतुवालि जातसित करणि चुकाइ दिन्यालाइ २ वर्ष कैद गर्नु. मासिन्या मतुवालि जातसित करणि चुकाइ दिन्यालाइ १॥. वर्ष कैद गरि मासिदिनु. म्यादको डवल् दिया लि छाडिदिनु.

२६. आफुले चाकरी गऱ्याका नमासिन्या मतुवालि जातका मालिकका ११ वर्ष नाघ्याका स्वास्नि छोरि वुहारि फकाइ तागाधारि जात नमासिन्या मतुवालि जातसित करणि चुकाइ दिन्यालाइ. ९ मैन्हा कैद गर्नु. मासिन्या मतुवालि जातसित करणि चुकाइ दिन्यालाइ १ वर्ष कैद गरि मासिदिनु. म्यादको डवल् दिया लि छाडिदिनु.

२७. आफुले चाकरी गऱ्याका मासिन्या मतुवालि जातका मालिकका ११ वर्ष नाघ्याका स्वास्नि छोरि वुहारि फकाइ तागाधारि जात नमासिन्या मतुवालि जात मासिन्या मतुवालि जातसित करणि चुकाइ दिन्यालाइ ४॥ मैन्हा कैद गर्नु. म्यादको डवल् दिया लिनु.

२८. अर्काका सधवा विधवा कंन्यालाइ हात पात नगऱ्याका कुरामा मैले फलानि स्वास्निलाइ करणिका आसयले हात पात गऱ्यां भनि मुषले भन्यो रोवकार गर्दा हात पात गऱ्याको ठहरेन भन्या आफुभंदा घटि वढि आफु मिल्दा जातमा करणिका आसयले हात पात गर्न्यालाइ लेष्याका अैन वमोजिम् दंड सजाय गर्नु.

२९. करणि भया षत लाग्न्या लोग्न्या स्वास्निमा ११ वर्षदेषि उभोका कसैले वेरामि नभै आफ्ना षुसिले. अरु मानिस् भयाका ठाउमा आफ्ना आगमा तेल गैह्र लाउन लायेछ. वा लाइदियेछ र. करणिको आसय ठहरेन भन्या लोग्न्यालाइ २० रुपैया दंड गर्नु. स्वास्निलाइ दंड पर्दैन. ११ वर्ष उभोकालाइ वेरामि भयामा घरमा अरुको कोही नहुदा इलाज निमित्त र ११ वर्ष मनिका वालषहरुलाइ तेल गैह्र घसिदियाको घसन् लगायाकामा षतवात लाग्दैन करणिको आसय नठहर्नाले पतिया पर्दैन. दंडका रुपैया नतिऱ्या मैन्हाका ५ रुपैयाका दरले कैद गर्नु.

# करणिका आसयले हात पात गर्न्याको

१. षारेज. (आफ्ना आफ्ना सम जातमा कसैले कसैका विधवा सधवा कंन्याको करणिका आसयले हात पात गऱ्यो र कोहि कराउन आया भन्या तागाधारि जातले तागाधारि जातका स्वास्निलाइ हात पात गऱ्याकोभया ५० रुपैया मतुवालि नमासिन्या जातले मतुवालि नमासिन्यै जातकालाइ हात पात गऱ्याको रहेछ भन्या. ३० रुपैया मिसाषत् पर्न्या नेवार जातले मिसाषत् पर्न्या नेवारै जातकालाइ हात पात गऱ्याको भया २० रुपैया मासिन्या जाताकाले मासिन्यै जात गैह्रलाइ हात पात गऱ्याको भया १५ रुपैया कसाहि कुसल्या डोम् कुलु गैह्र पानि नचलन्या छोया छिटो पनि हालनु नपर्न्या जातले आफु मिल्दा जातमा हात पात गऱ्याको भया १० रुपैया पोढ्या च्याहम्या षलक् हरुले आफु मिल्दामा हात पात गऱ्याको भया ५ रुपैया दंड गर्नु. रुपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु.)

२. षारेज. (आफु भंदा तल्ला उपल्ला जातमा तागाधारि गैह्र जातका सधवा विधवा कंन्याको करणिका आसयले जात मिल्दामा कसैले हात पात गऱ्यो करणि गर्न पायेन तेस्तैमा स्वास्नि कराउन आइ भन्या. हात पात गर्न्यालाइ ५० रुपैया दंड गर्नु. आफु भंदा ठुला जातका स्वास्निलाइ हात पात गर्न्यालाइ ८० रुपैया दंड गर्नु. तागाधारि जातले मतुवालि नमासिन्या जातका लाइ हात पात गऱ्यो भन्या ३० रुपैया दंड गर्नु. मतुवालि नमासिन्या जातले मासिन्या पर्जा जातका. स्वास्निलाइ हात पात गऱ्यो भन्या १५ रुपैया. दंड गर्नु. पानि चलन्याले. पानि नचलन्या जात गैह्रका स्वास्निलाइ हातपात गऱ्यो भन्या ८० रुपैया दंड गर्नु. पानि नचलन्या जात र छोया छिटो हालनु पर्न्या जात गैह्रले पानि चलन्या जात गैह्रका स्वास्निलाइ करणिका आसयले हात पात गऱ्यो भन्या ८० रुपैया दंड गर्नु. रुपैया तिरेनन् भन्या अैन वमोजिम् कैद गर्नु. पतिया गर्नु पर्दैन. )

३. चाक चकुइ पर्न्या वाहेक् जार हांन्या जातका स्वास्नि मासिस्ले आफ्ना लोग्न्या वाहेक् अरू कसैलाइ दुद मडाई दवायाको उस्का लोग्न्याले थाहा पायो अथवा देष्यो भन्या र. अदालत ठाना अमालमा कराउन आयो भन्या. त्यो अर्काका स्वास्निको दुद माडन्या नाठाको अैन वमोजिम्. को अंस सर्वस्व गरि. उस्को दसौद कचहरिवाट लि उपर सवै साधुलाइ सौपिदिनु. अर्कालाइ दुद मडाउन्या स्वास्नि जात पतित हुंछे.

४. ब्राम्हण लगायेत् तागाधारि जात गैह्रका स्वास्निहरुले आफुभंदा उपल्ला जातसित हवस् आफु मिल्दा जातसित हवस्. पानि चलन्या जातसम्मका लोग्न्यासित करणिका आसयले अर्कालाइ चुम्वन गर्न्या अगालो हालन्या दुद मडाउन्या षुसिराजिले पैतालादेषि सिरसम्ममा समाउन्या धोति पटुका कम्वर समाउन्या. अर्काले फकाउदा आफ्ना मुषले करणि दिंछु भंन्या. करणि मा भन्या नचुक्याका स्वास्नि मानिसहरूलाइ एति कुरामा यौटा कुरो मात्र गऱ्याको भया पनि तेस्ता स्वास्निका हातको भात चल्दैन अंस पनि पाउदैनन् अैनले जार हांन हुन्यासंमका स्वास्निलाइ लोग्न्याले षान लाउन नदि निकालि दियो भन्या र ति स्वास्नि अर्का कसैसित विग्र्या भन्या. जार काटन पाउदैन. जार काट्या ज्यानको वदला ज्यान हुंछ. करणि गर्न्यालाइ षत लाग्दैन. लोग्न्याले षान लाउन दि राष्याको रहेछ र. ति स्वास्नि अर्कासित पोइल गया भन्या अैन वमोजिम् मुडन जार काटन. विहा षर्च लि टाँगमनि छिराइ छाडनु. केहि नगरि तेसै छोडनाको साधुको षुसि. करणिमा नचुक्याका पतित मात्र भयाका लोग्न्याले षान लाउन दि किनारा गरि राख्याका स्वास्नीको आफ्नै लोग्न्याले करणि गरि तेसैका विर्यले जन्म्याका संतानले जनै पाउछन्. आफु मिल्दा आफु भंदा उपल्ला जातसित करणिको आसय गर्न्या स्वास्निवाट जन्म्याका संतानलाइ भात चलन्या विधवा ल्याइताका संतानका सरहको अंस दिनु. आफुभंदा कम् तागाधारि जातका लोग्न्यासित करणिको आसय गर्न्या स्वास्निका संतानलाइ सयकरा १० मतुवालि जातका लोग्न्यासित आसय गर्न्याका संतानलाइ सयकरा ५ का दरले अंस दिनु. भात चलन्या संम्मका स्वास्निवाट जन्म्याका संतानलाइ सद्यले पायाका जंमाका सयकरा१० भात नचलन्या कंन्या विधवा जारिगरि ल्यायाका स्वास्निका संतानलाइ सद्यले पायाका जंमाका सयकरा ५ वेस्या र वधेत्यानि कमारि गैह्र स्वास्निका संतानलाइ सद्यले पायाका जंमाका सयकरा २॥ का दरले अंस पाउछ दिलाई दिनु.

५. नमासिन्या मतुवालि जातका ११ वर्ष नाघ्याका कंन्या विधवा सधवा स्वास्निले आफुभंदा उपल्ला जातकालाइ हवस् आफु मिल्दा जातलाइ हवस्. आफु भंदा घटि जातलाइ हवस् करणिका आसयले अर्का कसैलाइ अगालो हालन जान्या. चुम्वन गर्न्या दुद मडाउन्या षुसिराजिले पैतालदेषि सिरसम्ममा. आफ्नु आँग समाउन दिन्या. अर्काको धोति पटुका कम्वर समाउन्या. करणिमा भन्या नचुक्याकाका स्वास्निले. लेषियाका एति कुरा गैह्रमा यौटा कुरो मात्रै गऱ्याको भया पनि अनाचार गऱ्या वावत्. एस्ता स्वास्निलाइ १० रुपैया दंड गर्नु. तेस्ता

स्वास्निका हातको दाल भात षानु नषानु. भताहाको षुसि. एस्ता स्वास्नि आफुले राषि जन्म्याका संतान वावुकै जातमा रहंछन्. भताहाले भात षायाको रहेछ भन्या. अंस पनि वरोवर पाउछन्. भात षायाको रहेनछ भन्या. ३ षंडमा सद्यले २ भाग पाया एस्तालाइ १ भाग अंस पाउछ. षान लाउन दि राष्याका एस्ता स्वास्नि अर्कासित पोइल गया भन्या. जार हांन्या जातको अैन वमोजिम्. साधुको षुसि जार नहांन्या विहा षर्च लिन्या जातलाइ अैन वमोजिम् विहा षर्च भराइ. विगै वमोजिम् दंड गर्नु. षान लाउन नदि निकाल्याका स्वास्निको जार काट्न्याको ज्यानको वदला ज्यान हुंछ. विहा षर्च पनि पाउदैन. विगा वमोजिम् दंड पनि हुदैन.

६. मासिन्या मतुवालि जातका ११ वर्ष नाघ्याका कंन्या सधवा विधवा. स्वास्निले आफुभंदा उपल्ला जातकालाइ हवस् आफु मिल्दा जातकालाइ हवस् आफु भंदा घटि पानि चलन्या जातलाइ हवस्. करणिका आसयले अर्का कसैलाइ अगालो हालन जान्या चुम्वन गर्न्या दुद मडाउन्या षुसि राजिले पैतालादेषि सिरसम्ममा समाउन दिन्या अर्काको धोति पटुका कंवर समाउन्या करणिमा भन्या नचुक्याका स्वास्निले. लेषियाका एति कुरा गैह्रमा यौटा कुरो मात्र गऱ्याको भया पनि तेस्ता स्वास्निको जात जादैन. आफ्नो जातैमा रहंछे. अनाचार गऱ्याको वावत्. ५ रुपैया दंड गर्नु. एस्ता स्वास्नि आफैले राषि संतान जन्म्या सद्यका सरहको वरोवर अंस पाउछन्. अर्का कसैसित पोइल गया भन्या जार हांन्या जातले जार हांनु. विहा षर्च लिन्या जातले विहा षर्च लिनपाउछ. विहा षर्च २० रुपैया भराइ विगै वमोजिम्. दंड गर्नु. एस्ता स्वास्नि राषतीन भनी षान लाउन नदि लोग्न्याले निकाल्याका स्वास्नि अर्कासित पोइल गया भन्या. जार हांन पनि पाउदैनन्. ज्यान काटद्या. ज्यानको वदला ज्यान हुंछ. विहा षर्च लिन पनि पाउदैन. विगा वमोजिम् दंड पनि हुदैन.

७. पानि नचलन्या र छोया छिटो हालनु पर्न्या जातका ११ वर्ष नाघ्याका कंन्या सधवा विधवा स्वास्निले आफु भंदा उपल्ला जातकालाइ हवस्. आफु मिल्दा जातलाइ हवस् आफु भंदा घटि जातलाइ हवस्. करणिका आसयले अर्का कसैलाइ. अगालो हालन जान्या. चुम्वन गर्न्या दुद मडाउन्या षुसी राजिले पैतालादेषि सिरसम्ममा समाउन दिन्या अर्काको धोति पटुका कम्वर समाउन्या. करणिमा भन्या नचुक्याका स्वास्निले. लेषियाका एति कुरा गैह्रमा यौटा कुरो मात्र गऱ्याको भया पनि तेस्ता स्वास्निले आफु भंदा उपल्ला विष्ट जातलाइ गऱ्याको भया २॥

रुपैया दंड गर्नु. आफु भंद घटि आफुले पानि नषान्या जातलाइ गऱ्याको भया ५ रुपैया दंड गर्नु. भात षाना नषानाको भताहाको षुसि एस्ता स्वास्नि आफैले राषि जन्म्याका संतानलाइ सद्यका सरहको वरोवर अंस पाउछ. अर्का कसैसित पोइल गया भन्या. विहा षर्च लिन्या जातलाइ अैन वमोजिम् विहा षर्च भराइ विगै वमोजिम् दंड गर्नु. जार हांन्या जातलाइ साधुको षुसि मुष पतित भयाकी स्वास्नि राषतीन भनी षान लाउन नदि निकाल्याका स्वास्नि अर्कासित पोइल गया भन्या जार काट्न पाउदैन. काटया ज्यानको वदला ज्यान हुंछ. विहा षर्च पनि पाउदैन. विगा वमोजिम् दंड पनि हुदैन.

८. व्राम्हण लगायेत् तागाधारि जात र नमासिन्या मासिन्या गैह्र पानि चलन्या जातका स्वास्निहरुले पानि नचलन्या र. छोइ छिटो हालनु पर्न्या. जातको लोग्न्याहरूलाइ करणिका आसयले चुम्वन गर्न्या. अगालो हालन्या. दुद मडाउन्या षुसिराजिले पैतालादेषि सिरसंममा समाउन दिन्या. कम्वर पटुका धोति समाइदिन्या करणिमा भन्या न चुक्याका स्वास्निहरूले एति कुरामा यौटा कुरा मात्रै गऱ्याको भया पनि उहि जात हुंछ. भात पानि चल्दैन. षान लाउन नदि लोग्न्याले निकालि दियो र. पछि कसैसित. पोइल गै भन्या. जार काट्न विहा षर्च लिन पाउदैन. षान लाउन दि किनारा गरि राष्याकि एस्ति स्वास्नि अर्कासित पोइल गै भन्या. जार काटन्या जातले जार काट्न विहा षर्च लिन पाउँछ. एस्ता पतित भै पानि नचलन्या जात भयाका स्वास्निलाइ विवाहिता लोग्न्याले पनि करणि नगर्नु. स्वास्नि पतित भै तापनि स्वास्नि छोड्दिन भनि करणि गऱ्यो भन्या लोग्न्या पनि उहि जात हुंछ. अरु कसैले जानि जानि करणि गऱ्यो भन्या पनि एस्ता स्वास्निको करणि गर्न्या मानिस् जात पाउदैन. उसै स्वास्निको जात हुंछ. वात्रा गालामा उसै जातको १ अक्षर षोदि छोडिदिनु.

व्राम्हण लगायेत् तागाधारि जात गैह्रले अर्काका सधवा विधवा कंन्याको करणि गऱ्या वाहेक कर्णिका आसयले हात पात गैह्र गऱ्यामा दंड गर्न्या अैन्.

९. व्राम्हण लगायेत् तागाधारि जात गैह्रले जात मिल्दाका सधवा विधवा कंन्याको करणि गऱ्याको र संग घुर षापि सुत्याको रहेनछ करणिका आसयले दुद माड्याको वा हात पात गैह्र मात्र गऱ्याको ठहऱ्यो भन्या ५० रुपैया दंड गर्नु. नमाँसिन्या मतुवालि जातका स्वास्निलाइ हात पात गैह्र मात्र गऱ्याको ठहऱ्यो भन्या ३० रुपैया दंड गर्नु. मासिन्या पानि चलन्या जातका

स्वास्निलाइ हात पात गऱ्याको ठहऱ्यो भन्या १५ रुपैया दंड गर्नु. पानि नचलन्या र छोइ छिटो हालनु पर्न्या जातका स्वास्निलाइ हात पात गऱ्याको ठहऱ्यो भन्या ८० रुपैया दंड गर्नु. रुपैया तिर्न सकेन भन्या. अैन वमोजिम् कैद गर्नु. करणि नठहर्नाले लोग्न्या स्वास्नि दुवै जनालाइ पतिया पर्दैन.

नमासिन्या मतुवालि जात गैह्रले अर्काका सधवा विधवा कंन्याको करणि गऱ्या वाहेक करणिका आसयले हात पात गैह्र गऱ्यामा गर्न्या अैन.

१०. नमासिन्या मतुवालि जात गैह्रले व्राम्हण लगायेत् तागाधारि जात गैह्रका सधवा विधवा कंन्याको करणि गऱ्याको संग घुर षापि सुत्याको रहेनछ करणिका आसयले हात पात गैह्र मात्र गऱ्याको ठहऱ्यो भन्या ८० रुपैया दंड गर्नु. नमासिन्यान्यै मतुवालि जातका स्वास्निलाइ हात पात गैह्र मात्र गऱ्याको ठहऱ्यो भन्या ३० रुपैया दंड गर्नु. मासिन्या जातका स्वास्निलाइ हात पात गैह्र मात्र गऱ्याको ठहऱ्यो भन्या १५ रुपैया दंड गर्नु. पानि नचलन्या जात र छोइ छिटो हालनु पर्न्या जातका स्वास्निलाइ हात पात गैह्र मात्र गऱ्याको ठहऱ्यो भन्या ८० रुपैया दंड गर्नु. रुपैया तिर्न सकेन भन्या अैन वमोजिम् कैद गर्नु. करणि नठहर्नाले लोग्न्या स्वास्नि दुवैलाइ पतिया पर्दैन.

मासिन्या मतुवालि जात गैह्रले अर्काका सधवा विधवा कंन्याको करणि गऱ्या वाहेक करणिका आसयले हात पात गैह्र गऱ्यामा दंड गर्न्या अैन.

११. मासिन्या मतुवालि जात गैह्रले व्राम्हण लगायेत् तागाधारि जात गैह्रका सधवा विधवा कंन्याको करणि गऱ्याको र संग घुर षापि सुत्याको रहेनछ करणिका आसयले हात पात गैह्र मात्र गऱ्याको ठहऱ्यो भन्या ८० रुपैया दंड गर्नु. नमासिन्यै मतुवालि जात गैह्रका स्वास्निलाइ हातपात गैह्र मात्र गऱ्याको ठहऱ्यो भन्या १५ रुपैया दंड गर्नु. नमासिन्या मतुवालि जातका स्वास्निलाइ हात पात गैह्र मात्र गऱ्याको ठहऱ्यो भन्या ३० रुपैया दंड गर्नु. पानि नचलन्या जात र छोइ छिटो हालनु पर्न्या जातका स्वास्निलाइ हात पात गैह्र मात्र गऱ्याको ठहऱ्यो भन्या ८० रुपैया दंड गर्नु. रुपैया तिर्न सकेन भन्या अैन वमोजिम्. कैद गर्नु करणि नठहर्नाले पतिया पर्दैन.

पानि नचलन्या र. छिटो हालनु पर्न्या जात गैह्रले अर्काका सधवा विधवा कंन्याको करणि गऱ्या वाहेक करणिका आसयले हात पात गैह्र गऱ्यामा दंड गर्न्या अैन

१२. पानि नचलन्या र छोइ छिटो हालनु पर्न्या जात गैह्रले व्राम्हण लगायेत् तागाधारि जात र नमासिन्या मासिन्या मतुवालि गैह्र पानि चलन्या जातका सधवा विधवा कंन्याको करणि गऱ्याको र संग घुर षापि सुत्याको रहेनछ करणिका आसयले हात पात गैह्र मात्र गऱ्याको ठहऱ्यो भन्या १०० रुपैया दंड गर्नु. करणि नठहर्नाले स्वास्निलाइ पतिया पर्दैन. पानि नचलन्या जातले पानि नचलन्यौ जातका स्वास्निलाइ हात पात गैह्र मात्र गऱ्याको ठहऱ्यो भन्या १० रुपैया दंड गर्नु. छोइ छिटो हालनु पर्न्या जातले छोई छिटो हालनु पर्न्यै जातका स्वास्निलाइ हात पात गैह्र मात्र गऱ्याको ठहऱ्यो भन्या ५ रुपैया दंड गर्नु. पानि नचलन्या जातले छोया छिटो हालनु पर्न्या जातका स्वास्निलाइ हात पात मात्र गऱ्याको ठहऱ्यो भन्या १५ रुपैया दंड गर्नु. छोइ छिटो हालनु पर्न्या जातले पानि नचलन्या जातका स्वास्निलाइ हात पात मात्र गऱ्याको ठहऱ्यो भन्या ३० रुपैया दंड गर्नु. रुपैया नतिऱ्या. अैन वमोजिम् कैद गर्नु.

# मेरी स्वास्नी हो मैले करणी गऱ्याँ भन्याको

१. अर्काका अैनले जार हांन हुन्या संमका सधवा विधवा कंन्यालाइ करणि नगरि मैले करणि गऱ्याको छ भन्यो वा मेरि स्वास्नि हो भन्यो रोवकार गर्दा. करणि ठहरेन भन्या. तागाधारि जातले तागाधारि जातका स्वास्निलाइ भन्याको रहेछ भन्या २ वर्ष कैद गर्नु. म्यादका रुपैया दिया लिनु. नमासिन्या मतुवालि जातका स्वास्निलाइ भन्याको रहेछ भन्या ५० रुपैया मासिन्या जातका स्वास्निलाइ भन्याको रहेछ भन्या १० रुपैया पानि नचलन्या छिटो हालनु नपर्न्या जातका स्वास्निलायइ भन्याको रहेछ भन्या ५० रुपैया छिटो हालनु पर्न्या जातका स्वास्निलाइ भन्याको रहेछ भन्या ६० रुपैया दंड गर्नु. रुपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु. स्वास्नि जातैमा रहंछन्. पतिया पर्दैन.

२. तागाधारि जातका अैनले जार हांन नहुन्या घर ल्याइ राष्याका वेस्या केटि स्वास्निलाइ करणि नगरि मैले करणि गऱ्याको छ भन्यो वा मेरि स्वास्नि हो भन्यो रोवकार गर्दा करणि ठहरेन भन्या. तागाधारि जातले भन्याको भया २० रुपैया नमासिन्या मतुवालि जातले भन्याको भया २५ रुपैया मासिन्या जातले भन्याको भया ३० रुपैया दंड गर्नु. रुपैया नतिऱ्या अैन वमोजिम्. कैद गर्नु. पानि नचलन्या छिटो हालनु नपर्न्या जातले भन्याको रहेछ भन्या १ वर्ष छिटो हालनु पर्न्या जातले भन्याको भया १॥ वर्ष कैद गर्नु. म्यादको रुपैया तिऱ्या लि छाडनु. स्वास्नि जातैमा रहंछंन् पतिया पर्दैन.

३. अर्काका अैनले जार हांन हुन्या संमका सधवा विधवा कंन्यालाइ करणि नगरि मैले करणि गऱ्याको छ भन्यो वा मेरि स्वास्नि हो भन्यो रोवकार गर्दा. करणि ठहरेन भन्या नमासिन्या मतवालि जातले तागाधारि जातका स्वास्निलाइ भन्याको रहेछ भन्या ३ वर्ष कैद गर्नु. नमासिन्या जातका स्वास्निलाइ भन्याको रहेछ भन्या १ वर्ष कैद गर्नु. म्यादका रुपैया तिऱ्या लिनु. मासिन्या जातका स्वास्निलाइ भन्याको रहेछ भन्या १० रुपैया पानि नचलन्या छिटो हालनु नपर्न्या जातका स्वास्निलाइ भन्याको रहेछ भन्या ४० रुपैया छिटो हालनु पर्न्या जातका

स्वास्निलाइ भन्याको रहेछ भन्या ५० रुपैया दंड गर्नु. रुपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु स्वास्नि जातैमा रहंछन्. पतिया पर्दैन.

४. नमासिन्या मतुवालि जातका अैनले जार हांन नहुन्या घरमा ल्याइ राष्याका भात नषायाका वेस्या स्वास्निलाइ आफुले करणि नगरि मैले करणि गऱ्याको छ भन्यो वा. मेरि स्वास्नि हो भन्यो रोवकार गर्दा करणि ठहरेन  भन्या. तागाधारि जात र. नमासिन्या मतुवालि जातकालाइ १० रुपैया दंड गर्नु. मासिन्या मतुवालि जातका लाइ १५ रुपैया दंड गर्नु. रुपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु छिटो हालनु नपर्न्या पानि नचलन्या जातलाइ १ वर्ष छिटो हालनु पर्न्या जातलाइ १॥. वर्ष कैद गर्नु. म्यादको रुपैया तिऱ्या लि छाडनु. स्वास्नि जातैमा रहंछन्. पतिया पर्दैन.

५. अर्काका अैनले जार हांन हुन्या सम्मका सधवा विधवा कंन्यालाइ करणि नगरि मैले करणि गऱ्याको छ भन्यो वा. मेरि स्वास्नि हो भन्यो रोवकार गर्दा. करणि ठहरेन  भन्या मासिन्या मतुवालि जातले तागाधारि जातका स्वास्निलाइ भन्याको रहेछ भन्या ३ वर्ष कैद गर्नु. नमासिन्या मतुवालि जातका स्वास्निलाइ भन्याको रहेछ भन्या १॥. वर्ष कैद गर्नु. म्यादका रुपैया दिया लिनु मासिन्या मतुवालि जातका स्वास्निलाइ भन्याको रहेछ भन्या ८ रुपैया पानि नचलन्या छिटो हालनु नपर्न्या जातका स्वास्निलाइ भन्याको रहेछ भन्या १६ रुपैया छिटो हालनु पर्न्या जातका स्वास्निलाइ भन्याको रहेछ भन्या २४ रुपैया दंड गर्नु रुपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु. स्वास्नि जातैमा रहंछन् पतिया पर्दैन.

६. मासिन्या मतुवालि जातका अैनले जार हांन नहुन्या.घरमा ल्याइ राष्याका वेस्या स्वास्निलाइ आफुले करणि नगरि मैले करणि गऱ्याको छ भन्यो वा. मेरि स्वास्नि हो भन्यो रोवकार गर्दा करणि ठहरेन  भन्या तागाधारि जात र नमासिन्या.मासिन्या. मतुवालि जातलाइ ५ रुपैया दंड गर्नु. रुपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु. छिटो हालनु नपर्न्या पानि नचलन्या जातलाइ १ वर्ष छिटो हालनु पर्न्या जातलाइ १॥ वर्ष कैद गर्नु म्यादका रुपैया दिया लि छाडनु. स्वास्नि जातैमा रहंछन् पतिया पर्दैन.

७. कसैले नराष्याका पानि चलन्या जातका वेस्या पातर. केटि कमारिलाइ आफुले करणि नगरि मैले करणि गऱ्याको छ भन्यो वा. मेरि स्वास्नि हो भन्यो भनि स्वास्नि कराउन आइ र. रोवकार गर्दा करणि ठहरेन भन्या. तागाधारि नमासिन्या मासिन्या मतुवालि जातलाइ ५ रुपैया दंड गर्नु. रुपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु. छिटो हालनु नपर्न्या पानि नचलन्या जातलाइ १ वर्ष छिटो हालनु पर्न्यालाइ १॥. वर्ष कैद गर्नु. म्यादका रुपैया दिया लि छाडनु.

८. अर्काका अैनले जार हांन हुन्या सम्मका सधवा विधवा कंन्यालाइ करणि नगरि मैले करणि गऱ्याको छ भन्यो वा. मेरि स्वास्नि हो भन्यो रोवकार गर्दा. करणि ठहरेन  भन्या पानि नचलन्या छिटो हालनु नपर्न्या जातले तागाधारि जातका स्वास्निलाइ भन्याको रहेछ भन्या ४ वर्ष. नमासिन्या मतुवालि जातका स्वास्निलाइ भन्याको रहेछ भन्या ३ वर्ष मासिन्या मतुवालि जातका स्वास्निलाइ भन्याको रहेछ भन्या २ वर्ष कैद गर्नु. म्यादका रुपैया दियालिनु. पानि नचलन्या छिटो हालनु. नपर्न्यै जातका स्वास्निलाइ भन्याको रहेछ भन्या. ४ रुपैया. छिटो हालनु पर्न्या जातका स्वास्निलाइ भन्याको रहेछ भन्या २२ रुपैया दंड गर्नु. रुपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु. स्वास्नि जातैमा रहंछन्. पतिया पर्दैन.

९. अर्काका अैनले जार हांन हुन्या सम्मका सधवा विधवा कंन्यालाइ करणि नगरि मैले करणि गऱ्याको छ भन्यो वा मेरि स्वास्नि हो भन्यो रोवकार गर्दा करणि गऱ्याको ठहरेन भन्या. छिटो हालनु पर्न्या तागाधारि जातका स्वास्निलाइ भन्याको रहेछ भन्या ५ वर्ष नमासिन्या मतुवालि जातका स्वास्निलाइ भन्याको रहेछ भन्या ४ वर्ष मासिन्या  जातका स्वास्निलाइ भन्याको रहेछ भन्या. ३ वर्ष कैद गर्नु. म्यादका रुपैया दिया लिनु. पानि नचलन्या छिटो हालनु नपर्न्या जातका स्वास्निलाइ भन्याको रहेछ भन्या १२ रुपैया छिटो हालनु पर्न्यै जातका स्वास्निलाइ भन्याको रहेछ भन्या ४ रुपैया दंड गर्नु. रुपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु. स्वास्नि जातैमा रहंछन् पतिया पर्दैन.

# करणिका आशयले ढुक्न्या

१. कसैले कसैका. घरका पध्याऱ्या वारि करासा. आगन् पिढी ढोका ढुकी वथानी वस्याको रहेछ र. तेस्तैमा फेला पारी पक्री सोद्धा फलानी स्वास्नीको करणिका आसयले आयाको हुं भनी कायल भयो भन्या. तागाधारी लगायत्. नमासिन्या मतुवाली संमका सधवा विधवा कंन्या स्वास्निका करणिका आसयले आयाको हुं भनि भंन्या तागाधारी लगायेत्. नमासिन्या मतुवाली संमका लोग्न्यालाइ २० रुपैया. मासिन्या जातलाइ ३० रुपैया. पानी नचलन्या र. छोया छिटो हालनु पर्न्या जातका लोग्न्यालाइ ४० रुपैया मासिन्या मतुवाली जातका स्वास्नीलाइ करणिका आसयले ढुक्या भन्या. तागाधारि नमासिन्या. मासिन्या जातका लोग्न्यालाइ ५ रुपैया. कमारी र. पातर. वेस्यालाइ ढुक्याको भया ३ रुपैया. पानी नचलन्या र. छोया छिटो हालनु पर्न्या जातले भया २० रुपैया दंड गर्नु. रुपैञा नतीऱ्या अैन वमोजीम्कैद गर्नु. स्वास्नी जातैमा रहन्छे.

२. कसैले कसैका. घरका पध्यारा वारी करासा आगन्. पीढी ढोका ढुकी वथानी वस्याको रहेछ र. तेस्तैमा फेला पारी पक्री सोद्धा. फलानी स्वास्नीको करणिका आसयले आयाको हुं भनी कायेल भयो भन्या. पानी नचलन्या छोइ छिटो हालनु नपर्न्या. जातका स्वास्नीलाइ ढुकन्या वथान्न्या तागाधारीदेषि नमासिन्या.मासिन्या. जातसंमका लोग्न्या मानीसलाइ १० रूपैञा. छोइ छिटो हालनु पर्न्या जातका स्वास्नीलाइ ढुकन्या वथान्न्यालाई २० रुपैञा. पानी नचलन्या जातले. पानी नचलन्यै जातका स्वास्नीलाइ ढुकन्या वथान्या को भया ५ रुपैया दंड गर्नु. छोइ छिटो हालनु पर्न्या जातले ढुक्याको रहेछ भन्या १५ रुपैञा दंड गर्नु. रुपैञा नतिऱ्या अैन वमोजिंकैद गर्नु. स्वास्नी जातैमा रहन्छे.

३. कसैले कसैका घरका पध्यारा वारी करासा आगन् पिडी ढोका ढुकी वथानी वस्याको रहेछ र. तेस्तैमा फेला पारी पक्रि सोद्धा. फलानी स्वास्नीको करणीका आसयले. आयाको हुं भनी कायेल भयो भन्या. पानी नचलन्या र. छोइ छिटो हालनु पर्न्या जातका स्वास्नीलाइ. ढुकन्या वथांन्या. तागाधारी लगायेत्. मासीन्या मतुवालि जातसंमका लोग्न्या मानीसलाइ २० रुपैञा छोया छिटो हालनु नपर्न्या. पानी नचलन्या जातका लोग्न्यालाइ १० रुपैञा. छिटो हालनु पर्न्या

जातमा. घटि जात भया पनि. वढि जात भया पनि ५ रुपैञा दंड गर्नु. रुपैञा नतिऱ्या अैन वमोजिंकैद गर्नु.

४. कसैले कसैका घरका पध्यारा वारी करासा आगन् पिढी ढोका ढुकी वथानी वस्याको रहेछ. भनी कसैलाइ पोल्यो. रोवकार गर्दा ठहरेन भन्या. तेस्ता पोलाहालाइ जौना जातकालाइ पोल्याको छ. उसै जातका अैनमा लेष्याको आधि दंड गर्नु. रुपैञा नतिऱ्या. अैन वमोजिं कैद गर्नु.

५. कोही लोग्न्या मानीस करणिका आसयले. अर्काका झ्याल कौसी छाना ढोका षोली भित्र पस्याको रहेछ र. पक्रीदा फलानी स्वास्नीको करणि गरूं भन्या आसयले आयाको हुं भनी कायेल भयो भन्या. तागाधारि लगायेत् नमासिन्या मतुवलिसंमका सधवा विधवा कंन्याको करणिका आसयले आयाको हुं भनी कायेल हुन्या. तागाधारिदेषि मासिन्या मतवालीसंमका जातका लोग्न्यालाइ ३० रूपैञा. मासिन्यामा. पानी चलन्यासम्मकालाइ ४५ रूपैञा. पानी नचलन्या र. छोया छीटो हालनु पर्न्या जातका लोग्न्यालाइ ६० रूपैञा. मासिन्या मतुवाली जातका स्वास्नीको करणिका आसयले आयाको हुं भनी कायेल हुन्या. तागाधारि लगायेत्. मासिन्या मतुवाली जातका लोग्न्यालाइ ७॥. रूपैया. कमारी र. केटी पातर. वेस्याका. करणिका आसयले आयाको भंन्या तागाधारि लगायेत्. मासिन्यासंम्मका लोग्न्यालाइ ४॥. रूपैया. पानी नचलन्या र. छिटो हालनु पर्न्या जातका लोग्न्यालाइ ३० रूपैया. दंड गर्नु. रूपैया नतीऱ्या अैन वमोजीं कैद गर्नु. स्वास्नी जातैमा रहन्छन्.

६. कोहि लोग्न्या मानीस् करणिका आसयले अर्काका झ्याल्कौसीछाना ढोका षोली भित्र पस्याको रहेछ. पक्रदा फलानी स्वास्नीको करणि गरूं भन्या आसयले आयाको हुं भनी कायेल भयो भन्या. पानी नचलन्या. छोया छीटो हालनु नपर्न्या जात्का स्वास्निका करणिका आसयले. भित्र पस्न्या. तागाधारि देषी मासिन्या जातका लोग्न्या मानीसलाइ १५ रूपैञा छीटो हालनु पर्न्या जातका स्वास्नीका घरभीत्र पसि ढुक्न्यालाइ ३० रूपैञा. पानी नचलन्या जातले पानी नचलन्यै जातका स्वास्निलाइ ढुक्याको भया ७॥. रूपैञा. छोया छिटो हालनु पर्न्या जातले. ढुक्याको भया २२॥ रूपैया दंड गर्नु. रूपैया नतीऱ्या अैन वमोजिम्कैद गर्नु.

७. कोही लोग्न्या मानीस करणिका आसयले. अर्काका भ्याल कौसी छाना ढोका षोली भित्र पस्याको रहेछ. पक्रदा फलानीको करणि गरूं भंन्या आसयले. आयाको हुं भनी कायेल भयो भन्या. पानी नचलन्या र. छिटो हालनु पर्न्या जातका स्वास्निलाइ ढुकन्या वथान्या. तागाधारि लगायेत्. मासिन्या मतुवालीसंमका लोग्न्या मानीसलाइ ३० छोया छिटो हालनु नपर्न्या पानी नचलन्या जातका लोग्न्यालाइ १५ रूपैञा. छोया छिटो हालनु पर्न्यामा. घटि जात भया पनी. वढि जात भया पनी ७॥. रूपैञा दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिंम्कैद गर्नु.

८. कोहि लोग्न्या मानीस करणिका आसयले. अर्काका भ्याल कौसी छाना ढोका षोली भित्र पस्याको रहेछ भनी पोल्यो. रोवकार गर्दा. घरभित्र पस्याको ठहरेन भन्या. तेस्ता पोलाहालाइ जौना जातकालाइ पोल्याको छ. उसै जातलाइ लेष्याका अैनको. आधी दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिंम्कैद गर्नु.

# घुर षापि सुतन्या

१. उपाध्याले उपाध्याको ११ वर्ष नाघ्याका सधवा विधवा सित घुर षापी सुत्यो भन्या. करणि नभया पनी करणि ठहर्छ. व्राम्हण हुनाले जार काटन हुदैन. मुडनु. अैन वमोजिंको अंस सर्वस्व. लीनु. विहा षर्च लिनु. तेसै नछोडनु. अैन वमोजीं साधुको षुसि. कंन्या र. विधवासित घुर षापी सुतेछ. भताहालाइ भातमा वो.ऱ्याको रहेनछ. भन्या षत लाग्दैन. आफुले उस्का हातको भात षायाको रहेनछ. स्वास्नितर्फवाट वोरायेछ भन्या १०० रूपैया दंड गर्नु जात जादैन. स्वास्निका हातको भात आफुले षाइ भताहालाइ भात्मा वोरेछ भन्या १०० रूपैञा दंड गरी लोग्न्या स्वास्नि दुवैलाइ. जैसी जात्मा मिलाइ दि भोरमा पर्न्यालाइ पतिया गराईदीनु.

२. रजपुत जैसी तागाधारी जात्का लोग्न्याले उपाध्याका ११ वर्ष नाघ्याका सधवासितघुर षापि सुत्यो भन्या अैन वमोजिम्. साधुको षुसि. कंन्या र विधवा सीत घुर षापि सुति भताहा व्राम्हणलाइ भात्मा वोरेको भया ४ वर्ष भातमा वोरायाको नभया २ वर्ष कैद गर्नु. म्यादको डवल्दीया लीनु. स्वास्नी जात पतीत हुन्छे. भोरमा पर्न्या भताहालाइ पतीया गराइदीनु.

३. रजपुत जैसीले जैसीका रजपुतले ११ वर्ष नाघ्याका सधवासीत घुर षापी सुत्यो भन्या अैन वमोजीम्साधुको षुसि कंन्या र. वीधवासित घुर षापि सुती भताहालाइ भातमा वोरायेछ भन्या ६० रूपैञा. भात्मा वोऱ्याको नभया ४० रूपैञा दंड गर्नु. स्वास्निका हातको भात आफुले षाएछ भन्या लोग्न्या स्वास्नीदुवैलाइ भात वाहेक गरि भोर्मा पर्न्या भताहालाइ. पतीया गराइ दिनु.

४. तागाधारि क्षतृ जातले रजपुतका र जैसी वाहुन्का ११ वर्ष नाघ्याका सधवासित घुर षापी सुत्यो भन्या. अैन वमोजिम्साधुको षुसि. कंन्या वीधवासित घुर षापि सुती भताहालाइ भातमा वोरेछ. भन्या ४ वर्ष भातमा वोऱ्याको नभया २ वर्ष कैद गर्नु. म्यादको डवल दिया लीनु. स्वास्नि जात पतीत हुन्छे. भोरमा पर्न्या भताहालाइ पतीया गराइदीनु.

५. तागाधारी तागाधारिजातका भात नमीलन्या एका जातले एका जातका ११ वर्ष नाघ्याका सधवा सित घुरषापि सुत्यो भन्या अैन वमोजिम साधुको षुसी. कंन्या र विधवासित घुरषापि

सुती भताहालाइ भातमा वोरेछ भन्या ६० रूपैया भातमा वोऱ्याको रहेनछ भन्या ४० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु. स्वास्नि उहि जात हुंछे भोरमा पर्न्या भताहालाइ पतीया गराइ दीनु.

६. रजपुत जैसी क्षतृ तागाधारी जात गैह्रले आफ्ना भात मिल्दा जातका ११ वर्ष नाघ्याका सधवासित घुरषापि सुत्यो भन्या अैन वमोजीमसाधुको षुसि. कंन्या वीधवासित घुरषापी सुती भताहालाइ भातमा वोऱ्याछ भन्या. षतवात लाग्दैन स्वास्नीवाट भताहालाई भातमा वोऱ्यायेछ भन्या. ६० रूपैया दंड गर्नु. जात जादैन. आफुले स्वास्निका हातको भात षाइ. भताहालाइ स्मेत् भातमा वोरायेछ भन्या ६० रूपैया डंड गर्नु. भात षानु नषानु भताहाको षुसि.

७. उपाध्याले रजपूत जैसि क्षतृ. तागाधारि जातका ११ वर्ष नाघ्याका सधवा सित घुरषापि सुत्यो भन्या. व्राम्हण हुनाले जारकाटन हुदैन. जार काटना वाहेक्. अैन वमोजिम साधुको षुसि. कंन्या वीधवासित घुरषापी सुती. भताहालाइ. भातमा वोरेछ भन्या ३० रूपैया दंड गरि.. भोरमा पर्न्या भताहालाइ. स्वास्निका नाउको पतिया गराइ दिनु. भातमा वोऱ्याको रहेनछ भन्या. षतवात लाग्दैन.

८. रजपूत जात र. जैसी जातले क्षतृ अरू तागाधारि जातका ११ वर्ष नाघ्याका सधवासित घुरषापि सुत्यो भन्या. अैन वमोजिम्साधुको षुसि. कंन्या वीधवासित. घुरषापी सुती भताहालाइ. भातमा वोरेछ भन्या. ३० रूपैया दंड गरी. भोरमा पर्न्या भताहालाइ स्वास्निका नाउको पतीया गराइ दिनु. भातमा वोऱ्याको रहेनछ भन्या षतवात लाग्दैन.

९. क्षतृ तागाधारी जातले आफु भन्दा घटी भात नचलन्या. तागाधारि जातका ११ वर्ष नाघ्या का सधवासित घुरषापि सुत्यो भन्या. अैन वमोजिं साधुको षुसि. कंन्या वीधवासित घुरषापि सुती भातमा भातमा वोरेछ भन्या. ३० रूपैया दंड गरी भोरमा पर्न्या भताहालाइ. तेसै स्वास्निका नाउको पतीया गराइ दिनु. भातमा वोऱ्याको रहेनछ भन्या. षतवात लाग्दैन.

१०. नमासिन्या मतुवालि जातले. उपाध्या. रजपूत. जैसि क्षतृ. तागाधारि जात गैह्रका. सधवासित घुरषापी सुत्यो भन्या. अैन वमोजिं साधुको षुसि. कंन्या वीधवासित घुरषापी सुती भताहालाइ. भातमा स्मेत्. वोराएछ. भन्या. ६ वर्ष कैद गर्नु. भातमा वोरायाको रहेनछ भन्या. ३ वर्ष कैद

गर्नु. म्यादको डवल् दिया लिनु. भोरमा पर्न्या भताहालाइ पतिया गराइ दिनु. स्वास्नि जात पतीत हुन्छे.

११. उपाध्या रजपूत जैसि क्षत्रि तागाधारि जातले नमासिन्या मतुवालि जातका ११ वर्ष नाघ्याका सधवासित घुरषापि सुत्यो भन्या. अैन वमोजीम् साधुको षुसि. कंन्या वीधवासीत घुरषापी सुत्या षतवात लाग्दैन.

१२. नमासिन्या मतुवालि जातले. नमासिन्यै मतुवालि जातका ११ वर्ष नाघ्याका. सधवासित घुरषापि सुत्यो भन्या. अैन वमोजिं साधुको षुसि. कंन्या वीधवासित घुरषापी सुती भताहालाइ भातमा वोरेछ भन्या. षतवात लाग्दैन. भताहालाइ. भातमा वोऱ्या भनी कराउन आया १० रूपैत्रा दंड गरि. भताहालाइ. पतीया गराइ दिनु. स्वास्नि उहि जात हुन्छे.

१३. मासिन्या मतुवाली जातले उपाध्या रजपूत जैसि क्षत्री तागाधारि जातका ११ वर्ष नाघ्याका. सधवासित घुरषापि. सुत्यो भन्या. अैन वमोजिम्साधुको षुसि. कंन्या विधवासित घुरषापी सुती भताहालाइ. भातमा वोराएछ भन्या. ३ वर्ष भातमा वोऱ्याको नभया १॥. वर्ष कैद गरि मासि दीनु.

१४. मासिन्या मतुवाली जातले. नमासिन्या मतुवालि जातका ११ वर्ष नाघ्याका सधवासित घुरषापि सुत्यो भन्या. अैन वमोजिं साधुको षुसि कंन्या वीधवा सित घुरषापी सुती. भातमा वोऱ्याको भया पनि नभया पनि. मासि दिनु. भोरमा षान्या भताहालाइ पतिया गराइ दिनु.

१५. उपाध्या रजपुत जैसि क्षत्रि तागाधारि जात र. नमासिन्या मतुवालि जातले मासिन्या मतुवालि जातका ११ वर्ष नाघ्याका. सधवा सित घुरषापि सुत्यो भन्या. अैन वमोजिंम्साधुको षुसि. कंन्या वीधवा सित घुरषापि सुत्या षत लाग्दैन. मासिन्यै मासिन्या. मतुवालि जातमा. एका जातका लोग्न्याले. एका जातका ११ वर्ष नाघ्याका सधवासित घुरषापि सुत्यो भन्या. जार काटन्या जातले. अैन वमोजिम् साधुको षुसि. कंन्या वीधवासित घुरषपि सुत्यो भनी कराउन आया ५ रूपैया दंड गर्नु. स्वास्नि उहि जात हुंछे.

१६. उपाध्या रजपुत जैसि क्षत्रि तागाधारि जात र. नमासिन्या मासिन्या मतुवालि जात गैह्रले. पानी नचलन्यामा. छिटो हालनु नपर्न्या. जातका ११ वर्ष नाघ्याका सधवासित घुरषापि सुत्यो भन्या. अैन वमोजिं साधुको षुसि. कंन्या वीधवासित घुरषापिमात्र सुत्या. स्वास्निका हातको भात पानी षायाको रहेनछ भन्या तागाधारि जातलाइ. १०० रूपैञा. नमासिन्या मतुवालि जातलाइ ५० रूपैया. मासिन्या मतुवालि जातलाइ २५ रूपैञा दंड गरि १ तीर्थ गराइ. पतीया गराइदिनु. जात जादैन. घुरषापि सुती उस्का हातको भात पानी षाइ अरू भताहालाइ समेत वोरेको रहेछ भन्या ऐन वमोजिमको अंस सर्वस्व गरी भात वाहेक् गरि. उसै जात्को १ अक्षर. वाञा गालामा षोदि. छोडि दिनु. आफु भन्दा ठुला जातसित. घुरषापि सुतन्या स्वास्नि मानीसलाइ. मासि दिनु.

१७. पानी नचलन्या छिटो हालनु नपर्न्या जातले. छिटो हालनु नपर्न्यै जातका ११ वर्ष नाघ्याका सधवासित घुरषापि सुत्या भन्या. जार हाँन्या जातको अैन वमोजिम्साधुको षुसी जार नहान्या जातका सधवा र. कंन्या वीधवासित घुरषापि सुत्यो भनी कराउन. आया ४ रूपैया दंड गर्नु. कराउन नआया. षतवात लाग्दैन. स्वास्नि जातैमा रहन्छे.

१८. पानी नचलन्या छिटो हालनु नपर्न्या जातले. छिटो हालनु पर्न्या जातका सधवा र ११ वर्ष नाघ्याका विधवा कंन्यासित. राजी षुसिले घुरषापि सुत्यामा. साधुले भातमा लियो भन्या र. फिऱ्यादगर्न नआया. षतवात लाग्दैन. स्वास्नि जातै.मा रहन्छे. फिऱ्याद गर्न आया सधवा भया १५ रूपैया विहा षर्च भराइ. १५ रूपैञा दण्डगर्नु. कंन्या विधवासित घुरषापि सुति भताहालाइ भातमा वोरेछ भन्या. सर्वस्व गरि भात पानि वाहेक गरी उसैजातको १ अक्षर वाञाँ गालामा षोदी छाडि दिनु. आफु भन्दा ठुला जात सित घुरषापि सुतन्या स्वास्निलाइ. मासि दिनु.

१९. पानी नचलन्या छिटो हालनु नपर्न्ये जातले. उपाध्या रजपुत जैसि क्षेत्री तागाधारि जात र. नमासिन्या मासिन्या मतुवालि जातका ११ वर्ष नाघ्याका सधवासीत घुरषापि सुत्यो भन्या. जार हान्या जातको अैन वमोजिंम्साधुको षुसि. साधुले जार हानेन भन्या र. कंन्या वीधवासित घुरषापि सुतन्या. मासिन्या जात भया ४ वर्ष कैद गरि मासि दिनु. नमासिन्या जात भया. ८ वर्ष कैद गर्नु. स्यादको चौवर्दीया रूपैञा लिनु. तागाधारि नमासिन्या जातका स्वास्निलाइ.

उसैजातको १ अक्षर वात्राँ गालामा षोदि. भात पानी वाहेक् गरी छाडि दिनु. मासिन्या जातका स्वास्नि लाइ १ अक्षर वात्राँ गालामा षोदी. मासि दिनु.

२०. उपाध्या रजपुत जैसि क्षेत्री. तागाधारि जात र. नमासिन्या मासिन्या. मतुवाली जातले छोया छिटो हालनु पर्न्या जातका ११ वर्ष नाघ्याका सधवा वीधवा कंन्या सित घुरषापि सुत्यो भन्या. भात पानीमा वोऱ्याको भया पनी नभया पनी. अैन वमोजिंम्को अंस सर्वस्व गरी १॥. वर्ष कैद गरी जौना जातका स्वास्निसित घुरषापि सुत्याको छ. उसैजातको १ अक्षर वात्राँ गालामा षोदी भात पानी वाहेक गरि. छोडि दिनु. आफु भंदा ठुला जातसित घुरषापि सुतन्या स्वास्निलाइ. मासि दिनु.

२१. छीटो हालनु पर्न्या जातले छीटो हालनु पर्न्यै जातका ११ वर्ष नाघ्याका सधवासित घुरषापिसुत्यो भन्या जार हान्या जातको साधुको षुसि. जार हाँन्या जातका साधुले भातमा लीयो भन्या र. फिऱ्याद गर्न आयान भन्या. षतवात लाग्दैन. स्वास्नी पनि जातैमा रहन्छे. फिऱ्याद गर्न आया सधवा भया. १५ रूपैञा वीहा षर्च भराइ १५ रूपैञा दंड गर्नु. कंन्या र वीधवा भया. ४ रूपैया दंड गर्नु. कराउन नआया. षतवात लाग्दैन. स्वास्नि पनी जातैमा रहंन्छे.

२२. छीटो हालनु पर्न्या जातले उपाध्या रजपुत जैसि. क्षेत्री तागाधारी नमासिन्या मतुवाली जातको ११ वर्ष नाघ्याका सधवा विधवा कंन्यासित. घुरषापि सुत्यो भन्या. सधवा भया अैन वमोजिंम् साधुको षुसि. जार काटेन भन्या र. कंन्या विधवा भया. अैन वमोजिम्को अंस सर्वस्व गरी दामल्. गर्नु. मासिन्या जात र. छिटो हालनु नपर्न्या जातका सधवा वीधवा कंन्या. सित घुरषापि सुत्या मासि दिनु. छिटो हालनु पर्न्या जात सीत घुरषापि सुतन्या स्वास्नि मानीस्मा. तागाधारी जात र. नमासिन्या मतुवालि जातका स्वास्निलाइ उसैजातको १ अक्षर वात्राँ गालामा षोदि भात पानी वाहेक् गरी छोडि दिनु. मासिन्या जात र. छीटो हालनु नपर्न्या जातका स्वास्निलाइ. १ अक्षर षोदि मासि दिनु.

# मुष पतितको

१. तागाधारि लगायेत. पानी चलन्या गैह्र जातका १२ वर्ष नाघ्याका कंन्या सधवा विधवा स्वास्निले पानी नचलन्या र. छोया छीटो हालनु पर्न्या जातका हातको भात पानी षाया भन्या र. नीरोपन् गर्दा पनी षायाको साचै ठहर्‍यो भन्या. तेस्ताले भात पानीको पतीया पाउदैनन्. जौना जातका हातको षायाको छ. उहि जातमा मिल्छन्. पतीया नदीनु. एस्ता जात पतीत भया पछि. एस्ता स्वास्नी लोग्न्याले फेरि राषन पाउदैन. अंस पनी पाउदैनन्. अर्कासित वीग्रा भन्या. जार काटन पनी पाउदैन. काटचा ज्यानको वदला ज्यान हुन्छ. जानि जानि जात पतित भयाका स्वास्नि राषन्या एस्ताका हातको भात पानी षान्या. को पानि नचलन्या उहि जात हुंछ. पतिया पाउदैन.

२. तागाधारि लगाएत् पानी चलन्यासम्मका गैह्र जातका १२ वर्ष नाघ्याका कंन्या सधवा विधवा स्वास्निले पानी चलन्या र. छोया छिटो स्मेत् हालनु पर्न्या जात गैह्रका. हातको भात पानी षाया भन्या र. रोवकार गर्दा षायाको ठहरेन भन्या. तेस्ताका हातको भात चल्दैन. पानी भन्या चल्छ. एस्ता स्वास्निवाट. पछि जन्म्याका सन्तान्ले. सद्यले जनहि ५।५ भाग पाया एस्तालाइ जनही १।१ भागको अंस पाउछ. षान लाउन दि राष्याको रहेछ. र. तेस्ता स्वास्नि अर्का सित पोइल. गइ भन्या. अैन वमोजिम जार काटन मुडन विहा षर्च लीन पाउछ. दंड हुन्या जातलाइ. दंड हुन्छ. मासिन्या जात मासिन्छ. दाल्भात स्मेत्संतानका हातको षान नभया पछी एस्ता पतीत भया स्वास्नि राषतीन भनी षान लाउन नदी नीकाल्या स्वास्नी अर्कासित पोइल गया भन्या. जार काटन पाउदैन. काटचो भन्या ज्यानको वदला ज्यान हुंछ.

३. तागाधारि जातका १२ वर्ष नाघ्याका सधवा विधवा कंन्या. स्वास्नि मानीसहरूले भात नचलन्या पानी मात्र चलन्या.का हातको दालभात र मदिरा कुषुरो. गैह्र अभक्ष षाया भन्या र. रोवकार गर्दा. षायाको ठहरेन भन्या एस्तालाइ १० रूपैया दंड गर्नु. भात पानी चल्छ. नीरोपन गर्दा. षायाको ठहर्‍यो भन्या. तेस्ताका हातको भात चल्दैन. पानीमात्र चल्छ. भात वाहेक भयाका स्वास्निवाट. पछि जन्म्याका सन्तांले सद्यले जनही ५।५ भाग पाया एस्तालाइ जन्है १।१ भागको अंस पाउछन्. षान लाउन दि राष्याको रहेछ र. एस्ता स्वास्नि अर्कासित पोइल गया भन्या. अैन वमोजिं जार काटन मुडन. विहा षर्च लिन पाउछ. दंड हुन्या जातलाइ

दंड हुन्छ. मासिन्या जात मासिन्छ. दाल्भात संतानका हातको षान नभया पछि. एस्ता पतीत भयाका स्वास्नि. राष्दिन भनी षान लाउन नदी नीकाल्याका स्वास्नी अर्कासित पोइल गया भन्या जार काटन पाउदैन. काटचो भन्या ज्यानको वदला ज्यान हुंछ.

४. तागाधारि जात गैहका ११ वर्ष नाघ्याका कंन्या सधवा वीधवा स्वास्निले. आफु भन्दा उपल्ला जातकालाइ हवस्. आफु मिल्दा जातकालाइ हवस्. आफु भन्दा घटि जातकालाइ हवस्. फलानालाइ करणि गराञा भनी आफ्ना मुषले भनी र. निरोपण गर्दा करणि भयाको ठहरेन. मुषले वक्याको मात्र ठहर्‍यो भन्या मुष पतीत हुनाले. एस्ता स्वास्निका हातको भात चल्दैन. पानीमात्र चल्छ. एस्ता स्वास्निलाइ विवाहीता लोग्न्याले राषी जन्म्याका सन्तान्ले जनै पाउछन् संन्तानका हातको भात षाना नषानाको भताहालाइ षुसि. एस्ता मुडिन्या जातका स्वास्नि नमासिन्या शुद्र. जात हुंन्छन्. काटिन्या जातका स्वास्नि मासिन्या जात हुन्छन्. मासिन्या जातका स्वास्नी मासिन्छन्. एस्ता जात पतित भयाका स्वास्नी आफुले राषि जन्म्याका सन्तान्लाई अंस दिदाँ कसले जनहि ५।५ भाग पाया एस्तालाइ. १।१ भाग अंश दिनु. षान लाउन दि राष्याका. एस्ता स्वास्नि अर्कासित पोइल गै भन्या. अैन वमोजिम्. जार हान्न मुडन उस्को अंश लिन. टाग मनी छिराइ वा. उसै छोड्नु विहा षर्च लीनु साधुको षुसि. षान लाउन नदि निकाल्याका स्वास्नि अर्कासित विग्र्या भन्या. जार काटन पाउदैन. काटचा ज्यानको वदला ज्यान लिनु.

५. नमासिन्या मतुवालि जातका ११ वर्ष नाघ्याका कंन्याका सधवा वीधवा स्वास्नीले. आफु भन्दा उपल्ला जातकालाइ हवस. आफु मिल्दा जातकालाइ हवस्. आफु भन्दा घटि जातलाइ हवस्. मैले फलानालाइ करणि गराया भनी आफ्ना मुषले भनी र. निरोपन् गर्दा. करणि ठहरेन. मुषले उसै वक्याको मात्रै ठहर्‍यो भन्या. करणि नभै. अर्कालाइ झुट्टो पोल्या वावत्. स्वास्निलाइ १० रूपैया दंड गर्नु. मुष पतीत हुनाले एस्ता स्वास्निका हातको दाल्भात षानु नषानु भताहाको षुसि. एस्ता स्वास्नि आफैले राषि जन्म्याका सन्तान् वावु कै जातमा जान्छन्. भताहाले भात षायाको रहेछ भन्या अंस पनी वरोवर पाउछन्. दाल भात षायाको रहेनछ भन्या. ३ षंडमा. सद्यले २ भाग पाया एस्तालाइ १ भाग अंस पाउछन्. षानलाउन दि राष्याका स्वास्नि अर्कासित पोइल गया भन्या. जार हाँन्या जातको अैन वमोजिम् साधुको षुसि. जार नहान्या वीहा षर्च लिन्या जात्लाइ अैन वमोजिं विहा षर्च भराइ. विगै वमोजिं डंड

गर्नु. षान लाउन नदि नीकाली राष्याका स्वास्निको जार काटन्याको ज्यानको वदला ज्यान हुंन्छ. विहा षर्च पनी पाउदैन. विगा वमोजिं दंड पनी हुदैन.

६. मासिन्या मतुवालि जातका ११ वर्ष नाघ्याका कंन्या सधवाविधवा स्वास्निहरूले आफु भन्दा. उपल्ला र. आफु मिल्दा. आफु भन्दा घटि पानी चलन्या सम्मका जातलाइ मैले फलानालाइ करणि गरात्रा. भनी आफ्ना मुषले भनि र. निरोपन् गर्दा करणि भयाको ठहरेन र. मुषले उसै वक्याको मात्रै ठहर्‍यो भन्या. तेस्ता स्वास्निको जात जादैन. आफ्ना जातैमा रहन्छन्. झुट्टो कुरो पोल्या वापत् स्वास्निलाइ. ५ रूपैत्रा दंड गर्नु. एस्ता स्वास्निले आफैले राषि जन्म्याका सन्तान्. सद्यका सरहको वरोवर अंस पाउछन्. अरू कसैसित पोइल गए भन्या. जार हान्या जातको जार हान्न. विहा षर्च लीन्याले वीहा षर्च लीन पाउछन्. वीहा षर्च २० रूपैया भराइ. विगै वमोजिं दंड गर्नु. अर्कालाइ करणि दित्रा भनि मुष पतित् भयाका स्वास्नि राषतीन भनी षान लाउन नदी. लोग्न्याले निकाल्याका स्वास्नि अर्कासित पोइल गया भन्या. जार हान्न पाउदैन. काटया ज्यानको वदला ज्यान हुंन्छ. विहा षर्च पनी पाउदैन. वीगा वमोजिं दंड पनी हुदैन.

७. पानी नचलन्या र. छोया छिटो हालनु पर्न्या जातका ११ वर्ष नाघ्याका कंन्या सधवा विधवा स्वास्निहरूले. आफु भन्दा उपल्ला. आफु वरावर. आफु भन्दा घटि जातकालाइ. मैले फलानालाइ करणि गरात्रा भनी. आफ्ना मुषले भनी र. निरोपन् गर्दा. करणि भयाको ठहरेन मुषले मात्रै वक्याको ठहर्‍यो भन्या. तेस्ता स्वास्निले आफु भन्दा उपल्ला विष्ट जातलाइ पोल्याको भया. मासि दिनु. आफु मिल्दा जातलाइ पोल्याको भया २॥ रूपैत्रा दंड गर्नु. आफु भन्दा घटि आफुले पानी नषान्या. जातकालाइ पोल्याको भया पानी चल्छ. १० रूपैत्रा दंड गर्नु. भात षाना नषान्ना भताहाको षुसि. एस्ता स्वास्नि आफैले राषि जन्म्याका सन्तान् लाइ. स का सरहको वरोवर अंस पाउछ. अर्का कसैसित पोइल गया भन्या. वीहा षर्च लीन्या जातलाइ अैन वमोजिं वीहा षर्च भराइ. विगा वमोजिं दंड गर्नु जार हाँन्या जातका साधुको षुसि. मुष पतीत् भया की स्वास्नि राषतीन भनी षान लाउन नदि. निकाल्याका स्वास्नि अर्कासित पोइल गया भन्या. जार काटन पाउदैन. काटया ज्यानको वदला ज्यान हुंन्छ. विहा षर्च पनि पाउदैन. वीगा वमोजिं दंड पनी हुदैन.

८. तागाधारि लगाएत्. पानी चलन्यासम्मका गैह्र जातका ११ वर्ष नाघ्याका कंन्या सधवा विधवा स्वास्निले आफ्ना मुषले पानी नचलन्या र. छोया छीटो हालनु पर्न्या जातसित वीग्र्या भनी र. निरोपन् गर्दा करणि भयाको ठहर्‍यो भन्या भात पानीको पतीया पाउदैनन्. जौना जातमा विग्र्याको ठहर्छन्. उसै जातका हातको भात पानी षुवाइ. उसैजातको अक्षर वात्राँ गालामा षोदी. उहि जातमा मिलाइ छोडी दिनु. भात पानीको पतीया पाउदीन.नदिनु.पानी नचलन्या जात र. छोया छिटो हालनु. पर्न्या जातसित. विग्र्या भनी मुषलेमात्र भंन्या करणि भन्या नचुक्याका स्वास्निको जात जान्छ. मुडिन्या जातका स्वास्नि शुद्र जातहुंछन्. काटिन्या जातका स्वास्नि मासिन्या जात हुन्छन्. मासिन्या जातका स्वास्नि मासिन्छन्. एस्ताका हातको भात चल्दैन. पानी मात्र चल्छ. एस्ता स्वास्नि विवाहिता लोग्न्याले राषी संतान जन्म्या सयेकरा २॥. रूपैञाका दर्ले अंस पाउछन्. पैल्हे कचहरिमा कुरो परी कुट्पिट् केही नगरि सोद्धा फलानासित करणि भयाको छ. करणिमा कायेल गराउला भनी कागज लेषि सहि हालि दि र. पोल्याकालाइ झिकाइ. रोवकार गर्दा करणि ठहरेन भन्या पनी कागज लेषि सहि. हालीदियाको हुनाले. एस्ता स्वास्निका हातको भात पानी चल्दैन. जौनाजातसितको करणि हो भनी अघि कागज लेषि दिया की छ. नमासिन्या जातका स्वास्नि भया उसै जातको १ अक्षर षोदि भात पानी वाहेक् गरि उसै जातमा मिलाइ छोडि दिनु. मासिन्या जातका स्वास्नि भया अक्षर षोदी मासि दिनु.

९. कसैले अैनले जार हान्न हुन्यासम्मका आफ्नि स्वास्निलाइ करणिमा अर्का सित विग्री भंन्या संकाले भात चलन्या स्वास्निका हातको भात षान छाडेछ भन्या भात नचल्न्या स्वास्निलाइ. फलाना सितकाकरणिमा विग्र्याकी छस् भनी सुनाएछ. उस स्वास्निको आफुले करणि गर्दै रहेछ. भन्या. त्यस स्वास्नि अर्का कसैसित वीग्र्या भन्या करणि गर्न्यालाइ २० रूपैञा दंड गर्नु जार काटन पाउदैन काटचो भन्या मुडिन्या जात्ले भया. अैन वमोजिम्को अंस सर्वस्व गरि दामल् गर्नु. काटीन्या जातलाइ काटी मारि दीनु. भातका ढचा सुनाया पछी आफुले करणि गर्‍याको रहेनछ. षान लाउनदि कीनारा गरि राष्याको रहेछ भन्या अैन वमोजीम् जार काटन पाउछ.

# करणीका आशयले हातपात गऱ्याको
# जाहेर गर्न्या

१. उपाध्या ब्राम्हणका सधवा विधवा कंन्याले उपाध्या ब्राम्हण कसैलाइ उसले हास्ष्याल् ठट्टा वात केही नगरि हिडद्याका वस्याका सुत्याका वेलामा धोति लिंग समाइछ चुम्वन गरिछ अगालो हालिछ र फलानि स्वास्निले मलाइ यसो गरि भनि ७ दिनभित्रमा अदालत अमाल गाउ घरमा आइ आफैले जाहेर गऱ्यो भन्या तेस् लोग्न्यालाइ स्वास्निका वारिस् वालाले षत लगाउन पाउदैन. अदालत अमालबाट पनि दंड कैद सजायगर्न हुदैन. अर्काका लोग्न्यालाइ एति विद्धि गर्न्या स्वास्निका हातको भात चल्दैन पानि मात्र चलछ एस्ता स्वास्निविवाहिता लोग्न्याले षान लाउन दिया राष्याका अर्कासित पोइल गया भन्या अैन वमोजिम जार काट्नु. मुडनु. विहाषर्च लिनपाउछ षान लाउन नदि लोग्न्याले निकाल्याका एस्ता स्वास्नि अर्कासित विग्रया भन्या जार काटन मुडन विहा षर्च लिन पाउदैन जार काट्योभन्या अैन वमोजिम् अंस सर्वस्व गरि दामल गर्नु स्वास्नि मानिसले एति कुरा गऱ्याको लोग्न्याले जाहेर गरेन अर्कैवाट जाहेर भयो भन्या अदालत ठाना अमालवाट ति लोग्न्या स्वास्नि दुवैलाई झिकि पुर्पक्ष गर्दा करणि गऱ्याको ठहऱ्यो भन्या उसै जातका करणिका अैन बमोजिम सजाय गर्नु करणि गऱ्याको ठहरेन भन्या लोग्न्यालाइ ५० रुपैया दंड गर्नु जात जादैन फलानि स्वास्निले मलाइ यो कुरो गरि भंन आयो रोवकार गर्दा स्वास्निले भन्याको ठहरेन र लोग्न्याले पोल्याको मात्र ठहऱ्यो भन्या ५० रुपैया दंड गर्नु.

२. उपाध्या ब्राम्हणका सधवा विधवा कंन्याले तागाधारि जात कसैलाइ उसले हास्ष्याल ठट्टावात केहि नगरि हिडद्याका वस्याका सुत्याका वेलामा धोति लिंग समाइछ चुम्वन गरिछ अंगालो हालिछ र फलानि स्वास्निले मलाइ एसो गरि भनि ७ दिनभित्रमा अदालत अमाल गाउ घरमा आइ आफैले जाहेर गऱ्यो भन्या तेस लोग्न्यालाइ स्वास्निका वारिसवालाले षत लाउन पाउदैन अदालत अमालबाट पनि दंड कैद सजाय गर्न हुदैन अर्काका लोग्न्यालाइ एति विधि गर्न्या स्वास्निका हातको भात चल्दैन पानि मात्र चलछ एस्ता स्वास्नि विवाहित लोग्न्याले षान लाउनदि राष्याका स्वास्नि अर्कासित पोइल गयो भन्या अैन वमोजिम् जार काटन मुडनु विवाह षर्च लिन पाउछ षान लाउन नदि लोग्न्याले निकाल्याका एस्ता स्वास्नि अर्कासित

विग्र्या भन्या जार काटनु मुडन विवाह षर्च लिन पाउदैन जार काटचो भन्या अैन वमोजिम् अंस सर्वस्व गरि दामल गर्नु स्वास्नि मानिसले एति कुरा गऱ्याको लोग्न्याले जाहेर गरेन अर्केवाट जाहेर भयो भन्या अदालत ठाना अमाल वाट ति लोग्न्या स्वास्नि दुवैलाई झिकि पुर्पक्ष गर्दा करणि गऱ्याको ठहऱ्यो भन्या उसै जातका करणिका अैन वमोजिम् सजाय गर्नु. करणि भयाको ठहरेन भन्या लोग्न्यालाइ ६० रूपैया दंड गर्नु. जात जादैन फलानि स्वास्निले मलाइ यसो गरि भंनआयो रोवकार गर्दा स्वास्निले भन्याको ठहरेन र. लोग्न्याले पोल्याको मात्र ठहऱ्यो भन्या ६० रूपैया दंड गर्नु.

३. उपाध्या व्राम्हणका सधवा विधवा कंन्याले नमासिन्या मतवालि जात कसैलाइ उसले हास् ष्याल् ठट्टा वात केहीनगरि हिडचाका वस्याका सुत्याका वेलामा धोति लिंग समाइछ चुम्वन गरिछ अगालो हालिछ र. फलानि स्वास्निले मलाइ यसो गरि भनि ७ दिनभित्रमा अदालत्अमाल गाउ घरमा आइ आफैले जाहेर गऱ्यो भन्या तेस लोग्न्यालाइ स्वास्निका वारिस् वालाले षत लगाउन पाउदैन अदालत ठाना अमालबाट पनि दंड कैद सजाय गर्नु हुदैन. अर्काका लोग्न्यालाइ एति विधि गर्न्या स्वास्निका हातको भात चल्दैन पानि मात्र चलछ एस्ता स्वास्नि विवाहिता लोग्न्याले षान लाउन दि राष्याका अर्कासित पोइल गया भन्या अैन वमोजिम जार काटन मुडन विहा षर्च लिन पाउछ षान लाउन नदि लोग्न्याले निकाल्याका एस्ता स्वास्नि अर्कासित पोइल गयो भन्या जार काटन मुडन विहा षर्च लिन पाउदैन जार काटचो भन्या अैन वमोजिमको अंस सर्वस्व गरि दामल गर्नु स्वास्नि मानिस्ले एति कुरा गऱ्याको लोग्न्याले जाहेर नगरि अर्कैवाट जाहेर भयो भन्या अदालत अमालवाट ति लोग्न्या स्वास्नि दुवैलाई झिकि पुर्पक्ष गर्दा करणि गऱ्याको ठहऱ्यो भन्या उसै जातका करणिका अैन वमोजिम् सजाय गर्नु करणि गऱ्याको ठहरेन भन्या लोग्न्यालाइ ६५ रुपैया दंड गर्नु जात जादैन फलानि स्वास्निले मलाइ यो कुरो गरि भंन्न आयो रोवकार गर्दा स्वास्निले भन्याको ठहरेन भन्या र लोग्न्याले पोल्याको मात्र ठहऱ्यो भन्या ६५ रूपैया दंड गर्नु.

४. उपाध्या व्राम्हणका सधवा विधवा कंन्या स्वास्नीले मासिन्या मतवालि पानि चलन्या जातका लोग्न्या मानिस् कसैलाइ उसैले हास् ष्याल् ठट्टा वात केहि नगरि हिडचाका वस्याका सुत्याका वेलामा धोति लिंग समाइछ चुम्वन गरिछ अगालो हालिछ र फलानि स्वास्निले मलाइ एसो गरि भनि ७ दिन भित्रमा अदालत् ठाना अमाल गाउ घरमा आइ आफैले जाहेर गऱ्योभन्या

लोग्न्यालाइ स्वास्निका वारिस वालाले षतलाउन पाउदैन अदालत् ठाना अमालबाट पनि दंडकैद सजाय गर्नु हुदैन अर्काका लोग्न्यालाइ एति विधि गर्न्या स्वास्निका हातको भात चल्दैन पानि मात्र चल्छ. एस्ता स्वास्नि विवाहिता लोग्न्याले षान लाउन दि राष्याका स्वास्नि अर्कासित पोइल गया भन्या साधुले अैन वमोजिम जार काटन विहा षर्च लिन पाउछ षान लाउन नदि लोग्न्याले निकाल्याका एस्ता स्वास्नि अर्कासित विग्र्या भन्या जार काटन विहा षर्च लिन पाउदैन जार काटयो भन्या अैन वमोजिम अंस सर्वस्व गरि दामल् गर्नु स्वास्नि मानिस्ले येति कुरा गर्‍याको लोग्न्याले जाहेर गरेन अर्कैवाट जाहेर भयो भन्या अदालत् ठाना अमालवाट ति लोग्न्या स्वास्नि दुवैलाई झिकि पुर्पक्ष गर्दा करणि गर्‍याको ठहर्‍यो भन्या उसै जातका करणिका अैन वमोजिम सजाय गर्नु करणि ठहरेन भन्या लोग्न्यालाइ ७० रूपैया दंड गर्नु रूपैया नतिर्‍या अैन वमोजिम कैद गर्नु जात जादैन फलानि स्वास्निले मलाइ यो कुरा गरि भंन आयो रोवकार गर्दा स्वास्निले भन्याको ठहरेन भन्या र लोग्न्याले पोल्याको मात्र ठहर्‍यो भन्या ७० रूपैया दंड गर्नु.

५. उपाध्या व्राम्हणका सधवा विधवा कंन्या स्वास्नि मानिस्ले पानि नचलन्या जात र छोया छिटो हालनु पर्न्या जातका लोग्न्या मानिस् कसैलाइ उसले हास् ष्याल् ठट्टा वात केहि नगरि हिडर्‍याका वस्याका सुत्याका वेलामा धोति लिंग समाइछ चुम्वन गरिछ अगालो हालिछ र. फलानि स्वास्निले मलाइ एसो गरि भनि ७ दिनभित्रमा अदालत् ठाना अमाल गाउ घरमा आइ आफैले जाहेर गर्‍यो भन्या तेस् लोग्न्यालाइ स्वास्निका वारिस् वालाले षत लाउन पाउदैन अदालत ठाना अमालबाट पनि दंड कैद सजाय गर्न पाउदैन अर्काका लोग्न्यालाइ एति विधि गर्न्या स्वास्निका हातको भात पानि चल्दैन जौना जातको लोग्न्यालाइ एति विधि गर्‍याको छ उसै जातको १ अक्षर वात्रा गालामा षोदि भात पानि वाहेक् गरि उसै जातमा मिलाइ छाडिदिनु. एस्ता स्वास्निको विवाहिता लोग्न्याले करणि गर्‍यो भन्या र. अरूले जानि जानि करणि गर्‍याछं भन्या इनलाइ पनि पतिया नदिनु उसै जातमा मिलाइदिनु आफुलाइ अर्काका स्वास्नि मानिस्ले एतिविधि गर्‍याको आफुले जाहेर गरेन छ अर्कैवाट जाहेर भयो भन्या. अदालत् ठाना अमालवाट ति लोग्न्या स्वास्नि दुवैलाई झिकि पुर्पक्ष गर्दा करणि ठहर्‍या. उसै जातका करणिका अैन वमोजिम सजाय गर्नु. करणि ठहरेन भन्या पानि नचलन्या लोग्न्यामा छिटो हालनु नपर्न्या जातका लोग्न्यालाइ ७५ रूपैया छिटो हालनु पर्न्या जातका लोग्न्यालाइ ८० रूपैया दंड गर्नु रूपैया नतिर्‍या अैन वमोजिम कैद गर्नु फलानि स्वास्निले मलाइ यो कुरा

गरी भंन आयो रोवकार गर्दा स्वास्निले भन्याको ठहरेन लोग्न्याले पोल्याको मात्र ठहऱ्या ८० रूपैया दंड गर्नु.

६. तागाधारि जात गैह्रका सधवा विधवा कंन्या स्वास्निले उपाध्या लगायत् तागाधारि जात कसैलाइ उस्ले हास् ष्याल ठट्टा वात केहि नगरि हिडद्याका वस्याका सुत्याका वेलामा धोति लिंग समाइछ चुम्वन गरिछ अगालोहालिछ र. फलानी स्वास्निले मलाइ यसो गरि भनि ७ दिनभित्रमा अदालत् ठाना अमाल गाउ घरमा आइ आफैले जाहेर गऱ्यो भन्या तेस् लोग्न्यालाइ स्वास्निका वारिस् वालाले षत लाउन पाउदैन अदालत् अमालबाट पनि दंड कैद सजाय गर्नु हुदैन अर्काका लोग्न्यालाइ एतिविधि गर्न्या स्वास्निका हातको भात चल्दैन. पानिमात्र चल्छ एस्ता स्वास्नि विवाहिता लोग्न्याले षान लाउन दि राष्याका स्वास्नी अर्कासित पोइल गया भन्या साधुले अैन वमोजिम जार काट्न मुडन विहा षर्च लिन पाउछ षान लाउन नदि लोग्न्याले निकाल्याका एस्ता स्वास्नि अर्कासित विग्र्या भन्या जार काट्न मुडन विहा षर्च लिन पाउदैन जार काटचो भन्या ज्यानको वदला ज्यान स्वास्नि मानिस्ले एति कुरा गऱ्याको लोग्न्याले जाहेर गरेन अर्कैवाट जाहेर भयो भन्या अदालत् ठानाअमालवाट ति लोग्न्या स्वास्नि दुवैलाई झिकि पुर्पक्ष गर्दा करणि भयाको ठहऱ्यो भन्या उसै जातका अैन वमोजिम सजाय गर्नु करणि गऱ्याका ठहरेन भन्या लोग्न्यालाइ ५० रूपैया दंड गर्नु जात जादैन फलानि स्वास्निले मलाइ यो कुरो गरि भंन आयो रोवकार गर्दा स्वास्निले भन्याको ठहरेन भन्या र. लोग्न्याले पोल्याको मात्रै ठहऱ्यो भन्या ५० रूपैया दंड गर्नु.

७. तागाधारि जात गैह्रका सधवा विधवा कंन्या स्वास्निले नमासिन्या मतवालि जात गैह्र कसैलाइ उस्ले हास ष्याल ठट्टा वात केहि नगरि हिडद्याका वस्याका सुत्याका वेलामा धोति लिंग समाइछ चुम्वन गरिछ अगालो हालिछ र. फलानी स्वास्निले मलाइ यसोगरि भनि ७ दिनभित्रमा अदालत् ठाना अमाल गाउ घरमा आफैले जाहेर गऱ्यो भन्या तेस लोग्न्यालाइ स्वास्निका वारिस वालाले षत लाउन पाउदैन अदालत् अमालबाट पनि दंड कैद सजाय गर्न हुदैन अर्काका लोग्न्यालाइ एति विधि गर्न्या स्वास्निका हातको भात चलदैन पानिमात्र चलछ एस्ता स्वास्नि विवाहिता लोग्न्याले षान लाउन दि राष्याका स्वास्नी अर्कासित पोइल गयो भन्या साधुले अैन वमोजिम जार काट्न विहा षर्च लिन पाउछ षान लाउन नदि लोग्न्याले निकाल्याका एस्ता स्वास्नि अर्कासित विग्र्या भन्या जार काटनु विहा षर्च लिनु पाउदैन जार

काटचो भन्या ज्यानको वदला ज्यान. स्वास्नि मानिस्ले एति कुरा गऱ्याको लोग्न्याले जाहेर गरेन अर्कैवाट जाहेर भयो भन्या अदालत अमालवाट ति लोग्न्या स्वास्नि दुवैलाई झिकि पुर्पक्ष गर्दा करणि गऱ्याको ठहऱ्यो भन्या. उसै जातका करणिका अैन वमोजिम सजाय गर्नु करणि भयाको ठहरेन भन्या लोग्न्यालाइ ६५ रूपैया दंड गर्नु जात जादैन फलानि स्वास्निले मलाइ यो कुरो गरि भंन आयो रोवकार गर्दा स्वास्निले भन्याको ठहरेन र. लोग्न्याले पोल्याको मात्र ठहऱ्यो भन्या ६५ रूपैया दंड गर्नु.

८. तागाधारि जात गैह्रका सधवा विधवा कंन्या स्वास्निले मासिन्या पानि चलन्या जातका लोग्न्या मानिस् कसैलाइ उस्ले हास ष्याल ठट्टा वात केहि नगरि हिडचाका वस्याका सुत्याका वेलामा धोति लिंग समाइछ चुम्वन गरिछ अगालो हालिछ. र फलानि स्वास्निले मलाइ यसो गरि भनि ७ दिनभित्रमा अदालत अमाल गाउ घरमा आइ आफैले जाहेर गऱ्यो भन्या तेस लोग्न्यालाइ स्वास्निका वारिसवालाले षत लाउन पाउदैन. अदालत अमालबाट पनि दंड कैद सजाय गर्न हुदैन. अर्काका लोग्न्यालाइ एति विधि गर्न्या स्वास्निका हातको भात चल्दैन. पानि मात्र चल्छ. एस्ता स्वास्नि विवाहिता लोग्न्याले षान लाउन दि राष्याका स्वास्नि अर्कासित पोइल गया भन्या साधुले अैन वमोजिम् जार काटन विहा षर्च लिन पाउछ. षान लाउन नदि लोग्न्याले निकाल्याका एस्ता स्वास्नि अर्कासित विग्ऱ्या भन्या. जार काटन विहा षर्च लिन पाउदैन. जार काटचो भन्या ज्यानको वदला ज्यान्. स्वास्नि मानिसले एति कुरा गऱ्याको लोग्न्याले जाहेर गरेन अर्कैवाट जाहेर भयो भन्या अदालत अमालवाट ति लोग्न्या स्वास्नि दुवैलाई झिकि पुर्पक्ष गर्दा. करणि भयाको ठहऱ्यो भन्या उसै जातका करणिका अैन वमोजिम् सजाय गर्नु. करणि भयाको ठहरेन भन्या लोग्न्यालाइ ७० रुपैया दंड गर्नु. जात जादैन. फलानि स्वास्निले मलाइ यो कुरो गरि भंन आयो रोवकार गर्दा स्वास्निले भन्याको ठहरेन भन्या र. लोग्न्याले पोल्याको मात्र ठहऱ्यो भन्या ७० रूपैया दंड गर्नु.

९. तागाधारि जात गैह्रका सधवा विधवा कंन्या स्वास्नि मानिसले पानि नचलन्या र छोया छिटो हालनु पर्न्या जातका लोग्न्या मानिस्लाइ उसले हास ष्याल ठट्टा वात केहि नगरि हिडचाका वस्याका सुत्याका वेलामा धोति लिंग समाइछ चुम्वन गरिछ. अगालो हालिछ र फलानि स्वास्निले मलाइ यसो गरि भनि ७ दिन भित्रमा अदालत अमाल गाउ घरमा आइ आफैले जाहेर गऱ्यो भन्या. तेस लोग्न्यालाइ स्वास्निका वारिसवालाले षत लाउन पाउदैन. अदालत

अमालबाट पनि दंड कैद सजाय गर्न हुदैन. अर्काका लोग्न्यालाइ यतिविधि गर्न्या स्वास्निका हातको भात पानि चल्दैन. जौना जातका लोग्न्यालाइ एति विधि गर्‍याकिछ. उसै जातको १ अक्षर वात्रा गालामा षोदि भात पानि वाहेक गरि उसै जातमा मिलाइ छाडि दिनु एस्ता स्वास्निको विवाहिता लोग्न्याले करणि गर्‍यो भन्या र अरुले जानि जानि करणि गरेछन् भन्या उन्लाइ पनि पतिया नदिनु. उसै जातमा मिलाइदिनु. आफुलाइ अर्काका स्वास्निमानिस्ले एतिविधि गर्‍याको आफुले जाहेर गरेन अर्कैवाट जाहेर भयो भन्या. अदालत ठाना अमालवाट ति लोग्न्या स्वास्नि दुवैलाई झिकि पुर्पक्ष गर्दा करणि ठहर्‍यो भन्या उसै जातका करणिका अैन वमोजिम् सजायगर्नु. करणि ठहरेन भन्या. पानि नचलन्या लोग्न्यामा छिटो हालनु नपर्न्या जातका लोग्न्यालाइ ७५ रूपैया छिटो हालनु पर्न्या जातका लोग्न्यालाइ ८० रूपैया दंड गर्नु. रुपैया नतिर्‍या अैन वमोजिम्. कैद गर्नु. फलानि स्वास्निले मलाइ यो कुरोगरि भंन्न आयो रोवकार गर्दा स्वास्निले भन्याको ठहरेन र लोग्न्याले पोल्याको मात्र ठहर्‍यो भन्या ८० रूपैया दंड गर्नु.

१०. नमासिन्या मतुवालि जात गैह्रका सधवा विधवा कंन्या स्वास्नि मानिसले उपाध्या लगायेत् तागाधारि जात र. नमासिन्या मतुवालि जात गैह्रका लोग्न्या मानिसलाइ उसले हास ष्याल ठट्टावात केहि नगरि हिडद्याका वस्याका सुत्याका वेलामा धोति लिंग समाइछ चुम्वन गरिछ अगालो हालिछ र फलानि स्वास्निले मलाइ यसो गरि भनि ७ दिनभित्रमा अदालत ठाना अमाल गाउ घरमा आइ आफैले जाहेर गर्‍यो भन्या तेस लोग्न्यालाइ स्वास्निका वारिस वालाले षत लाउन पाउदैन. अदालत ठाना  अमालबाट पनि दंड कैद सजाय गर्न हुदैन. अर्काका लोग्न्यालाइ यतिविधि गर्न्या स्वास्निका हातको भात षानु नषानु. भताहाको षुसि एस्ता स्वास्नि विवाहिता लोग्न्याले षान लाउन दि राष्याका अर्कासित पोइल गया भन्या साधुले अैन वमोजिम् जार काटन विहा षर्च लिन पाउछ. षान लाउन नदि लोग्न्याले निकाल्याका एस्ता स्वास्नि अर्कासित विग्र्‍या भन्या. जार काटन विहा षर्चलिन पाउदैन. जार काटद्या ज्यानको वदला ज्यान हुंछ स्वास्नि मानिसले एति कुरो गर्‍याको लोग्न्याले जाहेर गरेन अर्कैवाट जाहेर भयो भन्या. अदालत ठाना अमालवाट ति लोग्न्या स्वास्नि दुवैलाई झिकि पुर्पक्ष गर्दा करणि भयाको ठहर्‍यो भन्या उसै जातका करणिका अैन वमोजिम् सजाय गर्नु. करणि भयाको ठहरेन भन्या. ३५ रूपैया दंड गर्नु. रूपैया नतिर्‍या अैन वमोजिम् कैद गर्नु. फलानि स्वास्निले मलाइ

यो कुरो गरि भंन्न आयो रोवकार गर्दा स्वास्निले भन्याको ठहरेन भन्या र. लोग्न्याले पोल्याको मात्र ठहर्‍यो भन्या ३५ रूपैया दंड गर्नु.

११. नमासिन्या. जातका सधवा विधवा कंन्या. स्वास्नि मानीस्ले. मासिन्या जातमा. पानी चलन्या जातका लोग्न्या मानीस्लाइ उसले हास ष्याल ठट्टावात केहि नगरि हिडचाका वस्याका सुत्याका वेलामा. धोति लिंग समाइछ. चुम्वनगरिछ अगालो हालिछ. र. फलानि स्वास्निले मलाइ येसो गरि भनी. ७ दिन्भित्रमा. अदालत ठाना अमाल गाउ घरमा आइ आफैले जाहेर गर्‍यो भन्या. तेस् लोग्न्यालाइ स्वास्निका वारिसवालाले षत लाउन पाउदैन. अदालत ठाना अमालबाट पनि दंड कैद सजाय गर्न हुदैन. अर्काका लोग्न्यालाइ एति विधि गर्न्या स्वास्निका हातको भात चल्दैन. पानी मात्र चल्छ. एस्ता स्वास्नीलाइ विवाहिता लोग्न्याले षान लाउन दि. राष्याका. अर्कासित पोइल गया भन्या. साधुले अैन वमोजिं जार काटन. विहा षर्च लिन पाउछ. षान लाउन नदी. निकाल्याका एस्ता स्वास्नी अर्कासीत वीग्र्या भन्या. जार काटन वीहा षर्च लिन पाउदैन. जार काटचा ज्यानको वदला ज्यान हुन्छ. स्वास्नि मानीसले येति कुरा गर्‍याको. आफुले जाहेर गर्‍येन अर्कैवाट जाहेर भयो भन्या अदालत ठाना अमाल. वाट ति लोग्न्या स्वास्नी दुवैलाइ भिकि पूर्पक्ष गर्दा. करणि भयाको ठहर्‍यो भन्या उसै जातका करणि. का अैन वमोजिं सजाय गर्नु. करणि ठहरेन भन्या. ७० रूपैया दंड गर्नु रूपैया नतिर्‍या अैन वमोजिं कैद गर्नु. फलानी स्वास्निले मलाइ. यो कुरो गरि भंन्न. आयो रोवकार गर्दा स्वास्निले भन्याको ठहरेन भन्या र. लोग्न्याले पोल्याको मात्र ठहर्‍यो भन्या. ७० रूपैञा दंड गर्नु.

१२. नमासिन्या मतुवाली जातका कंन्या शधवा वीधवा स्वास्नी मानीस्ले. पानि नचलन्या र.छोया छिटो स्मेत् हालनु पर्न्या.जातका लोग्न्या मानीस्लाइ उसले हास ष्याल ठट्टा वात केहि नगरि. हिडचाका वस्याका सुत्याका वेलामा. धोती लींग समाइछ. चुम्वन् गरिछ अगालो हालिछ र फलानी स्वास्नीले मलाई यसो गरी भनी ७ दिनभित्रमा. अदालत ठाना अमाल गाउ घरमा आइ. आफैले जाहेर गर्‍यो भन्या तेस लोग्न्यालाइ. स्वास्निका वारीस वालाले षत लाउन पाउदैन. अदालत ठाना अमालबाट पनी दंड सजाय कैद गर्नु हुदैन. पानी नचलन्या जातको लोग्न्यालाइ. एतिविधि गर्न्या स्वास्नीका हातको भात पानी चल्दैन जौना जात्का लोग्न्यालाइ. एतिविधि गर्‍याको छ. उसै जात्को १ अक्षर्वाञा गालामा षादी भात पानी वाहेक् गरि उसै जात्मा मिलाइ छाडिदिनु. एस्ता स्वास्निको वीवाहिता लोग्न्याले करणि गर्‍यो भन्या र. अरूले

पनी जानी जानी करणि गरेछन्भन्या. उनलाइ पनी पतीया नदीनु. उसै जात्मा मिलाइ दिनु. आफुलाइ अर्काका स्वास्नीले एती वीधि गऱ्याको आफुले जाहेर गरेन. अर्केवाट जाहेर्भयो भन्या. अदालत ठाना अमालवाट. ति लोग्न्या स्वास्नी दुवैलाई भिकि पुर्पक्ष गर्दा. करणि भयाको ठहऱ्यो उसै जातका करणिका अैन वमोजिं सजाय गर्नु. करणि ठहरेन भन्या. पानी नचलन्या लोग्न्या मानीस्मा.छोया छीटो हालनु नपर्न्या जातका लोग्न्यालाइ ७५ छिटो हालनु पर्न्या जातकालाइ ८० रूपैञा दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम्कैद गर्नु. फलानी स्वास्नीले मलाइ यो कुरो गरि भन्न आयो रोवकार गर्दा स्वास्नीले भन्याको ठहरेन र. लोग्न्याले मात्र पोल्याको ठहऱ्यो भन्या. ८० रूपैया दंड गर्नु.

१३. मासिन्यामा पानी चलन्या गैह्र जातका सधवा वीधवा कंन्या स्वास्नीले. उपाध्या लगायेत् तागाधारि जात नमासिन्या मासिन्या गैह जातका. लोग्न्या मानीस्लाइ उस्ले हास ष्याल ठट्टा वात केहि नगरी. हिडचाका वस्याका सुत्याका वेलामा धोती लिंग समाइछ. चुम्मन् गरिछ. अगालो हालीछ र. फलानी स्वास्नीले मलाइ. एसो गरि भनी ७ दिन्भीत्रमा. अदालत ठाना अमाल. गाउ घरमा आइ आफैले जाहेर्गन्यो भन्या तेस् लोग्न्यालाइ स्वास्नीका वारिस वालाले षत लाउन पाउदैन. अदालत अमालवबाट पनि. दंड सजाय कैद गर्न हुदैन. अर्काका लोग्न्यालाइ एति वीधि गर्न्या स्वास्नीका हातको भात चल्छ एस्ता स्वास्नीलाइ वीवाहीता लोग्न्याले षान लाउन दि राष्याका. अर्कासित पोइल गया भन्या. साधुले अैन वमोजिं जार काटन्या जातले जार्काट्न. विहा षर्च लिन्या जातले वीहा षर्च लीन पाउछ. षान लाउन नदि लोग्न्याले नीकाल्याका एस्ता स्वास्नी. अर्कासित वीग्न्या जार काटन हुदैन. काटचा ज्यानको वदला ज्यान हुंन्छ स्वास्नि मानिस्ले एति विधि गऱ्याको आफुले जाहेर गरेन. अर्केवाट जाहेर भयो भन्या. अदालत ठाना अमालवाट ति लोग्न्या स्वास्नी दुवैलाइ. भिकि पुर्पक्ष गर्दा करणि ठहऱ्या उसै जातका करणिका अैन वमोजिं सजाय गर्नु. करणि नठहऱ्या. २५ रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन बमोजिम कैद गर्नु. फलानी स्वास्नीले मलाइ यो कुरो गरि. भन्न आयो. रोवकार गर्दा स्वास्नीले भन्याको ठहरेन. र. लोग्न्याले मात्र पोल्याको ठहऱ्यो भन्या २५ रूपैया दंड गर्नु.

१४. मासिन्या जातमा पानी चलन्या जात गैह्र. का सधवा वीधवा कंन्याले पानी नचलन्या र. छोया छीटो हालनु. पर्न्या जातका लोग्न्या मानीसलाइ. उस्ले हास् ष्याल् ठट्टा वात् केहि नगरि.

हिडचाका वस्याका सुत्याका वेलामा. धोती लिंग समाइछ. चुम्मन् गरिछ. अगालो हालिछ र. फलानी स्वास्नीले मलाइ यसो गरी भनी ७ दिन भीत्रमा. अदालत ठाना अमाल. गाउ घरमा आइ आफैले जाहेर गऱ्यो भन्या. तेस् लोग्न्यालाइ. स्वास्नीका वारीस वालाले षत लाउन पाउदैन. अदालत ठाना अमालबाट पनि दंड कैद सजाय हुदैन. अर्काका लोग्न्यालाइ एती वीधि गर्न्या स्वास्नीका हातको भात पानी चल्दैन. जौना जातका लोग्न्यालाइ एति वीधि गऱ्याको छ. उसै जातको १ अक्षर वात्रा गालामा षोदि. भात पानी वाहेक् गरि. उसै जात्मा मिलाइ छाडी दिनु. एस्ता स्वास्निको वीवाहिता लोग्न्याले करणि गऱ्यो भन्या र अरुले पनि जानी जानी करणि गरेछन् भन्या उन्लाइ पनी पतीया नदिनु. उसै जातमा मिलाइ दिनु. आफुलाइ. अर्काकास्वास्नीले एतिविधि गऱ्याको आफुले जाहेर गरेन. अर्कैवाट जाहेर भयो भन्या. अदालत ठाना अमालवाट ति लोग्न्या स्वास्नी दुवैलाई झिकि पुर्पक्ष गर्दा. करणि भयाको ठहऱ्या. उसै जातका करणिका अैन वमोजिंम्सजाय गर्नु. करणि नठहऱ्या. पानी नचलन्या लोग्न्या मानीस्मा. छिटो हालनु नपर्न्या जातकालाइ. ७५ रूपैया. छोया छिटो हालनु पर्न्या जातकालाइ. ८० रूपैत्रा दंड गर्नु फलानी स्वास्नीले मलाइ यो कुरो गरि. भन्न आयो रोवकार गर्दा स्वास्नीले भन्याको ठहरेन र. लोग्न्याले पोल्याको मात्र ठहऱ्यो भन्या ८० रूपैया दंड गर्नु.

१५. पानी नचलन्या छोया छिटो हालनु नपर्न्या जातका सधवा विधवा कंन्या स्वास्नि मानिस्ले उपाध्या लगायेत् तागाधारि जात नमासिन्या मासिन्या मतुवालि जात गैह्रका लोग्न्या मानिस्लाइ उसले हासष्याल ठट्टा वात केहि नगरि हिडचाका वस्याका सुत्याका वेलामा धोति लिंग समाइछ चुम्वन गरिछ. अगालो हालिछ र. फलानि स्वास्निले मलाइ यसो गरी भनि ७ दिनभित्रमा अदालत अमाल गाउ घरमा आइ आफैले जाहेर गऱ्यो भन्या. तेस लोग्न्यालाइ स्वास्निका वारिसवालाले षत लाउन पाउदैन. अदालत अमालबाट पनि दंड कैद सजाय गर्न हुदैन. अर्काका लोग्न्यालाइ यतिविधि गर्न्या स्वास्नि विवाहिता लोग्न्याले षान लाउन दि राष्याका अर्कासित पोइल गया भन्या.साधुले अैन वमोजिम् जार काटन्या जातले जार काटन विहा षर्च लिन्या जातले विहा षर्च लिन पाउछ. षान लाउन नदि लोग्न्याले निकाल्याका एस्ता स्वास्नि अर्कासित पोइल गया भन्या जार काटन विहा षर्च लिन पाउदैन जार काटचो भन्या. ज्यानको वदला ज्यान्. स्वास्नि मानिस्ले एतिविधि गऱ्याको लोग्न्याले जाहेर गरेन अर्कैवाट जाहेर भयो भन्या अदालत अमाल वाट ति लोग्न्या स्वास्नि दुवैलाई झिकि पुर्पक्ष गर्दा करणि भयाको ठहऱ्यो भन्या. उसै जातका करणिका अैन वमोजिम् सजाय गर्नु. करणि ठहरेन भन्या.

लोग्न्यालाइ ७५ रूपैञा दंड गर्नु जात जादैन फलानि् स्वास्निले मलाइ यसो गरि भंन आयो रोवकार गर्दा स्वास्निले भन्याको ठहरेन लोग्न्याले पोल्याको मात्र ठहर्‍यो भन्या ७५ रूपैया दंड गर्नु.

१६. पानि नचलन्या छोया छिटो हालनु नपर्न्या जातका सधवा विधवा कंन्या स्वास्नि मानिसले पानि नचलन्या र. छोया छिटो हालनु पर्न्या जातका लोग्न्या मानिसलाइ उसले हास ष्याल ठट्टा वात केहि नगरि हिडचाका वस्याका सुत्याका वेलामा धोति लिंग समाइछ चुम्वन गरिछ अगालो हालिछ र फलानि स्वास्निले मलाइ यसो गरी भनि ७ दिनभित्रमा अदालत अमाल गाउ घरमा आइ आफैले जाहेर गर्‍यो भन्या तेस् लोग्न्यालाइ स्वास्निका वारिस वालाले षत लाउन पाउदैन अदालत अमालबाट दंड कैद सजाय गर्न हुदैन अर्काका लोग्न्यालाइ एतिविधि गर्न्या स्वास्नि काहात्को भात चल्दैन पानि मात्र चल्छ यस्ता स्वास्नि विवाहिता लोग्न्याले षान लाउन दि राष्याका स्वास्नि अर्कासित पोइल गया भन्या साधुले अैन वमोजिम् जार काटन्या जातले जार काटन पाउछ. विहा षर्च लिन्या जातले विहा षर्च लिन पाउछ. षान लाउन नदि लोग्न्याले निकाल्याका एस्ता स्वास्नि अर्कासित पोइल गया भन्या. जार काटन विहा षर्च लिन पाउदैन. काटचो भन्या ज्यानको वदला ज्यान्. स्वास्नि मानिसले येति विधि गर्‍याको लोग्न्याले जाहेर गरेन अर्कैवाट जाहेर भयो भन्या अदालत अमालवाट ति लोग्न्या स्वास्नि दुवैलाई झिकि पुर्पक्ष गर्दा. करणि भयाको ठहर्‍यो भन्या उसै जातका करणिका अैन वमोजिम् सजाय गर्नु. करणि भयाको ठहरेन भन्या. लोग्न्यालाइ २२॥ रूपैया दंड गर्नु. जात जादैन. फलानि स्वास्निले मलाइ यो कुरो गरि भंन आयो रोवकार गर्दा स्वास्निले भन्याको ठहरेन र लोग्न्याले पोल्याको मात्र ठहर्‍यो भन्या २२॥ रूपैया दंड गर्नु.

१७. छिटो हालनु पर्न्या जातका सधवा विधवा कंन्या स्वास्नि मानिसले उपाध्या लगायेत् तागाधारि जात नमासिन्या मासिन्या मतुवालि जात गैह्रका लोग्न्या मानिसलाइ उसले हास ष्याल ठट्टा वात केहि नगरि हिडचाका वस्याका सुत्याका वेलामा धोति लिंग समाइछ चुम्वन गरिछ अगालो हालिछ र. फलानि स्वास्निले मलाइ यसो गरी भनि ७ दिनभित्रमा अदालत अमाल गाउ घर्मा आइ आफैले जाहेर गर्‍यो भन्या. तेस् लोग्न्यालाइ स्वास्निका वारिस वालाले षत लाउन पाउदैन. अदालत अमाल बाट पनि दंड कैद सजाय गर्न हुदैन. अर्काका लोग्न्यालाइ एतिविधि गर्न्या स्वास्नि विवाहिता लोग्न्याले षान दि राष्याका अर्कासित पोइल गया भन्या.

साधुले अैन वमोजिम् जार काटन्या जातले जार काटन पाउछ.. विहा षर्च लिन्या जातले विहा षर्च लिन पाउछ.. षान लाउन नदि लोग्न्याले निकाल्याका स्वास्नि अर्का सित पोइल गयाभन्या. जार काटन विहा षर्च लिन पाउदैन. जार काट्यो भन्या. ज्यानको वदला ज्यान् स्वास्नि मानिसले एतिविधि गऱ्याको लोग्न्याले जाहेर गरेन अर्कैवाट जाहेर भयो भन्या अदालत अमाल वाट ति लोग्न्या स्वास्नि दुवैलाई झिकि पुर्पक्ष गर्दा करणि भयाको ठहऱ्यो भन्या उसै जातका करणिका अैन वमोजिम् सजाय गर्नु. करणि भयाको ठहरेन भन्या. लोग्न्यालाइ ८० रूपैया दंड गर्नु. जात जादैन. फलानि स्वास्निले मलाइ यो कुरो गरि भंन आयो रोवकार गर्दा स्वास्निले भन्याको ठहरेन लोग्न्याले पोल्याको मात्र ठहऱ्या ८० रूपैया दंड गर्नु.

१८. छिटो हालनु पर्न्या जातका सधवा विधवा कंन्या स्वास्निमानिसले पानि नचलन्या र छिटो हालनु पर्न्या जातका लोग्न्या मानिसलाइ उसले हास ष्याल ठट्टा वात केहि नगरि हिडच्याका वस्याका सुत्याका वेलामा धोति लिंग समाइछ चुम्वन गरिछ अगालो हालिछ र. फलानि स्वास्निले मलाइ यसो गरी भनि ७ दिनभित्रमा अदालत अमाल गाउ घरमा आइ आफैले जाहेर गऱ्यो भन्या. तेस्ता लोग्न्यालाइ स्वास्निका वारिस वालाले षत लाउन पाउदैन अदालत अमालबाट पनि दंड कैद सजाय गर्न हुदैन. र एति विधि गर्न्या स्वास्नि विवाहिता लोग्न्याले षान लाउन दि राष्याका स्वास्नि अर्कासित पोइल गया भन्या. साधुले अैन वमोजिम् जार काटन्या जातले जार काटन पाउछ. विहा षर्च लिन्या जातले विहा षर्च लिन पाउछ. षान लाउन नदि लोग्न्याले निकाल्याका स्वास्नि अर्कासित पोइल गया भन्या. जार काटन विहा षर्च लिन पाउदैन. जार काट्यो भन्या ज्यानको वदला ज्यान्. स्वास्नि मानिसले येतिविधि गऱ्याको लोग्न्याले जाहेर गरेन अर्कैवाट जाहेर भयो भन्या. अदालत अमालवाट ति लोग्न्या स्वास्नि दुवैलाई झिकि पुर्पक्ष गर्दा. करणि भयाको ठहऱ्यो भन्या. उसै जात्का करणिका अैन वमोजिम् सजाय गर्नु. करणि भयाको ठहरेन भन्या. छिटो हालनु नपर्न्या जातका लोग्न्यालाइ ३० रूपैया छिटो हालनु पर्न्या जातका लोग्न्यालाइ २१॥. रुपैया दंड गर्नु. जात जादैन. फलानि स्वास्निले मलाइ यो कुरो गरि भंन आयो रोवकार गर्दा स्वास्निले भन्याको ठहरेन र लोग्न्याले पोल्याको मात्र ठहऱ्यो भन्या ३० रुपैया छिटो हालनु पर्न्या जातलाइ २१॥ रूपैया दंड गर्नु.

१९. उपाध्या ब्राम्हणले उपाध्या ब्राम्हणका सधवा विधवा कंन्यालाइ आफ्ना मुषले करणि दे भनि फकायेंछ स्वास्निले मुषले करणि दिंछुभनयाकि हवस् वा करणि दिंछु भन्याकि नहवस्. तेस्तैमा

जाहेर भयो करणि भन्या हुन पायाको रहेनछ मुष पतित संममा कायेल भया भन्या. करणि दे भंन्या लोग्न्यालाइ ३० रुपैया दंड गर्नु. लोग्न्याको जात जादैन. स्वास्निले करणि दिंछु भन्याकि रहिछ भन्या. स्वास्निका हातको भात चल्दैन. पानि मात्र चल्छ एस्ता स्वास्नि विवाहिता लोग्न्याले षान लाउन दि राष्याका स्वास्नि अर्कासित पोइल गया भन्या अैन वमोजिम् जार काटन मुडन विहा षर्च लिन पाउछ. मुष पतित भयाका एस्ता स्वास्नि राषतिन भनि षान लाउन नदि निकाल्याका स्वास्नि अर्कासित विग्न्या भन्या जार काटन मुडन विहा षर्च लिन पाउदैन. जार काटचा अैन वमोजिम् सर्वस्व गरि दामल गर्नु लोग्न्याले करणि दे भंदा स्वास्निले करणि दिंछु भन्याकि रहिनछ भन्या र. आफैले जाहेर गर्न आइ भन्या स्वास्निका हातको भात चल्छ जातैमा रहंछे.

२०. तागाधारि जात गैह्रले उपाध्या व्राम्हणका सधवा विधवा कंन्यालाइ मुषले करणि दे भनि फकायेछ स्वास्निले मुषलेकरणि दिंछु भन्याकि हवस् वा. करणि दिंछु भन्याकि नहवस् तेस्तैमा जाहेर भन्यो करणि भन्या हुन पायाको रहेनछ मुष पतित संम्ममा कायेल भया भन्या. करणि दे भंन्या लोग्न्यालाइ ४० रुपैया दंड गर्नु. लोग्न्याको जात जादैन. स्वास्निले करणि दिंछु भन्याकि रहिछ भन्या स्वास्निका हातको भात चल्दैन. पानी मात्र चल्छ. एस्ता विवाहिता लोग्न्याले षान लाउन दि राष्याका स्वास्नि अर्कासित पोइल गया भन्या. अैन वमोजिम् जार काटन मुडनु विहा षर्च लिन पाउछ मुष पतित भयाका एस्ता स्वास्नि राषतीन भनी. षान लाउन नदि निकाल्याका स्वास्नि अर्कासित विग्न्या भन्या जार काटन विहा षर्च लिन मुडन पाउदैन. जार काटया अैन वमोजिम् सर्वस्व गरि दामल गर्नु. लोग्न्याले करणि दे भंदा स्वास्निले करणि दिंछु भन्याकि रहिनछ भन्या र आफैले जाहेर गर्न आइ भन्या. स्वास्निका हातको भात चल्छ. जातैमा रहंछे.

२१. तागा धारि जात गैह्रले उपाध्या व्राम्हणवाहेक तागाधारि जात गैह्रका सधवा विधवा कंन्यालाइ मुषले करणि देभनि फकायेछ स्वास्निले मुषले करणि दिन्छु भन्याकि हवस् वा करणि दिंछु भन्याकि नहवस् तेस्तैमा जाहेर भयो करणि हुन पायाको रहेनछ मुष पतित सम्ममा कायेल भयो भन्या करणि दे भंन्या लोग्न्यालाइ ३० रुपैया दंड गर्नु लोग्न्याको जात जादैन. स्वास्निले करणि दिंछु भन्याकि रहिछ भन्या स्वास्निका हातको भात चल्दैन पानि मात्र चल्छ. एस्ता स्वास्नि विवाहिता लोग्न्याले षान लाउन दि राष्याका स्वास्नि अर्कासित पोइल गया भन्या अैन

वमोजिम जार काटन मुडन विहा षर्च लिनपाउछ मुष पतित् भयाका स्वास्नि राषतिन भनि षानलाउन नदि निकाल्याका स्वास्नि अर्कासित विगऱ्या भन्या. जारकाटन. मुडन विहा षर्च लिन पाउदैन. जार काट्या ज्यानको.वदला ज्यान् लोग्न्या मानिसले करणि दे भंदा स्वास्निले करणि दिंछु भन्याकि रहिनछ भन्या र. आफैले जाहेर गर्न आइ भन्या स्वास्निका हातको भात चल्छ. जातैमा रहंछन्.

२२. तागाधारि जात गैह्रले नमासिन्या मतुवालि जात गैह्रका सधवाविधवाकंन्यालाइ मुषले करणि दे भनि फकायेछ. स्वास्निले मुषले करणि दिंछु भन्याकि हवस् वा करणि दिंछु भन्याकि नहवस्. तेस्तैमा जाहेर भयो करणि भन्या हुन पायाको रहेनछ मुष पतित सम्ममा कायेल भया भन्या. करणि दे भंन्या लोग्न्यालाइ १५ रूपैया दंड गर्नु. लोग्न्याको जात जादैन. स्वास्निले करणि दिंछु भन्याकि रहिछ भन्या. स्वास्निका हातको भात चल्दैन. पानि मात्र चल्छ. एस्ता विवाहिता लोग्न्याले षानलाउन दि राष्याका स्वास्नि अर्कासित पोइल गया भन्या. अैन वमोजिम्. मुडन जारकाटन विहा षर्च लिन पाउछ. मुष पतित भयाका एस्ता स्वास्नि राषतिन भनि षानलाउन नदि निकाल्याका स्वास्नि अर्कासित विगऱ्या भन्या. जारकाटन मुडन विहा षर्च लिन पाउदैन. जार काटचा ज्यानको वदला ज्यान्. लोग्न्याले करणि दे भंदा स्वास्निले करणि दिंछु भन्याकि रहिनछ भन्या र आफैले जाहेर गर्न आइ भन्या स्वास्निका हातको भात चल्छ. जातैमा रहंछे.

२३. तागाधारि जात गैह्रले मासिन्या मतुवालि जात गैह्रका सधवा विधवा कंन्यालाइ मुषले करणि दे भनि फकायेछ स्वास्निले मुषले करणि दिंछु भन्याकि हवस् वा करणि दिंछु भन्याकि नहवस्. तेस्तैमा जाहेर भयो करणि भन्या हुन पायाको रहेनछ मुष पतित सम्ममा कायेल भया भन्या करणि दे भंन्या लोग्न्यालाइ ५ रूपैया दंड गर्नु. लोग्न्याको जात जादैन. स्वास्निले करणि दिंछु भन्याकि रहिछ भन्या. स्वास्निका हातको भात चल्दैन. पानि मात्र चल्छ. एस्ता स्वास्नि विवाहिता लोग्न्याले षान लाउन दि राष्याका स्वास्नि अर्कासित पोइल गया भन्या. अैन वमोजिम् जार हांन्या जातले जार काटन पाउछ विहा षर्च लिन्या जातले विहा षर्च लिन पाउछ.. मुष पतित् भयाका एस्ता स्वास्नि राषतीन भनी षान लाउन नदि निकाल्याका स्वास्नि अर्कासित विग्ऱ्या भन्या. जारकाटन विहा षर्च लिन पाउदैन. जार काटचा ज्यानको वदला ज्यान्. लोग्न्याले करणि दे भंदा स्वास्निले करणि दिंछु भन्याकि रहिनछ भन्या र.आफैले जाहेर गर्न आइ भन्या स्वास्निका हातको भात चल्छ जातैमा रहंछे.

२४. तागाधारि जात गैह्रले पानि नचलन्या छोइ छिटो हालनु नपर्न्या जातका सधवा विधवा कंन्यालाइ मुषले करणि देभनि फकायेछ स्वास्निले मुषले करणि दिंछु भन्याकि हवस् वा करणि दिंछु भन्याकि नहवस्.तेस्तैमा जाहेर भयो करणि भन्या हुनपायाको रहेनछ मुष पतित संम्मा कायेल भया भन्या. करणि दे भंन्या लोग्न्यालाइ १० रुपैया दंड गर्नु. लोग्न्याको जात जादैन. स्वास्निका हातको भात चल्छ.एस्ता विवाहिता लोग्न्याले षान लाउन दि राष्याका स्वास्नि अर्कासित पोइल गया भन्या. अैन वमोजिम् जार हांन्या जातले जार हांन पाउछ. विहा षर्च लिन्या जातले विहा षर्च लिन पाउछ. मुष पतित भयाका एस्ता स्वास्नि राषतीन भनि षान लाउन नदि निकाल्याका स्वास्नि अर्कासित विग्न्या भन्या. जार काटन विहा षर्च लिन पाउदैन. जार काटया ज्यानको वदला ज्यान्.

२५. तागाधारि जात गैह्रले छिटो हालनु पर्न्या जातका सधवा विधवा कंन्यालाइ मुषले करणि दे भनि फकायेछ स्वास्निले मुषले करणि दिंछु भन्याकि हवस् वा करणि दिंछु भन्याकि नहवस्. तेस्तैमा जाहेर भयो करणि भन्या हुन पायाको रहेनछ मुष पतित सम्ममा कायेल भयो भन्या करणि दे भंन्या लोग्न्यालाइ ६० रुपैया दंड गर्नु. जात जादैन. पतिया पर्दैन स्वास्निका हातको भात चल्छ. एस्ता विवाहिता लोग्न्याले षान लाउन दि राष्याका स्वास्नि अर्कासित पोइल गया भन्या. जार हांन्या जातले जातर हांन पाउछ. विहा षर्च लिन्या जातले विहा षर्च लिन पाउछ. मुषपतित् भयाका एस्ता स्वास्नि राषतीन भनि षान लाउन नदि निकाल्याका स्वास्नि अर्कासित पोइल गया भन्या जार काटन विहा षर्च लिन पाउदैन. जार काटया ज्यानको वदला ज्यान्.

२६. नमासिन्या मतुवालि जात गैह्रले.उपाध्या लगायेत् तागाधारि जात गैह्रका सधवा विधवा कंन्यालाइ मुषले करणि दे भनि फकायेछ स्वास्निले मुषले करणि दिंछु भन्याकि हवस् वा करणि दिंछु भन्याकि नहवस्. तेस्तैमा जाहेर भयो करणि भन्या हुन पायाको रहेनछ मुष पतित सम्ममा कायेल भया भन्या. करणि दे भंन्या लोग्न्यालाइ ४५ रुपैया दंड गर्नु. लोग्न्याको जात जादैन. स्वास्निले करणि दिंछु भन्याकि रहिछ भन्या स्वास्निका हातको भात चल्दैन. पानि मात्र चल्छ एस्ता विवाहिता लोग्न्याले षान लाउन दि राष्याका स्वास्नि अर्कासित पोइल गया भन्या अैन वमोजिम्. जार काटन मुडन विहा षर्च लिन पाउछ. मुष पतित भयाका एस्ता स्वास्नि

राषतीन भनि षान लाउन नदि निकाल्याका स्वास्नि अर्कासित विग्र्या भन्या. जार काटन मुडन विहा षर्च लिन पाउदैन जार काटया ज्यानको वदला ज्यान् लोग्न्याले करणि दे भंदा स्वास्निले करणि दिंछु भन्याकि रहिनछ भन्या र. आफैले जाहेर गर्न आइ भन्या स्वास्निका हातको भात चल्छ. जातैमा रहंछे.

२७. नमासिन्या मतुवाली जात गैह्रले नमासिन्यै मतवाली जात गैह्रका सधवा वीधवा कंन्यालाइ करणि दे भनि फकायेछ. स्वास्निले करणि दिंछु भन्याकी हवस्. वा. करणि दिंछु भन्याकी नहवस्. तेस्तैमा जाहेर्भयो करणि भन्या हुनपायाको रहेनछ. मुष पतीतसम्ममा कायेम भया भन्या. करणि दे भंन्या लोग्न्यालाइ २५ रुपैञा दंड गर्नु. जात जादैन. स्वास्नीले करणि दिंन्छु भन्याकी रहिछ भन्या. स्वास्नीका हातको भात चल्दैन. पानी मात्र चल्छ. एस्ता विवाहिता लोग्न्याले षान लाउन दि राष्याका. स्वास्नि अर्कासित पोइल गया भन्या. अैन वमोजिम्वीहाषर्च लिन जार काटन पाउछ. मुष पतीत. भयाका एस्ता स्वास्नि राषतिन भनी. षान लाउन नदि लोग्न्याले निकाल्याका. स्वास्नि अर्कासित विग्र्या भन्या. जार काटन वीहा षर्च लीन पाउदैन. जार काटया ज्यानको वदला ज्यान्. लोग्न्याले करणि दे भन्दा. स्वास्नीले करणि दिन्छु भन्याकी रहिनछ भन्या र. आफैले जाहेर गर्न आइ भन्या. स्वास्नीका हातको भात चल्छ. जातैमा रहन्छे.

२८. नमासिन्या मतुवाली जात गैह्रले. मासिन्या जातका सधवा वीधवा कंन्यालाइ करणि दे भनी फकाएछ. स्वास्नीले करणी दिन्छु भन्याकी हवस् वा. करणि दिन्छु भन्याकी नहवस् तेस्तैमा जाहेर्भयो करणि भन्या हुन पायाको रहेनछ. मुष पतीत सम्ममा कायेल् भया भन्या. करणि दे भन्या लोग्न्यालाइ ५ रुपैञा दंड गर्नु. स्वास्निका हात्को भात चल्छ. एस्ता वीवाहीता लोग्न्याले. षान लाउन दि राष्याका स्वास्नी अर्कासित पोइल गया भन्या. अैन वमोजिम् जार काटन्या जातले जार काटन पाउछ. विहा षर्च लीन्या जातले विहा षर्च लिन पाउछ. मुष पतीत भयाका एस्ता स्वास्नि राषतिन भनी षान लाउन नदि नीकाल्याका स्वास्नी अर्कासित वीग्र्या भन्या. जार काटन वीहा षर्च लीन पाउदैन. जार काटया ज्यानको वदला ज्यान्.

२९. नमासिन्या मतुवाली जात गैह्रले. पानी नचलन्या छिटो हालनु नपर्न्या जात गैह्रका सधवा विधवा कंन्यालाइ करणि दे भनी फकायेछ. स्वास्नीले करणि दिन्छु भन्याकी हवस् वा. करणि

दिन्छु भन्याकी नहवस्. तेस्तैमा जाहेर भयो करणि भन्या हुन पायाको रहेनछ. मुष पतीतसम्ममा कायेल्भया भन्या करणि दे भंन्या लोग्न्यालाइ १० रुपैञा दंड गर्नु स्वास्नीका हातको भात चल्छ. एस्ता विवाहीता लोग्न्याले षान लाउन दि राष्याका स्वास्नी अर्कासित पोइल गया भन्या. अैन वमोजिं जार काटन्या जातले जार काटन पाउछ. विहा षर्च लिन्या जातले विहा षर्च लिन पाउछ. मुष पतित भयाका एस्ता स्वास्नी राषतीन भनी षान लाउन नदि. निकाल्याका स्वास्नी. अर्कासित वीग्न्या भन्या. जार काटन वीहा षर्च लिन पाउदैन. जार काटया ज्यानको वदला ज्यान्.

३०. नमासिन्या मतुवालि जात गैह्रले. छिटो हालनु पर्न्या जात गैह्रका सधवा विधवा कंन्यालाइ मुषले करणि दे भनी फकायेछ स्वास्नीले. मुषले करणि दीन्छु भन्याकी हवस्. वा. करणि दिन्छु भन्याकी नहवस्. तेस्तैमा जाहेर भयो करणि भन्या हुन पायाको रहेनछ. मुष पतीतसम्ममा काएल भया भन्या. करणि दे भंन्या लोग्न्यालाइ २० रुपैञा दंड गर्नु. लोग्न्याको जात जादैन. पतीया पर्दैन. एस्ता विवाहिता लोग्न्याले षान लाउन दी राष्याका स्वास्नी अर्कासित पोइल गया भन्या. अैन वमोजिं जार काट्न्या जातले जार काटन पाउछ. विहा षर्च लिन्या जातले विहा षर्च लीन पाउछ. मुष पतित् भयाका एस्ता स्वास्नी राषतीन भनी षान लाउन नदि निकाल्याका स्वास्नी अर्का सित वीग्न्या भन्या. जार काटन वीहा षर्च लिन पाउदैन. जार काट्या ज्यानको वदला ज्यान्.

३१. मासिन्या मतुवाली जात गैह्रले उपाध्या लगायेत् तागाधारि जार र नमासिन्या मतुवाली जात गैह्रका सधवा वीधवा कंन्यालाइ मुषले करणि दे भनी फकाए छ. स्वास्निले मुषले करणि दिन्छु भन्याकी हवस्. वा. करणि दीन्छु भन्याकी नहवस् तेस्तैमा जाहेर्भयो करणि भन्या हुनपायाको रहेनछ. मुष पतीतसम्ममा कायेल्भयो भन्या. करणि दे भंन्ये लोग्न्यालाइ ५० रुपैञा दंड गर्नु. लोग्न्याको जात जादैन. स्वास्निले करणि दिंन्छु भन्याकी रहिछ भन्या स्वास्नीका हातको भात चल्दैन पानी मात्र चल्छ यस्ता विवाहिता लोग्न्याले षान लाउन दि राष्याका स्वास्नि. अर्कासित पोइल गया भन्या. अैन वमोजिम् जार काटन मुडन. विहा षर्च लिन पाउछ. मुष पतीत भयाका एस्ता स्वास्नी राषतिन. भनि षान लाउन नदी. निकाल्याका स्वास्नी अर्कासित वीग्न्या भन्या जार काटन मुडन. विहा षर्च लिन पाउदैन. जार काटे ज्यानको वदला ज्यान्.

लोग्न्याले करणि दे भन्दा स्वास्नीले करणि दिन्छु भन्याकी रहिनछ र आफैले जाहेर गर्न आइ भन्या. स्वास्नीका हातको भात चल्छ. जातमा रहन्छे.

३२. मासिन्या मतुवाली जात गैह्रले मासिन्या मतुवाली जातैका सधवा वीधवा कंन्यालाइ मुषले करणि दे भनी फकाएछ. स्वास्नीले मुषले करणि दिन्छु भन्याकी हवस् वा. करणि दिन्छु भन्याकी नहवस्. तेस्तैमा जाहेर भयो करणि भन्या हुन पायाको रहेनछ मुष पतीतसम्ममा काएल् भयो भन्या करणि दे भंन्या लोग्न्यालाइ. ५ रुपैञा दंड गर्नु. स्वास्निका हातको भात चल्छ. एस्ता वीवाहिता लोग्न्याले षान लाउन दि राष्याका स्वास्नी अर्कासित पोइल गया भन्या. अैन वमोजिं जार काटन्या जातले जार काट्न पाउछ. विहा षर्च लिन्या जातले वीहा षर्च लिन पाउछ. मुष पतीत भयाकी स्वास्नी राषतीन भनी षान लाउन नदि निकाल्याका स्वास्नि अर्कासित विग्र्या. जार काटन  वीहा षर्च लिन पाउदैनन्. जार काटचा ज्यानको वदला ज्यान्.

३३. मासिन्या मतुवाली जात गैह्रले पानी नचलन्या छिटो हालनु नपर्न्या जात गैह्रका सधवा विधवा कंन्या. लाइ मुषले. करणि दे भनी फकाएछ. स्वास्निले मुषले करणि दिन्छु भन्याकी हवस् वा. करणि दिन्छु भन्याकी नहवस्. तेस्तैमा जाहेर भयो करणि भन्या हुन पायाको रहेनछ. मुष पतितसम्ममा कायेल्भयो भन्या. करणि दे भन्या लोग्न्यालाइ ५ रुपैञा दंड गर्नु. स्वास्निका हातको भात चल्छ. एस्ता वीवाहिता लोग्न्याले षान लाउन दि राष्याका स्वास्नी अर्कासित पोइल गया भन्या अैन वमोजिम्. जार काटन्या जातले जार काट्न पाउछ. विहा षर्च लिन्या जातले वीहा षर्च लिन पाउछ.. मुषपतीत भयाका एस्ता स्वास्नी राषतीन भनी षान लाउन नदि निकाल्याका स्वास्नी अर्कासित वीग्र्या भन्या. जार काटन  वीहा षर्च लीन पाउदैन. जार काटचा ज्यानको वदला ज्यान्.

३४. मासिन्या मतुवाली जात गैह्रले छिटो हालनु पर्न्या जात गैह्रका सधवा विधवा कंन्यालाइ मुषले करणि दे भनी फकायेछ स्वास्निले मुषले करणि दिंछु भन्याकि हवस् वा. करणि दिंछु भन्याकि नहवस्. तेस्तैमा जाहेर भयो करणि भन्या हुन पायाको रहेनछ मुष पतितसम्ममा कायल भया भन्या करणि दे भंन्या लोग्न्यालाइ १० रुपैया दंड गर्नु. लोग्न्याको जात जादैन. पतीया पर्दैन एस्ता विवाहिता लोग्न्याले षान लाउन दि राष्याका स्वास्नि अर्कासित पोइल गया भन्या अैन

वमोजिम् जार काटन्या जातले जार काटन पाउछ. विहा षर्च लिन्या जातले विहा षर्च लिन पाउछ. मुष पतित भयाका एस्ता स्वास्नि राषतीन भनि षान लाउन नदि निकाल्याका स्वास्नि अर्कासित विग्र्या भन्या जार काटन विहा षर्च लिन पाउदैन. जार काटया ज्यानको वदला ज्यान्.

३५. छिटो हालनु नपर्न्या पानि नचलन्या जात गैह्रले उपाध्या लगायेत् तागाधारि नमासिन्या मतुवालि जात गैह्रका सधवा विधवा कंन्यालाइ मुषले करणि दे भनि फकायेछ स्वास्निले मुषले करणि दिंन्छु भन्याकि हवस् वा करणि दिन्छु भन्याकि नहवस् तेस्तैमा जाहेर भयो करणि भन्या हुन पायाको रहेनछ मुष पतितसंम्ममा कायेल भया भन्या करणि दे भंन्या लोग्न्यालाइ ५५ रुपैया दंड गर्नु. लोग्न्याको जात जादैन. स्वास्निले करणि दिंन्छु भन्याकि रहिछ भन्या. स्वास्निका हातको भात चल्दैन. पानि मात्र चल्छ. एस्ता विवाहिता लोग्न्याले षान लाउन दि राष्याका स्वास्नि अर्कासित पोइल गया भन्या. अैन वमोजिम् जार काटन मुडन विहा षर्च लिन पाउछ मुष पतित भयाका एस्ता स्वास्नि राषतिन भनि षान लाउन नदि निकाल्याका स्वास्नि अर्कासित विग्र्या भन्या. जार काटन मुडन विहा षर्च लिन पाउदैन जार काटया ज्यानको वदला ज्यान्. लोग्न्याले करणि दे भंन्या स्वास्निले करणि दिंन्छु भन्याकि रहिनछ भन्या र आफैले जाहेर गर्न आइ भन्या स्वास्निका हातको भात चल्छ जातैमा रहंछे.

३६. छिटो हालनु नपर्न्या पानि नचलन्या जात गैह्रले छिटो हालनु नपर्न्या पानि नचलन्या जात गैह्रका सधवा विधवा कंन्यालाइ मुषले करणि दे भनि फकायेछ स्वास्निलेमुषले करणि दिंछु भन्याकि हवस् वा करणि दिंछु भन्याकि नहवस् तेस्तैमा जाहेर भयो करणि भन्या हुन पायाको रहेनछ मुष पतित सम्ममा कायेल भया भन्या. करणि दे भंन्या लोग्न्यालाइ २॥. रुपैया दंड गर्नु. स्वास्निका हातको भात चल्छ. एस्ता विवाहिता लोग्न्याले षान लाउन दि राष्याका स्वास्नि अर्कासित पोइल गया भन्या. अैन वमोजिम् जार काटन्या जातले जार काटन पाउछ विहा षर्च लिन्या जातले विहा षर्च लिन पाउछ. मुष पतित भयाका एस्ता. स्वास्नि राषतिन भनि षान लाउन नदि निकाल्याका स्वास्नि अर्कासित विग्र्या भन्या जार काटन विहा षर्च लिन पाउदैन जार काटया ज्यानको वदला ज्यान्.

३७. छिटो हालनु नपर्न्या पानि नचलन्या जात गैह्रले छिटो हालनु पर्न्या जात गैह्रका सधवा विधवा कंन्यालाइ मुषले करणि दे भनि फकायेछ स्वास्निले मुषले करणि दिंछु भन्याकि हवस् वा करणि दिंछु भन्याकि नहवस्. तेस्तैमा जाहेर भयो करणि भन्या. हुन पायाको रहेनछ मुष पतितसम्ममा कायेल भया भन्या. करणि दे भंन्या लोग्न्यालाइ २॥ रुपैया दंड गर्नु. स्वास्निका हातको भात चल्छ.. एस्ता विवाहिता लोग्न्याले षान लाउन दि राष्याका स्वास्नि अर्कासित पोइल गया भन्या. अैन वमोजिम् जार काटन्या जातले जार काटन पाउछ विहा षर्च लिन्या जातले विहा षर्च लिन पाउछ. मुष पतित भयाका एस्ता स्वास्नि राषतिन भनि षान लाउन नदि निकाल्याका स्वास्नि अर्का सित वीग्र्या भन्या जार काटन विहा षर्च लिन पाउदैन जार काटया ज्यानको वदला ज्यान्.

३८. छिटो हालनु पर्न्या जात गैह्रले उपाध्या लगायेत तागाधारि जात र. नमासिन्या मतुवालि मासिन्या मतुवालि जात गैह्रका. सधवा विधवा कंन्यालाइ मुषले करणि देभनि फकायेछ स्वास्निले मुषले करणि दिंछु भन्याकि हवस् वा करणि दिंछु भन्याकि नहवस्. तेस्तैमा जाहेर भयो करणि भन्या हुनपायाको रहेनछ मुष पतित सम्ममा कायेल भया भन्या करणि दे भंन्या लोग्न्यालाइ ६० रूपैया दंड गर्नु. स्वास्निले करणि दिंछु भन्याकि रहिछ भन्या. स्वास्निका हातकोभात चल्दैन पानि मात्र चल्छ. एस्ता विवाहिता लोग्न्याले षान लाउन दि राष्याका स्वास्नि अर्कासित पोइल गया भन्या. अैन वमोजिम्. जार काटन्या जातले जार काटन मुडन विहा षर्च लिन पाउछ. मुष पतित भयाका एस्ता स्वास्नि राषतिन भनि षान लाउन नदि निकाल्याका स्वास्नि अर्कासित विग्र्या भन्या. जार काटन मुडन विहा षर्च लिन पाउदैन जार काट्या ज्यानको वदला ज्यान् लोग्न्याले करणि  देभंदा स्वास्निले करणि दिंछु भन्याकि रहिनछ भन्या र आफुले जाहेर गर्न आइ भन्या स्वास्निका हातको भात चल्छ. जातैमा रहंछे.

३९. छिटो हालनु पर्न्या जात गैह्रले छिटो हालनु नपर्न्या पानि नचलन्या जात गैह्रका सधवा विधवा कंन्या लाइ मुषले करणी दे भनि फकायेछ स्वास्नीले मुषले करणि दिंछु भन्याकि हवस् वा करणि दिंछु भन्याकि नहोवस्. तेस्तैमा जाहेर भयो करणि भन्या हुन पायाको रहेनछ. मुष पतित सम्ममा कायेल भया भन्या. करणि देभंन्या लोग्न्यालाइ १० रूपैया दंड गर्नु. स्वास्निले करणि दिंछु भन्याकि रहिनछ भन्या भात षानु नषानु. भताहाको षुसि एस्ता विवाहिता लोग्न्याले षान लाउनदि राष्याका स्वास्नि अर्कासित विगऱ्या भन्या अैनवमोजिम् जार काटन्या

जातले  जार काटन पाउछ विहा षर्च लिन्या जातले विहाषर्च लिन पाउछ. मुष पतित भयाका एस्ता स्वास्नि राषतिन भनि षान लाउन नदि निकाल्याका स्वास्नि अर्का सित विगऱ्या भन्या जारकाटन विहा षर्च लिन पाउदैन. जारकाट्या ज्यानको वदला ज्यान्.

४०. छिटो हालनु पर्न्या जात गैह्रले छिटो हालनु पर्न्यै जात गैह्रका सधवा विधवा कंन्यालाइ मुषले करणि देभनि फकायेछ स्वास्निले मुषले करणि दिंछु भन्याकि हवस् वा करणि दिंछु भन्याकि नहवस्. तेस्तैमा जाहेर भयो करणि भन्या हुन पायाको रहेनछ मुष पतित सम्ममा कायेल भया भन्या. करणि दे भंन्या लोग्न्यालाइ १॥ रूपैया दंड गर्नु. स्वास्निका हातको भात चल्छ. एस्ता विवाहिता लोग्न्याले षान लाउन दिराष्याका स्वास्नि अर्कासित पोइल गया भन्या. अैन वमोजिम् जार काटन्या जार काटन पाउछ विहा षर्च लिन्या जातले विहा षर्च लिन पाउछ. मुष पतित भयाका एस्ता स्वास्नि राषतिन भनी षानलाउन नदि निकाल्याका स्वास्नि अर्कासित विगऱ्या भन्या जार काटन विहा षर्च लिन पाउदैन. जार काट्या ज्यानको वदला ज्यान्.

# उपाध्याको हाडनाता

## आफ्ना हाडनाता करणि गर्न्या उपाध्या लगायेत् ब्राम्हण जातको

## तपसिल

१. आफुलाइ जन्माउन्या आमा आफ्ना एका वावुवाट जन्म्याका दिदि वैन्हि आफुले जन्म्यायाका छोरिको करणि गर्न्या व्राम्हण जातलाइ अैन वमोजिम्को अंस सर्वस्व गरी दामल गर्नु.

२. आफ्ना हाडमा ७ पुस्ता संमका जन्माउन्या आमा आफ्ना एका वावुवाट जन्म्याका दिदि वैन्हि आफुले जन्मायाका छोरि वाहेक भात षायाका हउन् नषायाका हउन्. अरू सौतिन्या आमा वज्यू भाउज्यू भाई वुहारी छोरा वुहारि नातिन्या वुहारि दिदि वैन्हि छोरि नि नाति फुपु नात पर्न्या सधवा भया पनि विधवा भया पनि कंन्या भया पनि एस्ताको करणि गर्न्या उपाध्या लगायेत् व्राम्हण जातको अैन वमोजिमको अंस सर्वस्व गरि जनै झिकि मुडि नरक वाहेक मदसुगरको मासु षुवाई जात पतित् गरि पुर्वको भया पश्चिम् पश्चिम्को भया पुर्व तर्फ नदि कटाई धपाई दिनु एस्ता का हातको भात चल्दैन भातको पतिया नदिनु भुला चुका परि कसैले पतिया दिया पनि पतियाको कागज झिकि भात वाहेकै गराई दिनु पानि चलछ पानिको मात्र पतिया दिनु एस्ताको नमासिन्या शुद्र जात हुछन.

३. हाडमा ७ पुस्ता देषि माथि. आफु देषि १४ पुस्ता सम्मका ११ वर्ष नाघ्याका कंन्या र विधवाको भात षायाको भया पनि नषायाको भया पनि एस्ताको करणि गर्न्या उपाध्या लगायेत् व्राम्हण जातको राज षत लाग्न्याले अैन वमोजिमको अंस सर्वस्व गरि जनै झिकि जात पतित गरि वस्याका गाउ सहरवाट निकालि दिनु एस्ताको हातको भात चल्दैन पानि चल्छ.

४. हाडमा १४पुस्ता देषि माथिका. आफु देषि २१ पुस्ता सम्मका ११ वर्ष नाघ्याका कंन्या विधवाको भात षायाको हवस् नषायाको हवस् एस्ताको करणि गर्न्या उपाध्या लगायेत् व्राम्हण जातको राजषत लाग्नाले करणि गरि भात स्मेत षाइ अरू लाइ स्मेत वोर्‍याको भया. अैन वमोजिम् अंस सर्वस्व गरि भात वाहेक गरि छाडि दिनु भात षायाको नभया १०० रूपैया दंड

गरि पतिया गराई दिनु रूपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु जात जादैन लोग्न्या स्वास्नि छुटचाइ दिनु.

५. भात षायाका हउन् नषायाका हउन् हाडमा २१ पुस्ता देषि माथिका ११ वर्ष नाघ्याका कंन्या विधवाको उपाध्या लगायेत व्राम्हण जातले करणि गरि. अरूलाइ भात स्मेत वोऱ्याको रहेछ भन्या. १०० रूपैया दंड गरि भात वाहेक गरि दिनु भातमा वोऱ्याको रहेनछ भन्या १०० रूपैया दंड गरि पतिया गराई दिनु रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु जात जादैन लोग्न्या स्वास्नि छुटचाइ दिनु.

६. आफुले जन्मायाका छोरिका छोरि नातीनि र. अैनले जार हाँन हुन्यासंमका नातिन्या वुहारिको करणि गर्न्या उपाध्या लगायेत् व्राम्हण जातको राजषत लाग्नाले अैन वमोजिम् अंस सर्वस्व गरि जनै झिकि मुडि नरक वाहेक् अरू अभक्ष षुवाई जात पतित गरि पुर्वको भया पश्चिम् पश्चिम् भयाको पुर्व तर्फ नदि कटाई धपाई दिनु एस्ताका हातको भात चल्दैन पतिया नदिनु भुला चुका परि कसैले पतिया दिया पनि पतियाको कागज झिकि भात वाहेक् गराई दिनु. एस्ता नमासिन्या शुद्र जात हुछन्. पानि चल्छ पानीकोमात्र पतिया दिनु.

७. भांजा भांजिका नातमा सधवा भया पनि कंन्या विधवा भया पनि आफ्ना वावुवाट जन्म्याका दिदि वैन्हिका छोरि भांजि र भानिजका अैनले जार हाँन हुन्यासम्मका स्वास्नि भांज्यावुहारिको कर गर्न्या उपाध्या लगायेत व्राम्हण जातलाई राज षत लाग्नाले अैन वमोजिम्को. अंस सर्वस्व गरि जनै झिकि मुडि नरक् वाहेक् अरू अभक्ष षुवाई जात पतित गरि पुर्वको भया पश्चिम् पश्चिम्को भया पुर्व तर्फ नदि कटाई धपाई दिनु एस्ताका हातको भात चल्दैन पतिया नदिनु भुलाचुका परी कसैले पतिया पनि पतियाको कागज झिकि भात वाहेकै गराई दिनु एस्ता नमासिन्या शुद्र जात हुन्छन् पानि चल्छ पानिको मात्र पतिया दिनु.

८. मावलि पट्टिका नातामा भात षायाका हउन् नषायाका हउन् आमालाइ जन्माउन्या वज्यू आमाका एका वाज्यावाट जन्म्या वज्यू आमा जन्म्याका एका आतका दिदि वैन्ही सानि ठुली आमा. मामाका जार हांन हुन्या संमका स्वास्नि माइज्यूको करणि गर्न्या उपाध्या लगायेत् व्राम्हण जातलाइ राजषत लाग्नाले अैन वमोजिम्को अंस सर्वस्व गरि जनै झिकि मुडि नरक

वाहेक अरू अभक्ष षुवाइ जात पतित गरि पुर्वको भया पश्चिम् पश्चिम्को भया पुर्व तर्फ नदि कटाई धपाइ दिनु एस्ताका हातको भात चल्दैन पतिया नदिनु भुलाचुका परि कसैले पतिया दिया पनि पतियाको कागज झिकि भात वाहेकै गराई दिनु एस्ता नमासिन्या सुद्र जात हुंछन् पानि चल्छ पानिको मात्र पतिया दिनु.

९. मावलि पट्टीका नातामा आमाका सौतिन्या आमाका छोरी सानि ठुली आमा र आमाकि आमाका एका वावुवाट जन्म्याका छोरि वज्यूहरूको करणि गर्न्या उपाध्या लगायेत् व्राम्हण जातलाई सधवा भया साधुको षुसि साधुले छोडयो भन्या कंन्या विधवा भया राजषत लाग्नाले अैन वमोजिम्को अंस सर्वस्व गरि जनै झिकि जात पतित गरि वस्याका गाउ सहरवाट निकालिदिनु भात चल्दैन पानिमात्र चल्छ पानिको मात्र पतिया दिनु एस्ताको नमासिन्या सुद्र जात हुंछ.

१०. ससुराली पट्टीका नातामा भात षाका हवस् नषायाका हवस् आफ्नि स्वास्निलाई जन्माउन्या सासु ससुराले अैनले जार हाँन हुन्यासम्मका ल्यायाका सधवा सौतिन्या सासु ससुरालाइ र सासुससुरालाई जन्माउन्या वुढि सासु सधवा भया पनि विधवा भया पनि एस्ताको करणि गर्न्या उपाध्या लगायेत् व्राम्हण जातलाई राजषत लाग्नाले अैन वमोजिम्को अंस सर्वस्व गरि मुडी नरक वाहेक अरू अभक्ष षुवाइ जात पतित गरि पुर्वको भया पश्चिम् पश्चिम्को भया पुर्वतर्फ नदि कटाइ धपाई दिनु एस्ताको हातको भात चल्दैन पतिया नदिनु भुलचुका परि कसैले पतिया दिया पनि पतियाको कागज झिकि भात वाहेकै गराइ दिनु एस्ता नमासिन्या सुद्र जात हुछन् पानि चल्छ पानिको मात्र पतिया दिनु.

११. आफुलाइ र अैनले जार हाँन हुन्यासम्मका आफ्नि स्वास्निलाई दिक्षा मंत्र सुनाउन्या गुर्माको र मंत्र सुनाउन्या गुरूका अैनले जार हांन हुन्या सम्मका स्वास्नि गुर्माको करणि गर्न्या औ आफुले दिक्षा मंत्र सुनायाका सिक्षा नि र सिक्षका अैनले जार हांन हुन्यासम्मका स्वास्निको करणि गर्न्या उपाध्या लगायेत व्राम्हण जात गैह्रलाई राजषत लाग्नाले अैन वमोजिम्को अंस सर्वस्व गरि जनै झिकि मुडी नरक वाहेक अरू अभक्ष षुवाई जात पतित् गरी पूर्वको भया पश्चिम पश्चिम्को भया पूर्व तर्फ नदि कटाई धपाईदीनु एस्ताका हातको भात चल्दैन पतिया नदिनु भुला चुका परि कसैले पतिया दिया पनि पतिया को कागज झिकि भात वाहेकै गराई दिनु एस्ता नमासिन्या सुद्र जात हुंछन् पानि चल्छ पानिको मात्र पतिया दिनु.

१२. हाड र राजषत लाग्न्या नातका कसैले आफु तेश्रो परिल्यायाका अैनले जार हाँन हुन्या भात नचलन्या स्वास्निको करणि गर्न्या उपाध्या लगायेत् व्राम्हण जात गैह्रलाई जात भात मिलन्या नहुनाले र जार हांन नहुनाले १ वर्ष कैद गर्नु. जात जादैन करणि गरि आफुले भात षाई भताहालाइ वोऱ्याको नभया १ वर्ष गर्नु. उसै स्वास्निका जातमा मिलाई छाडि दिनु. स्वास्निका हातको भात षाइ भताहालाइ स्मेत् भातमा वोरेछ भन्या अैन वमोजिम्‌को अंस सर्वस्व गरि १ वर्ष कैद गरि विग्र्याकि स्वास्निको जौन जात भयाकोछ उसै जात मिलाइ दिनु म्यादका रूपैया दिया लि छाडि दिनु.

१३. हाड र राजषत लाग्न्या नातका कसैले आफु तेश्रो लिंगदेषि उभो परिल्यायाका भातनचलन्या स्वास्निको करणि गर्न्या उपाध्या लगायेत् व्राम्हण जात गैह्रलाई ६ मैन्हा कैद गरि छाडि दिनु. जात जादैन जाहेर गरि नराष्याका घरमा पनि नल्यायाका स्वास्निको करणि गर्न्यालाइ षतवात लाग्दैन.

१४. राजषतको सजाय लेषियाका हाड नात सनहेमा करणि गर्न्या र गराउन्या लोग्न्या स्वास्निलाइ अैन वमोजिम्‌को सजाय गरि छुटचाइ दिनु छुटचाया पछि पनि करणि गऱ्यो भन्या करणि लोग्न्यालाई ५० करणि गराउन्या स्वास्निलाइ २५ रूपैया दंड गरि छुटचाइ दिनु रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

१५. उपाध्या लगायेत् तागाधारि जात गैह्रले आफ्ना एकावाज्यावाट जन्म्याका जेठा कांछावावुका छोरिका छोरि भांजिहरू र आफ्ना एका वावुवाट जन्म्याका दाज्यू भाइका छोरिका छोरि नातिनिहरूको करणि गरेछ भन्या सधवा भया अैन वमोजिम् साधुको षुसि कंन्या र विधवा भया अैन वमोजिम्‌को अंस सर्वस्व गरि जनै झिकि मुडि रक्सि मद सुगुर्को मासु षुवाइ जात पतित गरि वस्याका गाउ सहरवाट निकालि दिनु एस्ताका हातको भात चल्दैन पानि चल्छ पानिको मात्रै पतिया दिनु एति नात वाहेक् अरू गोतिया भाइहरू का छोरिका छोरिको करणि गरि भातमा वोरेछ भन्या सधवा भया अैन वमोजिम् साधुको षुसि ११ वर्ष नाघ्याका कंन्या विधवा भया नाता नलाग्न्या कुटुँवका कंन्या विधवा को करणि गर्न्यालाइ लेष्याका अैन वमोजिम् सजाय् गर्नु भातमा वोऱ्याको रहेनछ भन्या षतवात लाग्दैन.

# रजपुतको हाडनाता

## आफ्ना हाडनातामा करणि गर्न्या रजपुतजातको

## तपसिल

१. सधवा भया पनि विधवा भया पनि वेस्या भया पनि आफुलाइ जन्माउन्या आमाको करणि गर्न्या रजपूत जातलाई काटि मारि दिनु.

२. आफ्ना एका वावुवाट जन्म्याका दिदि वैन्हि आफुले जन्मायाका छोरिको करणि गर्न्या रजपूत जात गैह्रलाई अैन वमोजिम् अंस सर्वस्व गरि दामल गर्नु.

३. आफ्ना हाडमा ७ पुस्तासम्मका जन्माउन्या आमा आफ्ना वावुवाट जन्म्याका दिदि वैन्ही आफुले जन्मायाका छोरि र भाउज्यू वाहेक् भात षायाका हउन् नषायाका हउन् अरू सौतिन्या आमा वज्यू भाई वुहारी छोरा वुहारि नातिन्या वुहारि दिदि वैन्हि छोरि नातिनि फुपु नाता पर्न्या सधवा भया पनि विधवा भया पनि कंन्या भया पनि एस्ताको करणि गर्न्या रजपूत जातको अैन वमोजिम्को अंस सर्वस्व गरि जनै झिकि मुडी नरक वाहेक् मद सुगुरको मासु षुवाई जात पतित गरि पुर्वको भया पश्चिम् पश्चिम्को भया पुर्व तर्फ नदि कटाई धपाइ दिनु एस्ताका हातको भात चल्दैन पतियानदिनु भुलाचुका परि कसैले पतिया दिया पनि पतियाको कागज झिकि भात वाहेकै गराई दिनु एस्ता नमासिन्या सुद्र जात हुछन् पानि चल्छ पानिको मात्र पतिया दिनु.

४. हाडमा ७ पुस्ता देषि माथि आफु देषि १४ पुस्तासम्मका ११ वर्ष नाघ्याका कंन्या विधवाको भात षायाको भया पनि नषायाको भया पनि एस्ताको करणि गर्न्या रजपूत जातको राजषत लाग्न्याले अैन वमोजिम्को अंस सर्वस्व गरि जनै झिकि जात पतित गरि वस्याका गाउ सहरवाट निकालि दिनु एस्ताको हातको भात चल्दैन पानि चल्छ.

५. हाडमा १४पुस्ता देषि माथि आफु देषि २१ पुस्तासम्मका ११ वर्ष नाघ्याका कंन्या र विधवाको भात षायाको हउन् नषायाको हउन् एस्ताको करणि गर्न्या रजपूत जातको राजषत लाग्नाले करणि गरि भात स्मेत् षाई अरूलाई स्मेत् वोऱ्याको भया अैन वमोजिम् अंस सर्वस्व गरि

भात वाहेक गरि छाडी दिनु. भात षायाको नभया १०० रूपैया दंड गरि पतिया गराई दिनु रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु जात जादैन लोग्न्या स्वास्नि छुटचाइ दिनु.

६. भात षायाका हउन् नषायाका हउन् हाँडमा २१ पुस्ता देषि माथिका ११ वर्ष नाघ्याका कंन्या विधवाको रजपूत जातले करणि गरि अरूलाइ भातमा स्मेत् वोऱ्याको रहेछ भन्या ६० रूपैया दंड गरि भात वाहेक गरिदिनु. भातमा वोऱ्याको रहेनछ भन्या ६० रूपैया दंड गरि पतिया गरि दिनु जात जादैन लोग्न्या स्वास्नि छुटचाइ दिनु.

७. आफुले जन्मायाका छोरिका छोरि नातीनी र अैनले जार हान्न हुन्यासम्मका नातिन्या वुहारिको करणि गर्न्या रजपूतको राजषत लाग्नाले अैन वमोजिम् अंस सर्वस्व गरि जनै झिकि मुडि नरक वाहेक अरू अभक्ष षुवाइ जात पतित गरि पुर्वको भया पश्चिम् पश्चिम्को भया पुर्व तर्फ नदि कटाई धपाइ दिनु. एस्ताका हातको भात चल्दैन पतिया नदिनु भुलाचुका परि कसैले पतिया दिया पनि पतीयाको कागज झिकि भात वाहेकै गराइ दिनु एस्ता नमासिन्या सुद्र जात हुंछन् पानि चल्छ पानिको मात्र पतिया दिनु.

८. भांजा भांजि पट्टिका नातामा सधवा भया पनि कंन्या भया पनि आफ्ना वावुवाट जन्म्याका दिदि वैन्हीका छोरि भांजि र भानिजका जार हान्न हुन्यासम्मका स्वास्नि भांज्या वुहारिको करणि गर्न्या रजपूत लाइ राजषत लाग्नाले अैन वमोजिम्को अंस सर्वस्व गरि जनै झिकि मुडि नरक वाहेक् अरू अभक्ष षुवाइ जात पतित गरि पुर्वको पश्चिम् पश्चिम्को भया पुर्वतर्फ नदि कटाइ धपाइ दिनु एस्ताका हातको भातचल्दैन पतिया नदिनु भुलाचुका परि कसैले पतिया दिया पनि पतियाको कागज झिकि भात वाहेकै गराइ दिनु नमासिन्या सुद्र जात हुंछन् पानि चल्छ पानिको मात्र पतिया दिनु.

९. मावली पट्टिका नातामा भात षाया हउन् नषायाका हउन् आमालाइ जन्माउन्या वज्यू आमाकाएका वाज्यावाट जन्म्याका वज्यू आमाजन्म्याका एका आतका दिदिवैन्ही सानिठुली आमा मामाका जारहान्न हुन्यासम्मका स्वास्नी माइज्यूको करणि गर्न्या रजपूत जातलाइ राजषत लाग्नाले अैन वमोजिम् को अंस सर्वस्वगरि जनै झिकि मुडि नरक वाहेक अरू अभक्ष षुवाइ जातपतित गरि पुर्वको भया पश्चिम् पश्चिम्को भया पुर्वतर्फ नदि कटाइ धपाइ दिनु

एस्ताका हातको भात चल्दैन पतिया नदिनु भुलाचुका परि कसैले पतिया दिया पनि पतियाको कागज झिकि भात वाहेकै गराइ दिनु एस्ता नमासिन्या सुद्र जात हुन्छन् पानि चल्छ पानिको मात्र पतियादिनु.

१०. मावलि पट्टीका नातामा आमाका सौतिन्या आमाका छोरि सानि ठुली आमा र आमाकी आमाका एका वावुवाट जन्म्याका दिदि वैन्हि वज्यूको करणि गर्न्या रजपूतलाइ सधवाभया साधुको षुसि साधुले छोडचो भन्या र कंन्या विधवा भया राजषत लाग्नाले अैन वमोजिम्को अंस सर्वस्व गरि जनै झिकि जात पतित गरि वस्याका गाउ सहरवाट निकालिदिनु. भात चल्दैन पानि चल्छ पानिको मात्र पतिया दिनु एस्ता नमासिन्या सुद्र जात हुन्छन्.

११. रजपूत जात गैह्रले मामाका छोरि र अैनले जार हान्न हुन्यासम्मका मामाका छोरा वुहारिको षुसि राजिले करणि गर्न्यालाइ सधवा भया साधुको षुसि ११ वर्ष उभोका कंन्या र विधवा भया राजषत लाग्दैन.

१२. ससुरालि पट्टी का. नातामा भात षायाका हउन् नषायाका हउन् आफ्ना स्वास्निलाइ जन्मा उन्या सासु ससुराले अैनले जार हाँन हुन्यासम्म ल्यायाका अरू सधवा सौतिन्या सासु ससुरालाइ र सासुलाई जन्माउन्या वुढि सासु सधवा भयापनि विधवा भया पनि एस्ताको करणि गर्न्या रजपूत जातलाइ राजषत लाग्नाले अैन वमोजिम्को अंस सर्वस्व गरि जनै झिकि मुडि नरक वाहेक अरु अभक्ष षुवाई जात पतित गरि पुर्वको भया पश्चिम् पश्चिम्को भया पुर्वतर्फ नदि कटाइ धपाइ दिनु एस्ताको हातको भात चल्दैन पतिया नदिनु भुला चुका परि कसैले पतिया दिया पनि पतियाको कागज झिकि भात वाहेकै गराइदिनु एस्ता नमासिन्या क्षुद्र जात हुन्छन् एस्ताका हातको भात चल्दैन पानिको मात्र पतिया दिनु.

१३. ससुरालि पट्टिका नातामा आफ्ना ज्येठा कांछा ससुराका स्वास्नि अैनले जार हान्न हुन्य सम्मका सासु र फुपुसासु साला ज्येठुका स्वास्नि भात षाया हउन् नषायाको हउन् एस्ताको करणि गर्न्या व्राम्हण रजपूत तागाधारि लगायेत् अरु गैह्र जातलाइ सधवा भया साधुको षुसि विधवा र कंन्या भया राजषत लाग्दैन.

१४. आफुलाइ र अैनले जार हान्न हुन्या सम्मका आफ्ना स्वास्निलाइ दिक्षा मंत्र सुनाउन्या गुर्माको र मंत्र सुनाउन्या गुरूका अैनले जार हान्न हुन्या सम्मका स्वास्नि गुर्माको करणि गर्न्या रजपूत जातलाइ राजषत लाग्नाले. अैन वमोजिम्को अंस सर्वस्व गरि जनै झिकि मुडी नरक वाहेक अरू अभक्ष षुवाई जात पतित गरि पूर्वको भया पश्चिम् पश्चिम्को भया पूर्वतर्फ नदि कटाइ धपाइ दिनु एस्ताका हातको भात चल्दैन पतिया नदिनु भुला चुका परि कसैले पतिया दिया पनि पतियाको कागज झिकि भात वाहेकै गराइ दिनु एस्ता नमासिन्या क्षुद्र जात हुंछन् पानि चल्छ पानिको मात्र पतिया दिनु.

१५. हाड र राजषत लाग्न्या नातका कसैले आफु तेश्रो लिंग परि ल्यायाका अैनले जार हाँन नहुन्या भात नचलन्या स्वास्निको करणि गर्न्या रजपूत जात गैह्रलाई जात भात मिलन्या नहुनाले र जार हांन नहुनाले १ वर्ष कैद गर्नु जात जादैन करणि गरि आफुले भात षाइ भताहालाइ वोऱ्याको नभया १ वर्ष कैद गरि उसै स्वास्निका जात्मा मिलाइ छाडिदिनु स्वास्निका हातको भात षाइ भताहालाइ स्मेत् वोरेछ भन्या अैन वमोजिम् अंस सर्वस्व गरि १ वर्ष कैदगरि विग्र्याकि स्वास्निको जौन जात भयाको छ उसै जात मिलाइ दिनु म्यादका रूपैया दिया ली छाडिदिनु.

१६. हाड र राजषत् लाग्न्या नाताका कसैले आफु तेश्रो लिंगदेषि उभो परि ल्यायाका भात नचलन्या स्वास्निको करणि गर्न्या र रजपूत जात गैह्रलाई ६ मैन्हा कैद गरि छाडि दिनु जात जादैन जाहेर गरि नराष्याका घर्मा पनि नल्यायाका स्वास्निको करणि गर्न्यालाइ षतवात लाग्दैन.

१७. राजषतको सजाय लेषियाका हाड नात सनहेमा करणि गर्न्या र करणि गराउन्या लोग्न्या स्वास्निलाई अैन वमोजिम्को सजाय गरि छुटचाइदिनु छुटचाया पछि पनि करणि गऱ्यो भन्या करणि गर्न्या लोग्न्यालाई ५० करणि गराउन्या स्वास्निलाइ २५ रूपैया दंड गरि छुटचाइ दिनु रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

१८. रजपूत जातले आफ्ना सधवा विधवा भाउज्यूको करणि गऱ्यामा अघिदेषि आजतक जौन रित चलि आयाको छ सो वमोजिम् आफ्ना आफ्ना जातमा रहंछन् अघिदेषि आजसम्म भै चली आयाको हुनाले आजको अैनमा मिलाइ अघिको कुरो न हेर्नु अघिकै सदर हुंछ.

१९. १९१९ साल मिति वैसाष शुदि ३ रोज ६ का दिनदेषि रजपूत जातले भाउज्यू लाइ स्वास्नि तुल्याइ नराषनु कोहि रजपूतजातले भाउज्यूलाई स्वास्नि तुल्याइ राष्यौ भन्या वर्ष कैद गर्नु म्यादका रुपैया डवल दिया लीनुभाउज्यू लाई स्वास्नि तुल्याइ राषन्या रजपूत र उसले स्वास्नि तुल्याई राष्याका भाउज्यू इ दुइ र. इ दुइवाट जन्म्याका संतान्का हातको दाज्यू भाई नाता कुटुँव कसैले भात नषानु तेस्ताका सन्तान्ले तेस्तै जात संग विहा वरि गर्नु.

२०. अव उप्रान्त भाउज्यूको करणि गर्न्या गराउन्या. रजपूत जातका लोग्न्या स्वास्निले हवस् इन्वाट जन्म्याका संतान्ले हवस् हामि सद्य हौ भनि जात ढाटि अरुलाई भातमा वोरेछ भन्या ८० रुपैया दंड गरि भोरमा पर्न्यालाई पतिया गराई दिनु इ एस्ता घटि जात हुं भनि जानि जानि एस्ताकाहातको भात षाई अरूलाई वोऱ्याको रहेनछ भन्या उसै जातमा मात्र मिलाईदिनू दंड हुदैन. आफुले भात षाई आफ्ना भतालाइ स्मेत् वोरेछ भन्या ८० रूपैया दंड गरि उसै जात्मा मिलाइ दिनु.

२१. रजपूत जातले सधवा भाउज्यूको करणि गऱ्यो भन्या साधुले ज्यू काटनु हुदैन अैन वमोजिम् सर्वस्व गरि जनै झिकि जात पतित् गरि नमासिन्या शुद्र जातमा मिलाई दिनु साधुले सजाय गरिदेउ भनि करायो भन्या अडा गौडा अदालत ठाना अमाल्वाट जारि गर्न्यालाई पक्रि सोहि वमोजिम् सजाय गरि वस्याका गाउ सहरवाट निकालि दिनु सर्वस्व मध्ये दसौद लि उपर साधुलाई सोपि दिनु भाउज्यू साहिनामा साधुले सजाय नगरि छोडचा भन्या राजषत लाग्दैन जातैमा रहंन्छ.

# जैसि बाहुन्को

१. जैसि वाहुन्ले आफ्ना हाडनातामा करणि गऱ्यो भन्या उपाध्या व्राम्हणका अैन वमोजिम् सजाय गर्नु.

२. उपाध्याले उपाध्याका कंन्यालाइ ल्यायाका र उपाध्याका विधवा ल्यायाका स्वास्निवाट जन्म्याका संतान् असल् जैसि हुंछन् एस्तै जैसिका छोरि उपाध्याले विहा गरि ल्यायाका स्वास्निवाट जन्म्याका सन्तान् पनि असल् जैसि हुंछन्.

३. उपाध्या र जैसिले राष्याका व्राम्हणीमा विधवा आसाराडी लोग्न्यालाइ सजाय भै सुद्र जातमा मिलायाका मानीस्का सत्यमा रहयाका  स्वास्निहरूमा आफु दोश्रो परि ल्यायाका स्वास्निवाट जन्म्याका सन्तान् जैसि जात हुछन्.

४. व्राम्हणले तेश्रो लिंग परि ल्यायाका नाता केहि नलाग्या उपाध्या र जैसिवाट जन्म्याका सन्तान् भाट जैसि वोलिन्छन् जनै पाउछन् एस्ता जैसि भातका विधवालाइ नाता नलाग्न्या तागाधारि जातले मनोमानसित भातमा परिल्यायो भन्या ५० रूपैया दंड गर्नु भात्मा पारेन भन्या षत लाग्दैन रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

# तागाधारि क्षेत्रीय जात्

## आफ्ना हाडनातामा करणि गर्न्या तागाधारि क्षेत्री जात गैन्हको

## तपसिल

१. सधवा भया पनि विधवा भया पनि वेस्या भया पनि आफुलाइ जन्माउन्या आमाको करणि गर्न्या तागाधारि क्षेत्री जात गैह्रलाइ काटि मारि दिनु.

२. आफ्ना एका वावुवाट जन्म्याका दिदि वैन्हि आफुले जन्मायाका छोरिको करणि गर्न्या तागाधारि क्षेत्री जात गैह्रलाई अैन वमोजिम्को अंस सर्वस्व गरि दामल् गर्नु.

३. आफ्ना हाडमा ७ पुस्तासम्मका जन्माउन्या आमा आफ्ना एका वावुवाट जन्म्याका दिदि वैन्हि आफुले जन्मायाका छोरि र भाउज्यू वाहेक भात षायाका हउन् नषायाका हउन् अरु सौतिन्या आमा वज्यू भाइ वुहारि छोरा वुहारि नातिन्या वुहारि दिदि वैन्हि छोरि नातिनि फुपु नाता पर्न्यामा सधवा भया पनि विधवा भया पनि कंन्या भया पनि एस्ताको करणि गर्न्या तागाधारि क्षेत्री जात गैह्रलाइ अैन वमोजिम्को अंस सर्वस्व गरि जनै भिकि मुडि मद सुगुर्को मासु षुवाइ जात पतित गरि पुर्वको भया पश्चिम् पश्चिमको भया पुर्वतर्फ नदि कटाइ धपाइ दिनु एस्ताका हातको भात चल्दैन भातको पतिया नदिनु भुला चुका परि कसैले पतिया दिया पनि पतियाको कागज भिकि भात वाहेकै गराइदिनु यस्ता नमासिन्या शुद्र जात हुंछन् पानि चल्छ पानिको मात्र पतिया दिनु.

४. हाडमा ७ पुस्तादेषि माथि आफुदेषि १४ पुस्तासम्मका भाउज्यू नाता पर्न्या वाहेक ११ वर्ष नाघ्याका कंन्या विधवाको भात षायाको भया पनि नषायाको भया पनि एस्ताको करणि गर्न्या तागाधारि क्षेत्री जात गैह्रलाई राजषत लाग्न्याले अैन वमोजिम् अंस सर्वस्व गरि जनै भिकि जात पतित गरि वस्याका गाउ सहरवाट निकालि दिनु एस्ताको हातको भात चल्दैन पानि चल्छ.

५. हाडमा १४ पुस्तादेषि माथि आफुदेषि २१ पुस्तासम्मका भाउज्यू नातापर्न्या वाहेक ११ वर्ष नाघ्याका कंन्या विधवाको भात षायाका हउन्नषायाको हउन् एस्ताको करणि गर्न्या तागाधारि

क्षेत्रीजात गैहैलाई राजषत लाग्नाले करणि गरि भात स्मेत् षाइ अरू भताहालाइ स्मेत् वोऱ्याको भया अैन वमोजिम् अंस सर्वस्व गरि लिनु भात षानु नषानु भताहाको षुसि भातमा वोऱ्याको नभया १०० रूपैया दंड गरि पतिया गराइदिनु जात जादैन रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

६. आफ्ना हाडमा २१ पुस्तादेषि माथिका भाउज्यू नाता पर्न्या वाहेक ११ वर्ष नाघ्याका कंन्या विधवाको भात षायाको हउन् नषायाको हउन् एस्ता स्वास्निको करणि गर्न्या तागाधारि क्षेत्री जात गैह्वलाइ राजषत लाग्नाले करणि गरि भात स्मेत् वोऱ्याको भया ५० रूपैया दंड गरि लिनु भात षाना नषानाको भताहाको षुसि भातमा वोऱ्याको रहेनछ भन्या ५० रूपैया दंड गरि पतिया गराईदिनु.

७. उपाध्या रजपूत जैसि लगायेत् मुडिन्या जात वाहेक अरू तागाधारि गैह्व जातले विधवा भाउज्यू नाता पर्न्याका मनोमानले करणि गऱ्योभन्या करणि गर्न्या गराउन्या दुवैलाइ राजषत लाग्दैन सधवा भाउज्यू नाता पर्न्याको करणि गऱ्यो भन्या साधुले ज्यू काटन हुदैन अैन वमोजिम् अंस सर्वस्व गरि तागाधारि जातलाइ जनै झिकि जात पतित गरि नमासिन्या शुद्र जातमा मिलाइ दिनु साधुले सजाय गरिदेउ भनि करायो भन्या अडा गौडा अदालत् ठाना अमाल्वाट साधुले जारि गर्न्यालाइ पक्रि सोहि वमोजिम् सजाय गरि वस्याका गाउ सहरवाट निकाली दिनु सर्वस्व मध्ये दसौद ली उपर साधुलाइ दिनु भाउज्यू साहीनामा साधुले सजाय नगरि छोडद्या भन्या राजषत लाग्दैन आफ्ना जातैमा रहंछ.

८. आफुले जन्मायाका छोरिका छोरि नातीनी र अैनले जार हान्न हुन्या सम्मका नातिन्या वुहारिको करणि गर्न्या तागाधारि क्षेत्री जात गैह्वलाइ राजषत् लाग्नाले अैन वमोजिम्को अंस सर्वस्व गरि जनै झिकि मुडि मद सुगुर्का मासु षुवाइ जात पतित गरि पुर्वको भया पश्चिम् पश्चिम्को भया पुर्वतर्फ नदि कटाइ धपाइ दिनु एस्ताका हातको भात चल्दैन पानि चल्छ पानिको मात्र पतिया दिनु एस्ता नमासिन्या शुद्र जात हुंछन्.

९. ब्राम्हण रजपूत वाहेक भाउज्यू चलन्या तागाधारि जात गैह्रका विधवा भाउज्यूको भात नचलन्या कमि जातका देवरले करणिगरि भातमा स्मेत् वोरेछ भन्या १०० रुपैया अरूलाई भातमा पाऱ्याको रहेनछ भन्या ५० रूपैया दंड गर्नु नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

१०. भांजा भांजि पट्टिका नातामा सधवा भया पनि विधवा भया पनि कंन्या भया पनि आफ्ना वावुवाट जन्म्याका दिदि वैन्हिका छोरि भांजि र अैनले हान्न हुन्यासम्मका भांज्या वुहारिको करणि गर्न्या तागाधारि क्षेत्री जात गैह्रलाइ राजषत लाग्नाले अैन वमोजिम्को अंस सर्वस्व गरि जनै भिकि मुडी मद सुगुरको मासु षुवाइ जात पतित गरि पुर्वको भया पश्चिम् पश्चिम्को भया पुर्वतर्फ नदि कटाइ धपाइ दिनु एस्ताका हातको भात चल्दैन पानि चल्छ पानिको मात्र पतिया दिनु एस्ता नमासिन्या शुद्र जात हुंछन्.

११. मावली पट्टिका नातामा भात षायाको हउन् नषायाका हउन्. आमालाइ जन्माउन्या वज्यू आमाका सहोदर वज्यू आमा जन्म्याका एका आतका दिदि वैन्ही सानि ठुली आमा मामाका जार हान्न हुन्यासम्मका स्वास्नि माईज्यूको करणि गर्न्या तागाधारि क्षेत्री जात गैह्रलाई राजषत लाग्नाले अैन वमोजिम्को अंस सर्वस्व गरि जनै भिकि मुडि मद सुगुरको मासु षुवाई जात पतित् गरि. पुर्वको भया पश्चिम् पश्चिम्को भया पुर्वतर्फ नदि कटाइ धपाई दिनु एस्ताका हातको भात चल्दैन पानि चल्छ पानिको मात्र पतिया दिनु एस्ता नमासिन्या सुद्र जात हुंछ.

१२. मावलि पट्टिका नातामा आमाका सौतिन्या आमाका छोरि सानी ठुली आमा र आमाकि आमाका एका भुडीका दिदिवैन्हि वज्यूहरूको करणिगर्न्या तागाधारि क्षेत्री जात गैह्रलाइ सधवा भया साधुको षुसि साधुले छाडयो भन्या र कंन्या विधवा भया राजषत् लाग्नाले अैनवमोजिम्को अंस सर्वस्व गरि जनै भिकि जात पतित् गरि वस्याका गाउ सहरवाट निकालि दिनु भात चल्दैन पानि चल्छ पानिको मात्र पतियादिनु एस्ताको नमासिन्या शुद्र जात हुंछ.

१३. तागाधारि क्षेत्री जात गैह्रले मामाका छोरि र अैनले जार्हान्न हुन्यासम्मका मामाका छोरा वुहारिको करणि गर्न्यालाइ सधवा भया साधुको षुसि विधवा र कंन्या भया राजषत लाग्दैन.

१४. ससुरालि पट्टिका नातामा भात षायाका हउन् नषायाका हउन् अैनले जार हान्न हुन्यासम्मका आफ्ना स्वास्निलाई जन्माउन्या सासु ससुरालाइ र सासु लाइ जन्माउन्या वुढि सासु सधवा भया पनि विधवा भया पनि एस्ताको करणि गर्न्या तागाधारि क्षेत्री जात गैह्रलाइ राजषत लाग्नाले अैन वमोजिम्को अंस सर्वस्व गरि जनै झिकी मुडी मद सुगुरको मासु षुवाई जात पतित गरि पुर्वको भया पश्चिम् पश्चिम्को भया पुर्वतर्फ नदि कटाइ धपाइ दिनु एस्ताका हातको भात चल्दैन पानि चल्छ पानिको मात्र पतियादिनु एस्ता नमासिन्या शाुद्र जात हुंछ.

१५. आफ्नि स्वास्निलाइ जन्माउन्या सासु वाहेक अैनले जार्हान्न हुन्यासम्मका ससुराका स्वास्नि सासुको करणि गर्न्या तागाधारि क्षेत्री गैह्र जातलाइ राजषत लाग्नाले अैन वमोजिम्को अंस सर्वस्व गरि जनै झिकि जात पतित गरि वस्याका गाउ सहरवाट निकालि दिनु एस्ताको हातको भात चल्दैन पानि चल्छ पानिको मात्र पतिया दिनु एस्ता नमासिन्या शुद्र जात हुंछ.

१६. आफुलाइ र अैनले जार हांन हुन्यासम्मका आफ्ना स्वास्निलाइ दिक्षा मंत्र सुनाउन्या गुर्माकोर मंत्र सुनाउन्या गुरूका अैनले जार हान्न हुन्यासम्मका गुर्माको करणि गर्न्या तागाधारि क्षेत्री जात गैह्रलाइ राजषत् लाग्नाले अैन वमोजिम् अंस सर्वस्व गरि जनै झिकि मुडि मद सुगरको मासु षुवाइ जात पतित गरि पुर्वको भया पश्चिम् पश्चिम्को भया पुर्वतर्फ नदि कटाइ धपाइ दिनु एस्ताका हातको भात चल्दैन पानि चल्छ पानिको मात्र पतिया दिनु एस्ता नमासिन्या शुद्र जात हुंछन् .

१७. हाड र राजषत् लाग्न्या नाताका कसैले आफु तेश्रो लिंग परि ल्यायाका. अैनले जार हान्न हुन्या भात नचलन्या.स्वास्निको करणि गर्न्या ताधारि क्षेत्री जात गैह्रलाइ जात भात मिल्या नहुनाले र. जार हान्न नहुनाले १ वर्ष कैद गर्नु जात जादैन करणि गरि आफुले भात षाई भताहालाइ वोऱ्याको नभया १ वर्ष कैद गरि उसै स्वास्निका जात मा मिलाई छाडिदिनु स्वास्निका हातको भात षाई भताहालाइ स्मेत् वोरेछ भन्या. अैन वमोजिम्को अंस सर्वस्व गरि १ वर्ष कैद गरि विग्ऱ्याकि स्वास्निको जौन जात भयाको छ उसै जात्मा मिलाई दिनु. स्यादको रूपैया दिया ली छाडनु.

१८. हाड र राजषत् लाग्या नाताका कसैले आफु तेश्रो लिंग देषि उभो परि ल्यायाका भात चलन्या स्वास्निको करणि गर्न्या तागाधारि क्षेत्रीजात गैह्रलाई ६ मैन्हा कैद गरि छाडिदिनु जात जादैन जाहेर गरि नराष्याका घरमा पनि नल्यायाका स्वास्निको करणि गर्न्यालाइ षतवात लाग्दैन.

१९. उपाध्या रजपूत असल् जैसि वाहेक अरू तागाधारि जात गैह्रले आफ्ना लोग्न्याका सत्यमा वस्छु भंन्या ११ वर्ष मनिका विधवा भाउज्यू पर्न्यालाइ लागु षुवाइ हवस् वाधि हवस् मुष थुनि हवस् एतिमा यौटै कुरो मात्रै गरि करणि गर्न्या जवरजस्ति ठहर्छ तेस्को अैन वमोजिम्को अंससर्वस्व गरि दसौद लि उपर तेसै स्वास्निलाई दिलाइ करणि लिन्यालाई ६ वर्ष कैद गर्नु म्यादको डवल दिया लि छाडनु.

२०. उपाध्या रजपूत असल् जैसि जात्वाहेक् अरू तागाधारि जात गैह्रले आफ्ना लोग्न्या का सत्यमा वस्छु भन्या ११ वर्ष नाघ्याका विधवा भाउज्यू पर्न्यालाइ लागु षुवाइ हवस् वाधि हवस् मुष थुनि हवस् एतिमा यौटैकुरो मात्रै गरी करणि गऱ्यो भन्या जवरजस्ति गर्न्या ठहर्छ तेस्को अैन वमोजिम्को अंससर्वस्व गरि कचहरिवाट दसौद ली उसै स्वास्निलाई दिलाइ करणि लिन्यालाई ३ वर्ष कैद गर्नु म्यादको डवल् दिया ली छाडनु.

२१. व्राम्हण वाहेक् व्रतवंध गरि भातमा नचल्याका तागाधारि गैह्र जातले विधवा भाउज्यूको राजि षुसिले करणि गरि भात्मा वोऱ्यो भनि कराउन आया करणि गर्न्या कर्म नचल्याका देवरलाई २० रुपैया दंड गरि भोरमा भात षान्यालाइ पतिया गराई दिनु. भात्मा वोऱ्याको नभया करणि गर्न्यालाइ वात लाग्दैन कर्म नचल्याका देवरलाई करणि दिन्या भाउज्यू भताहाका भात मा चल्दिन.

# नमासिन्या मतुवालि

## आफ्ना हाड नातामा करणि गर्न्या नमासिन्या मतुवाली जात गैह्नको

## तपसिल

१. सधवा भया पनि विधवा भया पनि वेस्या भया पनि आफुलाइ जन्माउन्या आमाको करणि गर्न्या नमासिन्या मतुवालि जात गैह्नलाइ काटि मारि दिनु.

२. आफ्ना एका वावुवाट जन्म्याका दिदि वैन्ही आफुले जन्मायाका छोरिको करणि गर्न्या नमासिन्या मतवाली जात गैह्नलाई अैन वमोजिम्को अंस सर्वस्व गरि दामल् गर्नु.

३. आफ्ना हाडमा ४ पुस्तासम्मका जन्माउन्या आमा आफ्ना एका वावुवाट जन्म्याका दिदिवैन्हि आफुले जन्मायाका छोरि र भाउज्यू वाहेक् अैनले जार हान्न हुन्यासम्मका अरू सौतिन्या आमा वज्यू भाइ वुहारि छोरा वुहारी नातिन्या वुहारि दिदि वैन्हि छोरि नातिनी फुपु नाता पर्न्या सधवा भया पनि विधवा भया पनि कंन्या भया पनि एस्ताको करणि गर्न्या नमासिन्या मतुवाली जात गैह्नको अैन वमोजिम्को अंस सर्वस्व गरि मुडि कुकुरको मासु षुवाई जात पतित गरि सहर गौडा घुमाइ भात वाहेक गरि पुर्वको भया पश्चिम् पश्चिम्को भया पुर्वतर्फ नदि कटाइ धपाइ दिनु एस्ताका हातको भात चल्दैन पतिया नदिनु एस्ता मासिन्या भोटचा जात हुंछन् पानि चल्छ पानिको मात्र पतिया दिनु.

४. आफ्ना हाडमा ४ पुस्तादेषि माथि आफुदेषि ७ पुस्तासम्मका ११ वर्ष नाघ्याका कंन्या विधवा स्वास्निको करणि गर्न्या नमासिन्या मतुवालि जात गैह्न को अैन वमोजिम्को अंस सर्वस्व गरि जात पतित गरि भोटचा जातमा मिलाइ दिनु एस्ताको पानि चल्छ पानिको मात्र पतिया दिनु.

५. आफ्ना हाडमा ७ पुस्तादेषि माथि आफुदेषि १४ पुस्तासम्मका ११ वर्ष नाघ्याका कंन्या विधवा स्वास्निको करणि गर्न्या नमासिन्या मतुवालि जात गैह्नलाइ ५० रूपैया दंड गरिलि लोग्न्या स्वास्नि छुटचाइ भात पानिको पतिया दिनु जात जादैन रुपैया नितऱ्या अैन वमोजिम् कैद गर्नु.

६. आफ्ना हाडमा १४ पुस्तादेषि माथिका जतिसुकै पुस्ताका भया पनि ११ वर्ष नाघ्याका कंन्या र विधवाको करणि गर्न्या नमासिन्या मतुवालि जात गैह्रलाइ २० रूपैया दंड गरि ली लोग्न्या स्वास्नि छुट्याइ दिनु जात जादैन रुपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

७. नमासिन्या मतुवाली जात गैह्रले विधवा भाउज्यू नाता पर्न्याको मनोमानले करणि गऱ्यो भन्या करणि गर्न्या गराउन्या दुवैलाइ राजषत् लाग्दैन सधवा भाउज्यू नाता पर्न्याको करणि गऱ्यो भन्या साधुले अैन वमोजिम् अंस सर्वस्व गरि जात पतित गरि वस्याका गाउ सहरवाट निकालि दिन्छ तापनि केहि नगरि उसै छाडछ तापनि साधुको षुसि साधुले सजाय नगरि षतमाफ गरि छाडचाकाको जात जादैन साधुले सजाय गरि देउ भनि करायो भन्या अडा गौडा अदालत् ठाना अमाल्वाट जारि गर्न्यालाइ पक्रि अैन वमोजिम् सर्वस्व गरि मासिन्या भोटचा जातमा मिलाइ दि गाउ सहरवाट निकाली दिनु सर्वस्व मध्ये दसौद लीउपर साधु लाइ दिनु भाउज्यू साहिनामा साधुले सजाय नगरि छोडचो भन्या र नालिस् गरेण भन्या राजषत लाग्दैन आफ्ना जातैमा रहंछ.

८. आफुले जन्मायाका छोरिका छोरि नातीनी र अैनले जार हान्न हुन्या सम्मका नातिन्या वुहारिको करणि गर्न्या नमासिन्या मतुवाली जात गैह्रलाइ राजषत लाग्नाले अैन वमोजिम्को अंस सर्वस्व गरि मुडी कुकुरको मासु षुवाइ जात पतित् गरि सहगौंडा घुमाइ भात वाहेक गरि पुर्वको भया पश्चिम्को पश्चिम्को भया पुर्वतर्फ नदि कटाइ धपाइदिनु एस्ता मासिन्या भोटचा जात ठहर्छन् भातको पतिया पाउदैनन् पानि चल्छ पानिको मात्र पतिया दिनु.

९. भांजा भांजि पट्टिका नातामा सधवा भया पनि कंन्या विधवा भया पनि आफ्ना एका वावुवाट जन्म्याका दिदि वैन्हीका छोरि भांजि र अैनले जार हान्न हुन्यासम्मका भांज्या वुहारिको करणि गर्न्या नमासिन्या मतुवाली जात गैह्रलाई राजषत लाग्नाले अैन वमोजिम्को अंस सर्वस्व गरि मुडि कुकुरको मासु षुवाइ जात पतित गरि सहर गौडा घुमाई भात वाहेक गरि पुर्वको भया पश्चिम् पश्चिम्को भया पुर्वतर्फ नदि कटाइ धपाइदिनु एस्ता मासिन्या भोटचा जात ठहर्छन् भातको पतिया पाउदैनन् पानि चल्छ पानिको मात्र पतिया दिनु.

१०. मावली पट्टिका नातामा भात षाया हउन् नषायाका हउन् आमालाइ जन्माउन्या वज्यू आमाको सहोदर वज्यू आमा जन्म्याका एका आतका दिदि वैन्हि सानि ठुली आमा मामाका जार हान्न हुन्यासम्मका स्वास्नि माइज्युको करणि गर्न्यामा नमासिन्या मतुवालि जात गैह्रलाइ राजषत लाग्नाले अैन वमोजिम्को अंस सर्वस्व गरि मुडि कुकरको मासु षुवाइ जात पतित गरि सहर गौडा घुमाइ भात वाहेक गरि पुर्वको भया पश्चिम् पश्चिम्को भया पुर्वतर्फ नदि कटाइ धपाइदिनु एस्ता मासिन्या भोटचा जात ठहर्छ भातको पतिया पाउदैन् पानि चल्छ पानिको मात्र पतिया दिनु.

११. मावलि पट्टिका नातामा आमाको सौतिन्या आमाका छोरि सानि थुलि आमा र आमाकि आमाका एका वावुवाट जन्म्याका दिदिवैन्हिहरूको करणि गर्न्या नमासिन्या मतुवारि जात गैह्रलाई सधवा भया साधुको षुसि साधुले छोडचो भन्या र कंन्या र विधवा भया राजषत लाग्नाले अैन वमोजिम्को अंस सर्वस्व गरि वस्याका गाउ सहरवाट निकाली दिनु भात चल्दैन पानि चल्छ पानिको मात्र पतिया दिनु एस्ताको मासिन्या पर्जा जात हुंछ.

१२. नमासिन्या मतुवाली जात गैह्रले मामाका छोरि र अैनले जार हान्न हुन्या सम्मका मामाका छोरा वुहारिको करणि गर्न्यालाइ सधवा भया साधुको षुसि विधवा र कंन्या भया राजषत लाग्दैन.

१३. ससुरालि पट्टिका नातामा भात षाया हउन् नषाया हउन् आफ्ना स्वास्निलाइ जन्माउन्या सासु ससुरालाइ र सासुलाइ जन्माउन्या वुढि सासु सधवा भया पनि विधवा भया पनि एस्ताको करणि गर्न्या नमासिन्या मतुवाली जात गैह्र लाइ राजषत लाग्नाले अैन वमोजिम्को अंस सर्वस्व गरि मुडि कुकुर्को मासु षुवाई जात पतित गरि सहर गौडा घुमाई भात वाहेक गरि पुर्वको भया पश्चिम् पश्चिम्को भया पुर्वतर्फ नदि कटाइ धपाई दिनु एस्ता मासिन्या भोटचा जात ठहर्छन् पानि चल्छ पानिको मात्र पतिया दिनु.

१४. ससुराली पट्टिका नातामा आफ्नी स्वास्निलाइ जन्माउन्या सासु वाहेक ससुराका अैनले जार हान्न हुन्यासम्मका अरू स्वास्नि सासुको करणि गर्न्या नमासिन्या मतुवालि जात गैह्रलाइ राजषत् लाग्नाले अैन वमोजिम्को अंस सर्वस्व गरि वस्याका गाउ सहरवाट निकालि दिनु भात चल्दैन पानि चल्छ पानिको मात्र पतिया दिनु एस्ताको मासिन्या पर्जा जात हुंछ.

१५. आफुलाइ र अैनले जार हान्न हुन्यासम्मका आफ्नी स्वास्निलाई दिक्षा मंत्र सुनाउन्या गुर्माको र मंत्र सुनाउन्या गुरूका अैनले जार हान्न हुन्या सम्मका स्वास्नि गुर्माको करणि गर्न्या नमासिन्या मतुवाली जात गैह्रलाइ राजषत लाग्नाले अैन वमोजिम्को अंस सर्वस्व गरि मुडि कुकुर्को मासु षुवाइ जात पतित गरि सहर गौडा घुमाइ भात वाहेक गरि पुर्वको भया पश्चिम् पश्चिम्को भया पुर्वतर्फ नदि कटाइ धपाइ दिनु एस्ता मासिन्या भोटचा जात ठहर्छन् भातको पतिया पाउदैन पानि चल्छ पानिको मात्र पतिया दिनु.

१६. हाड र राजषत लाग्न्या नातामा कसैले आफु तेश्रो लिंग परि ल्यायाका अैनले जार हांन हुन्या भात नचलन्या स्वास्निको करणि गर्न्या मासिन्या मतुवाली जात गैह्रलाइ जात भात मिलन्या नहुनाले र जार हांन नहुनाले करणि गरि भात मा वोन्याको रहेनछ भन्या १ वर्ष कैद गर्नु जात जादैन करणि गरि भात्मा स्मेत वोरेछ भन्या १॥. वर्ष कैद गर्नु म्यादका रूपैया तिऱ्या ली छाडनु.

१७. हाड र राजषत लाग्न्या नाताका कसैले आफु तेश्रो लिंगदेषि उभो परि ल्यायाका भात नचलन्या स्वास्निको करणि गर्न्या नमासिन्या मतुवाली जात गैह्रलाइ ६ मैन्हाकैद गरि छाडी दिनु जात जादैन जाहेर गरि नराष्याका घरमा पनि नल्यायाका. स्वास्निको करणि गर्न्यालाइ षतवात लाग्दैन.

१८. नमासिन्या मतुवालि जात गैह्रले आफ्ना एका वाज्यावाट जन्म्याका जेठा कांछा वावुका छोरीका छोरि भांजिहरू र आफ्ना एका वावुवाट जन्म्याका दाज्यू भाईका छोरिका छोरि नातिनीहरूको करणि गरेछ भन्या सधवा भया अैन वमोजिम् साधुको षुसि कंन्या र विधवा भया अैन वमोजिम्को अंस सर्वस्व गरि मुडि कुकुरको मासु षुवाइ जात पतित गरि सहर गौडा घुमाइ भात वाहेक गरि धपाइ दिनु एस्ताका हातको भात चल्दैन एस्ता मासिन्या भोते जात हुंछन् पानि चल्छ पानिको मात्रै पतिया दिनु एति नाता वाहेक अरू गोतिया भाइका छोरीका छोरिको करणि गरि भातमा वोरेछ भन्या सधवा भया अैन वमोजिम् साधुको षुसि ११ वर्ष नाघ्याका कंन्या र विधवा भया नाता नलाग्न्या कुटुँवका कंन्या विधवाको करणि गर्न्यालाइ लेष्याका अैन वमोजिम् सजाय गर्नु भातमा वोन्याको रहेनछ भन्या षतवात लाग्दैन.

# मासिन्या मतुवालीको

## आफ्ना हाड नातामा करणि गर्न्या मासिन्या मतुवाली जात गैह्रे

## पानी चलन्याको

## तपसिल

१. सधवा भया पनि विधवा भया पनि वेस्या भया पनि आफुलाई जन्माउन्या आमाको करणि गर्न्या मासीन्या मतुवाली जात गैह्रलाइ काटि मारि दिनु.

२. आफ्ना एका वावुवाट जन्म्याका दिदि वैन्ही र आफुले जन्मायाका छोरिको करणि गर्न्या मासिन्या मतुवालि जात गैह्रलाइ अैन वमोजिम्को सर्वस्व गरि दामल् गर्नु.

३. आफ्ना हाडमा ५ पुस्तासम्मका आफुलाई जन्माउन्या आमा आफ्ना एका वावुवाट जन्म्याका दिदि वैन्ही आफुले जन्मायाका छोरि र भाउज्यू नाता पर्न्या वाहेक अरू ११ वर्ष नाघ्याका कंन्या सधवा विधवाको करणि गर्न्या मासिन्या मतुवाली जात गैह्रका लोग्न्या स्वास्नि दुवैलाई मासि दिनु.

४. आफ्ना हाडमा ५ पुस्तादेषिमाथि आफुदेषि १४ पुस्तासम्मका ११ वर्ष नाघ्याका कंन्या र विधवाको करणि गर्न्या मासिन्या मतुवाली जात गैह्रका लोग्न्यालाइ १५ स्वानिलाई १० रूपैया दंड गरि छुटचाई दिनु ५ पुस्ता देषि माथि करणि गर्न्याकोज्यू मासिदैन.

५. आफ्ना १४ पुस्तादेषि माथिका हाड नातामा करणि गर्न्या मासिन्या मतुवाली जात गैह्रका लोग्न्यालाई १२ रूपैया स्वास्निलाइ ८ रुपैया दंड गर्नु.

६. मासिन्या मतुवालीमा पानि चलन्या जात सम्मका कसैले आफ्ना हाडका ५ पुस्तादेषि उभोका सधवा स्वास्निको करणि गऱ्यो भन्या विहा गरि ल्यायाका र विहाको रित गरि ल्यायाका स्वास्निको २० रूपैया विहा षर्च साधलाइ भराईदि लोग्न्यालाइ २० हाडफोरा पर्नाले स्वास्निलाई १० रुपैया दंड गर्नु विहाको रित नपुऱ्याइ ल्यायाका आफ्ना जात भातमा चल्याका

स्वास्निको करणि गर्न्यालाइ विहा षर्च पर्दैन लोग्न्यालाइ १० स्वास्निलाइ १० दंड गर्नु जात भातमा नलियाका घरमा ल्याइ राष्याका स्वास्निको करणि गर्न्या लोग्न्यलाइ १० स्वास्निलाइ ५ रुपैया दंड गरि छुटचाई दिनु रुपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

७. मासिन्या मतुवाली जात गैह्रले विधवा भाउज्यू नाता पर्न्या का मनोमानले करणि गऱ्यो भन्या करणि गर्न्या गराउन्या दुवैलाइ राजषत लाग्दैन सधवा भाउज्यू नाता पर्न्याको करणि गऱ्यो भन्या अघिदेषि जार हान्न्या जातलाई साधुले जार काटन नहुनाले अैन वमोजिम् अंस सर्वस्व गरि लिंछ तापनि वस्याका गाउ सहरवाट नीकाली दिंछ तापनि केहि नगरि उसै छाडछ तापनि साधुको षुसि साधुले सजाय नगरि षत माफ गरि छाडचाकाको जात जादैन म सजाय गर्दीन भनि अडा गौडा अदालत् ठाना अमाल्मा भंन. आयो भन्या जारि गर्न्याको. अैन वमोजिम् अंस सर्वस्व गरि दसौद ली उपर साधु लाइ सौपिदिनु करणि गर्न्यालाइ ६ मैन्हा कैद गर्नु म्यादको रुपैया दिया लिनु साधुले सजाय नगरि जारिको षतमाफ गरि छोडचो भन्या राजषत लाग्दैन जात जादैन अघिदेषि जार नहानिआउन्या जातका लोग्न्या स्वास्नि दुवैलाइ मासिदिनु.

८. आफुले जन्मायाका छोरिका छोरि नाति र अैनले जार हान्न हुन्या सम्मका नातीन्या वुहारिको करणि गर्न्या मासिन्या मतुवाली जात गैह्रलाई राजषत लाग्नाले करणि गर्न्या गराउन्या दुवैलाई मासिदिनु.

९. भांजा भांजि पट्टीका नातामा सधवा भया पनि विधवा भया पनि कंन्या भया पनि आफ्ना वावुवाट जन्म्याका दिदि वैन्हिका छोरि भांजि र अैनले जार हान्न हुन्या भांज्या वुहारिको करणि गर्न्या मासिन्या मतवालीजात गैह्रलाइ राजषत लाग्नाले लोग्न्या स्वास्नि दुवैलाइ मासिदिनु.

१०. मावली पट्टिका नातामा आमालाइ जन्माउन्या वज्यू आमाका सहोदर वज्यू आमा जन्म्याका एका वावुवाट जन्म्याका दिदि वैन्हि सानि ठुली आमा र मामाका जार हान्न हुन्या सम्मका स्वास्नि माइज्यूको करणि गर्न्या मासिन्या मतुवाली जात गैह्रलाइ राजषत लाग्नाले लोग्न्या स्वास्नि दुवैलाइ मासि दिनु.

११. मावली पट्टिका नातामा आमाका सौतिन्या आमाका छोरि सानि ठुली आमा र आमाकि आमाका एका वावुवाट जन्म्याका दिदि वैन्हि वज्यूहरूको करणि गर्न्या मासिन्या मतुवाली जात गैह्रलाइ सधवा भया साधुलाइ २० रुपैया विहा षर्च भराइ लोग्न्यालाई २० स्वास्निलाइ १० रुपैया दंड गर्नु कंन्या विधवा भया राजषत लाग्नाले करणि गर्न्या लोग्न्यालाइ १५ रुपैया स्वास्नि लाइ १० रुपैया दंड गर्नु.

१२. ससुराली पट्टिका नातामा आफ्ना स्वास्निका आमा सासु आफ्ना ससुराले विहा गरि ल्यायाका स्वास्नि सासु ससुरालाइ र साधुलाइ जन्माउन्या वुढि सासु ऐतिको करणि गर्न्या मासिन्या मतुवाली जात गैह्रलाइ करणि गर्न्या र करणि गराउन्या दुवैलाइ मासिदिनु.

१३. आफुलाइ दिक्षा मंत्र सुनाउन्या गुर्मा र गुरूका अैनले जार हान्न हुन्या स्वास्नि गुर्माको करणि गर्न्या मासिन्या मतुवाली जात गैह्रका लोग्न्या स्वास्निलाइ मासिदिनु.

१४. आफुलाइ जन्माउन्या वावु आफ्ना एका वावुवाट जन्म्याका दाज्यू भाइ आफुले जन्मायाका छोरालाई करणि दिन्या आफ्ना ससुरालाइ करणि दिन्या स्वास्निहरूमा नमासिन्या जातका स्वास्नि भया ३ वर्ष कैद गर्नु म्यादका रुपैया तिऱ्या ली छाडनु मासिन्या जात पानि नचलन्या जात छोइ छिटो हालनु पर्न्या जातका स्वास्निलाइ मासिदिनु.

१५. मासिन्या जातमा पानि चलन्या नचलन्या गैह्र जातले आफ्ना एका वावुवाट जन्म्याका ज्येठा कांछा वावुका छोरिका छोरि भांजिहरू र आफ्ना एका वावुवाट जन्म्याका दाज्यू भाइका छोरिका छोरि नातिनीहरूको करणि गरेछ भन्या सधवा भया अैन वमोजिम् साधुको षुसि कन्या र विधवा भया करणि गर्न्या गराउन्या लोग्न्या स्वास्नि दुवैलाइ मासिदिनु एति नाता वाहेक अरू गोटिया भाइहरूका छोरिका छोरिको करणि गरि भातमा वोरेछ भन्या सधवा भया अैन वमोजिम साधुको षुसि ११ वर्ष नाघ्याका कंन्या विधवा भया नाता नलाग्न्या कुटुँवका कंन्या विधवाको करणि गर्न्यालाइ लेष्याका अैन वमोजिम् सजाय गर्नु भातमा वोऱ्याको नभया षतवात लाग्दैन.

# छिटो हालनु नपर्न्या

## देसि मुसल्मा वाहेक चुडारा लगायेत् छोइ छिटो हालनु नपर्न्या पानि नचल्न्या जात गैन्ह हाड नातामा करणि गर्न्याको तपसिल्

१. सधवा भया पनि विधवा भया पनि वेस्या भया पनि आफु जन्माउन्या आमाको करणि गर्न्या मुसल्मान् वाहेक् छिटो हालनु नपर्न्या पानि नचलन्या गैह्र जातलाइ काटि मारिदिनु.

२. आफ्ना एका वावुवाट जन्म्याका दिदि वैन्ही आफुले जन्मायाका छोरिको करणि गर्न्या पानि नचलन्या छिटो हालनु नपर्न्या जात गैह्रको अैन वमोजिम्को अंश सर्वस्व गरि दामल् गर्नु.

३. आफुलाइ जन्माउन्या आमा आफ्ना एका वावुवाट जन्म्याका दिदि वैन्हि आफुले जन्मायाका छोरि र भाउज्यू नाता पर्न्या वाहेक हाडका ४ पुस्ता संमका ११ वर्ष नाघ्याका सधवा विधवा कंन्याको करणि गर्न्या छिटो हालनु नपर्न्या जातका लोग्न्या र करणि दिन्या स्वास्नि दुवैलाई मासिदिनु.

४. आफ्ना हाडमा ४ पुस्तादेषि माथि जतिसुकै पुस्ताका भया पनि ११ वर्ष नाघ्याका कन्या र विधवाको करणि गर्न्या मुसल्मान् वाहेक छिटो हालनु नपर्न्या पानि नचल्न्या गैह्र जातका लोग्न्यालाइ १२ वर्ष स्वानिलाई ८ रूपैया दंड गरि लि लोग्न्या स्वास्नि छुटचाई दिनु जात जादैन.

५. मुसल्मान् वाहेक छिटो हालनु नपर्न्या पानि नचलन्या जात गैह्रले आफ्ना हाडमा ४ पुस्तादेषि उभोका सधवा स्वास्निको करणि गऱ्यो भन्या विहा गरि ल्यायाका र विहाको रित गरि ल्यायाका स्वास्नि भया १५ रुपैया विहा षर्च भराइ लोग्न्यालाइ १५ हाड फोरा पर्नाले स्वास्निलाइ ८ रुपैया दंड गर्नु विहाको रित नपुऱ्याई ल्यायाको आफ्ना जात भातमा चलायाका स्वास्निको करणि गर्न्यालाइ विहा षर्च पर्दैन लोग्न्यालाइ १५ स्वास्निलाइ ८ रुपैया दंड गर्नु

जात भातमा नलियाका घर्मा ल्यायाका स्वास्निको करणि गर्न्या लोग्न्यलाइ ८ स्वास्निलाइ ४ रुपैया दंड गरी छुटचाई दिनु रुपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

६. मुसल्मान् वाहेक छोया छिटो हालनु नपर्न्या पानि नचलन्या जात गैह्रले विधवा भाउज्यू नाता पर्न्याका मनोमानले करणि गऱ्यो भन्या करणि गर्न्या गराउन्या दुवैलाइ राजषत लाग्दैन सधवा भाउज्यू नाता पर्न्याको करणि गऱ्यो भन्या साधुले अैन वमोजिम् अंस सर्वस्व गरि ली वस्याका गाउ सहरवाट नीकाली दिंछ तापनि केहि नगरि उसै छाडछ तापनि साधुको षुसि साधुले सजाय नगरि षतमाफ गरि छाडचाकाको जात जादैन साधुले सजाय गरिदेउ भनि करायो भन्या अडा गौडा अदालत् ठाना अमालवाट जारि गर्न्यालाइ पक्री अैन वमोजिम् अंस सर्वस्व गरि सर्वस्व मध्ये दसौद ली उपर साधुलाइ दि करणि गर्न्यालाइ ४ मैन्हा कैद गर्नु.

७. मुसल्मान् वाहेक छोइ छिटो हालनु नपर्न्या पानि नचलन्या जात गैह्रले भांजा भांजिका नातामा आफ्ना वावुवाट जन्म्याका दिदि वैन्हिका छोरि भांजिको र अैन ले जार हान्न हुन्या भांजा वुहारिको करणि गऱ्यो भन्या करणि गर्न्या करणि दिन्या दुवैलाइ मासि दिनु.

८. मुसल्मान् वाहेक छोइ छिटो हालनु नपर्न्या पानि नचलन्या जात गैह्रले मावली पट्टिका नातामा आफ्नि आमालाई जन्माउन्या वज्यू आमाका सहोदर वज्यू आमाका एका भुडिका र सौतिन्या पट्टि दिदि वैन्हि सानि थुलि आमा पर्न्या मामाका अैनले जार हान्न हुन्या सम्मका स्वास्नि माइज्यु आमाकि आमाका एका भुडिका दिदि वैन्हि वज्यूहरूको करणि गर्न्या गराउन्या दुवैलाइ मासि दिनु.

९. मुसल्मान् वाहेक छोइ छिटो हालनु नपर्न्या पानि नचलन्या जात गैह्रले ससुराली पट्टिका नातामा आफ्नि स्वास्निलाइ जन्माउन्या वज्यू ससुराले विहा गऱ्याका स्वास्नि सासु ससुरालाइ र सासुलाइ जन्माउन्या वुढि सासुको करणि गर्न्या र गराउन्या दुवैलाइ मासिदिनु.

# छिटो हाल्नु पर्न्या

## आफ्ना हाड नातामा करणि गर्न्या छिटो हालनु पर्न्या

## पानि नचलन्या जातको

## तपसिल्

१. सधवा भया पनि विधवा भया पनि वेस्या भया पनि आफुलाइ जन्माउन्या आमाको करणि गर्न्या छोइ छिटो हालनु पर्न्या जात गैह्रलाइ काटि मारि दिनु.

२. आफ्ना एका वावुवाट जन्म्याका दिदि वैन्हि आफुले जन्मायाका छोरिको करणि गर्न्या छोइ छिटो हालनु पर्न्या जात गैह्रलाई अैन वमोजिम्को अंस सर्वस्व गरि दामल् गर्नु.

३. आफुलाइ जन्माउन्या आमा आफ्ना एका वावुवाट जन्म्याका दिदि वैन्हि आफुले जंन्मायाका छोरि र भाउज्यू नाता पर्न्या वाहेक् हाडमा ४ पुस्तासम्मको ११ वर्ष नाघ्याका सधवा विधवा कंन्याको करणि गर्न्या र गराउन्या छोइ छिटो हालनु पर्न्या जात गैह्रका लोग्न्या स्वास्नि दुवै मासिदिनु.

४. आफ्ना हाडमा ४ पुस्तादेषि माथि जतिसुकै पुस्ता भया पनि ११ वर्ष नाघ्याका कंन्या र विधवाको करणि गर्न्या छोइ छिटो हालनु पर्न्या जात गैह्रका लोग्न्या लाइ १२ स्वास्निलाई ८ रुपैया दंड गरि ली लोग्न्या स्वास्नि छुटचाई दिनु जात जादैन.

५. छोइ छिटो हालनु पर्न्या जात गैह्रले आफ्ना हाडमा ४ पुस्तादेषि उभोका सधवाको करणि गऱ्यो भन्या विहा गरि ल्यायाका र विहाको रित गरिल्यायाका स्वास्नि भया १५ रुपैया विहा षर्च भराइ लोग्न्यालाइ १५ हाड फोरा पर्नाले स्वास्निलाइ ८ रुपैया दंड गर्नु विहाको रित नपुऱ्याई ल्यायाका आफ्ना जात भातमा चल्याका स्वास्निको करणि गर्न्यालाइ विहा षर्च पर्दैन लोग्न्यालाइ १५ स्वास्निलाइ ८ रुपैया दंड गर्नु जात भातमा नलियाका घरमा ल्यायाका स्वास्निको करणि गर्न्या लोग्न्यालाइ ८ स्वास्निलाइ ४ रुपैया दंड गरि छुटचाई दिनु रुपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

६. छोइ छिटो हालनु पर्न्या जात गैह्रले विधवा भाउज्यू नाता पर्न्या.का मनो मानले करणि गऱ्यो भन्या करणि गर्न्या गराउन्या दुवैलाइ राजषत लाग्दैन सधवा भाउज्यू नाता पर्न्याको करणि गऱ्यो भन्या साधुले अैन वमोजिम् अंस सर्वस्व गरि लि वस्याका गाउ सहरवाट निकालि दिंछ तापनि केहि नगरि उसै छाडछ तापनि साधुको षुसि साधुले सजाय नगरि षत माफ गरि छाडनाको को जात जादैन साधुले सजाय गरि देउ भनि करायो भंन्या अडा गौडा अदालत् ठाना अमालवाट जारि गर्न्यालाइ पक्रि अैन वमोजिम् अंस सर्वस्व गरि दसौद ली उपर साधुलाइ दिनु भाउज्यू साहिनामा साधुले सजाय नगरि छोडचो भन्या राजषत लाग्दैन.

७. भांजा भांजिका नातामा आफ्ना एका वावुवाट जन्म्याका दिदि वैन्हिका छोरि भांजिको र अैनले जार हान्न हुन्या भांज्या वुहारिको करणि गर्न्या छोइ छिटो हालनु पर्न्या जात गैह्रलाइ करणि गर्न्या गराउन्या दुवैलाइ मासि दिनु.

८. मावली पट्टिका नातामा आफ्नि आमालाइ जन्माउन्या वज्यू आमाका सहोदर वज्यू आमाका एका वावुवाट जन्म्याका सानि ठुलि आमा पर्न्याहरू मामाका अैनले जार हान्न हुन्यासंमका स्वास्नि माइज्यू आमाकि आमाका एका वावुवाट जन्म्याका दिदि वैन्हि वज्यूहरूको करणि गर्न्या छोइ छिटो हालनु पर्न्या जात गैह्रलाइ करणि गर्न्या गराउन्या दुवैलाइ मासि दिनु.

९. ससुराली पट्टिका नातामा आफ्नि स्वास्निलाइ जन्माउन्या सासु ससुराले विहा गरि ल्यायाका स्वास्नि सासु ससुरालाइ र सासुलाइ जन्माउन्या वुढि सासुको करणि गर्न्या छोइ छिटो हालनु पर्न्या जात गैह्रलाइ करणि गर्न्या र गराउन्या दुवैलाइ मासिदिनु.

# राजषत् लाग्न्या हाडनाता वाहेक अरु सनहेमा करणि गर्न्याका अैन्.

### तपसिल्

१. आफ्ना हाडमा र अैनमा सजाय लेषियाका नातामा करणि गर्न्यालाइ अैन वमोजिम्सजाय गर्नु सजाय लेषीयावाहेक अरू सनहेमा करणि गर्न्यालाइ सधवा भया साधुको षुसि जात मिल्दा कंन्या र विधवाको राजि षुसिले करणि गरि भातमा वोऱ्याको रहेनछ भन्या षत् लाग्दैन करणि गरि भात्मा स्मेत् वोरेछ भन्या व्राम्हणलाइ १०० रजपूतलाइ ६० तागा धारिलाइ ५० नमासिन्या मतवालिलाइ २० मासिन्यालाइ ५ रूपैया का दर्ले दंड गर्नु जवरजस्ति करणि गरे छ भन्या जवरजस्ति करणि गर्न्याका अैन वमोजिम्सजाय गर्नु अैनमा सजाय लेषियाका हाडनाता वाहेक अरू सनहेमा विधवाल्याउन्या र विहा गर्न्या लाइ षत् वात लाग्दैन.

२. फुपु पट्टिका अैनमा सजाय लेष्याका नातामा कर्णि गर्न्यालाइ अैन वमोजिम्सजाय गर्नु सजाय लेष्या वाहेकमा करणि गर्न्यालाइ सधवा भया साधुको षुसि जात मिल्दा कंन्या र वीधवाको राजि षुसिले करणि गरि भातमा वोऱ्याको रहेनछ भन्या षत्वात लाग्दैन करणि गरि भात्मा स्मेत् वोरेछ भन्या व्राम्हणलाइ १०० रजपूतलाइ ६० तागा धारिलाइ ५० नमासिन्या मतवालिलाइ २० मासिन्यालाइ ५ रूपैयाका दरले दंड गर्नु जवरजस्ति करणि गरेछ भन्या जवरजस्ति करणि गर्न्याका अैन वमोजिम्सजाय गर्नु. फुपु नाता वाहेक फुपुका अरू संतानमा विहा गर्न्या र विधवाल्याउन्यालाइ षत्वात् लाग्दैन.

३. मावलि पट्टिका नातामा. आफ्नि आमालाइ जन्माउन्या वज्यू आमाका सहोदर वज्यू आमाका.एका वावुवाट जन्म्याका दिदिवैन्हि सानिठुलि आमा. मामाका अैनले जारहांन हुन्या सम्मका स्वास्नि माइज्यूहरू आमाका सौतिन्या आमाका छोरि सानि ठुलि आमा र आमाकि आमाका एका भूडिका दिदि वैन्हि वज्यूहरूको करणि गर्न्यालाइ अैन वमोजिम् सजाय गर्नु एति नात वाहेक अरू सनेहमा करणि गर्न्यालाइ सधवा भया साधुको षुसि जात मिल्दा कंन्या र. विधवाको राजि षुसिले करणि गरि भात वोऱ्याको रहेनछ भन्या षत्वात लाग्दै न कर्णि गरि भात्मास्मेत् वोरेछ भन्या व्राम्हणलाइ १०० रजपूतलाइ ६० तागाधारिलाइ ५० नमासिन्या

मतवालिलाइ २० मासिन्यालाइ ५ रूपैयाका दर्ले दंड गर्नु जवरजस्ति करणि गरेछ भन्या जवरजस्ति करणि गर्न्याका अैन वमोजिम् सजाय गर्नु अैनमा सजाय लेषियाका नाता वाहेक अरू सनेहमा विधवाल्याउन्या र विहा गर्न्यालाइ षत्वात लाग्दैन.

४. भांजा भांजी पट्टिका नातामा आफ्ना एका वावुवाट जन्म्याका दिदि वैन्हिका छोरि भांजिहरू र भानिजका अैनले जारहांन हुन्या सम्मका स्वास्नि भांज्या वुहारिको करणि गर्न्यालाइ अैन वमोजिं सजाय गर्नु एति नाता वाहेक अरू भांजा भांजिका संतान्मा सधवाको करणि गर्न्यालाइ. साधुको षुसि जातमिल्दा विधवा र कंन्याको करणि गरि भातमा वोऱ्याको रहेनछ भन्या षत्वात लाग्दैन करणि गरि भात्मास्मेत् वोरेछ भन्या व्राम्हणलाइ १०० रजपूतलाइ ६० तागा धारिलाइ ५० नमासिन्या मतवालिलाइ २० मासिन्यालाइ ५ रूपैया दंड गर्नु जवरजस्ति करणि गरेछ भन्या जवरजस्ति करणि गर्न्याका अैन वमोजिं सजाय गर्नु. भांजि र भांज्या वुहारि इन्का अरू संतानमा विधवाल्याउन्या र विहा गर्न्यालाइ षतवात् लाग्दैन.

५. ससुरालि पट्टिका नातामा आफ्नि स्वास्निलाइ जन्माउन्या सासु र ससुराका अैनले जारहांन्न हुन्या संमकास्वास्नि सासुहरू ससुरालाइ र सासुलाइ जन्माउन्या वुढि सासुको करणि गर्न्यालाइ अैन वमोजिम सजाय गर्नु एति जात वाहेक अरू सनहेमा करणि गर्न्यालाइ सधवा भया साधुको षुसि जात मिल्दा कंन्या र विधवाको राजि षुसिले कर्णि गरि भात्मा वोऱ्याको रहेनछ भन्या षत्वात लाग्दैन करणि गरि भात्मा समेत वोरेछ भन्या व्राम्हणलाइ १०० रजपूतलाइ ६० तागा धारिलाइ ५० नमासिन्या मतवालिलाइ २० मासिन्यालाइ ५ रूपैया का दरले दंड गर्नु जवरजस्ति करणि गरेछ भन्या जवरजस्ति करणि गर्न्याका अैन वमोजिम्सजाय गर्नु अैनमा सजाय लेषियाका नाता वाहेक ससुरालि पट्टिका नातामा जेठा कांछा ससुराका स्वास्नि सासुहरू जेठु सालाका स्वास्नि जेठि सासु फुपू सानि ठुलि आमा सासु गैह्रअरू सनहेमा विधवाल्याउन्या र विहा गर्न्यालाइ षत्वात लाग्दैन.

# हाड नाताका वेस्या भयाको करणि गर्न्या
# तागाधारिको

१. व्राम्हण लगायेत्. तागाधारि जातका आफ्ना ७ पूस्तासंमका हाडका. काका वाज्या दाज्यू भाइ भतिजा नाति पर्न्याले विहा गरि जारि गरि ल्यायाका कंन्या विधवा ल्यायाका अैनले जार हाँन हुन्यासम्मका स्वास्निका आफ्ना षसम्को सत्य छोडि अर्कासित पोइल गयाका स्वास्निको विग्र्याको थाहा नपाइ कसैले करणि गरेछ सो कर्णि दवाइ स्वास्निका हात्को आफुले षाइ आफ्ना हातबाट भताहालाइ वोरेछभन्या अैन वमोजिम्को अंससर्वस्व गरिभात वाहेक गरि छोडि दिनू. आफुले स्वास्निका हातको भात षाइ अरूलाइ भातमा वोऱ्याको रहेनछ भन्या ५० रूपैया दंड गरि भात वाहेक गरि छाडि दिनु करणि गरि स्वास्नीको हातको भात खाएको रहेनछ अरुलाइ पनि वोऱ्याको रहेनछ भन्या ५० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम्कैद गर्नु जात जादैन.

२. व्राम्हण लगायेत् तागाधारि जातका आफुलाइ जन्माउन्या आमा र आफुले जन्मायाका छोरी आफ्ना एका आतका दिदि वैन्हि वाहेक अरू आफ्ना हाडका ७ पूस्ता संमका फूपु फुपुवज्यू दिदि वैन्हि छोरि नातिनी नाता पर्न्या र. आफ्ना वावुवाट जन्म्याका दिदि वैन्हिका छोरि भांजी र आफ्ना आमाका एका दाइवाट जन्म्याका सानि ठुलि आमा विवाहिता स्वास्नि कि आमा सासु आफ्नि गुर्माहरूमा आफ्ना षसम्को सत्य छोडि अर्कासित पोइल गयाका स्वास्निको विग्र्याको थाहा नपाइ कसैले कर्णि मात्र गरेछ भन्या अैन वमोजिमको अंश गर्नु जात जादैन कर्णि गरि उस्का हातको भात स्मेत षायेछ भन्या सर्वस्व गरि जात वाहेक गरि दिनु कर्णि गरि आफुले उस्का हातको भात षाइ आफ्ना हातवाट अरूलाइ स्मेत् भातमा वोरेछ भन्या अैन वमोजिम्को अंस सर्वस्व गरि १ वर्ष कैद गरि छाडि दिनु.

३. उपाध्या लगायेत् तागाधारि जातले आफ्ना एका वावुवाट जन्म्याका दिदि वैन्हि र आफुले जन्मायाका छोरि आफ्ना षसम्को सत्य छोडि अर्कासित गयाका जतिसुकैसित विग्र्याका भया पनि एस्ताको कर्णि गर्न्याको अैन वमोजिम्को अंस सर्वस्व गरि जनै झिकि मुडि रक्सी सुगुर्को मासु षुवाइ जात पतित गरि पूर्वको भया पश्चिम् पश्चिम्को भया पुर्वतर्फ नदि कटाइ धपाइ

दिनू. एस्ताका हातको भात चल्दैन पानि चल्छ पानिको मात्र पतिया दिनु एस्ता नमासिन्या शुद्र जात हुंछन्.

४. उपाध्या लगायेत् तागाधारि जात गैह्रले आफ्ना वावुवाट जन्म्याका दिदि वैन्हि र आफुले जन्मायाका छोरि वाहेक एका वाज्यावाट जन्म्याका छोरि फुपु आफ्नाज्येठा कांछावावुवाट जन्म्याका छोरि दिदि वैन्हि आफ्नाएका वावुवाट जन्म्याका दाज्यू भाइका छोरी भतिजीहरू आफूले जन्मायाका छोराका छोरि नातिनि आफ्ना छोरिका छोरि नातिनि आफ्ना साक्षात् दिदि वैन्हिका छोरि भांजि आफ्ना जेठा कांछा वावुका छोराका छोरि भतिजि आफ्ना वावुलाइ र आमा लाइ जन्माउन्या वज्यू आफ्ना आमाका सहोदर दिदि वैन्हि सानि ठुलि आमा आफ्ना विवाहितास्वास्निलाइ जन्माउन्या सासु आफुलाइ मंत्र सुनाउन्या गुर्मा आफुले मंत्र सुनायाका सिष्यानि एतिमा आफ्ना षसम्को सत्य छोडि अर्कासित पोइल गयाकालाइ जति सुकै लिंग परि कर्णि गऱ्या पनि तेस्ताको अैन वमोजिम्को अंस सर्वस्व गरि जनै झिकि जात पतित गरि लोग्न्या स्वास्नि छुटचाइ पानिको मात्रै पतिया दिनू भात चल्दैन.

५. उपाध्या लगायेत् तागाधारि जात गैह्रले आफुलाइ जन्माउन्या आमा वाहेक् अरू वावुले अैनले जार हाँन हुन्यासम्मका ल्यायाका सौतिन्या आमा आफुलाइ मंत्र सुनाउन्या गुरूका स्वास्नि गुर्मा आफ्नि आमा का विमातृ पट्टिका दिदि वैन्हि सानि ठुलि आमा सासुलाइ र ससुरालाइ जन्माउन्या वुढी सासु ससुराले अैनले जार हांन हुन्यासम्मका स्वास्नि सौतिन्या सासुहरूमा आफ्ना षसम्को सत्य छोडि अर्कासित पोइल गयाका स्वास्निको कर्णि गरि भात स्मेत् षाइ भताहालाइ भातमा वोरेछ भन्या अैन वमोजिम्को अंस सर्वस्व गरि. जात भात वाहेक्. गरि छाडि दिनु एस्ताका हातको भात चल्दैन भातमा वोऱ्याको रहेनछ भन्या १०० रूपैया दंड गरि. छुटचाइ दिनु जात जादैन.

६. उपाध्या र तागाधारिजात गैह्रले आफ्ना हाडमा ३ पुस्तादेखियुढो ७ पुस्तासंमका दाज्यूभाइ काकावाज्या छोरा भतिजा पर्न्याका छोरि फुपु वज्यू दिदि वैन्हि छोरि नातिनि. पनातिनि नाता पर्न्या स्वास्नीहरुमा आफ्ना षसम्को सत्य छोडि अर्कासित पोइल गयाका को आफु तेश्रो परि कर्णिगऱ्यो भन्या लोग्न्या रहेछ भन्या जार हांन्याको षुसि लोग्न्या रहेनछ भन्या र जार हानेन भन्या राजषत् लाग्नाले कर्णि गरि स्वास्निका हातको आफुले भात षाइ आफ्ना हातवाट अरु

भताहा लाइ वोरेछ भन्या १२० रुपैया दंड गरि भात वाहेक गरिदिनू. भात षायाको रहेनछ भन्या ६० रुपैया चौथो लिंग परि कर्णि गर्न्यालाइ ३० रुपैया जतिसुकैसित विग्र्‍याकि भया पनि चौथोलिंगदेषि युढो परि कर्णि गर्न्यालाइ १५ रुपैया दंड गरि छुट्याइदिनु.

७. उपाध्या लगायेत् तागाधारि जात गैन्हले आफ्ना हाडमा ७ पुस्तादेखि माथि १४ पुस्ता सम्म का दाज्यू भाइका छोरि फुपु वज्यू दिदि वैन्हि छोरि भतिजि नातिनि पनातिनि नाता पर्न्याहरूमा आफ्ना षसम्को सत्य छोडि अर्कासित पोइल गयाका स्वास्नीको आफु तेश्रो परि कर्णि गऱ्यो भन्या लोग्न्या रहेछ भन्या जार हांन्याको षुसि लोग्न्या रहेनछ भन्या र. जार हानेन भन्या कर्णि गरि स्वास्निका हातको आफुले भात षाइ आफ्ना हातवाट अरू भताहालाइ भातमा वोरे छ भन्या १२० रुपैया दंड गरि भात वाहेक गरिदिनू आफुले भात षायाको रहेनछ भन्या राजषत लाग्नाले ३० रुपैया चौथो परि कर्णि गर्न्यालाइ १५ रुपैया जतिसुकै सित विग्र्‍याकि भया पनि आफु पांचलिंगदेषि युढो परि कर्णि गर्न्यालाइ १० रुपैया दंड गरि लोग्न्या स्वास्नि छुट्याइ दिनु.

८. उपाध्या लगायेत् तागाधारि जात गैन्हले आफ्ना हाडमा १४ पुस्ता देखि माथि २१ पुस्तासम्मका दाज्यू भाइका छोरि फुपु वज्यू दिदि वैन्हि छोरी भतिजी नातिनि पनातिनि साहिनू पर्न्याहरूमा आफ्ना षसम्को सत्य छोडी अर्कासित पोइल गयाका स्वास्नीको आफुले तेश्रो परि कर्णि गर्न्यालाइ लोग्न्या रहेछ भन्या जार हांन्याको षुसि जार हानेन वा लोग्न्या रहेनछ भन्या कर्णि गरि स्वास्निका हातको आफुले भात षाइ आफ्ना हातवाट अरूभताहालाइ भात मा वोरेछ भन्या १२० रुपैया दंड गरि भात वाहेक गरि दिनु आफुले भात षायाको रहेनछ भन्या राजषत् लाग्नाले २० रूपैया चौथोलिंग परि कर्णि गर्न्यालाइ १० रूपैया जति सुकै सित विग्न्या कि भया पनि आफु पांचलिंग देषि युढो परि कर्णि गर्न्यालाइ ५ रूपैया दंड गरि लोग्न्या स्वास्नि छुट्याइ दिनू २१ पूस्ता देषि युढोका आफ्ना षसम्को सत्य छोडि अर्कासित विग्र्‍याका स्वास्निको कर्णि गर्न्यालाइ राजषत् लाग्दैन.

९. उपाध्या लगायेत् तागाधारि जातका आफ्ना हाडका ७ पूस्तासम्मका काका वाज्या भाइ भतिजा छोरा नातिहरूले विहा गरि ल्यायाका दियो कलस पूजि ल्यायाका जारि गरि ल्यायाका कंन्या विधवा ल्यायाका र आफ्ना साक्षात् माइज्यू भांज्या वुहारिहरुमा आफ्ना षसम्को सत्य

छोडि अर्कासित पोइल गयाका स्वास्नीहरूसित विग्र्याको आफुले थाहा पाइ आफु तेश्रो परि कर्णि गर्‍यो स्वास्निका हातको भात षायाको रहेनछ भन्या लोग्न्या रहेछ भन्या जार हांन्या जातको अैन वमोजिम् साधुको षुसि लोग्न्या रहेनछ भन्या र जार हानेन भन्या भात्मा वोर्‍याको रहेनछ भन्या राजषत् लाग्नाले २५ रूपैया दंड गर्नु. स्वास्निका हातको भात षाइ आफ्ना हातवाट अरूलाइ वोरेछ भन्या १२० रूपैया दंड गरि जात वाहेक् गरि छाडि दिनु. आफू चौथोलिंग परि कर्णि गर्न्यालाइ १५ रूपैया जतिसुकै सित विग्र्या कि भया पनि पाचलिंग देषि युढो परि कर्णि गर्न्यालाइ १० रूपैया दंड गरि छुटच्याइ दिनु.

१०. उपाध्या लगायेत् तागाधारि जात गैन्हले आफ्ना हाडका ७ पुस्तादेखि १४ पुस्ता सम्म का दाज्यू भाइका विहा गरि ल्यायाका जारि गरि ल्यायाका कंन्या विधवा ल्यायाका दियो कलस पुजि ल्यायाका अैनले जार हांन हुन्यासम्का स्वास्निमा आफ्ना षसम्को सत्य छोडि अर्कासित विग्र्याका स्वास्निलाइ आफु तेश्रो परि कर्णि गर्‍यो भन्या लोग्न्या रहेछ भन्या जार हांन्या जातको अैन वमोजिम् साधुको षुसि लोग्न्या रहेनछ भन्या र कर्णि गरि स्वानिका हातको आफुले भात षाइ आफ्ना हातवाट अरू भताहालाइ. भातमा वोरेछ भन्या १२० रूपैया दंड गरि. भात वाहेक् गरि दिनु. भात षायाको रहेनछ भन्या राजषत् लाग्नाले १५ रूपैया चौथोलिंग परि कर्णि गर्न्यालाइ १० रूपैया पांचौ परि कर्णि गर्न्यालाइ ५ रूपैया दंड गरि छुटच्याइ दिनू १४ पुस्ता युढोका आफ्ना षसम्को सत्य छोडि पोइल गयाका स्वास्निको कर्णि गर्न्यालाइ राजषत् लाग्दैन.

# ऐ. नमासिन्याको.

१. नमासिन्या मतवाली जात गैह्रका आफ्ना एका वावुवाट जन्म्याका दिदि वैन्हि आफुले जन्म्यायाका छोरिमा आफ्ना षसम्को सत्य छोडि अर्कासित विग्र्याका लाइ जतीसुकै लिंग परि कर्णि गर्‍याको भया पनि तेस्ताको अैन वमोजिम्को अंस सर्वस्व गरि मुडि कुकुर्को मासु षुवाइ भात वाहेक् गरि पूर्वको भया पश्चिम पश्चिम्को भया पूर्वतर्फ नदि कटाइ धपाई दिनू. एस्ताका हातको भात चल्दैन पानि चल्छ पानिको मात्र पतिया दिनू. एस्ता मासिन्या भोट्या जात हुंछन्.

२. नमासिन्या मतवालि जात गैह्रले आफ्ना हाडमा ४ पुस्तासम्मका फुपु वज्यु फुपु दिदि वैन्हि छोरि भतिजि नातिनि पनातीनि नाता पर्न्या र आफनी छोरिका छोरि नातिनि दिदि वैन्हिका छोरि भांजि वाबुलाइ र. आमालाइ जन्माउन्या वज्यू आफनी स्वास्निलाइ जन्माउन्या सासु आमाका सहोदर दिदि वैन्हि सानि ठुलि आमा आफुलाइ मंत्र सुनाउन्या गुर्मा एतिमा आफ्ना षसम्को सत्य छोडि अर्का सित विग्र्याका लाइ जतीसुकै लिंग परी कर्णि गर्‍याको भया पनि लोग्न्या रहेछ भन्या जार हान्या जातको अैन वमोजिं साधुको षुसि लोग्न्या रहेनछ वा जार हानेन भन्या राजषत् लाग्नाले अैन वमोजिम्को अंस सर्वस्व गरि १ वर्ष कैद गरि जात पतित गरि भोट्या जातमा मिलाइ दिनु म्यादको चौवर दिया रूपैया लिनु एस्ताका हातको भात चल्दैन पानि चल्छ पानिको मात्र पतिया गरि लोग्न्या स्वास्नि छुट्याई दिनु.

३. नमासिन्या मतवालि जात गैह्रले आफुलाइ जन्माउन्या आमा वाहेक् अरू वावुले अैनले जार हांन हुन्यासम्मका ल्यायाका सौतिन्या आमा आफुलाइ मंत्र सुनाउन्या गुरूका स्वास्नि गुर्मा आफनि आमाकाविमात्रि पट्टिका दिदि वैन्हि सानि ठुलि आमा सासुलाइ र. ससुरालाइ जन्माउन्या वुढी सासु ससुराले अैनले जार हांन हुन्यासम्मका स्वास्नि सौतिन्या सासु एतिमा आफ्ना षसमको सत्य छोडि अर्कासित पोइल गयाका स्वास्निको आफू तेश्रो परि कर्णिगर्न्या लाइ लोग्न्या रहेनछ भन्या जार हान्या जातको अैन वमोजिम् साधुको षुसि लोग्न्या रहेछ वा जार हानेन भन्या राजषत् लाग्नाले ६० रूपैया दंड गर्नु चौथो परि कर्णि गर्न्यालाइ ३० जतिसुकै सित विग्र्या कि भया पनि पांचौ देषि युढो परि कर्णि गर्न्यालाइ १५ रूपैया दंड गरि लोग्न्या स्वास्नि छुटचाइ दिनु जात जादैन.

४. नमासिन्या मतवालि जात गैह्रका आफ्ना हाडमा ४ पुस्ता देषि युढो ७ पुस्ता सम्मका दाज्यू भाइकाका वाज्या छोरा भतिजा पर्न्याका छोरि फुपु वज्यू दिदि वैन्हि छोरि नातिनि पनातिनि नाता पर्न्या स्वास्निहरूमा आफ्ना षसम्को सत्य छोडि अर्कासित पोइल गयाकाको आफु तेश्रो परि कर्णि गर्‍यो भन्या लोग्न्या रहेछ भन्या जार हांन्या जातको अैन वमोजिम् साधुको षुसि लोग्न्या रहेछ भन्या र. जार हानेन भन्या राज षत् लाग्नाले ४० रूपैया चौथो लिंगपरि कर्णि गर्न्यालाइ २० रूपैया जति सुकै सितविग्र्याकि भयापनि पाँच लिंगदेषि युढो परि कर्णि गर्न्यालाइ १० रूपैया दंड गरि छुटचाइ दिनु.

५. नमासिन्या मतवालि जातका हाडमा ७ पुस्ता देषि उभोमा १४ पुस्तासम्मका दाज्यू भाइ काका वाज्या छोरा भतिजा नाता पर्न्याका छोरि फुपु वज्यू दिदि वैन्हि छोरि नातिनि पनातिनि नाता पर्न्या स्वास्निमा आफ्ना षसम्को सत्य छोडि अर्कासित पोइल गयाका स्वास्निमा आफु तेश्रो परि कर्णि गर्‍यो भन्या लोग्न्या भया जार हांन्या जातको साधुको षुसि लोग्न्या रहेनछ भन्या र जार हानेन भन्या राजषत् लाग्नाले २० रूपैया चौथो परि कर्णि गर्न्यालाइ १० रूपैया जतिसुकै सित विग्र्या कि भया पनि पाँच चौ देषि युढो परि कर्णि गर्न्यालाइ ५ रूपैया दंड गरि छुटचाइ दिनु १४ पुस्ता देषि युढोका आफ्ना षसम्को सत्य छोडि अर्का सित विग्र्याकिको कर्णि गर्न्यालाइ षत् लाग्दैन.

६. नमासिन्या मतवालि जात गैह्रका आफ्ना हाडका ७ पुस्तासम्मका काका वाज्या भाइ भतिजा छोरा नातिहरूले विहा गरि ल्यायाका दियो कलस पूजि ल्यायाका जारिगरि ल्याका कंन्या विधवा ल्यायाका र आफ्ना साक्षात् माइज्यू भांज्या वुहारिहरू मा आफ्ना षसम्को सत्य छोडि अर्कासित पोइल गयाका स्वास्नीहरूसित आफु तेश्रो परी करणि गर्‍यो भन्या लोग्न्या रहेछ भन्या जारहांन्याको षुसि लोग्न्या रहेनछ भन्या र जार हानेन भन्या राजषत् लाग्नाले १० रूपैया आफू चौथो लिंग परि करणि गर्न्यालाइ ५ रूपैया जति सुकै सित विग्र्याकि भया पनि पांच लिंग देषि युढो परि करणि गर्न्यालाइ २॥ रूपैया दंड गरि छुटचाइ दिनु.

७. नमासिन्या मतवालि जात गैह्रका आफ्ना हाडका ७ पुस्तादेषि १४ पुस्तासम्मका दाज्यू भाइका विहा गरि ल्यायाका जारि गरि ल्यायाका कंन्या विधवा ल्यायाका दियो कलस पूजिल्यायाका

अैनले जार हांन हुन्या संम्मका आफ्ना षसम्को सत्य छोडि अर्कासित विग्याका स्वास्नीलाइ आफु तेश्रो परि करणि गऱ्यो भन्या लोग्न्या रहेछ भन्या जार हांन्या जातको साधुको षुसि लोग्न्या रहेनछ भन्या र जार हानेन भन्या राजषत् लाग्नाले ५ रूपैया चौथोलिंग परि करणि गर्न्यालाइ २॥ रूपैया दंड गरि छुटचाइ दिनु पांचौपरि करणि गर्न्यालाइ षत्वात लाग्दैन १४ पुस्ता देषि युढोका आफ्नाषसम्को सत्य छोडि अर्कासित पोइल गयाका स्वास्निको करणि गर्न्यालाइ पनि राज षत् लाग्दैन.

# ऐ मासिन्याको

१. मासिन्या मतवालि जात गैह्रले आफ्ना हाडमा ४ पुस्ता संमका दाज्यू भाइ काका वाज्या छोरा नाति पर्न्याका छोरि फुपु वज्यू दिदि वैन्हि छोरि भतिजि नातिनि पनातिनी पर्न्या र आफ्ना साक्षात् दिदि वैन्हिका छोरि. भांजि आफ्ना आमालाइ र वावुलाइ जन्माउन्या वज्यू आमाका सहोदर दिदि वैन्हि सानि ठुलि आमा आफ्नि स्वास्निलाइ जन्माउन्या सासु आफुलाइ मंत्र सुनाउन्या गुर्मा एतिमा आफ्ना षसंको सत्य छोडि अर्कासित पोइल गयाका लाइ जति सुकै लिंग परि करणि गऱ्या पनि लोग्न्यालाइ मासि दिनु करणि दिन्या स्वास्नि नमासिन्या जातकि रहिछ भन्या वेस्या हुंछे मासिन्या जातकि रहिछ भन्या. मासि दिनु.

२. मासिन्या मतवालि जात गैह्रले आफुलाइ जन्माउन्या आमा वाहेक अरू वावुले अैनले जार हांन हुन्या संमका ल्यायाका सौतिन्या आमा आफुलाइ मंत्र सुनाउन्या गुरूका स्वास्नि गुर्मा आफ्नि आमाका विमातृ पट्टिका दिदि वैन्हि सानि ठुलि आमा ससुरालाइ र सासुलाइ जन्माउन्या वुढि सासु ससुराले अैनले जार हान्न हुन्या संमका स्वास्नी सौतिन्या सासु यतिमा आफ्ना षसमको सत्य छोडि अर्कासित पोइल गयाका स्वास्निको आफू तेश्रो परि कर्णि गर्न्यालाइ लोग्न्या रहेछ भन्या जार हांन्या जातको अैन वमोजिम साधुको षुसि लोग्न्या रहेनछ वा जार हानेन भन्या राजषत् लाग्नाले २० रूपैया चौथो परि कर्णि गर्न्यालाइ १५ जतिसुकै सित विग्ऱ्याकि भया पनि चौथोदेषि युढो परि कर्णि गर्न्यालाइ अघिदेषि जार हांन्या जात रहेछ भन्या १० रूपैया दंड गरि छुटचाइ दिनु जात जादैन.

३. मासिन्या जातमा पानि चलन्या गैह्र जातका आफ्ना हाडमा ४ पुस्तादेषि युढो ७ पुस्तासम्ममा दाज्यू भाइकाका वाज्या छोरा भतिजा पर्न्याका छोरि फुपु वज्यू दिदि वैन्हिको छोरि नातिनि पनातिनि नाता पर्न्या स्वास्निहरूमा आफ्ना षसंको सत्य छोडि अर्कासित पोइल गयाकाको आफु तेश्रो परि कर्णि गऱ्यो भन्या लोग्न्या रहेछ भन्या अघिदेषि जार हांनि आयाका जातलाइ जार हांन्या जातको अैन वमोजिम्साधुको षुसि लोग्न्या रहेनछ भन्या र. जार हानेन भन्या अघिदेषि जार नहांन्या जात रहेछ भन्या राजषत् लाग्नाले १५ रूपैया चौथो लिंग परि कर्णि गर्न्यालाइ १० रूपैया जतिसुकै सित विग्ऱ्याकि भया पनि पाचौ लिंग देषि युढो परि कर्णि

गर्न्यालाइ ५ रूपैया दंड गरि छुटचाइ दिनु ७ पुस्तादेषि युढोका आफ्ना षसंको सत्य छोडि अर्कासित पोइल गयाका स्वास्नीको कर्णि गर्न्यालाइ राजषत् लाग्दैन.

४. मासिन्या मतवालि जात गैह्रले आफ्ना हाडका ७ पुस्तासंमका काका वाज्या भाइभतिजा छोरा नातिहरुले विहा गरि ल्यायाको दियोकलस पूजि ल्यायाका जारि गरि ल्यायाका कंन्या विधवा ल्यायाका र आफ्ना साक्षात् माइज्यू भांज्या वुहारिहरुमा आफ्ना षसंमको सत्य छोडि अर्कासित पोइल गयाका स्वास्निहरुसित आफु तेश्रो परि कर्णि गऱ्यो भन्या लोग्न्या रहेछ भन्या जार हांन्या जातको अैन वमोजिं साधुको षुसि लोग्न्या नरहेछ भन्या र जार हानेन भन्या राजषत् लाग्नाले १५ रूपैया आफु चौथो लिंग परि कर्णि गर्न्यालाइ १० रूपैया जतिसुकै सित विग्र्याकि भया पनि पाँच लिंगदेषि युढो कर्णि गर्न्या लाइ ५ रूपैया दंड गरि लोग्न्या स्वास्नी छुटचाइ दिनु ७ पुस्तादेषि युढो का आफ्ना षसम्को सत्य छाडि अर्कासित पोइल गयाका स्वास्नीको कर्णि गर्न्या लाइ पनि राजषत् लाग्दैन.

५. लिंवु किराति जात वाहेक तागाधारि जात र नमासिन्या मतवालि जात मासिन्या जात पानि नचलन्या जात छोया छिटो हालनु पर्न्याजातले आफ्ना वावुले विहा गरि लायाका कंन्या ल्यायाका विधवा ल्यायाका जारि गरी ल्यायाका अैनले जारहांन हुन्यासंमका स्वास्नी सानि आमाहरु अर्कासित विग्र्याका विग्र्याको जाहेर भै कर्णि गरें छ भन्या अैन वमोजिं अंस सर्वस्व गरि लोग्न्या स्वास्नी छुटचाइ दिनु एस्ता का हातको भात चल्दैन पानि चल्छ पानिको मात्र पतिया दिन छुटचाया पछि फेरि पनि कर्णि गऱ्यो भन्या जति फेरा कर्णि गर्छ उत्तिपल्ट १०।१० रुपैया दंड गरि छुटचाइ दिनु.

# ऐ पानि नचलन्याको.

१. छोया छिटो हालनु पर्न्या नपर्न्या गैह्र पानि नचलन्या जात्मा मुसल्मान् वाहेक ले आफ्ना हाडमा ४ पुस्ता संमका दाज्यू भाइ काका वाज्या छोरा नाति पर्न्या का छोरि फुपु वज्यू दिदि वैन्हि छोरि भतिजि नातिनि पनातिनी पर्न्या र आफ्नासाक्षात् दिदि वैन्हिका छोरि भांजि आफ्ना आमालाइ र वावु लाई जन्माउन्या वज्यू आमाका सहोदर दिदि वैन्हि सानि ठुलि आमा आफ्नि स्वास्निलाइ जन्माउन्या सासु आफुलाइ मंत्र सुनाउन्या गुर्मा एतिमा आफ्ना षसंमको सत्य छोडि अर्कासित पोइल गयाकालाइ जतिसुकै लिंग परि करणि गऱ्या पनि लोग्न्या स्वास्नि दुवैलाइ मासिदिनु.

२. छोइ छिटो हालनु पर्न्या नपर्न्या गैह्र पानि नचलन्या जातमा मुसल्मान् वाहेकले आफुलाइ जन्माउन्या आमा वाहेक अरू वावुले अैनले जार हान्न हुन्या संमका ल्यायाका सौतिन्या आमा आफ्नि आमाका विमातृ पट्टिका दिदि वैन्हि सानि ठुलि आमा ससुरालाइ र सासुलाइ जन्माउन्या वुढि सासु सासुले अैनले जार हान्न हुन्यासंमका स्वास्नी सौतिन्या सासु यतिमा आफ्ना षसंमको सत्य छोडि अर्कासित पोइल गयाका स्वास्निको आफू तेश्रो परि कर्णि गर्न्यालाइ लोग्न्या रहेछ भन्या जार हांन्या जातको अैन वमोजिम साधुको षुसि लोग्न्या रहेनछ वा जार हानेन भन्या राजषत् लाग्नाले १५ रूपैया दंड गर्नु चौथो परि कर्णि गर्न्यालाइ अघिदेषि जार हांन्या जात रहेछ भन्या १० जतिसुकैसित विग्र्याकि भया पनि चौथो देषि युढो परि कर्णि गर्न्यालाइ ५ रुपैया दंड गरि छुटचाइ दिनु जात जादैन.

३. छोया छिटो हालनु पर्न्या नपर्न्या गैह्र पानि नचलन्या जातमा मुसल्मान् वाहेक आफ्ना हाडमा ४ पुस्तादेषि युढो ७ पुस्तासम्मका दाज्यू भाइ काका वाज्या छोरा भतिजा पर्न्या का छोरि फुपु वज्यू दिदि वैन्हि छोरि नातिनि पनातिनि नाता पर्न्या स्वास्निहरुमा आफ्ना षसम्को सत्य छोडि अर्कासित पोइल गयाकाको आफुले तेश्रो परि कर्णि गऱ्यो भन्या लोग्न्या रहेछ भन्या अघिदेषि जार हानि आयाका जातलाइ जार हांन्याको षुसि लोग्न्या रहेनछ भन्या र जार हानेन भन्या अघिदेषि जार नहांन्या जात रहेछ भन्या राजषत् लाग्नाले १० रूपैया चौथो लिंग परि कर्णि गर्न्यालाइ ५ रूपैया दंड गर्नु जतिसुकै सित विग्र्याकि भया पनि पाँच लिंगदेषि युढो परि

कर्णि गर्न्यालाइ २॥ रूपैया दंड गरि छुटचाइदिनु ७ पुस्तादेषि युढोका आफ्ना षसम्को सत्य छोडयाकाको कर्णि गर्न्यालाइ राजषत् लाग्दैन.

४. छोया छिटो हालनु पर्न्या नपर्न्या गैह्र पानि नचलन्या जातमा मुसलमान् वाहेकले आफ्ना हाडको ७ पुस्तासंमका काका वाज्या भाइ भतिजा छोरा नातिहरूले विहा गरि ल्यायाका दियो कलस पुजि ल्यायाका जारि गरि ल्यायाका कंन्या विधवा ल्यायाका र आफ्ना साक्षात् माइज्यू भांज्या वुहारिहरूमा आफ्ना षसम्को सत्य छोडि अर्कासित पोइल गयाका स्वास्नीहरूसित आफु तेश्रो परि करणि गऱ्यो भन्या लोग्न्या रहेछ भन्या जार हांन्या जातको अैन वमोजिं साधुको षुसि लोग्न्या रहेनछ भन्या र जार हानेन भन्या राजषत् लाग्नाले १५ रूपैया आफू चौथो लिंग परि करणि गर्न्यालाइ १० रूपैया जतिसुकै सित विग्र्याकि भया पनि पांच लिंग देषि युढो परि कर्णि गर्न्यालाइ ५ रूपैया दंड गरि लोग्न्या स्वास्नि दुवैलाइ छुटचाइदिनु ७ पुस्ता देषि युढोका आफ्ना षसंको सत्य छोडि अर्कासित पोइल गयाका स्वास्नीको कर्णि गर्न्यालाइ राजषत् लाग्दैन.

५. पातकि भया पछि जन्म्याका संतान्पट्टि दोश्रो पोइ तुल्याइ वेस्या भयाका स्वास्नी संग ७ पूस्ताभित्रका एकै गोत्र एकै जात्मा कसैको कर्णि भयेछ भन्या २० रुपैया दंड गरि प्रायेश्चित्त गराइदिनु.

# गोसुवाराको

१. पुरोहित्यात्रि गर्न्या व्राम्हणले जस्का घरमा आफु मूल पुरोहित भैज्यजमानि गऱ्यको छ उसले आफ्ना ज्यजमानका १२ वर्ष नाघ्याका कंन्या र विधवा स्वास्नी छोरिहरुको राजीषुसिले कर्णि गऱ्यो भन्या ३ वर्ष कैद गरि छाडि दिनु म्यादको रुपैया चौवर दिया लिनु.

२. चार वर्ण छतिसै जात गैह्रका विवाहिता लोग्न्यावाट जन्म्याका छोरा छोरिको र उसै स्वास्नीले अर्का लोग्न्यासित पोइलगै जन्म्याका छोरा छोरिको कर्णि गर्न्या गराउन्या मा एका ओट्र्वाट जन्म्याका जिय जियैको कर्णि भयाको रहेछ भन्या अैन वमोजिंको अंस सर्वस्व गरी तागाधारि जातलाइ जनै झिकि रक्सि सुगुर्को मासु षुवाइ जात पतित गरि मतवालि नमासिन्या जात मा मिलाई दिनु मतवालि नमासिन्या जातलाइ मासिन्या जातमा मीलाइ दिनु. मासिन्या जातका लोग्न्या स्वास्नी दुवैलाइ मासि दिनु उन्का जिय जियवाहेक. संतान् सन्तान्मा कर्णि गऱ्या षत्वात् लाग्दैन.

३. धर्मपुत्र राषन्याले धर्मपुत्र छोरा पट्टिका संतान्मा र धर्मपुत्र वस्न्याले धर्मपुत्र राषन्या वावुका संतानमा कर्णि गऱ्यो भन्या आफ्ना हाडको धर्मपुत्र रहेछ भन्या पुस्ता गणि सजाय गर्नु पऱ्यो भन्या जन्माउन्या वावु पट्टिका पुस्ता को हिसाव गरि हाडका कर्णि गर्न्याका अैन वमोजिं सजाय गर्नु हाड वाहेक अर्का गोत्रको र फाल्याको वालष पाइ ल्याइ पाल्याका धर्मपुत्रले धर्मपुत्र राषन्या वावुका स्वास्नी र तेसै वावुवाट जन्म्याका छोरिको कर्णि गऱ्यो र धर्मपुत्र राषन्याले धर्मपुत्रकि स्वास्नीको कर्णि गऱ्यो भन्या अैन वमोजिंको अंस सर्वस्व गरि दामल् गर्नु एति नात वाहेक अरू धर्मपुत्रका सनहेमा धर्म पुत्रले कर्णि गऱ्या पनि धर्मपुत्र राषन्याले कर्णि गऱ्या पनि हाड नाताको सनहे लाग्दैन सधवाको कर्णि गऱ्या साधुको षुसि विधवा कंन्या को कर्णि गऱ्यो भन्या नाता नलाग्न्याका कंन्या विधवाको कर्णि गर्न्यालाइ लेष्याका अैन वमोजिं गर्नु.

४. उपाध्या लगायेत् तागाधारि जात र नमासिन्या मतवालि जातले ल्यायाका स्वास्नीका अघिल्ला लोग्न्यापट्टिवाट जन्म्याकि झट्क्यालि छोरिको कर्णि लि आफुले भात षाइ भताहालाइ स्मेत् वोरेछ भन्या १०० रुपैया दंड गरि भात वाहेक गरि जौंन जातका झट्क्यालिको कर्णि गऱ्याको

छ उसै जात्मा मिलाइ दिनु कर्णि गरि आफुले भन्या उस्का हातको भात षायाको रहेनछ स्वास्नीतर्फवाट भात्मा वोरायेछ भन्या २५ रुपैया दंड गर्नु तेस्को जात जादैन भोर्मा पर्न्यालाइ पतिया गराइदिनु कर्णि गरि आफ्ना  हातवाट पनि स्वास्नी तर्फवाट पनि भताहालाइ भात्मा वोर्‍याको रहेनछ भन्या २० रुपैया दंड गरी छुटचाइ दिनु जात जादैन छुटचाया पछि फेरि पनि कर्णि गर्‍यो भन्या जति पल्ट कर्णि गर्छ उति पटक १०।१० रुपैया दंड गरि छुटचाइ दिनु. रुपैया नतिर्‍या अैन वमोजिं कैद गर्नु.

५. मासिन्या जात पानि नचलन्या जात छोया छिटो हालनु पर्न्या जातले ल्यायाका स्वास्नीका अघिल्ला लोग्न्या पट्टिवाट जन्म्याकि झट्क्यालि छोरिको कर्णि गर्‍यो भन्या पानि चलन्या मासिन्या जातलाइ १५ रुपैया पानि नचलन्या र छोया छिटो हालनु पर्न्या जातकालाइ १० रुपैया दंड गरि छुटचाइ दिनु जात जादैन छुट्याया पछि फेरि कर्णि गर्‍यो भन्या जति पटक कर्णि गर्छ उति पटक ५।५ रुपैया दंड गरि छुटचाइ दिनु.

६. साहु टल्सीं कसैले असामि मोहिका छोरि वुहारि स्वास्नीको कर्णि गरेछ भन्या तेसले लिनु पर्न्या थैलि वालि लिन पाउदैन लिनु पर्न्या थैलि विगो भूस गराइ कर्णि लिन्या साहु टल्सिं जोहोउन् उस लाइ जौंना जातका कंन्या सधवा विधवा स्वास्नीको कर्णि गर्‍याको छ उसै जातका अैन वमोजिं जार काटनालाइ जार काटनुमुडनलाइ मुडनु सर्वस्व लिनाको सर्वस्व लिनु दंड कैद गर्नालाइ दंड कैद गर्नु विहा षर्च भराइ दंड गर्नालाइ विहा षर्च भराइ दंड गर्नु षत नलाग्न्या स्वास्नीको कर्णि गरेछ भन्या दंड हुदैन रुपैया वालि जति भुस गराइदिनु.

७. करिया भया पनि अम्लेष भयाको भया पनि पसुवा भया पनि षवास्या जातले आफ्ना षसंका स्वास्नी छोरि वुहारिको कर्णि गरेछ भन्या काटि मारी दिनू अरु कुराको तक्सीर्गर्‍यामा पसुवा षवास्यालाइ र अम्लेष भयाका षवास्या लाइ नमासिन्या मतवालिका सरहको सजाय गर्नु करिया रहयाका षवास्या लाइ मासिन्या मतवालीका सरहको सजाय गर्नु.

८. आफ्ना वावु वाज्या दाज्यू भाइ छोरा नातिले ल्यायाका भात षाजा न चलन्याकी जातका कंन्या ल्यायाका जारी गरि ल्यायाका स्वास्नीको कर्णि गर्न्या तागाधारि जात गैह्रलाइ अैन वमोजिंको अंस सर्वस्व गरि जनै झिकि जात पतित गरि नमासिन्या शुद्र जातमा मिलाइ दिनु मतवालि

नमासिन्या जातलाइ उस्को अंस सर्वस्व गरी मासिन्या पर्जा जातमा मिलाइ दिनु. मासिन्या जात गैह्रलाइ मासिदिनु.

९. गद्दिनसिद महाराजका रानीलाइ र गद्दिका वारिसवाला साहेवज्यादाका रानि लाइ र औ राजा रानिलाइ मंत्र सुनाउन्या गुरुका व्राम्हणी गुर्मा वा. मंत्र दिन्या गुर्मा सधवा हउन् विधवा हउन् इन्को कसैले कर्णि गऱ्यो भन्या मुडिन्या जात भया अैन वमोजिम्को अंस सर्वस्व गरि दामल गर्नु काटिन्या जात भया काटि मारिदिनु.

१०. पानि नचलन्या र छोया छिटो हालनु पर्न्या जातमा कर्णिगऱ्या गरायाका कुरा वाहेक हाडनाता गैह्रमा कर्णि गऱ्या  वावत् अैन वमोजिं सजाय भै पानिको पतिया दिनु भंन्या लेषियाका कलम्मा लोग्न्या मानिसले पानिको पतिया पायो भन्या त्यो हाड नाता गैह्रमा कर्णि दिन्या स्वास्नीलाइ पनि पानिको पतिया दिनु लोग्न्या लाइ पतिया नदिनु. भंन्या लेषियाका षत्मा स्वास्नी नमासिन्या जातकि भया पानिको पतिया पाउदैनन् एस्ता स्वास्नीको वेस्या भया पछि पानि चल्छ. मासिन्या जातकि भया मासि पानिको पतिया दिनु पानि चल्छ.

११. आफुले चाकरि गऱ्याका तागाधारि जातका घर्का मालिकका ११ वर्ष नाघ्या का छोरि वुहारि स्वास्नीको तागाधारि जातले कर्णि गरेछ भन्या ३ वर्ष नमासिन्या मतवालि जातले भया ४ वर्ष मासिन्या मतवालि जातले भया ३ वर्ष कैद गरि मासिदिनु म्यादको डवल् दिया लिनु.

१२. आफुले चाकरि गऱ्याका नमासिन्या मतवालि जातका घरका मालिकका ११ वर्ष नाघ्याका छोरि वुहारि स्वास्नीको तागाधारि जात नमासिन्या मतवालि जातले कर्णि गरेछ भन्या १॥ वर्ष मासिन्या मतवालि जातले भया २ वर्ष कैद गरि मासिदिनु. म्यादका रुपैया डवल् दिया लिनु.

१३. आफुले चाकरि गऱ्याका मासिन्या मतवालि जातकाघरका मालिकका ११ वर्ष नाघ्याका छोरि वुहारि स्वास्नीको तागाधारि जात नमासिन्या मतवालि जात मासिन्या मतवालि जातले कर्णि गरेछ भन्या ९ मैन्हा कैद गर्नु म्यादको डवल् दिया लिनु.

१४. मित्यारिका सनहेमा कर्णिको कुरो परि आया सधवा भया अैन वमोजिं साधुको षुसि विधवा र कंन्या भया नाता सनहे नलाग्न्यामा कर्णि गर्न्याका अैन वमोजिं सजाय गर्नु मित्यारिका सनहेमा राजषत् लाग्दैन.

१५. श्री ५ महाराजका महारानी वुहारि मैत्राहरु सधवा भया पनि विधवा भया पनि कंन्या भया पनि इन्सीतको राजाका गुरुको कर्णिको कुरो उठि रोवकार गर्दा साचो ठहर्‍यो भन्या कायेल्नामा लेषाइ अैन वमोजिं अंस सर्वस्व गरि मुडि देस निकाला गरि दिनु एस्ताका संतान्लाइ गुरु पनि नतुल्याउनु.

१६. आफ्ना मुलुकका वासिंदा मधिस्याहरु व्राम्हण रजपूत क्षत्रि गैह्र जनै लाउन्या जात र मुसल्मान् वाहेक अरु गैह्र मधिस्या जातले आफ्ना हाडमा १४ पुस्ता संममा र आफ्नी आमाकि दिदि वैन्हि ठुलि सानि आमा पर्न्या साक्षात् माइज्यू भांजि भांज्या वुहारि ठुलि सानि आमाका छोरि वुहारि पर्न्यामा कर्णि गर्न्या गराउन्या लोग्न्या स्वास्नी दुवैलाइ मासी दिनु यति नाता वाहेकका नातामा कर्णि गर्न्या गराउन्या लोग्न्या लाई १५ स्वास्नीलाई १२ रुपैया दंड गर्नु. रुपैया नतिर्‍या अैन वमोजिमं कैद गर्नु.

१७. आफुले जन्मायाका छोरा र छोरीका साक्षात् सासु समधिनिको कसैले कर्णि गरेछ भन्या सधवा भया अैन वमोजिं साधुको षुसि जार नहांन्या जातका सधवा र विधवाको कर्णि गरि भात्मा वोर्‍याको रहेनछ भन्य षत्वात् लाग्दैन कर्णि गरि भातमा स्मेत् वोरेछ भन्या व्राम्हणलाइ १०० रजपूतलाइ ६० तागाधारि जातलाइ ५० नमासिन्या मतवालिलाइ २० पानि नचलन्या चलन्या गैह्र मासिन्या जातलाइ ५ रुपैया दंड गर्नु रुपैया नतिर्‍या अैन वमोजिं कैद गर्नु जवर जस्ति कर्णि गरेछ भन्या जवरजस्ति गर्न्याका अैन वमोजिंदंड सजाय गर्नु.

# वेस्या स्वास्निको गर्भ

१. वेस्या स्वास्नीसित आफु पनि जादो रहेछ आफु गयाका मैन्हाभित्रको गर्भ रहि जातक जन्म्यापछि यो विर्य तेरो हो नुवारन् गरिदेउ भनि ३५ दिन का म्यादभित्र त्यो स्वास्नी भंन आइ भन्या गर्भ भयामा अर्का लोग्न्या सित कर्णि भयाको रहेनछ भन्या नुवारान् पनि गरिदिनु सयकरा २॥ रुपैया अंस पनि दिनु पर्छ गर्भमा छदा अर्का लोग्न्यासित कर्णि भयाको लोग्न्याले ठहराइ कायेल गऱ्यो भन्या त्यो वेस्या पुत्र ठहर्छ आमैले नुवारान् गर्नु लोग्न्यालाइ तेरो विर्ज्य हो भनि कर लाउन पाउदिन तेस्ता छोरा छोरिले अंस पाउदैनन् आफ्नै आमाको अैन वमोजिमंको आल माल मात्रै पाउछन्.

२. २।४ जना लोग्न्यालाई कर्णि गराउन्या स्वास्नीले छोरा छोरि पाइ र तेरो संतान् हो भनि एका चाहिलाइ देषइदिछ उस लोग्न्याले मेरो विर्य होइन भनि अदालत् ठाना अमाल्मा कराउन आयो भन्या तेस् लोग्न्याले कर्णि गऱ्याको दिन मैन्हा र जन्म्याका वालषको तजविज गर्दा उसले कर्णि गऱ्याका दस मैन्हामा जन्म्याको भया तेसै वावुको ठहर्छ दस मैन्हा अघि पछि जन्म्याको रहेछ भन्या उस्को ठहर्दैन स्वास्नीले तेरो छोरो हो भनि कर लगाउन पाउदिन. एस्ता कुरामा छोरा छोरि जन्म्याका दिन ३५ भित्र कराउन आया कुरो सुनि निसाफ गरि दिनू ३५ दिन उप्रांत कराउन आया नसुँनु यस्ता संतान् वेस्या पुत्र ठहर्छ नुवारन् पनि आमाले गराउनु पर्छ अंस पनि अैन वमोजिम् आमाको पाउछ.

३. कोहि कंन्या वा वेस्या सुसाऱ्या केटि पातरर वधेत्यानिहरुले एका लोग्न्यासित कर्णि गराइ उस्को गर्भ रहयाको छ तेस्तैमा अरु अरु लोग्न्यालाइ पनि कर्णि गराइ संतान भयाको रहेछ र स्वास्निले तेरो संतान् हो भनि समाउन आइ भन्या लोग्न्याले त्यो स्वास्नीले पेट वोक्यामा अर्को चाहि पोइ देषाइ कायेल् गराउन सक्यो भन्या तेस्को ठहर्दैन तेस्ता छोरा छोरिको नुवारन् पास्नि पनि गराउनु पर्दैन अंस पनि दिन पर्दैन लोग्न्यालाई कर लाग्दैन वेस्या पुत्र ठहर्छ नुवारन् पास्नी पनि आमाले गर्नु अंस पनि अैन वमोजिम आमाको पाउछ.

४. कोहि सुसाऱ्या केटि पातर वेस्या वधेत्यानिहरुलाइ कसैले राषि स्वास्नीले पेट वोक्याकि रहिछ गर्भ रहयादेषि अर्का लोग्न्या कसैसित कर्णि गरायाकि पनि रहिनछ भन्या तेस्ता छोरा छोरि

जन्मदा वावु चाहिले मेरो संतान् पनि होइन भनि अदालत् ठाना अमालमा कराउन आया भन्या स्वास्नीसत् कर्णि भयाका दिन मैन्हादेषि दस मैन्हामा जन्म्याको ठहर्यो भन्या ति छोरा छोरिको वावु तेहि ठहर्छ आफ्ना विर्ज्यले जन्म्याका संतान्. लाइ मेरो होइन भनि कराउन आया वावत् जौनसुकै जात भया पनि तेस्ता लाइ १० रुपैया दंड गरि जात अनुसारको नुवारन् पास्नि गैह्र गर्नु पर्न्या तेसै वावुले गर्नु पर्छ अैन वमोजिमं अंस पनि तेसैको पाउछ.

५. एकै स्वास्नीका २।३ लोग्न्या छन् तेस्तैमा तेसैले छोरा छोरि पाइ र ति छोरा छोरि मेरा हुं तेरा होइन भनि २ जान वावु वाभि अदालत् ठाना अमालमा कराउन आया भन्या स्वास्नी ल्याइ भिकाइ सोधपूछ गर्दा जौन चाहि लोग्न्या का विर्यले जन्म्याका हुन्. भनिदिन्छे उसै चाहिका सन्तान् ठहर्छन्.

६. व्राम्हण रजपूत क्षत्रि वैस्य शूद्र गैह्र चार वर्ण छतिसै जातका विवाहिता स्वास्नीको विवाहिता लोग्न्याको गर्भ रहयाको छ तेस्तैमा त्यो स्वास्नी अरु कसैसित विग्रि भन्या गर्भको वालष सद्य हुदैन जौन जातमा विग्रि उहि जातमा त्यो वालष जांछ जस्तै दुदका घडामा मदीराको एक थोपो पर्नाले सर्व विग्रिंछ तेस्तै विवाहिताको विर्य हो तापनि विग्र्याकै जातको गर्भ ठहर्छ विहा गर्न्या लोग्न्याको विंद हुं भनि वावु दाज्यूसित अंसको दाइया गर्न पाउदैन वेस्या पुत्र ठहर्छ नुवारन् पास्नि पनि आमाले गराउनू अंस पनि अैन वमोजिम् आमाकै पाउछ.

# झगरिया स्वास्निको कर्णि गर्न्या

१. कसैका थुम् षुवामामासिन्या जातको अमालि द्वाऱ्या हुन गयाको रहेछ र उसले आफ्ना कचहरिमा मासिन्यै जातका स्वास्नीको झगरा परि आयो र झगरा छिनि तेसै द्वाऱ्या अमालिले कर्णि गरेछ भन्या तेस्ता अमालि द्वाऱ्या लाइ मासिदिनु.

२. ठेकदार इजारादार षानगि नठेकियाका अमालाहरुले फिरादि र वावत् लागि आयाका स्वास्नीहरुको कर्णि गऱ्यो भन्या सधवा विधवा कंन्याको कर्णि गऱ्यो भन्या तेस्तालाइ अैन वमोजिम् सजाय गरी कामवाट षारेज गर्नु वेस्या जात चाकर जातहरुको कर्णि गऱ्यो भन्या २० रुपैया दंड गरि उस सालको कवोलियेत् वमोजिम्को इजारा वुझि लि मिति पुग्या पछि अर्का साललाइ षारेज गरिदिनु.

३. अदालत् ठाना अमाल्मा षतवातले थुनियाका प्यादा लगायाका ज्मानि गरि छोड्याका स्वास्नी मानिसलाइ हाकिं र अदालत् ठानाका मालिक डिट्ठा विचारि अमाल गैह्र अमालि द्वाऱ्याहरुले झगरा नछिनि कसैले कर्णि गऱ्यो भन्या सधवा विधवा कंन्याको कर्णि गर्न्यालाइ उसैका अैन वमोजिम्को सजाय गरी पाक्याको वालि स्मेत् थुनि कामवाट षारेज गर्नु वेस्या जात चाकर जातका षतवात लागि थुनियाका स्वास्नीको कर्णि गर्न्या उस ठाउका हाकिम् अमाला द्वाऱ्या अमालिमा जो हो उसलाइ पाक्याको वालि स्मेत् थुनि कामवाट षारेज गर्नु.

४. अैन वमोजिम् दामल हुन्या षत्मा कैद भयाका स्वास्नीलाइ चौकि पहरा वस्न्या कसैले कर्णि गरेछ भन्या त्यो स्वास्नी अक्षर्षोदि जात पतित भयाकि रहिछ भन्या जानि जानि कर्णि गर्न्याको जागिर षोसि उसै जातमा मिलाइ छोडिदिनू पतिया पाउदैनन् अक्षर षोदि जात पतित भयाकि रहिनछ भन्या कर्णि गर्न्यालाइ जागिर षोसि आफु भंदा ठुला जातकि स्वास्नीको कर्णि गऱ्याको रहेछ भन्या १०० रुपैया आफु मिल्दा जातकि स्वास्नी भया ५० रुपैया आफु भंद घटि जातकि स्वास्नी भया २५ रुपैया दंड गर्नु रुपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु कर्णि गर्न्या आफ्नै जातमा रहंछ पतिया पर्दैन भोर्मा कर्णि गऱ्याको रहेछ भन्या दंड पनि हुदैन भोर्को पतिया दिनु.

५. अैन वमोजिं दामल भै कैद भयाका स्वास्नीलाइ पहरा चौकि वस्न्या वाहेक अरु कसैले जानि जानि कर्णि गर्न्याको रहेछ भन्या स्वास्नी अक्षर षोदि जात पतित भयाकि भया कर्णि गर्न्यालाइ उसै जातमा मिलाइ छाडिदिनु पतिया पाउदैन अक्षर षोदि जात पतित भयाकि स्वास्नी रहिनछ भन्या आफु भंदा ठुला जातकि स्वास्नीको कर्णि गऱ्याको रहेछ भन्या १०० रुपैया आफु मिल्दा जातकि स्वास्नी भया ५० रुपैया आफु भंद घटि जातकि स्वास्नी भया २५ रुपैया दंड गर्नु रुपैया नतिऱ्या अैन वमोजिम्कैद गर्नु कर्णि गर्न्या आफ्नै जातमा रहंछन् पतिया पर्दैन भोरमा कर्णि गऱ्याको रहेछ भन्या दंड पनि हुदैन भोरको पतिया दिनु.

६. चौकि पहरा वस्याकाले र. प्यादा लाग्न्याले षतवातलाले झेलषानामा रहयाका र थुनुवा भै जगा जगामा रोकियाका प्यादा लागि ल्यायाका स्वास्नीको कर्णि गरेछ भन्या जौना जातले जौना जातका सधवा विधवा कंन्याको कर्णि गऱ्याको छ उसै जातलाइ लेष्याका अैन वमोजिं दंड सजाय कैद गरि वालि स्मेत् थुनुवा गरि षोसि छाडिदिनु वेस्या जात चाकर जातको करणि गरेछ भन्या २० रुपैया दंड गर्नु.

७. षानगि ठेकियाका र वालि नपाक्याका अदालत् अमाल्का हाकिम् डिट्टा विचारि पगरि हुद्दा सिपाहि अमालि द्वाऱ्या माहान्या गैह्रले झेलषानामा रहयाका र थुनुवा भै जगा जगामा रोकियाको प्यादा लागि ल्यायाका स्वास्नीको कर्णि गरेछ भन्या जौना जातले जौना जातका सधवा विधवा कंन्याको कर्णि गऱ्याको छ उसै जातलाइ लेष्याका अैन वमोजिं दंड सजाय कैद गरि कर्णि गर्न्याले दर्सन् गऱ्याका जागिरका रैवदिका विगा वमोजिंम दंड गर्नु वेस्या जात चाकर जातको करणि गऱ्या २० रुपैया दंड गर्नु.

८. झेलषानामा कैद भयाका कसैले झेलषानामामै कैद भयाका लोग्न्या स्वास्नी मानिस्ले कर्णि गरायाको रहेछ भन्या घटि वढि जातमा कर्णि गर्न्याको अैन वमोजिं सजया गर्नु पर्न्यामा सजाय गरि लोग्न्या स्वास्नी दुवैलाइ १०।१० रुपैया दंड गर्नु.

# कमारि स्वास्नि राषन्या

१. तागाधारि जार हान्या जातका कंन्या कमारि स्वास्नी तुल्याइ घर्मा जाहेर गरि राष्याको पार स्मेत् गरि दियाको रहेछ भन्या जाया जन्म भयाको हवस् नभयाको हवस् तापनि तेस्ता स्वास्निमा साक्षात् छोरा भतिजाका दाज्यू भाइहरु पऱ्या भन्या पनि अरु कसैले कर्णि गऱ्यो भन्या जार काटन हुदैन जनै भिकि अैन वमोजिं अंस सर्वस्व गरि लिंछ तापनि तेसै छाडछ तापनि साधुको षुस कमारि स्वास्नी राष्याको रहेछ पार गरि दियाको छैन कमार्तन् गर्दै रहिछ भन्या तेस्तामा ३ पुस्तासम्म का पऱ्या पनि षत वात लाग्दैन.

२. आफ्ना घर्कि कंन्या कमारि आफैले राषि जाया जन्म भयाको रहेछ भन्या त्यो कमारि वेचन हुदैन कसैले वेच्यो भन्या किंन्याको थैलि वेचन्यावाट भराइ दिनु त्यो कमारि आफु सुषि हुंछे वेचन्या लाइ विगा वमोजिं दंड गर्नु. रुपैया नतिऱ्या अैन वमोजिं कैद गर्नु.

३. आफ्ना घर्कि कंन्या कमारि आफुले स्वास्नी तुल्याइ राष्याको रहेछ पार गरि दियाको रहेनछ भन्या तेस्ता स्वास्नी अर्कासित पोइल गै भन्या वेचि रुपैया लिन पाउदैन त्यो कमारि स्वास्नी आफु सुषि हुंछे जससित पोइल जांछे लैजान्यावाट ३०० रुपैया भराइ लिन पाउछ दसौद लि अदालत अमालवाट भराइदिनु एस्ता स्वास्नीतिर आफुवाट जन्म्याका छोरा छोरि वेचन हुदैन वेचेछ भन्या किंन्याको थैलि कपालि गराइदि वेचन्यालाइ विगा वमोजिमं दंड गर्नु किंन्याले फलानाका छोरा छोरी हुं भनि जानि जानि किन्याको रहेछ भन्या थैलि लिलाम गरि लिनु.

४. अर्कासित विग्ऱ्याकि आफ्नि कमारि स्वास्नी राष्याकि छ जाया जन्म पनि भयाको छ त्यो कमारि अन्त पोइल गै भन्या वेस्या हुंछे वेचि रुपैया लिन पाउदैन त्यो कमारि आफु सुषि हुंछे जससित पोइल जांछे लैजान्यावाट २०० रुपैया भराइ लिन पाउछ दसौद लि अदालत् ठाना अमालवाट भराइदिनु एस्ता स्वास्नीतिर आफुवाट जन्म्याका छोराछोरि वेचन हुदैन वेच्याको रहेछ भन्या किंन्याको थैलि कपालि गराइ दि वेचन्यालाइ विगा वमोजिं दंड गर्नु किंन्याले फलानाको छोरो हो भनि जानि जानि किन्याको रहेछ भन्या थैलि लिलां गरि लिनु.

५. आफ्ना घरकि कंन्या कमारि आफैले स्वास्नी तुल्याइ राष्यको छ जाया जन्म पनि भयाको छैन भन्या तेस्ता कमारि स्वास्नी अरू कसैसित विग्या भन्या त्यो कमारि आफ्नै घरमा राषछ तापनि अरुलाइ वेचछ तापनि षसम्को षुस्.

६. अघिवाट अर्कासित विग्याकि आफ्नि कमारि आफैले स्वास्नी तुल्याइ राष्यकिछ तेसवाट आफ्नु जाया जन्म भयाको छैन भन्या तेस्ता कमारिलाइ वेच्या उठायाको सदर हुंछ एस्ता कमारिमा वावु छोरा दाज्यू भाइ मऱ्या भन्या पनि षत्वात् लाग्दैन.

७. वेस्या कमारि छ षसम पनि कर्णि गर्छ अरुलाइ पनि कर्णि गराउछे भन्या तेस्ता कमारिवाट जन्म्याका संतान् कमारा कमरि नै हुंछन् कमारिले फलाना का छोरा छोरि भन्याको सदर हुदैन.

८. आफ्ना कमारि षसमसित वस्या पछि अर्कासित पोइल गयाकि रहिनछ भन्या तेसवाट षसम्का विर्यले जन्म्याका सन्तान् जोसुकै भया पनि कमारा कमारि ठहर्दैनन् सुक्रि विक्रि गर्न हुदैन कसैले कमारा कमारि भनि वेच्यो भन्या किंन्या को थैलि वेचन्या वाट तिर्न सकन्या रहेछ भन्या धन् तिराइ दिनु तिर्न नसक्या कपालि तमसुक गराइदिनु ति कमारिवाट जन्म्याका संतान् अकरिया हुंछ वेचन्या वावु दाज्यू भाइ छोरालाइ वेच्याका थैलि वमोजिम् दंड गर्नु रुपैया नतिऱ्या अैन वमोजिम्कैद गर्नु अैन वमोजिम्को अंस स्मेत् दिलाइ दिनु.

९. कसैले ११ वर्ष माथिका वेस्या कमारि स्वास्नीलाइ मनोमान गराइ जमात वाधि हुल् उठि वल जफ सग कर्णि लियो भन्या ३० रुपैया दंड गर्नु रुपैया नतिऱ्या कैद गर्नु.

१०. साहुका कर्जा वावत् साहुकै घरमा वस्याकि वाधा पस्न्या जातका छोरिलाइ कसैले कर्जा तिरि. निषनि स्वास्नी तुल्याइ घरमा राष्या पछि त्यो वध्येत्यानि अर्का लोग्न्यासग गै भन्या थैलि तिरि निषनि ल्याइ स्वास्नी तुल्याउन्याको थैलि तेसैलाइ जसले विगाऱ्यो उसैवाट भराइदिनु उसलाइ पनि छोडि अरु सित गै भन्या त्यो स्वास्नी वेस्या ठहर्छे थैलि पाउदैन.

११. आफुले वाधा लियाकि वधेत्यानि वाधा नवस्तैमा हवस् वा आफुले वाधा लिया पछि हवस् आफु भन्दा अघिवाट २ जना पोइ भयाका रहया छन् तेस्तैमा वाधाका धनिले आफु तेश्रो लिंग परि कर्णि गरेछ भन्या धनिले कर्णि गऱ्यो भने थैलि भूस हुदैन आफ्नु परल थैलि लिन पाउछ.

१२. कन्या र आफ्ना षसम्का सत्यमा रहयाका सधवा विधवा वधेत्यानिको धनिले कर्णि गरेछ भन्या एस्ता वधेत्यानि आफुले स्वास्नि तुल्याया पछि धनिले थैलि लिन पाउदैन थैलि भुस गराइ वधेत्यानिवाट दसौद लि तमसुक फराइ अम्लेष गराइ छुटाइ दिनु.

# गुप्ति वेस्याको करणि गर्न्या

१. तागाधारि जातका सधवा र ११ वर्ष नाघ्याका विधवा कंन्या आफ्ना जात मिल्दामा र आफु भंदा उपल्ला जातमा विग्र्याका विग्र्याको जाहेर नभै भातमा छदै सद्यै हो भनि २।३ जनाले कर्णि गऱ्याको रहेछ भन्या पैल्हालाइ अैन वमोजिं सजाय गर्नु दोश्रो परि कर्णि गर्न्या पैल्हा कर्नि गर्न्या भन्दा उपल्ला जात र उसै मिल्दा जातको रहेछ भन्या १० रुपैया तेश्रो परि कर्णि गर्न्यालाइ ५ रुपैया दंड गर्नु पैल्हा कर्णि गर्न्या भंदा घटि जातका तागाधारिले कर्णि गरेछ भन्या दोश्रालाइ २० तेश्रालाइ १० रुपैया अघि तागाधारि जातसित विग्र्याको जाहेर नभै दोश्रो परि कर्णि गर्न्या नमासिन्या मतवालि जात रहेछ भन्या तेस्तालाइ ३० तेश्रालाइ १५ रुपैया मासिन्या मतवालिले भया दोश्रा लाय ४० तेश्रालाइ २० पानि नचलन्यामा छिटो हालनु नपर्न्या जातले दोश्रो तेश्रो परि कर्णि गरेछ भन्या मासिन्या जात भया ४ वर्ष कैद गरि मासि दिनु नमासिन्या जात भया ८ वर्ष कैद नर्गु म्यादको चैर दिया लिनु छिटो हालनु पर्न्या जातले दोश्रो तेश्रो परि कर्णि गरेछ भन्या अैन वमोजिम सर्वस्व गरि दामल गर्नु कमाराले दोश्रो तेश्रो परि कर्णि गरेछ भन्या ८ मैन्हा तेश्रो परि कर्णि गऱ्या ४ मैन्हा कैद गर्नु म्यादका रुपैया दिया लि छाडिदिनु.

२. नमासिन्या मतवालि जातका सधवा र ११ वर्ष नाघ्याका विधवा कंन्या अघि आफु भंदा उपल्लाजात र आफु मिल्दा जातमा विग्र्याका विग्र्याको जाहेर नभै जात भातमा छदै २।३ जनाले कर्णि गऱ्याको रहेछ भन्या पैल्हे कर्णि लिन्यालाइ अैन वमोजिं सजाय गर्नु दोश्रो तेश्रो परि कर्णि लिंन्या तागाधारि जातलाइ षतवात लाग्दैन जात मिल्दा र अरू नमासिन्या मतवालिमा दोश्रो परि कर्णि गर्न्यालाइ ८ तेश्रो परि कर्णि गर्न्यालाइ ४ रुपैया दंड गर्नु मासिन्या मतवालिले दोश्रो परि कर्णि गऱ्याको भया १० तेश्रो परि कर्णि गऱ्याको भया ५ रुपैया दंड गर्नु पानि नचलन्यामा छिटो हालनु नपर्न्या जात्ले दोश्रो तेश्रो परि कर्णि गरेछ भन्या मासिन्या जातभया ४ वर्ष कैद गरि मासि दिनु नमासिन्या जात्भया ८ वर्ष कैद गर्नु म्यादको चौवर्दिया लिनु छिटो हालनु पर्न्या जात्ले दोश्रो तेश्रो परि कर्णि गरेछ भन्या अैन वमोजिं सर्वस्व गरि दामल गर्नु कमाराले दोश्रो परि कर्णि गऱ्या २ मैन्हा तेश्रालाइ १ मैन्हा कैद गर्नु म्यादका रुपैया दिया लि छाडनु.

३. मासिन्या मतवालि जातका सधवा र ११ वर्ष नाघ्याका विधवा कंन्या अघि आफु भंदा उपल्ला जात र. आफु मिल्दा जातमा विग्न्या विग्न्याको जाहेर नभै २।३ जनाले कर्णि गऱ्याको रहेछ भन्या पैल्हे कर्णि गर्न्यालाइ अैन वमोजिं सजाय गर्नु दोश्रो तेश्रो परि कर्णि गर्न्या तागाधारि जात र नमासिन्या मतवालि जातलाइ षतवात लाग्दैन. जात मिल्दा र अरू मासिन्या मतवालिमा दोश्रो तेश्रो परि कर्णि गर्न्यालाइ ५ तेश्रालाइ २॥ रुपैया दंड गर्नु पानि नचलन्यामा छिटो हालन नपर्न्या जातले दोश्रो तेश्रो परि कर्णि गरेछ भन्या मासिन्या जात भया मासि दिनु नमासिन्या जात भया २ वर्ष कैद गर्नु म्यादको चौवर्दिया लिनु छिटो हालनु पर्न्या जात्ले दोश्रो तेश्रो परि कर्णि गरेछ भन्या १ वर्ष कैद गरि मासि दिनु पानी नचल्न्या जातमा कर्णि गराउन्या स्वास्नीलाय पनि मासि दिनु कमाराले दोश्रो तेश्रो परि कर्णि गऱ्या १ मैन्हा तेश्रा लाइ १५ दिन कैद गर्नु.

४. छोया छिटो हालनु पर्न्या जातका सधवा र ११ वर्ष नाघ्याका विधवा कंन्या स्वास्नी अघि अर्कासित विग्न्याको थाहा नभै दोश्रो परि जात मिल्दाले कर्णि गऱ्याको रहेछ भन्या २॥. रुपैया स्वास्नी भंदा घटि पानि नचलन्या जातकाले दोश्रो परि कर्णि गरेछ भन्या १० रुपैया तेश्रो परि कर्णि गन्या ५ रुपैया दंड गर्नु चौथो देषिका लाइ षत लाग्दैन.

५. पानि नचलन्या र छोया छिटो हालनु पर्न्या जातका कमाराले तागाधारि जातका र नमासिन्या मतवालि जातका अरुसित विग्न्याका सधवा र ११ वर्ष नाघ्याका विधवा कंन्या स्वास्नीमा दोश्रो तेश्रो परि कर्णि गऱ्या दामल गर्नु. मासिन्या जातका स्वास्नीको कर्णि गर्न्यालाइ ५ वर्ष कैद गर्नु कर्णि दिन्या स्वास्नीलाइ उसै जातको १ अक्षर षोदि मासि दिनु.

६. पानि नचलन्या छोया छिटो हालनु पर्न्या जातका २।३ जना स्वास्नीले तागाधारि लगायेत्. पानि चलन्या सम्मका चोषा जातका लोग्न्या मानिस्लाइ अघिल्लीले कर्णि दियाको थाहा नपाइ सद्यै हो भनि आफुले कर्णि दि लोग्न्या तर्फवाट भात पानिमा वोराये छन्. भन्या पैल्हे कर्णि दिन्या स्वास्नी मासिन्या जात भया मासि दिनु नमासिन्या जातकि स्वास्नि भया २ वर्ष कैद गर्नु म्यादका रुपैया दिया लि छाडनु. ज्यू मासिदैन दोश्रो परि कर्णि दिन्यालाइ २० रुपैया तेश्रो परि कर्णि दिन्यालाइ १० रुपैया दंड गर्नु रुपैया नतिऱ्या कैद गर्नु.

७. छोया छिटो हालनु पर्न्या जातका २।३ जना स्वास्नीले तागाधारि लगायेत् पानि चलन्यासंमका चोषा जातका लोग्न्यामानिस्लाइ अघिल्लिले कर्णि दियाको थाहा नपाइ सद्यै हो भनि आफुले कर्णि दि लोग्न्या तर्फवाट भात पानिमा वोरायाको छन् भन्या पैल्हे कर्णि दिन्या स्वास्नीलाइ मासि दिनु दोश्रो परि कर्णि गराउन्यालाइ २० तेश्रो परि कर्णि दिन्यालाइ १० रुपैया दंड गर्नु रुपैया नतिऱ्या अैन वमोजिं कैद गर्नु छिटो हालनु नपर्न्या जात र. छिटो हालनु नपर्न्या जात्मा आफु भंदा ठुला जातका लोग्न्या मानिस्लाइ २।३ जनाले कर्णि दियाको भया पैल्हिलाइ २० दोश्रीलाइ १० तेश्रीलाइ ५ रुपैया दंड गर्नु.

# पोलाहा

१. कर्णिको कुरा कसैले पोल्यो वात लाग्न्यालाइ ल्याइ पूर्पक्ष गर्दा लोग्न्या स्वास्नीमा १ जनाकायेल भयो १ जना भयाको छैन तेस्तैमा कायेलनामा नलेषतैमा कायेल हुन्या चाहि मऱ्यो भन्या कायेल नभयाकालाई तेसै वादि सित जोर पुर्पक्ष गरी वात लाग्न्या कायेल भयो भन्या अैन वमोजिं सजाय गर्नु त्यो कायेल भयेन पोलाहाले ढालन सकेन भन्या तेस्ता पोलाहालाय कायेल नामा लेषाइ ५० रुपैया दंड गर्नु कायेल नहुन्या चाहि मऱ्यो भन्या कायेल हुन्याको कायेलनामा लेषाइ अैन वमोजिम्सजाय गर्नु कायेल नभै मर्न्यालाइ षतवात पनि लाग्दैन पतिया प्रायश्चित्त पनि गर्नु पर्दैन जात जादैन.

२. पोइल गयाका कुरा र लोग्न्याले ठुला जात सानु जात पानि नचलन्या जात स्वास्नीले ठुला जात सानु जात पानि नचलन्या जात संग विग्ऱ्याको कुरा पोलाहाले पोल्यो लोग्न्या स्वास्नीले होइन भन्दै थिया तेसतै विचमा पोलन्या मऱ्यो भन्या निसाफ दैवले छिन्यो ति लोग्न्या स्वास्नी आफ्नै जातमा रहंछन् अदालत् ठाना अमाल कचहरिवाट नहेर्नु छाडिदिनु.

३. पर्देस गयाका मानिसलाइ कसैले हाड नात र ठुला जात पानि नचलन्या जातसित कर्णिको कुरा र ज्यू जान्या जात जान्या सर्वस्व हुन्या चोरी जारि संवंधीका कुरा लोग्न्या स्वास्नी कसैले पोल्यो पर्देस गयाको मानिस् आउदा त्यो वादि रहेछ भन्या जोरि पुर्पक्ष गरि दिनु. जो ठहर्छ अैन वमोजिं सजाय गर्नु. पोलाहा वादि मरेछ भाग्याको रहेछ भन्या एकोहरा कुरामा तेसलाइ षतवात लाग्दैन आफ्ना जातैमा रहंछ.

४. कर्णि संवंधिका कुरामा पक्रियाका मानीस्ले ज्यूदा मानिस्लाइ पोल्यो भन्या ल्याइ निरोपन गरि हेर्दा जो ठहर्छ अैन वमोजिं गरि छिनि दिनु मऱ्याका मानिस्लाइ पोल्यो भन्या त्यो पोल्याको सदर हुदैन मऱ्याका पानि चलन्या जातकालाइ पोल्यामा पोलन्यालाइ ११ मैन्हा कैद गर्नु म्यादका रुपैया मैन्हाका १० रुपैयाका दरले दिया लि छाडनु पानि नचलन्या मऱ्याकालाइ पोलन्या पोलाहालाइ भातपानि षायाको भया अैन वमोजिम्को अंस सर्वस्व गरि लि छाडिदिनु. भात पानि षायाको रहेन भन्या २२ मैन्हा कैद गर्नु म्यादको डवल् दिया लि छाडनु मऱ्याका मानिस्लाइ पोल्याका कुरामा ज्यू जात धन जान्या सम्मको कुरा भया पनि लोग्न्या हवस्

स्वास्नी हवस् पोलाइ माग्न्यालाइ षत् लाग्दैन जात भात जादैन प्रायेश्चित्त पर्दैन पोलाह लाइ षत् लाग्छ एहि अैन वमोजिं सजाय गर्नु.

५. आफु भंदा उपल्ला जातसित हवस् वा तल्ला जातसित हवस् कर्णिको कुरो उठ्या पछि पक्रन जादा भागोस् वा पक्रिया पछि मुकाविला नभै भागेछ र वा दि मऱ्या पछि त्यो आयो र मैले विरायाको छैन भन्यो भन्या ज्यूदो छन्ज्याल जोरिन नसिक माग्न्या वादि मऱ्या पछि आइ निसाफ माग्न्या झुट्टो ठहर्छ जौना जातसितका कर्णिको कुरो पोल्याको छ उसै जातका कर्णिका अैन वमोजिं सजाय गर्नु.

६. कोहि विग्ऱ्याका स्वास्नीले देस पर्देस गयाका मानिस्लाइ हाड नाता तस्तो जात उपल्लो जातसितको कर्णिको कुरो पोलि तेसस्वास्नी लाइ केर कार गर्दा पनि कुरो फेरिनपर्देस गयाकैलाइ भनि भन्या भात पानिमा पर्न्या भताहालाइ तेसै वेविचार्नि स्वास्नीका नाउको पतिया गराइ दिनु. पर्देस जान्या आया पछि तेसै स्वास्नी सित जोरि जोठहर्छ अैन वमोजिम् निसाफ गर्नु एस्ता स्वास्नीको गर्भरहि जातक जन्म्याको रहेछ भन्या पानि चलन्या नचलन्या गैह्र जौन जातका लोग्न्यालाइ पोलि विग्ऱ्याकि आमाको जौन आमाको जौन जात भयाको छ छोरा छोरिको पनि उहि जात हुंछ.

७. प्रायश्चित्त गर्नु पर्न्या कर्णि भात पानि संवंधिका कुरा र चोरि ज्यान सम्बन्धि र अरू गैह्र कुरामा कायेल मुकायेल नभै पोलाइ माग्न्या चाहि मऱ्यो भन्या कायलनामा नभै मर्न्यालाइ षतवात लाग्दैन प्रायश्चित्त पनि गर्नु पर्दैन आफ्नै जातमा रहंछ.

८. मठघारि दसनाम संन्यासि वैरागि जोगि जंगम सेवडा गैह्रले कसैलाइ ज्यू जान्या जात जान्या वात लायो सावित् गर्नसकेन रिसले पोल्याको ठहऱ्यो भन्या तेस्को महांत्याइ षोसिंछ मठ सर्कार लाग्छ मठ षोसिया पछि दंड कैद केहि पर्दैन छोडिदिनु.

९. पोहील गयाका कुरा र ज्यान संवंधिका कुरा पोलाहाले पोलि कायल मुकायल नगरि पोलाहा मऱ्यो भाग्यो भन्या पोलाइ माग्न्याको जित हुंछ.

१०. आषा नदेषन्या अंधाले कसैलाइ कर्णिको संका गरि वात लायो पछि रोवकार गर्दा ठहरेन भन्या अंधा सुरदारलाइ ४ मैन्हा कैद गर्नु म्यादको रुपैया तिर्छ भन्या लि छाडिदिनु.

११. पानि नचलन्या जात र छिटो हालनु पर्न्या जातका कर्णि संवंधका कुरामा जितन्या सित जिताउरि लिदा १ रुपैया जिताउरि लिनु वढता नलिनु.

१२. कर्णिको वात लागि आयाका स्वास्नी मानिस् कसैले मेरो कर्णिगर्न्या फलानु हो भनि पोलि र तेसले पोल्याका मानिस्मा कोहि पर्देस गयाका रहयाछन् कोहि उहि रहेछ र षारषेर गर्दा पर्देस गयाकालाइ पैल्हे कर्णि लिन्या भनि लेषाइदि उस ठाउमा रहयाका पक्रियाका अरुलाइ दोश्रो तेश्रो भनि लेषाइ भन्या र कचहरिवाट ठहराइ निसाफ गर्न सकेन भन्यापर्देस गयाको आफ्ना मुलुकमा फलाना जगामाछ भंन्या पत्ता मिल्यो भन्या झिकाइ निसाफ गर्नु पत्ता रहेनछ वा विराना मुलुक गयाको रहेछ भन्या उ नआउंज्याल त्यो झगरा नछिंनु पर्देस गयाको मानिस् नआउंज्याल् तेस स्वास्नीलाइ कैद गरी राषनु दोश्रो तेश्रो भनि पोल्याका कायेल भयाका छन् भन्या पनि जिम्मा जमानि गरि छाडनु भोर्मामा पर्न्यालाइ तेसै स्वास्नीका नाउको पतिया दिनू पर्देस जान्या आया पछि जोरि कायेल गराइ भन्या अैन वमोजिं दंड सजाय गर्नु स्वास्नि कैद भयापछि पर्देस जान्या पैल्हो होइन त्याँहि रहयाका फलानु चाहिं पैल्हो हो भनि कुरा फेरि र रोवकार गर्दा कायेल गराइ भन्या पैल्हो ठहऱ्याकालाइ अैन वमोजिम् गर्नु दोश्रो तेश्रो ठहऱ्याकालाइ उसै अैन वमोजिम् गरि छिनि दिनु भोर्मा परि षान्यालाइ भोर्को पतिया दिनु स्वास्नीले ज्यू वचाउनाका लागि भन्याको ठर्नाले कैद हुदैन छाडिदिनु.

> मुष पतित भै जात वाहेक भया पछि अर्कासित करणि गराउन्या स्वास्निले मुष पतित नहुदै. अघि फलाना सित करणि भयाको छ भताहा स्मेत् भातमा वोरियाका छन् भनि पोल्दा गर्न्या कुराको अैन् --- --- --- --- --- --- --- ३

१३. स्वास्निलाइ कचहरिमा ल्याइ रोवकार गर्दा. मुष पतित मात्र भै भात वाहेक् भया पछिको करणि तहकित ठहऱ्यो भन्या. नभयाका कुरामा अघि मुष पतित नुहदै. फलानसित करणि भयाको छ भनि झुट्टा कुरामा अर्कालाइ जात अनुसार ज्यान कटाउन दामल गराउनाको

कैफियत् गरि कागज स्मेत् लेषि दिन्या व्राम्हण लगायेत्. तागाधारि जात गैह्नका स्वास्निलाइ ३ वर्ष कैद गर्नु. म्यादको डवल् दिया लिनु.

१४. मुष पतित भया पछि विग्र्याका स्वास्निलाइ मुष पतित नुहदै. अघि फलाना सित करणि भयाको छ भनि दे भनि. अरू कसैले सिकाइ भनायाको ठहर्‍या. जात भात संवंधिका कुरामा अर्कालाइ ज्यान मराउन दामल गराउनाको जालसाजि गरि सिकाउन्या जो हो उस्लाइ ५ वर्ष कैद गर्नु. म्यादको डवल् दिया दिनु.

१५. स्वास्निले भात्मा वोर्‍याको छ भनि नभयाको कर्णि पोल्याको हुनाले भताहाले पतिया गर्नु पर्दैन.

अपुतालि षानाका लागी करणि गर्‍याको हामिले देष्या जान्याको छ भनि लार्क्यामा आउन्यालाइ गर्न्या अैन् ---

१६. कसैका लोग्न्या छोरा कोहि न भयाका विधवा स्वास्नि मात्र रहया छन्. अपुतालि षान्यासित अंस अपुतालिका कुरामा झगरा पर्‍याको रहेछ. तेस्तैमा अंस अपुतालि षानाको लागि यो स्वास्नि अर्कासित विग्र्याकि छ भन्यो अर्को वारिस षडा गराइ भनायो कसैले हामिले देष्याका छौ भनि भन्यो वा. भनायो र. वुझदा करणि भयाको ठहरेन भन्या. अपुतालि षानाका लागि नभयाका करणिका कुरो उठाइ फरेव गर्न्या जति जना छन्. उति जनालाइ गरि. तेसै स्वास्निका अपुतालि ज्माका विगा वमोजिम दामासहिका दरले दंड गर्नु.

# जवरजस्तिको

## ११ वर्ष मनिका सधवा विधवा कंन्याको जवर्जस्ति कर्णि गर्न्याको.

१. उपाध्या लगायेत् आफु मिल्दा र आफु भंदा घटि पानि चलन्या जातसंमका ११ वर्ष मनिका सधवा विधवा कंन्याको एकै जनाले हवस् २।३ जना मिलि लागु षुवाइ हवस् वाधि हवस् मुष थुनि हवस् एतिमा यौटै कुरो मात्रै गरि कर्णि लिन्या जवरजस्ति गर्न्या ठहर्छ प्रथम कर्णि लिन्यालाइ सधवा भया जार हांन्या जातको अैन वमोजिं साधुको षुसि जार नहांन्या जातका सधवा र. विधवा कंन्या भया अैन वमोजिं अंस सर्वस्व गरि कचहरिवाट दसौद लि उपर तेसै स्वास्नीलाइ दिनु २।३ जनाको कर्णि गऱ्याको भया दामासहिका दरले वाडि दि कर्णि गर्न्यालाइ ६ वर्ष कैद गर्नु स्वास्नीको जात जान्या रहेनछ गलंज्या हुन्या भात चलन्या रहेछ भन्या सर्वस्व हुदैन ६ वर्षमात्रै कैद गर्नु म्यादको डवल् दिया लिनु हुल वाधि गै तेसै थलामा उसै स्वास्नीको कर्णि गर्न्या अरु जति छन् दोश्रा तेश्राको विचार्नगर्नु तिन्लाइ ३।३ वर्ष कैद गर्नु म्यादको डवल् दिया लिनु हुल गरि सग लागि जान्या समाउन्या कर्णि भन्या नगर्न्या लार्क्या मानिसहरूलाइ जनहि ६०।६० रुपैया दंड गर्नु रुपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु जवरजस्ति हुनाले मासिन्या जातका स्वास्नी मासिदैन.

२. रजपूत जात र असल जैसिले उपाध्याका ११ वर्ष मनिका सधवा विधवा कंन्याको एकै जनाले हवस् २।३ जना मिलि लागु षुवाइ हवस् वाधि हवस् मुष थुनि हवस् एतिमा यौटै कुरो मात्रै गरि कर्णि लिन्या जवरजस्ति गर्न्या ठहर्छ प्रथम कर्णि लिन्यालाइ सधवा भया अैन वमोजिम्साधुको षुसि विधवा र कंन्या भया अैन वमोजिं अंस सर्वस्व गरि कचहरिवाट दसौद लि उपर तेसै स्वास्नीलाइ दिनु. २।३ जनाको कर्णि गऱ्याको भया दामासहिका दरले वाडि दि प्रथम कर्णि गर्न्यालाइ भातमा वोऱ्याको भया पनि नभया पनि ७ वर्ष कैद गर्नु म्यादको डवल् दिया लिनु हुल वाधि गै तेसै थलामा उसै स्वास्नीको कर्णि गर्न्या अरू जति छन् दोश्रा तेश्राको विचार्नगर्नु तिन्लाइ साढे तिन् तिन् वर्ष कैद गर्नु म्यादको डवल् दिया लिनु हुल गरि सग लागि जान्या समाउन्या कर्णि भन्या नगर्न्या लार्क्या मानिसहरू लाइ जनहि ६०।६० रुपैया दंड गर्नु. रुपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

३. तागाधारि जात गैह्रले उपाध्या असल जैसि रजपूतका ११ वर्ष मनिका सधवा विधवा कंन्याको एकै जनाले हवस् २।३ जना मिलि लागु षुवाइ हवस् वाधि हवस् मुष थुनि हवस् एतिमा यौटै कुरो मात्र गरि कर्णि लिन्या जवरजस्ति गर्न्या ठहर्छ प्रथम कर्णि लिन्यालाइ सधवा भया अैन वमोजिं साधुको षुसि विधवा र कंन्या भया अैन वमोजिं अंस सर्वस्व गरि कचहरिवाट दसौद लि उपर तेसै स्वास्नीलाइ दिनु २।३ जनाको कर्णि गऱ्याको भया दामासहिका दर्ले वाडि दि प्रथम कर्णि गर्न्यालाइ भातमा वोऱ्याको भया पनि नभया पनी ९ वर्ष कैद गर्नु म्यादको डवल् दिया लिनु हुल वाधि गै तेसै थलामा उसै स्वास्नीको कर्णि गर्न्या अरू जति छन् दोश्रा तेश्राको विचार्नगर्नु. तीन्लाइ साढे चार चार वर्ष कैद गर्नु म्यादको डवल् दिया लिनु हुलगरि सग लागि जान्या समाउन्या कर्णि भन्या नगर्न्या लार्क्या मानिस्हरूलाइ जनहि ६०।६० रुपैया दंड गर्नु रुपैया नतिऱ्या कैद गर्नु.

४. देवभाजु तेह्लैत्या भट्ट मर्हट्टा नागर गुज्राति माहाराष्ट्र तैलंती द्राविडमधिस्या देसि व्राम्हण र वीराना राजका अरू गैह्र व्राह्मण जात गैह्रले उपाध्या लगायेत तागाधारि जातका ११ वर्ष मनिका सधवा विधवा कंन्याको एकै जनाले हवस् २।३ जना मिलि लागु षुवाइ हवस् वाधी हवस् मुष थुनि हवस् एतिमा यौटै कुरो मात्रै गरि कर्णि लिन्या जवरजस्ति गर्न्या ठहर्छ प्रथम कर्णि लिन्यालाइ सधवा भया अैन वमोजिं साधुको षुसि विधवा र कंन्या भया अैन वमोजिं अंस सर्वस्व गरि कचहरिवाट दसौद लि उपर तेसै स्वास्नीलाइ दिनु २।३ जनाको कर्णि गऱ्याको भया दामासहिका दरले वाडिदि प्रथम कर्णि गर्न्यालाइ भातमा वोऱ्याको भयापनि नभया पनि ९ वर्ष कैद गर्नु म्यादको डवल् दिया लिनु हुल वाधि गै तेसै थलामा उसै स्वास्नीको कर्णि गर्न्या अरू जति छन् दोश्रा तेश्राको विचार नगर्नु तिन्लाइ साढे चार चार वर्ष कैद गर्नु म्यादको डवल् दिया लिनु हुल गरि सग लागि जान्या समाउन्या कर्णि भन्या नगर्न्या लार्क्या मानिसहरूलाइ जनहि ६०।६० रुपैया दंड गर्नु रुपैया नतिऱ्या कैद गर्नु.

५. दस नाम जोगि जंगम संन्यासि सेवडा वैरागि कान फट्टा नानक उदासि ओघर गैह्र भेष धारि ३ लिंगदेषिका जैसि डोटयाल् जैसि जुम् लि जैसि जात गैह्रले उपाध्या लगायेत् तागाधारि जातका ११ वर्ष मनिका सधवा विधवा कंन्याको एकै जनाले हवस् २।३ जना मिलि लागु षुवाइ हवस् वाधि हवस् मुषथुनि हवस् एतिमा यौटै कुरो मात्र गरि कर्णि लिन्या जवर्जस्ति गर्न्या ठहर्छ प्रथम कर्णि लिन्यालाइ सधवा भया अैन वमोजिम् साधुको षुसि विधवा र कंन्या भया

अैन वमोजिं अंस सर्वस्व गरि कचहरिवाट दसौद लि उपर तेसै स्वास्नीलाइ दिनु २।३ जनाको कर्णि गऱ्याको भया दामासहिका दर्ले वाडि दि प्रथम कर्णि गर्न्यालाइ भातमा वोऱ्याको भया पनि नभया पनि १० वर्ष कैद गर्नु म्यादको डवल् दिया लिनु हुल वाधि गै तेसै थलामा उसै स्वास्नीको कर्णि गर्न्या अरू जति छन् दोश्रा तेश्राको वीचार्नगर्नु तिन्लाइ पाच पाच वर्ष कैद गर्नु म्यादको डवल् दिया लिनु हुल गरि सग लागि जान्या समाउन्या कर्णि भन्या नगर्न्या लाक्र्या मानिसहरूलाइ जनहि ६०।६० रुपैया दंड गर्नु रुपैया नतिऱ्या कैद गर्नु.

६. नमासिन्या मतवालि जातले उपाध्या लगायेत् तागाधारि जातका ११ वर्ष मनिका सधवा विधवा कंन्याको एकै जनाले हवस् २।३ जना मिलि लागु षुवाइ हवस् वाधि हवस् मुष थुनि हवस् एतिमा यौटै कुरो मात्र गरि कर्णि लिन्या जवर्जस्ति गर्न्या ठहर्छ प्रथम करनि लिन्यालाइ सधवा भया अैन वमोजिं साधुको षुसि विधवा र कंन्या भया अैन वमोजिम् अंस सर्वस्व गरि कचहरिवाट दसौद लि उपर तेसै स्वास्नीलाइ दिनु २।३ जनाको कर्णि गऱ्याको भया दामासहिका दर्ले वाडिदि प्रथम कर्णि गर्न्यालाइ भातमा वोऱ्याको भया पनि नभया पनि ११ वर्ष कैद गर्नु म्यादको डवल दिया लिनु हुल वाधि गै तेसै थलामा उसै स्वास्नीको कर्णि गर्न्या अरू जति छन् दोश्रा तेश्राको विचार्नगर्नु तिन्लाइ साढे पाच पाचवर्ष कैद गर्नु म्यादको डवल् दिया लिनु हुल गरि सग लागि जान्या समाउन्या कर्णि भन्या नगर्न्या लाक्र्या मानिसहरूलाइ जनहि ६०।६० रुपैया दंड गर्नु रुपैया नतिऱ्या कैद गर्नु.

७. मासिन्या जातले उपाध्या लगायेत् तागाधारि जात गैह्रका ११ वर्ष मनिका सधवा विधवा कंन्याको एकै जनाले हवस् २।३ जना मिलि लागु षुवाइ हवस् वाधि हवस् मुष थुनि हवस् एतिमा यौटै कुरोमात्रै गरि कर्णि लिन्या जवर्जस्ति गर्न्या ठहर्छ प्रथम कर्णि लिन्यालाइ सधवा भया अैन वमोजिं साधुको षुसि विधवा र कंन्या भया अैन वमोजिं अंस सर्वस्व गरि कचहरिवाट दसौद लि उपर तेसै स्वास्नीलाइ दिनु. २।३ जनाको कर्णि गऱ्याको भया दामासहिका दर्ले वाडिदिनु प्रथम कर्णिगर्न्यालाइ भात्मा वोऱ्याको भया पनि नभया पनि अैन वमोजिंको अंस सर्वस्व गरि दामल गर्नु एति रित गरि नमासिन्या मतवालि जातका ११ वर्ष मनिका सधवा विधवा कंन्याको कर्णि गऱ्या मासि दिनु हुल वाधि गै तेसै थलामा उसै स्वास्नीको कर्णि गर्न्या अरू जति छन् दोश्रा तेश्राको विचार्नगर्नु तिनाइ मासि दिनु हुल गरि

सग लागि जान्या समाउन्या कर्णि भन्या नगर्न्या लाक्र्या मानिसहरूलाइ जनहि ६०।६० रुपैया दंड गर्नु रुपैया नतिऱ्या कैद गर्नु.

८. छिटो हालनु नपर्न्या पानि नचलन्या जात गैह्रले. उपाध्या लगायेत् तागाधारि जात र. नमासिन्या मतुवालि जातका ११ वर्ष मनिका सधवा विधवा कंन्याको एकै जनाले हवस् २।३ जना मिलि लागु षुवाइ हवस् वाधि हवस्. मुष थुनि हवस्. एतिमा यौटै कुरो मात्र गरि. करणि लिन्या जवर्जस्ति गर्न्या ठहर्छ. प्रथम करणि लिन्यालाइ. सधवा भया अैन वमोजिम जार हान्या हांन्या जातको साधुको साधुको षुसि. जार नहान्या जातको सधवा र. विधवा कंन्या भया अैन वमोजिम अंस सर्वस्व गरि. कचहरिवाट दसौद लि उपर तेसै स्वास्नीलाइ दिलाइ दिनु. २।३ जनाको करणि गऱ्याको भया दामासहिका दरले वाडिदिनु. प्रथम करणि गर्न्यालाइ अैन वमोजिम अंससर्वस्व गरि दामल गर्नु. एहि रित गरि मासिन्या जातका ११ वर्ष मनिका. सधवा विधवा कंन्याको करणि गऱ्या मासिदिनु. हुल वाधि गै तेसै थलामा उसै स्वास्नीको कर्णि गर्न्या अरू जतिछन्. दोश्रा तेश्राको विचार नगर्नु. तिनलाइ मासिदिनु हुल गरि संग लागि जान्या समाउन्या करणिभन्यानगर्न्या लाक्र्या मानिसहरूलाइ जनहि ७०।७० रूपैया दंड गर्नु. रुपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु.

९. छोइ छिटो हालनु पर्न्या जातले उपाध्या लगायेत्. तागा धारि जात र. नमासिन्या मतुवालि जातका ११ वर्ष मनिका सधवा विधवा कंन्याको. एकै जनाले हवस् २।३ जना मिलि लागु षुवाइ हवस्. वाधि हवस् मुष थुनि हवस् वा केहि नगरि उसै गरोस् करणि लिन्या जवर्जस्ति गर्न्या ठहर्छ सधवा भया जार हान्या जातको. अैन वमोजिम साधुको षुसि. जारनहान्या जातका सधवा र विधवा कंन्या भन्या. अैन वमोजिमको अंस सर्वस्व गरि. कचहरिवाट दसौद लि. उपर तेसै स्वास्नीलाइ दिलाइ दिनु. २।३ जनाको करणि गऱ्याको भया. दामासहिका दरले वाडिदि प्रथम करणि गर्न्यालाइ काटिमारि दिनु. एहि रित गरि मासिन्या मतुवालि जातका ११ वर्ष मनिका कंन्या विधवाको करणि गऱ्या सर्वस्व स्वास्निलाइ दिलाइ दामल गर्नु. पानि नचलन्या छिटो हालनु नपर्न्या जातका ११ वर्ष मनिका कंन्या विधवा सधवाको करणि गर्न्यालाइ मासि दिनु हुल वाधि गै तेसै थलामा उसै स्वास्नीको करणि गर्न्या अरू जति छन् दोश्रा तेश्राको विचार नगर्नु. तागाधारि र नमासिन्या जातमासिन्या मतुवालि जातको करणि गरया मासिदिनु. पानि नचल्न्या. छिटो हाल्नु नपर्न्या जातका स्वास्निको करणि गरयालाइ ३।३ वर्ष कैद गर्नु.

हुल गरिसंगलागि जान्या समाउन्या करणि भन्या नगर्न्या. एस्तालार्क्या हरूमा तागाधारि लगायेत्. मासिन्या पानि चलन्या जातका स्वास्निमा हुल गर्न्यालाइ ८०।८० छोया छिटो हालनु नपर्न्या जातसम्मका स्वास्निमा हुल गर्न्यालाइ ७०।७० छिटो हालनु पर्न्या जातका स्वास्निलाइ हुल गर्न्यालाइ जनहि ६०।६० रूपैया दंड गर्नु. रुपैया नतिऱ्या कैद गर्नु.

१०. तागाधारि लगायेत् पानि चलन्यासम्मका लोग्न्या मानिसले. पानि नचलन्या छिटो हालनु नपर्न्या जातका ११ वर्ष मनिका सधवा विधवा कंन्याको एकै जनाले हवस् २।३ जना मिलि लागु षुवाइ हवस्. मुष थुनि हवस् वाधि हवस्. एतिमा एउटै कुरो मात्रै गरि करणि लिन्या जवरजस्ति गर्न्या ठहर्छ. प्रथम करणि लिन्यालाइ करणि गरि स्वास्निका हातको आफुले षायाको रहेनछ भन्या अैन वमोजिम अंस सर्वस्व गरि. कचहरिबाट दसौद लि उपर तेसै स्वास्नीलाइ दिलाई दिनु. २।३ जनाको करणिगऱ्याको भया. दामासाहिका दरले वाडि दि करणि गर्न्यालाइ ३ वर्ष कैद गर्नु. म्यादको डवल् दिया रूपैया लि १ तीर्थ गराइ पतिया दिनु. भात पानि चल्छ. रूपैया नतिऱ्या कैद गर्नु. म्याद पुग्या पछि पतिया दिनु. करणि गरि स्वास्निका हातको आफुले षाइ अरूलाइ वोरेछ भन्या. सर्वस्व गरि ३ वर्ष कैद गरि. जौना जातका स्वास्निको करणि गऱ्याको छ. उसै जातको १ अक्षर वात्रा गालामा षोडि पानि वाहेक गरि उसै जातमा मिलाइ छाडि दिनु. हुल वाधि गै. तेसै थलामा उसै स्वास्नीको करणि गर्न्या अरू जति छन्. दोश्रा तेश्राको विचार नगर्नु. करणि गरि स्वास्नि का हातको आफुले षायाको रहेनछ भन्या तागाधारिलाइ १५० नमासिन्या लाइ १०० मासिन्यालाइ ६० रूपैया दंड गरि १ तीर्थ गराइ पतिया दिनु. भात पानि चल्छ करणि गरि स्वास्निका हातको आफुले षाइ अरूलाइ वोरेछ भन्या. सर्वस्व गरि. उसै जातको १ अक्षर वात्रा गालामा षोडि. पानि वाहेक गरि छाडि दिनु. हुल गरि संग लागी जान्या समाउन्या करणि भन्या नगर्न्या. लार्क्या मानिस्हरूलाइ जनहि ४०।४० रुपैया दंड गर्नु. रुपैया नतिऱ्या कैद गर्नु. जवरजस्ति हुनाले मासिन्या जातका स्वास्नि मासिन्न.

११. तागाधारि लगायेत् पानि नचलन्या छिटो हाल्नु नपर्न्यासंमका लोग्न्या मानिस्ले छिटो हाल्नु पर्न्या जातका ११ वर्ष मनिका सधवा विधवा कंन्याको एकै जनाले हवस्. २।३ जना मिलि लागु षुवाइ हवस् वाधि हवस्. मुष थुनि हवस्. एतिमा यौटै कुरो मात्रै गरि. करणि लिन्या जवरजस्ति गर्न्या ठहर्छ.. प्रथम करणि गर्न्यालाइ करणि गरि स्वास्निका हातको. आफुले

षायाको भया पनि नभया पनि सर्वस्व गरि ३ वर्ष कैद गरि. उसै जातको १ अक्षर वात्रा गालामा षोडि पानि वाहेक गरि छोडि दिनु. हुल वाधि गै. तेसै थलामा उसै स्वास्नीको करणि गर्न्या अरू जति छन्. दोश्रा तेश्राको विचार नगर्नु. करणि गरि अरूलाइ पानिमा वोऱ्याको रहेन भन्या. ३०।३० रूपैया दंड गरि पानिमा वोऱ्याको भया सर्वस्व गरि १ वर्ष कैद गरि उसै जातको १ अक्षर वात्रा गालामा षोदि. पानि वाहेक गरि छोडि दिनु. हुल गरि संग लागी जान्या समाउन्या करणि भन्या नगर्न्या. लार्क्या मानिस्हरूलाइ जनहि २०।२० रुपैया दंड गर्नु. रुपैया नतिऱ्या कैद गर्नु. जवरजस्ति हुनाले स्वास्निमासिदैनन्.

१२. पानि नचलन्या जातमा छिटो हालनु नपर्न्या मासिन्या जातले. उपाध्या रजपूत जैसि. तागाधारि नमासिन्या मासिन्या जातका. ११ वर्ष मनिका कंन्या विधवा सधवा स्वास्निको करणि गर्न्या जवरजस्ति ठहर्छ. सधवा भया साधुको खुसी कन्या र विधवा भया तेस्को ऐन वमोजिम्को अंस सर्वस्व गरि दामल् गर्नु.

१३. पोढचा च्यामाषलक् स्मेत् छोइ छिटो हालनु पर्न्या जातले. उपाध्या रजपूत जैसि. तागाधारि. नमासिन्य मतुवालि जातका ११ वर्ष मनिका कंन्या विधवा सधवा स्वास्निको करणि गर्न्या जर्बजस्ति ठहर्छ तेस्लाइ काटि मारि दिनु.

# जवरजस्तिको.

## ११ वर्ष माथीका सधवा विधवा कंन्याको जवर जस्ति करणि गर्न्याको.

१. उपाध्या लगायेत् आफु मिल्दा र. आफु भंदा घटि पानि चलन्या जातसम्ममा ११ वर्ष नाघ्याका सधवा विधवा कंन्याको एकै जनाले हवस् २।३ जना मिलि लागु षुवाइ हवस् वाधि हवस्. मुषथुनि हवस्. एतिमा एउटै कुरोमात्र गरि करणि लिन्या जवरजस्ति गर्न्या ठहर्छ. प्रथम करणि लिन्यालाइ सधवा भया जार हांन्या जातको अैन वमोजिम् साधुको षुसि. जार नहान्या जातका सधवा र विधवा कंन्या भया. अैन वमोजिम अंस सर्वस्व गरि कचहरिवाट दसौद लि. उपर तेसै स्वास्निलाइ दिनु २।३ जनाको करणि गऱ्याको भया सर्वस्व दामासहिका दरले वाडि दि. करणि गर्न्यालाइ ३ वर्ष कैद गर्नु. स्वास्निको जात जान्या रहेनछ. भात चल्न्या रहेछ. भन्या सर्वस्व हुदैन. ३ वर्ष मात्रै कैद गर्नु. म्यादको डवल् दिया लिनु. हुल वाधि गै तेसै थलामा उसै स्वास्नीको करणि गर्न्या. अरू जतिछन्. दोश्रा तेश्राको विचार नगर्नु. तिन्लाइ १॥.१॥ वर्ष कैद गर्नु म्यादको डवल् दिया लिनु. हुल गरि संग लागी जान्या समाउन्या करणि भन्या नगर्न्या. लार्क्या मानिसहरूलाइ जनहि ६०।६० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या कैद गर्नु. जवरजस्ति हुनाले मासिन्या जातका स्वास्नी मासिदैनन्.

२. रजपूत असल् जैसिले उपाध्याका ११ वर्ष नाघ्याका सधवा विधवा कंन्याको एकै जनाले हवस् २।३ जना मिली लागु षुवाइ हवस्. वाधि हवस् मुष थुनि हवस्. एतिमा यौटै कुरोमात्र गरि करणि लिन्या जवर जस्ति गर्न्या ठहर्छ. प्रथम करणि लिन्यालाई. सधवा भया अैन वमोजिम साधुको षुसि. कंन्या विधवा भया अैन वमोजिम्को अंस सर्वस्व गरि कचहरिवाट दसौद लि उपर तेसै स्वास्नीलाइ दिनु. २।३ जनाको करणि गऱ्याको भया दामा सहिका दरले वाडि दि. प्रथम करणि गर्न्यालाइ भातमा वोऱ्याको भया पनि नभया पनि ४ वर्ष कैद गर्नु. म्यादको डवल् दिया लिनु. हुलवाधिगै. तेसै थलामा उसै स्वास्निको करणि गर्न्या. अरू जतिछन्. दोश्रातेश्राको विचार नगर्नु तिन्लाइ २।२ वर्ष कैद गर्नु. म्यादको डवल् दिया लिनु. हुल गरिसंग लागी जान्या समाउन्या करणि भन्या नगर्न्या लार्क्या मानिस्हरूलाइ जनहि ६०।६० रूपैया दंड गर्नु. रुपैया नतिऱ्या. अैन वमोजिम् कैद गर्नु.

३. तागाधारि जात गैह्रले उपाध्या रजपूत असल जैसिका ११ वर्ष नाघ्याका सधवा विधवा कंन्याको एकै जना हवस्. २।३ जनाले मिलि लागु षुवाइ हवस्. वाधि हवस्. मुष थुनि हवस्. एतिमा यौटै कुरो मात्र गरि करणि लिन्या जवरजस्ति गर्न्या ठहर्छ. प्रथम करणि लिन्यालाइ सधवा भया. अैन वमोजिम साधुको षुसि. विधवा र कंन्या भया अैन वमोजिम् अंस सर्वस्व गरि कचहरिवाट दसौद लि. उपर तेसै. स्वास्नीलाइ दिनु २।३ जनाको करणि गर्‍याको भया दामासहिका दरले वाडि दि. प्रथम करणि गर्न्यालाइ भातमा वोर्‍याको भया पनि नभया पनि ५ वर्ष कैद गर्नु. म्यादको डवल् दिया लिनु. हुल वाधि गै तेसै थलामा उसै स्वास्नीको करणि गर्न्या. अरू जति छन् दोश्रा तेश्राको विचार नगर्नु. तिन्लाइ २॥. २॥. वर्ष कैद गर्नु. म्यादको डवल् दिया लिनु. हुल गरिसंग लागी जान्या समाउन्या करणि भन्या नगर्न्या लाक्र्या मानिस्हरूलाइ जनहि ६०।६० रुपैया दंड गर्नु रुपैया नतिर्‍या कैद गर्नु.

४. देवभाजु तेह्लौत्या भट्ट मर्हट्टा नागर गुज्रांति महाराष्ट्र तैलंगी द्राविड मधिस्या देसि व्राम्हण र.विरानाराजका अरू गैह्र व्राह्मण जात गैह्रले उपाध्या जैसि रजपूतका ११ वर्ष नाघ्याका सधवा विधवा कंन्याको एकै जनाले हवस् २।३ जना मिलि लागु षुवाइ हवस्. वाधि हवस् मुषथुनि हवस्. एतिमा यौटै कुरो मात्र गरि करणि लिन्या जवर जस्ति ठहर्छ. प्रथम करणि लिन्यालाइ. सधवा भया अैन वमोजिम साधुको षुसि. विधवा र कंन्या भया अैन वमोजिम. अंस सर्वस्व गरि कचहरिवाट दसौद लि. उपर तेसै स्वास्निलाइ दिनु. २।३ जनाको करणि गर्‍याको भया. दामासहिका दरले वाडि दि. प्रथम करणि गर्न्यालाइ. भातमा वोर्‍याको भया पनि नभया पनि ५ वर्ष कैद गर्नु. म्यादको डवल् दिया लिनु. हुल वाधि गै तेसै थलामा उसै स्वास्निको करणि गर्न्या अरू जतिछन्. दोश्रा तेश्राको विचार नगर्नु. तिनलाइ २॥. २॥. वर्ष कैद गर्नु. म्यादको डवल् दिया लिनु. हुलगरि सग लागि जान्या समाउन्या. करणि भन्या नगर्न्या. लाक्र्या मानिसहरूलाइ जनहि ६०।६० रूपैया दंड गर्नु. रुपैया नतिर्‍या अैन वमोजिम् कैद गर्नु.

५. दसनाम जोगि जंगम संन्यासि सेवडा वैरागि कानफट्टा नानक उदासि ओघर गैह्र. भेष धारि ३ लिंग देषिका जैसि दोटचाल जैसि. जुमलि जैसि जात गैह्र उपाध्या लगायेत्. तागाधारि जातका ११ वर्ष नाघ्याका सधवा विधवा कंन्याको एकै जनाले हवस्. २।३ मिलि लागु षुवाइ हवस्. वाधि हवस्. मुषथुनि हवस् एतिमा यौटै कुरोमात्र गरि करणि लिन्या जवरजस्ति गर्न्या ठहर्छ.

प्रथम करणि लिन्यालाइ सधवा भया अैन वमोजिम साधुको षुसि. कंन्या र विधवा भया अैन वमोजिम अंस सर्वस्व गरि कचहरिवाट दसौद लि. उपर तेसै स्वास्नीलाइ दिनु. २।३ जनाको करणि गऱ्याको भया. दामासहिका दरले वाडि दि प्रथम करणि गर्न्यालाइ. भातमा वोऱ्याको भया पनि नभया पनि ८ वर्ष कैद गर्नु. म्यादको डवल् दिया लिनु. हुल वाधि गै. तेसै थलामा उसै स्वास्निको करणि गर्न्या. अरू जतिछन् दोश्रा तेश्राको विचार नगर्नु तिनलाइ ४।४ वर्ष कैद गर्नु म्यादको डवल् दिया लिनु. हुल गरिसंग लागी जान्या समाउन्या करणि भन्या नगर्न्या लाक्र्या मानिसहरूलाइ जनहि ६०।६० रुपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

६. नमासिन्या मतवालि जातले उपाध्या लगायेत्. तागाधारि जातका ११ वर्ष नाघ्याका सधवा विधवा कंन्याको एकै जनाले हवस्. २।३ जना मिलि लागु षुवाइ हवस्. वाधि हवस् मुषथुनि हवस्. एतिमा यौटै कुरो गरि करणि लिन्या जवरजस्ति गर्न्या ठहर्छ. प्रथम करणि लिन्यालाइ सधवा भया. अैन वमोजिम साधुको षुसि. कंन्या र विधवा भया अैन वमोजिम अंस सर्वस्व गरि. कचहरिवाट दसौद लि. उपर तेसै स्वास्नीलाइ दिनु २।३ जनाको करणि लियाको भया दामासहिका दरले वाडि दि. प्रथम करणि गर्न्यालाइ. भातमा वोऱ्याको भया पनि नभया पनि १० वर्ष कैद गर्नु म्यादको डवल् दिया लिनु. हुल वाधि गै तेसै थलामा उसै स्वास्निको करणि गर्न्या अरू जतिछन्. दोश्रा तेश्राको विचार नगर्नु तिनलाइ ५।५ वर्ष कैद गर्नु. म्यादको डवल् दिया लिनु. हुल गरिसंग लागि जान्या समाउन्या करणि भन्या नगर्न्या लाक्र्या मानिसहरूलाइ जनहि ६०।६० रुपैया दंड गर्नु. रुपैया नतिऱ्या अैन वमोजिम कैदगर्नु.

७. मासिन्या जात गैह्रले उपाध्या लगायेत् तागाधारि जात र. नमासिन्या मतुवालि गैह्रका ११ वर्ष नाघ्याका सधवा विधवा कंन्याको. एकै जनाले हवस् २।३ जना मिलि लागु षुवाइ हवस्. वाधि हवस्. मुषथुनि हवस्. एतिमा यौटैकुरो मात्र गरि करणि लिन्या जवर जस्ति गर्न्या ठहर्छ. प्रथम करणि लिन्यालाइ सधवा भया अैन वमोजिम साधुको षुसि. विधवा र कंन्या भया अैन वमोजिम अंस सर्वस्व गरि. कचहरिवाट दसौद लि. उपर तेसै स्वास्निलाइ दिनु २।३ जनाको करणि गऱ्याको भया. दामासहिका हिसावले वाडि दिनु. प्रथम करणि गर्न्यालाइ भातमा वोऱ्याको भया पनि नभया पनि दामल गर्नु. एहिरित गरि मासिन्या मतुवालि जातका ११ वर्ष माथिका सधवा विधवा कंन्याको करणि गऱ्या मासि दिनु. हुल वाधि गै तेसै थलामा उसै स्वास्निको करणि गर्न्या अरू जतिछन् दोश्रा तेश्राको विचार नगर्नु. तिन्लाइ मासि दिनु. हुल

वाधिसंग लागी जांन्या समाउन्या करणि भन्या नगर्न्या लार्क्या. मानिस्हरूलाई जनहि ६०।६० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

८. छोइ छिटो हाल्नु नपर्न्या पानि नचलन्या गैह्र जातले उपाध्या लगायेत्. तागाधारि जात र. नमासिन्या मतुवालि जातका ११ वर्ष नाघ्याका सधवा विधवा कंन्याको. एकै जनाले हवस् २।३ जना मिलि लागु षुवाइ हवस्. वाधि हवस् मुषथुनि हवस्. एतिमा यौटैकुरो मात्र गरि करणि लिन्या जवर जस्ति गर्न्या ठहर्छ. सधवा भया जार हांन्या जातको अैन वमोजिम् साधुको षुसि जार नहान्या जातका सधवा र विधवा कंन्या भया अैन वमोजिम अंस सर्वस्व गरि कचहरिवाट दसौद लि. उपर तेसै स्वास्निलाइ दिनु. २।३ जनाको करणि गऱ्याको भया दामासहिका हिसावले वाडि दिनु. प्रथम करणि गर्न्यालाइ दामल गर्नु. एहिरित गरि मासिन्या जातका ११ वर्ष नाघ्याका सधवा विधवा कंन्याको करणि गऱ्या मासि दिनु. हुल वाधि गै तेसै थलामा. उसै स्वास्निको करणि गर्न्या. अरू जतिछन्. दोश्रा तेश्राको विचार नगर्नु. तिन्लाइ मासि दिनु. हुल गरि संग लागि जान्या समाउन्या करणि भन्या नगर्न्या लार्क्या मानिस्हरूलाइ. जनहि ७०।७० रूपैया दंड गर्नु. रुपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु.

९. छोइ छिटो हालनु पर्न्या गैह्र पानि नचलन्या जातले उपाध्या लगायेत तागाधारि जात र. नमासिन्या मतुवालि जातका ११ वर्ष नाघ्याका सधवा विधवा कंन्याको. एकै जनाले हवस्. २।।३ जना मिलि लागु षुवाइ हवस्. वाधि हवस् मुषथुनि हवस्. एतिमा यौटै कुरोमात्र गरि करणि लिन्या जवर जस्ति गर्न्या ठहर्छ. सधवा भया जार हांन्या जातको अैन वमोजिम साधुको षुसि जार नहांन्या जातका सधवा र विधवा कंन्या भया अैन वमोजिम् अंस सर्वस्व गरि. कचहरिवाट दसौद लि. उपर तेसै स्वास्निलाइ दिलाइ दिनु. २।३ जनाको करणि गऱ्याको भया दामासहिका हिसावले वाडि दिनु. प्रथम करणि गर्न्यालाइ दामल गर्नु. मासिन्या जातका ११ वर्ष नाघ्याका सधवा विधवा कंन्याको एहिरितले करणि गऱ्या मासि दिनु. पानि नचलन्या छोया छिटो हालनु नपर्न्या जातका ११ वर्ष नाघ्याका कंन्या विधवाको करणि गर्न्यालाइ ४ वर्ष कैद गर्नु. म्यादको डवल् दिया लिनु. छिटो हालनु पर्न्या जातका ११ वर्ष नाघ्याका कंन्या विधवाको करणि गऱ्या ३ वर्ष कैद गर्नु. म्यादको डवल् दिया लिनु. हुल वाधि गै तेसै थलामा उसै स्वास्निको करणि गर्न्या अरू जतिछन्. दोश्रा तेश्राको विचार नगर्नु. तागाधारि र नमासिन्या मतुवालि जातको करणि गऱ्या मासिदिनु. मासिन्या जातको करणि गरयाको भया.

३।३ वर्ष कैद गर्नु. पानि नचलन्या जातका स्वास्निको करणि गर्न्यालाइ १॥. १॥. वर्ष कैद गर्नु. हुल गरि संग लागी जान्या समाउन्या करणि भन्या नगर्न्या. एस्ता लार्क्याहरूलाइ आफु भन्दा उपल्ला पानि चलन्या जातका स्वास्निको. हुल गर्न्या लाइ जनहि ७०।७० रूपैया आफु मिलदा जातका स्वास्नि रहया छन्भन्या ६०।६० रूपैया दंड गर्नु. रुपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु.

१०. तागाधारि लगायेत् पानि चलन्यासम्मका लोग्न्या मानिस्ले. पानि नचलन्या छोया छिटो हालनु नपर्न्या जातका ११ वर्ष नाघ्याका सधवा विधवा कंन्याको. एकै जनाले हवस् २।३ जना मिलि लागु षुवाइ हवस् वाधि हवस् मुषथुनि हवस् एतिमा एउटै कुरोमात्र गरि करणि लिन्या जवर जस्ति ठहर्छ. प्रथम करणि लिन्यालाइ स्वास्निको जात नजानाले सर्वस्व हुदैन करणि गरि स्वास्निका हातको आफुले षायाको रहेनछ भन्या तागाधारि जातलाइ १५० मतवालि जातलाइ १०० मासिन्या जातलाइ ६० रूपैया दंड गरि १ तीर्थ गराइ पतिया दिनु. भात पानि चल्छ. रूपैया नतिऱ्या कैद गर्नु. म्याद पुग्या पछि. पतिया दिनु. करणि गरि स्वास्निका हातको आफुले षाइ. अरूलाइ वोरेछ भन्या सर्वस्व गरि १॥ वर्ष कैद गरि. जौना जातका स्वास्निको करणि गऱ्याको छ उसै जातको १ अक्षर वाऱ्या गालामा षोदि. पानि वाहेक् गरि उसै जातमा मिलाइ छाडिदिनु. हुल वाधि गै तेसै थलामा उसै स्वास्निको करणि गर्न्या. अरू जतिछन् दोश्रा तेश्राको विचार नगर्नु. करणि गरि स्वास्निका हातको आफुले षायाको. रहेनछ भन्या तागाधारिलाइ १५० नमासिन्या मतुवालि जातलाइ १०० मासिन्या मतुवालि जातलाइ ६० रूपैया दंड गरि १ तीर्थ गराइ पतिया दिनु. भात पानि चल्छ करणि गरि स्वास्निका हातको. आफुले षाइ अरूलाइ वोरेछ भन्या सर्वस्व गरि उसै जातको १ अक्षर वाऱ्या गालामा षोदि. पानि वाहेक गरि छाडि दिनु. हुल गरि संग लागी जान्या समाउन्या करणि भन्या नगर्न्या लार्क्या मानिसहरूलाइ जनहि ४०।४० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या. अैन वमोजिम कैद गर्नु. जवर जस्ति हुनाले मासिन्या जातका स्वास्नि मासि दैन.

११. तागाधारि लगायेत् पानिचलन्यासंमका लोग्न्या मानिसले. छिटो हालनु पर्न्या जातका ११ वर्ष नाघ्याका सधवा विधवा कंन्याको एकै जनाले हवस्. २।३ जना मिलि लागु षुवाइ हवस् वाधि हवस्. मुषथुनि हवस्. एतिमा यौटै कुरोमात्र गरि. करणि लिन्या जवर जस्ति गर्न्या ठहर्छ.. प्रथम करणि गर्न्यालाइ करणि गरि. स्वास्निका हातको आफुले षायाको भया पनि नभया पनि

सर्वस्व गरि १॥. वर्ष कैद गरि उसै जातको १ अक्षर वाया गालामा षोदि पानि वाहेक् गरि. उसै जातमा मिलाइ छाडि दिनु. हुल वाधि गै. तेसै थलामा. उसै स्वास्नीको करणि गर्न्या अरू जतिछन्. दोश्रा तेश्राको विचार नगर्नु करणि गरि अरूलाइ पानिमा वोऱ्याको रहेनछ भन्या ३०।३० रूपैया दंड गरि पानिमा वोऱ्याको रहेछ भन्या. सर्वस्व गरि १ वर्ष कैद गरि. उसै जातको १ अक्षर वात्रा गालामा षोदि. पानि वाहेक् गरि छोडि दिनु. हुल गरिसग लागी जान्या समाउन्या करणि भन्या नगर्न्या लार्क्या मानिसहरूलाइ जनहि ४०।४० रूपैया दंड गर्नु. नतिऱ्या कैद गर्नु जवर जस्ति हुनाले स्वास्नि मासिदैनन्.

१२. उपाध्या लगायेत् पानि चलन्या नचलन्या गैह्र चारवर्ण छत्तिस जातक ११ वर्ष मनिका हउन् ११ वर्ष नाघ्याका हउन् कंन्या विधवालाइ. आफु भंदा ठुला साना. आफु मिल्दा जात कसैले जवर्जस्ति करणि गरेछ भन्या. जवर जस्ति हुनाले त्यो स्वास्नि तेसले लैजान पाउदैन. लोग्न्याको कर लाग्दैन. जवर जस्ति करणि लिन्या लोग्न्यालाई. सजाय भै सकिया पछि. वावु आमा माइतिले जात मिल्दो हो तेसैलाइ दिंछु भन्या पनि. तेसलाइ दिन्नौ अर्केलाइ दिन्छौ भन्या पनि वावु आमाको षुसि. वावुआमा माइतिले कसैलाइ दियाको रहेनछ र. त्यो स्वास्नि जवान् भया पछि. आफ्ना षुसिले तेसैसित जान्छु भन्या जान पाउछन्. एस्ता रितले ल्यायाका स्वास्नि. अर्का सित विग्ऱ्या अैन वमोजिम सजाय गर्न. जार काटन पाउछ. विवाहिताका सरहको अंस पाउछे. भात षाना नषानाको भताहाको षुसि. वावु आमा माइतिले कसैलाइ. नदि रहयाका एस्ता स्वास्निलाइ. अघि जवर जस्ति करणि गर्न्या भन्दा कमि जातका लोग्न्याले करणि गरेछ भन्या. तल्ला जातले आफु भंदा उपल्ला जातका स्वास्निको करणि गर्न्याका. अैन वमोजिम सजाय गर्नु. उपल्ला जातले करणि गऱ्यो भन्या. षतलाग्दैन.

१३. अैनमा सजाय लेषियाका हाड नाता वाहेक्का ११ वर्ष नाघ्याका कंन्या विधवा सधवा स्वास्निको करणि गर्दा स्वास्नि ११ वर्ष मनिकि पनि रहेनछ. लागु षुवायाको पनि रहेनछ मुषथुनि वाधि २।३ जना मिलि करणि गऱ्याको पनि रहेनछ. लोग्न्या स्वास्नि २ जनामात्रै भै. करणि भयाको रहेछ भन्या. फलानाले जवर जस्ति गरि करणि लियो भनि. स्वास्नि कराउन आइ भन्या. जवर जस्ति ठहर्दैन करणि लिन्यालाइ. षुसि राजिले करणि गर्न्याका. अैन वमोजिम् सजाय गर्नु. करणि गराइ पछिवाट जवर जस्ति गरि करणि लियो भनि कराउन आउन्या स्वास्निलाइ ५० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु.

१४. तागाधारि जातका ११ वर्ष देखि मनिका कंन्या तागाधारि जातले. जवर जस्तिसित करणि गरेछ भन्या. तेस कंन्याका जात भंदा उपल्ला जातकाले करणि गऱ्याको भया माइतिका जात भंन्दा थोरै कम जात ठहर्छ. कंन्याका जात भंदा कम जातका. तागाधारिले करणि गरेछ. भन्या. उहि करणि गर्न्या तागाधारि जात कि हुन्छे. नमासिन्या मासिन्या मतुवालि जातले करणि गऱ्याको भया. त्यो कंन्या नमासिन्या मतवालि जात हुन्छे. पानि नचलन्या र छोया छिटो हालनु पर्न्या जातले. तागाधारि लगायेत् पानि चलन्या जातसम्मका ८ वर्ष देषि माथिका कंन्याको जवरजस्ति करणि गऱ्यो भन्या. जौन जातकाले करणि गऱ्याको छ. उहि जात हुंछे. पानि चल्दैन.

१५. तागाधारि जात नमासिन्या मतुवालि र. मासिन्या मतुवालि पानि चल्न्या गैऱ्ह जात का ८ वर्ष मनिका कंन्यालाइ. पानिनचल्न्या र छोइछिटो हालनु पर्न्या जातले. जवरजस्ति गरि जोनिमा लिंग छुवाउदा. त्यो कंन्या अजान अज्ञान वालष हुनाले. इन्को पानि चल्छ. तागाधारि लगायेत् नमासिन्या जात गैऱ्हका कंन्या नमासिन्या मतुवालि जात हुंछन्. मासिन्या जातका कंन्या मासिन्या जात हु.छन्. औवल्लाइ २ दोयम्लाइ १॥. सिम्लाइ १ चाहारलाइ ॥. रुपैयाका दरले. गोदान लि १ तीर्थ गराइ धर्माधिकारले पानीको पतिया दिनु. एस्ता केटिको माइतिले कंन्यादान गर्नु हुदैन. वावुले दियोकलस पुजि दिन हुंछ. दियो कलस् पूजि लैजान्याले जार काटन पाउछ ।

१६. पानि नचलन्या फलाना जातले ८ वर्षदेषि मनिका वालषलाइ जोनिमा लिंग छुवाया वापत् १ तीर्थ गराइ पानी शुद्ध भंन्या पतिया गरिदिनु. तेस्को जात अैन वमोजिम् पानि चलन्या शुद्र जात हु.छ. तागाधारि लगायत नमासिन्या जातका. नमासिन्या शुद्र जात हुंछन्. मासिन्या जातका मासिन्या शुद्र जात हुंछन्. भनि एसै विहोराको पतिया गराइ दिनु.

१७. सहर गामल वाहेक् मानिस्कोहि नभयाका ठाउमा र. वाहिर फेरा जंगल गैऱ्ह. एकलासमा कसैले अर्काका ११ वर्ष नाघ्याका कंन्या विधवा सधवा स्वास्निको करणिगरेछ र. स्वास्नि कराउन आइभन्या जवरजस्ति ठहर्छ. जौन जातका लोग्न्याले जौन जातका स्वास्निको करणि गऱ्याको छ उसै जातका जवर जस्ति करणिका अैन वमोजिम दंड सजाय कैद गर्नु. करणि

हुन पायाको रहेनछ. हातपात मात्र गऱ्याको ठहऱ्या करणिका आसयले हातपात गर्न्याका अैन वमोजिम् मा दोवर वढाइ दंड कैद गर्नु.

१८. आफुभंदा उपल्ला जातका हवस्. आफुमिल्दा जातका हवस्. आफुभंदा घटि जातका हवस्. अर्काका सधवा विधवा कंन्या स्वास्निलाइ. तागाधारि लगायत् चार वर्ण छत्तिसै जातका लोग्न्या मानिस कसैले मनोमान नगराइ. वलजफत जवरजस्ति करणि लिएछ र. करणि गर्दैमा हवस्. करणि गर्दैमाहवस करणि गऱ्याका २ घरिभित्रमा हवस्. तसै स्वास्निले करणि लिन्या. तेसैलाइ हतियार लाठा ढुँगाले हानि भिरमा लडाइ. षोलामा वगाइ पासोलाइ मारिछ भन्या. उसै वेलामा माऱ्याको हुनाले षतवात लाग्दैन. ज्यान माऱ्या वावत् को पतिया गराइ छाडिदिनु. २ घडि उप्रांत १ दिन १ रात सम्ममा माऱ्याकि भया ५० रुपैया दंड गरि पतिया गराइ छाडिदिनु. रुपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु. वाहा उप्रांन्त मा माऱ्याकि भया दामल गर्नु. करणि लिन्या लोग्न्या स्वास्निका भंदा उपल्लो र. उस् मिलदा जातको रहेछ भन्या तेस स्वास्निका हातको भात षानु नषानु भताहाको षुसि. स्वास्निका भंदा घटि पानि चल्न्या जातसंमका लोग्न्या ले करणि गऱ्याको भया अैन वमोजिम भात वाहेक हुंछे. पानि नचलन्या जातका ले करणि गऱ्याको भया भात पानि वाहेक हुंछे.

> जवरजस्ति परि करणि भयाको हुनाले. अक्षर षोदिदैन. अपुतालि षानाका लागि २।४ जना मिलि जवरजस्ति करणि लियामा दिन ७ भित्र कराउन आया. तेस्ले आफ्नु अंस षान पाउछे दिन ७ पछि कराउन आउन्या र पछि अर्कासित पोइल जान्याले अंस षान पाउदिन. अपुतालि षान्याले अैन वमोजिम षानु भंन्या अैन -- -- -- -- -- -- -- --

१९. कोहि विधवा स्वास्नि रहयाछन्. तेस्को अपुतालि षानाका लागि २।४ जना मिलि जवर जस्ति करणि लिनलायाको लियाको रहेछ र. तेस स्वास्निले करणि लियाका दिन ७ भित्रमा आफ्ना नजिकका अदालत ठाना. अमालमा कराउन आइ र. वुझदा जवर जस्ति करणि ठहऱ्यो भन्या. जवरजस्ती करणि गर्न्यालाइ अैन वमोजिम गर्नु. तेस स्वास्निले जवरजस्तिमा पऱ्याकि हुनाले. आफ्नु अंस धन संपति षान पाउछे. अपुतालि षान्याले षान पाउदैनन्. करणि भयाका दिन ७ भित्रमा कराउन आइन भन्या र. फेरि षुसिराजिले अर्कासित पोइल गया कि ठहऱ्या. अंश अपुतालि षान पाउदिन. अपुतालि षान्याले अैन वमोजिम षानु.

# जारिको.

१. तागाधारि मतवालि गैह्र जार हान्या जातहरूमा कसैको आफ्ना हाड गोत्रका भाइले र. उपाध्या व्राम्हण र. २ लिंगका जैसि वाहुन. आफुले जन्मायाका छोरि दियाका. जूवात्रिले जारि गऱ्या भन्या यतिलाइ. जारकाटन हुदैन. कसैले काटचो भन्या व्राम्हणलाइ र ज्यान माऱ्यामा अैनले दामल गर्नु. भंन्या लेषियाका जातलाइ अैन वमोजिमको अंस सर्वस्व गरि दामल गर्नु. अरूले काटचो भन्या ज्यानको वदला ज्यान हुंछ. काटि मारि दिनु. साधुले आफ्नु जार पक्रि. तागाधारि जात लाइ जनै झिकि मद सुगुरको मासु षुवाइ. अरू जार हान्या जातका मतवालिलाइ. अरू अभक्ष षुवाइ जात पतित गरि. अैन वमोजिमको अंस पर सारि तेस्को अंस साधुले लिनु. अमालिद्वाऱ्याहरूले जारि गर्न्यालाइ गाउमा नराषनु. निकालि दिनु. साधुका वलले पुगेन भन्या आफ्ना गोत्रका दाज्यू भाइ. गुहारि जारि गर्न्यालाइ सोहि वमोजिम् सजाय गरि अंस आफुले लिनु. आफ्ना गोत्रका भाइले मोह मदमा लाग्या मेरावलले पुगेन भनि. अदालत ठानामा कराउन आयो भन्या तेस जारलाइ पक्रिल्याइ अैन वमोजिम अंस सर्वस्व गरि जनै झिकि जात पतित गरि. तेस्का सर्वस्व मध्ये २ षंड साधुलाइ दि १ षंड अदालतबाट लिनु. येस्ता अमालमा परयो भन्या २ षंड साधुलाई दि एक षंड अदालतमा पुऱ्याइ दिनु. तेसले मेरो जारि गऱ्यो त पनि यसलाइ. जात पतित पनि गर्दिन्. अंस पनि म लिंन. यस कुराको पनि कसै नालिस गर्दिन. येसै छोडि दिन्छु. भनया. राजषत्का नाता वाहेक्. साधुको षुस हुंछ. छाडन पाउछ राजषत्मा पर्न्या नातालाइ. साधु ले छोडचो भन्या पनि. अदालत ठाना अमालवाट जारि गर्न्याको सर्वस्व गरि. सर्कार लगाइ नाताका अैन वमोजिम् सजाय गर्नु. साधुले जनै झिकि टागमनि छिरायाकोमात्रको भया जारि गर्न्यालाइ. अैन वमोजिम् भातको पनि पानिको पनि. पतिया दिनु. जनै झिकि हवस्. नझिकि हवस्. टागमनि छिराइ पैतालो स्मेत चटाइ छाडचाका र . रक्सि सुगुर्को मासु गैह्र षुवायी छाडचाका मानिसका हातको भात चल्दैन. पानिको मात्रै पतिया दिनु. अैनले पतिया नदिनु. भन्याकालाइ भुलाचुका परी धर्माधिकारवाट. पतिया भयाको रहेछ भन्या पनि. पतियाको कागज झिकि तेसलाइ जात पतित गराइ दिनु. धर्माधिकारले जानि पतिया गरि दियाको भया अघिल्ला अैन वमोजिम् दंड गर्नु.

२. उपाध्या जैसि व्राम्हणले उपाध्या जैसिकै जारि गऱ्या भन्या. साधुले मुडि जनै झिकि जात पतित गरि. उस्को अंस सर्वस्व गरि. आफु लिंछ तापनि मैले माफ गरि छाडि दिया भनि. केही नगरि छाडछ तापनि साधुको षुस हुंछ जारि गर्न्याले उस्को हातको भात षायाको रहेनछ भन्या र अरूलाइ वोऱ्याको रहेनछ भन्या साधुले सजाय नगरि जारिको षत माफ गरि छाडऱ्या का मानिसको जात जादैन आफ्ना जातैमा रहंछ अैनले सजाय हुन्य हाडनाता रहेनछ भन्या राजषत् पनि लाग्दैन.

३. उपाध्या व्राम्हण र दोश्रोलिंग सम्मका सद्य जैसिले उपाध्या लगायेत्. कसैको जारि गऱ्यो भन्या साधुले तेसलाइ जार नकाटनु. जारी गर्न्या व्राम्हणलाइ साधुले मुडि जनै झिकि. रक्सी सुगुर्को मासु षुवाइ जात पतित गरी. उस्को अैन वमोजिमको अंस सर्वस्व गरि. आफुले लि वस्याका गाउ सहरवाट निकालि दिनु. साधुले जार नकाटि अदालत ठाना अमालका कराउन आयो र जार लाइ पक्राइ ल्यायो भन्या. तेस्का सर्वस्व मध्ये कचहरिवाट दसौद लि. उपर सबै साधुलाइ सौपिदिनु. जारलाइ साधुका हातवाट सोहि वमोजिम सजाय गरायी निकालि दिनु. साधुले एस्को सजाय पनि गर्दिन. सर्वस्व पनि लिंन भन्या पनि साधुको षुस् छोडन पाउछ. सजाय भन्या गर्दिन सर्वस्वमात्रै लिंछ भन्या पनि लिन पाउछ.

४. उपाध्या र. २ लिंगका जैसिले तागाधारि जातका विधवा स्वास्नि जाहेर गरि. घरमा लैगि राष्याका लाइ फेरि अर्कै उपाध्या र २ लिंगका जैसिले विगाऱ्यो भन्या त्यो जार ठहर्छ. मुडि जाड रक्सी षुवाइ. अैन वमोजिमको सर्वस्व गरि लि. निकाल्छ तापनि. उसै छाड्छ तापनि साधुको षुसी राजषत् लाग्दैन.

५. लंवर षारेज भयो.

६. व्राम्हण वाहेक तागाधारि जात गैह्रले. आफ्ना हाड गोत्र उपाध्या २ लिंग का जैसि र. अैनले जार नहांनु भनि वन्द भयाका नाता वाहेकमा जार हांन्या. चारवर्ण छीतिसै जात गैह्रले. मामाका फुपुका आफ्नि आमाका सहोदर दिदि वैन्हि ठुलि आमा सानि आमाका छोराहरूमा दाज्यू पर्न्या वा भाइ पर्न्याले. भाइ वुहारि पर्न्या वा भाउज्यू पर्न्याको करणि गऱ्यो भन्या यस्तामा जार काटदौन भनि. सर्वस्व लि जात पतित गरि. आफु वस्याका सहर गाउ देषि

निकालिदिन्या मानिस्. नामर्द ठहर्दैन बुध्दिमान् वोलिंछ.यस्ता नजिकका नातामा. जार काटन्या मानिस पाजि ठहर्छ. जार काटचो भन्या अघि देषि चलिआयाको कुरो गर्न्या हो षतलाग्दैन साधुले छोडचो भन्या राजषत पनि लाग्दैन.

७. रजपुत क्षत्रि मगर गुरूंघले सुनुवार गैह्र. जार हान्या जातका विवाहिता कंन्या ल्यायाका विधवा ल्यायाका. अैनले जार हांन हुन्यासम्मका स्वास्नि गैह्रको. हाडगोत्र र व्राम्हण वाहेक् अरू कसैसित पोइल गया भन्या. तेस्ताको जार काट्छु भन्या पनि जारकाटतिन. अैन वमोजिम् जारको सर्वस्व लिंछु भन्या पनि विहा षर्च लि छाडछु भन्या. साधुको षुस रूपैया र सर्वस्व लि छोडदा. अथवा. सर्वस्व केहि लिंन काटछु भन्याका कुरामा. यहि कुरा गर्नु पर्छ. भनि. अदालत ठाना अमालका. हाकिम्ले कर लगाउनु हुदैन. स्वास्निका धनिले षुसि अघिवाट विहा षर्च रूपैया. अथवा. अैन वमोजिम सर्वस्व लि कागज पत्र भया पछि. फेरि जार काटचो भन्या ज्यानको वदला ज्यान जान्छ. कदाचित् जारि गर्न्याले विहा षर्च पनि. दिन्न सर्वस्व पनि दिन्न सक्या काटोस् भन्या. सक्या आफु जारकाट्नु. जारले कवुल नगरि विहाषर्च र सर्वस्व लिंछु भनि साधुले मात्र भन्न पाउदैन. अदालत ठाना अमालवाट विहा षर्च र सर्वस्व दिनु पर्छ भनि कर लगाउनु हुदैन.

८. तागाधारि नमासिन्या मासिन्या छोया छिटो हालनु नपर्न्या छिटो हालनु पर्न्या गैह्र जार हांन्या जातका अैनले जार हान्न हुन्या सम्मका स्वास्नि कसैले. अर्का लोग्न्यालाइ. कंन्या विधवा वेस्या हो भनि ढाटि दियेछ र मेरि स्वास्नि फलानाले दि फलानाले गै गयेछ. भन्या कुरो थाहा नभै. स्वास्नि लैजान्या लाइ साधुले जार काटचो भन्या. साधुलाइ षत लाग्दैन. स्वास्नि लैजान्या काटिया पछि. फलानाले दि. लै गयाको रहेछ भंन्या कुरो थाहा भयो दिन्या. कायेल भयो भन्या. एक कि स्वास्नि अर्कालाइ सौपन्या माइति हउन्. अरूकोहि हउन्. तेस्ता लोग्न्या मानिस्लाइ ६ वर्ष स्वास्नि मानिस्लाइ ३ वर्ष कैद गर्नु. म्यादको डवले दिया लि छाडनु. नकाटतैमा लैजान्याले फलानाकी स्वास्नि हो भनि मलाइ थाहा थियेन. अम्काले कंन्या विधवा वेस्या हो भंद मैले लै गयाके हो भनि आफुलाइ स्वास्नि दिन्यालाइ कायेल गऱ्यो भन्या अर्काले दि लै गयाको हुनाले स्वास्नि लैजान्यालाइ. साधुले काटन पाउदैन.काटचो भन्या. व्राम्हण भया अैन वमोजिम् अंस सर्वस्व गरि दामल् गर्नु. अरू जातलाई काटि मारि दिनु. स्वास्नि मानिस्ले सौप्याको रहेछ भन्या. स्वास्निलाइ जार काटन नहुनाले र सर्वस्व नहुनाले ३ वर्ष कैद गर्नु

म्यादका रुपैया डवल् दिया लि छाडनु. माइति हउन् अरू हउन् लोग्न्या मानिसले दियाको रहेछ भन्या. जार हान्न हुन्या सम्मका आफ्नि स्वास्नि अर्कालाइ सौपि करणि चुकाइ दिन्या व्राम्हण रहेछ भन्या मुडनु सर्वस्व लिंनु तेसै छाडनु साधुको षुसि अरू जातलाइ काटनु मुडनु सर्वस्व लिनु तेसै छाडनु साधुको षुसी अर्काले कन्या विधवा वेस्याहो भनि भोरपारि दि लैगयाको हुनाले स्वास्नि लैजान्यालाइ षत लाग्दैन.

९. तागाधारि जात गैह्र जार हांन्या जातका अैनले जार हांन हुन्या सधवा विधवा कन्या स्वास्नि कसैसित पोइल गया भन्या जारि गर्न्या आफ्नै देशमा रहेछ भन्या षोजि जार काटि पतिया गर्नु पर्न्याको पतिया गर्नु जार फेला परेन भन्या साधुले फलानसित विग्र्याकि हो भन्या पत्ता लाइ आयो भन्या पनि पतिया गराइदिनु फलाना सित विग्रि भंन्या पत्ता पायेनभन्या.तेसै स्वास्निका नाउको भाग्या वावत भात षाइन्या स्वास्निको भातको भात नखाइन्या स्वास्निको पानिको धर्माधिकारले. औवल्लाइ २॥. दोइम्लाइ २ सिंलाइ १ चहारलाइ ॥. दरले गोदान लि पतिया दिनु स्वास्नि अर्कासित विग्र्याको जानि जानि जार षोजेन पतिया गर्नु पर्न्यामा पतिया गरेन भन्या तेस्तालाइ रूपैया जरिवाना गरि लि पतिया गराइदिनु.

१०. राजषत् लाग्न्या हाडनाताका जारिका कुरामा. साधुले जारको सजाय गर्छ भन्या. अैन वमोजिम सजाय गर्नु साधुको षुस. म सजाय गर्दिन सर्वस्व पनि लिंन भनि अदालत अमालमा राजिनामा लेषि छाडचो भन्या पनि. अदालत अमालवाट.अैन वमोजिम् सर्वस्व पनि गर्नु. अैन वमोजिम् सजाय पनि गर्नु.

११. राजषत् लाग्न्या हाडनातामा र सर्वस्व हुन्या भात पानि मा पर्न्यामा. कसैले जारि गरेछ भन्या जारि गर्न्यालाइ. अदालत अडा ठाना अमाल द्वार्‍या थरि मुषिया मिफार्ले भया पनि साधुका दाज्यू भाइ इष्टमित्रले भया पनि. अदालत अमालमा लैगि वाहामवाट हाड नातामा सर्वस्व हुन्या कुरामा. भात पानि मा पर्न्यामा करणि गर्न्याका. अैन वमोजिम सजाय गर्नु. अदालतवाट कुरो छिन्या. सर्वस्व अदालतैवाट लिनु. अमालमा कुरा पर्‍याको भया सर्वस्व अदालतमा पुर्‍याइदिनु. अदालत अमालवाट कुरो छिन्या पछि. साधुले सर्वस्व लिन र. अरू सजाय गर्न पाउदैन.

१२. तागाधारि जात गैह्रमा कसैले आफ्ना जारलाइ. जनै भिकि साधुले टांग मनि छिरायाको मात्र रहेछ भन्या. तेस जारि गर्न्यालाइ भात पानिको पतिया दिनु. भात पानि चल्छ. टाग मनि पनि छिरायो जनै भिकि हवोस् न भिकि हवस्. पैतालो पनि चटायेछ. मद सुगुरको मासु षुवायेछ भन्या तेस्ताको भात चल्दैन पानि चल्छ. पानिको पतिया दिनु.

१३. मतवालि जात गैह्रमा जार हांन्या जातका कसैले आफ्ना जारलाइ. साधुले टांग मनि मात्र छिराइ छाडचो भन्या. तेस जारि गर्न्यालाइ भात पानिको पतिया दिनु. भातपानि चल्छ. टांग मनि पनि छिराइ पैतालो चटाइ छोडचो भन्या. तेस्को भात चलदैन पानि चल्छ. पानिको पतिया दिनु.

१४. व्राम्हण वाहेक का विवाहिता स्वास्नि भात चलन्या तेस्ता स्वास्नि. आफु भंदा ठुला जात र आफु समान जातमा विग्र्या भन्या. तेस्ता स्वास्निको जारकाटचा पछि. प्रायश्चित्त पर्दैन आफुभंद कम जातमा विग्रि दाल भातमा वोऱ्या को रहेछ भन्या. जार काटचा पनि प्रायश्चित्त गर्नु पर्दछ. जार काटेन भन्या पनि प्रायश्चित्त गर्नु कदाचित् जार भागि गयो भन्या पनि भताहभाइले देव पित्रि कार्य गर्ना निमित्त प्रायश्चित्त गरि शुद्ध हुनु. प्रायश्चित्त गरि सक्या पछि. जार फेला पऱ्यो भन्या पनि जारलाइ काटनपाउछ. प्रायश्चित्त दिदा धर्माधिकारले. औवल्लाइ २ दोयम्लाइ १॥. सिंमलाइ १ चहारलाइ .॥. गोदान लि पतिया दिनु.

१५. जार हांन्या जातका कसैले तेरि स्वास्नि. फलानासित गयाकि छ भनि भन्यो. साधुले आफ्नि स्वास्निलाइ केरकार नगरि. कागज नलेषाइ उसै गै. समाचारै का भरमा जार काटेछ काटिन्याकि स्वास्नि र वारिस कराउन आया भन्या र. निरोपन गर्दा मुष्य स्वास्नि विग्र्याकि ठहरिन. अथवा ज्येठो अर्को रहेछ भन्या. आफ्नि स्वास्निलाइ केरकार नगरि. स्वास्निको कागज नलेषाइ समाचारका भरमा काटन्यालाइ. व्राम्हण भया अैन वमोजिमको अंस सर्वस्व गरि दामल गर्नु. अरू जातलाइ ज्यानको वदला ज्यान काटि मारि दिनु. अर्काका स्वास्निको करणिको कुरो तहकित नगरि फलानासित विग्री भनि वेहक्मा अर्कालाइ मराउन्याको अैन वमोजिमको. अंस सर्वस्व गरि ६ वर्ष कैद गर्नु. म्यादको चौवर दिया रुपैया लिनु. रोवकार गर्दा करणि गर्न्या उसैले देषायाको. ठहऱ्यो भन्या. भंन्यालाइ षतवात लाग्दैन. स्वास्निको

कागज नलेषाइ समाचारैका भरमा मात्रै. जार काटचा वावत् काटन्यालाइ २० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

१६. व्राम्हण वाहेक अरू जार हांन्या जातका अैनले जार हान्न हुन्यासम्मका. आफ्ना स्वास्नि अर्कासित पोइल गयामा जारि गर्न्या आफ्ना मुलुक्मा छदै. अैन वमोजिम जार काटनु. अरू सजाय गरेन छ वा. अर्कासित पोइल गया कि स्वास्निको. आफुले जानि जानि करणि गरि. उसै स्वास्निका हातको आफुले भात षाइ भताहालाई स्मेत् वोरेछ र पतिया गर्नु पऱ्यो भन्या भातको मात्रै पतिया गर्नु पऱ्या पनि. स्मेतको पतिया गर्नु पर्न्या भया पनि ऐन वमोजिम जस्तो पयितागर्नु पर्छ. साधुको धनवाट पुग्यासम्म. तेसै साधुका धनवाट भताहालाइ पतिया गराइ दिनु. साधुका धनले पुगेन भन्या. आफु आफुले पतिया गर्नु. साधुलाइ स्वास्निको जौन जात ठहर्छ. उसै जातमा मिलाइ दिनु. जारि गर्न्या पानि चलन्या सम्मका जातलाइ राज षत लाग्दैन. छाडि दिनु. जारि गर्न्या विराना मुलुक्मा गयाको रहेछ भन्या र. साधुले विग्ऱ्यापछि. तेस स्वास्निको करणि गऱ्याको. उस्का हातको भात षायाको रहेनछ भन्या स्वास्निका नाउको भोरको पतिया गराउनु पर्दा भोरमा पर्न्याले. आफु आफै पतिया गरि शुद्ध हुनु. साधुले पतिया गराइ दिनु पर्दैन.

१७. उपाध्या र २ लिंग सम्मका जैसि जातले हवस् वा. हाड नातामा कसैले हवस्. जारि गरेछ र साधुले जार काटेछ भन्या. अैन वमोजिम गर्नु. साधुले नहान्दै मा जारी गर्न्याले पैल्हे हतियार चलाइ साधुलाइ घाउलागेछ. र जारि गर्न्याले साधुलाइ घाउ लगाया पछि साधुले जार काटि मारेछ भन्या. गुहाइ तेसर ले पनि साधुलाइ जारले पैल्हे घाउ लगाया पछि. साधुले काटचाको हो भन्या मुचुल्का लेषि दिया भन्या जारको. पैल्हे घा सहि काटन्यासाधुलाइ वात लाग्दैन. एस्ता विहोराले. व्रम्हहत्या वा गोत्र हत्या गऱ्या वावत् १ तीर्थ गराइ भात पानिको पतिया गराइ दिनु. जात जादैन.

छिटो हालनु पर्न्या जातले तागाधारि जात गैह्र पानि चलन्या चोषा जातको
जारि गर्दा साधुले जार काट्ना नकाट्नाको अैन

१८. छोइ छिटो हालनु पर्न्या जात गैह्र कसैले. तागाधारि लगायेत् पानि चलन्या. चोषा जातका सधवाको करणि गऱ्यामा. भात पानि मा वोऱ्याको हवस्. वोऱ्याको नहवस्. अैन नहुदै अघि अदालतवाट ज्यान काटिंथ्यो. अैन भया पछि राजषत ठहर्नाले अंस सर्वस्व गरि दामल गर्नु भंन्या लेषियाको छ तापनि. साधुले मेरो जार काटछु भन्या. काट्न पाउछ. अदालत ठाना अमालमा थुनि याको भया पनि. नवाधि उसै साधुका सपुर्त गरिदिनु. साधुले जार हांन्दा घाउ लागि वा. घाउ नलागि भागि गै. ज्यू वचायो भन्या. फेरि तस्लाइ राजषत हो भनि फेरि पक्रि अदालत अमालवाट कैद गर्नु पनि हुदैन. साधुले काटन पनि पाउदैन. भोरमा पानि षान्यालाइ पतिया गराइ दिनु.

# पर्देस जान्याकाको जारि गर्न्या.

१. कोहि राजकाजमा गयाको हवस् वा. आफ्ना काजले देशपर्देस गयाको हवस्. लोग्न्या घर नहुन्या मानिस्का स्वास्निलाइ कसैले करणिका आसयले. हात पात गऱ्यो भनि स्वास्नि कराउन आया भन्या लोग्न्या घर छैन भनि नराषनु हात पातको अैन वमोजिम दंड जिताउरि गरि छिनिदिनु.

२. कोही लोग्न्या मानिस पर्देस गयाके छ. उस्कि स्वास्निले अर्काको पेट वोकि हवस्. नवोकि हवस्. करणिको कुरो जाहेर भयो भन्या. अघिल्ला प्यारा पोइलाइ दवाइ अरूलाइ देषाउंदा. नविराउन्या मानिस पनि काटिन्या साधु पनि. नविराउन्यालाइ काटचो भनि काटिन्या हुंदा. तस्कारण पर्देस जान्याका दाज्यू भाइ भताहारूले. तेश्रो देषायाका लोग्न्यालाइ र तेसै स्वास्निलाइ पक्रि अदालत ठाना अमालमा लैजानुउतावाट केरकार गर्दा तेहि पक्रि ल्याया को जेठो ठहऱ्यो भन्या लोग्न्या स्वास्निको कागज लेषाइ जस्तो रितले जश्ले पक्रि ल्यायाको छ. उस्तै रितले ति लोग्न्या स्वास्नि उसैलाइ सौपि दिनु. करणि ठहरेन भन्या छाडिदिनु. छुटचायाका मानिसले वेहक्मा मलाइ पक्रा भनि करायो भन्या.पर्देसवाट आइ साधुले पक्र्याको भया पनि साधुका दाज्यू भाइ भताहाले पक्रि ल्यायाको भया पनि पक्रन्यालाइ वात लाग्दैन. करणि नभै झुट्टो कुरो पोलन्या स्वास्निलाइ ३ वर्ष कैद गर्नु. म्यादका रूपैया तिऱ्या लि छाडनु.

३. लडात्रिमा र सर्कारिया अरू काज निमित्त विराना राजमा र. टाढा गयाका मानिस्का स्वास्निको जारि गरि. स्वास्नि धन माल स्मेत् कसैले लगेछ र. जारि गर्न्यालाइ अदालत अमालवाट र साधुका दाज्यू भाइ इष्ट मित्रले पक्रि ल्याया पछि कायेल भयाको धनमाल मध्ये स्वास्निले. आगमा लाइ गयाका कपडा वाहेक जारि गर्न्यावाट जोउठतछ. साधुका वारिस्का जिम्मा गरि भराइ. दि तेस्लाइ साधु नआउन्ज्याल् कैद गरि राषनु.साधु आया पछि. उसैका जिम्मा गरिदिनु. जेठो कांछो तहकित गरि साधुले अैन वमोजिम सजाय गर्नु. जारले षायाको जति भन्या साधुवाट लिनु. अरू पान फुल वक्सौनि जिताउरि केहि नलिनु.

४. जार हांन्या जात गैह्रका सर्कारिया काज वाहेक आफ्ना काज निमित्त देसपर्देस जान्याका स्वास्नि कसैले जार गरि लैजादा स्वास्निले आगमा लायाका. कपडा वाहेक अरू धन माल

कमारा कमारि स्मेत् लै गयेछ भन्या. उस्का दाज्यू भाइ इष्टमित्र अदालत ठाना अमालवाट तेस्तालाइ पक्रि लैगयाको धन माल कमारा कमारि साधु लाइ इष्ट मित्र वारिसकाजिम्मा गरि दसौद लि सौपिदिनु धन स्मेत् लैजान्या जारलाइ जति धन माल लग्या को छ. उसै विग वमोजिममा मैन्हाका ५ रूपैयाका दरले कटि नहुंज्याल कैद गर्नु. म्याद नपुगी साधुआइ पुग्यो भन्या साधुका जिम्मा गरी छाडी दिनु म्यादसम्ममा साधु आयेन भन्या तेस्लाइ छाडिदिनु. स्वास्नि जारि गरि लैजादा साधुको छोरा छोरि स्मेत्. चोरिं लगेछ भन्या. तेस्ता चोरलाइ पक्रि साधु नआउन्ज्याल् कैद गर्नु. साधु आयो भन्या साधुका सपुर्त गरि दिनु. अैन वमोजिम सजाय गर्नु. सजाय नगरि तेसै छाडनु साधुको षुसि.

५. जार हान्या जात गैह्र कोहि लडाइमा र सर्कारका काज निमित्त विराना राजमा पनि गयाको रहेनछ. आफ्ना षुसिले विराना राजमा गयाको हवस्. वा. आफ्ना गाउ घरमा वस्याको हवस्. उस्ताको धन माल ज्यू. केहि नलि जारि गरि स्वास्नि मात्र लगेछ भन्या. तेस्तालाइ अदालत ठाना अमाली द्वाऱ्या मुषिया थरि मिझार. साधुकादाज्यू भाइ इष्टमित्र गाउल्या छिम्याक कसैले पनि पक्रन हुदैन साधु आया पछि आफ्नु जार षोजि आफैले. अैन वमोजिम सजाय गर्नु. तेस्ता जारि गऱ्यालाई साधु वाहेक कसैले पक्रयो भन्या पक्रन्या लाइ १०० रूपैया जरिवाना गर्नु रूपैया नतिरया अैन वमोजिम कैद गर्नु एस्तामा एकाको जार. अरू कसैले पक्रि ज्यू मरायाको भया अैन वमोजिम सजाय गर्नु.

६. महाकालि पूर्व मेचि पश्चिम गोर्षा भरमुलुकका चार वर्ण छत्तिस जात गैह्रले. वंद वेपार तीर्थ वर्त गर्ना वाहेक. आफ्ना सर्कारको मुलुक निमक छाडि विराना राजको निम्कषान्या मानिस्का स्वास्नि अर्कासित पोइल गया भन्या पछि निमक छाडि आया भन्या पनि. विराना राजको निमक षान्याले. आफ्ना मुलुक्मा आइ जार काट्न मुडन सर्वस्व लिन पाउदैनन्. जार काटचो भन्या व्राम्हणले भया अैन वमोजिम अंस सर्वस्व गरि दामलगर्नु. अरू जातले भया ज्यानको वदला ज्यान् काटि मारि दिनु. हाड नातामा करणि गर्न्या र जवर जस्ति करणि गर्न्यालाइ. उसैका अैन वमोजिम सजाय गर्नु.

७. लोग्न्या भन्या पर्देस गयाको रहेछ. उस्कि स्वास्नि पोइल गै. आलमाल हिना मिना पर्न लाग्याको गाउमा सहर्मा थाहा भयो. आल मालको संभार गर्न्या. आपस्तकोहि रहेनछ छोरा

वालष रहेछ भन्या फिरादि नभया पनि. तेस ठाउका हाकिम डिट्टा विचारि. आमलि द्वाऱ्याले तेस् स्वास्निलाइ झिकाइ कायेल नामा गरि तेस्का आल मालको तायेदात गरि. त्यो माल लोग्न्या आयाा पछि वुझाइ दिनु. भनि भला आदिमिका जिम्मा लगाइ दिनु. यस्मा दशसौद नलिनु.साधु आया पछि जारको षुस् साधुले गर्नु.थाहा पाइ षोजनगर्न्या हाकिम अमा लि द्वाऱ्यालाइ २० रूपैया दंड गर्नु.

८. कसैले अर्काको जारि गरिरेछ जारि गऱ्याको जाहेर नभै. जारि गर्न्याले साधुलाइ ललाइ फकाइ देस पर्देस लै गयो र. त्यो फर्कि आउदा जारि गऱ्याको भन्या जाहेर भयो. साधुको पत्ता भन्या केहि मिलेन भनि साधुका वावु छोरा दाज्यू भाई कोहि आइ.अदालत ठाना अमालमा कराउन आया भन्या जारि गर्न्यालाइ पक्रि केरकार गर्दा साधुको ज्यान तेसैले माऱ्याको ठहऱ्या. व्राम्हणले भया अैन वमोजिमको अंस सर्वस्व गरि दामलगर्नु. अरू जातले भया ज्यानको वदला ज्यान काटि मारि दिनु. ज्यान माऱ्याका कुरामा कायेल भयेन जारि गऱ्याका कुरामा कायेलछ. साधुको मऱ्यो जिउदो केहि पत्ता लागेन भन्या तेस्तालाइ झेलषानामा कैद गरि राषनु साधु आयो भन्या. साधुका दाज्यू भाइ वावु छोराले पक्रि ल्यायाको भया साधुका सपुर्त गरि छाडि दिनु.अरूले पक्रिल्यायाको भया साधुका मुष नपारि छाडिदिनु. ज्यान माऱ्याका कुरामा कायेल भयाको नहुनाले २० वर्षसम्म पनि साधु आयेन भन्या. २० वर्ष पुग्या पछि छाडिदिनु.

९. कसैले कसैको जारि गरि स्वास्नि पनि लग्यो धन माल पनि लैगयो. साधुले पत्ता पाइ जार काटया पछि. एति धन माल हिना मिना गरि दियो. धन पाइन भनि काटिन्याका भाइ छोरा परियारलाइ पक्रि ज्यू काटिया पछि धन लिन पाउदैन.

१०. कसैले आफ्नि स्वास्नि एससित विग्रिछ भनि जारि गर्न्यालाइ. आफैले पक्रि अदालत ठाना अमालमा सौपन ल्यायो र सोधपुछ गर्दा करणि गऱ्याको ठहऱ्यो भन्या. त्यो जार तेसै साधुका सपुर्त गरि दिनु ठहरेन भन्या छाडिदिनु. उसले नालिस मात्र गऱ्याको छ. जार पक्रि ल्यायाको छैन भन्या. अर्कैले ल्यायाको रहेछ र केरकार गर्दा करणि ठहऱ्यो भन्या जारि गर्न्यालाइ साधुका सपुर्त गरि नदिनु. आफ्ना जार षोजिलेभनि साधुका मुषनपारि छोडिदिनु.स्वास्निले नभनि अरू कसैले पनि पोइल गयाको नदेषि संकाले पक्रि ल्यायो रोवकार गर्दा करणि ठहरेन भन्या. नभयाको करणिका कुरामा पक्रि. अडा अदालत अमाल ठानामा कराउन आवस् वा.

पक्रि ल्यावस्. रोवकार गर्दा करणि ठहरेन भन्या नभयाका कुरामा संकाले पक्रि ल्यायाको हुनाले २५ रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु. अडा गौडा अदालत ठाना अमालमा नलगि. स्वास्निले पनि नभनि. अरू कसैले पनि नदेषि नभयाका करणिमा संका गरि. अर्कालाइ काटछु भनि. हतियार लि वाटो गौडा वथानि हिडन्या तागाधारि लगायेत्. नमासिन्या मतवालि सम्मका जार हांन्या जातका लाइ ३ वर्ष कैद गर्नु. म्यादको डवल दिया लि छाडनु.

# फलानासित विग्र्या भन्याको.

१. पोइ भयाका स्वास्नि मानिस्ले पोइल जानाका लागि. मर्‍याको पोइ देषाया भन्या. तेस्ताका हातको भात नषानु. जिउदामा. जौना चाहि अधिवाट ठहर्छ. साधुले उसैलाइ अैन वमोजिम सजाय गर्नु राजषत् पर्न्यारहेछ भन्या पनि उसै लाइ गर्नु.

२. कसैका पतिव्रता स्वास्निहरू अर्कासित पोइल गै. पैल्हेका लाइ दवाइ अर्का लाइ देषाइ दि र. उस्को ज्यान काट्टियो. तेस स्वास्निको नाक काटियो भन्या. पैल्हे आफ्नु करणि लिन्यालाइ वचाइ. दोश्राको ज्यान मराउन्या स्वास्निलाइ ६ वर्ष कैद गरि छाडिदिनु. म्यादका रूपैया नलिनु. नाक काटियाको रहेनछ भन्या जन्म भर दामल गर्नु.

३. आफ्नि छोरि वेटि र. सनहे पर्न्या स्वास्निले फलानासित विग्र्यो भनि. पंच राषि लोग्न्याले कागजलेषाइ लि जार काटेछ. काटि सक्या पछि. उसै स्वास्निले पैल्हे यौटालाइ देषाइ दि. जार काटेछ पछिवाट ज्येठो ता फलानु हो भनि. अर्कालाइ देषाइ र रोवकार गर्दा काटियाकै चाहि ज्हेठो ठहर्‍यो भन्या वेस्या भयाका स्वास्निको कुरो लि तहकित नगरि. ज्यन संवंधका कुराको नालिस गर्न आया वावत् ति माइति आपस्तलाइ ५० रूपैया दंड गर्नु. नमासिन्या जातका स्वास्निलाइ ३ वर्ष कैद गर्नु. म्यादका रूपैया दिया लि छाडिदिनु. मासिन्या जातका स्वास्निलाइ मासिदिनु.

४. कसैका पतिव्रता स्वास्नि अर्कासित पोइल गैइ र. करणि लिन्या चाहिलाइ वचाउनाका लागि करणि नभयाका अर्कालाइ पोलि र केरकार गर्दा. उसले करणि लियाको ठहरेन वेहक्मा झुट्टा पोल्याको ठहर्‍यो भन्या पोलिन्याको. ज्यान काटियाको रहेनछ भन्या वेहक्मा अर्काको ज्यान मराउन षोजन्या नमासिन्या जातका स्वास्निलाइ ३ वर्ष कैद गर्नु म्यादका रूपैया तिर्‍या अैन वमोजिम लि छाडिदिनु. नमासिन्या जातका स्वास्निलाइ. मासि दिनु ज्यू कटायाकि भया स्वास्निलाई दामल गर्नु.

५. जारिका कुरामा साधुले जार काटि सक्या पछि. म कसैसित विग्र्याकि छैन. पतिव्रतै धर्ममा रहयाकि छु.वेहक्मा फलानु काटियो भनि स्वास्लि माइति इष्टमित्र कसैसित भनि छ र. माइति

इष्टमित्रले अदालत ठाना अमालमा कराइ रोवकार गर्दा करणि नगर्न्या लाइ काटेछ भन्या ज्यानको वदला ज्यान् लिनु. पैल्हे करणि लिन्यैलाइ काटचो भन्या काटन्यालाइ षत लाग्दैन. फरेव गऱ्या वावत् नमासिन्या जातका स्वास्निलाइ ३ वर्ष कैद गर्नु. मासिन्या जातका स्वास्निलाइ मासिदिनु. माइतिलाइ दंड पर्दैन.

६. जार हांन्या चार वर्ण छतिसै जात गैह्रका स्वास्निले मेरो पैल्हो करणि लिन्या तेहि हो. भनि लेषिदि र. साधुले जार हानि सक्यो फेरि उसै स्वास्निले. त्यो ता मेरो पैल्हो करणि लिन्या होइन.अनाहक्मा तेस्को ज्यू गयो भनि साधु लाइ पक्राइ र पुर्पक्ष गर्दा ज्येठो करणि लिन्या. उसैले पैल्हे लेषि दिया ठहऱ्यो भन्या. तेस्ता फरेवि नमासिन्या जातका स्वास्निलाइ ३ वर्ष कैद गर्नु. म्यादका रूपैया दिया लि छाडिदिनु. मासिन्या जातका स्वास्निलाइ मासि दिनु.

७. कसैका दाज्यू भाइ वावु छोरा काटीन्याका इष्टमित्र कोहिं स्वास्निको कागज लेषाइ हवस् वा नलेषाइ हवस्. जारि वावत्मा ज्यान काटियेछ दाज्यू भाइ वावु छोरा इष्टमित्रले. तेस स्वास्निसित गै सोद्धा तेससित विग्ऱ्याकि छैन. अनाहक्मा तिम्रो फलानु काटियो भनिछ र. उहि कुरो लि अनाहक्मा हाम्रा फलानाको ज्यू गयो भनि. अदालत ठाना अमालमा कराउन आयो र रोवकार गर्दा काटिन्यै काटियाको रहेछ भन्या. स्वास्निको जमान लि कराउन आयाका कुरामा कराउन आउन्या इष्टमित्र दाज्यू भाइलाइ वात लाग्दैन करणि भै करणि होइन भंन्या नमासिन्या जातका स्वास्निलाइ वात लाग्छ ३ वर्ष कैद गर्नु मासिन्या जातका स्वास्निलाइ मासिदिनु. विग्ऱ्याकि स्वास्निलाइ यसो भनिदे भनि सिकाइ धन दि फुल्याइ. अर्कालाइ भनिदे भनायाको रहेछ भन्या. अर्को पोइ देषाइ दे भंन्या र. विग्ऱ्याकि छैन भनिदे भनि सिकाइ. अर्काको ज्यान जान्या कैफियत् गऱ्या वावत् सिकाउन्या लाइ ५ वर्ष कैद गर्नु. म्यादका रूपैया डवल दिया लि छाडनु.

८. कसैका पतिव्रता स्वास्निले जात्रामा मेलामा छाउनि षलंगामा फलाना जगामा फलाना गाउमा फलानासित विग्ऱ्यां भनि र. उसले पोल्याका लोग्न्या लाइ खोजदा लोग्न्याका नाउको पनि पत्ता लागेन. घरको पनि पत्ता लागेन भन्या. आफ्नु नाक वचाउनाका लागि तेस स्वास्निले विग्ऱ्यां भन्याको ठहर्छ. तेस्ता स्वास्निलाइ छाडिदिनु षोजदामा नाउको घरको पत्ता लाग्यो भन्या करणि लिन्यालाइ. वचाइ अर्कालाइ. वेहक्मा मराउनका लागि पोल्याको ठहर्छ. तेस्ता

नमासिन्या जातका स्वास्निलाइ ३ वर्ष कैद गर्नु. रूपैया तिऱ्या अैन वमोजिम लि छाडिदिनु. मासिन्या जातका स्वास्निलाइ मासिदिनू.

९. जार हांन्या जात गैह्रका विवाहिता. र अरू अैनले जार हांन हुन्या सम्मका स्वास्नि अर्का कसैसित पोइल गयामा. अदालत ठाना अमाल राषि केरकार गरेछ. स्वास्निले पनि फलानासित करणि भयाको हो भनि. कागज लेषि दि छ र.तेहि लिषत लि साधुले जार काटेछ. जार काटि सक्या पछि. उसै स्वास्निले फलानासितको करणि होइन अनाहक्मा काटियो भनि कुरो वदलि भन्या र. मर्न्याका वारिस वाहि आयी हाम्रोफलानु अनाहक्मा काटियेछ भनि षडा भया भन्या. अदालत ठाना अमालमा लैगि. स्वास्निको कागज लेषाइ लि काटयाको हुनाले. करणि ठहऱ्या पनि नठहऱ्या पनि काटन्यालाइ षतवात लाग्दैन. जार तेहि हो भनि कागज लेषि दि.एकाको ज्यान मराइ सक्या पछि कुरो वदलि. अर्कालाइ कटाउन षोजना स्वास्निलाइ दामलगर्नु. कुरो वदल्याकि मात्र रहिछ. ज्यू काटियाको रहेछन. भन्या न मासिन्या जातका स्वास्निलाइ ३ वर्ष कैद गर्नु. म्यादका रूपैया दिया लिनु. मासिन्या जातका स्वास्निलाइ मासि दिनु.

१०. जार हांन्या. जात गैह्रका विवाहिता र. अरू अैनले जार हांन हुन्यासम्मका स्वास्नि अर्काकसै सित पोइल गयामा. अदालत ठाना अमालमा नलगि आफु आफु मात्र वसि स्वास्निलाइ कुट्पिट् गरि कागज लेषायेछ र. काटिन्याका वारिस कसैले. हाम्रो फलानु वेहक्मा काटियो भनि कराउन आया स्वास्निले पनि. मलाइ कुट्पिट् गर्दा भन्याको मात्रै हो तेस्सितको करणि भयाको छैन भनि भन्या. अदालत ठाना अमालमा लगि केरकार गऱ्याको रहेनछ ज्यू काटिन्याले करणि गऱ्याको पनि ठहरेन कुट्पिट् गरि. कागज लेषायाको ठहऱ्यो भन्या. करणि नगर्न्यालाइ जार भनि काटन्याको ज्यानको वदला ज्यान काटि मारि दिनु. घर कचहरि गरि. झुट्टो कागज लेषाउन्याहरूमा मोष्य जो होउस् उसलाय १०० रूपैया दोश्रालाइ ८० रूपैया तेश्रालाइ ६० रूपैया चौथालाइ ५० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या. अैन वमोजिम् कैद गर्नु. कुट्पिट् गऱ्याको भया पनि. नभयाको करणिको कुरो पोल्न्या स्वास्नि लाइ १॥. वर्ष कैद गर्नु. म्यादको रूपैया तिऱ्या लिनु.

# तेश्रो परि करणि गर्न्याको

१. जार हान्न्या जात कसैले आफु स्मेत्. दोश्रो लिंग परि. ल्यायाका जार हान्न्या जातका स्वास्नि ल्याइ. घरवार. सौपि राष्याकि स्वास्निलाइ तेश्रो लिंग परि. कसैले जारि गऱ्यो भन्या तेस्ताको साधुले जार हान्न पाउछ षतवात लाग्दैन.

२. जार नहान्न्या. नमासिन्या. मासिन्या जातका विधवा भयाका छोरि आफु दोश्रो लिंग परि. घर ल्यायाका स्वास्निको कसैले तेश्रो परि जारि गऱ्यो भन्या साधुले ज्यू नमर्न्या अंगभंग नहुन्या गरि कुटचा षतवात लाग्दैन जार काटन ज्यू मार्न पाउदैन. काटचो माऱ्यो भन्या ब्राम्हणले भया अैन वमोजिम अंस सर्वस्व गरि दामल गर्नु. अरू जातले भया ज्यानको वदला ज्यान काटि मारी दिनु.एस्ता स्वास्नि लैजान्यालाइ. नकुटी अदालत ठाना अमालमा कराउन आयो भन्या करणि गर्न्यालाइ स्वास्नि जाया जन्म भयाकि रहिछ भन्या ६० रूपैया जाय जन्म भयाकि रहिनछभन्या ५० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु.

३. तागाधारि लगायेत् चार वर्ण छतिस जात गैह्र. कसैले आफू तेश्रो देषि उभो परि घरमा ल्याइ राष्याका स्वास्निको कसैले करणि गऱ्याको रहेछ. साधुले कुट्पिट् गर्दा करणि गर्न्याले साधुलाइ हात फर्काइ कुटचो र. अंगभंग गरेछ भन्या. अंगभंग गर्न्याका अैनको डेढो वढाइ सजाय गर्नु. अंगभंग भया को रहेनछ भन्या ६० रूपैया दंड गर्नु. साधुले हात नछाडि करणि गर्न्या चाहिले अघि हात छाडि कुटेछ. अंगभंग भयाको रहेनछ भन्या. ६० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

४. आफू स्मेत् तेश्रो लिंग भयाकि स्वास्निको जाया जन्म भयाको भया पनि. घरवार सौपि राष्याको भया पनि. तेस्ता स्वास्निलाइ चौथो लिंग परि जारि गरि लैगयो र. साधुले जार काटचो भन्या ब्राम्हणले भया. अैन वमोजिम्को अंस सर्वस्व गरि दामल गर्नु. अरू जातले भया ज्यानको वदला ज्यान् काटि मारि दिनु.

५. आफुले विहा षर्च तिरि ल्यायाका स्वास्निको अर्काकसैले करणि गऱ्यो भनि. कराउन आया करणि गर्न्यावाट अघिल्लाले तिऱ्या वमोजिम्को विहा षर्च भराइ. उसै विगा वमोजिम्को दंड

गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु. विहा षर्च तिरि ल्यायाका स्वास्निको जारकाटन पाउदैन काट्या व्राम्हणले भया अैन वमोजिम्को अंस सर्वस्व गरि दामल गर्नु. काटिन्या जातले भया. ज्यानको वदला ज्यान् काटि मारि दिनु.उस्लाय पनि छोडि अर्कासित पोइल गै भन्या चौथो लिंग भया पछि. त्यो स्वास्नि वेस्या ठहर्छे. करणि गर्न्याले वीहा षर्च पनि दिनु पर्दैन. दंड पनि पर्दैन.

६. आफु भंदा ठुला जातका विधवा आफु दोश्रो परि कसैले. स्वास्नि तुल्याइ राष्याको रहेछ र. तेहि स्वास्नि अर्कासित पोइल गैछ भन्या. तेस्ताको जार काटन पाउदैन. जार काटेछ भन्या मुडिन्या जातले अैन वमोजिम् अंस सर्वस्व गरि दामल गर्नु. काटिन्या जातले भया ज्यान काटि मारि दिनु.

# चौथो देखि उभो परि राष्याकाको
# जारि गर्न्या

१. तागाधारि लगायेत्. नमासिन्या मतवालि जात सम्म. का लोग्न्याले. इनै जातका चौथो लिंगदेषि. उभो परि ल्याइ तालाकुचि सौपिवर्ष दिन देषि उभो घरमा राष्याका स्वास्नि कसैसित. पोइल गया भन्या जार काटन हुदैन अदातल ठाना अमालमा कराउन आयेन जारी गर्न्यालाइ. ज्यू नमर्न्या हात षुट्टा नभाचिन्या अंगभंग नहुन्या गरि. लात्तले जुत्ताले हान्या कुटचामा षत लाग्दैन. साधुले कुटपीट गरि छाडचा पछि फेरि कराउन आयो भन्या जारि गर्न्या लाइ पनि वात लाग्दैन आफु ले कुट्पिट् नगरि कराउन आयो भन्या करणि गर्न्या लोग्न्यालाइ. जाया जन्म भयाकि. स्वास्नि रहिछ भन्या ३० रूपैया जाया जन्म भयाको रहेनछ भन्या २० रूपैया दंड गर्नु कुट्पीट् गर्दा हात गोडा भाचिन्या अंगभंग हुन्या गरी कुटेछ भन्या आफुले ल्यायाकि स्वास्निको करणि गर्न्यालाइ. कुटचाको हुनाले कुट्न्या साधुलाइ अंगभंग गरि कुट्न्याका अैनको आधि सजाय गर्नु ज्यान मरेछ भन्या व्राम्हण भया अैन वमोजिमको अंस सर्वस्व गरि. दामल गर्नु अरू जातलाइ. ज्यानको वदला ज्यानकाटि मारि दिनु तागाधारि जात लगायत्. नमासिन्या मतुवालि स्मका लोग्न्याले. मासिन्या मतवालि जातका स्वास्नि चौथो लिंगदेषि उभो परि. घर ल्याइ राख्याको रहेछ भन्या जाया जन्म भयाकिको करणि गर्न्यालाइ १५ रूपैया जाया जन्म भयाकि नभया १० रूपैया दंड गर्नु रूपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु.

२. मासिन्या मतवालि जात गैह्रले चौथो लिंग देषि उभो परि ल्याइ. ताला कुचि सौपि वर्ष दिनदेषि. उभो घरमा राष्याका. स्वास्निको तागाधारि लगायत पानी चलन्या सम्मका लोग्नेले करणि गऱ्या भन्या जार काट्न हुदैन अदातल ठाना अमालमा कराउन आयेन जारि गर्न्यालाइ. ज्यू नमर्न्या. हात गोडा नभाचिन्या. अंगभंग नहुन्या गरि. लात्तले जुत्ताले हान्या कुटचामा षत लाग्दैन साधुले अघि कुट्पिट् गरि. छाडचा पछि. फेरि कराउन आयो भन्या जारि गर्न्यालाइ. वात लाग्दैन. आफुले कुट्पीट् नगरि. अदालत ठाना अमालमा कराउन आया जाया जन्म भयाकि स्वास्नि रहिछ. भन्या ८ रूपैया जाया जन्म भयाकि नभया ५ रूपैया दंड गर्नु रूपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु. कुट्पीट् गर्दा हात गोडा भाचिन्या अंगभंग हुन्या गरि कुटेछ

भन्या. जारि गर्न्या लाइ. कुटेको हुनाले कुट्न्या साधुलाइ. अंगभंग गरि कुट्न्याका अैनको आधी सजाय गर्नु. ज्यान मरेछ भन्या व्राम्हण भया अैन वमोजिं अंस सर्वस्व गरि दामल गर्नु अरू जात ले भया ज्यानको वदला ज्यान् काटि मारि दिनु.

३. पानि नचलन्या छिटो हालनु नपर्न्या जात गैह्रले आफु चौथो लिंग देषि उभो परि ल्याइ तालाकुचि सौपि वर्ष दिन. देषि उभो घर्मा राष्याका स्वास्निको इनै जात्मा कसैले करणि गऱ्यो भन्या जार काट्न हुदैन. अदातल ठाना अमालमा. कराउन आयेन. जारि भर्न्यालाइ. ज्यू नमर्न्या हात गोडा नभाचिन्या अंगभंग नहुन्या गरि लात्तले. जुत्ताले हान्या कुटचामा षत लाग्दैन. साधुले अघि. कुटपिट् गरि छाडचा पछि. फेरि कराउन आयो भन्या जारि गर्न्यालाइ. वात लाग्दैन. आफुले कुट्पिट् नगरि अदालत ठाना अमालमा कराउन आया जाया जन्म भयाकि स्वास्निको करणि गर्न्यालाइ ६ रूपैया जाया जन्म नभयाकिको करणि गर्न्यालाइ ४ रूपैया दंड गर्नु रूपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु. कुट्पीट् गर्दा. हात गोडा भाचिन्या अंगभंग हुन्या गरि. कुटेछ भन्या जारी गन्यालाई कुटेको हुनाले कुट्न्या साधुलाइ. अंगभंग गरि कुटन्याका अैनको आधि सजाय गर्नु ज्यान मरेछ भन्या ज्यानको वदला ज्यान्. काटि मारि दिनु.

४. छोया छिटो हालनु पर्न्या जात गैह्रले आफु चौथो लिंग देषि उभो परि ल्याइ. तालाकुचि सौपि. वर्ष दिनदेषि. उभो घरमा राष्याको स्वास्निका. इनै इनै जातहरूमा कसैले करणि गऱ्यो भन्या. जार काट्नु हुदैन. अदातल ठाना अमालमा कराउन आयेन जारिगर्न्यालाइ ज्यू नमर्न्या हात गोडा नभाचिन्या अंगभंग नहुन्या गरि लात्तले जुत्ताले हान्या कुटचामा षत लाग्दैन. साधुले अघि. कुट्पीट् गरि. छाडचा पछि. फेरि कराउन आयो भन्या जारि गर्न्या लाइ पनि वात लाग्दैन. आफुले कुट्पिट् नगरि. कराउन आयो भन्या स्वास्नि जाया जन्म भयाकीको करणि गर्न्यालाइ. ६ रूपैया जाया जन्म नभयाकिको करणि गर्न्यालाइ. ४ रूपैया दंड गर्नु. कुट्पिट् गर्दा हात गोडा भाचिन्या अंग भंग हुन्या गरि कुटेछ भन्या जारि गर्न्यालाइ कुटेको हुनाले कुटने साधुलाइ. अंगभंग गरि कुट्न्याका अैनको आधी सजाय गर्नु ज्यान मरेछ भन्या ज्यानको वदला ज्यान् काटि मारि दिनु.

५. तागाधारि जातले तागाधारि जातका तागाधारि जातसित विग्र्याका स्वास्निमा आफु तेश्रो लिंग परि. घर ल्याइ राष्याका स्वास्नि कसैसित पोइल गया भन्या जार हांन हुदैन. अदातल ठाना अमालमा कराउन आयेन जारि गर्न्यालाइ ज्यू नमर्न्या हात षुट्टा नभाचिन्या अंगभंग नहुन्या गरि. लात्तले जुत्ताले हान्या कुटच्यामा षत लाग्दैन. साधुले. कुट् गरि छाडच्या पछि.. फेरि साधु कराउन आयो भन्या जारि गर्न्यालाइ. पनि खत लाग्दैन. आफुले कुट्पिट् नगरि. कराउन आयो भन्या करणि गर्न्यालाइ. जाया जन्म भयाकि स्वास्नि रहिछ भन्या ५० रूपैया जाया जन्म भयाकि रहेनछ भन्या ४० रूपैया दण्ड गर्नु कुटपिट गर्दा हात गोडा भाचिन्या. अंगभंग हुन्या गरि कुटेछ भन्या आफुले ल्यायाको स्वास्निको करणि गर्न्यालाइ. कुटेको हुनाले कुटन्या साधुलाइ. अंगभंग गरि. कुटनेका अैनको आधि सजाय गर्नु. ज्यान मरेछ भन्या. ब्राम्हण भया अैन वमोजिमको अंस. सर्वस्व गरि. दामल गर्नु अरू जातलाइ ज्यानको वदला ज्यान् काटि मारि दिनु.

६. नमासिन्या मतवालि जातका तेश्रो लिंग परि घरमा ल्याइ राष्याका र. तागाधारि जातका नमासिन्या मतवालि जातका लोग्न्या सित विग्र्याका स्वास्नि तागाधारि जात र नमासिन्या मतवालि जातले. आफु तेश्रो लिंग परि घर्मा ल्याइ. राष्याका स्वास्निको कसैले. करणि गर्‍यो भन्या जार काट्न हुदैन. काटचो भन्या ब्राम्हण रहेछ भन्या अैन वमोजिमको अंस सर्वस्व गरि दामल गर्नु अरूजात भया ज्यानको वदला ज्यान् लिनु अदालत ठाना अमालमा कराउन आयेन जारि गर्न्यालाइ. ज्यू नमर्न्या हात षुट्टा नभाचिन्या अंगभंग नहुन्या गरि लात्तले जुत्ताले हान्या कुटच्यामा षत लाग्दैन. साधुले अघि कुट्पिट् गरि छाडच्या पछि.. फेरि कराउन आयो भन्या जारि गर्न्यालाइ. पनि षत लाग्दैन आफुले कुट्पिट् नगरि अदालत ठाना अमालमा कराउनआया जाया जन्म भयाकि स्वास्नि रहिछ भन्या ४० रूपैया जाया जन्म नभयाकि भया ३० रूपैया दंड गर्नु कुट्पीट् गर्दा हात गोडा भाचिन्या अंगभंग हुन्या गरि कुटेछ भन्या जारि गर्न्यैलाइ कुटेको हुनाले. कुटने साधुलाइ. अंगभंग गरि. कुटन्यैका अैनको आधि सजाय गर्नु. ज्यान मरेछभन्या ब्राम्हण रहेछ भन्या अैन वमोजिमको अंस. सर्वस्व गरि. दामल गर्नु अरू जातले भया. ज्यानको वदला ज्यान्. काटि मारि दिनु.

७. मासिन्या मतवालि जातका र.नमासिन्या मतवालि. जातका तागाधारि. जातका मासिन्या मतवालि जातसित विग्र्याका स्वास्नि. तागाधारि जात नमासिन्या मतवालि जात. मासिन्या

मतवालि जातले. आफु तेश्रो परि. घर ल्याइ राष्याका. स्वास्निको कसैले करणि गऱ्यो भन्या जार काटन हुदैन. काटचो भन्या व्राम्हण रहेछ भन्या अैन वमोजिम्.को अंस. सर्वस्व गरि दामल गर्नु अरू जात भया ज्यानको वदला ज्यान लिनु. अदालत ठाना अमालमा कराउन आयेन. जारि गर्न्यालाइ ज्यू नमर्न्या हात गोडा नभाचिन्या अंगभंग नहुन्या गरि. लात्तले जुत्ताले हान्या कुटचामा. षत लाग्दैन. साधुले. अघि कुट्पिट् गरि छाडचा पछि.. फेरि कराउन आयो भन्या जारि गर्यालाइ पनि षतवात लाग्दैन. आफुले कुट्पिट् नगरि अदालत ठाना अमालमा कराउन आया जाया जन्म भयाकि स्वास्नि रहिछ भन्या १५ रूपैया जाया जन्म नभयाकि भया १० रूपैया दंड गर्नु कुट्पीट् गर्दा हात गोडा भाचिन्या अंगभंग हुन्या गरि. कुटेछ भन्या जारि गर्न्यालाइ. कुटचाको हुनाले कुटन्या साधुलाइ अंगभंग गरि कुट्न्याका अैनको आधि सजाय गर्नु. ज्यान मरेछ भन्या व्राम्हण भया अैन वमोजिम् अंस सर्वस्व गरि. दामल गर्नु. अरू जातले भया ज्यान्को वदला ज्यान्. काटि मारि दिनु.

८. पानी नचलन्या छोया छिटो हालनु नपर्न्या जातका आफु मिल्दा र आफु भन्दा उपल्ला जातका विग्ऱ्याकास्वास्नि आफु तेश्रो लिंग. परि. घर ल्याइ राष्याका स्वास्निको इनै जातमा कसैले करणि गऱ्यो भन्या साधुले जार काटचो भन्या ज्यानको वदला ज्यान लिनु. अदातल ठाना अमाल. मा कराउन आयेन जारि गर्न्यालाइ ज्यू नमर्न्या हात गोडा नभाचिन्या. अंगभंग नहुन्या गरि लात्तले जुत्ताले हान्या कुटचामा षत. लाग्दैन. साधुले अघि कुट्पिट् गरि छाडचा पछि फेरि कराउन आयो भन्या. जारि गर्न्यालाइ. पनि वात लाग्दैन. स्वास्नी जाया जन्म भयाकि. हवस्. नभयाकि. हवस्. ५ रूपैया दंड गर्नु कुट्पीट् गर्दा हात गोडा भाचिन्या. अंगभंग हुन्या गरि कुटेछ भन्या जारि गन्या र्लाइ कुटचाको हुनाले कुटन्या साधुलाइ. अंगभंग गरि कुट्न्या का अैनको आधि सजाय गर्नु. ज्यान मरेछ भन्या. ज्यानको वदला ज्यान्. काटि मारि दिनु.

९. छोया छिटो हालनु पर्न्या जातका आफु मिल्दा र. आफु भन्दा उपल्ला जातका विग्री आफ्ना जातमा मिल्याका स्वास्निमा आफु तेश्रो परि. घरमा ल्याइ. राष्याका स्वास्निको छिटो हालनु पर्न्या जात कसैले करणि गऱ्यो भन्या. साधुले जार काटचो भन्या. ज्यानको वदला ज्यान् लिनु. अदालत ठाना अमालमा. कराउन आयेन. जारि गर्न्यालाइ. ज्यूनमर्न्या हात गोडा नभाचिन्या अंगभंग नहुन्या गरि लात्तले जुत्ताले हान्या कुटचामा षत लाग्दैन साधुले अघि

कुट्पिट् गरि छाडचा पछि फेरि कराउन आयो भन्या जारि गर्न्यालाइ पनी वात लाग्दैन आफुले कुट्पीट् नगरि कराउन आयो भन्या जारि गर्न्यालाइ पनी वात लाग्दैन आफुले कुटपीट् नगरि कराउन आयो भन्या स्वास्नि जाया जन्म भयाकि होस् नभयाकि हवस् ५ रूपैया दंड गर्नु कुट्पीट् गर्दा हात गोडा भाचिन्या अंगभंग हुन्या गरि कुटेछ भन्या जारि गर्न्यालाइ कुटचाको हुनाले कुटन्या साधुलाइ. अंगभंग गरि कुट्न्याका अैनको आधि सजाय गर्नु ज्यान मरेछ भन्या ज्यानको वदला ज्यान् काटी मारि दिनु.

# मासिन्या जातको जारि गर्न्या

१. जार हांन्या मासिन्या मतवालि जातले आफ्ना हाडनाता वाहेक्. अरू मासिन्यै जातको जारि गऱ्यो र साधुले विहा षर्च षाइ. हवस वा टागमनि छीराइ. हवस उसै छाडचो भन्या जारीका षतमा साधुले छाडचा पछि राज षत लाग्दैन ज्यू पनि मासिदैन.

२. तागाधारि जात र. मतवालि नमासिन्या जात गैह्रले मासिन्या पर्जा जातका सधवा. स्वास्निको करणि गऱ्यो भन्या लोग्न्यलाइ. जार हांन्या जात वाहेक २० रूपैया विहा षर्च भराइ २० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु जार हांन्या जातका विहा षर्च लिन र. अैन वमोजिम् जार हांन साधुको षुसि.

३. मासिन्या जातले. मासिन्या जात गैह्र कसैको जारि गऱ्यामा साधुले जार काटि ज्यान्माऱ्यो भन्या त्यो स्वास्नि मासिन्छे अदालत ठाना अमालवाट लिनु साधुले जार हान्या पछि. घा लागि जारि गर्न्याको ज्यू वाच्यो भन्या. स्वास्नि मासिंन जारि गर्न्यै ले विहोर्न पाउछ. साधुको चोट् षपि ल्यायाका एस्ता स्वास्नि अर्काले लै. गयो भन्या जार हांन्या जातले जार हान्न पाउछ जार नहांन्या जातलाइ. २० रूपैया दंड गर्नु रूपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु. विहा षर्च पाउदैन. स्वास्नि तेसैसित वस्छे भन्या पनि वस्तिन भन्या पनि उसैको षुसि पछि लै जान्या लोग्न्याको कर लाग्दैन.

४. पाऱ्या घर्तिले. भोटे चेपाङ दह्रै माझि हायु. दनवार कुमाल. पहरि गैह्र मासिन्या जातका सधवाको करणि गऱ्यो भन्या तेस घर्तिवाट साधुलाइ २० रूपैया. विहा षर्च भराइ २० रूपैया दंड गर्नु ज्यू मासिदैन. त्यो स्वास्नि तेसै सित वस्छे भन्या विहा षर्च र दंड. तिरि राषन पाउछ. स्वास्निले वस्तिन भन्या षुसि उसैको हुंछ. लोग्न्याको कर्लाग्दैन.

५. पाऱ्या घर्तिका आफ्ना जातको रित गरि ल्यायाका सधवा स्वास्निको कसैले करणि गऱ्यो भन्या लोग्न्याले. स्वास्नि लै गयो स्वास्नी लैगया पछि विहा षर्च पाउदैन २० रूपैया दंड मात्रै गर्नु. साधुले स्वास्नि लैगयेन भन्या. ३० रूपैया विहा षर्च भराइ २० रूपैया दंड गर्नु. आफ्ना जातको रित नपुऱ्याइ. ल्यायाका. ताला कुचि सौपि राष्याका स्वास्निको करणि गरेछ. भन्या

१० रूपैया दंड गर्नु रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु तेससित वस्नु. अर्कासित जानु. स्वास्निको षुसि. लोग्न्याको कर लाग्दैन.

६. पाऱ्या घर्तिको कसैले जारि गरि लै गयामा. पार भयाका ३ पुस्तासम्मका घर्तिले जार काटचो भन्या. ज्यान्को वदला ज्यान् जान्छ. पार भयाका ४ पुस्ता र ५ पुस्ताकाले जार काटचो भन्या. अैन वमोजिम्को अंस सर्वस्व गरि दामल गर्नु. पार भयाका ६ पुस्तादेषि माथिकाले जार काटचो भन्या. मासिदिनु.

७. मासिन्या आठ वाह्र लिन्या चाकचकुइ पर्न्या विहा षर्च लिन्या. जार पनि हांन्या जातहरूका लोग्न्या. स्वास्निलाइ कसैले मासिन्या षतको कुरा. पोल्यो र. पुर्पक्ष गर्दा पोल्याको ठहऱ्यो भन्या पोलन्यालाइ १ वर्ष कैद गर्नु. म्यादका रूपैया तिर्छ भन्या अैन वमोजिम. लि छाडिदिनु.

८. जार नहांन्या मासिन्या मतवालि जातका विवाहिता स्वास्निलाइ. कसैले फलाना सित पोइल गै भनि पोल्यो र पुर्पक्ष गर्दा पोल्याको ठहऱ्यो भन्या पोलन्यालाइ. १५ रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु.

९. मासीन्या जात गैह्रले आफुले मासिन्या षतवात गरि. मासियो. नमासिदै मा विहा गऱ्याकि स्वास्नि अन्त पोइल गै भन्या.मासियाका मानिसले जार हांन हुदैन. हान्यो भन्या ज्यानको वदला ज्यान् लिनु.

१०. पानी नचलन्या र. छोइ छिटो हालनु पर्न्या जातमा जार हांन्या जात ले पानी नचलन्या. जातको जारि गऱ्यो र. साधुले जार हान्यो भन्या स्वास्नि चकुइ पर्छे. मासि दिनु. जार हान्दीन. विहा षर्च लिंछु. भनि. अदालत ठाना अमाल्मा भंन आयो भन्या ३० रूपैया विहा षर्च भराइ. १५ रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु. विहा षर्च लिया पछि स्वास्नि मासिन्न.

११. मासीन्यै मासिन्या जातमा. एका जातका सधवा स्वास्निलाइ अरू जात कसैले जारि गरि लै गयो भन्या उस्का लोग्न्यालाइ २० रूपैया भराइ. लोग्न्यालाइ १२ स्वास्निलाइ ८ रूपैया दंड

गर्नु. ११ वर्षदेषि उभोकि कंन्या विधवाको कसैले करणि गर्‍यो. यो हाम्रा भात नचलन्या हो. भातमा पारि दियो भनि कोहि कराउन आयो भन्या ५ रूपैया दंड गर्नु. रूपैया नतिर्‍या अैन वमोजिम कैद गर्नु.

१२. मासीन्या जातका अैनले जार हांन हुन्या स्मका सधवा स्वास्निको तागाधारि जात र नमासिन्या मतवालि जातले करणि गरेछ र. साधुले जार काट्छु भन्या अघि उस्का पिता पुर्षादेषि जार हानि आयाका जातले अैन वमोजिम् जार काटन हुन्छ षत लाग्दैन. जार नहानि आयाका जातले. काट्न पाउदैन. काटचो भन्या ज्यानको वदला ज्यान काटि मारि दिनु. तल्ला जातसित गयाकि हवस्. उपल्ला जातसित गयाकि हवस. जार काटिया पछि. करणि गराउन्या स्वास्निलाइ मासि दिनु.

१३. पानी नचलन्या र. छोइ छिटो हालनु. पर्न्या जातका अैनले जार हांन हुन्या सम्मका. स्वास्निको. तागाधारि जात नमासिन्या मतवालि जात. मासिन्या पानी चलन्या. जात गैह्र कसैले करणि गरेछ भन्या अैन वमोजिम सजाय हुन्छ साधुले जार काटन पाउदैन. कसैले काटेछ भन्या ज्यान्को वदला ज्यान् काटि मारि दिनु.

# स्वास्निका मुषलेमात्र भनि. जार काट्न्याको

१. कसैको लोग्न्या पर्देस गया रहेछ. घरमा आउदा स्वास्निले अर्काको पेट वोक्याको. रहेछ वा करणिको कुरो. उठ्याको रहेछ केरकार गरि जार ठहऱ्याको रहेन छ तेस्तैमा पर्देस गयाको. लोग्न्या आइ पुग्यो भन्या आफुले केरकार गर्दा जेठो प्यारी पोइ वचाउना निमित्त अर्कालाइ देषाउछन्. तस्कारण येस्ले पोल्याका लोग्ने लाइ र स्वास्निलाइ पक्रि. अदालत ठाना. अमालमा. लैगि. केर्दा जेठो जुन ठहर्छ उस्को कागज लेषाइ. साधुले पक्रि ल्यायाको रहेछ भन्या साधुकै सपुर्त गरि दिनु जार काट्नु अैन वमोजिम् सजाय गर्नु केहि नगरि तेसै छाड्नु साधुको षुसी. अदालत ठाना अमालमा नलगि. स्वास्निकै मुषकोसहिले जार काटचो भन्या आफ्नु जारि गर्न्यैलाइ. काटचाको भया पनि साधुलाइ १०० रूपैया दंड गर्नु. अर्कालाइ. काटेछ भन्या काटीन्या जात रहेछ भन्या ज्यानको वदला ज्यान् लिनु व्राम्हणले रहेछ भन्या अैन् वमोजिम् अंस सर्वस्व गरि दामलगर्नु.

२. घरवाट निस्कि अनेत्र डुल्याकि स्वास्निको अदालत ठाना अमालमा नलगी स्वास्निका मुषका सहिले मात्रै जार काट्ता जेठो प्यारो पोईलाइ वचाउना का लागि अर्कालाइ देषाउछन्. तस्कारण. कचहरिमा लैगी केरकार गर्दा जेठो ठहऱ्याकालाइ. अैन वमोजिम्. साधुको षुसि. षत लाग्दैन. कचहरिमा नलैगि. स्वास्निका मुषका सहिले मात्रै जार काटचो भन्या केरकार गर्दा जेठो तेहि ठहऱ्यो भन्या पनि. घरवाट निस्की अनेत्र डुल्याकि स्वास्निको करणि गऱ्यो भनि अदालत ठाना अमालमा नलैगि पुर्पक्ष नगरि जार काटचा वावत् काट्न्यालाइ १०० रूपैया दंड गर्नु रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु. नकाटिन्यालाइ काटेछ भन्या ज्यान को वदला ज्यान् लिनु. व्राम्हण रहेछ भन्या अैन वमोजिम् अंस. सर्वस्व गरि. दामल गर्नु.

३. कसैका पैल्हे जारि गर्न्या प्रकास भयाको छैन. उस्तैमा दोश्रो तेश्रो चौथो चोरले तेहि स्वास्नि. घरवाट टिपि भाग्यो र. केरकार केहि गर्न पायेन घरका जहान् दाज्यू भाइलाइ. अघिल्लो येहि रहेछ. भनि प्रतित भया पछि साधुले पनि पैल्हो तेहि जानि. घरवाट स्वास्नि भगाइ. लैजान्यालाइ. जार काटचो भन्या. अघिल्लो त अर्कै रहेछ. भनि षुटियो त पनि काट्न्यालाइ षत लाग्दैन. घर वाट निकालि लैजान्यालाइ काटचाको सदर हुन्छ. उ काटिया पछि अघिल्लो त. म पो हुं भनि वा लोग्न्याले भंन आवस् वा. स्वास्निले भनोस्. त्यो अघि करणि गर्न्या ठहऱ्यो भन्या. तेस्को ज्यू जादैन. राजषत वाहेक् अदालत ठाना अमालबाट १०० रूपैया दंड गर्नु राजषत पर्न्यालाइ अैन वमोजिम सजाय गर्नु.

# जारिको फुट्कर

१. जार हान्या जात गैह्रका वीवाहिता कंन्या जार हान्या जातका विधवा ल्यायाका स्वास्निहरूले आफुले नषान्या. जाड कुषुरा. सुगुर गाइ भैसीको मासु गैह्र अभक्ष र. आफु भन्दा कमि जात्का हातको भात जुठो षाइ पतित भयाका. स्वास्निलाइ. लोग्न्याले षान लाउन दि. राष्याका हवन् वा आफुले करणि स्मेत्. गरि राष्याका हवन्. एस्ता स्वास्नि अरू कसैसित पोइ गया भन्या. साधुले जार हान पाउछ. षतवात लाग्दैन. षान लाउन. नदिकन स्वास्नि. छोडि. दियाको रहेछ भन्या. जार काटनु पाउदैन काटचो भन्या ज्यान्को वदला ज्यान् जान्छ.

२. व्राम्हण. रजपूत क्षेत्रिय वैस्य शुद्र चार वर्ण छत्तिसै जातका.सधवा विधवा कंन्या वेस्या स्वास्निले मऱ्याका मानिस. मुसलमान् म्लेछ. छोइ छिटो हालनु पर्न्या जात पानि नचल्न्या जात एस्ता जातका सित र. आफु भन्दा कम जात हवस्. वा. उपल्ला जात हवस् जौन जातमा विग्र्यां भन्छे. तेस्ता कंन्या विधवा सधवा वेस्या स्वास्नि जो हुन्. उनैका जातमा मिल्छन्. करणि नगरि येक मानु. षान लाउन दि राष्याका अैनले जार हान्नहुन्या सम्मका वीधवा कंन्या सधवा स्वास्निको मऱ्याकालाइ जार हांन्न हुदैन जीउदो अघिवाटको जो ठहर्छ उसैलाइ जार हान्न पाउछ. मुष पतित भयाकि स्वास्निलाइ. षान लाउन. केहि. नदि छाडिदिया. भन्या र अथवा तेस्ता स्वास्निको फेरि आफुले करणि गरेछ भन्या तेस्ता स्वास्निको. फेरि जार हांन पाउदैन. हान्यो भन्या व्राम्हण रहेछ भन्या अैन वमोजिम् अंस सर्वस्व गरि. दामल गर्नु. अरू जातले भया ज्यानको वदला ज्यान् काटि मारि दिनु. मऱ्याका मानिस र. छोया छिटो हालनु. पर्न्या जातसित मुष पतित भयाका स्वास्निसित. आफ्ना लोग्न्याले. करणि गरि. पानीमा पऱ्यो भन्या अैन वमोजिम. को अंस सर्वस्व गरि. लि. उनै जातको १ अक्षर षादि. उसै जात्मा मिलाइ दिनु. पानीमा पारेन भन्या सर्वस्व हुदैन. उहि जातमा मात्रै. मिल्छ मिलाइदिनु. येति जातमा. मऱ्याका मानिस. सित. मुष पतित भै. लोग्न्याले षान. लाउन नदि. निकालि दियाका. सधवा विधवा कंन्या वेस्या स्वास्निको छोइ छिटो हालनु पर्न्या जातसित मुष पतित भयाका स्वास्निको अरू कसैले भोरमा करणि गऱ्या भन्या. पतिया पाउछन् जानी जानी करणि गरि भात पानि.मा पाऱ्यो भन्या अैन वमोजिम्को अंस सर्वस्व गरि. लोग्न्या स्वास्नि दुवैलाइ. उसै जातको अक्षर षोदि उहि जातमा मिलाइ दिनु.

३.	तागाधारि लगायेत् नमासिन्या. मासिन्या गैह्न जातमा अघि पिता पुर्षादेषि जार हानी आयाका. जातले आफु मिल्दा जातका भयो आफु भन्दा घटि पानि चलन्या सम्मका जातका भयो. कन्या दियो कलस पुजि. ल्यायाको हवस्. उसैल्यायाको हवस घर ल्यायाका स्वास्नीको कसैले जारि गऱ्यो भन्या साधुले अैनले जार नकाटनु भन्या लेषियाका हाड नाता. र. उपाध्या र जैसि व्राम्हणलाइ जार काट्न हुदैन. अैन वमोजिम्. अरू सजाय गर्नु हुंन्छ. अरू जातले जारि गऱ्योको भया जार काट्न उस्को अंस. सर्वस्व लिनु जनै हुन्याको. जनै झिकि जनै नहुन्यालाइ तेसै छाडन. सर्वस्व जात केहि. नलि छाडन टाग मनि छीराइ पैतालो चटाइ छाडन. साधुको षुसि.

४.	तागाधारि लगायेत्. नमासिन्या. मासिन्या जात गैह्नका अघि पिता पुर्षदेषि जार हानि आयाका. जातले. जार हान्न्या जातमा. पानि चलन्या जातसम्मका जार हान्न्या जातका छोरि विधवा आफु दोश्रो लिंग परि. घरमा ल्याइ. राष्या का स्वास्निको कसैले जारि गऱ्यो भन्या. साधुले जार नकाटनु भंन्या लेषियाका. हाडनातामा अैनले जार नहानु भन्याका. उपाध्या जैसी व्राम्हणलाई जार काटन हुदैन. र. अैन वमोजिम् अरू सजाय गर्नु हुन्छ. अरू जातले जारि गऱ्याको भया. जार काटन. उस्को अंस सर्वस्व गरि लिनु. जनै हुन्याको जनै झिकि. जनै नहुन्यालाइ. तसै छाड्नु. सर्वस्व जात केहि नलि छाड्न. टाग मनि छिराइ. पैतालो चटाइ. छाडन साधुको षुसि.

५.	नेवार जात र. अरू मासिन्या पर्जा. जात गैह्नले आफ्ना पतिव्रता स्वास्निको जार हान्दा उस्का. पिता पुर्षादेषि. नहानि आयाकामा जार हांन्यालाइ. हतियार चलाइ. ज्यान्मान्याको. रहेछ भन्या ज्यानको वदला ज्यान् जान्छ. हतियार चलाइ ज्यान वाच्यो भन्या घाका अैन् वमोजिम्. का सजायमा ३ षंडमा २ षंडको सजाय गर्नु. लाठा र. भाग्दामा ढुँगाले हांदा मर्न गयेछ भन्या अैन वमोजिम अंस. सर्वस्व गरि. दामल गर्नु. कुटता षेरि अंगको भंग भयाको भया. अंग भंगका. सजायको अैन वमोजिम्. मा ३ षंडमा २ षंड मात्रै सजाय गर्नु. वेस्या ल्यायाकि स्वास्निको जार काटयो. भन्या ज्यान्को वदला जान् जान्छ.

६.	जार काटन्या. जात गैह्नले पानि चलन्या जातसम्मका. कंन्या र जार काट्न्या जातका विधवा. आफु दोश्रो परि. करणि गऱ्याको. आफुले घर पनि. नल्यायाका डेरा षोजी पनि नराष्याका

षान लाउन पनि नदियाका स्वास्निको कसैले करणि गऱ्यो भन्या जार काटन पाउदैन. काटचो भन्या व्राम्हणले भया अैन वमोजिमको अंस. सर्वस्व गरि दामल गर्नु. अरू जातलाइ ज्यान्को वदला ज्यान् काटि मारि दिनु. मैले घरमा नल्याइ. वाहिर राष्या कि स्वास्नि हो फलानाले करणि गरि दियो भनि. अदालत ठाना अमालमा कराउन आया. करणि गर्न्यालाइ. १० रूपैया दंड गर्नु रूपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु. फिराद गर्न आयेन भन्या षतवात लाग्दैन.

७. कसैका विभाहिता. कंन्या तागाधारि जातदेषि नमासिन्या मतवालि जार हांन्या जातसंमका छोरि. आफु दोश्रो लिंग परि. विधवा ल्याइ. राष्याका स्वास्निको कसैले करणि गरेछ भन्या. कोहि जमामर्दिले तेस्ता जारलाइ. नकाटि तेसै छाडि दियो. विहा षर्च लि छाडयो सर्वस्व लि सजाय नगरि. तेसै छाडचो भन्या जारि गर्न्याको जात जादैन. जनै झिकि हवस्. पैतालो चटाइ टाग मनि छिराइ. अभक्ष षुवाइ छाडचाको भया. तेस्ताका हातको भात चल्दैन. पानीको मात्रै पतिया दिनु. येस्तालाइ. सर्कारको जागीर पनि नदिनु. जार न. काटि. यो सजाय गरि छाड्न्या साधु जार काटन्या भन्दा पनि ज्मा मर्द ठहर्छ. सजाय गरि. कुटपिट् गरि छाडचाकालाइ. फेरि जार काटचो भन्या व्राम्हणले भया अैन वमोजिम्को अंस. सर्वस्व गरि. दामल गर्नु. अरू जातले भया. ज्यानको वदला ज्यान काटि मारी दिनु. सजाय गरि. हवस्. सजाए नगरि जारिको षतमाफ गरि छाकालाइ फेरि काटचो भन्या व्राम्हणले भया अैन वमोजिम अंस सर्वस्व गरि. दामल गर्नु अरू जातले भया. ज्यान्को वदला ज्यान् काटि मारि दिनु.

८. जारीका कुरामा. कसैले मलाइ काट्न आयो भनी अदालतठाना. अमालमा कराउन आयो भन्या. पुर्पक्ष गर्दा. काट्छु भन्याको ठहरेन डरले. उसै आइ करायाको रहेछ भन्या तेस्तालाइ ५ रूपैया दंड गरि लि छाडि दिनु.

९. जारिका कुरामा. अडा अदालत ठाना अमालका कचहरिमा आइ पुग्याकालाइ थुन्या राष्याका. ठाउमा हवस्. वा. कचहरिमा हवस्. काटेछ भन्या आफ्नै जारलाइ. काटयाको भया पनि. कचहरिमै काटचा वावत् काट्न्याको अैन वमोजिम्. अंस सर्वस्व गर्नु. कचहरिवाट लिन. पक्रन पठायी प्यादा लागी ल्यायाका. वाधि. नेल ठिगुरा चमौट् हालि ल्यायाकालाइ वाटामा जार भनि काटेछ भन्या आफ्नै जारि गर्न्यालाइ काटचाको भया पनि. अदालत ठाना अमाल. मा कुरो

परि. कचहरिवाट प्यादा सिपाहि. पठाइ पक्रि. कैद गरि ल्यायाकालाइ. काटचाको ठहर्नाले. स्वास्निको कागज लेषाइ. लि. काटचाको भया काटन्यालाइ ५० रूपैया. स्वास्निको कागज नलेषाइ उसैकाटेछ भन्या १०० रूपैया दंड गर्नु रूपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु.

१०. कसैसित नविग्याकि स्वास्निलाइ. फलानासित विग्री भनि तहकित नगरि वेहक्मा जार काटेछ भन्या वेहक्मा ज्यान माऱ्या वावत्. काटनेको ज्यान्को वदला ज्यान्. लि तेस्को अैन वमोजिम्. को अंस सर्वस्व. स्मेत गरि लि. तेसै स्वास्निलाइ दिलाइ दिनु. त्यो स्वास्नि लोग्न्याका. सत्यमा रहोस्ता पनि. अर्कासित पोइल जावस्तापनि. त्यो सर्वस्व षान पाउछे तेसैलाइ दिलाइ दिनु.

११. तागाधारि. लगायेत् चार वर्ण छतिसै जात गैह्र जार्हान्या. जातका हवस् जार नहांन्या जातका हवस. कसैले जारी गऱ्यो र. साधुले जारि गर्न्यालाइ. लाठा ढुँगा लात्ति जुत्तीले कुट्पीट् गरि छाडचाका र. येक चोट् साधुले सजाय गरि छाडचाकालाइ फेरि मेरो जार भनि सजाय गर्न कुट्पिट् गर्न ज्यू काटन. पाउदैन. हाड र. राज षत लाग्न्या नाता रहेछ भन्या र. अदालत ठाना अमालमा कराउन आयो भन्या. हाड नातामा करणि गर्न्याका अैन वमोजिम् सजाय गर्नु. हाड नाता. रहेनछ भन्या र. साधुले आफ्ना जारलाइ. येक फेरा कुटि. छाडचा पछि. कराउन आयो भन्या पनि. पक्रि ल्यायाको भया पनि.जारि गर्न्यालाइ. षत लाग्दैन फेरि कुट्पिट् सजाय. गर्न पाउदैन. येक फेरा कुट्पिट् गरि. छाडेकालाइ. जार काटचो भन्या व्राम्हणले भया. अैन वमोजिम. सर्वस्व गरि. दामल गर्नु. अरू जातले भया ज्यान्को वदला ज्यान्. काटि मारि दिनु.

१२. उपाध्या र २ लिंग. का जैसि. व्राम्हण. रजपुत. तागाधारि जात गैह्रले अरू जार हांन्या जातको जारि गऱ्यो र. जारि गर्न्यालाइ. साधुले कुट्ता. व्राम्हणले. साधुलाइ कुटचो माऱ्यो भन्या अैन वमोजिमको. अंस. सर्वस्व गरि. दामल गर्नु. अरू जातले भया ज्यानको वदला ज्यान् काटि मारि दिनु.

१३. कसैले अर्काको जारि गऱ्यो साधुले हतियार. नचलाइ. जारि गर्न्याले साधुको ज्यूमाऱ्यो भन्या व्राम्हणले भया अैन् वमोजिम. अंस सर्वस्व गरि दामल गर्नु अरू जातलाइ. ज्यान्को वदला ज्यान् काटि मारि दिनु अैन वमोजिमको अंस. सर्वस्व पनि गर्नु. घा मात्रै. लागेछ ज्यान.

माऱ्याको रहेनछ भन्या साधुलाइ. आराम भया पछि. साधुका सपुर्त गरि दिनु. काटनु नकाट्नु साधुको षुसि.

१४. कसैले कसैको जारि गऱ्याको रहेछ. साधुले जारलाइ. हतियारले हानि. घा लायो जारि गर्न्याले साधुको घा सहि. साधुलाइ. हानि काटि माऱ्यो भन्या. साधुको घा लाग्या पछि. काटि मार्न्या जारलाइ राजषत् लाग्दैन. जारको र. साधुको भेट् भयाका वेलामा. साधुले हानि घा लायाको. रहेनछ. जारले पैल्हे हतियार चलाइ साधुलाइ. मारेछ भन्या. व्राम्हणले रहेछ भन्या अैन वमोजिम्को अंस. सर्वस्व गरि दामल गर्नु. अरू जातले भया ज्यान्को वदला ज्यान्. काटि मारि दिनु.

१५. अघि यौटी स्वास्नि. जारि गरि लैगयो र. साधुले जार हान्यो. घा लागी जारले ज्यू वचायो फेरि. तेसैले उसै साधुकि अर्की स्वास्नि लैगयो भन्या. यौटिको जार पैल्हे हान्योथ्यो अर्किको जार. फेरि पनि. हांन पाउछ षत लाग्दैन.

१६. कसैका २।३ स्वास्निको यौटैले जारि गऱ्याको रहेछ साधुले आफ्ना २।३ स्वास्नि. विगाऱ्याको थाहा पायि जार हान्यो ज्यान मरेन घा मात्रै लागि. जारले ज्यू वचायो भन्या. यौटि स्वास्निको जारि अघि हान्याथ्यो अर्कि स्वास्निको, फेरि जार हान्छु भनि हांन पाउदैन. फेरि हानि. ज्यानमरेछ भन्या अैन वमोजिम्. को अंस. सर्वस्व. गरि दामल गर्नु ज्यान भन्या मरेनछ घाउ. मात्रै लागेछ. भन्या. घाउका अंगुला. का अैन वमोजिम् कैद गर्नु.

१७. कसैले. कसैका यौटै स्वास्निको करणि गऱ्याको रहेछ. साधुले जार हान्यो ज्यान् मरेनछ घा मात्रै. लागी जारले ज्यू वचायो भन्या तेसलाइ. फेरि जार हो भनी हांन पाउदैन. फेरि उसैलाइ जार भनि काटि माऱ्यो भन्या व्राम्हण ले रहेछ भन्या अैन वमोजिमको अंस. सर्वस्व गरि दामल गर्नु अरू जातलाइ ज्यान्को वदला ज्यान्. काटि मारि दिनु. ज्यान् मरेनछ. घा मात्रै लागेछ भन्या. घाउका. अंगुलाका अैन वमोजिम् कैद गर्नु.

१८. असल रजपुत्ले जार हांन्या जातका स्वास्नि विगाऱ्यो भन्या साधुले जार काटचामा. रजपुतलाइ. काटचो भनि षत लाग्दैन. दंड पनि हुदैन.

१९. आफ्नि स्वास्नि. अर्कासित विग्र्याको थाहा पाइ जारि गर्न्यालाइ नकाटि तेसै स्वास्निको आफुले करणि गरेछ भन्या. तेस्ता तागाधारि जातलाइ २० नमासिन्या. मतवालि जातलाइ १० मासिन्या गैह्र जातलाइ. ५ रूपैयाका दरले नामर्दि दंड गर्नु. अर्कासित विग्र्याका तेस्ता. स्वास्निको आफुले करणि लिया पछि जार काटचो भन्या काटिन्या जातकालाइ ज्यान्को वदला ज्यान्. काटि मारि. दिनु. व्राम्हण जातले काटेछ भन्या अैन वमोजिमको अंस. सर्वस्व गरि दामल गर्नु. जनै झिकेछ वा झिकन लायेछ. भन्या १०० रूपैया. टागमनि छिराए छ वा. पैतालो चटायेछ. भन्या ६० रूपैया. गाउवाट निकालेछ भन्या १० रूपैया सर्वस्व लियेछ वा. विहा षर्च लियेछ भन्या. लियाको विगो फिर्ता गराइ. विगै वमोजिम्. दंड गर्नु अभक्ष षुवाइ. जात लियेछ भन्या जात लिन्या. का अैन वमोजिम. कुट्पीट् गरेछ भन्या कुट्पिट्का अैन वमोजिम दंड कैद गर्नु. स्वास्नि नमासिन्या जात कि भया वेस्या ठहर्छन् मासिन्या जातका मासिन्छ.

२०. सिन्को काटि छोडयाको स्वास्नि. अरू सित. विग्र्या भन्या जार काटन पाउदैन. जारकाटचो भन्या. ज्यानको वदला ज्यान् हुन्छ.

२१. व्राम्हण वाहेक तागाधारि जात गैह्रले आफ्ना हाडमा. करणि गऱ्यो भन्या येस्ताको साधुले जार नकाटि. सर्वस्व मात्रै लियाका कलमका स्वास्निको नाक काटन पाउदैन. चुल्ठो मात्रै. काटि छाडि दिनु. एस्ता स्वास्निको नाक काट्न्यालाइ ५० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

२२. विना विराउमा. विवाहिता. रषुइ. वेस्या स्वास्निका लोग्न्याले नाक काटचो भन्या त्यो लोग्न्यालाइ. १२ वर्ष कैद गर्नु म्यादका रूपैया दिया नलिनु. करणिको वातलाइ चुल्ठो काटचो भन्या ९० रूपैया दंड गर्नु. दंडका रूपैया नतिऱ्या कैद गर्नु. स्वास्नि आफ्नै जातमा रहन्छे.

२३. लोग्न्याका पनि मन परिनछ स्वास्निले पनि तिमीसीत वस्तिन भनीछ र २ जनाका राजिले सिन्को काटि दियाको रहेछ भन्या त्यो स्वास्नि जो सुकैसित गया पनि जारकाटन पाउदैन जारकाटचा ज्यान्को वदला ज्यान् हुन्छ विहा षर्च लिन्याले विहा षर्च पाउदैन. राजषत

लाग्न्या कलम वाहेक अरू आफु भन्दा ठुला जात र. आफु वरोवरका जातसित गैभन्या. लैजान्यालाइ षत लाग्दैन.

२४. स्वास्नी मानीस कसैले वेहक्मा अर्कालाइ करणिको कुरो पोल्या वावत् अैन वमोजिम दंड कैद भयाका स्वास्निलाइ उस्का लोग्न्याले रूपैया तिरि लै जान्छु भन्यो भन्या लै. जान पाउछ. अैन वमोजिम रूपैया लि छाडि दिनु.

२५. राजषत लाग्न्या. हाडनाता वाहेक् पानि चलन्या सम्मका अर्का कसैसित विग्र्याका स्वास्निलाइ. उस्का लोग्न्याले स्वास्नि मेरि हो. अंत विग्री तापनि मै लैजांछु. भन्न आया अैन वमोजिम्. को नामर्दि दंड गरि. स्वास्नि जान्छे भन्या लैजान पाउछ.

२६. कसैको लोग्न्या पर्देस गयाको रहेछ र घर आउदा. अैनले जार हांन हुन्यासम्मका आफ्ना स्वास्नि कोहि. अर्कासित करणिमा विग्र्याको पेट वोक्याको जाहेर भयो भन्या तेस स्वास्निलाइ अदालत अमालमा लैगि जारको तहकित गरि कागज लेषाइ लि. व्राम्हण र हाड गोत्र वाहेकमा अैन वमोजिम जार काटनु अरू सजाय गर्नु. साधुको षुसि. पर्देस जान्या कि स्वास्नि अर्कासीत करणिमा विग्र्याको उस्का वावु छोरा दाज्यू भाइ. चाकर इष्टमित्र नातागोता कसैले देषेको रहेछ भन्या साधु आयापछि घरैमा तहकित गरि स्वास्निको कागज लेषाइ लि सोहि वमोजिम. जार काटनु अरू सजाय गर्नु साधुको षुसि. आफ्नि स्वास्नि अर्कासित करणिमा विग्र्याको आफ्ना आषाले देषेछ भन्या. स्वास्निको कागज लेषाइ. लिनु पर्दैन. थलैमा अैन वमोजिम जार काटनु. अरूसजाय गर्नु हुंछ. षत लाग्दैन.

२७. अैनले जार हांन हुन्या. सम्मका आफ्नी स्वास्नि अर्कासित करणिमा विग्रि साधुले अैन वमोजिम जार काटचा पनि. अरू सजाय गरि छोडचा पनि केहि नगरि. उसै छाडचा पनि स्वास्निको नाक नकाट्नु. उस्को जो भयाको दाइजो पेवाली छोडि दिनु. अर्कासित विग्री भनि. स्वास्निको नाक काट्न्यालाइ २५ रूपैया दंड गर्नु. नाक काटचा पछि दाइजो पेवा पनि लिन पाउदैन तेसै स्वास्निलाइ फिर्ता गराइ दिनु.

२८. जार हान्या जात गैह्रका स्वास्निको कसैले जारि गर्‍यो र. साधुले जारको सजाय गर्न नपाउदै. मा त्यो स्वास्नि मरिछ भन्या स्वास्नि नमर्दैमा कागज लेषाइ लियाको भया. स्वास्नि मरि तापनि. आफ्नु जार. अैन वमोजिम् काट्न पाउछ. स्वास्निको कागज लेषाइ लियाको रहेनछ. भन्या स्वास्नि मर्‍यापछि जार काट्न पाउदैन. काटच्या मुडिन्या जातले भया अैन वमोजिम. सर्वस्व गरि. दामल गर्नु. काटिन्या जातलाइ काटि मारि दिनु.

२९. सन्यासि वैरागि गैह्र भेषधारि जातले अर्काको जारि गर्‍यो भन्या. उपाध्या व्राम्हण जैसि वाहुन. जोगि भयाका वावुको र मावलिको पत्ता नलाग्याका जोगि भयाका र. कसैसित नविग्र्याका उपाध्या र. जैसिका विधवा भेषधारिले राषि उन्वाट जन्म्याका सन्तान् जोगी भयाकालाइ जार नकाटनु. ज्यान् काट्ना वाहेक अैन वमोजिम. अरू सजाय गर्नु साधुको षुसि. ज्यान काटच्या. मुडिन्या जातले भया. अैन वमोजिम् अंस सर्वस्व गरि दामल गर्नु. काटिन्या जातले भया काटि मारि दिनु. एति वाहेक् अरू जातको संन्यासि वैरागि. गैह्र भेषधारि. भयाकाले जारि गर्‍यो भन्या. भेष हो जार काट्तिन भन्छ तापनि. काट्छु भन्छ तापनि. काट्नु. नकाट्नु साधुको षुसि.

३०. नामर्दि दंड पसुवन् षरपन् तिरि ल्यायाका स्वास्नि. अर्कासित करणिमा विग्र्या भन्या. साधुले स्वास्नि लैजान्छु भन्यो भन्या त्यो स्वास्नि पनि षुसि राजिले जान्छु भन्या करणि गर्न्यालाइ. दंड पर्दैन. स्वास्नि लैगयन भन्या नामर्दि दंड. पसुवन् को विगो साधुलाइ. भराइ दि. उसै विगा वमोजिम. दंड गर्नु.

३१. कसैले आफ्ना हाड गोत्रमा जारि गर्‍यो र जारि गर्न्यालाइ साधुले हतियार चलाइ घाउ मात्रै लायेछ ज्यान मर्‍याको रहेनछ भन्या हाडमा जार काटि घाउ लाउन्या साधुलाइ. काटिन्याको ज्यू जषम भयाको भया ६० रूपैया ज्यू जषम नभयाको भया २० रूपैया दंड गरि. भात पानिको पतिया दिनु हाडमा जारि गर्न्यालाइ जनै हुन्याको. जनै झिकि जनै नहुन्यालाइ. तेसै जात पतित मात्रै गरि वस्याका गाउ सहरवाट निकालि दिनु. साधुले हानी घा लायाको हुनाले सर्वस्व पनि हुदैन. मुडिदा पनि मुडिदैन. हाडमा जारि गर्न्या एस्ताका हातको भात चल्दैन. पानीको मात्रै पतिया दिनु.

# आसा राडीको करणि गर्न्याको

१. तागाधारि लगायेत् चार वर्ण छतिसै जात गैह्रका लोग्न्या मानिस. कसैले दामल हुन्या तक्सीर गर्‍यो. आफु भन्दा घटि जातमा करणि गर्‍यो पानी नचलन्या जातका हातको भात पानि षाइ जात पतित भयो अरू केहि षुन गरि जाहान छोडि भागि गयो र. तेस्ताका स्वास्नि. अर्कासित पोइल गया भन्या. भात पानिमा पार्‍याको भया अैन वमोजिम. को सजाय गर्नु. अैनले मुडिन्या दामल हुन्या नाता वाहेकमा भात पानी मा नपरि. आफ्ना षुसि राजिले करणि गर्‍यामा करणि गर्न्या गराउन्या लोग्न्या स्वास्नी दुवैलाइ. षतवात लाग्दैन. एस्तामा जार काटचो भन्या नकाटिन्या जातले भया अैन वमोजिम सर्वस्व गरि दामल गर्नु. काटिन्या जातले भया ज्यानको वदला ज्यान् काटि मारि दिनु.

२. जैसि व्राम्हणले भात मिल्न्या नाता केहि नलाग्न्या विधवा आसाराडि लोग्न्यालाइ सजाय भै भात वाहेक. भयाका मानिस्का सत्यमा रहयाका स्वास्निका मनोमानसित करणि गरि आफुले पनि भात षायेछ. अरू भताहालाइ पनि वोरेछ भन्या १०० रूपैया दंड गर्नु भात वाहेक गरि दिनु. आफुले भात षायाको रहेनछ. स्वास्निवाट भताहालाइ. भातमा वोर्‍याको भया. एस्तालाइ ५० रूपैया दंड गरि. पतिया गराइ दिनु जात जादैन.

३. लोग्न्या पर्देस गयाका. पत्ता केहि नलाग्याका मानिसका सत्यमा रह्याका आसाराडि र. लोग्न्याले तक्सीर गरि जात पतित हुन्याको. सत्यमा रह्याका. स्वास्नि उपाध्यानी व्राम्हणिको. अैनमा सजायलेषिया वमोजिम. का हाड नाता वाहेकमा उपाध्या व्राम्हणले करणि गरि. उसैका हातको भात पानि षायेछ. अरूलाइ पनि वोरेछ भन्या १०० रूपैया दंड गरि. उसै जातमा मिलाइ दिनु. स्वास्निवाट भातमा वोरेको भया तेस्तालाइ ५० रूपैया. दंड गरि पतिया गराइ दिनु. करणि मात्र गर्‍याको रहेछ उस्का हातको भात षायाको रहेनछ. अरू भताहालाइ पनि. वोर्‍याको रहेनछ भन्या षतवात लाग्दैन. एस्ता आसाराडिको लोग्न्या पर्देसवाट आइ. नालिस गर्‍या भन्या सधवा व्राम्हणि विराउन्याका अैन वमोजिम सजाय गर्नु. लोग्न्या आइ. नालिस गरेन भन्या. भातमा नवोर्न्यालाइ. षतवात लाग्दैन.

# जातक् माराको.

१. जन्मायाको ज्यूदो वालष मार्न्या ज्यान् मार्न्या ठहर्छ तेस्ता वालष मार्न्या चार वर्ण छत्तीसै जातका स्वास्निलाइ दामल् गर्नु. फाल्याको वालष मर्‍याको रहेन छ भन्या स्वास्नि मानिसलाइ ६ वर्षक कैद गर्नु. म्यादको रूपैया दियालि छाडनु.

२. तागाधारि जात र. मतवालि नमासिन्या जातका स्वास्निहरू कसैले मैन्हा नपुग्याको आफ्नु पेटका गर्भ औषधिहरू षाइ भयो पेट मदाउन लगाइ भयो. गर्भ तुहाउन्यालाइ १ वर्ष कैद गरि कैदका रूपैया तिर्‍या अैन वमोजिम्. रूपैया लि छाडि दिनु. धर्म्माधिकारले पानिको पतिया नदिनु. एस्ता स्वास्निको वेस्या भया पछि पानि चल्छ. मासिन्या जातले गर्भ तुहायो भन्या मासि २॥ रूपैया गोदान गराइ पानिको पतिया दिनु.

३. अर्काको पेतको गर्भ तुहाउनाका लागि पेट माडि दिन्या गर्भ षोलिन्या. औषधि दिन्या र. गर्भ तुहाउनाको मतलव दिन्या तुहायाको देषि दवाउन्यालाइ १ वर्ष कैद गर्नु. रूपैया तिर्‍या अैन वमोजिम् लि छाडि दिनु. धर्माधिकारलाइ ५ रूपैया गोदान दि पतिया गराइ माग्नु.

४. लोग्न्या मानिसले छोराछोरी जन्म्या पछि जम्याको ज्यूदो वालष फालेछ र. त्यो वालष मरेछ भन्या काटिन्या जातलाइ ज्यानको वदला ज्यान लिनु. दामल हुन्या जातलाइ अैन वमोजिम्को अंस सर्वस्व गरि दामल गर्नु. फाल्याको वालष मर्‍याको रहेनछ. ज्यूदै रहेछ भन्या पनि फालन्यालाई अंस सर्वस्व गरि दामल् गर्नु.

५. कसैले अर्काको जातक मार्‍याको देषेन. पछि थाहा पाइ कसैलाइ नकहि दवायाको रहेछ भन्या तेस्तालाइ ३० रूपैया दंड गर्नु. रूपैया नतिर्‍या अैन वमोजिम् कैद गर्नु.

६. स्वास्नि सुत्क्यारि हुंदा जातक् पैदा हुन सकेन र त्यो वालष पैदा गराउना निमित्त आफ्नु लोग्न्याले हवस् अरू सुद्यानि गैह्र स्वास्नि मानिसले हवस्. पेट मडाउदा आग थिचता वालष झिक्दा तेसै वेथाका पिरले स्वास्नि मरि वा वालष झिकता मर्‍यैको रहेछ भन्या उपकार गर्नलाइ षतवात लाग्दैन प्रायश्चित्त पनि गर्नु पर्दैन.

७. अर्काका पेटको गर्भ तुहाउनाका लागि जानि जानि. इलाजहरू दिन्या. गर्भ तुहाउनाको मतलव दिन्या पेटमाडि दिन्यालाइ. वालष मरेन छ र. ज्यूदो जन्म्याको ठहऱ्या १ वर्ष गर्भ तुहाउनाका लागी. इलाज दियाको गर्भ तुहाउन्या मतलव गऱ्याको. थाहा पाइ दवाउन्यालाइ ६ मैन्हा कैद गर्नु. वालष ज्यूदो जन्म्याको हुनाले पतिया पर्दैन. म्यादका रूपैया तिऱ्या लि छाडनु.

८. आफ्ना लोग्न्या वाहेक. अरू कसैसित करणि भै गर्भ रहि जन्म्याको वालष जाहेर नहवस्. दवाउं भनि आफु भंदा घटि पानि नचलन्या गैह्र जात कसैलाइ पालन दियाको ठहऱ्या आमालाइ १५ जन्माउन्या वावुलाइ ३० रूपैया दंड गरि त्यो वालषल्याइ पानि चलन्या जातकालाइ पालनदिनु. कर्म्मनचल्दा सम्म वालष छिटो हालि सुध्द हुंछ. पालन्यालाइ वात लाग्दैन दंडका रूपैया नतिऱ्या मैन्हा का ५ रूपैयाका दरले कैद गर्नु.

# पाचुके गर्न्या.

१. नेवार जात्का स्वास्निलाइ लोग्न्याले षान लाउन दिदा दिदै र सौतार हालि घरवाट निकालि वा राजकाजले देसपर्देस टाढा जान्याका. स्वास्निको वा अैनले पाचुकेनहुन्या अरू कुरामा पाचुके गराइ देउ भनि अदालत ठाना अमालमा भन्न आया सुपारिफर्काइ. पाचुके गराइ जान पाउदिन. कसैले एस्तामा पाचुके गराया भन्या पाचुके गरि दिन्यालाइ जौन जातका स्वास्निको पाचुके गरि दियाको छ. उसै जातकालाइ लेष्याका विहा षर्चका ३ षंडको १ षंड एस्तामा पाचुके गराउन लैजान्यालाइ ६ षंडको १ षंडका दरले दंड गरि लोग्न्या का सपुर्त गरि दिनु. स्वास्निले छाडि जान पाउदिन.

२. नेवारजात गैह्रका विहा गऱ्याका र विहाको रित पुऱ्याइ ल्यायाका स्वास्नि हरूमा. लोग्न्या आफ्ना सर्कारका. राजकाजमा टाढा गया वाहेक. आफ्ना काजले भोट मध्येस् पर्देस जादा स्वास्निलाइ षाना लाउनाको वंदोवस्त केहि नगरि जान्याका र स्वास्नि विहा गरि आफ्ना घर नल्याइ लोग्न्याले षान लाउन नदि ३ वर्ष सम्म दुःखकाटि अनेत्रै वस्याका र विराना राजमा वसै जान्याका स्वास्निहरूले हामि तेस् लोग्न्यासित वस्तौन. पाचुके गराइ देउ भंन आया भन्या. अदालत ठाना अमालवाट पाचुके गराइ दिनु.

३. नेवार जातका चोरि गर्न्या दामल हुन्या षत वात गरि. घर जहान छाडि भागि जान्याका स्वास्निले हामि तेस लोग्न्यासित वस्तौन पाचुके गराइ देउ भंन्न आया अदालत ठाना अमालवाट पाचुके गराइ दिनु.

४. नेवार जातका विहा गऱ्याका र विहाको रित पुऱ्याइ ल्यायाका स्वास्निमाथि सौता हाल्यो षान लाउन नदि. घरवाट निकाला गरि दियो वा. वेस्या राषि विहाइतालाइ. हेरेन र स्वास्नि कराउन आइभन्या अदालत ठाना अमालवाट पाचुके गराइदिनु.

५. नेवार जातका लोग्न्या फकिर भयो जात देषि पतित भयो भन्या पाचुके गराउनु पर्दैन. माइतिले अनेत्र विहा गरि दिनु हुंछ. षतवात लाग्दैन.

६.	नेवार जातका विहा गरि सक्या पछि. लोग्न्या माहारोगि लुलो कुजो अंधो लगडो नपुंसक लाटो रहेछ स्वास्निले.पाचुके गरिदेउ भन्न आया अदालत ठाना अमालवाट पाचुके गरि दिनु लोग्न्याको कर लाग्दैन.

७.	नेवार जातका विहा गर्न्या र विहाको रित पुऱ्याइ लैजान्या लोग्न्या विरामि भै साह्रो भयो भनि स्वास्नि तर्फवाट सुपारि फर्काइ छाडि जान पाउदैन. स्वास्निका ग्रह दसाले पिऱ्याको रहेछ यो स्वास्नि छाडछु भनि लोग्न्या तर्फ वाट पनि पार भइस् भनि पार दिन पाउदैन. वेरामिका वषत्मा सुपारि फर्कायाको वदर हुंछ एस्ता पाचुके गरि दिन्यालाइ उसै जात्का विहा षर्चका ३ षंडको १ षंड पाचुके गराउन लैजान्यालाइ विहा षर्चका ६ षंडको १ षंड दंड गरि. स्वस्नि जस्कि हो उसैका जिम्मा गरि दिनु.

८.	नेवार जातका स्वास्निको अैनले पाचुके हुन्या मुद्दामा पाचुके गरि दिदा अदालत ठाना अमालवाट १ रूपैया दस्तुर लि पाचुके गरि दिनु. वढता नलिनु.

९.	नेवार जातका मिसाषत्मा दंड हुन्या कुरामा र अैनले पार पाचुके हुन्या मुद्दामा पिरा भराउदा दसौद लिनु. विसौद लाग्दैन. नलिनु.

# मिसा षत्को.

१. षतवातमा अघि देषि मासि आयाका नेवार जात गैह्रमा पानि चलन्या सम्मका नेवार जातले मासिन्या. षत गऱ्यामा इन्हेरूलाइ नमासिन्या नेवार जातका सरह सजाय गर्नु. अव उप्रान्त ज्यू नमासनू. कसैले मास्यो भन्या अजा पुत्रमासन्या लाइ लेष्याका अैन वमोजिम् दंड सजाय गर्नु. पानि नचलन्या नेवार जातलाइ मासिन्या षतमा मासिंछ.

२. नेवार जातले तागाधारि जातका तागाधारि जातैसित विग्ऱ्याका स्वास्नि लाइ आफु तेश्रो लिंग परि. घरमा ल्याइ राष्याका स्वास्निवाट जन्म्याका संतान्. वावुका जातमा मिल्छन् विवाहिता सरहको अंस पनि पाउछन्.

३. नेवार जातकाले तागाधारि जात र नमासिन्या मासिन्या. मतवालि जात्का विग्ऱ्याकि स्वास्नि राषि जन्म्याका संतान् कंमलवत नेवार जात हुंछ.

४. नेवार जातले तागाधारि जातका तागाधारि जात भंदा घटि जातमा विग्ऱ्याका स्वास्नि राषि जन्म्याका संतान् लवट नेवार जातका हुंछन्. एस्ता र तागाधारि जातका तागाधारि जातैसित विग्ऱ्याका. स्वास्नि आफु चौठो लिंग देषि उभो परि नेवार जातले ल्यायाका स्वास्निवाट जन्म्याका संतान्. लवट् हुंछन्. भताहाले भात षानाको कर लाग्दैन. भताहाले भात षायाको भया विवाहिता सरहको अंस पाउछन्. भात् नषायाको भया लवट् सरह पाउछन्.

५. नेवार जातले नेवार वाहेक पर्वत्मा नमासिन्या मासिन्या मतवालि जातका कंन्या विधवा स्वास्नि ल्याइ उन्वाट जन्म्याका संतान् वावुका जात्मा चल्दैनन्. लवट् हुंछन्. अंस पनि लवट् सरह पाउछन्.

६. नेवार जातले आफु भंदा कम नेवारै जातका स्वास्नि ल्याइ उन्वाट जन्म्याका संतान्ले आमाका जातपट्टि लागि उनै का जातका रितको विहा गरि भात्मा मिली भजि रहयाका छन् भन्या तेस्ता संतान्ले षतवात गऱ्या आमाकै जातका अैन वमोजिम् दंड सजाय गर्नु. आमाका

जातमा मिल्याको रहेन छ वावुको जातको जात भंदा कम् मात्र भयाका रहया छन् भन्या तेस्ता लवट् लाइ वावुका जातको अैन वमोजिम् दंड सजाय गर्नु.

७. नेवार जात्मा थर घर र असल श्रेष्ट जातका विहा गरि ल्यायाका र विहाको रि पुऱ्याइ ल्यायाका सधवा स्वास्निको राजि षुसि. सित कसैले करणि गऱ्यो भन्या ७० रूपैया विहा षर्च भराइ ७० रूपैया दंड गर्नु.

८. नेवार जात्मा असल्श्रेष्ट देषि मनिका अरू श्रेष्ठ र. वाडा उदास् लगायत ज्यापु देषि माथिका जातले विहा गरि ल्यायाका र. विहाको रित पुऱ्याइ ल्यायाका. सधवा स्वास्निको राजि षुसि. सित कसैले करणि गऱ्यो भन्या ६० रूपैया विहा षर्च भराइ ६० रूपैया दंड गर्नु.

९. नेवार जात्मा ज्यापु तर ज्यापु सरहका अरू गैह्र जातले विहा गरि ल्यायाका र विहाको रित पुऱ्याइ ल्यायाका सधवा स्वास्निको राजि षुसिसित करणि गऱ्यो भन्या ४० रूपैया विहा षर्च भराइ ४० रूपैया दंड गर्नु.

१०. नेवार जातमा साल्मि नकर्मि छिपा मालि षुसल् मुसल् डुत्रा चीत्रकारि गैह्र इ ७ जात र इनै सरहका अरू जात गैह्रले विहा गरि ल्यायाका र विहाको रित गरि ल्यायाका सधवा स्वास्निको राजि षुसि सित कसैले करणि गऱ्यो भन्या ३५ रूपैया विहा षर्च भराइ ३५ रूपैया दंड गर्नु.

११. कसाहि कुस्ल्या कुलुडोम गैह्र पानि नचलन्या छोइ छिटो हालनु नपर्न्या जात्का आफ्ना जात्मा मिसाषत्. पऱ्यो भन्या साधुलाइ १० रूपैया विहा षर्च भराइ १० रूपैया दंड गर्नु.

१२. पोढ्या च्यामा षलकले आफ्ना जात मिल्दामा करणि गरि मिसाषत् पऱ्यो भन्या १५ रूपैया विहा षर्च भराइ ५ रूपैया दंड गर्नु.

१३. मिसाषत् परि अर्काले करणि गऱ्याका स्वास्नि लाइ विहाइता लोग्न्याले पसु वन् तिरि स्वास्नि लैजांछ भंन आयो भन्या स्वास्नि लैजान्यालाइ भयाका दंड का ४ षंडको १ षंड पसुवन् लि स्वास्नि लैजान दिनु. विहा षर्च पाउदैन.

१४. नेवार जातका विहा गरि लै गयाका स्वास्नि लाइ सुपारि फर्काइ जति फेरा विहाको रित पुऱ्याइ विहा गरि लैगयाको छ. तेस्ति स्वास्निको करणि गर्न्यालाइ विवाहिता स्वास्निको करणि गर्न्याका अैन वमोजिम् विहा षर्च भराइ उसै विगा वमोजिम्. दंड गर्नु.

१५. नेवार जातका जात मिल्दा कंन्या र विधवा आफु तेश्रो लिंग परि घरमा ल्याइ भताहाले भात षायाका स्वास्निको कसैले करणि गऱ्यो भन्या विहा षर्च भराउनु. पर्दैन विहा षर्चका अैन वमोजिम् दंड मात्र गर्नु.

१६. नेवार जातका विहाको रित नपऱ्याइ आफुले तेश्रो लिंग परि घरमा ल्याइ राष्याका स्वास्निको जाया जन्म भयाको हवस् नहवस्. कसैले करणि गऱ्यो भन्या करणि गर्न्यालाइ विहा षर्चको आधि दंड गर्नु. चौथो लिंग देषि उभो परि घरमा ल्याइ राष्याका स्वास्निको जाय जन्म भयाको भया पनि नभया पनि करणि गर्न्यालाइ विहा षर्च का ३ षंडको १ षंड दंड गर्नु.

१७. नेवार जातका राजि षुसिसित सुपारि फर्काइ वस्याका र विधवा भै वस्याका अर्कासित गै लग्या भन्याको गर्भ पैदा नभयाको २।३ ठाउ विग्रि भात्मा लियाका एस्ता स्वास्निहरू ल्याइ आफुले र दाज्यू भाइले भात षाइ ताला कुचि सौपि राष्याका स्वास्नि अर्कासित विग्न्या भन्या विधिपुर्वक सग विहा गरि ल्यायाकि रहिछ. भन्या अैन वमोजिम्को विहा षर्च भराइ उसै विगा वमोजिम दंड गर्नु. विहा गऱ्याको रहेनछ. उसै ल्यायाकी मात्र रहिछ. भन्या विहा षर्च भराउनु पर्दैन विहा षर्चको आधि दंड मात्रै गर्नु.

१८. मिासाषत् पर्न्या नेवार जातका लोग्न्या स्वास्निलाइ यो अम्कासित विग्न्या कि छ भनि. स्वास्निलाइ पोलोस् वा. अम्कीसित विग्न्याको छ भनि लोग्न्यालाइ पोलोस्. आफुले पोल्याका मानिस्लाइ सावित् गर्न सकेन रिस्ले पोल्याको ठहऱ्यो भन्या तेस्ता पोलाहालाइ जौन जाताकालाइ पोल्याको छ उसै जातलाइ लेष्याका विहा षर्चको आधि दंड गर्नु.

१९. मिसाषत्मा पर्न्या नेवार जात गैह्रका कंन्या विधवा सधवा वेस्या भयाका स्वास्निहरूमा एका लोग्न्याको गर्भ रहयो गर्भरहचैमा अरू अरू लोग्न्यासित पनि करणि हुंदै रहयाको रहेछ. भन्या

गर्भ पैदा नहुंज्याल् गलंज्या ठहर्दैन. वालष पैदा भया पछि जस्का विर्ज्येले गर्भ रहयाको हो. त्यो वालष उसै वावुको ठहर्छ. आफु भंदा उपल्ला जातकी र. आफु मिल्दा जातकी स्वास्नि रहिछ भन्या पानि चलन्या आफु भंदा घिट जातसित करणि गराया वावत् पतिया गराइ जस्को जातक् हो उसै लोग्न्याका जातका स्वास्नि छोरि छोरा मिलाइ दिनु. एस्ता छोरा छोरि म जातमा लिछुं भनि वावु दाज्यू भाइ ज्येठा कांछा वावुले ठुलि सानि आमाहरूले भन्यो भन्या लैजानपाउछन्. इन्ले हामि लिदौन भन्यो भन्या करलाग्दैन वेस्या पुत्र ठहर्छन्.

२०. नेवार जातका ११ वर्ष उभोका कंन्या विधवाको उस भंदा कम नेवारै जातले करणि गरि भात स्मेत् वोरेछ भन्या जौना जातका स्वास्निको करणि गऱ्या को छ. उसै जातलाइ लेष्याका विहा षर्चका ३ षंडको २ षंड दंड गर्नु करणि मात्र गरेछ भात्मा वोऱ्याको रहेनछ भन्या आफुभंदा ठुला जातको करणि गऱ्या वावत् गलंज्या भयाको रहेनछ. स्वास्निजात्म आउन्या रहिछ भन्या विहा षर्च ३ षंडको १ षंड गलंज्या भयाको रहेछ. जात्मा आउन्या रहिनछ. भन्या विहा षर्च वमोजिम् दंड गर्नु. विग्याको जौन जात हुंछ. उसै जात्मा मिलाइ दिनु. रूपैया नतिऱ्या मैन्हाका ५ रूपैयाका दरले कैद गर्नु.

२१. नेवार जातले जात मिल्दा हुं भनि आफु भंदा ठुला जात्का केटि मागि लाषा सुपारि लायो विहा हुन नपाउदैमा केटाको जात सानु ठहऱ्यो र वावु आमा माइतिले घटि जातको हिछस् केटि दिंन भन्यो भन्या जात ढाटि लायाको लाषा सुपारि सदर हुंदैन. लाषा भुस गराइ केटि भात मिल्दा अर्केलाइ विहा गरि दिनु. षत लाग्दैन. वावु आमा. माइतिले भात् मिल्दा अर्का केटालाइ दि विहा भै सकिया पछि यो मैले लाषा लाया कि हो भनि. केटिलाइ समायो वा अदालत अमालमा कराउन आयो भन्या तेस्तालाइ जौन जात्का स्वास्नि समायाको छ उसै जातका विहा षर्चका ३ षंडको १ षंड दंड गर्नु.

२२. नेवार जातले जात मिल्दो हुं भनि आफु भंदा ठुला जातका केटि मागि विहा गऱ्यो भन्या. जौन जात कि केटि जात ढाटि विहा गऱ्याको छ. उसै जातलाइ लेष्याका विहा षर्चका आधिका दरले दंड गर्नु केटि विहा गर्न्या कि हुंछे फिर्ता हुंन. अघिवाट नवुझि केटि दिन्या पछिवाट मेरि छोरि दिंन भनि जवरजस्ति गरि फर्काउन्या वावु आमा. माइतिलाइ विहा षर्चका ३ षंडको १ षंड दंड गर्नु.

२३. मिसा षत्मा दंड हुन्या. नेवार जातका स्वास्निलाइ लोग्न्या मानिसले करणिका आसयले. फकाउन लायो करणि हुन पायाको रहेनछ तेस्तैमा स्वास्नि कराउन आइ भन्या जौन जातका स्वास्नि फकाउन लायाको छ. उसै जातका लाइ लेष्याका अैन वमोजिम्का विहा षर्चमा लोग्न्या भयाका सधवा स्वास्नि फकाउन लायाको भया ३ षंडको १ षंड जात धर्ममा रहंछु भंन्या विधवा फकाउन लायाको भया ६ षंडको १ षंड कंन्या फकाउन लायाको भया १२ षंडको १ षंडरले दंड गर्नु. फकाउन जांन्यालमिलाइ पनि. उहि जातलाइ लेष्याका विहा षर्चको ६ षंडमा १ षंड दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

२४. नेवार जातका सधवा स्वास्नि भात मिल्दा जात्कालाइ कसैले फकाइ करणि चुकाइ दियो भन्या तेस्ता लमिलाइ करणि गर्न्या लोग्न्यालाइ भयाका दंडको आधिका दरले दंड गर्नु.

२५. नेवार जात गैह्रका स्वास्निलाइ कसैले हात पात गऱ्यो र स्वास्नि भै स्वास्नि का परियार. माइतिहरूले कराउन आया भंन्या. अर्काका स्वास्निलाइ हात पात गर्न्या. तागाधारि लगायेत् पानि चलन्या संमका जात भया. जौन जातका स्वास्निलाइ हातपात गऱ्याको छ. उहि जातलाइ लेष्याका विहा षर्चका ३ षंडको १ षंड दंड गर्नु. पानि नचलन्या र छोया छिटो हालनु पर्न्या जातले हातपात गऱ्याको भया ८० रूपैया दंड गर्नु. रूपैया नतिऱ्या कैद गर्नु.

२६. नेवार जात गैह्रका विधिसंग लैगि भात षायाका स्वास्निलाइ कसैले करणिका आसयले हातपात गऱ्यो र लोग्न्याका वावु दाज्यू भाइ माइतिहरूले थाहा पाइ. हात हालन्यालाइ कुट्पिट् गऱ्या छन् भन्या अंग भंग गऱ्याको भया कुट्पिट् गर्न्यालाइ अंग भंगका अैन वमोजिम् सजाय गर्नु. अंग भंग भयाको छैन आफनी छोरि वुहारिलाइ हात हाल्दा हात हालन्यालाइ कुटचामा षत लाग्दैन.

२७. नेवार जात गैह्रका स्वास्निलाइ अर्का कसैले हातपात गऱ्यो र उस्का लोग्न्याले थाहा पाइ हात हालन्यालाइ कुट्पिट् गऱ्यो र ज्यू मऱ्याको रहेनछ अंग भंग गरि. मात्र कुटचाको भया अंग भंगका अैनको आधिका दरले दंड सजाय गर्नु. अंग भंग गऱ्याको छैन भन्या आफ्नि स्वास्निलाइ हात हालन्यालाइ कुट्न्या साधुलाइ षत वाट लाग्दैन.

२८. नेवार जात गैह्र स्वास्नि करणिमा विग्र्या र. उस्का लोग्न्याले करणि गऱ्याको देषि उसै ठाउमा करणि गर्न्यालाइ. कुट्पिट् गऱ्यो र ज्यू मरेनछ. अंग भंग मात्र भयो छ अंग भंगका अैनको आधि आधि दंड सजाय गर्नु. अंग भंग भयाको छैन. भन्या कुट्न्यालाइ षत वाट लाग्दैन.

२९. नेवार जात गैह्रका. स्वास्नि करणि मा विग्र्या र उस्का लोग्न्याले करणि गऱ्याको ठहराइ करणि गर्न्यालाइ कुट्पिट् गऱ्यो र ज्यू मऱ्याको रहेनछ. अंग भंग मात्र भयछ भन्या अंग भंगका अैनको आधि दंड गर्नु. अंग भंग भयन भन्या कुट्न्यालाइ षतवाट लाग्दैन.

३०. नेवार जात गैह्रले विहा गर्न भनि केटि मागि लाषा सुपारि दियो. पछि केटिका वावु आमा माइतिका र केटाका सल्लाहले विहा नगरि रहयाका र. राजकाज निमित्त ताढा देस पर्देस जानु. पर्दा रहयाका वाहेक् लाषा लायाकी केटि वर्ष दिन भित्रमा विहा गर्णा आयन भन्या तेस्को लाषा फिर्ता हुंछ. त्यो केटि माइटिले षुस पऱ्याका अर्कै लाइ विहा गरि दिनु. षत लाग्दैन. वर्ष दिन नाघ्यापछि लाषा फिर्तालिवस्ता पनि नलेवस्ता पनि केटिमा. कर लाउन पाउदैन. वर्ष दिन नाघ्या पछि मैले लाषा लाया कि हो भनि केटिलाइ पक्रयो वा फिरा दगर्न आयो भन्या जौन जात कि स्वास्नि हो. उसै जातलाइ लेष्याका विहा षर्चको ४ षंडको १ षंडका दरले दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

३१. नेवार जातका लाषा लायाको केटो छाऱ्या रोग माहारोगि लुलो कुजो लाठो अंधो नपुँसक् र भात नचलन्या रहेछ र केटिका वावु आमा दाज्यू भाइले केटि दिंन तेरो लाषा फिर्ता गरि ले भन्यो भन्या. लाषा फिर्ता लिया पनि नलिया पनि केटिमा. कर लाग्दैन. माइतिले जात मिल्दा अर्कै केटालाइ विहा गरि दिन हुंछ. षतवाट लाग्दैन.

३२. नेवार जातले आफुले लाषा सुपारि लाया कि केटि माथि आर्की विहा गऱ्यो वा अरू स्वास्नि घरमा ल्यायो भन्या. केटिका वावु आमा. माइतिले अर्कैलाइ विहा गरि दिनु. हुंछ. लाषा फिर्ता गर्नु पर्दैन. पछि तेसैले लाषा लाया कि हो भनि समाउन आयो भन्या उसै जातलाइ लेष्याको विहा षर्चका ४ षंडको १ षंड दंड गरि केटी समाउन पाउदैनस्भनि ठोकि दिनु.

३३. नेवार जात्का लाषा सुपारि लाया कि केटि. विहा हुन नपाउदै अर्काले करणि गरेछ भन्या तेस्तालाइ. लाषा सुपारिको विगो भराइ. विहा षर्चको आधि का दरले दंड गर्नु.

३४. नेवार जात्का छोरि जातका रित वमोजिम् विहा गरि दिया कि लोग्न्याका घर नवसि पाचुके नगरि माइत वस्या कि केटि. आमा वावु माइति गैह्रले अर्का केटाको लाषा सुपारि षाइ छोरि वैन्हि दियेछ भन्या. माइतिले दिकन लैजान्या लोग्न्यालाइ षतवाट लाग्दैन. एकालाइ दिया कि केटि. पाचुके नगरि अर्काको लाषा षाइ छोरि वैन्हि दिन्या माइतिवाट अघिल्लाको अैन वमोजिम् को विहा षर्च भराइ उसै विगा वमोजिम् दंड गर्नु.

३५. नेवार जात्का कंन्या र. विधवा राजि षुसिसित सुपारि फर्काइ वस्याकाहरूलाइ भात नचलन्या. जात्काले वावु आमाले थाहा नपाइ चोरि करणि गऱ्याको रहेछ र. विहा गरि नदिदैमा मैले करणि गऱ्याको छ. भनि भंन आयो भन्या. भात्मा वोराया वावत् उसै जात्का विहा षर्चका ३ षंडको २ षंड दंड गर्नु. केटिमा लाभ्याको कर लाग्दैन. गलंज्या भयाको रहेनछ भन्या केटि र. भताहालाइ धर्माधिकारले भात्का पतिया दिनु. केटिको गलंज्या भयाको भया केटिले भात्को पतिया पाउदिन. लाभ्रेका जात्मा मिल्छे. विहा गरि सक्या पछि भंन आउन्या भात नचलन्याकम् जात्का लाभ्यालाइ विहा गर्न्याले स्वास्नि लै गयो भन्या. भात्मा वोराया वावत्. जौनजात्का स्वास्नि हो. उसै जातका विहा षर्च वमोजिम् दंड मात्र गर्नु. विहा षर्च पाउदैन. स्वास्नि राषतिन भनि छोडयो भन्या उसै अैन वमोजिम् विहा षर्च भराइ विगा वमोजिम् दंड गरि छोरि वावु आमाका सपुर्त गरि दिनु.

३६. नेवा जात्का कंन्या र विधवा राजि षुसि संग सुपारि फर्काइ वस्याकाहरूमा भात मिल्दा जातले आमा वावुले थाहा नपाइ चोरि करणि गऱ्याको रहेछ वावु आमाले अनेत्र विहा गरि दिन लाग्दा लाभ्याले मसित करणि भयाको छ भनि. विहानउदैमा भन्न आयो. र स्वास्निले पनि यो कुरो हो भनि कुरो मिल्यो भन्या. लाभ्यालाइ षतवाट लाग्दैन. केटि वावु आमाले तेहि लाभ्या लाइ. दिंछु भन्या पनि चोरि करणि गर्न्या हो तेस्लाइ दिंन भन्या पनि. वावु आमाको षुसि हुंछ. करणि नलि उसै अत्व लगाइ भन्न आयाको रहेछ भन्या. तेस्ता झुटा लाभ्यालाइ जौन जातका

स्वास्निको करणि गऱ्याको छु भन्न आयाको छ. उसै जातकालाइ लेष्याका विहा षर्च वमोजिम् दंड गर्नु.

३७. नेवार जात्का कंन्या विधवाको राजि. षुसि सित सुपारि फर्काइ वस्याका स्वास्निलाइ जात मिल्दाले वावु आमाले थाहा नपाइ चोरि करणि गऱ्याको रहेछ र जात मिल्दा अर्केको लाषा लि विहा गरि दिया पछि लाभ्याले यो स्वास्निको त मैले अघि करणि गऱ्याको छ भन्यो वा. विहा गरि. लैजान्या लोग्न्याका घरवाट ल्याया भन्या तस स्वास्निलाइ र लाभ्यालाइ जोरि वुज्दा करणि ठहरेन भन्या. तेस्ता झुट्टा लाभ्यालाइ विहा षर्च वमोजिम् दंड गर्नु. करणि ठहऱ्यो र. विहा गर्न्या लोग्न्याले स्वास्नि छाडचो भन्या लाभ्या वाट अैन वमोजिम्को विहा षर्च भराइ. उसै विगा वमोजिम् दंड गर्नु. केटि माइटिका सपुर्त गरि दिनु. विहा गर्न्या लोग्न्याले. अर्कासित विग्ऱ्या कि हो तापनि. म लैजांछु भनि स्वास्नि लै गयो भन्या विहा षर्च भराउनु पर्दैन. उसै जात्का विहा षर्चका अैनको आधिका दरले दंड गर्नु.

३८. नेवार जात्का कंन्या विधवा र लोग्न्यको सुपारि फर्काइ माइत वस्याका स्वास्नि अघि अरू लाभ्यासित विग्ऱ्या कि रहिछ. विग्ऱ्याको कुरो वावु आमा माइतिले थाहा पायाको रहेछ वा करणि लिन्या लाभ्याले हवस् तेहि केटिले हवस्. करणि भयाको जाहेर गऱ्याको रहेछ र. जात भात मिल्दा अर्का कसैले तेहि केटि माग्न आउदा फलानसित विग्ऱ्या कि छ भनि. माइतिले भन्याको रहेछ वा. विग्ऱ्याको थाहा पाइ विहा गरि लै गयेछ. भन्या माइतिलाइ पनि अघि करणि गर्न्या लाभ्यालाइ पनि दंड पर्दैन. अघि अर्कासित विग्ऱ्याको कुरो दवाइ पछि माग्न आउंन्याको लाषा षाई विहा गरि दियेछ विहा गर्न्या लोग्न्याले केटि लैजांन भनि छोड्यो भन्या. माइतिवाट अैन वमोजिमम्को विहा षर्च भराइ. उस्को आधि दंड गर्नु केटि माइतिको सपुर्त गरि दिनु विहा गर्न्याले अघि अर्कासित विग्ऱ्या कि हो तापनि म लैजाछु. भनि केटि लग्यो भन्या. विहा षर्च भराउनु पर्दैन. माइतिलाइ दंड पनि पर्दैन.

३९. नेवार जातका कंन्या विधवा स्वास्निको पैल्हे एकाको लाषा सुपारि षायाको छ. विहा हुन पाउदैमा उसै स्वास्निको अर्काको लाषा लियेछ भन्या दोहोरा लाषा लिन्या माइतिलाइ पछिल्लाको लाषाको विगो फिर्ता गराइ उसै जातका विहा षर्चका ३ षंडको १ षंड दंड गर्नु. केटि अघिल्ला लाषा लाउन्या कि हुंछे अघिल्लाले लाषा लायाको जानि जानि पछिल्लाले लाषा

लायाको ठहऱ्या तेश्लाइ पनि विहा षर्चका ३ षंडको १ षंड दंड गर्नु. विहा गरि सक्याको भया केटि विहा गर्न्या कि हुंछे दोहोरा लाषा षाइ विहा गरि दिन्या माइतिलाइ उसै जात्का विहा षर्चको आधि दंड गर्नु. अघिल्लाले लाषा लायाको जानि जानि विहा गर्न्या केटालाइ पनि लाषाको विगो अघिल्लालाइ दिलाइ विहा षर्चको आधि दंड गर्नु. अघिल्लाले लाषा लायाको थाहा पायाको रहेनछ भन्या पछिल्लालाइ दंड पर्दैन दोहोरो लाषा षान्यालाइ मात्र दंड हुंछ.

४०. नेवार जातका स्वास्निको आफ्ना लोग्न्या तर्फवाट जाय जन्म भया पछि गलंज्या ठहर्छ तेस्ति स्वास्नि भात नमिल्न्या जातसित करणिमा विग्रि भन्या जात भातमा आउदिन.

४१. नेवार जात्का वावु आमाले यौटासंग लाषा लियेछ. दाज्यू भाइले एकासंग लाषा लियेछ दाज्यू भाइले लाषा लियाको अघि हवस्ता पनि पछि हवस्ता पनि फिर्ता गराइ आमा वावुले लियाको लाषा सदर गराइ दिनु. वावु आमाले लाषा लियाको चाल पाइ दाज्यू भाइले लियाको ठहऱ्या उसै जात्का विहा षर्चका १२ षंडको १ षंड दंड गर्नु.

४२. मिसा षतमा दंड हुन्या नेवार जात गैह्नका स्वास्निलाइ एकाले करणि गऱ्याको जाहेर नभै तेसै स्वास्निको अरू २।३ जनाले करणि गऱ्याको रहेछ भन्या पैल्हे करणि लिन्यालाइ अैन वमोजिम् विहा षर्च भराइ दंड गर्नु जो पर्छ दोश्रो तेश्रो परि करणि गर्न्यालाइ गुप्ति वेस्याको करणि गर्न्यालाइ लेष्याका अैन वमोजिम दंड गर्नु.

४३. षतवाटमा अघि देषि मासियाका अैन मै अव उप्रान्त ज्यू नमासनु भंन्या भयाका नेवार जातले षतवाट गऱ्यामा जवरजस्ति वा राजिषुसिले करणि गऱ्यामा ज्यू मासदा वाहेक् घटि वढि जात्मा करणि गर्न्या मासिन्या जातका अैन वमोजिम् गर्नु. अरू षतवाट गऱ्यामा.पनि मासिन्या जातलाइ लेष्याका अैन वमोजिम्. दंड सजाय कैद गर्नु. ज्यूमासिन्या षत गऱ्या २ वर्ष कैद गर्नु. म्यादका रूपैया दिया लिनु. अैनले नमासनु भंन्या भयाक हुनाले ज्यू मासिदैन. नमासनु.

४४. कसाहि कुसल्या कुलुडोम गैह्न पानि नचलन्यामा छोया छिटो हालनु नपर्न्या जातका कंन्या विधवा विहा नगरि घरमा ल्याइ भात् स्मेत् षायाका स्वास्निको छिटो हालनु नपर्न्यै र इनै जात कसैले करणि गरेछ भन्या. १० रूपैया दंड मात्रै गर्नु. विहा षर्च भराउनु. पर्दैन. दंडका रूपैया नतिऱ्या मैन्हाका ५ रूपैयाका दर्ले कैद गर्नु.

# घटी वढि जातको उपाध्याको

## राजिषुसिले आफु मिल्दा र. आफुभन्दा भन्दा घटि वढि जातमा. करणि गर्न्याको

## अैन तपसिल्

१. उपाध्या व्राम्हणले. उपाध्याका अैनमा सजाय लेषियाका. हाडनाता वाहेकमा र. अरू कुटुम्वका. ११ वर्ष नाघ्याका कंन्या विधवाको. राजिषुसिले. करणि गरि. भातमा वोऱ्याको रहेनछ भन्या. षत वात लाग्दैन. आफुले उस्का हातको. भात षायाको रहेनछ. स्वास्नि तर्फवाट भातमा वोऱ्याको रहेछ. भन्या १०० रूपैया दंड गर्नु जात जादैन. करणि गरि. आफुले भात षाइ भताहालाइ स्मेत् वोऱ्या छ भन्या १०० रूपैया दंड गरि. विग्र्या कि स्वास्निको जौन जात हुंछ उहि जातमा मिलाइ. भोरमा पर्न्यालाइ पतिया गराइ दिनु.

२. उपाध्या व्राम्हणले. रजपुत असल जैसि. तागाधारि क्षेत्रि जातका अैनमा सजाय लेषियाका हाडनाता वाहेक् अरू सनयेमा र. नात नलाग्न्या कुटुम्वका ११ वर्ष नाघ्याका कंन्या विधवाको. राजिषुसिले. करणि गरि. भातमा वोऱ्याको रहेनछ भन्या षतवात लाग्दैन. स्वास्नि तर्फवाट भातमा वोऱ्याको रहेछ भन्या ३० रूपैया दंड गर्नु स्वास्निका हातको. भोरमा षान्यालाइ. पतिया गराइ दिनु. करणि गरि स्वास्निका हातको खायेछ भन्या उसै जातमा मिलाइ दिनु. आफुले भात षाइ. आफ्ना हातवाट भताहालाइ. भातमा वोऱ्याको भया १०० रूपैया दंड गरि. उसै जातमा मिलाइ दिनु.

३. उपाध्या व्राम्हणले देवभाजु तेह्रौत्या. भट्ट महट्टा नागर गुज्राति माहाराष्ट्र तैलंगि द्राविण मधिस्या. देसि व्राम्हण र. विराणा राजका. अरू गैह्र व्राम्हण. का ११ वर्ष नाघ्याका कंन्या विधवाको राजिषुसिले करणि गरि. भातमा वोऱ्याको रहेनछ भन्या षत वात लाग्दैन. करणि गरी. भातमा स्मेत्. वोऱ्याको भया ३० रूपैया दंड गर्नु. भोरमा पर्न्यालाइ. पतिया गराइ दिनु.

४. उपाध्या व्राम्हणले दसनाम जोगि. जंगम सन्यासि सेवडा वैरागि कानफट्टा. नानक् उदासी वघर. गैह्र भेसधारि जातका र. ३ लिंग देषिका जैसि. डोटयाल. जैसि जुमलि जैसि. जात

गैह्रका ११ वर्ष नाघ्याका कंन्या विधवाको राजि षुसिले करणि गरि. भातमा वोरायाको नभया षतवातलाग्दैन. करणि गरि भातमा वोऱ्यो भनि. कराउन आया २० रूपैया दंड गरि. भोरमा षान्या. लाइ. स्वास्नीका नाउको पतिया गराइ दिनु.

५. उपाध्या व्राम्हणले नमासिन्या. मतवाली. जात्का ११ वर्ष नाघ्याका कंन्या विधवाको राजिषुसिले करणि गर्न्यालाइ षतवात लाग्दैन. स्वास्नितर्फवाट भातमा वोरेछ भन्या ५ रूपैया दंड गरि. स्वास्निका नाउको. पतिया दिनु.

६. उपाध्या व्राम्हणले मासिन्या मतवालि जात्का ११ वर्ष नाघ्याका कंन्या विधवाको राजीषुसिले. करणि गऱ्या षतवात लाग्दैन.

७. उपाध्या व्राम्हणका नाता नलाग्न्या कुटुम्वका ११ वर्षदेषि माथिका कंन्यालाइ राजिषुसिले करणि. गर्न्या उपाध्या त्यो कंन्या तेश्ले राषनु पर्छ एस्ताको संतान्. असल् जैसि हुन्छन् विवाहिता स्वास्नि र. विवाहिता पट्टिका सन्तान्. का सरहको अंस पनि पाउछन्.

# घटी वढी जातमा करणी गर्न्या रजपूतको

१. रजपुत जातले उपाध्याका ११ वर्ष नाघ्याका कंन्या विधवा को राजि षुसिले करणि गरि भातमा वोर्‍याको रहेनछ भन्या २ वर्ष कैद गर्नु भात स्मेत वोरेछ भन्या ४ वर्ष कैद गर्नु. म्यादको डवल दिया लि. छाडिदिनु. भोरमा पर्न्यालाइ पतिया गराइ दिनु.

२. रजपुत जातले आफु मिल्दा रजपुतका अैनमा सजाय लेषियाका. हाडनाता वाहेकमा र. अरू कुटुम्वका ११ वर्ष नाघ्याका कंन्या विधवाको राजि षुसिले करणि गरि. भातमा वोर्‍याको रहेनछ भन्या षतवात लाग्दैन. करणि गरि. स्वास्नि तर्फवाट भातमा वोर्‍याको रहेछ भन्या ८० रूपैया दंडगर्नु जात जादै. करणि गरि. आफुले भात षाइ अरू भताहालाइ स्मेत् वोरेछभन्या ८० रूपैया दंड गरि विग्र्याकि स्वास्निको जौन जात हुन्छ. उसै जातमा मिलाइ दिनु.

३. रजपुतले असल जैसि जातका ११ वर्ष नाघ्याका कंन्या विधवाको राजि षुसिले. करणि गरि भातमा वोर्‍याको रहेनछ भन्या. ४० रूपैया दंडगर्नु भातमा वोर्‍याको रहेछ भन्या ६० रूपैया दंड गर्नु. भोरमा पर्न्यालाइ पतिया गराइ दिनु.

४. रजपुत जातले तागाधारि क्षत्रिय जात गैह्रका अैनमा सजाय लेषियाका हाडनाता वाहेक अरू सनयमा र नाता नलाग्न्या कुटुम्वका ११ वर्ष नाघ्याका कंन्या विधवाको. राजि षुसिले करणि गरि भात्मा वोर्‍याको रहेनछ भन्या षतवात लाग्दैन. स्वास्नितर्फवाट भातमा वोर्‍याको भया ३० रूपैया दंड गर्नु स्वास्निका हातको भोरमा षान्यालाइ पतिया गराइ दिनु. करणि गरि. उस्का हातको भात षायेछ भन्या उसै स्वास्नि का जातमा मिलाइ दिनु.

५. रजपुतले देवभाजु. तेह्लैत्या. भट्ट महट्टा नागर गुज्राति माहाराष्ट्र तैलंगि द्राविण मधिसे देसि व्राम्हण र विराणा राजका अरू गैह्र व्राम्हणका ११ वर्ष नाघ्याका कंन्या विधवा. को राजि षुसिले करणि गरि. भातमा वोर्‍याको रहेनछ भन्या षतवात लाग्दैन. करणि गरि भात मा स्मेत वोर्‍याको भया ३० रूपैया दंड गर्नु भोरमा षान्यालाइ पतिया गराइ दिनु.

६. रजपुतले दस नाम जोगि जंगम सन्यासी सेवडा वैरागि कानफट्टा. नानक उदासि वोघर गैह्र भेस धारि जातका र ३ लिंग देषि का जैसि डोटयाल जैसि जुमलि जैसि. जात गैह्रका ११ वर्ष नाघ्याका कंन्या विधवाको राजि षुसि. ले करणि गरि भातमा वोऱ्याको नभया षत लाग्दैन. करणि गरि. भातमा वोऱ्यो भनि कराउन आया २० रूपैया दंड गरि भोरमा षान्यालाइ स्वास्निका नाउको. पतिया गराइ दिनु.

७. रजपुत जातले नमासिन्या मतवालि जातका ११ वर्ष नाघ्याका कंन्या विधवाको राजि षुसिले करणि गरि भातमा वोऱ्याको नभया. षत वात लाग्दैन. करणि गरि. स्वास्नि तर्फवाट. भातमा वोऱ्या. ५ रूपैया दंड गरि. स्वास्निका नाउको पतिया गराइ दिनु.

८. रजपुत जातले मासिन्या मतवालि जातका ११ वर्ष नाघ्याका कंन्या विधवा को राजि षुसिले करणि गऱ्यो भन्या षत. वात लाग्दैन.

९. जैसि जातका र. रजपुत. गैह्रका ११ वर्ष देषि माथिका कंन्यामा. नाता केहि नलाग्न्या लाइ राजि षुसि ले करणि गर्न्या. जैसि रजपुत गैह्र.जो हो तेसलाइ. भातमा कर लाग्दैन. त्यो केटिलाइ उसै जात्मा. मिलाइदिनु. केटि तेसैले राषनु पर्छ तिन्बाट जन्म्याका सन्तान्मा. रजपुत. कि कंन्या. मा जैसिवाट जन्म्याका सन्तान्. हमाल हुन्छन्. जैसिका कंन्यामा रजपुत. वावुवाट जन्म्या का सन्तान् पनि. हमाल हुन्छन्. गोत्र वावुको हुन्छ. भात चल्दैन अंस पनि. विवाहिता वमोजिम् पाउछन्.

# ऐजन्मा करणि गर्न्या जैसिजातको.

१. असल जैसि जातले उपाध्याका अैन मा सजाय लेषियाका हाड नाता वाहेक अरू सनहेमा र. नाता नलाग्न्या कुटुम्वका ११ वर्ष नाघ्याका. कंन्या विधवाको राजि षुसिले करणि गरि. भातमा वोऱ्याको रहेनछ भन्या २ वर्ष कैद गर्नु. भातमा स्मेत् वोरेछ भन्या ४ वर्ष कैद गर्नु. म्यादको डवल दिया लि छाडि दिनु. भोरमा पर्न्यालाइ पनि पतिया गराइ दिनु.

२. असल जैसि जातले. रजपुत जात्का ११ वर्ष नाघ्याका कंन्या विधवाको राजिषुसिले करणि गरि. भातमा वोऱ्याको रहेनछ भन्या ४० रूपैया दंड गर्नु स्वास्नि तर्फवाट अरूलाइ वोऱ्याको रहेछ भन्या ६० रूपैया दंड गर्नु स्वास्निका हातको भोरमा षान्या लाइ. पतिया गराइ दिनु.

३. असल जैसि जातले. आफु मिल्दा जैसि जात्का अैनमा सजाये लेषियाका हाडनाता वाहेकमा र. अरू कुटुम्वका ११ वर्ष नाघ्याका कंन्या विधवाको राजि षुसिले. करणि गरी भात्मा वोऱ्याको रहेनछ भन्या. षत वात लाग्दैन. करणि गरि स्वास्नि तर्फवाट भातमा वोरेछ भन्या ८० रूपैया दंड गर्नु. जात जादैन आफुले भात षाइ अरूलाइ स्मेत् वोरेछ भन्या ८० रूपैया. दंड गरि. विग्न्याकि स्वास्निको जौना जात हुन्छ उसै जात्मा मिलाइ दिनु.

४. असल जैसि जातले तागाधारि क्षत्रिय जातका ११ वर्ष नाघ्याका कंन्या विधवाको करणि राजि षुसिले गरि. भातमा वोऱ्याको रहेनछ भन्या षत वात लाग्दैन. करणि गरी स्वास्नि तर्फवाट भातमा वोऱ्याकोरहेछ भन्या. २५ रूपैया दंड गर्नु. स्वास्नी का हातको भोरमा षान्या लाइ पतिया गराइदिनु.

५. असल जैसि जातले देवभाजु तेह्लौत्या भट्ट महट्टा नागर गुज्राति महाराष्ट्र तैलंगि द्राविण मधिस्या. देसि व्राम्हण र. विराणा राजका. अरू गैह्र व्राम्हण का ११ वर्ष नाघ्याका कंन्या विधवाको. राजि षुसिले करणि गरि. भातमा वोऱ्याको रहेनछ. भन्या षत लाग्दैन करणि गरि. भातमा स्मेत् वोऱ्याको भया ३० रूपैया दंड गर्नु. भोरमा षान्यालाइ पतिया गराइ दिनु.

६. असल जैसि जातले दस नाम जोगी जंगम सन्यासी सेवडा वैरागि कानफट्टा नानक उदासी अघोर गैह्र भेष धारिका जात र. ३ लिंग देषि. का जैसि डोटचाल जैसि जुम्लि जैसि जात गैह्रका ११ वर्ष नाघ्याका. कंन्या विधवाको. राजि षुसिले. करणि गरि भातमा वोऱ्याको नभया षत वात लाग्दैन करणि गरि भातमा वोऱ्यो भनि. कराउन आया २० रूपैया दंड गरि. भोरमा षान्या लाइ. स्वास्निका नाउको पतिया गराइदिनु.

७. असल जैसि जातले नमासिन्या मतवालि जात्का ११ वर्ष नाघ्याका कंन्या विधवाको राजि षुसिले करणि गर्न्यालाइ षतवात लाग्दैन. भातमा वोऱ्या छ भन्या ५ रूपैया दंड गरि. स्वास्निका नाउको पतिया गराइ दिनु.

८. असल जैसि जातले. मासिन्या मतवालि जातका ११ वर्ष नाघ्याका कंन्या विधवाको करणि राजि षुसिले गऱ्या षतवात लाग्दैन.

# घटि बढि जातमा करणि गर्न्या परवत्या तागाधारिको.

१. पर्वत्या क्षत्रिय जात र. अरू पर्वत्या तागाधारि. जातले उपाध्या. असल जैसि. रजपुतका ११ वर्ष नाघ्याका कंन्या विधवाको राजि षुसिले करणि गरि. भातमा वोऱ्याको रहेनछ भन्या २ वर्ष कैद गर्नु. भातमा स्मेत् वोरेछ भन्या ४ वर्ष कैद गर्नु. म्यादको डवल दिया लि छाडिदिनु. भोरमा पर्न्यालाइ. पतिया गराइ दिनु.

२. पर्वत्या क्षत्रिय तागाधारि जात गैह्रले देवभाजु तेह्नौत्या भट्ट महट्टा. नागर गुज्राति. माहाराष्ट्र तैलंगि द्राविण मधिस्या देसि व्राम्हण का र. विराना राजका अरू गैह्र व्राम्हणका ११ वर्ष नाघ्याका कंन्या विधवाको राजि षुसि. ले करणि गरि. भातमा वोऱ्याको रहेनछ भन्या ८० रूपैया दंड गर्नु भातमा स्मेत्. वोऱ्याछ भन्या १२० रूपैया दंड गरी आफुले उस्का हात को.को. भात षायेछ भन्या विग्याकि स्वास्नि कौ जौन जात हुन्छ उसै जात्मा मिलाइ दिनु.

३. पर्वत्या क्षत्रिय तागाधारि जात गैह्रले दस नाम जोगी जंगम सन्यासी सेवडा वैरागि कानफट्टा नानक उदसी वघर गैह्र भेष धारि जातका र ३ लिंगदेषि का जैसि डोटचाल जैसि जुमलि जैसि. जात गैह्रका ११ वर्ष नाघ्याका कंन्या विधवाको राजि षुसिले करणि गरि भातमा वोऱ्याको नभया षतवात लाग्दैन. करणि गरि. भातमा वोऱ्यो भनि. कराउन आया २० रूपैया दंड गरि भोरमा षान्यालाइ. पतिया गराइ दिनु.

४. पर्वत्या क्षत्रिय तागाधारि जातले. नमासिन्या मतवाली जातका ११ वर्ष नाघ्याका कंन्या विधवाको राजि षुसिले करणि गर्न्यालाइ षतवात लाग्दैन. करणि गरि. स्वास्नि तर्फवाट भातमा वोरेछ भन्या ५ रूपैया दंड गरि. विग्ऱ्याकी स्वास्निका नाउको पतिया गराइ दिनु.

५. पर्वत्या क्षत्रिय तागाधारि जात मासीन्या मतवालि जातका ११ वर्ष नाघ्याका कंन्या विधवाको राजि षुसिले करणि गऱ्या षतवात लाग्दैन.

६. उपाध्या व्राम्हण बाहेक अरूका ११ वर्ष देषि माथिका कंन्या केटि आफ्ना मनोमान्ले. जात मिल्दा. भात चल्याकामा जोसित विग्र्या का छन् उसै सित वस्नु पर्छ करणि लिन्या लोग्न्या लाइ. अदालत ठाना अमालवाट तेसै केटिका हातको. भात षुवाइ विवाहिताका सरहको अंस दिलाइ. तेसै सित मिलाइ दिनु.

७. भाट जातले आफु भन्दा उपल्ला जात आफु मिल्दा जात आफु भन्दा घटि जातका ११ वर्ष नाघ्याका. कंन्या विधवाको करणि गऱ्या. तागाधारि क्षेत्रि य जातका अैन वमोजिम् दंड कैद सजाय गर्नु. इनै भाट जातका ११ वर्ष नाघ्या का कंन्या विधवाको अरू कसैले. करणि गऱ्यो भन्या पनि करणि गर्न्यालाइ. तागाधारि क्षेत्रिय जातका कंन्या विधवाको कर्णि गर्न्याका अैन वमोजिम्. दंड. सजाय कैद गर्नु.

८. पर्वत्या तागाधारि जातले राजषत को शजाय लेषियाका हाड नाता वाहेक. अरू सनहेमा र आफु मिल्दा तागाधारि जातका ११ वर्ष नाघ्याका कंन्या विधवाको राजि षुसिले करणि गरेछ भातमा वोऱ्योको रहेनछ भन्या षतवात लाग्दैन. करणि गरि आफुले भात षायाको रहेनछ. स्वास्नि तर्फवाट वोरायेछ भन्या ६० रूपैया दंड गर्नु. जात जादैन. कर्णि गरि आफुले भात षाइ. अरू लाइ स्मेत् भातमा वोरेछ भन्या ६० रूपैया दंड गरि विग्र्येकि स्वास्निको जौन जात हुन्छ उसै जात्मा मिलाइदिनु. भोरमा पऱ्यु भंनि कराउन आया भन्या. भताहालाइ. तेसै विग्र्याकि स्वास्निका नाउको. भोरको पतिया. गराइदिनु.

# घटि बढि जातमा करणि गर्न्या देवाभाजु

# गैन्हको

१. देवभाजु तेह्लौत्या भट्ट मर्हट्टा नागर गुज्राति महाराष्ट्र तैरंगि द्राविण. मधिस्या देसि व्राम्हण र विराना राजका. अरू गैह्न व्राम्हण जातले उपाध्या जैसि. रजपुतका ११ वर्ष नाघ्याका कंन्या विधवाको राजि षुसिले करणि गरि. भातमा वोऱ्याको रहेनछ भन्या २ वर्ष कैद गर्नु भातमा स्मेत् वोरेछ भन्या. ४ वर्ष कैद गर्नु. म्यादको डवल दिया लि छाडि दिनु. भोरमा पर्न्या लाइ. पतिया गराइ दिनु.

२. देवभाजु तेह्लौत्या. भट्ट मर्हट्टा नागर गुज्राति माहाराष्ट्र. तैलंगि द्राविण मधिस्या देसि व्राम्हण. र विराना राजका अरू गैह्न व्राम्हण जातले क्षेत्री तागाधारि जातका ११ वर्ष नाघ्याका कंन्या विधवाको राजि षुसिले करणि गरि. भातमा वोऱ्याको रहेनछ भन्या. षतवात लाग्दैन. आफुले भात षाइ अरू भताहालाइ स्मेत्. वोरेछ भन्या ५० रूपैया दंड गरि. विग्र्याकि स्वास्निको जौन जात हुन्छ. उसै जातमा मिलाइ दिनु.

३. देवभाजु तेह्लौत्या भट्ट मर्हट्टा नागर गुज्राति माहाराष्ट्र तैलंगि. द्राविण मधिस्या देसि व्राम्हण र. विराना राजका अरू गैह्न व्राम्हण जातले आफु मिल्दा जातको र इनै इनै जात का ११ वर्ष नाघ्याका कंन्या विधवाको. राजि षुसि. ले करणि गरि. भातमा वोऱ्याको रहेनछ भन्या षतवात लाग्दैन आफुले भात षाइ अरूलाइ स्मेत वोरेछ भन्या ६० रूपैया दंड गरी. विग्र्याकि स्वास्निको जौन जात हुन्छ उसै जातमा मिलाइदिनु.

४. देवभाजु. तेह्लौत्या भट्ट मर्हट्टा नागर गुज्राति महाराष्ट्र तैलंगि द्राविण मधिस्या देसि व्राम्हण. र विराना राजका. अरू गैह्न व्राम्हण जातले. नमासिन्या मतवालि जातका ११ वर्ष नाघ्याका कंन्या विधवाको करणि राजि षुसिले गर्न्यालाइ षतवात लाग्दैन. करणि गरि. स्वास्नि तर्फवाट भातमा वोरेछ भन्या ५ रूपैया दंड गरि. विग्र्याकि स्वास्निका नाउको पतिया गराइ दिनु.

५. देवभाजु तेह्लौत्या भट्ट मर्हट्टा नागर गुज्राति माहाराष्ट्र तैलंगि द्राविण मधिस्या देसि व्राम्हण र. विराना राजका अरू गैह्न व्राम्हण जातले. मासिन्या मतवालि जातका ११ वर्ष नाघ्याका कंन्या विधवाको राजि. षुसिले करणि गऱ्या षतवात लाग्दैन.

# ऐ करणि गर्न्या दस नाम गैऱ्हको

१. दसनाम. जोगि जंगम सन्यासि. सेवडा वैरागि कानफट्टा नानक उदासी वघर गैह्र भेष धारि. ३ लिंग देषि जैसिका. डोटचाल. जैसि जुमलि जैसि. जात गैह्रले. उपाध्या. रजपुत जैसि क्षत्री तागाधारि जात गैह्रका ११ वर्ष नाघ्याका कंन्या विधवाको राजि षुसिले करणि गरि. भातमा वोऱ्याको रहेनछ भन्या २॥ वर्ष कैद गर्नु भातमा स्मेत् वोरेछ भन्या ५ वर्ष कैद गर्नु म्यादको डवल दिया लिनु. भोरमा पर्न्यालाइ पतिया गराइदिनु.

२. दसनाम जोगि जंगम सन्यासि सेवडा वैरागि कानफट्टा नानक उदासि वघर गैह्र भेष धारि. ३ लिंग देषि. का जैसि डोटचाल जैसि जुमलि जैसि. जात गैह्रले देवभाजु गैह्र तेह्रौत्या भट्ट मर्हट्टा नागर गुज्राति माहाराष्ट्र तैलंगि. द्राविण मधिस्या देसि व्राम्हण र. विराना राजका अरू गैह्र व्राम्हण जातका ११ वर्ष नाघ्याका. कंन्या विधवाको. राजि षुसिले करणि गरि. भातमा वोऱ्याको रहेनछ भन्या. २॥ वर्ष कैद गर्नु भातमा स्मेत वोरेछ भन्या ५ वर्ष कैद गर्नु म्यादको डवल दिया लिनु. भोरमा पर्न्यालाइ. पतिया गराइ दिनु.

३. दस नाम जोगि जंगम. सन्यासि सेवडा वैरागि कानफट्टा नानक. उदासि वघर. गैह्र भेष धारि ३ लिंग देषि. का जैसि डोटचाल जैसि. जुमलि जैसि. जात गैह्रले आफु मिल्दा जात्का र. इनै इनै जातका ११ वर्ष नाघ्याका कंन्या विधवाको राजि षुसिले करणि गरि भातमा वोऱ्याको रहेनछ भन्या षतवात लाग्दैन. आफुले भात षाइ अरूलाइ स्मेत् वोरेछ भन्या २० रूपैया दंड गरि विग्र्याकि स्वास्निको जौन जात हुन्छ. उहि जात्मा मिलाइ दीनु. भोरमा षान्यालाइ पतिया गराइदिनु.

४. दस नाम जोगि जंगम. सन्यासि. सेवडा वैरागि कानफट्टा नानक देसि वघर गैह्र भेष धारि ३ लिंग देषिका जैसि डोटचाल जैसि. जुमलि जैसि. जात गैह्रले नमासिन्या मतवाली जात गैह्रका ११ वर्ष नाघ्याका कंन्या विधवाको राजि षुसिले करणि गरि. भातमा वोऱ्याको रहेनछ भन्या षतवात लाग्दैन. आफुले भात षाइ अरू भताहालाइ स्मेत्. वोरेछ भन्या २० रूपैया दंड गरि. विग्र्याकि स्वास्निको जौन जात हुन्छ उहि जात्मा मिलाइदिनु. भोरमा षान्यालाइ. पतिया गराइ दिनु.

५. दसनाम जोगि जंगम सन्यासिसेवडा वैरागि. कानफट्टा. नानक उदासी वघर गैह्र भेष धारि ३ लिंग देषिका जैसि. डोटयाल जैसि. जुमलि जैसि जात गैह्रले मासिन्या मतवालि जातका ११ वर्ष नाघ्याका कंन्या विधवाको राजि षुसिले करणि गरि भातमा वोऱ्याको रहेनछ भन्या षतवात लाग्दैन. भात्मा पारि दियो भनि. कराउन आया १० रूपैया दंड गर्नु.

६. उपाध्या जैसि व्राम्हणले दस नाम जोगि. जंगम सन्यासि सेवडा कानफट्टा वैरागि गैह्रका कंन्या विधवा ल्याइ. तिनैवाट जन्म्याका सन्तान्. जौन भेस कि स्वास्नि राषि जन्म्याका हुन्. उसै जातका भाट हुन्छन्. जनै पनि पाउछन्.

# ऐ. करणि गर्न्या नमासिन्याको

१. नमासीन्या. मतवालि जातले. उपाध्या असल जैसि रजपुत क्षत्रि तागाधारि जात गैह्रका ११ वर्ष नाघ्याका कंन्या विधवाको राजि षुसिले करणि गरि. भातमा वोऱ्याको रहेनछ भन्या ३ वर्ष कैद गर्नु. भातमा स्मेत वोरेछ भन्या ६ वर्ष कैद गर्नु म्यादको डवल दिया लिनू भोरमा पर्न्यालाइ पतिया गराइ दिनु.

२. नमासिन्या मतवालि जातले देवभाजु तेह्रौत्या. भट्ट महट्टा नागर गुज्राति माहाराष्ट्र तैलंगि द्राविण मधिस्या देसि व्राम्हण र विराना राजका अरू गैह्र व्राम्हणका ११ वर्ष नाघ्याका कंन्या विधवाको करणि राजि षुसिले गरि भातमा वोऱ्याको रहेनछ भन्या ३ वर्ष. भात्मा स्मेत्. वोरेछ भन्या ६ वर्ष कैद गर्नु म्यादको डवल दिया लिनु. भोरमा षान्यालाइ पतिया गराइ दिनु.

३. नमासिन्या मतवालि जातले दस नाम जोगि जंगम सन्यासि सेवडा वैरागि कानफट्टा नानक. उदासि वघर गैह्र भेषधारि. जातका र ३ लिंग देषि का जैसि. डोटचाल जैसि जुमलि जैसि जात गैह्रका ११ वर्ष नाघ्याका कंन्या विधवाको राजि षुसिले करणि गरि. भातमा वोऱ्याको रहेनछ भन्या ३० रूपैया करणि गरि भातमा वोऱ्याको भया ४० रूपैया दंड गर्नु भोरमा भात षान्यालाइ पतिया गराइ दिनु.

४. नमासिन्या मतवालि जातले राजषतको सजाय लेषियाका हाडनाता वाहेक अरू सनयमा र आफु मिल्दा नमासिन्या मतवालि जात्को ११ वर्ष नाघ्याका कंन्या विधवाको राजि षुसिले करणि गरेछ. भातमा वोऱ्याको रहेनछ भन्या षतवात लाग्दैन. करणि गरि आफुले. भात षायाको रहेनछ स्वास्नि तर्फवाट वोरायेछ भन्या १० रूपैया दंड गर्नु जात जादैन करणि गरि आफुले भात षाइ अरूलाइ स्मेत्. भातमा वोरेछ भन्या १० रूपैया दंड गरि विग्ऱ्याकि स्वास्नि को. जौन जात हुन्छ. उसै जातमा. मिलाइ दिनु. भोरमा पर्न्या भताहाले हामी. लाइ पतिया देउ भनि. कराउन आया केटि का नाउको भोरको पतिया गराइ दिनु कराउन. न आया पतिया दिनु पर्दैन जातैमा रहन्छन्.

५. नमासिन्या मतवालि जातले मासिन्या मतवालि जातका ११ वर्ष नाघ्याका कंन्या विधवाको. राजि षुसिले करणि गर्न्यालाइ षतवात लाग्दैन. भातमा पारि दियो भनि कराउन आया १० रूपैया दंड गर्नु.

६. जार हांन्या नमासिन्या मतवालि जात्का ११ वर्ष नाघ्याका कंन्या विधवाको जार नहान्या नमासिन्या मतवालि जातले राजि षुसिले करणि गरि भातमा स्मेत् वोरायेछ भन्या ४० रूपैया. भातमा वोरायाको रहेनछ भन्या २० रूपैया दंड गर्नु रूपैया नतिऱ्या अैन वमोजिम कैद गर्नु.

# ऐ मा करणि गर्न्या मासिन्याको

१. मासिन्या मतवालि जातले. उपाध्या असल जैसि. रजपुत क्षत्रि तागाधारि जातका ११ वर्ष नाघ्याका कंन्या विधवाको राजि षुसिले करणि गरि. भातमा वोऱ्याको रहेनछ भन्या. १॥ वर्ष कैद गरि मासि दिनु. भातमा स्मेत वोरेछ भन्या ३ वर्ष कैद गरि मासि दिनु. म्यादको डवल दिया लिनु. भोरमा पर्न्या लाइ पतिया गराइ दिनु.

२. मासिन्या मतवालि जातले देवभाजु तेह्रौत्या भट्ट महट्टा नागर गुज्राति माहाराष्ट्र तैलंगि द्राविण मधिस्या देसि व्राम्हण र. विराना राजका अरू गैह्र व्राम्हणका ११ वर्ष नाघ्याका. कंन्या विधवाको राजि षुसिले. करणि गरि. भातमा वोरायाको रहेनछ भन्या १ वर्ष कैद गरि मासि दिनु. भातमा स्मेत वोरेछ भन्या २ वर्ष कैद गरि मासिदिनु. भोरमा षान्या लाइ पतिया गराइ दिनु.

३. मासिन्या मतवाली जातले दश नाम जोगि जंगम सन्यासि सेवडा वैरागि कान फट्टा नानक. उदासि वघर गैह्र भेष धारि र. ३ लिंग देषिका जैसि. डोटचाल जैसि जुमलिजैसि जात गैह्र. का ११ वर्ष नाघ्याको कंन्या विधवाको राजि षुसिले करणि गरि भातमा वोरायाको भया पनि नभया पनि. मासि दिनु. भोरमा षान्यालाइ पतिया गराइदिनु.

४. मासिन्या मतवालि जातले. नमासिन्या मतवालि जातका ११ वर्ष नाघ्याका कंन्या विधवाको. राजि षुसिले करणि गऱ्या. भातमा पाऱ्या पनि. नपाऱ्या पनि. मासि दिनु. कैद हुंदैन.

५. मासिन्या मतवालि जातले आफु मिल्दा. मासिन्या मतवाली जातका अैनमा सजायलेषियाका हाडनाता वाहेकमा र अरू कुटुम्वका ११ वर्ष नाघ्याका कंन्या विधवाको राजि षुसिले करणि गरि. भातमा वोऱ्याको रहेनछ भन्या षतवात लाग्दैन. भातमा वोऱ्यो भनि. कोहि कराउन आया ५ रूपैया दंड गर्नु.

# ऐ. करणि गर्न्या छिटो हालनु नपर्न्या जात्को

१. छोया छिटो हालनु नपर्न्या पानि नचलन्या जातले. उपाध्या ब्राम्हण जैसि रजपुत तागाधारि. देवभाजु. तेह्रौत्या भट्ट मर्हट्टा नागर. गुज्राति. महाराष्ट्र तैलंगि द्राविण मधिस्या देसि ब्राम्हण र. विराना राजका अरू गैह्र ब्राम्हण. दस नाम जोगि जंगम. सन्यासि सेवडा वैरागि कानफट्टा. नानक उदासि वघर गैह्र भेषधारि. र ३ लिंग देषिका जैसि. डोटचाल जैसि. जुमलि जैसि. नमासिन्या मतवालि जात गैह्रका ११ वर्ष नाघ्याका कंन्या विधवाको राजि षुसिले करणि गर्न्यालाइ. मासिन्या जात रहेछ भन्या ४ वर्ष कैद गरि मासि दिनु नमासिन्या जात रहेछ भन्या ८ वर्ष कैद गर्नु म्यादको चौवर दिया रूपैया लिनु.

२. छोया छिटो हालनु नपर्न्या पानि नचलन्या जातले. राजषतको सजाय लेषिया का हाड नाता वाहेक अरू आफु मील्दा पानी नचल्न्या जात्का ११ वर्ष नाघ्याका कंन्याः विधवाको राजि षुसिले करणि गरेछ भन्या षतवात लाग्दैन. छिटो हालनु नपर्न्यै नन्पर्या जातमा. येका जातमा अर्का जातले करणि गरि. भातमा पाऱ्या ४ रूपैया दंड गर्नु.

३. छोया छिटो हालनु नपर्न्या पानी नचलन्या जातले आफु भन्दा कम जातका ११ वर्ष नाघ्याका कंन्या विधवाको राजि षुसिले करणि गरि. भातमा वोऱ्याको रहेनछ भन्या षतवात लाग्दैन. करणि गरि आफुले भात षाइ. अरू लाइ स्मेत् वोरेछ भन्या ४ रूपैया दंड गरि विग्न्याकि स्वास्निको जौन जात हो उहि जातमा मिलाइदिनु. भोरमा भात षान्यालाइ. जातको रित गरि शुद्ध हुन्छन्.

४. छोइ छिटो हालनु नपर्न्या. पानी नचलन्या जातले. मासिन्यामा पानि चलन्या मतवालि जात गैह्रका ११ वर्ष नाघ्याका कंन्या विधवाको राजि षुसिले करणि गर्न्यामा. मासिन्या. जात भया. मासि दिनु. नमासिन्या जात भया २ वर्ष कैद गर्नु म्यादको चौवर दिया लिनु.

# घटि बढि छिटो हालनु पर्न्या

१. पोढ्या च्यामा षलक लगायेत छोया छिटो हालनु पर्न्या जातले उपाध्या र रजपुत जैसि तागाधारि. देवभाजु तेह्लौत्या भट्ट मर्हट्टा नागर गुज्राति महाराष्ट्र तैलंगि द्राविण मधिस्या देसि व्राम्हणका र विराना राजका अरू व्राम्हण दसनाम जोगि जंगम सन्यासी सेवडा वैरागि कानफट्टा. नानक उदासि वघर गैह्र भेषधारि जातका र. ३ लिंग देषिका जैसि. डोटचाल जैसि जुमलि जैसि नमासिन्या मतवाली गैह्र पानि चलन्या चोषा जातका ११ वर्ष नाघ्याका कंन्या विधवाको राजि षुसिले करणि भन्या गरेछ. सधवा भया जार हान्न्या जातका ऐन वमोजिम्. साधुको षुसि जार नहांन्या जातका सधवा र. कंन्या विधवा भया अैन वमोजिम्को अंस. सर्वस्व गरि दामल गर्नु. मासिन्या मतवालि जातका ११ वर्ष नाघ्याका कंन्या विधवाको करणि गऱ्या १ वर्ष कैद गरि. मासि दिनु. छोया छिटो हालनु. नपर्न्या पानि नचलन्या जातका कंन्या विधवा को करणि गऱ्या पनि मासि दिनु.

२. छोइ छिटो हालनु पर्न्याजातले राजषतको सजाय लेषियाका हाडनाता वाहेक मा र अरू आफु मिल्दा. जातका ११ वर्ष नाघ्याका कंन्या विधवाको राजि षुसिले करणि गर्न्या लाइ. षतवात लाग्दैन. छिटो हालनु पर्न्यै पर्न्या जात्मा पानी चलन्या भात नमिल्न्या जातमा एका जातको अर्का जातले करणि गरि. भातमा पाऱ्यो भनि. कराउन आया ४ रूपैया दंड गर्नु.

३. छोइ छिटो हालनु पर्न्या जातले आफु भन्दा कम जातका ११ वर्ष नाघ्याका कंन्या विधवाको राजि षुसिले करणि गरि. भातमा वोऱ्या रहेनछ भन्या षतवात लाग्दैन. करणि गरि आफुले भातषाइ अरूलाइ स्मेत्. वोऱ्या छ भन्या ४ रूपैया दंड गरि विग्ऱ्याकि स्वास्निको जौन जात हो उहि जात मा मिलाइ दिनु. भोरमा भात षान्यालाइ. जातका रितले गरि. शुद्ध हुन्छन्.

# पानि नचलन्या जातको करणि गर्न्याको

१. उपाध्या रजपुत जैसि तागाधारि क्षत्रि देवभाजु र नमासिन्या मासिन्या मतवालि जात अरू गोर्षा राजमा घरवारि जाहान् गरि. १।२ पुस्तासम्म वस्याका तेह्लौत्या भट्ट मर्हट्टा नागर गुज्राति महाराष्ट्र तैलंगि द्राविण मधिस्या देसि व्राम्हण र विराना राजका अरू गैह्र व्राम्हण दसनाम जोगि जंगम सन्यासी सेवडा वैरागि कानफट्टा. नानक उदासि वघर गैह्र भेषधारि जातले पानि नचलन्या छिटो हालनु नपर्न्या चोषा जातका ११ वर्ष नाघ्याका सधवा विधवा कंन्याको करणि गरेछ उस्का हातको भात पानि षायाको रहेन छ भन्या तागाधारि र तागाधारि सरहको भया १०० नमासिन्या जात सरहको भया ५० मासिन्या सरहको भया २५ रूपैया दंड गरि. तिऱ्या रूपैया लि नतिऱ्या म्याद पुग्या पछि एक तिर्थ गराइ प्रायेश्चित्त दिनु एस्ताका हातको भात पानि चल्छ. करणि गरि स्वास्निका हातको भात आफुले षाइ अरूलाइ स्मेत् वोरेछ भन्या अैन वमोजिम् सर्वस्व गरि १ वर्ष कैद गरि जौना जातका स्वास्निको करणि गऱ्याको छ उसै जातको १ अक्षर वाऱ्याँ गालामा षोदि भात पानि वाहेक गरि उसै जातमा मिलाइ छाडिदिनु अरूलाइ वोऱ्याको रहेनछ भन्या तेसै उसै जातमा मिलाइ छाडिदिनु अक्षर षोदनु पर्दैन भोर्मा भात पानि षान्यालाइ भोरको पतिया दिनु.

२. उपाध्या रजपुत जैसि तागाधारि देवभाजु तेह्लौत्या भट्ट मर्हट्टा नागर गुज्राति माहाराष्ट्र तैलेगि द्राविण मधिस्या देसि व्राम्हण र विराणा राजका अरू गैह्र व्राम्हण दसनाम जोगि जंगम सन्यासी सेवडा वैरागि कानफट्टा नानक उदासि वघर गैह्र गोर्षा राजमा १।२ पुस्तासम्म घर जाहान् गरि वस्याका भेष धारि र ३ लिंग देषिका जैसि डोटचाल जैसि जुमलिजैसि नमासिन्या मतवाली मासिन्या मतवालि गैह्र पानि चलन्या जातले छोया छिटो हालनु पर्न्या जातका ११ वर्ष नाघ्याका कंन्या विधवा सधवाको करणि गरेछ उस्का हातको भात पानि षायाको रहेछ भन्या पनि नषायाको भया पनि अैन वमोजिम्को अंस सर्वस्व गरि १॥ वर्ष कैद गरि उसै जातको एका अक्षर वाऱ्याँ गालामा षोदी भात पानि वाहेक गरि उसै जातमा मिलाइ छोडिदिनु.

३. पानि नचलन्यामा छोइ छिटो हालनु नपर्न्या जातले छिटो हालनु पर्न्या जातका ११ वर्ष नाघ्याका सधवा विधवा कंन्याको करणि गरेछ भन्या सधवा भया जार हान्या जातको अैन

वमोजिम् साधुको षुसि जार नहांन्या जातका सधवा र कंन्या विधवाको करणि गरेछ भन्या सर्वस्व गरि भात पानि वाहेक् गरि उसै जातको १ अक्षर वात्राँ गालामा षोदि उसै जातमा मिलाइ छोडिदिनु.

४. छोया छिटो हालनु पर्न्या नपर्न्या गैह्र पानि नचलन्या जातका लोग्न्या मानिस् लाइ राजि षुसिले करणि दिन्या स्वास्निमा तागाधारि जात र नमासिन्या मतवालि जातका स्वास्निले करणि गराइ भात पानिमा वोऱ्याको भया १ वर्ष कैद गरि जौना जातमा विग्ऱ्याकि छ उसै जातको १ अक्षर षोदि पानि वाहेक् गरि उसै जातमा मिलाइ छाडिदिनु कैदका रूपैया तिऱ्या लिनु पानिमा वोऱ्याको नभया १ अक्षर षोदि उसै जातमा मिलाइछोडि दिनु कैद हुदैन मासिन्या मतवालि जातका स्वास्नि भया मासि सोहि वमोजिम् १ अक्षर षोदि छोडिदिनु. कमारि भया १ वर्ष कैद गरि अक्षर षोदि षसम्का जिम्मा गरि दिनु. म्यादका रूपैया तिऱ्या ली छाडनु एस्ताको पानी चल्दैन.

५. छोया छिटो हालनु पर्न्या जातका लोग्न्या मानिसलाइ राजि षुसिले करणि गराउन्या पानि नचलन्यामा छिटो हालनु नपर्न्या जातका स्वास्निलाइ मासि दिनु.

६. मुसल्मानि कुसल्यानि कसाइनि कलवार्नि धोविनि कुलुनि गैह्र छोया छिटो हालनु नपर्न्या पानि नचलन्या जातका स्वास्निले आफु भंदा ठूला पानि चलन्या जातका लोग्न्यालाइ करणि गराया भात पानिमा वोरायाको रहेछ भन्या त्यो आफु भंदा ठुला जातलाइ करणि गराउन्या स्वास्नि मासिदिनु.

७. छोइ छिटो हालनु पर्न्या जातका स्वास्नि मानिस्ले हामि चोषा जात हुं भनि जात ढाटि तागाधारि लगायत् पानि चलन्या जातलाइ भोरमा पारि करणि गरायाको रहेछ भन्या जात ढाटि करणि गराउन्या मासिन्या जातका स्वास्निलाइ मासि दिनु भोरमा करणि गर्न्या लोगन्याहरूलाइ भात पानिको पतिया दिनु भोरमा पऱ्याको हुनाले दंड हुदैन.

८. तागाधारि जात गैह्रले भात पानि करणि संवंधका कुरागरि अैनले अजात गर्नु पर्न्या षत्मा अजात गराउदा जनै झिकि अजात गराइदिनु.

९. पानि नचलन्या जात र छोया छिटो हालनु पर्न्या जातका कंन्या विधवा स्वास्निले तगाधारि लगायत् पानि चलन्या ठुला साना जातका लोग्न्या मानिस कसैलाई षुसी राजीले करणि गरायाछन् र करणि गर्न्या लोग्न्याले पानि चलन्या जातलाइ भात पानिमा वोऱ्याको रहेनछ भन्या करणि दिन्या तेस्ता स्वास्निलाइ षतवात लाग्दैन ज्यू पनि मासिदैन करणि गर्न्या लोग्न्या जनै हुन्या जातभया जनै झिकि जनै नलाउन्या जात भया तेसै स्वास्निका जातमा मिलाइ दिनु. सर्वस्व दंड जरिवाना केहि हुदैन.

१०. पानि नचलन्या जात र छोया छिटो हालनु पर्न्या जातका सधवा स्वास्निलाइ पानि चलन्या ठुला साना जात कसैले राजि षुसिले करणि गरि पानि चलन्या जातलाइ भात पानिमा वोऱ्याको रहेनछ भन्या राजषत् लाग्दैन करणि गर्न्या मुडिन्या जात भया जौन जातका स्वास्निको करणि गऱ्याको छ उसै जातका अैन वमोजिम्को विहा षर्च भराइ दंड गर्नु काटिन्या जात भया साधुको षुसि. साधुले छाडचो भन्या राजि षुसिले करणि गरि जात फाल्या वावत् जनै हुन्या जातको जनै झिकि जनै नहुन्या जातलाइ तेसै उसै जातमा मिलाइदिनु. दंड जरिवान सर्वस्व केहि हुदैन साधुले सजाय गर्न सकिन भनि कराउन आया सोहि वमोजिम्को विहा षर्च भराइ दंड गर्नु. रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

११. पोढ्या च्यामा षलक लगायेत् छोया छिटो हालनु पर्न्या जात गैह्रका स्वास्निले आफु भंदा ठुला पानि नचलन्या जातका लोग्न्या मानिसलाइ करणि गरया भात पानीमा वोराया भन्या आफु भन्दा ठुला जातलाइ करणि गराउन्या स्वास्निलाइ मासि दिनु.

१२. मुसलमान् जात वाहेक अरू पानि नचलन्या छिटो हाल्न पर्न्या जातका लोग्न्या स्वास्नि मानिस् कसैले छोया छिटो हालनु पर्न्या जातमा करणि गरि गराया भन्या सधवा भया अैन वमोजिम् साधुको षुसि साधुले सजाय गरेनछ भन्या पनि कंन्या विधवा भया पनि लोग्न्या मानिस् भया पनि राजषत लाग्ना ले करणि गरि गराइ भताहालाइ भात पानिमा वोरायाको भया छिटो हालनु पर्न्या जौन जातमा करणि गरे गरायाको ठहर्छ उसै जात्को १ अक्षर वात्राँ गालामा षोदि मासि दिनु भात पानिमा वोऱ्याको नभया १ अक्षर षोदि उसै जातमा मिलाइ छाडिदिनु ज्यू मासिदैन.

१३. मुसल्मान जातका स्वास्नि मानिस् कसैले आफु भंदा ठूला तागाधारि लगायेत् पानि चलन्या हिंदु जातमा करणि गराइ लोग्न्यावाट भात पानिमा वोरायाको भया २ वर्ष भात पानिमा वोरायाको नभया १ वर्ष कैद गर्नु म्यादको डवल् दिया लि छाडिदिनु.

१४. गोर्षा राजभर मुलुक्मा घर जाहान् गरि १।२ पुस्तासम्म वस्याका वाहेक अरू विराना राजका तेह्लौत्या भट्ट मर्हट्टा नागर गुजराति माहाराष्ट्र तैलंगि द्राविण मधिस्या देसि व्राम्हण दस नाम जोगि जंगम सन्यासि सेवडा वैरागि कानफट्टा नानक उदासि वघर गैह्र भेषधारि जातले. पानि नचलन्या छिटो हालनु नपर्न्या जातका ११ वर्ष नाघ्याका सधवा विधवा कंन्याको करणि गरेछ उस्का हातको भात पानि षायाको रहेनछ भन्या तागाधारि र तागाधारि सरह जातको भया १०० नमासिन्या जात सरहको भया ५० मासिन्या सरहको भया २५ रूपैया दंड गरि तिर्‍या रूपैया लि नतिर्‍या म्याद पुग्या पछि एक तिर्थ गराइ प्रायेश्चित्त दीनु. एस्ताका हातको भात पानि चल्छ करणि गरि स्वास्निका हातको भात पानि षाइ अरूलाइ स्मेत् वोरेछ भन्या सर्वस्व गरि अरूलाइ वोर्‍याको नभया तेसै भात पानि वाहेक भयो भनि देस निकाला गरि दिनु अक्षर षोदनु पर्दैन भोरमा भात पानि षान्यालाइ भोरको पतिया गराइ दिनु.

१५. गोर्षा राजभर मुलुक्मा घर जाहान् गरि १।२ पुस्तासम्म वस्याका वाहेक अरू विराना राजका तेह्लौत्या भट्ट मर्हट्टा नागर गुजराति महाराष्ट्र तैलंगि द्राविण मधिस्या देसि व्राम्हण दस नाम जोगि जंगम सन्यासि सेवडा वैरागि कानफट्टा नानक उदासि वघर गैह्र भेषधारि जातले छोया छिटो हालनु पर्न्या जात्का ११ वर्ष नाघ्याका सधवा विधवा कंन्याको जानि जानि करणि गरेछ भन्या उस्का हातको भात पानि षायाको भया पनि नभया पनि अैन वमोजिमको अंस सर्वस्व गरि १॥ वर्ष कैद गरि भात पानि वाहेक भयौ भनि देस निकाला गरि दिनु अक्षर षोदनु पर्दैन भोर्मामा पर्न्यालाइ भोर्को पतिया गराइ दिनु.

# घटि जातमा मिल्छु भनि जान्याको

१. तागाधारि लगायेत् चार वर्णछतिसै जात गैह्रका लोग्न्या मानिस् कसैले आफु भंदा घटि भात नचलन्या जातका हातको भात पानि नचलन्या छोया छिटो हालनु पर्न्या जातका हातको भात पानि षाइ हवस् करणि गरि हवस् उसै जातमा मिल्छु भनि जाहेर गरि जान्याले अर्कालाइ भात पानिमा पाऱ्याको रहेनछ भन्या जान पाउछ षत लाग्दैन. वावु आमा दाज्यू भाइ आफुले जन्मायाका छोरा र. स्वास्निहरूसित अंस लि वेगल वस्याको रहेछ भन्या. आफ्नो जो भयाको धन माल स्मेत् लि जान पाउछ अंस भयाको रहेनछ भन्या जात छाडि जान्याले अंस गरि धन माल लैजान पाउदैन वावु छोरा स्वास्नि दाज्यू भाइहरूले अैन वमोजिम् षान पाउछन्.

२. मासिन्या पर्जा जात र पानि नचलन्या छोइ छिटो हालनु नपर्न्या जातका लोग्न्या मानिस्ले छोइ छिटो हालनु पर्न्या जातका स्वास्निसित करणि गरि. म यसै जात्मा मिल्छु भनि कसैलाइ भात पानिमा नपारि जाहेर गरि जान्या लाइ षतवात लाग्दैन. करणि गरि भात पानिमा पाऱ्यो भन्या लोग्न्या स्वास्नि दुवैलाइ मासि दिनु.

३. पानि नचलन्या जातमा जानि जानि विहा गरि पानि मा पर्न्यालाइ अैन वमोजिम्को अंस सर्वस्व गरि तागाधारि जातको जनै झिकि अरू पानि चलन्या जातलाइ तेसै जात पतित गरि जौन जातमा विहा गऱ्याको हो उसै जातमा मिलाइदिनु भोर्मा परि विहा गऱ्याको ठहऱ्या स्वास्नि छुटचाइ प्रायश्चित्त दिनु षतवात लाग्दैन.

# कुलुको

१. कुलुले नमासिन्या नेवार जातका ११ वर्ष नाघ्याका कंन्या विधवा सधवा स्वास्निको राजि षुसिले करणि गरि भात पानिमा वोरेछ भन्या २ वर्ष कैद गरि मासिदिनु भात पानिमा वोऱ्याको रहेनछ भन्या मासिदिनु स्वास्निले पानिमा वोऱ्याकि भया १ वर्ष कैद गरि नभया तेसै वात्राँ गालामा १ अक्षर षोदि भात पानि वाहेक गरि छोडिदिनु म्यादका रूपैया लिनु.

२. कुलुले मासिन्या नेवार जातका ११ वर्ष नाघ्याका कंन्या विधवा सधवा स्वास्निको षुसि राजिले करणि गरि भात पानिमा वोरेछ भन्या १ वर्ष कैद गर्नु भात पानिमा वोऱ्याको नभया तेसै स्वास्निलाई १ अक्षर षोदि भात पानि वाहेक गरि लोग्न्या स्वास्नि दुवैलाइ मासिदिनु.

३. कुलुले नेवार जातका आफ्ना जात भातमा नरहयाका वेस्या स्वास्निका राजि षुसिले करणि गरि भात पानीमा वोरेछ भन्या लोग्न्यालाइ मासि दिनु. नमासिन्या नेवार जातका स्वास्निलाइ १ अक्षर षोदि भात पानि वाहेक गरि छोडिदिनु. मासिन्या जातका स्वास्निलाइ १ अक्षर षोदि मासि दिनु राजि षुसि ले करणि गरि भात पानिमा कसैलाइ नपारि लै गया भन्या षत लाग्दैन.

४. कुलुले तागाधारि जार हांन्या जातका वेस्या पानिमा पारि लैजावस्ता पनि पानिमा नपारि लैजावस्ता पनि मासि दिनु.

# छिटो हालनु नपर्न्या.

१. कुसल्या नि कसाइणि कुलुनी मुसल्मान्नि म्लेछनि करवार्नि धोविनि गैह्रछोया छिटो हालनु नपर्न्या पानि पनि नचलन्या जातसित करणि गरि उस्का हातको पानि षायाको रहेनछ भन्या तेस्ता करणि मात्र गर्न्या तागाधारि जात भया १०० रूपैया नमासिन्या मतवालि भया ५० मासिन्या मतावलि जातलाइ २५ रूपैया दंड गरि १ तिर्थ गराइ प्रायश्चित्त गराइ दिनु दंडका रूपैया तिरेन भन्या मैन्हाका ५ रूपैयाका दरले कैद गरि म्याद पुग्या पछि तिर्थ प्रायेश्चित्त गरि सुद्ध हुन्छ.

२. पानि चलन्या जातका स्वास्निहरू पानि नचलन्या छोइ छिटो हालनु नपर्न्या जात कुसल्या कसाहिसित विग्रि पानि वाहेक भयाकास्वस्निहरू सित पानि चलन्या तागाधारि मतवालि जात गैह्रले तेहि स्वास्नि राषि तेसैवाट जाया जन्म पनि भयाको रहेछ भन्या त्यो स्वास्नि राषन्या लोग्न्यालाइ पानि देषि वाहेक गऱ्याको रहेछ भन्या पोइ र. ति छोरा छोरि आमा जुन् जातमा विग्रि पानि वाहेक भयाकि हो उसै जातमा जान्छन् वावुको विग्ऱ्याको थाहा पाइ दुनियाले पानि काढ्याको रहेनछ पानिमा चल्याको रहेछ भन्या छोरा छोरि जनै नपाउन्या शुद्ध जात हुंछन् पानि चल्छ आमाको हातको पानि षाया वावत् छोरा छोरिलाइ पतिया गराइदिनु. आमाको भन्या पानि चल्दैन.

३. तागाधारि जातले कुसल्यानि कसाइनि स्वास्नि तुल्याइ तेसैतिरवाट जन्म्याका छोरा छोरि अरू तागाधारि जात र मगर गुरुं गैह्र चोषा जातले विहा गऱ्या भन्या तेस्ताको अैन नहुदै अघि विहा गरि पानि चलाइ आयाको हुनाले अघि पानि चलायाकाको पानि मात्र चल्छ भात चल्दैन जनै पाउदैनन्. वावुले तिनै संन्तान्का हातको भात षायाको भया जनै झिकिंछ पानि भन्या चल्छ करणि मात्र गऱ्याको रहेछ भात षायकाको रहेनछ भन्या पतिया गरि जनै रहंछ भताहालाइ भात षानाको कर लाग्दैन.

४. मुसल्मान्ले कसाहिनि कुसल्यानि कुलुनि धोविनि गैह्र पानि नचलन्या हिंदु जातका स्वास्निको करणि गरि उस्का भात पानिमा पाऱ्याको भया १०० रूपैया भात पानिमा पाऱ्याको रहेनछ भन्या ७० रूपैया दंड गर्नु.

५. नेपालका वासिंदा मुसल्मान कस्मेरि वाहेक पर्देसि मुसल्मान्का स्वास्नि कंन्या विहा सादि गऱ्याकिको कोहि मुसल्मान्ले करणि गऱ्यो भन्या तेस् लाइ १०० रूपैया दंड गर्नु १०० रूपैया विहा षर्च भराउनु १ संग विग्रि फेरि सादि गऱ्याकि २।३।४ लिंग सम्मका स्वास्नि संग करणि भयो भन्या ५० रूपैया दंड गर्नु ५० रूपैया विहा षर्च भराउनु दंड र विहा षर्च का रूपैया तिर्न सकेन भन्या मैन्हाका ५ रूपैयाका दरले कैद गर्नु जुन् लोग्न्यासंग वस्छे उस्संग वस्नु स्वास्निको षुस.

६. हाम्रा मुलुकका वासिंदा चुडारा मुसल्मानका जातको रित गरि ल्यायाका स्वास्निको अरू मुसल्मान्ले करणि गऱ्यो भनि कराउन आया ६० रूपैया विहा षर्च भराइ ६० रूपैया दंड गर्नु. स्वास्नि साधुले लै गयो भन्या विहा षर्च पर्दैन २० रूपैया मात्रै दंड गर्नु साधुले अव उप्रान्त जारकाटन पाउदैनन काटनु.

७. पानि नचलन्या छोया छिटो हालनु नपर्न्यै नपर्न्या जातमा पानि नचलन्या जातका लोग्न्या मानिस्ले अर्का जातका स्वास्निको करणि गऱ्यो भन्या भात मा पाऱ्याको भया पनि नभया पनि लोग्न्यालाइ २० स्वास्निलाइ १० रूपैया दंड गरि उसै जातमा मिलाइ दिनु. ठुला जात्को लोग्न्याले पानि नचलन्या जातका स्वास्निलाइ करणि गरि भात पानिमा पाऱ्यो भन्या लोग्न्यालाइ २० स्वास्निलाइ १० रूपैया दंड गरि जातका रित्को पतिया गराइ दिनु अरूलाइ भात पानिमा नपारि म एसै जातमा जांछु भनि गयो भन्या षत्वात लाग्दैन.

८. नेपालका वासिंदा कस्मेरि मुसल्मान् र अरू मुसल्मन्का विहा सादि गरि ल्यायाका स्वास्निको कस्मेरिले हवस् अरू देसि मुसलमानले हवस्. कसैले करणि गऱ्यो भनि कराउन आया ५ वर्ष कैद गर्नु साधुले छोडि देउ भन्या छाडि दिनु साधुले छोडेन भन्या म्याद पुग्या पछि छाडनु म्याद नपुगि डवल् दिया पनि नलिनु विग्न्याकि स्वास्नि जारि गर्न्याले पाउदैन.

# पानि नचलन्या घटि वाढि जातको

**कसाहि लगायेत् च्याम्हा षलक सम्मका पानि नचलन्या र छोया छिटो स्मेत् हालनु पर्न्या जातको ठुलो सानु जात छुटचायाको अैन.**

<u>तपसिल</u>

१. उपल्ला जातदेषि पोढ्या तकको जुठो षानाले सवै जातभंदा सानु च्याम्हा षलकको जात.

२. अरूको जुठो षान्या च्याम्हा षलकका हातको नषान्या हुनाले च्याम्हा षलक भंदा ठुलो पोढ्याको जात.

३. च्याम्हा षलक र. पोढ्याका हातको नषान्या छिटो हालनु पर्न्या जातसम्मका घरघरमा गाइ नाचि मागि षान्या हुनाले २ जातभंदा ठुलो वादिको जात.

४. वादिका हातको नषान्या गाइ वजाइ मागि षान्या हुनाले वादि भंदा ठुलो गाइन्याको जात.

५. गाइन्याको हातको नषान्या गाइन्यानि स्वास्नि राषि जन्म्याका छोरा छोरि भातमा नलिन्या हुनाले गाइन्या भंदा ठुलो दमाइको जात.

६. सार्किले कम्यानि कामिले सर्क्यानि ल्याइ जन्म्याका संतान् कडारा जात हुंछन् इन्का हातको पनि दमाइले षान्या दमाइका हातको इनले षान्या हुनाले दमाइ भंदा ठुलो कडाराको जात.

७. कामिका हातको पानि सार्कि नषान्या सार्किका हातको कामि नषान्या अरू भुटचा पोल्याको दोहोरो षान्या हुदा र. इन्का षचर कडाराका जातकोभात पानि अघि नषाइ आयाको हुनाले कडार भंदा ठुलो कामि र सार्किको जात्. अव षचर छोरा कडाराका हातको भात चल्दैन पानि चल्छ पानि षाया कामि सार्कि दुवैले पतिया गर्नु पर्दैन सार्किका विधवा कंन्या कामिले. कामिका विधवा कंन्या सार्किले राजि षुसिले र. माइतिले दिकन भात मा नपारि ल्याइ स्वास्नि

तुल्याया भन्या इ दुवैका ज्यू मासिदैन षतवात पनि लाग्दैन भातमा पाऱ्या १० रूपैया दंड गरि जातका रितको पतिया गराइदिनु.

८. इ सातै जातको हातका भात पानि षान्या इ सात जातका छोरि वेटि ल्याइ स्वास्नि तर्फवाट जाया जन्म भयाको नहुनाले र. दमाइ. कामि. सार्किसित भात पानि कर्णिमा वोऱ्यामा अघि जातका रितको पतिया भयाको हुनाले छालाको इलम् गर्न्या इ जातहरू भंदा ठुलो कुलुको जात.

९. एति जातका हातको नषान्या इ पानि नचलन्या छोइ छिटो हालनु पर्न्या जातका लुगा पनि नधुन्या अरू ठुला जातका वैठक मटान् सम्म जान्या हुनाले ई जात हरू भंदा ठुलो हिंदु धोविको जात.

१०. ति जातका हातको नषान्या दर्वार उमरावहरूका घर चोक देवालयमा भारू वढारू गर्न्या देवताका स्थान स्थानमा वाजा वजाइ षान्या इलम् गर्न्या हुनाले इ जातहरू भंदा ठुलो कुसल्याको जात.

११. इ अरू जातका हातको भात पानि नषान्या कुसल्याका हातको पनि भात नषाने उपल्ला जात सवैले इन्का हातका गाइभैसिको दंड चलायाको हुनाले कुसल्या भंदा पनि ठुलो कसाहिको जात.

१२. च्याम्हा षलक पोढ्या वादि गाइन्या दमाइ कडारा कामि सार्कि चुडारा हुर्क्या एति जातलाइ पानि चलन्या चोषा जातले छोयामा छिटो हालनु छिटो हाल्यानन्भन्या ॥. रूपैया दंड गरि चार पैसा लि पतिया गराइ दिनु.

१३. कम्यानि सार्किले सर्क्यानि कामिले करणि गरि कामिले सार्किका सार्किले कामिका भातमा पाऱ्यो भन्या १० रूपैया दंडगर्नु कडाराले कम्यानी सार्क्यानीको करणि गरी भात्मा पाऱ्यो भन्या लोग्न्यालाइ १२ स्वास्निलाइ ८ रूपैया दंड गर्नु रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

१४. कामि सार्कि कडाराका स्वास्निहरूको दमाइ गाइन्या वादि गैह्न जातले करणि गऱ्यो भन्या भातमा पारोस्तपनि नपारोस्तपनि लोग्न्यालाइ २० स्वास्निलाइ १० रूपैया दंड गरि लि उसै जातमा मिलाइ दिनु. इ तिन जातका लोग्न्याले दम्यानि गैन्यानि. भडचानिको करणि गरि आफ्ना जातभात लाइ पानिमा पाऱ्यो भन्या लोग्न्यालाइ २० स्वास्निलाइ १० रूपैया दंड गरि उसै जातमा मिलाइ दिनु. भात पानिमा नपारि जाहेर गरि उसै जातमा जांछु भनि जान्यालाइ षतवात लाग्दैन.

१५. तागाधारि लगायेत् पानि चलन्या जातका कमारिले पानि नचलन्या र. छोया छिटो हालनुपर्न्या जातका लोग्न्यासित करणिमा विग्रि आफु मिल्दा लाइ भातमा र अरूलाइ पानिमा वोरिछ भन्या र करणि गराइछ भन्या १ वर्ष कैद गरि उसै जात्को १ अक्षर षोदि पानि वाहेक गरि अरूलाइ पानिमा वोऱ्याको करणि गरायाको रहेनछ भन्या ६ मैन्हा कैद गरि १ अक्षर षोदि पानि वाहेक गरि रूपैया तिऱ्या डवल् लि नतिऱ्या कैद पुग्या पछि उसैका षसम्का जिम्मा गरि छाडिदिनु.

१६. मासिन्या जातका वध्येत्यानि स्वास्नि मानिस्ले पानि नचलन्या छोया छिटो हाल्नु पर्न्या जातका लोग्न्या मानिस् सित करणिमा विग्रि र आफ्ना हातवाट आफु मिल्दालाइ भातमा र अरूलाइ पानिमा वोरेछ करणि गराइछ भन्या पनि वोरायाको रहेनछ भन्या पनि धनिका थैलि परसारि मासि. उसै जातको १ अक्षर षोदि पानि वाहेक गरि साहुको परल थैलि साहुलाइ दिलाइ वढता निस्क्याका रूपैया अदालत अमालमा जाहा कुरो पऱ्याको छ उसैले चलन गर्नु नमासिन्या जातकी वध्येत्यानि रहिछ भन्या अरूलाइ भात पानिमा वोऱ्याको करणि गरायाको भया पनि नभया पनि ६ मैन्हा कैद गरि रूपैया तिऱ्या रूपैया लि नतिऱ्या म्याद पुग्या पछि उसै जातको १ अक्षर वात्रा गालामा षोदि भात पानि वाहेक गरि धनिका जिम्ममा गरि छाडि दिनु ज्यू मासिदैन.

१७. छोइ छिटो हालनु पर्न्या जातका कमारिहरूले विष्ट जातलाइ करणि दि हवस् भात पानि षुवाइ हवस् तागाधारि जात नमासिन्या मासिन्या मतवालि जात लाइ भात पानिमा पाऱ्या भन्या तेस्तालाइ ३ वर्ष कैद गरि उसैका षसम्का जिम्मा गरि छोडि दिनु.

पानि नचलन्या छोया छिटो हालनु नपर्न्या जात

तपसिल

| | | | | |
|---|---|---|---|---|
| १. | मुसल्मान् | १ | धोवि | १ |
| | मधेसका तेलि | १ | कुलु | १ |
| | कसाहि | १ | म्लेछ | १ |
| | कुसल्या | १ | चुऱ्याडा | १ |

छिटो हालनु पर्न्या जात.

तपसिल

| | | | | |
|---|---|---|---|---|
| २. | सार्कि | १ | दमै | १ |
| | कामि | १ | गाइन्या | १ |
| | चुनार | १ | वादिभाड | १ |
| | चुनारा | १ | पोढ्या | १ |
| | हुर्क्या | १ | च्याम्हा षलक् | १ |

# कमाराको

१. कमाराले आफ्ना षसम्का स्वास्नि छोरि वुहारिको करणि गरेछ भन्या जवरजस्तिले भया पनि षुसि राजिले भया पनि तेस्ता कमारालाइ काटि मारि दिनु.

२. कमारा कमारि गैह्रका हाडनातामा करणि सनवंधका कुरा परि आयामा भोटचा प्रजाका सरह वमोजिम्का सजाय निसाफ गर्नु.

३. मासिन्या जातकि छोरि आफु भंदा ठुला जात र आफु मिल्दा जातसंग करणि गरेको रहेछ पछिवाट आफु वरावरका जातमा माइतिले रित नषाइ उसै लैगि स्वास्नि ल्यायाको रहेछ त्यो पर्ज्यानि कमारासित विग्रि भन्या मासिन्न वेस्या ठहर्छे पानि चल्न्या जातसंग भन्या वेस्या भयाकि होता पनि मासिन्छे.

४. मासिन्या जातकि छोरि आफु भंदा ठुला जात र. आफु मिल्दा जातसंग करणि गऱ्याको रहेछ पछिवाट आफु वरावरको कुटुम्वले आफ्ना जातको रित गरि विहा गरि लैगि दाल भात आफ्ना जात भाइले षायाको रहेछ भन्या त्यो स्वास्नि कमारासिंग र. पानि नचलन्या जातसंग विग्रि भन्या तेस्ता स्वास्नि लाइ मासि दिनु.

५. मासिन्या जातकी कंन्या विहा नगरि माइत घर वस्याकि आफु भंदा पल्ला जात र आफु वरावर जातसित करणि भै पछिवाट कमारा सित करणि भयाको रहेछ भन्या पर्ज्यानि पनि मासिन्न कमारालाइ पनि दंड कैद पर्दैन त्यो पर्ज्यानि वेस्या ठहर्छे.

६. नमासिन्या मतवालि जातका विधवा र कंन्यालाइ मासिन्या जातले करणि गऱ्यो भन्या तेस्तालाइ मासि आफ्ना अमालिले छिन्यो भन्या अमालको हुंछ अमालिले छिन्न नसकि अदालत ठानामा आयो भन्या अदालत ठानाको हुन्छ.

७. मासिन्या जातकि कंन्या अरूसंग नविग्रि कमारासित विग्री भन्या मासिंछे.

८. कसैका वाधा वधेत्यानिले मासिन्या षत गरि मासियो भन्या जौना अम्वल का वाधा वधेत्यानि हुन् उसै अम्वलका अमालिले पाउछन् वाधा वधेत्यानि का वावु आमा वस्याका ठाउका अमालिले पाउदैनन् वाधा वधेत्यानिको थैलि साहुको पर सारि मासियाका ज्यू अमालिले लिनु.

९. मासिन्या जातले मासिन्या षत् गरि मासियो नमासिंदै अघि विहा गऱ्याकि उस्की स्वास्नि रहिछ लोग्न्या षतवातले मासियो तापनि विहाइतै लोग्न्या हो मतेसै लोग्न्यासितै जान्छु भन्या जान पाउछे षतवात लाग्दैन तेसस्वास्निवाट जन्म्याका सन्तान अजापुत्रहरू ठहर्छन् उससित षुसले वस्छे भन्या वस्न पाउछे षुसि राजिले अर्कासित पोइल गै भन्या लैजान्यालाइ षतवात लाग्दैन.

१०. ब्राम्हण लगायेत् चार वर्ण छतिसै जातका कमाराले र घरमा करिया भै रहचाका षवास्याले तागाधारि जात गैह्रका ११ वर्ष मनिका कंन्या विधवा सधवाको करणि गर्न्या जवरजस्ति ठहर्छ सधवाको करणि गऱ्या अैन वमोजिम् साधुको षुसि कंन्या र विधवाको करणि गर्न्या षवास्या र कमारालाइ काटि मारि दिनु.

११. कमाराले र घरमा करिया भै. रहचाका षवास्याले नमासिन्या मतवालि जातका ११ वर्ष मनिका कंन्या विधवा सधवाको करणि गरेछ भन्या कमाराले करणि गर्दा स्वास्निका जात मिल्दाले विहावरी गर्न्या रहेनछन् तेस्का हातको भात षाजा चलन्या रहेनछ गलंज्या पनि नहुन्या रहिछ भन्या करणि गर्न्या जवरजस्ति ठहर्छ सधवा भया जार हांन्या जातको अैन वमोजिम् साधुको षुसि जार नहान्या जातका सधवा र. कंन्या विधवाको करणि गरेछ भन्या. तेस्ता षवास्या र तागाधारि जातका कमारालाइ ६ वर्ष कैद गर्नु म्यादको चौवर दिया रूपैया लिनु. म्याद पुग्या पछि षसमका जिम्मा गरि छोडि दिनु नमासिन्या मतवालि र मासिन्या जातका कमारालाइ दामल गर्नु. पानि नचलन्या र छोया छिटो हालनु पर्न्या जातका कमारालाइ काटि मारि दिनु.

१२. कमाराले र घरमा करिया भै. रहचाका षवास्याले नमासिन्या मतवालि जातका ११ वर्ष मनिका कंन्या विधवा सधवाको करणि गरेछ भन्या कमाराले करणि गर्दा स्वास्निको प्रायश्चित्त गरि भात षाजामा चलन्या रहेछ जाति मिल्दाले विहावरी गर्न्या रहेनछन् गलंज्याको प्रायश्चित्त गरि जातमा आउन्या रहिछ भन्या जवरजस्ति ठर्हनाले सधवाको करणि गऱ्या जार हांन्या

जातको अैन वमोजिम् साधुको षुसि जार नहांन्या जातका सधवा र कंन्याको करणि गरेछ भन्या षवास्या र तागाधारि जातका नमासिन्या मतवालि जातका कमारालाइ ६ वर्ष कैद गर्नु मासिन्या जातका कमारालाइ १२ वर्ष कैद गर्नु पानि नचलन्या र छोया छिटो हालनु पर्न्या जातका कमारालाइ काटि मारि दिनु.

१३. कमाराले र घरमा करिया भै रहचाका षवास्याले मासिन्या पर्जा जातका ११ वर्ष मनिका कंन्या सधवा विधवाको करणि गरेछ भन्या. जवरजस्ति ठहर्छ सधवाको करणि गरेछ भन्या जार हांन्या जातको अैन वमोजिम् साधुको षुसि जार नहांन्या जातका सधवा र. कंन्या विधवाको करणि गर्न्या षवास्या र तागाधारि जात नमासिन्या मतवालि जातका कमारालाइ ६ वर्ष कैद गर्नु मासिन्या जातका कमारालाइ ७ वर्ष कैद गर्नु. पानि नचलन्या र छोया छिटो हालनु पर्न्या जातका कमारालाइ दामल गर्नु जवरजस्ति हुनाले स्वास्नि मासिंन.

१४. कमाराले र घरमा करिया भै रहचाका षवास्याले पानि नचलन्या छोया छिटो हालनु नपर्न्या जातका ११ वर्ष मनिका सधवा विधवा कंन्याको करणि गरेछ भन्या जवरजस्ति ठहर्छ सधवाको करणि गरेछ भन्या जार हांन्या जातको अैन वमोजिम् साधुको षुसि जार नहांन्या जातका सधवा र कंन्याको विधवाको करणि गरेछ भन्या षवास्या र तागाधारि जात नमासिन्या जात मासिन्या जातका कमारालाइ करणि गरि उस्का हातको भात पानि षाइ आफु मिल्दालाइ भातमा र अरूलाइ पानिमा वोरेछ भन्या ७ वर्ष कैद गरि उसै जातको १ अक्षर वात्रा गालामा षोदि पानि वाहेक गरि षसम्का जिम्मा गरि छाडिदि करणि गरि आफुले तेस्का हातको भात पानि षायाको रहेनछ भन्या ६ वर्ष कैद गरि म्याद पुग्या पछि षसम्का जिम्मा गरिदिनु पानि चलछ पतिया दिनु पानि नचलन्या जातमा छिटो. हालनु नपर्न्या जातले करणि गरेछ भन्या ७ वर्ष कैद गर्नु छिटो हालनु पर्न्या जातले भया ८ वर्ष कैद गर्नु म्याद को चौवर दिया रूपैया लिनु. म्याद पुग्या पछि षसम्का जिम्मा गरि छाडिदिनु जवरजस्ति हुनाले स्वास्नि मासिंन.

१५. कमाराले र घरमा करिया भै रहचाका षवास्याले छोया छिटो हालनु पर्न्या जातका ११ वर्ष मनिका कन्या सधवा विधवाको करणि गरेछ भन्या जवरजस्ति ठहर्छ करणि गर्न्या षवास्या र तागाधारि नमासिन्या मतवालि जात छोया छिटो हालनु नपर्न्या जातका कमाराले करणि गरि अरूलाइ पानिमा र आफु मिल्दालाइ भातमा वोरेछ भन्या ७ वर्ष भात पानिमा वोरेको नभया

६ वर्ष कैद गरि उसै जातको १ अक्षर वात्रा गालामा षोदि पानि वाहेक गरि षसम्का जिम्मा गरि छाडिदिनु छोया छिटो हालनु पर्न्या जातका कमारा लाइ ७ वर्ष कैद गर्नु म्यादको चौवर दिया रूपैया लिनु नतिऱ्या कैद गरि  म्याद पुग्या पछि षसम्का जिम्मा गरि छाडिदिनु जवरजस्ति हुनाले स्वास्नि मासिन्न.

१६. व्राम्हण लगायेत् चार वर्ण छत्तिस जातका कमाराले घरमा करिया भै रहऱ्याका षवस्याले तागाधारि जात गैह्रका ११ वर्ष नाघ्याका कंन्या विधवा सधवा लाइ लागु षुवाइ वाधि मुषथुनि २।३ जना मिलि करणि गऱ्यो वा एति कुरा गरि एकलैले करणि गऱ्यो भन्या जवरजस्ति ठहर्छ सधवा भया अैन वमोजिम् साधुको षुसि विधवा र कंन्या भया करणि गर्न्या षवास्या र कमारालाइ दामल गर्नु.

१७. कमाराले र घरमा करिया भै रहऱ्याका षवस्याले नमासिन्या मतवालि जातका ११ वर्ष नाघ्याका कंन्या र  सधवा विधवालाइ लागु षुवाइ होस् वाधि हवस मुष थुनि २।३ जना मिलि करणि गऱ्यो वा एति कुरा गरि यकलैले करणि गऱ्यो भन्या जवरजस्ति ठहर्छ सधवा भया जार हांन्या जातको अैन वमोजिम् साधुको षुसि विधवा कंन्या भया जार नहांन्या जातका सधवाको करणि गरेछ भन्या तेस स्वास्निलाइ षवास्या र कमाराले करणि गऱ्या पछि जात मिल्दाले विहा गर्न्या रहेनछ तेस्का हातको भात षाजा चलन्या रहेनछ गंलज्या पनि हुन्या रहिनछ भन्या त्यो षवस्या र तागाधारि जातको कमारा भया ६ वर्ष न मासिन्या मतवालि जातको कमारो भया ८ वर्ष मासिन्या जातको भया १२ वर्ष कैद गर्नु म्यादको चौवर दिया रूपैया लिनु पानि नचलन्या र छोया छिटो हालनु पर्न्या जातको कमारो भया दामल् गर्नु.

१८. कमाराले र घरमा करिया भै रहऱ्याका षवस्याले नमासिन्या मतवालि जातका ११ वर्ष नाघ्याका कंन्या र सधवा विधवालाइ लागु षुवाइ वाधि मुषथुनि २।३ जना मिलिकरणि गऱ्यो वा एति कुरा एकलैले करणि गरि गऱ्यो भन्या जवरजस्ति ठहर्छ सधवा भया जार काट्न्या जातको अैन वमोजिम साधुको खुसि जार नहान्या जातका सधवा र विधवा कंन्या भया तेस स्वास्निलाइ कमाराले करणि गऱ्या पछि जात मिल्दाले विहावरि गर्न्या रहऱ्या छन् प्रायेश्चित्त गरि भात षाजा चलन्या रहेछ गंलज्याको प्रायश्चित्त गरि जातमा आउन्या रहिछ भन्या षवस्या र तागाधारि जातको कमारो भया १॥ वर्ष कैद गर्नु नमासिन्या मतवालि जातको

कमारो भया २ वर्ष मासिन्या जातको कमारो भया ३ वर्ष कैद गर्नु म्यादको डवल् दिया लिनु पानि नचलन्या र छोया छिटो हालनु पर्न्या जातको कमारो भया दामल गर्नु.

१९. कमाराले र घरमा करिया भै रहचाका षवस्याले मासिन्या मतवालि जातका ११ वर्ष नाघ्याका कंन्या र विधवा सधवालाइ लागु षुवाइ वाधि मुष थुनि २।३ जना मिलि करणि गऱ्या वा एति कुरा गरि एकैले करणि गऱ्यो भन्या जवरजस्ति ठहर्छ सधवा भया जार हांन्या जातको अैन वमोजिम् साधुको षुसि जार नहांन्या जातका सधवा र. विधवा कंन्याको करणि गर्न्या षवस्या र तागाधारि जातको कमारो र नमासिन्या जातका कमारालाइ ३ वर्ष मासिन्या जातका कमारालाइ ६ वर्ष कैद गर्नु म्यादको डवल् दिया लिनु पानि नचलन्या र छोया छिटो हालनु पर्न्या जातका कमारालाइ दामल गर्नु जवरजस्ति ठहर्नाले स्वास्नि मासिन्न.

२०. कमाराले र घरमा करिया भै रहचाका षवास्याले पानि नचलन्या जातमा छोया छिटो हालनू नपर्न्या जातका ११ वर्ष नाघ्याका कंन्या विधवा सधवालाइ लागु षुवाइ वाधि मुष थुनि २।३ जना मिलि करणि गऱ्यो वा एति कुरा गरि एकैले करणि गरयो भन्या जवरजस्ति ठहर्छ सधवा भया जार हांन्या जातको अैन वमोजिम् साधुको षुसि जार नहांन्या जातका सधवा विधवा कंन्याको करणि गर्न्या षवास्या र तागाधारि नमासिन्या मासिन्या जातका कमाराले करणि गरि आफु मिल्दालाइ भातमा र अरूलाइ पानिमा वोरेछ भन्या ३ वर्ष कैद गरि उसै जातको १ अक्षर वात्रा गालामा षोदि पानि वाहेक गरि छाडिदिनु करणि गरि आफुले उस्को हातको भात पानि षायाको रहेनछ भन्या १ वर्ष कैद गरि म्याद पुग्या पछि षसम्का जिम्मा गरि दिनु पानि चल्छ पतिया दिनु छोइ छिटो हालनु नपर्न्या जातका कमाराले भया ६ वर्ष कैद गर्नु छिटो हालनु पर्न्या जातका कमारालाइ ७ वर्ष कैद गर्नु म्यादको डवल दिया लिनु जवरजस्ति ठहर्नाले स्वास्नि मासिन्न.

२१. कमाराले र घरमा करिया भै रहचाका षवास्याले भया छिटो हालनु पर्न्या जातका ११ वर्ष नाघ्याका कंन्या सधवा विधवालाइ लागु षुवाइ वाधि मुष थुनि २।३ जना मिलि करणि गऱ्यो वा एति कुरा गरि एकैले करणि गऱ्यो भन्या जवरजस्ति ठहर्छ जार हांन्या जातका सधवा भया अैन वमोजिम् साधुको षुसि जार नहांन्या जातका सधवा र कंन्या विधवाको करणि गर्न्या षवास्या र तागाधारि नमासिन्या मासिन्या छोया छिटो हालनु नपर्न्या जातका कमाराले करणि

गरि आफ्ना जातलाइ भातमा र. अरूलाइ पानिमा वोरेछ भन्या ३ वर्ष भात्पानिमा वोरेको रहेनछ भन्या १ वर्ष कैद गरि उसै जातको १ अक्षर वाजा गालामा षोदि पानि वाहेक गरि छाडि दिनु छिटो हालनु पर्न्या जातका कमारालाइ ६ वर्ष कैद गर्नु म्यादको डवल दिया लिनु जवरजस्ति हुनाले स्वास्नि मासिन्न.

२२. व्राम्हण लगायेत् चार वर्ण छत्तिसै जातका कमाराले र घरमा करिया भै रहचा का षवस्याले तागाधारि जात गैह्रका ११ वर्ष नाघ्याका कंन्या सधवा विधवा को राजि षुसिले करणि गऱ्या सधवा भया अैन वमोजिम् साधुको षुसि विधवा को र कंन्याको करणि गर्न्या षवास्या र कमारालाइ दामल गर्नु.

२३. कमाराले र घरमा करिया भै रहचाका षवास्याले नमासिन्या मतवालि जातका ११ वर्ष नाघ्याका सधवा विधवा कंन्याको राजि षुसिले करणि गरेछ भन्या सधवा भया जार हांन्या जातको अैन वमोजिम् साधुको षुसि जार नहांन्या जातका सधवा विधवा कंन्याको कमाराले करणि गरि स्वास्निकाजात मिल्दा ले विहावारि गर्न्या रहेनछन् तेस्का हातको भात खाजा चलन्या रहेनछ गलंज्या पनि नहुन्या रहिछ भन्या तेस्ता षवास्या र तागाधारि जातका कमारा लाइ ३ वर्ष कैद गर्नु म्याद पुग्या पछि षसम्का जिम्मा गरि छाडिदिनु नमासिन्या मासिन्या मतवालि जातका कमारालाइ ६ वर्ष कैद गर्नु म्यादको चौंवर दिया लिनु पानि नचलन्या र छिटो हालनु पर्न्या जातका कमारालइ दामल गर्नु.

२४. कमाराले र घरमा करिया भै रहचाका षवास्याले नमासिन्या मतवालि जातका ११ वर्ष नाघ्याका कन्या सधवा विधवाको राजि षुसिले करणि गरेछ भन्या सधवा भया जार हांन्या जातको अैन वमोजिम् साधुको षुसि जार नहांन्या जातका कंन्या सधवा विधवाको करणि गरेछ भन्या इन्ले करणि गरि स्वास्निका हातको भात षाजा चलन्या रहेछ जात मिल्दाले विहावारि गर्न्या रहेछन् गलंज्याको प्रायश्चित्त गरि जातमा आउन्या रहीछ भन्या षवास्या तागाधारि जात र नमासिन्या मतवालि जातका कमारालाइ ३ वर्ष मासिन्या जातका कमारालाइ ६ वर्ष कैद गर्नु म्यादको डवल दिया रूपैया लिनु म्याद पुग्या पछि षसम्का जिम्मा गरि छाडिदिनु पानि नचलन्यालाइ र छोया छिटो हालनु पर्न्या जातका कमारालाइ दामल गर्नु.

२५. कमाराले र घरमा करिया भै रहचाका षवास्याले मासिन्या जातका ११ वर्ष नाघ्याका कंन्या सधवा विधवाको राजि षुसिले करणि गरेछ भन्या सधवा भया जार हांन्या जातको अैन वमोजिम् साधुको षुसि जार नहांन्या जातका सधवा विधवा कंन्याको करणि गरेछ भन्या तेस्ता षवास्या तागाधारि जात र नमासिन्या मतवालि जातका कमारालाइ १ वर्ष कैद गर्नु. मासिन्या जातका कमारालाइ ६ वर्ष कैद गर्नु म्यादका डवल् दिया लिनु. पानि नचलन्या र छिटो हालनु पर्न्या जातका कमारालाइ दामल गर्नु स्वास्निलाइ मासि दिनु. वेस्या भयाकि स्वास्नि रहिछ भन्या मासिन्न. करणि गर्न्या षवस्या र कमारालाइ पनि वात लाग्दैन.

२६. कमाराले र घरमा करिया भै रहचाका षवास्याले पानि नचलन्या मा छोया छिटो हालनु नपर्न्या छिटो हालनु नपर्न्या जातका ११ वर्ष नाघ्याका सधवा विधवा कंन्याको राजि षुसिले करणि गर्न्या षवास्या र तागाधारि जात नमासिन्या मासिन्या जातका कमारालाइ करणि गरि आफुले उस्का हातको भात पानि षाइ आफु मिल्दालाइ भातमा र अरूलाइ पानिमा वोरेछ भन्या १॥ वर्ष कैद गरि उसै जातको १ अक्षर वात्रा गालामा षोदि पानि वाहेक गरि षस्मका जिम्मा गरि छाडिदिनु करणि गरि आफुले उस्का हातको भात पानि षायाको रहेनछ भन्या १ वर्ष कैद गर्नु म्याद पुग्या पछि षसम्का जिम्मा गरि छाडिदिनु पानि चल्छ पतिया गराइदिनु. पानि नचलन्या जातमा छिटो हालनु नपर्न्या जातले करणि गऱ्या ४ वर्ष छिटो हालनु पर्न्या जातले भया ६ वर्ष पानिमा पाऱ्या ७ वर्ष कैद गर्नु म्यादको चौवर दिया लिनु म्याद पुग्या पछि षसम्का जिम्मा गरि छाडि दिनु स्वास्नि मासिंछे.

२७. कमाराले र घरमा करिया भै रहचाका षवास्याले छिटो हालनु पर्न्या जातका ११ वर्ष नाघ्याका कंन्या विधवा सधवाको राजि षुसिले करणि गरेछ भन्या सधवा भया जार हांन्या जातको अैन वमोजिम् साधुको षुसि जार नहांन्या जातका सधवा र विधवा कंन्याको करणि गरेछ भन्या तेस्ता षवास्या र तागाधारि जात नमासिन्या मतवालि जात मासिन्या मतवालि जात पानि नचलन्या जातका कमाराले करणि गरि आफु मिल्दालाइ भातमा र. अरू लाइ पानिमा वोरेछ भन्या १॥ वर्ष कैद गर्नु भात पानिमा वोऱ्याको रहेनछ भन्या १ वर्ष कैद गरि उसै जातका १ अक्षर वात्रा गालामा षोदि पानि वाहेक गरि षसम्का जिम्मा गरि छाडिदिनु छिटो हालनु पर्न्या जातका कमाराले करणि गऱ्या ४ वर्ष कैद गर्नु म्याद पुग्या पछि षसम्का जिम्मा गरि छाडिदिनु स्वास्नि मासिंछे.

२८. आफ्ना घरका वाधा कमाराले आफ्नै षसम्का स्वास्नि छोरि बुहारिहरूको करणि गरूं भनि फकाउनाको आसये गरेछ वा फकाउन लायेछ भन्या २ वर्ष घर वाहेकका अरू षस्मिनि पर्न्याको करणि गरू भनि फकाउनाको आसये गरेछ वा फकाउन लायेछ भन्या १ वर्ष कैद गर्नु म्यादका रूपैया दिया लि छाडनु.

२९. कसैले कमारो छदामा. मासिन्या जातकि छोरिको करणि गऱ्याको रहेछ जाहेर भयाको रहेनछ पछि पार भै घर्ति भया पछि उहि करणि जाहेर भयो भन्या सधवाको करणि गऱ्याको भया अैन वमोजिम् साधुको षुसि कंन्या विधवाको करणि गऱ्याको रहेछ भन्या ज्यू मासिदैन करणि गरि भात्मा वोरि दियो भनि कराउन आया तेस घर्तिलाइ २० रूपैया दंड गर्नु भातमा वोऱ्याको रहेनछ भन्या षतवात लाग्दैन.

# वाधाको

१. पानि चलन्या जातका वाधाले आफु वाधा वस्याका घरका षस्मीनि छोरि वुहारि स्वास्निको जवरजस्ति करणि गरेछ भन्या जवरजस्ति करणि गर्न्याका अैन वमोजिम्मा डेढो वढाइ कैद गर्नु कंन्या विधवा सधवा स्वास्निको षुसि राजिले करणि गऱ्याको भया जौना जातका वाधाले जौना जातका षस्मीनि स्वास्निको करणि गऱ्याको छ उसै जातकालाइ लेष्याका अैन वमोजिम्मा डेढो वढाइ कैद गर्नु ११ वर्ष मनिका कंन्या विधवाको करणि गरेछ भन्या डवल्का दरले कैद गर्नु.

२. पानि चलन्या जातका वाधाले आफु वाधा वस्याका घरका षसम्का छोरि वुहारि स्वास्नि वाहेक अरूको करणि गऱ्याको भया ११ वर्ष मनिका हउन् माथीका सधवा विधवा कंन्याको जवरजस्ति करणि गऱ्याको भया ११ वर्ष माथिका स्वास्निलाइ राजि षुसिले करणि गऱ्याको भया पनि जौना जातका वाधाले जौना जातका स्वास्निको करणि गऱ्याको छ उसै जातलाइ लेषियाका अैन वमोजम् दंड सजाय कैद गर्नु.

३. पानी चलन्या छोया छिटो हालनु नपर्न्या जातका वाधाले आफ्ना षसम्का स्वास्नि छोरि वुहारिको जवरजस्तिले करणि गऱ्या भनि राजि षुसिले करणि गऱ्या पनि अैन वमोजिम्को अंस सर्वस्व गरि दसौद लि उपर तेसै स्वास्निलाइ दिलाइ करणि गर्न्यालाइ दामल गर्नु.

४. पानि चलन्या छोया छिटो हालनु नपर्न्या जातका वाधाले आफ्ना षसम्का स्वास्नि छोरि वुहारि वाहेक अरू जातका स्वास्निको जवरजस्तिले करणि गऱ्याको भया पनि षुसि राजिले भया पनि करणि गर्न्यालाइ जौना जातका स्वास्निको करणि गरयाको छ उसै जातको स्वास्निको करणि गर्न्यालाइ लेष्याका अैन वमोजिम् दंड सजाय कैद गर्नु.

५. छोया छिटो हालनु पर्न्या जातका वाधाले आफ्ना षसम्का स्वास्नि छोरि वुहारिको जवरजस्तिले करणि गरोस् षुसि राजिले करणि गरोस् करणि गर्न्यालाइ काटि मीर दिनु.

६. छोया छिटो हालनु पर्न्या जातका वाधाले आफ्ना षसम्का स्वास्नि छोरि वुहारि वाहेक अरू जातका स्वास्निको जवरजस्तिले करणि गऱ्या भया पनि षुसि राजिले भया पनि करणि गर्न्यालाइ जौन जातका स्वास्निको करणि गरयाको छ उसै जातको स्वास्निको करणि गर्न्यालाइ लेष्याका अैन वमोजिम् दंड सजाय कैद गर्नु.

७. वाधाले आफु वाधा वस्याका घरका षस्मीनि छोरि वुहारिहरूमा २।३ जना स्वास्निको करणि गऱ्या जौना जातका वाधाले जौन जौन जातका स्वास्निको करणि गऱ्याको छ उसै जातका करणिका अैन वमोजिम् सजाय गर्नु.

# पसु करणि

१. गाइ विराँउन्या तागाधारि जात गैह्रलाइ अैन वमेजिम्को अंस सर्वस्व लि जनै झिकि नमासिन्या सुद्र जातमा मिलाइ दिनु नमासिन्या मतवालि जातले विरायो भन्या सर्वस्व लि मासिन्या पर्जा जातमा मिलाइ दिनु येस्ताको पानि चल्छ अवल्लाइ २॥ दोयम्लाइ २ सिम्लाइ १॥. चाहारलाइ १ रूपैया पानिको पतिया दिनु.

२. चार वर्ण छत्तिसै जात कसैले गाइको करणि गरूं भनि मन्सुवा गरि. तयार हुदा करणि गर्नु नपाउदै जाहेर भै करणि गर्ण पायेन भन्या तेस्तालाइ २० रूपैया दंड गर्नु रूपैया नतिऱ्या कैद गर्नु.

३. मासियाका कमाराले गाइ विरायो भन्या १ वर्ष कैद गर्नु म्यादको रूपैया नलिनु डवल्का हिसावले दिया पानिको पतिया दिदा ॥. आना लि पतिया दिलाइ जस्को कमारा हो उसैका जिम्मा गरि दिनु म्याद पुग्या पछि छोडि दिनु.

४. मानिसले विगाऱ्याकि गाइ अरूको रहेछ भन्या विराउन्याका सर्वस्ववाट मोल विगो धनिलाइ भराइ दिनु गाइ अदालतठाना अमालवाट लि सार्कि वाहेक पौनि जातलाइ सौपि दिनु.सार्कि गैह्र गाइ षान्या जातलाइ नदिनु. एस्ता गाइको दुद चोषाजात कसैले नषानू कसैले षायो भन्या अवल दोयम् सिम् चाहारका दरले २॥ रूपैया १। रूपैया ॥.रूपैया।. रूपैया दंडली पतिया गराइ दिनु भोरमा षान्यालाइ दंड पर्दैन २ रूपैया गोदान लि पतिया गराइ दिनुं

५. भैसिको करणि गर्न्यालाइ आफ्नै भैसिको करणि गरेछ भन्या ३० रूपैया दंड गरिपतिया गर्दा अवल्लाइ १॥ दोयम्लाइ १ सिम्लाइ ॥. चाहारलाइ ।. लि पतिया गराइदिनु अर्काको रहेछ भन्या करणि लिन्यावाट धनिलाइ मोल विगो भराइ दिनु एस्तामानिसले विगाऱ्याका भैसि चकुइ पर्छन् अदालत ठाना अमालवाट पौनि जातमा लिलाम् गराइ दिनु पानि चलन्या जात गैह्रले एस्ता भैसि पालदा पनि नपालनु दुद पनि नषानु. मासु षान्या जातले मासु पनि नषानू दुद मासु षान्यालााइ अवललाइ १।. दोइम्लाइ॥. सिम्लाइ ।.चाहारलाइ = लि पतिया गराई दिनु भोरमा षान्यालाइ दंड पर्दैन॥. आना लि पतिया गराइदिनु.

६. वाषा भेडाको करणि गर्न्यालाइ १० रूपैया दंड गरि अवल्लाइ १॥. दोयम् लाइ १ सिम्लाइ ॥. चाहारलाइ ।. गोदाम लि धर्मधिकारवाट पतिया गराइदिनु अर्काका भेडा वाषा रहचाछन् भन्या करणि लिन्यावाट धनिलाइ विगो भराइ दिनु मानिसले विगाऱ्याका भेडा वाषा अदालत् ठाना अमालवाट पौनि जातमा लिलाम् गराइदिनु. एस्ता पानि चलन्या जातले पालदा पनि नपालनु दुद मासु पनि नषानु षान्यालाइ अवललाइ १। दोयमलाइ ॥. सिम्लाइ ।. चाहारलाइ =लि पतिया गराइ दिनु. भोरमा षान्यलाइ दंड पर्दैन॥. लि पतिया गराइदिनु.

७. घोडि र गधहि उटनिको करणि गर्न्यालाइ २० रूपैया दंड गरि छोडिदिनु पतिया प्रायेश्चित्त केहि गर्नु पर्दैन.

८. कुकुर्नी सुगुर्निको करणि लिन्या लोग्न्या मानिस्लाइ ३५ रूपैया दंड गरि अवल् लाइ १॥ दोयम्लाइ १ सिम्लाइ ॥. चाहारलाइ ।. गोदान दिलाइ भात पानिको पतिया गराइ दिनु.

९. गाइ भैसि भेडा बाषा घोडि गधहि उट कुकुर सुगुरहरूको कसैले करणि गऱ्यो गरायो भनि पोल्यो सावित् गर्न सकेन रिसले पोल्याको ठहऱ्यो भन्या गाइसितको करणि पोलन्यालाइ ११ मैन्हा कैद गर्नु रूपैया दिया लि छाडि दिनु. अरू जातको करणि पोलन्या पोलाहालाइ उसैलाइ दंड लेषिया वमोजिम् दंड गर्नु रूपैया नतिऱ्या अैन वमोजिम् कैद गर्नु.

१०. कुकुर सुगुरलाइ करणि गराउन्या स्वास्निमा. मासिन्या जात रहिछ भन्या मासि पानिको पतिया गराइदिनु. नमासिन्या जातका स्वास्नि मानिस्लाइ १ वर्ष कैद गरि जात पतित गरि अव्ललाइ १। दोयम्लाइ ॥. सिम्लाइ ।. चाहारलाइ = का दरले दंड गरि पानिको पतिया दिलाइ छाडि दिनु.

# परिशिष्ट (क)

## स्वस्ति श्री ९ महाराजधिराज रामसाहबाट वाधि वक्स्याको थिति

प्रथम थिति ॥ ॥ श्रीनन्दामिश्रज्यूलाइ गुरु तुल्याइ वक्सनु भै हाम्रा संतानले तपाईका संतानलाइ गुरु तुल्याउनु अरुलाइ न तुल्याउनु भन्न्या धर्म गरि वक्सनु भयो ... ... ...

दोश्रो थिति ॥ ॥ पैल्हे वाँसका ढुंग्राले डालाले आह्निले भन्र्या वस्तु भरिकन लिनु दिनु गर्थ्या एस्ता तरहको लिनु दिनु गर्दा विथिति हुनाले १० मुठिको १ मानु ८ मानाको १ पाथि २० पाथिको १ मुरि गरि चलन गर्नु भनि माना पाथिमा छाप लाई वक्सनु भयो ... ... ...

तेश्रो थिति ॥ ॥ तुलो ढकको पनि अघि विथिति हुनाले १० लालको १ मासा १० मासाको १ तोला १८ लालको १ पल २७ तोलाको वोडि १०८ तोलाको १ विसौली २ विसौलीको १ धार्नि तुल्याई चलन गर्नु भनि तुलामा अंक काटि ढक्मा छापलाई वक्सनु भयो ... ... ...

चौथो थिति ॥ ॥ अंनको पहिले असामिले साहुछेउ लियाको कर्जा तिर्न नसकि जति सुकै वर्ष रहचा पनि वर्षै प्रतिको व्याज हिसाब गरि लिदा ढेरै वर्षमा रिन तिर्न न सकन्या भया पनि वर्ष प्रतिको व्याजमा हुनाले कहिले पनि रिन तिर्ननसकदा मुलुक्मा कोहिता कहिले पनि साहु देषि छुटि नहुन्या भै सवै रिनग्राहि भया तस्कारण १ वर्षको पचउदका हिसावले दस वर्षमा ३ गुन हुँछ साहुले तेवर लिनु असामिले साउ व्याज केहि पनि तिर्न नसकि १० वर्ष देषी उभो जति सुकै वर्ष रहचा पनि फेरि सकन्या भै तिर्दाका बेलामा वर्षै प्रतिको व्याज साहुले नलिनु तेवरमात्र लिनु भंन्या थिति वांधी वक्सनु भयो ... ... ...

पाँचौ थिति ॥ ॥ दामको पनि पहिले असामिले साहुछेउ लियाको कर्जा तिर्न नसकी जति सुकै वर्ष रहचा पनि वर्षै प्रतिको व्याज जमा हुनाले कहिले पनि रिन तिर्न न सक्दा मुलुकमा कोहिता कैले पनि साहुदेषी छुट्टी न हुन्या भै सवै रिनग्राहि भया तस्कारण १ वर्षका हिसावले दसौदका १० वर्षमा दोवर हुंछ साहुले दोवर लिनु असामिले साउँ पनि व्याज पनि तिर्न न सकि १० वर्ष देषि उभो जति सुकै वर्ष रहचो भन्या पनि फेरि सकन्या भै तिर्दाका बेलामा वर्ष प्रतिको व्याज साहुले न लिनु दोवरमात्रै लिनु भंन्या थिति वाँधि वक्सनु भयो ... ... ...

छेटौं थिति ॥ ॥ पध्याराको थोरो थोरो झगरा नसु ं नु भंन्या हुकुम भयो क्या अर्थले भन्या पध्यारामा वहुत स्त्रिजाति जान्या ताहा देषी अरु कोही चाकर जान्या पानि न भै भन्या कसैको पनि काम नचलन्या तसर्थ जोअघि पध्यारामा लिन पुग्यो तेसैले अघिवाट ल्याउनु अर्काले म लैजान्छु न भंनु तेस पछिकाले तेसै पछि लै जानु यस्तै क्रमले पानि ल्याउनु तेस्मा पनि कसैले अलिकति कुरामा झगरा गऱ्यो भन्या कचहरि जोरि झगरा नसुंनु भंन्या थिति वाँधि वक्सनु भयो ... ... ...

सातौ थिति ॥ ॥ कोलको पनि थोरो थोरो झगरा नसु ंनु भंन्या हुकुम भयो किन भन्या ढेरै घरको कोल यकै हुँछ आफ्ना आफ्ना पालाले पेलनु अर्काले म अघिवाट पेलछु न भंनु तस्मा पनि ढेरै स्त्रिजाति अरु कोहि चाकर वाकरै हुँछं कदाचित थोरो झगरा भयो भन्या कचहरिमा ल्याइ झगरा नसु ंनु भंन्या थिति वाँधि वक्सनु भयो ... ... ...

आठौं थिति ॥ ॥ कुलाको पनि झगरा नसु ंनु भंन्या हुकुम भयो क्या निमित्त भन्या कुलामा पनि बहुधा वाधा कमारा चाकरै जाँछन् तसर्थ आफ्ना आफ्ना षेतको हिसाबमा आयाको पानिको भाग पालीपालासित लाउनु आफ्ना पाला बाहिक र आफ्ना हिसाब वाहेक अर्काले पानि न लाउनु तस्मा पनि थोरो झगरा भयो भन्या कचहरिमा जोरि झगरा नसु ंनु भन्या यस्तै थिति वाँधि वक्सनु भयो ... ... ...

नवौं थिति ॥ ॥ अघि ब्राम्हणलाई विर्ता दिदामा पनि फलानु डाडो फलानु षोलो फलानु पहरो फलानु कांल्हो भित्रको जगा विर्ता दिञ्यु भन्याको मात्रै एति मुरि यति रोपनि येति षेत भंन्या ठेगाना केही न हुनाले ब्राम्हणको विर्ताको र रैकर जगाका साध किलाको वंदेज न भयाको नजर हुदा कस्तो हुकुम भयो भन्या अव उप्रान्त ब्राम्हणलाइ विर्ता संकल्प परि वक्सदा श्री ५ महाराजाको भुमि चौतरियाको झारि काजिको विंति ब्राम्हणको हात दान गर्नाले येति षेत येति रोपनि येति मुरि भनि संकल्प गर्नु संकल्प गराउन्याले पनि संकल्प वाक्ये यही येति षेत येति रोपनि येति मुरि भंन्या वाक्ये परि संकल्प गराउनु विर्ता लिनु अरूलाई दिलाउनु पनि श्री ५ माहाराजाका हुकुमले थर घर पाँचहरू गै साधलाई ४ किल्ला गाडि येति षेत येति रोपनि भनि साधलाइ श्री ५ महाराजाका वाहुलिवाट संकल्प भयामा घटि बढि कत्ति नपारि जति संकल्प भयाको छ तति साधलाई आउनु भन्या थिति वाधि वक्सनु भयो ... ... ...

दसौं थिति ॥ ॥ श्री देवताको गुठ धर्मसालाको गुठ. ब्राम्हणहरूलाइ विर्ता संकल्प गरि वक्सदा चौतरियाको झारि भन्याको क्या निमित्त हो भन्या चौतरिया भन्याका आफ्ना भाइ भाइ भन्याका मुषे अंग हुन् अंग पुर्न गरि दान गऱ्या आफुलाइ यथोक्त फल हुँछ भनी चौतरियाको झारि भन्याको कारण येति हो, काजिको विंति भन्याको क्या अर्थ भन्या पनपक्षे न गरि योग्ययोग्य विचार गरि काजिले विंति गर्नु काजिको विंति भन्याको येति हो. पाँचको साध भन्याको क्या अर्थ हो भन्या छ थर प्रभृति अरु पाँच साध भाइ वसि येति षेत येति रोपनि येति मुरि येति षेतको घडचारि येति पाषो भनि निकास पैसार संधि सर्पनको विचार राषि चार किल्ला गाडी साधलाइ दिनु पाँचको साध भन्याको यो हो भन्या थिति वाधि वक्सनु भयो ... ... ...

येघारौं थिति ॥ ॥ पाँडे पंथ अर्ज्याल षनाल राना वोहरा तिमिहरु छ थर भयौ मितिहरूलाइ छ थर भन्याको वाध्याको क्या अर्थले हो भन्या चौतरिया काजि सर्दार इ प्रभृति अरु जो कोहि अन्याय अनरितिमा लागि गादिको विगार्नामा र निसाफ विगार्नामा पस्नन् तिनको कत्ति मोहवद मोलाहिजा न राषि जो भयाको विस्तार विंति गर्न आउनु भनि मर्जि भै छ थर भंन्या व्यवस्ता वाधि वक्सनु भयो तिमिहरूका संन्तान, दरसन्तानलाइ हाम्रा संतान दरसंतानले गादिको सोझो गरंज्यालसम्म थामि वक्सौला भनि हुकुम भै थिति वाधि वक्सनु भयो ... ... ...

वाह्रौ थिति ॥ ॥ गौचर राषनु भन्या हुकुम भयो गौ ब्राम्हणलाई षाना कन दुःख हुन्छ र राजालाइ प्रत्यवायलागछ भंना निमित्त गाउ गाउमा निकास पैसार को चल्दो मिल्दो पारि गौचर राषनु भंन्या थिति वाधि वक्सनु भयो ... ... ...

तेह्रौ थिति ॥ ॥ वाटाका रूष राषनु भंन्या हुकुम भयो क्या अर्थले भन्या दुषी गरीव काज काम गरि थाकि आउन्या बोझा वोकि हिडन्या अरु जो कोहि वाटामा हिडन्या मानिस पनि गर्मी हुन्छ भनि छाहारि वस्न खोजछन् भंना निमित्त वाटाका रूष पालनु वाटाका रूष जो काटतछ ५ रूपैञा दंड गरि लिनु भंन्या मर्जि भै थिति वाधि वक्सनु भयो ... ... ...

चौधौं थिति ॥ ॥ पध्यारामा वन पालनु रूष न भया देषी जैले षोज्यो तैले पानि रहदैन सुकी जान्छ वन ढेरै फाडिया पैरो पनी जान्छ ढेरै पैरो गया उपधाहा चल्छ उपधाले षेत पनि लैजान्छ वन

न भया गृहस्तिको कौनै काम पनि चल्दैन तसर्थ पध्याराको वन जो काटला तेसलाई पनि ५ रूपैञा दंड गरि लिनु भन्या थिति वाधि वक्सनु भयो ... ... ...

पंध्रौ थिति ॥ ॥ चौतरिया भाई गोतिया इनहरूले जिय संवंधि ठूलो विराउ गऱ्या मुडि विदेस गराउनु संन्यासि वैरागि भाट इनले पनि ठूलो विराउ गऱ्या भन्या मुडि विदेस निकाला गराउनु भाइ चौतरिया गोतियालाइ विदेस गराउनु भन्याको क्या अर्थ भन्या जिउ मारिन्या पिराउ गऱ्यो भन्या जिउ लिन्याको जिउ लिनु भंन्या सास्त्रमा पनि कहचाको छ जिउमाऱ्या भन्या गोत्रहत्या लागन्या नमाऱ्या देषी भन्या राजालाइ प्रत्वाय लागन्या तसर्थ देसनिकाला गर्नु पनि माऱ्यै तुल्यछ भनिविदेश गराउनु भन्याको हो व्राम्हणलाइ पनि माऱ्या व्रम्हहत्या लागन्या न माऱ्या राजालाइ प्रत्यवाव लागन्या तस्कारण मुडनु पनि माऱ्यै तुल्य छ भनि मुडी विदेस गराउनु भन्याको हो वैरागि संन्यासी भेष लियाका हुनाले अवध्य छन् भाट पनि अवध्य छन् भनि देश निकाला गर्नु भन्याको हो तसर्थ यसै गर्नु थिति वाधि वक्सनु भयो ... ... ...

सोह्रौं थिति ॥ ॥ षस मगर नेवार प्रभृति जात मध्यमा जियेसंवधि विराउ गऱ्या भन्या जसले विरायाको छ उसैको मात्र जिये मार्नु जस्को पाप उस्को गर्धन भंन्या थिति वाधि वक्सनु भयो ... ... ...

सत्रौं थिति ॥ ॥ सुवर्ण का गहना श्री पाटवंदि माहारानिले मात्र पाउमा पैह्रनु क्या अर्थले भन्या सुवर्ण भन्याको नारायणको अंश राजा भन्या का पनि नारायणका अंश हुन पाटवंदि महारानि भन्याका लक्ष्मीका अंश हुनाले पाटवंदि महारानिले सुवर्णका गहना पाउमा पैह्रनु भैयाद चौतरियाहरुका चौतार्निहरुले ता श्री ५ महाराजा श्रीमहारानीवाट वक्स्या मात्रै पाउमा न लाउनु  वक्सी त पाउवाहेक मात्रमा लाउनु भाई चौतरियाका रौतेला रौतेली लाइ वालषकालमा मात्र पाउमा लाउनु व्राम्हण षस मगर प्रभृति अरु जातिले त श्रीमहाराजावाट वक्स्या मात्र हातमा लाउनु. भनि थिति वाधि वक्सनु भयो ... ... ...

अठारौं थिति ॥ ॥ (मूलैमा १८ थिति छूटन गयेको छ)

उनिसौं थिति ॥ ॥ चार पुरोहित तुल्याइ वक्सनु भयो अर्ज्याललाइ अर्ज्यालि होतु अचार्ज वगाल्या लाइ होतु विहाऱ्या लाइ अर्ज्यालि आचार्ये षनाल लाइ ब्राम्हण भट्टराइ लाई  गणेश ति चार पुरोहितका व्यवस्थाको थिति वाधि वक्सनु भयो ... ... ...

विसौं थिति ॥ ॥ गोर्षामा प्रवेस हुदा पैले तल्ला कोटमा गादी पुऱ्याका हुनाले पाडे ब्राम्हण लाई पुरोहित्यात्रि वक्सनु भयो अर्येत पर्येत (अद्य पर्यन्त) पनि पाडे ब्राम्हणहरु तल्ला कोटमा पुरोहित छदै छन् ... ... ...

यकाइसौं थिति ॥ ॥ तल्ला कोटमा श्रीदेवता स्थापनागरि वलिदान गरि माथि दर्वारमा वलिदान गर्नु तल्ला कोटमा देवता स्थापना गरि वलिदान गरिकन माथि दर्वारमा वलिदानादि विधि गर्नु भंन्या थिति वाधि वक्सनु भयो ... ... ...

वाइसौं थिति ॥ ॥ ग्राँजा थापा लाइ ददांगि मान वक्सनु भयो तुरुक क्षाकि आले ग्रांजा थापा ग्यामि राना इ तीन थरले आलो पालो गरि राषनु भनि कपर्दारि मान वक्सनु भयो पाडे पंथ अर्ज्याल इ तिन् थरलाइ आलो पालो गरी राष्नु भनि षजानाको काम वक्सनु भयो धर्माधिकार सर्दारि भान्स्या येति मानका पनि अर्ज्यालै लाई वक्सनु भयो भन्या थिति वाधि वक्सनु भयो ... ... ...

तेइसौं थिति ॥ ॥ विह्नौटाको त्रिसाला कमाइ वाली आफैले षानु चौथा साल देषी धनि वोटि तल्सींलाई दिनु वनि वोटि कमाउन्याले षानु भंन्या थिति वाधि वक्सनु भयो ... ... ...

चौविसौं थिति ॥ ॥ वाह्र थर अठार थर भन्या चौविसौं थिति वाधि वक्सनु भयो ... ... ...

पचिसौं थिति ॥ ॥ पाटनका राजा सिद्धिनरसिंहमल्ल सित हाम्रा संतान न भया तम्रा संतानले तम्रा संतान  न भया हाम्रा संतानले राज्ये गर्नु भन्या हुकुम भै यस्तो वंदोवस्त गरि वक्सी पाटन वाट चौविस कोठि झिकाइ. इन लाइ सात षत माफ गरि वक्सनु भयो भंन्या थिति वाधि वक्सनु भयो ... ... ...

छविसौँ थिति ॥ ॥ श्री महाराज रामसाहबाट मैले वाध्याका थितिमा छोटा वडा प्रजा प्राणि चार वर्ण छतिस जात जो लंधन गर्ला तसलाइ म मेरा संतान मा जो राजा होला उसले ढुंगा छुवाइ षत अनुसारको राजाले डंड गर्नु भन्या थिति वाधि वक्सनु भयो ... ... ...

यो ढुंगा छुवाउनु भन्याको कस्तो हो भन्या श्रीलक्ष्मीनारायण देवता को पाउका प्रतिनिधि ढुंगो हो. सो जानि पान फूल द्रव्य तसै सिलामा चढाई अन्याय गऱ्याको पाप छुटन्या उपाये येहि हो भनि यस्तो थिति वाधि बक्सनु भयो .. ... ..

# परिशिष्ट (ख)

श्री मन्महाराजाधिराज कस्य रुक्का. - - - - - - आगे हाम्रा मुलुक्का चार वर्ण छत्तिस् जात गैह्र प्रति विवाहिता साक्षात् भाउज्यूसंग वीराउ. गर्न यो कुरा ठुलो पाप रहेछ आजसंम जो जति भयो सो भै गयो जंगला मुलुक हुनाले जातको तजविज गर्नु पर्दा हाल किराती लिंवु लाप्च्या र जुम्लीहरु वाहिक राषी आजदेषि उप्रान्त जानाजानी कसैले साक्षात भाउज्यू विराउ नगर्नु भंन्या थीति वन्धेज वाँधि वक्स्यौं यो थीति वमोजिम वंदेजमा जो रहदैन तसलाइ जात अनुसार तप्सील वमोजिमको सासना होला - - - -

तप्सील

उपाध्या ब्राम्हणहरुले जाना जानी भाउज्यू वीराउ गऱ्यो भन्या जात पतीत गरी मुडी देश निकाला गर्नु -

गोतीया भाइ क्षत्रिय जातहरुले जाना जानी भाउज्यू वीराउ गऱ्या भन्या जात पतीत गरी देस निकाला गर्नु -

अरु क्षत्रीय रजपुत जातहरुले जाना जानी भाउज्यू वीराउ गऱ्या भन्या लिंग काट्नु - -- --

संन्यासीहरुले जाना जानी भाउज्यू वीराउ गऱ्या जात पतीत गरी मुडी देश निकाला गर्नु - - -

षस जातहरुले जान जानी भाउज्यू विराउ गऱ्या भन्या लिंग काट्नु - -

वैस्य जातहरुले जान जानी भाउज्यू विराउ गऱ्या भन्या लिंग काट्नु - -

मगर जातले जान जानी भाउज्यू विराउ गऱ्या भन्या लिंग काट्नु - -

गुरुं घले जातले जाना जानी भाउज्यू विराउ गऱ्या भन्या लिंग काट्नु - -

नेवारहरु सुद्र जातले जान जानी भाउज्यू विराउ गऱ्या भन्या सर्वस्व लिनु - -

दमाइ, सुनुवार, कामी, सार्की गाथीइन् हुर्क्या प्रभृति पानी नचल्न्या जातले जान जानी भाउज्यू विराउ गऱ्या भन्या मासी दिनु -

वलामी माझी दनुवार सुनुवार मुर्मि भोटचा चेपाङ् पहरिवरै कुम्हाल वरानु गैरहहरुले जान जानी भाउज्यू विराउगऱ्या भन्या मारी दिनु – –

इति सम्वत् १८९३ साल मिति अषाड सुदी ७ रोज ४ सुभम् - - -

# परिशिष्ट (ग)

श्री मन्महाराजाधिराज कस्य रुक्का - - - - - - - आगे पाँच थपौलाका जैसी वाहुनप्रति १२ हजार सल्ल्यानमा विवाह गर्दैनन् हाम्रो मात्री आफ्ना साष्यात् मामाकी छोरीसित व्याहा पनी हुँछ उठाई पनि ल्याउछौं हाम्रो थिति भया वढीया हुंदो हो भनी तिमिहरुले कप्तान नरसिंह थापाले हाम्रा हजूर विन्ती गरि पठाउँदा जाहेर भयो तसर्थ अव उप्रांत जैसी वाहुनले मामाकी छोरी व्याहा नगर्नु उठाई पनि नल्याउनु भनी वंधेज वाँधीवक्स्यौँ जो यो वंधेज नाघी मामाकी छोरी व्याहा गर्ला उठाइ ल्याउला तसलाइ जात माफिकको सासना होला तेस्तासित जाना जान्मा भात षान्यालाई पनी नीती स्मृतीहोला इति संवत् १८८७ साल मिति पौष बदी ११ रोज ७ शुभम् - - - - - -

# परिशिष्ट (घ)

स्वस्तिश्री गिरिराज चक्रचूडामणि नरनारायणेत्यादि विविध विरुदावलि विराज मान मानोत्रत श्रीमन्महाराजाधिराज श्री श्री श्री महाराज राजेन्द्र विक्रम शाह वहादुर सम्सेर्जङ्ग देवानाम् सदा समर विजयिनाम् – – – – – – – – – – – –

आगे दलभंजन पाँडे के तैंले दरवारमा वसी अदालती काज चलाउँदा गर्न्या कामको सवाल गरीवक्स्यौं षातिर्ज्मासित यस काजमा. तनमन लगाइ मोलाहिजा कसैको नराषि लोभ मोहमा नपसी जस्ताको तस्तो निसाप पारी छिंनु – – – – –

तपसील

प्रथम सवाल ॥ हाम्रा भर मुलुकका श्रीगुरु प्रोहित चौतारा काजी सर्दार सुब्बा अदालत दफतरषानाका श्रीकुमारीचोक सुवेदार ज्मादार अमाली इजारादार रकमी सिपाही गैरहले थिचो मिचो गरि अन्या गऱ्या निसाफ पायुनं भनी कराउन आउन्या चार वर्ण छतिसै जात छोडा वडा गरीव गुरुवा जो फिऱ्याद गर्न आउँछन् जसको नाउँमा फिराद गर्न आउँछन् तसलाई झिकी तनको कुरो जस्तोको तस्तो निसाफ पारि छिंनु आफूले आट्नु नसक्याको कुरा हाम्रा हजूरमा विन्ति गरि हुकुम बक्स्या बमोजिम गर्नु

दोस्रो सवाल ॥ फिऱ्यादीका दोहोरो कुरा सुनी आफ्ना चित्तले ठहराउन नसक्याका कुरामा श्री जनरलसित बसी ठहराइ सो कुरा हाम्रा हजुरमा विंति पारी हुकुम बक्स्या बमोजिम गर्नु

तेस्रो सवाल ॥ फिऱ्यादीका कुरा सुनी निसाफ गर्दा छोडा वडा जसको बेजात्रिले फेराद आयाको छ तस्लाइ झिकि पुर्पछे सुनी ज्याकुरो वेजात्रि गऱ्याको ठहर्छ सोकुरा दिलाइदिनु तेरा भन्दा नमानी धेगाइ गर्न्यालाइ हाम्रा हजुरमा विंति पारी हुकुम वक्स्या बमोजिम गर्नू – – – – –– – – – – –– – – – –

चौथो सवाल ॥ अंत अधार केहि नहुन्या दर्वारैवाट वस्क्याको जगा दर्व्यले मात्र वाचन्या वक्स्याको जगा दर्व्य व्यहोरन नपाइ षाना लाउन्या विनु मन लागन्याको कुरा हाम्रा हजुरमा विंति पारि मुनासिव माफिक हामीले वस्क्याको वेहोरोई गर्नु – – – –

पाँचौ सवाल ॥ चारै षुटुका गरीव गुरुवा फकीडफकडा राहदारी नपाई अट्केर कराउन्याहरुको कुरा सुनी उसवाट कौनै कुराको विगार नठहनर्या देष्या जौनादिसा जान्या भंछ तसतसै दिसाको राहदारी गर्न्या भारादार छेउ पठाई राहदारी गरी पठाई दिनू – – – – –– –

छैटौँ सवाल ॥ फिऱ्या आउन्या र छिवरो भाग जो छयलिरहेछ अघि निका मानिसको नालीस गरी पुर्पछे गर्दा पोल्हा ठहऱ्यो भन्या सो कुरा हाम्रा हजूरमा जाहेर गरी ममोनासिव माफिकको सासना हाम्रा हुकुम वमोजिम गर्नु – – – –

सातौ सवाल ॥ फिऱ्यादुका कुरा सुंदा विडि हाल्या भन्या विडी कर्पन समाती पानी कराहि नपुगी छिन्या रहेछ भन्या झगरियाको कायलनामा लि चारदाम रष्याइ दंड जिताउरी गरि छिन्नु झगरियाले भाकनु भकाभकाउनामा राजी छौ भन्या भकाइ दीनु पानी कराही नदीइ झगरा छिंन्या रहेनछ भन्या आफ्ना मानिस साथ अदालत् पुऱ्याइदीनु – – – – –– – – – – –– – – – ––

आठौं सवाल ॥ सर्वस्व हुन्या नाता सानिमा पऱ्याका षताहार स्वास्नी पाचुकी गर्न्या झगरा आयो भन्या आफना मानिस साथलाई इटाचपली डिट्ठा अर्जवेगी छेउ पुऱ्याइदीनू – – – – – –– – – – – –– –

नौमा सवाल ॥ अरू कचहरीमा हाम्रो झगरा सुनी छिनि दियेन धेरै भयो पुर्पछे पाऱ्युन हामी गल्यं भनी कराउन आया भन्या उस्को झगरिया ल्याई पुर्पछे गरी जस्ताको तस्तो निसाप पारी चाँडै छिनी दिनू –

दसमा सवाल ॥ सवाल वमोजिमको काज् काम गर्दा १ पट्टी चप्रासीलाई रुजु राषी अह्राउनु षटाउनु तेरामार्फत भयाको मोहरका दस्तूर वा जे आम्दानी षसोषास दर्वार दाषील गरी रसीद लीनू

यगारौं सवाल ॥ येस काजमा चाहिन्या मानिस विचारी २ वहिदार २ तहविल्दार २ टहलुवा जना १ ज्मा जवान ७ के षांगी वर्ष १ को रुपैया १३२४ ताहीका आमदानीमा ली तप्सील वमोजिम षानु विचारी जना २ के ७०० वहीदार जना २ के रुपैया २८८ तहवील्दार जना २ के ३०० टहलुवा जना १ के रुपैया ३६ – – – – –– – – खान्गि वाहेक आफुले गऱ्याको कामको आम्दानीका दसौंध र मामूली जडावर दस्तूर वा श्री कुमारीचोकको सर्दार विचारी नौसिंदा तहविल्दार टहलुवाका सरह वमोजिम तिमिहरुले पनि ताहिका आम्दानीमा लिनु मोजरा पर्ला – – – – –– – – –

इति संवत् १८८३ साल मिति फागुन सुदी ७ रोज ५ शुभम् – – – – –– – – – –

# परिशिष्ट (ङ)

## श्री दुर्गाज्यू

| श्री ५ ज्यू ज्यू बाज्याज्यू | श्री ५ बाज्याज्यू | श्री ५ बुबाज्यू |
|---|---|---|
| १ | २ | ३ |

स्वस्ति श्री गिरिराज चक्रचूडामणि नरनारायणेत्यादि विविध विरुदावली विराज मान मनोन्नत श्रीमन्महाराजाधिराज श्री श्री श्री पृथ्वी वीर विक्रम शाहदेव जङ्गवहादूर देवानाम् सदा समर विजयिनाम्

– – – – – – – –

आगे हाम्रा भर मुलुक सदर मोफसलमा रहन्या भारादार कामदार गौडा गौडा अदालत ठाना. कौशी कुमारी चोक धर्माधिकार. मुलुकीखाना सदर दफदर कम्पू पल्टन कंम्पनीका दफदर. गैह्र कचहरि कचहरिमा रहन्या हाकिम. कामदार. अमाली द्वाऱ्या. इजारादार. सर्वाङग. माफि जगाका गुठीयार. विर्तावार मठदारी सन्त महन्त मुषीया जिम्मावाल चौधरी थरी महतौ मिझाऱ्या रैयत. गैह्र प्रति आज सम्म मरमामिला गर्दा. एकै वेहोरामा. कसैलाइ कमि कसैलाइ वढता सजाय हुन जाने हुंदा तसर्थ अव उप्रान्त छोटा वडा प्रजा प्राणी सवै लाइ षतजात माफिक यकै सजाय हवोस्. घटी वडी नपारोस् भन्नाका निमित्त तपसिल वमोजिमका भारादार समेत राखी कौसल गरी कौसलमा ठहऱ्या वमोजिमका अैन तयार गर्न भनी श्री ३ महाराज जङ्ग वहादूर राणा जी. सी. वी. आण्ड सि एल आइ थोङ लिङ पिम्मा को काङ वाङ स्यान् प्राइम मिनीष्टर याण्ड कम्याडर इन चीफ लाइ हुकुम वक्सी वन्याको अैन हामी तिन पुस्तावाट पनी मंजुर गरी. सम्वत् १९१० साल पौष सुदी ७ रोज ५ का दिन लेषियाका कितावमा हाम्रो रोहवरमा. कौसलका तजविजमा सच्याउन षारेज गर्न्या ठहऱ्याका सच्याइ षारेज गरी नत्रा भयाका अैन थपी सवैले यसै अैनमा लेषीया वमोजिम काज काम निसाफ गर्नु यसै कितावमा लेषिया वमोजिम काज काम निसाफ नगरि. घटि वडी पारि काम काज निसाफ गर्न्या लाइ उसै कुराका. अैनमा लेषीया वमोजिम दंड सजाय गर्नु. कितावमा लेषियाको अैन सच्याउनु थपनु पर्दा हाम्राप्राइम मिनीष्टर कौसल वसी अैन षानाका. हाकिमले थपनु मेट्नु सच्याउनु हुन्छ.इ वाहेक अरू सदर मुफसल कचहरीमा दियाका कितावमा कसैले थपी मेटी कलम घटीवडी पाऱ्या को ठहऱ्या जागीऱ्या रहेछ भन्या जागीर षोसी आठ वर्ष ढाकऱ्या रहेछ भन्या तेसै आठ वर्ष कैद गर्नु म्यादका

रूपैया नलिनु. औ हाम्रा वेहतर हुन्या प्रजा प्राणि लाइ सुविस्ता रक्षा हुन्या काम कुराका ऐन अरू पनि मिनीष्टर कौसल वसी भारादारले तजविज गरी वडाउनु. थपनु गरी किताव लेषाउदै गर्नु नञा भयाका अैन वर्ष वर्ष दिनको जम्मा गरि एकै फेरा श्री प्राइम मिनीष्टरको छाप लगाइ जगा जगामा पठाउनु भनी हामी ३ पुस्ता वसी हामी देषी रैयतले यसै अैनवमोजिममा रहनुपर्न्या हुकुम वक्सौ श्री प्राइम मिनिष्टर लगायेत्. काज काम गर्न्या कारिंदाले यसै ऐन वमोजिम काज काम गर्नु भंन्या भै चली आया माफिक सम्वत् १९३३ साल चैत्र सुदी १ रोज देषी उप्रान्त पनी तिमि. श्री ३ महाराज रणोदीप सिंह राणा वहादूर केसि यल् आइ थोङ लिङ पिम्मा को काङ वाङ स्यान् प्राइम मिनिष्टर याण्ड कम्याडर इन चीफले पनी. साविकमा विरोध नपरी.नञा चाहिन्या स्मेत्. घटाउनु वडाउनु हन्छ. भन्या हुकुम वक्स्यौं भन्या भया मुताविक १. २. ३. स्वर्गे भै वक्सनुहुदा ३८ साल जेष्ट वदी ४ रोज ३ देषी उप्रान्त. हामिवाट पनी. सोही वमोजिम गर्नु भन्या हुकुम वक्स्यौं भन्या भया मोताविक भै चलि आया माफिक सम्वत् १९४२ साल माग वदी १ रोज ३ उप्रान्त पनी तिमि श्री ३ माहाराज वीर शम्सेर जङ्ग राणा वहादूर प्राइम मिनिष्टर याण्ड कम्याडर इन–चीफले पनी.साविकमा विरोद नपर्न्या र. नञा चहिन्या स्मेत् घटाउनु वडाउनु हुंछ भन्या हुकुम वक्स्यौं.

# परिशिष्ट (च)

## श्री दुर्गाज्यू

| श्री ५ ज्यू ज्यू बाज्याज्यू | श्री ५ बाज्याज्यू | श्री ५ बुबाज्यू |
|---|---|---|
| १ | २ | ३ |

स्वास्ति श्री. गिरिराज चक्रचूडामणि नरनारायणेत्यादि विविध विरुदावली विराज मान मानोनत्. श्रीमन्महाराजाधिराज श्री श्री श्री. महाराज. पृथ्वी वीर विक्रम सम्सेर जङ्ग वाहादूर साह वहादूर देवानाम्. सदा समर विजयिनाम् – – – – –

शास्त्रवाट मात्र कालका प्रभावले. सवै वेवहार चलि नसकदा र सवै प्रजामा पनि वुद्धि तिक्ष्ण नहुदा यकै मुद्दामा काहि केहि काहि केहि इन्साफ भयाको देषिदा. अव उप्रान्त छोटा वडा प्रजा प्राणि सवैलाइ षत जात माफिक यकै सजाय हवस्. घटि वढि नपरोस भन्ना निमित्त १ २. ३ हरुवाट श्री. ३ माहाराज जङ्ग वाहादूर. राणाजी सी वी आण्ड जी सी येस आइ थोङ लिङ पिम्मा को काङ वाङ स्यान्. प्राइम मिनीष्टर याण्ड कम्याडर इन चिफ लाई हुकुम् वक्सदा सोही वमोजिम. अैन तैयार गरि. ३ हरूवाट स्मेत्. मंजुर गराई. सम्वत् १९१० साल. पौष वदि ७ रोज ५ का दिन देषी चलि आयाका थिया. सो अैन ढेरै काल देषी. वनाइ आयाको. साह्रै लम्वायमान भै समझन स्मेत्. मुसकील पर्न्या. भयाको र. फेरि पूर्वापर हेरि नसोधि दोभरा तेभरा स्मेत हुन गयाको छ सो अैनमा. पूर्वापर. हेरि दोभरा कटाइ. देस काल चलन विचार गरि. विवहार सग मिलाई. छोट्करि तवर. सग. देषिया सम्मको कुरा पुऱ्याई. वनाउन पाया. विवहार स्मेत्. चलन्या गरि. अैन तैयार. गराउछु भनि. तिमि हाल. ४२ साल मार्ग वदि. १ रोज २ का दिन. हामीवाट श्री ३ माहाराजी षिताव वक्स्याका.. श्री मद्दति. प्रचण्ड भुजदण्डेत्यादि. श्री श्री श्री महाराज. वीर सम्सेर जङ्ग राणा वहादूर प्राइम मिनीष्टर याण्ड कम्याडर. इन चीफले हाम्रा हजुरमा विंति गर्दा. सो कुरा हाम्रा चित्तले पनि. मनासिव. ठहराई. सवै विचार गरि कोहि दुष नपाउन ईन्साफ पुगी. वेवाहार चलोस्. प्रजाले देस काल चलन वमोजिमका. अैन भै इन्साफ पाउन् भंन्या. दयाले तिमिले. आफ्ना वुद्धिले. ठहराई तयार गर्नु भनी. हामीवाट हुकुम् वक्सदा सो वमोजिम सम्वत १९४३ साल. मिति. पौष वदि. १ रोज १ मा तयार गऱ्याको अैन हामी वाट पनी. मंजुर गरि. वक्स्या वमोजिम हामी लगायेत्.. हाम्रा भर मुलुकका. रैयत् तलक. गैह्रले. येसै अैनमा लेषिया वमोजीम. काज काम ईन्साफ गर्नु. येस कितावमा लेषिया वमोजिम. काज काम ईन्साफ गर्नू.

यस कितावमा लेषिया वमोजिम नगरि घटि वडि पारी गर्न्यालाई उसै कुरा. ऐन मा लेषिया वमोजिम दंड सजाय होला.. औ कितावमा लेषियाका. अैन सच्याउनु थपनु पर्दा. श्री प्राईम मिनीष्टर. कौशलवसि चलन वेवहार वुझी. सदर भया वमोजिम अैनषानाका हाकीमले थपनु. मेटनु. सच्याउनु हुंछ. येसरीतले वाहेक. कसैले थपन्या मेट्न्या गरी कलम्. घटि वढि पारेको ठहऱ्यो भन्या जागीऱ्या रहेछ भन्या. जागीर षोसि ८ वर्ष ढाक्र्या रहेछ भन्या तेसै ८ वर्ष कैद होला. औ हाम्रा वेहतर हुन्या. प्रजा प्राणिलाइ सुविस्ता रक्षा हुन्या. काम कुराका अैन अरू पनी. श्री प्रायम मिनीष्टर. कौशलवसि चलन वेवहार विचार गरि. वढाउनु. थपनु हुंछ. नञा भयाका. अैन वर्ष वर्ष दीनको. ज्मा गरि. यकै फेरा. श्री प्रायम मिनीष्टरको. छाप लगाई जगा जगामा पठाउनु. सो वमोजिम. हामि देषि. रैयत्. तलकले. येहि अैन वमोजिम रहनु भंन्या. थिति वंदेज. को हुकुम वक्स्यौं.

स्वस्ति श्री. मद्दति प्रचण्ड भुजदण्डेत्यादि. श्री श्री श्री. महाराज वीर सम्सेर. जङ्ग राणा वहादूर थोङ लिङ पिम्मा को काङ वाङ स्यान्. प्राइम मिनीष्टर याण्ड कम्याडर. इन चीफ. – – – – – – – – – –

## परिशिष्ट (छ)

### श्री दुर्गाज्यू

| श्री ५ ज्यू ज्यू बाज्याज्यू | श्री ५ बाज्याज्यू | श्री ५ बुबाज्यू |
|---|---|---|
| १ | २ | ३ |

स्वास्ति श्री. गिरिराज चक्रचूडामणि नरनारायणेत्यादि विविध विरुदावली विराज मान मानोंनत्. श्रीमन्महाराजाधिराज श्री श्री श्री. महाराज. पृथ्वी वीर विक्रम सम्सेर जङ्ग वाहादूर साह वहादूर देवानाम्. सदा समर विजयिनाम्

शास्त्रवाट मात्र कालका प्रभावले. सवै वेवहार चलि नसकदा र सवै प्रजामा पनि वुद्धि तिक्ष्ण नहुदा यकै मुद्दामा काहि केहि काहि केहि इन्साफ भयाको देषिदा. अव उप्रान्त छोटा वडा प्रजा प्राणि सवैलाइ षत जात माफिक. यकै सजाय हवस्. घटि वढि नपरोस भन्ना निमित्त १. २. ३ हरुवाट श्री. ३ माहाराज जङ्ग वाहादूर. राणाजी सी वी आण्ड जी सी येस आइ थोङ लिङ पिम्मा को काङ वाङ स्यान्. प्राइम मिनीष्टर याण्ड कम्याडर इन चिफ लाई हुकुम् वक्सदा सोही वमोजिम. अैन तैयार गरि. ३ हरूवाट स्मेत्. मंजुर गराई. सम्वत् १९१० साल. पौष वदि ७ रोज ५ का दिन देषि चलि आयाका थिया. सो अैन ढेरै काल देषी. वनाइ आयाको. साह्रै लम्वायमान भै समझन स्मेत्. मुसकील पर्‍या. भयाको र. फेरि पूर्वापर हेरि नसोधि दोभरा तेभरा स्मेत हुन गयाको छ सो अैनमा. पूर्वापर. हेरि दोभरा कटाइ. देषिया सम्मको देस काल चलन विचार गरि. व्यवहार संग मिलाइ छोटकरी तवर. संग. देषिया सम्मको कुरा पूऱ्याई. वनाउन पाया. व्यवहार स्मेत्. चलन्या गरि. अैन तयार. गराउछु भनि. तिमि हाल. ४२ साल मार्ग वदि. १ रोज २ का दिन. हामीवाट श्री ३ माहाराजी षिताव वक्स्याका.. श्री मद्दति. प्रचण्ड भुजदण्डेत्यादि. श्री श्री श्री महाराज. वीर सम्सेर जङ्ग राणा वहादूर प्राइम मिनीष्टर याण्ड कम्याडर. इन चीफले हाम्रा हजुरमा विंति गर्दा. सो कुरा हाम्रा चित्तले पनि. मनासिव. ठहराई. सवै विचार गरि कोहि दुष नपाउन ईन्साफ पुगी. वेवाहार चलोस्. प्रजाले देस काल वमोजिमका. अैन भै इन्साफ पाउन् भंन्या. दयाले तिमिले. आफ्ना वुद्धिले. ठहराई तयार गर्नु भनी. हामीवाट हुकुम् वक्सदा सो वमोजिम सम्वत १९४३ साल. मिति. पौष वदि. १ रोज १ मा तयार गऱ्याको अैन हामी वाट पनी. मंजुर गरि. वक्स्या वमोजिम हामीं लगायेत्.. हाम्रा भर मुलुकका. रैयत् तलक. गैह्रले. येसै

अैनमा लेषिया वमोजीम. काज काम ईन्साफ गर्नु. येस कितावमा लेषिया वमोजिम नगरि. घटि वढि पारि गर्न्यालाई उसै कुरा. अैनमा लेषिया वमोजिम. दंड सजाय होला.. औ कितावमा लेषियाका. अैन सच्याउनु थपनु पर्दा. श्री प्राईम मिनीष्टर. कौशलवसि चलन व्यवहार वुझी. सदर भया वमोजिम अैनषानाका हाकीमले थपनु. मेटनु. सच्याउनु हुंछ. येसरीतले वाहेक. कसैले थपन्या मेट्न्या गरी कलम्. घटि वढि पाऱ्या. को ठहऱ्यो भन्या जागीऱ्या रहेछ भन्या. जागीर षोसि ८ वर्ष ढाक्र्या रहेछ भन्या तेसै ८ वर्ष कैद होला. औ हाम्रा वेहतर हुन्या. प्रजा प्राणिलाइ सुविस्ता रक्षा हुन्या. काम कुराका अैन अरू पनी. श्री प्राइम मिनीष्टर. कौशलवसि चलन व्यवहार विचार गरि. वढाउनु. थपनु हुंछ. नत्रा भयाका. अैन वर्ष वर्ष दीनको. ज्मा गरि. यकै फेरा. श्री प्राईम मिनीष्टरको. छाप लगाई जगा जगामा पठाउनु. सो वमोजिम. हामि देषि. रैयत्. तलकले. येहि अैन वमोजिम रहनु भंन्या. थिति वंदेज. को हुकुम वक्स्यौं. भंन्या भया मुताविक भै चलि आयामाफिक सम्वत् १९५८ साल प्रथम आषाढ सुदि १० रोज ४ उप्रान्त पनि तिमि श्री मद्दति प्रचण्ड भुजदण्डेत्यादि श्री श्री श्री महाराज चन्द्रसम्सेर जङ्ग वहादूर राणा थोङ लि पिम्मा को काङ वाङ स्यान् प्राइम् मिनीष्टर अैण्ड मार्शेल मुलुक् नेपालले पनि साविक्मा विरोध पर्न्या र नत्रा चाहिन्या स्मेत् घटाउन वढाउन हुन्छ भंन्या हुकुम वक्स्यौं.

स्वस्ति श्री मद्दति प्रचण्ड भुजदण्डेत्यादि श्री श्री श्री महाराज मेजर जनरल सर चन्द्रसम्सेर. जङ्ग वहादूर राणाजी सी वी. जी. सी. यस्. आइ. अैण्ड डी. सी. यल्. आनरेरी कर्णेल फोर्थ गोर्षाज् थोङ लिन् पिम्मा को काङ वाङ स्यान् प्राइम् मिनीष्टर अैण्ड मार्स्येल्.